# मोहन निघण्टु सङ्ग्रह
# (भाग–१)
# (अ देखि अः सम्म)




**सङ्कलन, सम्पादन तथा नेपालीमा भावानुवाद : मोहन प्रसाद सापकोटा**

## दुई शब्द

आयुर्वेदको विषय मुण्टो अर्कोतिर फर्काउन खोज्दा पनि मनले भने जन्मेदेखि जीवन रहेसम्म समर्थन गरिरहने विषय हो । आधुनिक उपचारको यो आधारशिला हो । यो विषय गहन त छ नै, समयक्रम बित्दै जाँदा अलि अस्पष्ट पनि हुँदै गइरहेछ ।

पूर्वीय दर्शनमा आयुर्वेदसँग सम्न्धित असंख्य ग्रन्थ लेखिएका छन् । आयुर्वेदका ग्रन्थ बुझ्न शब्दकोश पहिले बुझ्नुपर्ने हुन्छ । "निघण्टु" सरल भाषामा भन्नुपर्दा आयुर्वेदीक शब्दकोश हो ।
आयुर्वेदीक शब्दकोश वा निघण्टु पनि असंख्य छन् । यस ग्रन्थमा सम्भव भएसम्म विभिन्न ग्रन्थका वचनहरूको सङ्ग्रह गरिएको छ । अनि ती कुराको स्पष्टताका लागि अनेकौं श्रोतबाट सङ्कलन गरी चित्रहरू राखिएको छ ।

म आफैं कुनै विद्वान्, वनस्पति विशेषज्ञ वा वैद्य होइन, सामान्य सङ्कलक मात्र हुँ । विश्वकै सबभन्दा उत्कृष्ट हावापानी भएको देशमा, छोटो दूरीमा विश्वकै हावापानी पाइने देशमा, विश्वमै सर्वप्रथम आयुर्वेदको उत्पत्ति भएको क्षेत्रमा आयुर्वेदको दुर्दशा भएको देख्दा केही गरौं जस्तो लागेर यो जमर्को गरेको हुँ । अन्य भाषामा अनेकौं ग्रन्थ उल्था भएका छन् तर नेपाली भाषामा लेखिएको यस प्रकारको निघण्टु ग्रन्थ सम्भवतः यो पहिलो हो । राणाकालमा चन्द्र निघण्टु निकालिएको थियो । तर त्यो आम नागरिकका लागि सहजै उपलब्ध गराउन सकिएको छैन । यो ग्रन्थ विशेषतः नेपाली भाषीका लागि तयार गरिएको ग्रन्थ हो ।



रोग र शरीरप्रति चाख राख्ने विद्यार्थी, अनुसन्धान कर्ता, औषधी उत्पादक कम्पनी र अन्य सबैलाई यो ग्रन्थले गोरेटो खन्नेछ भन्ने आश लिएको छु । विद्यार्थी नै भएका कारण र कतिपय मूल ग्रन्थ नेपालमा खरिद् गर्न समेत नपाइएका कारण जेजति र जेजस्ता भूल भएका छन् तिनलाई सच्च्याएर ज्ञान लिनु हुन अनुरोध गर्दछु । सम्पादनका क्रममा भएका गल्तीहरू पनि यही श्रेणीमा राखिदिनु हुन अनुरोध गर्दछु । यो सामान्य परिचय ग्रन्थ भएकोले विस्तृत कुरा सबै विषयमा राखिएका छैनन् । सङ्कलनको क्रम चलिरहेकोले पेजहरू खालि भएपनि फराकिला नै बनाएरर छाडिएका छन् ।

यो ग्रन्थ तयार पार्नका लागि जेजति ग्रन्थ, वेबसाइट, पत्रिका आदिको सहयोग लिइएको छ ती सबैको नाम अन्तमा राखिएको छ । अन्तिम खण्डमा केही आयुर्वेदीक शब्दको अर्थ समेत समावेश गरिएको छ । यो ग्रन्थको समग्र पनलाई कुनै पनि व्यापारिक प्रयोजनका लागि प्रयोग नगर्नू नगराउनू होला । ज्ञान लिनका लागि विश्वभरका आयुर्वेदप्रेमीहरू स्वतन्त्र हुनेछन् ।

यही ग्रन्थ भित्रका कुरा राखेर छोटो भूमिकालाई लामो बनाउन मन लागेन । यसैले दुई शब्दलाई अन्त गर्न चाहैं ।

सङ्कलक तथा भावानुवादक
मिति : २०८१।०२।१०
काठमाडौं, नेपाल ।
इमेल : sapkotamps731@gmail.com

## विषयसूची

**श्री गणेश, भगवान् शिव, सरस्वती र धन्वन्तरीलाई नमस्कार गर्दै ग्रन्थ प्रारम्भ गर्न चाहन्छु ।**

## अङ्कोट(ल) (असारे, अम्फीफल)

**परिभाषा :**

(क) के.यन.स्वामी : अङ्कोट र निकोचक भनेको अम्फी फलका नाम हुन् ।

(ख) कुलचन्द्र शर्मा : (१) अङ्कोट, अङ्कोटक, अङ्कोल : अम्फी नामको फल । (२) निकोचक : अम्फी ।

(ग) नेपाली बृहत् शब्दकोश (अङ्कुल) : काभ्राका जस्ता पात हुने, ससाना पहेँला रङका फूल फुल्ने र राता रङमा सेता धर्सा भएका फल फल्ने काँडादार एक वृक्ष, त्यसैको फल ।

(घ) डा.चुनेकर : यसको वानस्पतिक नाम *Alangium lamarckii* thwaites (अलङ्गियम लामार्कि थ्वाइट्स्) हो । कसैले *Aesculus indica* colebr. (एसुलस इण्डिका कोलेबर) नामक वनस्पतिलाई यो नाममा प्रयोग गर्दछन्, जुन गलत छ ।

(ङ) शास्त्री : यसलाई अंग्रेजीमा Tlebid Alu Retis (ट्लेबिड बलु रेटिस) तथा ल्याटिन भाषामा *Alangium lamorokii* वा *Alangium Hexpetalum* (अलङ्गियम लामारोकी वा अलङ्गियम हेक्सपेटालम) भनिन्छ ।

(च) पेयर डी अमरकोश : कसैले *Alangium salviifolium* (L.) Wang. (अलङ्गियम साल्भिफोलियम लिन वाङ) लाई त कसैले *Alangium lamarckii,* Thwaites. (अलङ्गियम लामार्कि थ्वाइट्स्) लाई अङ्कोट मानेका छन् । (पहिलो वानस्पतिक नाम अर्थात् अलङ्गियम साल्भिफोलियम लिन वाङका केही तस्बिर यहाँ राखिएका हुन् ) ।



(छ) द आयुर्वेदिक फर्माकोपिया अफ इण्डिया : अँडिर Alangiaceae परिवारमा पर्दछ । यसको अंग्रेजी नाम Castor-oil plant र वानस्पतिक नाम *Alangium salviifolium* (Linn. F.) Wang. *Syn. A.lamarckii* Thw . हो । यसको सुकेको पातको धुलो २-१० ग्राम ओखतीका लागि एक मात्रामा प्रयोग हुन्छ ।

(ज) Enumeration of Flowering Plants in Tarai Sal (Shorea robusta Gaertn.) Forest of Jalthal, Eastern Nepal, Krishna Prasad Bhattarai Department of Botany, Mechi Multiple Campus, Bhadrapur Tribhuvan University, Nepal : यसको वानस्पतिक नाम *Alangium salviifolium* (L.f.) Wangerin हो । यो Alangiaceae परिवारमा पर्दछ । यसलाई नेपालीमा Ashare (अशारे) भनिन्छ ।

(झ) Journal of Plant Resources, Government of Nepal, Ministry of Forest and Soil Conservation, Department of Plant Resources, Thapathali, Kathmandu, Nepal 2017 : यसको वानस्पतिक नाम *Alangium salviifolium* (L.f.) Wangerin हो । यो Alangiaceae परिवारमा पर्दछ । यसलाई नेपालीमा Ashare (अशारे) भनिन्छ ।

यसको नेपाली नाम ढेला पनि भनिएको पाइन्छ । कुलचन्द्र शर्मा र के.यन. स्वामीले यसलाई अम्फीफल भनी नाम दिएका छन् । इलामको नाममा खोलिएको एउटा ब्लगमा यसको फललाई इलामतिर रिठ्ठो जसरी नै लुगा धुन प्रयोग गरिन्छ समेत भनिएको छ । कसैले कुसुमफललाई नै अम्फीफल हो पनि भनेका छन् ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**अङ्कोलः कोलको रेची रेचीको दीर्घकीलकः । पीतसारस्ताम्रफलो विषजित् सेचनो भवेत्॥**

अङ्कोल, कोलक, रेची, रेचीक, दीर्घकीलक, पीतसार, ताम्रफल, विषजित् र सेचन : यी असारेका नाम हुन् ।



अङ्कोटः । Alangium salviifolium (L.) Wang, payer.de/amarakosa

**(ख) अभिधान रत्नमाला :**

**अङ्कोलो गिरिकोलश्च कोलको दीर्घकोलकः । पीतसारस्ताम्रफलो गन्धपुष्पो निचोरकः॥**

अङ्कोल, गिरिकोल, कोलक, दीर्घकोलक, पीतसार, ताम्रफल, गन्धपुष्प र निचोरक : यी असारेका नाम हुन् ।

**(ग) अमरकोश :**

**...अङ्कोटे तु निकोचकः ।**

अङ्कोट र निकोचक : यी अम्पी फलका नाम हुन् ।

**(घ) अर्कप्रकाश :**

**अङ्कोटकस्तु शूलामशोथग्रहविषापहः॥ अङ्कोलार्क...श्वविषघ्नः ... ।**

अम्पीफलको अर्कले शूल, आमरोग, शरीर सुन्निएको, ग्रहरोग र विषको असर नाश गर्दछ । अम्फीफलको अर्क पिउनाले कुकुरको विष नाश हुन्छ ।

## (ङ) अष्टाङ्ग निघण्टु :

**अङ्कोलो गिरिकोलश्च पीतसारो निकोचकः ॥**

अङ्कोल, गिरिकोल, पीतसार र निकोचक : यी असारेका नाम हुन् ।

## (च) कैयदेव निघण्टु :

**अङ्कोलोकोल्लको रेची गन्धपुष्पो निकोचकः ॥**
**इरिकिल्लो दीर्घकीलो गुप्तस्नेहश्च भूसिता । पीतसारस्ताम्रफलो हुण्डिको रूढमल्लिका ॥**
**अङ्कोलस्तिक्तकः स्निग्धः तीक्ष्णोष्णस्तुवरः कटुः । वामनो रेचनो हन्ति शूलशोफग्रहकृमीन् ॥**
**विसर्पकफपित्तास्रकुक्कुराखुविषं विषम् । तत्फलं श्लेष्मलं शीतं मधुरं रसपाकयोः ॥**
**सुस्निग्धं बृंहणं वृष्यं गुरु बल्यं विरेककृत् । निहन्त्यनिलपित्तास्रदाहवह्निक्षतक्षयान् ॥**



अङ्कोतः । Alangium salviifolium (L.) Wang, payer.de/amarakosa, kesara

अङ्कोल, कोल्लक, रेची, गन्धपुष्प, निकोचक, इरिकिल्ल, दीर्घकील, गुप्तस्नेह, पीतसार, ताम्रफल, हुण्डिक र रूढमल्लिका : यी असारेका नाम हुन् । असारे तीतो, चिल्लो, तिक्खर, टर्रो र पिरो हुन्छ । यो बान्ताका लागि उपयोगी, रेचनी तथा शूल, सुजन, ग्रहबाधा, कीरा, विसर्प, कफविकार, पित्तविकार, रक्तविकार, कुकुरको विषविकार, मुसाको विषविकार र विषविकार नाशगर्ने गुणको हुन्छ । यसको फल कफविकार गर्ने, शीतवीर्यको तथा शुरुमा र पचेपछि गुलियो हुन्छ । यो अति चिल्लो, पौष्टिक, वीर्यवर्धक, पचाउन कठिन, बलदायक र विरेचनी हुन्छ । यसले वातविकार, पित्तविकार, रक्तविकार, डाह, पाचन शक्ति, घाउ, (अथवा आगोले पोलेका घाउ) र क्षयरोग नाश गर्दछ ।

**अङ्कोलतैलमभ्यङ्गात् त्वग्दोषकफवातनुत् ॥ भावनात् सर्वबीजानामङ्कुरं जनयेत् क्षणात् ।**
**पित्तानिलमाशु हन्यात्तैलं स्वादु च केशकृत् ॥ लेपनात् सर्वकुष्ठघ्नं पानाच्छोणितनाशनम् ।**

असारेको तेलमा भिजाउनाले सबै किसिमका बीज तुरुन्त उम्रन्छन् । यसले पित्तविकार र वातविकार चाँडै नाश गर्दछ । यो तेल स्वादिलो र कपाल बढाउने गुणको हुन्छ । यो तेल दल्नाले सबै खालका कुष्ठरोग नाश गर्दछ । पिउनाले रगत (रक्तविकार ?) नाश गर्दछ ।

## (छ) धन्वन्तरि निघण्टु :

**अङ्कोटोऽङ्कोलको रेची निर्दिष्टो दीर्घकीलकः । पीतसारस्ताम्रफलो गन्धपुष्पो निकोचकः ॥**
**अङ्कोलः स्निग्धतीक्ष्णोष्णः कटुको वातनाशनः । कुक्कुराखुविषं हन्ति ग्रहजन्तुविषापहः ॥**
**भूतहृद्विषहृच्चैव कण्ठशूलस्य शोधनः ।**



ankola, dabur.com,

अङ्कोट, अङ्कोलक, रेची, दीर्घकीलक, पीतसार, ताम्रफल, गन्धपुष्प र निकोचक : यी असारेका नाम हुन् । यो चिल्लो, तिक्खर, उष्णवीर्यको, पिरो र वातविकार नाशगर्ने गुणको हुन्छ । यसले कुकुर र मुसाको विषविकार तथा ग्रहबाधा र अन्य जीवको विषविकार नाश गर्दछ । यसले भूतबाधा र विष पनि नाश गर्दछ । असारेले घाँटीको शूललाई प्रशोधन गर्दछ ।

(ज) निघण्टु रत्नाकर :

**अङ्कोटस्तुवरस्तिक्तोरसशुद्धिकरो लघु । चित्कटुः सरः स्निग्धस्तीक्ष्णश्चोष्णश्च रूक्षकः ॥**
**रसोवान्तिकरश्चास्य विषदोषकफापहः । वातशूलशोथकृमिग्रहपीडामपित्तहा ॥**
**रक्तदोषविसर्पघ्नः श्वानाखुविषनाशनः । ओतोर्विषकटीशूलमतिसारं च नाशयेत् ॥**
**पिशाचपीडाशमनो बीजं चास्य तु शीतलम् । धातुवृद्धिकरं स्वादु चाग्निमान्द्यकरं गुरु ॥**
**रसे पाके तु मधुरं बलकृत्कफकृत्सरम् । स्निग्धं वृष्यञ्च दाहघ्नं वातपित्तक्षायापहम् ॥**
**रक्तदोषं कफं पित्तं विसर्पञ्चैव नाशयेत् ।**

असारे टर्रो, तीतो, पारोलाई प्रशोधन गर्ने, पचाउन सहज, केही पिरो, मलमूत्रलाई तलतिर सार्ने, चिल्लो, तिक्खर, उष्णवीर्यको र रुखो हुन्छ । यसको रस बान्ता गराउने खालको तथा विषविकार, कफविकार, वातविकार, शूल, सुजन, कीरा, ग्रहबाधा, आमविकार र पित्तविकार नाशक हुन्छ । यसले रक्तविकार, विसर्प, कुकुरको विषविकार, मुसाको विषविकार, विरालोविशेषको विषविकार, कम्मरको शूल र अतिसार पनि नाश गर्दछ । असारेले पिशाचबाधा शान्त पार्दछ । यसको बीज शीतवीर्यको, धातुवर्धक, गुलियो, पाचनशक्ति कमजोर पार्ने र पचाउन कठिन हुने गुणको हुन्छ । यसको रस पचेपछि गुलियो हुन्छ । यो बलदायक, कफविकार गर्ने, मलमूत्रलाई तलतिर सार्ने, चिल्लो, वीर्यवर्धक तथा डाह, वातविकार, पित्तविकार र क्षयरोग नाशक हुन्छ । यसले रक्तविकार, कफविकार, पित्तविकार र विसर्प पनि नाश गर्दछ ।

(झ) निघण्टुशेष :



**अङ्कोठे स्यात् पीतसारो दीर्घकीलो निकोचकः । अङ्कोल्लकस्ताम्रफलो रेचको गन्धपुष्पकः ॥**

अङ्कोठ, पीतसार, दीर्घकील, निकोचक, अङ्कोल्लक, ताम्रफल, रेचक र गन्धपुष्पक : यी असारेका नाम हुन् ।

(ञ) भावप्रकाश निघण्टु :

**अङ्कोटो दीर्घकीलः स्यादङ्कोलश्च निकोचकः । अङ्कोटकः कटुस्तीक्ष्णः स्निग्धोष्णस्तुवरो लघुः ॥**
**रेचनः कृमिशूलामशोफग्रहविषापहः । विसर्पकफपित्तास्रमूषकाहिविषापहः ॥**
**तत्फलं शीतलं स्वादु श्लेष्मघ्नं बृंहणं गुरु । बल्यं विरेचनं वातपित्तदाहक्षयास्रजित् ॥**

अङ्कोट, दीर्घकील, अङ्कोल र निकोचक : यी असारेका नाम हुन् । यो पिरो र तिक्खर हुन्छ । चिल्लो, गर्मी गर्ने, टर्रो र पचाउन हलुका हुन्छ । रेचन तथा कीरा, शूल, आमविकार, सुजन, ग्रहवाधा र विषविकार नाश गर्दछ । विसर्प, कफविकार, पित्तविकार, रक्तविकार, मुसाको विषविकार र सर्पको विषविकार नाश गर्दछ । यसको फलले शीतल गर्दछ । यो स्वादिलो हुन्छ । यसले कफविकार नाश गर्दछ । पौष्टिक हुन्छ तर पचाउन कठिन हुन्छ । यसले बल दिन्छ र दिसा खुलाउँदछ । वातविकार, पित्तविकार, डाह, क्षयरोग र रक्तविकार नाश गर्दछ ।

(ट) मदनपाल निघण्टु :

**अङ्कोलकस्ताम्रफलः पीतसारो निकोचकः । गुप्तस्नेहो विरेची स्याद्भूषितो दीर्घकीलकः ॥**

**अङ्कोल्लकः कटुः स्निग्धस्तीक्ष्णोष्णस्तुवरो लघुः । रेचनः कृमिशूलामशोफश्लेष्मविषापहः ॥**
**तत्फलं शीतलं स्वादु श्लेष्मलं बृंहणं गुरु । बल्यं विरेचनं वातपित्तदाहक्षयास्रजित् ॥**

अङ्कोलक, ताम्रफल, पीतसार, निकोचक, गुप्तस्नेह, विरेची, भूषित र दीर्घकीलक : यी असारेका नाम हुन् । यो पिरो, चिल्लो, तिक्खर, गर्मी गर्ने, टर्रो, पचाउन हलुका, रेचन, किरा- शूल- आमरोग-शरीर सुन्निने रोग-कफविकार र विषविकार नाशक हुन्छ । यसको फल शीतल गर्ने, स्वादिलो, कफ बढाउने, पौष्टिक र पचाउन कठिन हुन्छ । यसले बल बढाउँदछ, दिसा लगाउँदछ, वातविकार- पित्तविकार- डाह-क्षयरोग र रक्तविकार नाश गर्दछ ।

(ठ) **राज निघण्टु :**

**अङ्कोलः कोठ(ट)रो रेची गूढपत्रो निकोचकः । गुप्तस्नेहः पीतसारो मदनो गूढमल्लिका ॥**
**पीतस्ताम्रफलो ज्ञेयो दीर्घकालो गुणाढ्यकः । कोलको लम्बकर्णश्च गन्धपुष्पश्च रोचनः ॥**
**विज्ञानतैलगर्भश्च स्मृतिसङ्ख्याभिधः स्मृतः ॥**
**अङ्कोलः कटुकः स्निग्धो विषलूतादिदोषनुत् । कफानिलहरः सूतः शुद्धिकृद्रेचनीयकः ॥**

(१) अङ्कोल, (२) कोट(ठ)र, (३) रेची, (४) गूढपत्र, (५) निकोचक, (६) गुप्तस्नेह, (७) पीतसार, (८) मदन, (९) गूढमल्लिका, (१०) पीत, (११) ताम्रफल, (१२) दीर्घकाल, (१३) गुणाढ्यक, (१४) कोलक, (१५) लम्बकर्ण, (१६) गन्धपुष्प, (१७) रोचन र (१८) विज्ञानतैलगर्भ : यी अठार नाम असारेका नाम हुन् । अङ्कुल पिरो, चिल्लो तथा विषविकार, लुतो, कफविकार र वातविकार नाशक हुन्छ । यसले पारोलाई प्रशोधन गर्दछ । यो रेचनी हुन्छ ।



(ड) **शार्ङ्गधर संहिता :**

**अङ्कोटमूलकल्कश्च सक्षौद्रस्तण्डुलाम्बुना । अतीसारहरः प्रोक्तस्तथा विषहरः स्मृतः ॥**

अम्फीफलको जराको कल्कमा मह मिसाई चौलानीसँग पिउनाले अतिसार र विषको असर ठिक गर्दछ ।

(ढ) **शालिग्राम निघण्टु :**

**अङ्कोटः कोलको रेची विषघ्नो दीर्घकीलकः । पीतसारस्ताम्रफलो गन्धपुष्पानिकोचकः ॥**

अङ्कोट, कोलक, रेची, विषघ्न, दीर्घकीलक, पीतसार, ताम्रफल, गन्धपुष्प र निकोचक : यी असारेका नाम हुन् ।

(ण) **सरस्वती निघण्टु :**

**अङ्कोलो स्नेहबीजश्च पीतसारश्च कथ्यते । कोलको गन्धपुष्पश्च रेचनो गूढपत्रिकः ॥**

अङ्कोल, स्नेहबीज, पीतसार, कोलक, गन्धपुष्प, रेचन र गूढपत्रिक : यी असारेका नाम हुन् ।

(त) **सोढल निघण्टु :**

**अङ्कोटेऽङ्कोलको रेची निर्दिष्टो दीर्घकीलकः । पीतसारस्ताम्रपुष्पो गन्धपुष्पो निकोचनः ॥**

**कठोरो मल्लिकाग्राही वामनो लम्बकर्णकः ।**

अङ्कोट, अङ्कोलक, रेची, दीर्घकीलक, पीतसार, ताम्रपुष्प, गन्धपुष्प, निकोचन, कठोर, मल्लिकाग्राही, वामन र लम्बकर्णक : यी असारेका नाम हुन् ।

**(थ) सौश्रुत निघण्टु :**

**अक्कोल्लश्च किरिल्लश्च सुरतो दीर्घकीलकः । पीतसारस्ताम्रफलो गन्धपुष्पश्च शब्दितः ॥**

अक्कोल, किरिल्ल, सुरत, दीर्घकीलक, पीतसार, ताम्रफल र गन्धपुष्प : यी असारेका नाम हुन् ।


Alangium salviifolium, efloraofindia.com

## अंशूदक वा हंसोदक जल
## (Amshoodaka)

**प्राचीन ग्रन्थका वचन :**

**(क) अष्टाङ्ग हृदय :**

**तप्तं तप्तांशुकिरणैः शीतं शीतांशुरश्मिभिः ॥ समन्तादप्यहोरात्रमगस्त्योदयनिर्विषम् ।**
**शुचि हंसोदकं नाम निर्मलं मलजिज्जलम् ॥ नाभिष्यन्दि न वा रूक्षं पानादिष्वमृतोपमम् ।**

पूर्णरुपमा दिउसो सूर्यका किरणले तताइएको, रातमा चन्द्रमाका किरणले चिसो बनाइएको, अगस्त्य ताराको दृष्टि परेर विषरहित भएको, पवित्र, सफा, शरीर भित्रको वायु-दोषलाई नाश गर्ने र हाँस समान कञ्चन पानीलाई हंसोदक भनिन्छ । न यसमा फिँज आउँछ, न पचाउन कडा नै हुन्छ, हरेक प्रयोजनका लागि यस्तो पानी अमृततुल्य हुन्छ ।

**(ख) काश्यप संहिता :**

**अतीते प्रथमे मासि प्रावृट्प्रोष्ठपदागमे ॥**
**दिव्यं खात् पतितं तोयं नाम्ना हंसोदकं शिवम् । आपूतं सूर्यतेजोभिरगस्त्येनाऽविषीकृतम् ॥**

प्रावृट् ऋतु (असार र साउन) तथा प्रोष्ठपद (भदौ) बितेपछि पहिलो महिनामा अर्थात् शरद् ऋतुमा आकाशबाट पर्ने दिव्य पानीलाई हंसोदक भनिन्छ । यो पानी कल्याणदायक र पवित्र हुन्छ । सूर्यको किरण र अगस्त्य तारा उदाउनाले गर्दा यो पानी विषहीन हुन्छ ।

**(ग) कैयदेव निघण्टु :**

**दिवा सूर्यांशुसन्तप्तं निशि चन्द्रांशुशीतलम् ॥ कालेन पक्वं निर्दोषमगस्त्योदयनिर्विषम् ।**
**अंशूदकमिति ख्यातं शारदं विमलं शुचि ॥ अरूक्षमनभिष्यन्दि दोषत्रयविनाशनम् ।**
**स्नानापानावगाहेषु हितमम्बु यथामृतम् ॥ सर्वं शरदि सेवेत प्रसन्नत्वाददोषलम् ।**

दिनमा सूर्यको किरणले तातेको, रातमा चन्द्रमाको किरणको चिसिएको, समयले पकाएको, दोषहीन, अगस्ती तारो उदाउनाले विषहीन भएको शरद ऋतुको जललाई अंशूदक भनिन्छ । यो जल निर्मल, पवित्र, रुखोपन नहुने, अभिष्यन्दी नगर्ने र त्रिदोष नाशक हुन्छ । अमृत समान यो जल नुहाउन, पिउन र डुबुल्की लगाउन वा पानीभित्र बस्न हितकर हुन्छ । सबैले यस्तो दोषहीन जल शरद ऋतुमा प्रसन्न भई सेवन गर्नू ।

**(घ) चरक संहिता :**

**दिवा सूर्यांशुसन्तप्तं निशि चन्द्रांशुशीतलम्म् । कालेन पक्वं निर्दोषमगस्त्येनाविषीकृतम् ॥**
**हंसोदकमिति ख्यातं शारदं विमलं शुचि । स्नानपानावगाहेषु हितमम्बु यथाऽमृतम् ॥**

दिउस सूर्यका किरणले तातेको तथा रातमा चन्द्रमाको किरणले चिसो भएको कालस्वभावले पाकेको अर्थात् वर्षाको जल नमिसिएको, यस्तो दोषहीन, अगस्ति तारा उदाउनाले निर्मल भएको वा विषरहित भएको पानीलाई हंसोदक (चन्द्रार्क) भनिन्छ । यो पानी शरद् ऋतुमा निर्मल र पवित्र हुने गर्दछ । यसकारण नुहाउन, पिउन र पानीमा बस्न आदि काममा यो अमृतसमान उत्तम हुन्छ ।

(ङ) **भावप्रकाश निघण्टु :**

**दिवा रविकरैर्जुष्टं निशि शीतकरांशुभिः ॥ ज्ञेयमंशूदकं नाम स्निग्धं दोषत्रयापहम् ।**
**अनभिष्यन्दि निर्दोषमान्तरिक्षजलोपमम् ॥ बल्यं रसायनं मेध्यं शीतं लघु सुधासमम् ।**

जुन जलमा दिनभर सूर्यको र रातभर चन्द्रमाको किरण पर्दछ त्यो जललाई 'अंशूदक जल' भनिन्छ । यो पानी चिल्लो, त्रिदोषनाशक, अनभिष्यन्दि, दोषरहीत, अन्तरिक्ष जलसमान, बलदायक, रसायनी, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, शीतल गर्ने, पचाउन हलुका र अमृतसमान हुन्छ ।

(च) **भावप्रकाश संहिता :**

**दिवसेऽर्ककरैर्जुष्टं निशि शीतकरांशुभिः । ज्ञेयमंशूदकं नाम स्निग्धं दोषत्रयापहम् ॥**

जुन पानीमा दिउस सूर्यको र रातमा चन्द्रमाको किरण परेको हुन्छ त्यसलाई अंशूदक जल भनिन्छ । यस्तो जल चिल्लो, र वात आदि तीन वटै नाशगर्ने गुणको हुन्छ ।

(छ) **मदनपाल निघण्टु :**



**दिवाकरकरैर्जुष्टं निशि शीतकरांशुभिः । ज्ञेयं हंसोदकं नाम स्निग्धं दोषत्रयापहम् ॥**
**अनभिष्यन्दि निर्दोषमन्तरिक्षजलोपमम् । बल्यं रसायनं मेध्यं शीतं लघु सुधोपमम् ॥**

दिनमा सूर्यको किरण र रातमा चन्द्रमाको किरण परेको (पिउने) पानीलाई हंसोदक भनिन्छ । यो चिल्लो र त्रिदोषनाशक हुन्छ । यो न अभिष्यन्दी हुन्छ न त यसमा गुनै बैगुन नै हुन्छ । आकाशबाट परेको पानी समान यो जल बलदायक, रसायनी, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, शीतल गर्ने र पचाउन हलुका हुने गुणको हुन्छ ।

(ज) **राज निघण्टु :**

**नादेयं नवमृच्चटेषु निहितं सन्तप्तमर्कांशुभि-**
**र्यामिन्यां च निविष्टमिन्दुकिरणैर्मन्दानिलान्दोलितम् ।**
**एलाद्यैः परिवासितं श्रमहरं पित्तोष्णदाहे विषे**
**मूर्छारक्तमदात्येषु च हितं शंसन्ति हंसोदकम् ॥**

एउटा नयाँ माटाको भाँडो लिनू । यसमा नदीको पानी भरेर दिनभर घाममा र रातभर चन्द्रमाको उज्यालोमा राख्नू । यसरी खुला ठाउँमा राख्दा यो थोरै हावाको सम्पर्कमा रहेको हुनुपर्दछ । यसपछि यो पानीमा अलैंची आदिको धुलो हालेर सुगन्धित बनाउनू । यो पानीले थकाई नाश गर्दछ । यो पानी पित्तविकारमा, गर्मीले डाह हुँदा, विषविकारमा, बेहोसीपनमा, रक्तविकारमा र मदात्यय रोगमा पनि हितकारी हुन्छ । यस्तो हंसोदक नामको पानीलाई सबैले प्रशंसा गर्दछन् ।

(झ) **शालिग्राम निघण्टु :**

**दिवासूर्यांशुसन्तप्तं रात्रौचन्द्रांशुशीतलम् । अंशूदकमिति ख्यातं सर्वरोगनिवारकम् ॥**
**कफमेदोनिलघ्नं च दीपनं वस्तिशोधनम् । श्वासकासहरं नीरं चक्षुष्यं नेत्ररोगहृत् ॥**

जुन जल दिनमा सूर्यका किरणले तातेको तथा रातमा चन्द्रमाको किरणले चिसिएको हुन्छ त्यो जललाई अंशूदक भनिन्छ । अंशूदक जलले सबै रोग नाश गर्दछ । यस्तो जल कफविकार, बोसोविकार र वातविकार नाग्ने गुणको हुन्छ । यो दीपनी, तल्लो पेट वा मूत्राशयलाई प्रशोधन गर्ने, दम र खोकी नाशगर्ने, आँखाका लागि हितकर तथा आँखाका रोग नाशगर्ने गुणको हुन्छ ।

(ञ) **हारीत संहिता :**

**दिवा सूर्य्यांशुसन्तप्तं रात्रौ चन्द्रांशुशीतलम् । अंशूदकमितिख्यातं सर्वरोगनिवारकम् ॥**
**कफमेदोनिलघ्नं च दीपनं बस्तिशोधनम् । श्वासकासहरं नीरं चक्षुष्यं नेत्ररोगहृत् ॥**

दिनमा सूर्यका किरणले तातेको र रातमा चन्द्रमाका किरणले चिसो भएको पानीलाई अंशूदक भनिन्छ । यसले सबै खाले रोगलाई ठिक गर्दछ । यस्तो पानीले कफ, बोसो र वातदोष नाश गर्दछ, जठराग्निलाई बाल्दछ, तल्लो पेटलाई सफा बनाउँदछ, श्वासप्रश्वासको समस्या र खोकी निको पार्दछ, आँखाका लागि लाभदायक हुन्छ र आँखाका रोग निको पार्दछ ।

## अंस
## (Two nerves in the middle of the shoulder)

**(क) अष्टाङ्ग हृदय :**

**ग्रीवामुभयतः स्नाव्नी ग्रीवाबाहुशिरोऽन्तरे ॥ स्कन्धांसपीठसम्बन्धावंसौ बाहुक्रियाहरौ ।**

घाँटीको दुवैतिर घाँटी र काँध (हातको माथिल्लो भाग) को बीचमा काँध र अंसपीठलाई बाँध्ने दुई स्नायु हुन्छन् । यो 'अंस' नामक दुई मर्मस्थल हो । यो स्नायुमा खराबी आए हात चल्न छाड्दछ ।

**(ख) सुश्रुत संहिता :**

**बाहुमूर्धग्रीवामध्येंऽसपीठस्कन्धबन्धनावंसौ नाम, तत्र स्तब्धबाहुता;**

हातको माथिल्लो भाग (काँध) र घाँटीको बीचमा अंसपीठ र काँधलाई बाँध्ने 'अंस' नामक मर्मस्थल हुन्छ । त्यहाँ काटिए वा छेडिए हात चल्दैन ।

## अंसफलक
## (The upper part of the spinal column)

(क) **अष्टाङ्ग हृदय :**

**बाहुमूलाभिसम्बद्धे पृष्ठवंशस्य पार्श्वयोः॥ अंसयोः फलके बाहुस्वापशोषौ तयोर्व्यधात्।**

ढाडको माख्लो भागमा, हातको फेदसँग सम्बन्धित, ढाडको दुवै पाटामा 'अंशफलक' नामका दुई मर्मस्थान हुन्छन्। यो चुँडिनाले वा काटिनाले हात चल्न छाड्दछ र सुन्निन्छ।

(ख) **सुश्रुत संहिता :**

**पृष्ठोऽपरि पृष्ठवंशमुभयतस्त्रिकसम्बद्धे अंसफलके तत्र बाह्वोः स्वापशोषौ;**

ढाडको माथिल्लो भागमा खँगाल्नुलाई बाँधेर बसेका 'अंसफलक' नामका दुई फलक हुन्छन्। यो काटिए वा छेडिए हात सुन्निन्छ र चल्न छाड्दछ।

## अंसशोष र अवबाहुक रोग
## Shoulder atrophy & Frozen shoulder (?)

(क) **अष्टाङ्ग हृदय :**

**अंसमूलस्थितो वायुः सिराः सङ्कोच्य तत्रगाः । बाहुप्रस्पन्दितहरं जनयत्यवबाहुकम् ॥**

काँधको फेदमा हुने वायुले त्यहाँ रहेका शिरालाई खुम्च्याएपछि त्यसबाट 'अवबाहुक' नामक रोग हुने गर्दछ । यो रोग लागेपछि हात हल्लिन, चल्न, फैलन र खुम्चिन बन्द हुन्छ ।

(ख) **भावप्रकाश संहिता :**

**अंसदेशे स्थितो वायुः शोषयेदंसबन्धनम् । अंसबन्धनशोषात्स्याद् बाहुशोषः सवेदनः ॥**
**शिराः सङ्कोच्य बाहुस्थः स कुर्यादपबाहुकम् ॥**

काँधका रहेको वायुले त्यहाँ रहेका बन्धनलाई सुकाएपछि अति दुखाउने 'बाहुशोष' नामक रोग हुने गर्दछ । हातमा रहेका शिरालाई खुम्च्याएर उत्पन्न हुने रोगलाई 'अपबाहुक' भनिन्छ ।

(ग) **सुश्रुत संहिता :**

**अंसदेशस्थितो वायुः शोषयित्वांसबन्धनम् । सिराश्चाकुञ्च्य तत्रस्थो जनयत्यवबाहुकम् ॥**

काँधतिर रहेको वायु काँधका बन्धनलाई सोस्दै 'अंसशोष' नामक रोग उत्पन्न गर्दछ । यही वायुले काँधका शिरालाई खुम्च्याए त्यसबाट 'अवबाहुक' नामक रोग उत्पन्न हुन पुग्दछ ।

## आंक्षपाकात्यय रोग
## (Convulsive disorders)

**(क) अष्टाङ्ग हृदय :**

**अक्षिपाकात्यये शोफः संरम्भः कलुषाश्रुता । कफोपदिग्धमसितं सितं प्रक्लेदरागवत्॥**
**दाहो दर्शनसंरोधो वेदनाश्चानवस्थिताः ।**

'अक्षिपाकात्यय' नामक रोगमा आँखा चाँडै सुन्निन्छ, मलिन आँशु बग्दछ र आँखाको कालो भाग कफले पोतिएर बस्दछ । सेतो भाग रातो भई (पाकेर) सड्न थाल्दछ । डाह हुन्छ र दृष्टि क्षमता नाश हुन्छ । अस्थिर किसिमले पीडा हुन्छ ।

**(ख) भावप्रकाश संहिता, माधव निदान :**

**श्वेतः समाक्रामति सर्वतो हि दोषेण यस्यासितमण्डले तु ।**
**तमक्षिपाकात्ययमक्षिकोपं सर्वात्मकं वर्जयितव्यमाहुः॥**
**यः श्वेतः दोषेण कृत इति शेषः । तमक्षिपाकादक्षिपाकात्ययमाहुः ।**
**अत्र पाकोऽपि स्वादत ए सुश्रुतः-शोकाश्रुपाकार्तियुते च नेत्रे इति॥**

त्रिदोषले आँखाको कालो भागमा चारैतिर सेतोपना फैलिने र दुख्ने रोगलाई 'अक्षिपाकात्यय' भनिन्छ । यो रोग त्रिदोषजन्य भए त्यसलाई निको पार्न नसकिने ठानी उपचार नगर्नू । यसमा आँखा पाक्दछ पनि किन कि सुश्रुतले 'आँखामा आँशु आउने र पाक्ने' भनेका छन् ।

## अगदतन्त्र
## (Agadatantra)

(क) हारीत संहिता :

**गुदासयं वस्तिरुजं शमनं वस्तिरूहकम् ।**
**आस्थापनानुवासन्तु अगदं नाम एव च॥१६॥**

मलद्वार एवं मूत्राशयका रोग ठिक गर्नु, निरुहवस्ति, आस्थापन वस्ति, अनुवासन वस्ति-यी सबै अगदतन्त्रका नामले जानिन्छन् ।

# अगर
(Eagle-wood)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : वंशक, अगुरु, लोह आदि नाम सामान्य अगुरु (धूपी) का नाम हुन् ।

(ख) नेपाली बृहद् शब्दकोश : (१) अगर : हिमालमा हुने, बास्ना आउने एक जातको धूपी; अगरु । उक्त धूपीको काठ । (२) धुपी वा धूपी : मसिना गुच्छादार पातको तल रातो खैरो कत्ला भएको पहेँलो फूल फुल्ने, हरिया र गोला फल फल्ने र पात वा काठको धुलो धूपको काममा आउने एकजातको बोट; चन्दन वा धूपका निम्ति उपयोगी त्यसैको काठ । (३) धुपीसल्लो : धुपी ।


अगरको बिरुवा (तस्बिर श्रोत : एग्रोमार्टएनपीको फेसबुक पेज)

(ग) डा. चुनेकर : यसको रूख ६०-७० फिटसम्म अग्लो र ५-८ फिटसम्म मोटो हुन्छ । यो सदाबहार वृक्ष हो । यसको काठ नरम, हलुका, लचिलो, सेतो वा सेतोमा हल्का पहेँलो मिसिएको रङ्को हुन्छ । यसमा कुनै गन्ध विशेष हुँदैन । यसमा पात साना, चिल्ला र ससाना भेट्ना भएका हुन्छन् । यसको फूल सेता गुच्छाकार हुन्छन् । यसको फल २ इञ्चसम्म लामा, केही अण्डाकार र नरम भुसयुक्त हुन्छन् । यसलाई अंग्रेजीमा Eagle-wood तथा ल्याटिन भाषामा *Aquilaria agallocha* Roxb. भनिन्छ ।

(घ) आचार्य बालकृष्ण : यसको वानस्पतिक नाम *Aquilaria malaccensis* Lam.पनि हो । यसलाई अंग्रेजीमा Agar wood, Aloe wood, Malayan eagle wood वा Agallochum पनि भनिन्छ । यसका अनेक जात हुन्छन् र मुख्यतः चार जात प्रसिद्ध छन् । ओखतीका लागि भने कालो धूपी नै प्रयोग गर्ने गरिन्छ ।


अगरको बिरुवा (तस्बिर श्रोत : एग्रोमार्टएनपीको फेसबुक पेज)

(ङ) के.यन.स्वामी : नेपाल, भोट, आसाम, पूर्वी बङ्गाल, खासिया, मलाया, मणिपुर, मलयाचल, मालावार आदि देश वा ठाउँमा उम्रने र ६० देखि १०० फुटसम्म अग्लो, पाँच फुटदेखि सात फुटसम्म मोटो आकार हुने रूख । यो २० वर्षमा जवान हुने र कसै-कसैको मतमा अगरुः ५०-६० वर्षमा जवान हुने

गर्छ भन्ने छ । यसको कलिलो बोटको काठ पहेँलो, बास्ना नभएको, हल्का हुन्छ र जवान भएपछि बोटबाट कालो खोटो निस्कने र बास्ना आउने गर्छ । यसको धूलाको धूप, ओखती आदि बनाइन्छ । यसलाई कृष्णागुरु, धूपागुरु, दाहागुरु, मङ्गल्यागुरु पनि भनिन्छ ।

(च) द आयुर्वेदिक फर्माकोपिया अफ इण्डिया , भोलम ४ : यसको वानस्पतिक नाम *Aquilaria agallocha* Roxb. हो । यो Thymelacaceae परिवारमा पर्दछ । यसको काठको चुरोको धुलोको मात्रा १-३ ग्राम हो ।

आय आर्जनका दृष्टिले पनि अगरलाई सबभन्दा उत्तम रूखमध्येको एक रूख मानिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अभिधान मञ्जरी :**

**जोङ्ककमगरु वराङ्गं चानार्यं शीतशीवकं भवति॥**
**कृष्णागरु लोहं स्यात् कृमिजग्धं चागरु प्रवरम्॥**

जोङ्कक, अगरु, वराङ्ग, अनार्य, शीतशीवक : यी अगरका नाम हुन् । कृष्णागरु, लोह, कृमिजग्ध, अगरु र प्रवरम् : यी कालो अगरका नाम हुन् ।


अगरको काठ (तस्बिर श्रोत : एग्रोमार्टएनपीको फेसबुक पेज)

(ख) **अभिधान रत्नमाला :**

**अगरुः शीतशमनो जोङ्ककः कृष्णशीर्षकः॥ कृष्णागरुर्लोहनामा जन्तुजग्धो वरद्रुमः॥**

अगरु, शीतशमन, जोङ्कक र कृष्णशीर्षक : यी अगरका नाम हुन् । कृष्णागरु, लोहनामा, जन्तुजग्ध र वरद्रुम : यी कालो अगरका नाम हुन् ।

(ग) **अमरकोश :**

**कालीयकं च कालानुसार्यं चाथ समार्थकम् । वंशकागुर्वगरुराजार्हलोहं कृमिजोङ्गकम् ॥**
**कालागुर्वगुरु स्यात्तन्मङ्गल्या मल्लिगन्धि यत् ।**

कालीयक र कालानुसार्य पहेँलो धूपीका; वंशक (वंशिक), अगुरु, अगरु, राजार्ह, लोह, कृमिज र जोङ्गक सामान्य अगरका नाम; कालागुरु र अगुरु कालो धूपीका नाम तथा मङ्गल्या र मल्लिगन्धि बेलीभैँ बास्ना आउने अगरका नाम हुन् ।

(घ) **आयुर्वेद महोदधि :**

**शीतं पित्तविनाशनं समधुरं किञ्चित्सतिक्तं तथा**
**कण्डूशोषविषापहं कृमिहरं सौभाग्यकान्तिप्रदम् ।**
**सौगन्ध्यं कुरुते किमप्यभिनवं गात्रेषु पुष्टिप्रदं**
**सन्तोषं विदधाति चेतसिपरं स्निग्धं च कृष्णागरु ॥**


सर्वोत्तम अगर कालोअगरको काठ (तस्बिर श्रोत : एग्रोमार्टएनपीको फेसबुक पेज)

अगर(कृष्णागरु)ले शीतल गर्दछ, पित्तविकार नाश गर्दछ । स्वादमा मिठो र केही तितो हुन्छ । शरीर चिलाउने, शोष, विषको असर र कीरा नाश गर्दछ । यसले सौभाग्य र चमक दिन्छ । ताजा अगरले सुगन्ध बढाउँदछ, अङ्गलाई पुष्ट पार्दछ र मनलाई अति आनन्दित बनाउँदछ ।

(ङ) **धन्वन्तरि निघण्टु :**

**अगरु प्रवरं लोहं कृमिजग्धमनार्यकम् । कृष्णागरु स्वाद्वगुरु योगजं विश्वरूपकम् ॥**
**कटुतिक्तोष्णमगरु स्निग्धं वातकफापहम् । श्रुतिनेत्ररुजं हन्ति माङ्गल्यं कुष्ठनुत्परम् ॥**

अगरु, प्रवर, लोह, कृमिजग्ध, अनार्यक, कृष्णागरु, स्याद्वगुरु, योगज र विश्वरूपक : यी अगरका नाम हुन् । धूपी तीतो, उष्णवीर्यको, चिल्लो तथा वातविकार, कफविकार, कानका रोग र आँखाका रोग नाशक हुन्छ । यो मङ्गलदायक तथा प्रभावकारी ढङ्गले कुष्ठ नाशगर्ने गुणको हुन्छ ।

**कालेयकं ससारं च पीतवर्णं च शब्दतः । वर्णप्रसादनं चैव लघुचन्दनमेव च॥**

कालेयक, ससार, पीतवर्ण, वर्णप्रसादन र लघुचन्दन : यी पहेँलो अगरका नाम हुन् ।

**(च) निघण्टुशेष :**

**अगरावगुरुर्लोहं वंशिका विश्वरूपकम् । कृमिजं प्रवरं राजार्हं जौङ्गकमनार्यजम्॥**

अगरु, अगुरु, लोह, वंशिका, विश्वरूपक, कृमिज, प्रवर, राजार्ह, जौङ्गक र अनार्यज : यी अगरका नाम हुन् ।

**मल्लिगन्धेऽत्र मङ्गल्या .. .. .. । .. .. .. कृष्णे तु काकतुण्डकः ।**



अगरको फल (तस्बिर श्रोत : एग्रोमार्टएनपीको फेसबुक पेज)

मल्लिगन्धा र मङ्गल्या : यी लहेरे बेली जस्तो बास्ना आउने अगरका नाम हुन् । कालो अगरलाई काकतुण्डक भनिन्छ ।

**(छ) पर्यायरत्नमाला :**

**अगुरु शृङ्गजं कृष्णं लोहाख्यं लघु जोङ्गकम्॥**

अगुरु, शृङ्गज, कृष्ण, लोह, लघु र जोङ्गक : यी अगरका नाम हुन् ।

**(ज) भावप्रकाश निघण्टु :**

**अगुरु प्रवरं लोहं राजार्हं योगजं तथा । वंशिकं कृमिजं वाऽपि कृमिजग्धमनार्यकम्॥**
**अगुरूष्णं कटु त्वच्यं तिक्तं तीक्ष्णञ्च पित्तलम् । लघु कर्णाक्षिरोगघ्नं शीतवातकफप्रणुत्॥**
**कृष्णं गुणाधिकं तत्तु लोहवद्वारि मज्जति । अगुरुप्रभवः स्नेहः कृष्णागुरुसमः स्मृतः॥**

अगुरु, प्रवर, लोह, राजार्ह, योगज, वंशिक, कृमिज, कृमिजग्ध र अनार्यक : यी अगरका नाम हुन् । अगरले गर्मी गर्दछ । यो पिरो र तीतो हुन्छ । यो छालाको लागि लाभदायक, तिक्खर, पित्तकारक, पचाउन सहज तथा कान र आँखाका रोग, चिसो लागेको, वातविकार र कफविकार नाशक हुन्छ । अगरमध्ये कालो अगर बढी गुणशाली हुन्छ र पानीमा फलाम डुबेझैं डुब्दछ । तर, सबै खालका अगरको तेल भने कालो धूपीको तेल सरहकै गुणका हुन्छन् ।

**प्रपौण्डरीकं पौण्डर्यं चक्षुष्यं पौण्डरीयकम्॥**
**पौण्डर्यं मधुरं तिक्तं कषायं शुक्रलं हिमम् । चक्षुष्यं मधुरं पाके वर्ण्यं पित्तकफप्रणुत्॥**


अगरका बीज (तस्बिर श्रोत : एग्रोमार्टएनपीको फेसबुक पेज)

प्रपौण्डरीक, पौण्डर्य, चक्षुष्य, पौण्डरीयक : यी अगर विशेषका नाम हुन् । यो मिठो, तीतो र टर्रो हुन्छ । यसले वीर्य बढाउँदछ र शीतल गर्दछ । यो आँखाका लागि लाभदायक, पचेपछि गुलियो, वर्णमा निखार लेराउने तथा पित्तविकार र कफविकार नाशक हुन्छ ।

**(झ) मदनपाल निघण्टु :**

**कृष्णागुरु स्यादगुरु राजार्हं विश्वरूपकम् । जोङ्गकं शीतमलिनं कृमिजघ्नमनरक्तकम्॥**
**कृष्णागुरूष्णं कर्णाक्षिरोगनुत्पित्तलं लघु॥**

कृष्णागुरु, अगुरु, राजार्ह, विश्वरूपक, जोङ्गक, शीतमलिन, कृमिजघ्न र अनरक्तक : यी कालो अगरका नाम हुन् । यो गर्मी गर्ने तथा कान र आँखाका रोग नाशक हुन्छ । यसले पित्तविकार गर्दछ । यो पचाउन हलुका हुन्छ ।

**प्रपुण्डरीकः पौण्ड्राह्वः शतपुष्पं सुपुष्पकम् । पुण्ड्राह्वं शुक्रलं शीतं चक्षुष्यं श्लेष्मपित्तजित्॥**

प्रपुण्डरीक, पौण्ड्राह्व, शतपुष्प र सुपुष्पक : यी अगर विशेषका नाम हुन् । यसले शुक्र बढाउँदछ, शीतल गर्दछ, आँखालाई फाइदा गर्दछ तथा कफविकार र पित्तविकार माथि विजय प्राप्त गर्दछ ।

**..अगुरु..जम् ।**
**तैलं कषायं कटुकं तिक्तन्दुष्टव्रणापहम्॥ वातरक्तविषश्लेष्मकण्डूकुष्ठानिलाञ्जयेत्॥**

अगरको तेल टर्रो, पिरो, तीतो एवं बिग्रेका घाउखटिरा ठिक गर्ने गुणको हुन्छ । यो तेलले वातरक्त, विषविकार, कफविकार, चिलाउने रोग, कुष्ठ र वातविकारलाई जित्दछ ।

**(ञ) मदनादि निघण्टु :**

**कृष्णागरुः स्यादगरुः जोङ्गकः शीर्षकस्तथा । नरेन्द्रार्हं लोहजग्ध्वं कृमिजग्ध्वं वनद्रुमम्॥**
**उष्णवीर्योऽनिलहरो सुगन्धो धूपयोगिकः । लेपनोद्वर्तने युक्तो धूमपाने तथाऽगरुः॥**

कृष्णागरु, अगरु,  जोङ्गक, शीर्षक, नरेन्द्रार्ह, लोहजग्ध्व, कृमिजग्ध्व र वनद्रुम : यी अगरका नाम हुन्। अगर उष्णवीर्यको, वातविकार नाशक र सुगन्धी हुन्छ । यो धूप बनाउन, लेपन गर्न र बुकुवा घस्न तथा धूमपानमा समेत, प्रयोग हुने गर्दछ ।

**(ट) राज निघण्टु :**

**स्वादुस्त्वगरुसारः स्यात्सुधूम्यो गन्धधूमजः । स्वादुः कटुकषायोष्णः सधूमामोदवातजित्॥**

स्वादु, अगरुसार, सुधूम्य र गन्धधूमज : यी अगरको चोपका नाम हुन् । यो गुलियो, पिरो, टर्रो, र उष्णवीर्यको हुन्छ । यसको धुवाँ बास्नादार हुन्छ र यसले वातविकारलाई जित्दछ ।

**कृष्णागरु स्यादगरु शृङ्गारं विश्वरूपकम् । शीर्षं कालागरु केश्यं वसुकं कृष्णकाष्ठकम्॥**
**धूपार्हं वल्लरं गन्धराजकं द्वादशाह्वयम्॥**
**कृष्णागरु कटूष्णं च तिक्तं लेपे च शीतलम् । पाने पित्तहरं किञ्चित्त्रिदोषघ्नमुदाहृतम्॥**

(१) कृष्णागरु, (२) अगरु, (३) शृङ्गार, (४) विश्वरूपक, (५) शीर्ष, (६) कालागरु, (७) केश्य, (८) वसुक, (९) कृष्णकाष्ठक, (१०) धूपार्ह, (११) वल्लर र (१२) गन्धराजक : यी बाह्र नाम कालो अगरका नाम हुन् । कालो अगर पिरो, उष्णवीर्यको, तीतो, लेप दल्दा शीतल गर्ने, खाँदा पित्त विकार नाशगर्ने तथा केही हदसम्म त्रिदोषनाशक समेत हुन्छ भनिएको छ ।

**अन्यागुरु पीतकञ्च लोहं वर्णप्रसादनम् । अनार्यकमसारञ्च कृमिजग्धञ्च काष्ठकम्॥**
**काष्ठागरु कटूष्णञ्च लेपे रूक्षं कफापहम्॥**

अन्यागुरु, पीतक, लोह, वर्णप्रसादन, अनार्यक, असार, कृमिजग्ध र काष्ठक : यी काठेअगरका नाम हुन् । काठेअगर पिरो, उष्णवीर्यको, लेप दल्दा रुखो र (खाँदा) कफविकार नाशक हुन्छ ।

**दाहागरु दहनागरु दाहककाष्ठं च वह्निकाष्ठञ्च । धूपागरु तैलागरु पुरञ्च पुरमथनवल्लभञ्चैव॥**
**दाहागरु कटुकोष्णं केशानां वर्धनं च वर्ण्यं च ।**
**अपनयति केशदोषानातनुते सन्ततं च सौगन्ध्यम्॥**

दाहागरु, दहनागरु, दाहककाष्ठ, वह्निकाष्ठ, धूपागरु, तैलागरु, पुर र पुरमथनवल्लभ : यी नाम गुजराती अगरका नाम हुन् । यो अगर पिरो, उष्णवीर्यको, कपाल बढाउने, शरीरको वर्णमा निखार लेराउने, कपालका विकारहरु नाश गर्ने र निरन्तर बास्ना आउने गुणको हुन्छ ।

**मङ्गल्या मल्लिका गन्धमङ्गलाऽगरुवाचका । मङ्गल्या गुरुशिशिरा गन्धाढ्या योगवाहिका॥**

मङ्गल्या, मल्लिका, गन्धमङ्गला र अगरुवाची शब्द : यी चमेलीको बास्ना आउने अगरका नाम हुन् । यो अगर पचाउन कठिन, शीतवीर्यको, उत्तम बास्ना आउने र योगवाही हुन्छ ।

**(ठ) राजबल्लभ निघण्टु :**

**अगुरु व्रणजित्तिक्तं कटूष्णं कफवातजित्॥**



अगरको लेप घाउखटिरा नाशक, तीतो, पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ ।

**(ड) सरस्वती निघण्टु :**

**वंशिकागुरु राजार्हं लोहं कृमिज जोङ्गकम्॥ अशितो धनकश्चेति लोहकः परिगीयते ।**

वंशिक, अगुरु, राजार्ह, लोह, कृमिज, जोङ्गक, अशित, धनक र लोहक : यी अगरका नाम हुन् ।

**अन्यं कालागुरु प्रोक्तं जोङ्गकं विश्वरूपकम्॥**

कालागुरु, जोङ्गक र विश्वरूपक : यी कालो अगरका नाम हुन् ।

**सुगन्धागुरु विज्ञेयं मङ्गल्या मल्लिगन्धिका ।**

सुगन्धागुरु, मङ्गल्या र मल्लिगन्धिका : यी बास्ना आउने अगरका नाम हुन् ।

# अगस्ति

(Wisteria tree)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) अगस्त्य : फूलको अचार वा तरकारी खाइने, कार्तिक वा मंसिरमा फुल्ने, पन्ध्र-बीस हात अग्लो, एक हात लामा कोसा लाग्ने, माटो भैँ फुस्रो बोक्रा हुने, सेतो काठ र सेतै भेटनु हुने, फिक्का गुलाफी रङको टुप्पा हुने, चार अमल जति लामा चेप्टा दोब्रिएका फूल हुने र सेता, राता, पहैँला र काला फूल फुल्ने गरी यो चार प्रकारको हुने एक वृक्ष । (२) वङ्गसेन : रातो फूल हुने अगस्ति । (३) मुनिपुष्प : अगस्तिको फूल । (४) मुनिद्रुम : अगस्तिको रूख ।




(ख) डा. चुनेकर : यसको ल्याटिन नाम *Sesbania grandiflora* Linn. हो । यसको रुख १५-२० फीट अग्लो, सोझो र चाँडै बढ्ने खालको हुन्छ । शिरीषका जस्ता ६-१२ इञ्च लामा, १६-३० जोडी, आयताकार र टुप्पो खण्डित भएका पात हुन्छन् । २-४ इञ्च लामा सेता वा राता डुङ्गा आकारका फूल हुन्छन् । अगस्त तारो उदाउने बेलामा (भदौ १७-असोज) फूल फुल्दछ । फूल र मुनाको तरकारी र अचार खाइन्छ ।

(ग) आचार्य बालकृष्ण : प्रायः सेतो फूल फुल्ने पाइन्छ । पहेँला, नीला र राता फूल फुल्ने पनि पाइन्छन् । यसलाई अंग्रेजीमा Wisteria tree, West indian pea वा Sesban भनिन्छ । नेपालीमा यसलाई अगस्ति भनिन्छ । अगस्त्य तारा उदाएपछि मात्र फूल फुल्ने हुनाले यसको नाम अगस्त्य राखिएको हो । यसका पात र फललाई तरकारीका रूपमा प्रयोग गरिन्छ ।

(घ) डा.साङ्ग्चघर : यो ल्याटिन नाम *Sesbania grandiflora* Pers. हो ।

(ङ) नेपालको चुरे जङ्गल : अगस्तिको वानस्पतिक नाम *Sesbania grandiflora* (L.) Poir. हो ।

(च) नेशनल ट्रपिकल बोटानिकल गार्डेन, फ्लोरिडा, अमेरिकाको वेबसाइट : यसलाई अंग्रेजीमा Vegetable Hummingbird, Bakphul, Corkwood Tree, Scarlet Wisteria पनि भनिन्छ । यसका वानस्पतिक पर्यायवाची नाम *Aeschynomene grandiflora, Agati grandiflora, Robinia grandiflora, Sesban grandiflorus* Poir. पनि हुन् ।



अगस्ति (तस्विर श्रोत : नेशनल ट्रपिकल बोटानिकल गार्डेन, फ्लोरिडा, अमेरिका)

(छ) बोटानिकल सर्भे अफ इण्डियाको वेबसाइट : यो Fabaceae परिवारमा पर्दछ ।

नेपाली बृहत् शब्दकोशमा यसको परिभाषा राखिएको पाइएन । अर्कै कुनै नाम नेपालीमा भए थाहा पाउन सकिएन । चार थरीका अगस्तिमध्ये हाम्रो भूगोलमा प्रायः सेतो फूल फुल्ने अगस्ति मात्र पाइन्छ । यसका पात र फल झण्डैझण्डै सैजन वा सजिवनका जस्तै देखिन्छन् ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान रत्नमाला :**

**अगस्त्य(अगस्ति)को मौनि(मुनि)नामा केषाञ्चिन्मधुशिग्रुकः ॥**



अगस्ति (तस्बिर श्रोत : नेशनल ट्रपिकल बोटानिकल गार्डेन, फ्लोरिडा, अमेरिका)

अगस्त्यक (अगस्ति), मुनि र यसका पर्याय तथा मधुशिग्रुक : यी अगस्तिका नाम हुन् ।

**(ख) अष्टाङ्ग निघण्टु :**

**अगस्तिको मुनिनामा कुम्भयोनिश्च स स्मृतः ॥**

अगस्तिक, मुनि र यसका पर्याय तथा कुम्भयोनि : यी अगस्तिका नाम हुन् ।

**(ग) कैयदेव निघण्टु :**

**अगस्तिकः कुम्भयोनिरगस्त्यो मधुशिग्रुकः ॥ मुनिवृक्षो वङ्गसेन कोपवैरमधुर्यतिः ।**

अगस्तिक, कुम्भयोनि, अगस्त्य, मधुशिग्रुक, मुनिवृक्ष, वङ्गसेन र कोपवैरमधुर्यति (?) : यी अगस्तिका नाम हुन् ।


अगस्ति (तस्विर श्रोत : नेशनल ट्रपिकल बोटानिकल गार्डेनको वेबसाइड, फ्लोरिडा, अमेरिका)

**अगस्तिः शीतलो रूक्षस्तिक्तो वातप्रकोपनः ॥ कफपित्तप्रतिश्यायचातुर्थिकविनाशनः ।**

अगस्ति शीतवीर्यको, रुखो, तीतो, वातविकारलाई उत्तेजित बनाउने तथा कफविकार, पित्तविकार, पिनास र चार दिन बिराएर आउने जरोलाई नाशगर्ने गुणको हुन्छ ।

**अगस्तिपत्रं कटुकं सतिक्तं गुरु कृमिघ्नं विशदं कफघ्नम् ।**
**कण्डूहरं शोणितपित्तहारि स्यात् सूक्ष्ममुष्णं मधुरं विषघ्नम् ॥**

अगस्तिको पात पिरो, तीतो सहितको, पचाउन कठिन, सफा सुन्दर र चम्किलो, तथा कफविकार, लुतो र रक्तपित्त नाशगर्ने गुणको हुन्छ । यो सूक्ष्म गुणको, उष्णवीर्यको, गुलियो र विषविकार नाशक हुन्छ ।

**तत्पुष्पं नातिशीतोष्णं कटुपाकं सतिक्तकम् । कषायं वातलं पित्तकफनक्तान्ध्यनाशनम् ॥**

अगस्तिको फूल धेरै शीतवीर्यको र धेरै उष्णवीर्यको हुँदैन । पचेपछि पिरो र केही तीतो हुन्छ । यो टर्रो, वातविकार गर्ने तथा पित्तविकार, कफविकार र रतन्धो नाशगर्ने गुणको हुन्छ ।

**सुस्वादु तिक्तं कफहृत् विरूक्षं शूलप्लीहापाण्डुगरामयघ्नम् ।**
**शोषं च गुल्मं विनिहन्त्यगस्तिफलं नितान्तं प्रकरोति पित्तम् ॥**

अगस्तिको फल गुलियो, तीतो तथा कफविकार नाशक हुन्छ । यो रुखो तथा शूल, फियोका रोग, पाण्डु, विषविकार, सुकेनास र गुल्म नाशगर्ने गुणको हुन्छ । यसले बढी नै पित्तविकार गर्दछ ।



अगस्ति (तस्बिर श्रोत : नेशनल ट्रपिकल बोटानिकल गार्डेनको वेबसाइड, फ्लोरिडा, अमेरिका)

**(घ) निघण्टु रत्नाकर (शा.नि.) :**

**मुनिशिम्बी सरा प्रोक्ता बुद्धिदा रुचिता लघुः । पाककाले तु मधुरा तिक्ता चैव स्मृतिप्रदा ॥**

**त्रिदोषशूलकफहृत् पाण्डुरोगविषपनुत् । शोषगुल्महरा प्रोक्ता सा पक्वा रूक्षपित्तला ॥**

अगस्तिको फल मलमूत्रलाई तलतिर सार्ने, बुद्धिदायक, रुचिप्रद, पचाउन सहज, पचेपछि गुलियो र तीतो, दिमागको ग्रहण गर्ने क्षमता बढाउने तथा त्रिदोष, शूल, कफविकार, पाण्डु, विषविकार, सुकेनास र गुल्म नाशक हुन्छ । यसको पाकेको फल रुखो र पित्तविकार गर्ने गुणको हुन्छ ।

(ङ) **निघण्टुशेष :**

**अगस्त्ये तु बहुसेनः शुकनाशो मुनिद्रुमः ॥**

अगस्ति, बहुसेन, शुकनाश र मुनिद्रुम : यी अगस्तिका नाम हुन् ।

(च) **पर्यायरत्नमाला :**

**रक्तपुष्पो मुनितरुरगस्तिर्वङ्गसेनकः ॥**

रक्तपुष्प, मुनितरु, अगस्ति र वङ्गसेनक : यी अगस्तिका नाम हुन् ।

(छ) **भावप्रकाश निघण्टु :**

**अथागस्त्यो वङ्गसेनो मुनिपुष्पो मुनिद्रुमः । अगस्तिः पित्तकफजिच्चातुर्थिकहरो हिमः ॥**
**रूक्षो वातकरस्तिक्तः प्रतिश्यायनिवारणः ।**

अगस्त्य, वङ्गसेन, मुनिपुष्प र मुनिद्रुम : यी अगस्तिका नाम हुन् । यसले पित्तविकार, कफविकार र चार दिन बिराएर आउने जरो नाश गर्दछ तथा शीतल गर्दछ । यो रुखो र तीतो हुन्छ । यसले वातविकार बढाउँदछ र पिनास नाश गर्दछ ।

**अगस्तिकुसुमं शीतं चातुर्थिकनिवारणम् ॥**
**नक्तान्ध्यनाशनं तिक्तं कषायं कटुपाकि च । पीनसश्लेष्मपित्तघ्नं वातघ्नं मुनिभिर्मतम् ॥**

अगस्तिको फूलले शीतल गर्दछ । यसले हरेक चौथो दिनमा आउने "चतुर्थक" नामक जरो र रतन्धो रोग नाश गर्दछ । यो तीतो, टर्रो र पिरो हुन्छ । मुनिजनका मत अनुसार यसले पिनास, कफविकार, पित्तविकार र वातविकार नाश गर्दछ ।

(ज) **मदनपाल निघण्टु :**

**अगस्त्यो वङ्गसेनाह्वो मधुशिग्रुर्मुनिद्रुमः । अगस्त्यः पित्तकफजिन्निदाघशमनो हिमः ॥**
**तत्पुष्पं पीनसश्लेष्मपित्तनक्तान्ध्यनाशनम् ॥**

अगस्त्य, वङ्गसेनाह्व, मधुशिग्रु र मुनिद्रुम : यी अगस्तिका नाम हुन् । यसले पित्तविकार र कफविकारलाई जित्दछ । गर्मी नाश गर्दछ । यो शीतवीर्यको हुन्छ । यसको फूलले पिनास, कफविकार, पित्तविकार र रतन्धो रोग नाश गर्दछ ।

**(झ) राजनिघण्टु :**

**अगस्त्यः शीघ्रपुष्पः स्यात् अगस्तिस्तु मुनिद्रुमः । व्रणारिदीर्घफलको वक्रपुष्पः सुरप्रियः॥**
**सितपीतनीललोहितकुसुमविशेषाच्चतुर्विधोऽगस्तिः ।**
**मधुरशिशिरस्त्रिदोषश्रमकासविनाशनश्च भूतघ्नः॥**
**अगस्त्यं शिशिरं गौल्यं त्रिदोषघ्नं श्रमापहम् । बलासकासवैवर्ण्यभूतघ्नश्च बलापहम्॥**

अगस्त्य, शीघ्रपुष्प, अगस्ति, मुनिद्रुम, व्रणारि, दीर्घफल, वक्रपुष्प र सुरप्रिय (देवप्रिय) : यी नाम अगस्तिका नाम हुन् । सेतो, पहेँलो, नीलो र रातो फूल विशेष फुल्ने आधारमा अगस्ति चार प्रकारको हुन्छ । अगस्ति गुलियो, शीतवीर्यको तथा त्रिदोष, थकाई, खोकी र भूतबाधा नाशक हुन्छ । यो शीतवीर्यको, गुलियो तथा त्रिदोष, थकाई, कफविकार, खोकी, शरीरको रङ्ग उड्ने रोग, भूतबाधा र बल नासक हुन्छ ।

**(ञ) राजवल्लभ निघण्टु :**

**... पुष्पाणि वङ्गसेनस्य चैव हि । कटुपाकानि तिक्तानि कासक्षयहराणि च॥**

अगस्तिको फूल पचेपछि पिरो, स्वादमा तीतो तथा खोकी र क्षयरोग नाशगर्ने गुणको हुन्छ ।

**(ट) शालिग्राम निघण्टु :**



**अगस्त्यो वङ्गसेनश्च पुनिपुष्पो मुनिद्रुमः ।**

अगस्त्य, वङ्गसेन, मुनिपुष्प र मुनिद्रुम : यी अगस्तिका नाम हुन् ।

**पर्णं तु मुनिवृक्षस्य कटु तिक्त गुरु स्मृतम् । मधुरं किञ्चिदुष्णं च स्वच्छं कृमिकफापहम्॥**
**कण्डूं विषं रक्तपित्तं नाशयेदिति कीर्तितम् ।**

अगस्तिका पात पिरो, तीतो, पचाउन कठिन, गुलियो, केही उष्णवीर्यको, स्वच्छ तथा कीरा, कफविकार, लुतो, विषविकार र रक्तपित्त नाशक हुन्छ भनिएको छ ।

**(ठ) सरस्वति निघण्टु :**

**अगस्तिकः कुम्भयोनिर्मुनिशाको मुनिद्रुमः॥**

अगस्तिक, कुम्भयोनि, मुनिशाक र मुनिद्रुम : यी अगस्तिका नाम हुन् ।

# अग्निजार
## (Amber)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) अग्निजार, अग्निगर्भ, अग्निज : अम्बरनामको सुगन्धित वस्तु, औषधिविशेष । (२) जरायु : अम्बर ।

(ख) वैद्यनमःडटकम (अग्निजार) : यसको अंग्रेजी नाम Amber (याम्बर) हो । यो स्पर्म वेल (अग्नि) नामक माछाको आन्द्रामा बहने मैन जस्तो तरल पदार्थ हो । आलोमा यो गह्राउने हुन्छ तर सुकेपछि बास्ना आउने बन्दछ । यो माछाले समुद्रमा खाने एक प्रकारको घाँसले उसको पेटमा कब्जियत हुन थाल्दछ । यसले बिस्तारै त्यो माछाको आन्ध्रामा अवरोध भई सड्न थाल्दछ र अन्तमा माछा मर्दछ । यसरी माछा मरेपछि उक्त माछाको आन्ध्राको त्यो भाग शरीरबाट अलग भई समुद्रमा तैरन थाल्दछ । पछि हावाले यसलाई समुद्रको किरानामा लैजान्छ र माझीहरूले यसलाई जम्मा पारी सुकाउने गर्दछन् । घामले सुकेपछि यो विशिष्ट ढङ्गले उत्तेजक र सुगन्धित हुन पुग्दछ । यो श्रीलंका, अफ्रिका आदि देशका समुद्री तटमा बढी पाइन्छ । प्राचीन मतमा यो अग्निचक्र नामक समुद्री प्राणी विशेषको गर्भकोष हो । घामले सुकेको अग्निजारलाई समुद्री किनारामा माझीबाट बटुलिने गर्दछ ।



Sperm whale (Source : BBC wildlife)

(ग) नेपाली बृहत् शब्दकोश : अम्बर : सुगन्धित द्रव्यविशेष ।

(घ) बाबाआयुर्वेद्डटकम : यसको ल्याटिन नाम Amber Gris (याम्बर ग्रिस) हो ।

(ङ) आयुर्वेदीय कोश : यो पश्चिमी समुद्रमा पाइने सागरबाट उत्पन्न हुने ओखती विशेष हो । यो समुद्रफलको रूख हो । यो चार रङको हुन्छ र रातो सबभन्दा उत्तम हुन्छ । पर्यायवाची शब्द अग्निजाल, अग्नि निर्यास, अग्निगर्भ, अग्निज, वडवाग्निमल, जरायु, अर्णवोद्भव, अग्निजात र सिन्धुजात हो । समग्रमा यहाँ यो एक विरुवा हो भनी व्याख्या गरिएको छ । समुद्रफलको बेग्लै परिभाषा दिइएको छ ।

आधुनिक मतले याम्बरग्रिस अत्तर बनाउन प्रयोग हुन्छ र अति नै बहुमूल्य हुन्छ तथा यसको ओसारपसार र बेचबिखन गर्न धेरै देशमा प्रतिबन्ध लगाइएको छ भनेको छ । तर आयुर्वेदमा जेजस्ता पर्यायवाची शब्द राखिएका छन् तिनले यो आधुनिक मतलाई समर्थन गर्दैनन् । आजकल जे कुरालाई याम्बर ग्रिस मानिन्छ यो खैरो, पहेँलो वा कालो समेत हुने गर्दछ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**अग्निजारोऽग्निनिर्यासोऽप्यग्निगर्भोऽग्निजः स्मृतः । बडबाग्निमलो ज्ञेयो जरायुश्चाग्निसम्भवः ॥**
**स्यादग्निजारः कटुरुष्णवीर्यस्तुण्डामयो वातकफापहश्च ।**
**पित्तप्रदः सोऽधिकसन्निपातशूलार्तिशीतामयनाशकश्च ॥**



अग्निजार (तस्बिर श्रोत : बाबाआयुर्वेदडटकम)

अग्निजार, अग्निनिर्यास, अग्निगर्भ, अग्निज, बडबाग्निमल, जरायु र अग्निसम्भव : यी अग्निजार नामक ओखतीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा मुखका रोग, वातविकार र कफविकार नाशक हुन्छ । यसले पित्तविकार गर्दछ तथा बढेको सन्निपात, शूलजन्य पीडा र शीतजन्य रोग पनि नाश गर्दछ ।

## अग्निदमनी (सिस्नो वा अल्लो)
## Bull nettle or Nepalese nettle

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) अग्निदमनी, बहुकण्टका, क्षुद्रकण्टारिका : सिस्नु वा सिस्नो । (२) वल्लिकण्टारिका : सिस्नु । सिस्नु घाँस । (३) क्षुद्रफला, क्षुद्रदुस्पर्शा, दमनी : सिस्नु । (४) वृश्चिका : अल्लो घाँस । सेतो पुनर्नवा । सतिबयर । (५) नखपर्णी : अल्लो । सेतो सिमी । (६) पिच्छिला : तालमखाना । अल्लो । पवै । आलस । शिशौ । अगुरु । सिमल । पिँडालु । (७) अलिपत्रिका : अल्लो घाँस ।

(ख) नेपाली बृहत् शब्दकोश : (१) सिस्नु : सेतो वा कालो भावको हरियो फूल फुल्ने, बिझ्ने र पोल्ने तीखा सेता नरम काँडा हुने, घाँस जातको, रुचिकारक र अग्निवर्धक बोट । (२) पातले सिस्नु : साना डाँठ र झ्याम्टा हुने एक जातको सिस्नु; अल्लो । (३) भाङ्गे सिस्नु : पाट निकाली भाङ्ग्रा, बोरा आदि बनाइने, काम्लेका जस्तै पात हुने र पातमा काँडा हुने ठूलो जातको सिस्नु; अल्लो । (नेपालमा सिस्नुको मुण्टालाई तरकारी पकाएर खाइन्छ) । (४) अल्लेपाट : नेपाली कागत बनाउन तथा धोक्रा, लुकुनी आदि बनाउनका निम्ति प्रयोग गरिने सिस्नुजस्तै एक प्रकारको बुटो (अल्लो) को पाट । (५) अल्लो : पाटको धागो बनाएर धोक्रा र अन्य लगाउने साधन बनाइने एक जातको ठूलो खालको सिस्नु; लेकाली सिस्नु ।


सिस्नु (तस्विर श्रोत : किचन वारियर नामक फेसबुक पेज)

(ग) आचार्य बालकृष्ण : (१) सिस्नु : यसलाई नेपालीमा सिस्नु, हिन्दीमा बिच्छूबूटी वा कंडाली, अंग्रेजीमा Tall nettle, Large sting nettle, Bull nettle, Common nettle वा Edible nettle तथा ल्याटिनमा *Urtica dioica* Linn. भनिन्छ । (२) अल्लो : यसलाई नेपालीमा उल्लो, हिन्दीमा अल्ला, संस्कृतमा वृश्चिका वा नखपर्णी, अंग्रेजीमा Nepalese nettle, Himalayan nettle, Nilgiri nettle, Indian stinging nettle वा Itching plant तथा ल्याटिनमा *Girardinia diversifolia* (Link) Friis, *Girardinia*

*heterophylla* (Vahl) Decne. वा *Girardinia zeylanica* Decne. भनिन्छ । यसको संस्कृत नाम वृश्चिका वा नखपर्णी हो ।

(घ) डा.सतिश चन्द्र साङ्ख्यधर : यो विरुवा हालसम्म यकीन हुन सकेको छैन ।

(ङ) मोनियर विलियम्स (अग्निदमनी) : A narcotic plant, Solanum Jacquini.

(च) अल्लो Angiosperm समूह अन्तर्गत Urticaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Girardinia diversifolia* (Link) Friis हो ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अष्टाङ्ग सङ्ग्रह :**

**दावाग्निदमनी माता क्षुद्रकण्टारिका तथा ।**
दावाग्निदमनी, माता र क्षुद्रकण्टारिका : यी सिस्नुका पर्यायवाची नाम हुन् ।

**(क) राज निघण्टु :**

**अथाग्निदमनी वह्निदमनी बहुकण्टका । वल्लिकण्टारिका गुच्छफला क्षुद्रफला ॥**
**विज्ञेया क्षुद्रदुःस्पर्शा क्षुद्रकण्टारिका तथा । मत्त्येन्द्रमाता दमनी स्यादित्येषा दशाह्वया ॥**
**कटूष्णा चाग्निदमनी रूक्षा वातकफापहा । रुचिकृद्दीपनी हृद्या गुल्मप्लीहापहा भवेत् ॥**


(अल्लो) *Girardinia diversifolia*, Catalogue of Plants of NBG, Nepal

(१) अग्निदमनी, (२) वह्निदमनी, (३) बहुकण्टका, (४) वल्लिकण्टारिका, (५) गुच्छफला, (६) क्षुद्रफला, (७) क्षुद्रदुःस्पर्शा, (८) क्षुद्रकण्टारिका, (९) मत्त्येन्द्रमाता र (१०) दमनी : यी दश नाम सिस्नुका संस्कृत पर्यायवाची नामहरू हुन् । सिस्नु पिरो, उष्णवीर्यको, रुखो तथा वातविकार र कफविकार नाशक हुन्छ । यसले रुचि जगाउँदछ, मुटुका लागि फाइदा गर्दछ तथा गुल्म र फियोका रोग नाश गर्दछ ।

**वृश्चिका नखपर्णी च पिच्छिलाप्यलिपत्रिका ।**
**वृश्चिका पिच्छलाऽम्ला स्यादन्त्रवृद्ध्यादिदोषनुत्॥**

वृश्चिका, नखपर्णी, पिच्छिला र अलिपत्रिका : यी अल्लोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो लेस्याइलो, अमिलो र हर्नियाँ आदि रोग नाशक हुन्छ ।

## अग्निमन्थ (गिनेरी, Creek premna)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : श्रीपर्ण, अग्निमन्थ आदि नामले गिनेरीलाई बुझाउँदछ ।

(ख) के.यन.स्वामी : (१) अग्निमन्थ, जयन्ती, श्रीपर्ण र श्रीपर्णी : गिदेरी रूख । (२) गणिकारिका, जय, जया, तर्कारी र नादेयी : गिनेरी ।

(ग) नेपाली बृहत् शब्दकोश : (१) गिनेरी : सेतो रङको फूल फुल्ने र खयररङका ससाना फल फल्ने, साना ठूला दुई भेद हुने, सानोका पात लाम्चा र ठूलोका पात नीमका जस्ता हुने एक वृक्ष । (२) गिदेरी : केही लाम्चा र नरम पात हुने, गाईबस्तुलाई घाँस खुवाइने, बिछ्यौनामा च्याप्दा उडुस, उपियाँको औषधी हुने बुटो; सेतो, खैरो र कालो तीन किसिमका हुने सेतो गिदेरी, खैरो गिदेरी र कालो गिदेरी नामको बोट ।

(घ) डा. चुनेकर : यो सानो र ठूलो गरी दुई किसिमको हुन्छ । सानो अग्निमन्थलाई ल्याटिन भाषामा *Clerodendrum phlomidis* Linn.f. भनिन्छ । यसैगरी ठूलो अग्निमन्थलाई ल्याटिन भाषामा *Premna integrifolia* Linn भनिन्छ । ठुलो गिनेरीको *Premna latifolia* Roxb. वानस्पतिक नाम भएको एक अर्को भेद पनि हुन्छ । यस भेगमा पाइने यो जातको गिनेरीलाई *P. nucronata* Roxb. भन्दछन् ।



गिनेरी : *Premna corymbosa* (Burm. f.) Rottler & Willd., Singapur

(ङ) विश्वनाथ द्विवेदी शास्त्री : यसको बोट धेरै अग्लो हुन्छ । गोलाकार, केही तिखा र नरम पात हुन्छन् । सेता गुच्छाकार फूल फुल्दछ । वसन्त ऋतुमा फुल्ने फूलबाट मिठो सुगन्ध आउँदछ । हाँगाहरू तलतिर नुहेका हुन्छन् । यसको काठमा पहेँलो पन बढी हुन्छ । यसका दुई वटा काठ रगड्दा आगो निस्कने हुनाले यसलाई अग्निमन्थ भनिएको हो ।

(च) आचार्य बालकृष्ण : यसको वानस्पतिक नाम *Premna serratifolia* L., *Syn-Premna obtusifolia* R. Br., *Premna integrifolia* L., *Premna attenuata* R. Br. हो । यसलाई अंग्रेजीमा Creek premna, Spinous fire brand teak वा Coastal

premna भनिन्छ । यो ठूलो र सानो गरी दुई जातको हुन्छ । यो Verbenaceae परिवारमा पर्दछ ।

(छ) वैद्य डी.के. कामत र डा.यस.डी.कामत : गिनेरी (अग्निमन्थ) Verbenaceae परिवारमा पर्दछ । यसको *Clerodendron phlomidis* Linn., *Clerodendrum mutiflorum* (Burm. f. ) O. Ktze., *Premna integrifolia* Linn., Syn. *Premna spinosa* Roxb., *Premna corymbosa* Rottle., *Clerodendron inerme* (L.) Gaertn. वा *CIerodendrum inerme* (Linn .f) Gaertn. वानस्पतिक नाम हो ।

(ज) नेपालको चुरे जङ्गल, जुलाई २०१४, नेपाल सरकार : गिनेरीको वानस्पतिक नाम *Premna barbata, Premna barbata* Wall., *Premna barbata* Wall. var. anodon C.B Clarke, *Premna barbata* Wall. var. barbata, *Premna interrupta* वा *Premna interrupta* Wall. हो ।

(झ) फर्माकोपिया : यसको संस्कृत नाम गणिकर्णिका, जयन्ती र जया हो । यो Verbenaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Clerodendrum phlomidis* Linn. हो । यो नौ मिटरसम्म अग्लो हुन्छ । यसको जरा १२-२४ ग्रामसम्म काँढापानीमा प्रयोग हुन्छ ।

(ञ) मोनियर विलियम्स : अग्निमन्थ भनेको *Premna Spinosa* हो ।

(ञ) प्रेम्ना बार्बाटाको लागि प्रयोग गरेको देखिने संस्कृत नाम "वसुक" कुनै पनि निघण्टु ग्रन्थमा पाइएन । गिदेरी र गिनेरी पनि फरक फरक वनस्पति भएको माथिका परिभाषाबाट देखिन्छ ।



गिनेरी : *Premna corymbosa* (Burm. f.) Rottler & Willd., Singapur

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**विजया जयाऽग्निमन्थस्तक्कारी वैजयन्तिकाऽरणिका ।**
**अरणी केरूररणी श्रीपर्णी कर्णिकौजकर्णी (च)॥**

**निर्दिश्यते जयन्तीपर्यायैः सप्तदंष्ट्रिका चेति । नामभिरन्यैवास्याः कथिता क्षुद्राभिधानपूर्वैश्च ॥**

विजया, जया, अग्निमन्थ, तक्कारी, वैजयन्तिका, अरणिका, अरणी, केरूररणी, श्रीपर्णी, कर्णिका, ओजकर्णी, जयन्ती र सप्तदंष्ट्रिका : यी गिनेरीका पर्यायवाची नाम हुन् । यी शब्दका अगाडि क्षुद्र शब्द जोड्नाले अर्को सानो जातको गिनेरीलाई बुझाउँदछ ।

**(ख) अभिधान रत्नमाला :**

**अग्निमन्थो वैजयन्ती तर्कारी विजया जया । क्षुद्राग्निमन्थोऽरणिको गन्धपत्रो वरी मतः ॥**

अग्निमन्थ, वैजयन्ती, तर्कारी, विजया र जया : यी गिनेरीका नाम हुन् । क्षुद्राग्निमन्थ, अरणिक, गन्धपत्र र वरी : यी सानो गिनेरीका नाम हुन् ।

**(ग) अमरकोश :**

**श्रीपर्णमग्निमन्थ स्यात्कणिका गणिकारिका । जयोऽ...।**

श्रीपर्ण, अग्निमन्थ, कणिका, गणिकारिका र जय : यी गिनेरीका नाम हुन् ।



गिनेरी : *Clerodendrum phlomidis* L. f., J. M. Garg / Wikipedia

**(घ) अर्कप्रकाश :**

**अग्निमन्थोद्भवः शोथकृमिपाण्डुबलासनुत् ॥**

गिनेरीको अर्कले शरीर सुन्निएको, किरा, पाण्डुरोग र कफविकार नाश गर्दछ ।

**(ङ) आयुर्वेद महोदधि :**

**तर्कारी वातहन्त्री च कण्डूत्वग्दोषवर्धनम् ।**

गिनेरीको दाउराले तताइएको पानीले वातविकार नाश गर्दछ, चिलाउने रोग र छालाका दोष बढाउँदछ ।



गिनेरी : *Clerodendrum phlomidis* L. f., J. M. Garg / Wikipedia

**(च) कैयदेव निघण्टु :**

**अग्निमन्थोऽरणिः केतुस्तर्कारी वैजयन्तिका ॥ मथनो वह्निमथनो गणिका गणिकारिका ।**
**गणिका पावकाह्वान्या जयन्ती विजया जया ॥ तर्कारी कटुका तिक्ता तुवरा मधुराग्निदा ।**
**वीर्योष्णा हरते वातकफश्वयथुपाण्डुताः ॥ अग्निमन्थो गुणैस्तद्वद्विशेषाद्वातशोफहा ।**

अग्निमन्थ, अरणि, केतु, तर्कारी, वैजयन्तिका, मथन, वह्निमथन, गणिका र गणिकारिका : यी एकथरी गिनेरीका तथा गणिका, पावक र यसका पर्याय, जयन्ती, विजया र जया : यी अर्को थरी गिनेरीका नाम हुन् । गिनेरी पिरो, तीतो, टर्रो, गुलियो, पाचनशक्ति बढाउने, उष्णवीर्यको तथा वातविकार,

कफविकार, सुजन र पाण्डुरोग नाशगर्ने गुणको हुन्छ । दोश्रो थरी गिनेरीमा पनि यिनै गुण हुन्छन् । यसले विशेषगरी वातविकार र सुजन नाश गर्दछ ।

## (छ) धन्वन्तरी निघण्टु :

**अग्निमन्थोऽग्निमथनस्तर्कारी वैजयन्तिका ॥ वह्निमन्थोऽरणी केतुः श्रीपर्णी कर्णिका जया ।**
**नादेयी वह्निमथनो द्वितीयश्चाग्निमन्थनः ॥ रक्ताङ्गो मन्थनश्चैव स चैवारणिको मतः ।**
**(क्षुद्राग्निमन्थस्त्वपरः पूर्वनाम नियोजितः । क्षुद्राग्निमन्थ इत्यादिनामानि परिचक्षते ॥)**
**तर्कारी कटुका तिक्ता तथोष्णाऽनिलपाण्डुजित् ॥**
**शोफश्लेष्माग्निमान्द्यांश्च विबन्धांश्च विनाशयेत् ।**


गिनेरी : Premna serratifolia, Tau'olunga, en.wikipedia.org

अग्निमन्थ, अग्निमथन, तर्कारी, वैजयन्तिका, वह्निमन्थ, अरणी, केतु, श्रीपर्णी, कर्णिका र जया : यी पहिलो थरी गिनेरीका; नादेयी र वह्निमथन : यी दोश्रो थरी गिनेरीका तथा रक्ताङ्ग, मन्थन र अरणिक : यी तेश्रो थरी गिनेरीका नाम हुन् । (अर्को क्षुद्राग्निमन्थ पनि हुन्छ, यो माथि बताइएका नामका अगाडि क्षुद्र शब्द जोडेपछि यसलाई बुझिन्छ) । गिनेरी पिरो, तीतो, उष्णवीर्यको तथा वातविकार र पाण्डुरोगलाई जित्ने गुणको हुन्छ । यसले सुजन, कफविकार, पाचनशक्तिको कमजोरी र विबन्ध नाश गर्दछ ।

## (ज) निघण्टुशेष :

**अरणावग्निमन्थः स्यात् तर्कारी वैजयन्तिका ।**

**जया जयन्ती श्रीपर्णी कणिका गणिकारिका ॥**
**तेजोमन्थो हविर्मन्थो नादेयी वह्निशोधनः ॥**

अरणि, अग्निमन्थ, तर्कारी, वैजयन्तिका, जया, जयन्ती, श्रीपर्णी, कणा, गणकारिका, तेजोमन्थ, हविर्मन्थ, नादेयी र वह्निशोधन : यी गिनेरीका नाम हुन् ।

**(झ) पर्याय रत्नमाला :**

**तेजोमन्थो हविर्मन्थो ज्योतिष्कः पावकोऽरणिः । वह्निमन्थोऽग्निमन्थश्च मथनो गणिकारिका ॥**

तेजोमन्थ, हविर्मन्थ, ज्योतिष्क, पावक, अरणि, वह्निमन्थ, अग्निमन्थ, मथन र गणिकारिका : यी गिनेरीका नाम हुन् ।

**(ञ) भावप्रकाश निघण्टु :**

**अग्निमन्थो जयः सस्याच्छ्रीपर्णी गणिकारिका ॥ जया जयन्ती तर्कारी नादेयी वैजयन्तिका ।**
**अग्निमन्थः श्वयथुनुद्वीर्योष्णः कफवातहृत् ॥ पाण्डुनुत्कटुकस्तिक्तस्तुवरो मधुरोऽग्निदः ।**

अग्निमन्थ, जय, श्रीपर्णी, गणिकारिका, जया, जयन्ती, तर्कारी, नादेयी र वैजयन्तिका : यी गिनेरीका पर्यायवाची नाम हुन् । यसले सुजन ठिक गर्दछ, गर्मी गर्दछ, कफविकार र वातविकार नाश गर्दछ तथा पाण्डु रोग ठिक गर्दछ । यो पिरो, तीतो, टर्रो र गुलियो हुन्छ । यसले जठराग्निलाई बाल्दछ ।



**(ट) मदनपाल निघण्टु :**

**अग्निमन्थो मथः केतुररणिर्वैजयन्तिका । अग्निमन्थः श्वयथुहृद्वीर्योष्णः कफवातनुत् ॥**

अरणिका अग्निमन्थ, मथ, केतु, अरणी र वैजयन्तिका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले सुन्निएको बसाउँदछ, गर्मी गर्दछ तथा कफरोग र वायुरोग ठिक गर्दछ ।

**(ठ) मदनादि निघण्टु :**

**अग्निमन्थोऽग्निमथनस्तर्कारी वैजयन्तिका । वह्निमन्थोऽरणिः केतुर्जया पावकमन्थनः ॥**

अग्निमन्थ, अग्निमथन, तर्कारी, वैजयन्तिका, वह्निमन्थ, अरणि, केतु, जया र पावकमन्थन : यी गिनेरीका नाम हुन् ।

**तर्कार्यन्या वैजयन्ती वह्निनिर्मन्थनी जया । अरण्यका जयन्ती च विजया च जयावहा ॥**
**कषाय तिक्ते वीर्ये च कफमेदाविषापहा । तर्कारी सर्वशोफघ्नी तिक्ता लेपोपनाहने ॥**

तर्कारी, वैजयन्ती, वह्निनिर्मन्थनी, जया, अरण्यका, जयन्ती, विजया र जयावहा : यी अर्को थरी गिनेरीका नाम हुन् । गिनेरी टर्रो, तीतो तथा कफविकार, बोसोविकार र विषविकार नाशगर्ने गुणको हुन्छ । यसको तीतो लेप वा मलमले सबै खालका सुजन नाश गर्दछ ।

(ड) **राज निघण्टु :**

**अग्निमन्थोऽग्निमथनस्तर्कारी वैजयन्तिका । वह्निमन्थोऽरणी केतुः श्रीपर्णी कर्णिका जया ॥**
**नादेयी विजयाऽनन्ता नदी यावत् त्रयोदश ॥ तर्कारी कटुरुष्णा च तिक्ताऽनिलकफापहा ।**
**शोफश्लेष्माग्निमान्द्यार्शोविड्बन्धाध्माननाशनी ॥**

(१) अग्निमन्थ, (२) अग्निमथन, (३) तर्कारी, (४) वैजयन्तिका, (५) वह्निमन्थ, (६) अरणी, (७) केतु, (८) श्रीपर्णी, (९) कर्णिका, (१०) जया, (११) नादेयी, (१२) विजया, (१३) अनन्ता र (१४) नदी : यी चौध (तेह्र भनिएको) नाम ठुलो गिनेरीका पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, तीतो तथा वातविकार, कफविकार, सुजन, कफजन्य असर, कमजोर पाचनशक्ति, अल्काई, कब्जियत र आध्मान नाशक हुन्छ ।

**क्षुद्राग्निमन्थस्तपनो विजया गणिकारिका । अरणिर्लघुमन्थश्च तेजोवृक्षस्तनुत्वचा ॥**
**अग्निमन्थद्वयं चैव तुल्यं वीर्यरसादिषु । तत् प्रयोगानुसारेण योजयेत् स्वमनीषया ॥**



क्षुद्राग्निमन्थ, तपन, विजया, गणिकारिका, अरणि, लघुमन्थ, तेजोवृक्ष र तनुत्वचा : यी सानो गिनेरीका पर्यायवाची नामहरू हुन् । दुवै गिनेरी वीर्य, रस आदिमा समान हुन्छन् । वैद्यले आवश्यकता अनुसार स्वविवेकले यिनको प्रयोग गर्नू ।

(ढ) **राजवल्लभ निघण्टु :**

**गणिकारी तु शोथघ्नी हिता वातविकारिणाम् ॥**

गिनेरीले सुजन नाश गर्दछ । यो वातविकारका रोगीलाई हितकर हुन्छ ।

(ण) **शालिग्राम निघण्टु :**

**अग्निमन्थोहविर्मन्थः कर्णिका गिरिकर्णिका । जया जयन्ती तर्कारी नादेयी वैजयन्तिका ॥**

अग्निमन्थ, हविर्मन्थ, कर्णिका, गिरिकर्णिका, जया, जयन्ती, तर्कारी, नादेयी र वैजयन्तिका : यी गिनेरीका नाम हुन् ।

**क्षुद्राग्निमन्थो विजया नादेयी चाग्निमन्थिनी । जया च गन्धपत्रा च गन्धपुष्पा कृशानुगा ॥**

क्षुद्राग्निमन्था, विजया, नादेयी, अग्निमन्थिनी, जया, गन्धपत्रा, गन्धपुष्पा र कृशानुगा : यी सानो गिनेरीका नाम हुन् ।

**अग्निमन्थो गुरुस्तिक्तो वातशोफामजित्सरः । (शो.नि.)**

गिनेरी पचाउन कठिन, तीतो तथा वातविकार, सुजन र आमविकारलाई जित्ने एवं मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

**अग्निमन्थो बृहत्प्रोक्तः कटुश्चोष्णोमधुःस्मृतः । तिक्तस्तु तुवरश्चाग्निदीपको वातनाशनः ॥**
**प्रतिश्यायं कफं शोथमर्शश्चैवामवातकम् । मलरोधं चाग्निमान्द्यं पाण्डुरोगं विषं तथा ॥**
**आमं च मदोरोगं च नाशयेदिति कीर्तितम् । (नि.र.)**

ठूलो गिनेरी पिरो, उष्णवीर्यको, गुलियो, तीतो, टर्रो, पाचनशक्ति बढाउने, तथा वातविकार, पिनास, कफविकार, सुजन, अल्काई, आमजन्य वातविकार, कब्जियत, कमजोर पाचनशक्ति, पाण्डुरोग, विषविकार, आमविकार, र नसा नाशगर्ने गुणको हुन्छ ।

**लघ्वग्निमन्थस्य गुणाः प्रोक्ता वृद्धाग्निमन्थवत् ।**
**विशेषाल्लेपने चोपनाहे शोफे च कीर्तिताः ॥ (नि.र.)**

सानो गिनेरीमा पनि ठूलो गिनेरीकै गुण हुन्छ । विशेष गरी यो गिनेरी सुजनमा लेप र मलम दल्न उपयुक्त हुन्छ ।



**तेजोमन्थ गुणाः प्रोक्ताश्चाग्निमन्थसमा बुधैः ।**
**विशेषाद्वातशोफे च प्रोक्ताः पूर्वैश्च सूरिभिः ॥ (नि.र.)**

तेजोमन्थ नामक गिनेरीको गुण पनि गिनेरीको जस्तै हुन्छ । विशेषतः यो वातजन्य सुजनमा हितकर हुन्छ भनी पहिलेका विद्वानले बताएका छन् ।

(त) **सरस्वती निघण्टु :**

**अग्निमन्थो गन्धपत्रः श्रीपर्णी वैजयन्तिका । ज्वलनो गन्धमूलश्च कणिका गणिकारिका ॥**

अग्निमन्थ, गन्धपत्र, श्रीपर्णी, वैजयन्तिका, ज्वलन, गन्धमूल, कणिका र गणिकारिका : यी गिनेरीका नाम हुन् ।

(थ) **सोढल निघण्टु :**

**अग्निमन्थे च तर्कारी श्रीपर्णः कर्णिको जया । विजयारणिकः केतुस्तपनो वैजयन्तिकः ॥**
**तेजोवृक्षस्तनुत्वक् च मन्थश्च गणिकारिका ।**

अग्निमन्थ, तर्कारी, श्रीपर्ण, कर्णिका, जया, विजयारणिक, कुतु, तपन, वैजयन्तिक, तेजोवृक्ष, तनुत्वक्, मन्थ र गणिकारिका : यी गिनेरीका नाम हुन् ।

**द्वितीयेऽरणिवृक्षे तु नादेयी चाग्निमन्थनी ॥ जङ्घा च गन्धपत्रश्च गन्धपुष्पः कृशानुगः ।**

अरणिवृक्ष, नादेयी, अग्निमन्थनी, जङ्घा, गन्धपत्र, गन्धपुष्प र कृशानुग : यी अर्कोथरी गिनेरीका नाम हुन् ।

(द) **सौश्रुत निघण्टु :**

**अग्निमन्थो हविर्मन्थो गन्धपत्रश्च कीर्तितः । बालनो गन्धवृत्तश्च तेजोमन्थश्च शब्दितः ॥**

अग्निमन्थ, हविर्मन्थ, गन्धपत्र तथा बालन, गन्धवृत्त र तेजोमन्थ : यी गिनेरीका नाम हुन् ।

(ध) **हृदयदीपक निघण्टु :**

**गणकारिकाग्निमन्थस्तर्कारी वैजयन्त्यरणी ॥ अन्या जया जयन्ती ...।**

गणकारिका, अग्निमन्थ, तर्कारी, वैजयन्ती र अरणी : यी एकथरी तथा जया र जयन्ती : यी अर्को थरी गिनेरीका नाम हुन् ।

## अग्निरोहिणी रोग
## (A hard inflammatory swelling in the armpit)

(क) **सुश्रुत संहिता :**

**कक्षाभागेषु ये स्फोटा जायन्ते मांसदा(हा)र(रु)णाः ।**
**अन्तर्दाहज्वरकरा दीप्तपावकसन्निभाः ॥**
**सप्ताहाद्वा दशाहाद्वा पक्षाद्वा घ्नन्ति मानवम् । तामग्निरोहिणीं विद्यादसाध्यां सन्निपाततः ॥**

काखी वा काछतिर आउने बलिरहेको आगोजस्तो, भित्र पोल्ने, जरो फुटाउने, मासुलाई चिर्ने वा छियाछिया बनाउने खालको तथा सात वा दश वा पन्ध्र दिनमा मानिसको ज्यान नै लिने खालको सन्निपातजन्य खटिरालाई अग्निरोहिणी भनिन्छ । यो ठिक हुँदैन ।

## काख
(Lap)

**परिभाषा :**

**(क)** **के.यन.स्वामी :** (१) क्रोड : छाती । अँगालो हाल्दा दुवै हातको बीचभाग । काख । (२) अङ्क : काख । कम्मर । घाँटी । (३) उत्सङ्ग : काख । अँगालो ।

**(क)** **नेपाली बृहत् शब्दकोश :**

काख : बसेका अवस्थामा मानिसको कम्मरदेखि घुँडासम्मको अग्रभाग; पलैँटीको माथिल्लो भाग; अङ्क । काखे : अर्काको काखमा मात्र बसिरहन मन गर्ने (बालक) । काखमा राख्न मात्र ठिक्क हुने । कोली : प्रेमी-प्रमिकाको प्रेमालापका प्रसङ्गमा काखलाई बुझाउने शब्द; ठिटा-ठिटीको मायालु काख ।
घुर : काख । चेप : दुई बाहुपाशका बीचको भाग; काख । पालि : काख । हाम्म : ससाना केटाकेटीलाई अँगालो मार्न वा काख लिन बोलाउने गरी । अङ्कमाल; अँगालो । अङ्क : काख । अङ्कधारिणी : काखमा लिने स्त्री । काखमा लिने । अरूको लाख, आमाको काख (उखान) । उपस्थ : काख ।


अङ्कमाल (क्रोड, आलिङ्गन) गरिरहेका युवा-युवती

अँगाल्नु : स्नेह वा आत्मीयता जनाउन कसैलाई दुई हातले च्यापेर छातीमा टाँस्नस; निकटता देखाउन
परस्परमा अँगालो मार्नुञ्ज; अङ्कमाल गर्नु । अँगालो : स्नेह वा आत्मीयता जनाउन कसैलाई दुवै हातले च्यापेर आफ्नो छातीमा टाँस्ने काम; आत्मीयता वा निकटता जनाउन एकले अर्काको वा एक-अर्काको काँधमा हात राख्ने काम; आलिङ्गन; अङ्कमाल; अङ्गालो । अँगालो मार्नु : अङ्कमाल गर्नु, अँगालो हाल्नु ।

**(ख)** **डा. साङ्ग्चधर :** काखलाई अंग्रेजीमा Lap भनिन्छ । (अँगालोलाई अंग्रेजीमा Hug भनिन्छ ।) ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अमरकोश :** अङ्क र पालि भनेको काख पनि हो ।

(ख) **राज निघण्टु :**

**क्रोडमङ्कस्तथोत्सङ्गः प्राग्भागो वपुषः स्मृतः ॥**

क्रोड, अङ्क र उत्सङ्ग : यी शरीरको अगिल्तिरको भाग अर्थात् काख एवं अँगालोका संस्कृत पर्यायवाची नाम हुन् ।



आमाको काख (अङ्क) मा बसिरहेको बालक

# अङ्ग (शरीरका)
# (Organ)

**परिभाषा :**

(क) **नेपाली बृहत् शब्दकोश (अङ्ग) :** शरीरका भिन्न-भिन्न भाग ।

(ख) **अमरकोश :**

**अङ्गं प्रतीकोऽवयवोऽपघनो...**

अङ्ग, प्रतीक, अवयव र अपघन : यी शरीरका अङ्गका नाम हुन् ।

(ग) **राज निघण्टु :**

**अङ्गमंसः प्रतीकश्चापघनोऽवयवोऽपि च॥**

अङ्ग, अंस, प्रतीक, अपघन र अवयव : यी अङ्गका नाम हुन् ।

## अङ्गारककंटी (पारकार विशेष, A dish of bread)

(क) **कैयदेव निघण्टु :**

**सैवाङ्गारेषु सम्पक्वा विज्ञेयाङ्गारकर्कटी ।**

मण्डका(रोटी)लाई आगाको भुङ्ग्रामा हालेर पकाइयो भने त्यसलाई अङ्गारकर्कटी भनिन्छ ।

**अङ्गारमण्डको हृद्यो दीपनो रुचिकारकः । त्रिदोषघ्नो लघुर्ग्राही ज्वरिणां शस्यते परम्॥**

अङ्गारमण्डक (अङ्गारकर्कटी) मुटुका लागि हितकर, दीपनी, रुचिप्रद, त्रिदोष नाशक, पचाउन सहज, ग्राही र जरोका रोगीलाई अति फाइदाजनक हुन्छ ।

**अङ्गारकर्कटी वह्निदीपनी वातला लघुः । बल्या च स्नेहसंयुक्ता घनाघनगुणात्मिका॥**
**गुरुभिर्दुर्जरा ज्ञेया वातश्लेष्मकरा गुरुः ।**

अङ्गारकर्कटीले पाचनशक्ति बढाउँदछ, वातविकार गर्दछ, पचाउन सहज हुन्छ र बल दिन्छ । चिल्लो मिसाइएको र बाक्लो यस्तो रोटी पचाउन कठिन, ढिलो पच्ने तथा वातविकार र कफविकार गर्ने गुणको हुन्छ ।

(क) **भावप्रकाश निघण्टु :** 

**शुष्कगोधूमचूर्णन्तु साम्बु गाढं विमर्दयेत् । विधाय वटकाकारं निर्धूमेऽग्नौ शनैः पचेत्॥**
**अङ्गारकर्कटी ह्येषा बृंहणी शुक्रला लघुः । दीपनी कफकृद्बल्या पीनसश्वासकासजित्॥**

सुक्खा गहुँको पिठोमा पानी हालेर राम्ररी मुछ्नू । अनि बारा जस्ता गोला चक्की बनाएर धुवाँ नआउने आगाको भुङ्ग्रोमा बिस्तार बिस्तार सेक्नू । जब पाक्दछ तब यसलाई अङ्गारकर्कटी भनिन्छ । यो पौष्टिक, शुक्रवर्धक, पचाउन हलुका, पाचकाग्नि वर्धक, कफविकार गर्ने, बलदायक तथा पिनास, दम र खोकी नाशक हुन्छ ।

(ग) **मदनपाल निघण्टु :**

**अङ्गारकर्कटी सैव विज्ञेयाऽङ्गारपाचिता । अत्युष्णो मण्डकः पथ्यः शीतः स गुरुरुच्यते॥**

आगोको भुङ्ग्रामा पकाइएको त्यही मण्डक(रोटी) लाई "अङ्गारकर्कटी" भनिन्छ । यो अति तातो पथ्य हुन्छ र सेलाएपछि पचाउन कठिन हुन्छ ।

**अङ्गारकर्कटीबल्या बृंहणी शुक्रला लघुः । दीपनी कफहृद्रोगपीनसश्वासवातजित्॥**

अङ्गारककर्टी बलदायक, पौष्टिक, वीर्यवर्धक, पचाउन सहज, दीपनी तथा कफविकार, मुटुका रोग, पिनास, दम र वातविकारलाई जित्ने गुणको हुन्छ ।

## अङ्गुलं (औंला, Fingers)

**परिभाषा :**

(क) **नेपाली बृहत् शब्दकोश :** (१) अँगुठो : हात वा खुट्टाको दुई आँख्ला भएको मोटो औंलो; बूढी औंलो; औंठो । अँगुठाको छाप; ल्याप्चे सही । (२) अँजुली : दुई उत्ताना हत्केला जोडी औंलाहरू केही कुप्र्याएर खोची वा बटुकोजस्तो खोबिल्टो पारिएको स्थिति । प्रार्थना गर्दा उपर्युक्त किसिमले दुई हत्केला जोड्दा हुने मुद्रा । अञ्जली; करसम्पुट । (३) अङ्गुठो : बूढी औंलो; औंठो । (४) अङ्गुल : हात वा खुट्टाको औंलो । (५) अङ्गुलि : औंलो । (६) अङ्गुलिनिर्देश : औंलो ठड्याउने काम । औंल्याइ । (७) अङ्गुष्ठ : बूढी औंलो; औंठो । (८) अदुवापाने : गोडाका सबै औंला बूढी औंलातिर र बूढी औंलाचाहिँ भित्रतिर फर्केको (खुट्टा, मान्छे आदि); अदुवाको पानाजस्तो । (९) अनामिका : हातको कान्छी औंलो र माझी औंलाका बीचको औंलो; साहिँली औंलो । (१०) अनाहत : दुईवटा बूढी औंलाले दुवै कानका प्वाल थुनी ध्यान गर्दा सुनिने आवाज । (११) उत्तमाङ्गुल : ठूलो औंला । (१२) एकुवा हिलो : हिउँद-बर्खे औंलाको काप खाइरहने हिले रोग । (१३) औंठा : औंठो । (१४) औंठाछाप : कुनै लेनदेन वा कारोबार गर्दा प्रमाणस्वरूप लेखिएको कागतपत्रमा लगाइने हातका बूढी औंलाको ल्याप्चे; सहीछाप । सो सहीछाप लगाउन मोसो वा मसी धसी बूढी औंलाले कागतमा थिच्ने कार्य । (१५) औंठो : हात वा गोडाको सबभन्दा मोटो औंलो; बूढी औंलो; अँगुठो । अँगुठाको छाप; ल्याप्चे; सही । (१६) औंला : प्रत्येक हात वा गोडाको अगिल्लो भागमा नङ वा नङ्ग्रासहितका पाँच डोला अङ्गमध्ये कुनै एक; औंलो । (१७) औंल्याइ : औंल्याउने किसिम, क्रिया वा भाव । (१८) औंल्याइनु : औंलाले देखाइनु । (१९) औंल्याउनु : कुनै व्यक्ति, वस्तु वा ठाउँ आदिलाई औंलो तेर्स्याएर देखाउनु; औंलाले तोकेर निर्देशन गर्नु; औंलाले देखाउनु; अङ्गुलीनिर्देश गर्नु । (२०) कनिष्ठिका : कान्छी औंलो; कान्छी औंली । (२१) कर्णिका : माझी औंलो । (२२) खटखटाउनु : ढोकामा औंलाले हिर्काउनु । (२३) चक्र : हातका औंलाको नङको उल्टापट्टि देखिने घुमुर्किएको रेखा । (२४) चङ्गुल : कुनै वस्तु उठाउँदा बन्ने औंलाको पक्षीहरूको पन्जा जस्तो आकार वा स्थिति । (२५) चाप : अपराधीलाई कायल पार्न प्रायः औंला च्याप्ने काठको साधन । (२६) चिप्प : औंलाका नङको कुनो दुख्ने वा पाक्ने एक रोग । नङशूल । (२७) चुट्की : बूढी औंला र माझी औंला जोडी पड्काएर निकालिने आवाज; चुड्की । (२८) चोरऔंले : चोरका जस्ता औंला भएको; चोर्ने औंला भएको । चोर औंला मात्र भएको । (२९) चोर औंलो : औंलो । बूढी औंलो र माझी औंलाका बीचको औंलो; तर्जनी । (३०) छुसी : औंलाका बाहिरपट्टि प्रत्येक खण्डमा उम्रिने रौं । (३१) जम्ला हात : देवताप्रति भक्ति र मान्य जनप्रति निवेदन गर्दा वा बिन्ती बिसाउँदा दसै औंला जोडेर गरिने प्रणाम; ढोग; करजोरी बिन्ती । (३२) ज्ञानमुद्रा : तन्त्रशास्त्रका अनुसार दाहिने हातको चोर औंला र बूढी औंलाको टुप्पो जोडी देखाइने मुद्रा । (३३) टोप्रो : औंलाको टुप्पो । (३४) ट्याप : औंलाले छाप लगाउने काम । (३५) ठुङ : हातका दुवै बूढी औंलाका नङ जोरेर मुख मिलाउँदा हुने चुच्चे आकार; त्यस्तो आकार पारेर कपाल आदिमा थिच्ने काम; ठुँग । (३६) ठुङमार्नु : बूढी औंलाका नङ जोरेर कपालको जरामा थिच्नु र पड्काउनु; लिखा आदि मार्नु । (३७) ठुङाइ : ठुङ्ने भाव, क्रिया वा प्रक्रिया । (३८) ठुङाइनु : ठुङ्न लाइनु । ठुङाउनु : ठुङ्न लाउनु । (३९) तरी : औंलामा दुई आँख्लाले छुट्टयाइएको अंश । (४०) तर्जनी : बूढीऔंलानेरको औंलो; चोरऔंलो । (४१) दशनङ्गी : हातका दसैवटा नङ्ग्राको समूह । (४२) दीधिति : औंलो; अङ्गुलि । (४३) देवतीर्थ : अँजुली पार्दा देखिने औंलाका टुप्पाका भाग; औंलाका टुप्पा । (४४) पटचाक्क : औंला पड्काउँदा एक्कासि शब्द गर्ने किसिमसँग । (४५) पन्जा : हात वा गोडाका पाँच औंलाको समूह । (४६) पन्जाछाप : पाँच औंलाको सामूहिक छाप । (४७) पर्व : औंलाका जोर्नीले

छुट्टयाइएको खण्ड । (४८) पर्वास्फोट : औंला पड्काउने क्रिया । (४९) पसर : औंलाहरू र हत्केलालाई कुप्र्याएर दुनो झैं बनाउँदाको खोबिल्टो । (५०) पाँचअङ्गुले : पाँचवटा औंला हुने । (५१) पितृतीर्थ : चोर औंला र बूढी औंलाका बीचको हत्केलाको छेउ भाग । (५२) प्राञ्जलि वा प्राञ्जली : दुई हातका दसै औंला जोडेको; अञ्जलि बाँधेको; बद्धाञ्जलि । अँजुली; दुई हातको खोचो; अञ्जलि । (५३) प्रादेश : फैलिएका बूढी औंलाका टुप्पादेखि चोर औंलाका टुप्पासम्मको नापो । (५४) फटक्क : कुनै वस्तु निफन्दा औंलाले नाङ्लाका पछाडि हानेको शब्द आउने गरेर । (५५) बित्ता : पन्जा फैलाउँदा बूढीऔंलाको टुप्पादेखि कान्छीऔंलाको टुप्पासम्मको लमाइ; एक हातको आधा भाग । एक बित्ताजति । (५६) बित्ते : एक बित्ता नापोको; एक बित्ता लामो; बित्ताभरिको । (५७) बिवाई : खुट्टाका औंलामनिको छाला फाट्ने वा पैतला, कुर्कुच्चा आदि फुट्ने एक रोग; हर्नाठ । (५८) बुढीऔंलो : हात वा गोडाको सबैभन्दा छोटोमोटो र जेठो औंलो । (५९) बुढीगाँठो : हातगोडाका बूढी औंलामा हुने गाँठो । (६०) भाग्यरेखा : हस्तरेखाअनुसार मान्छेका हत्केलामा रहेको, मणिबन्धदेखि सीधै माझी औंला र साँहिली औंलाका बीचतिर गएको रेखा; भाग्यसूचक ठाडो रेखा । (६१) मध्यमा : हात वा खुट्टाका पाँच औंलामध्ये बीचको औंलो; माझी औंलो । (६२) मध्या : हात वा गोडाका सबैभन्दा लामो औंला; माझीऔंला । (६३) माझीऔंलो : चोरऔंलो र साहिली औंलाका बीचको औंलो । (६४) मुठी : हातका औंलाहरू मोडेर हत्केलामा दबाउँदा बन्ने आकार र त्यसभित्रको रित्तो ठाउँ । मुड्की; मुक्का । (६५) मुठीएक : एक मुठीजति । (६६) मुठीभर : मुठीमा आए वा अटाएजति; एक मुठीबराबर । (६७) मुठीहात : मोडिएका हातको कुहुनादेखि मुठीसम्मको नाप; मुढीहात । (६८) मुठ्ठी : मुठी । (६९) मुठ्ठीभर : मुठीभर । (७०) मुठ्याइनु : मुठीले समाइनु वा लिइनु । (७१) मुठ्याउनु : कुनै चीज मुठीमा अटाएसम्म लिनु; हातले सकेसम्म झिक्नु । मुठीमा लिनु; मुठीले बेसरी समाउनु वा निकाल्नु । (७२) योनिमुद्रा : औंलाहरूबाट योनिको आकार बनाइने एक तान्त्रिक मुद्रा ।

(७३) रेखात्मक सही : हातका बूढीऔंलाको छाप; औंठाछाप । (७४) शङ्ख : औंलाका टुप्पामा हुने एकातिर बगेर गएजस्तो आकृतिको रेखात्मक चिनु । (७५) शङ्खचक्र : औंलाका टुप्पामा हुने शङ्ख वा पाङ्ग्राजस्तो रेखात्मक चिह्न । (७६) सार्कीखटिरो : प्रायः हातका औंलाका जोर्नी भएका ठाउँमा निस्कने पानी भरिएर डहाउने एक घातक खटिरो । (७७) साहिँली औंलो : माझी औंलो र कान्छी औंलाका बीचको औंलो; अनामिका । (७८) हँगे : बढी औंलो पलाएको (व्यक्ति) ।

**(ख) डा.सतिश चन्द्र साङ्ख्चधर :**

अंग्रेजीमा औंलालाई Finger, बूढी औंलालाई Thumb, चोरी औंलालाई Index Finger, माझी औंलालाई Middle finger, साहिँली औंलालाई Ring finger, कान्छी औंलालाई Small finger र औंलाका आँख्लीलाई Joints of fingers भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अमरकोश :**

**...तर्जनी स्यात्प्रदेशिनी । अङ्गुल्यः करशाखाः स्युः पुंस्यङ्गुष्ठः प्रदेशिनी ।**
**मध्यमाऽनामिका चापि कनिष्ठा चेति ताः क्रमात्॥**

तर्जनी र प्रदेशिनी (प्रदेशनी) : यी चोर औँलाका नाम हुन् । अङ्गुली (अङ्गुलि) र करशाखा : यी औँलाका नाम हुन् । अङ्गुष्ठ, प्रदेशिनी, मध्यमा, अनामिका र कनिष्ठा : यी बूढी औँलादेखि क्रमैले पाँच औँलाका नाम हुन् ।




**अङ्गुल्यग्रे तीर्थं दैवं स्वल्पाङ्गुल्योर्मूले कायम् । मध्येऽङ्गुष्ठाङ्गुल्योः पित्र्यं मूले त्वङ्गुष्ठस्य ब्राह्मम् ॥**



औँलाको टुप्पातिरको अर्थात् अग्रभागलाई दैवतीर्थ, कान्छी र साहिँली औँलाको फेदनेरको स्थानलाई कायतीर्थ वा प्राजापत्यतीर्थ; चोर औँलो र बूढी औँलाका माझको स्थानलाई पित्र्यतीर्थ, पितृतीर्थ, पैत्र्य वा पैत्र तथा बूढी औँलाको फेदको स्थानलाई ब्रह्मतीर्थ भनिन्छ ।

## (ख) राज निघण्टु :

**अङ्गुल्यः करशाखाः स्युः प्रदेशिन्यां तु तर्जनी । परुः स्यादङ्गुलीसन्धिः पर्वसन्धिश्च कथ्यते ॥**

अङ्गुली र करशाखा : यी औँलाका संस्कृत पर्यायवाची नामहरू हुन् । प्रदेशिनी र तर्जनी : यी चोर औँलाका संस्कृत पर्यायवाची नामहरू हुन् । परु, अङ्गुलीसन्धि र पर्वसन्धि : यी औँलाका आँख्लीको जोर्नीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**अथाङ्गुष्ठप्रदेशिन्यौ मध्यमाऽनामिका तथा । कनिष्ठा चेति पञ्च स्युः क्रमेणाङ्गुलयः स्मृताः ॥**

अङ्गुष्ठ बूढी औँलाको, प्रदेशिनी चोर औँलाको, मध्यमा माझीऔँलाको, अनामिका साहिँली औँलाको तथा कनिष्ठा कान्छी औँलाको संस्कृत नाम हो । यी नाम क्रमैले हातका औँलाहरूका नाम हुन् ।

## अजका (आँखाको रोगविशेष)
## (A disease of the pupil of the eye)

**(क) अष्टाङ्ग हृदय :**

**आताम्रपिच्छिलास्रस्रुदाताम्रपिटिकातिरुक् ।**
**अजाविट्सदृशोच्छायकार्ष्ण्यौ वर्ज्याऽसृजाऽजका ॥**

रक्तविकारका कारण आँखामा हुने बाख्राको बड्कौंलो जत्रो, कालो, रातो र लेस्याइलो पानी (आँशु) बहिरहने, रातो हुने र असाध्यै दुख्ने पिलो वा सुजनलाई 'अजका' भनिन्छ ।

**(ख) भावप्रकाश संहिता :**

**अजापुरीषप्रतिमो रुजावान् सलोहितो लोहितपिच्छिलाश्रुः ।**
**विगृह्य कृष्णं प्रचयोऽभ्युपैति तं चाजकाजातमिति व्यवस्येत् ॥**
**यः प्रचय उच्छ्रायः स च मेदसो बोद्धव्यो यतएतस्य उत्पत्तिर्विदेहेन तृतीयपटले कथितः ॥**

बाख्राको बड्कौंला जत्रो, पिडादायक, केही कालो र रातो, चिल्लो, आँशु निकालिरहने, मोटो हुँदै (सुन्निदै) आँखाको पूरै कालो भागमा उठेर ढाक्ने रोगलाई 'अजकाजात' भनिन्छ । यस्तो उठाइ भित्री बोसोका कारण हुने गर्दछ भनी थाहा पाउनू । किन कि विदेहले यो उठाइको शुरुवात आँखाको तेश्रो पटलबाट हुन्छ भनी बताएका छन् ।

## अजगन्धा
Dog Mustard

**परिभाषा :**

(क) के.यन.स्वामीको बृहत् संस्कृत नेपाली अनलाइन शब्दकोश : (१) अजगन्धा : अजमोदा । (२) बस्तगन्धा : अजमोदा । पुदिना । बाबरी । (३) विगन्धिका : सिजर । देशी भ्मौवा । पुदिना । बाबरी । (४) उग्रगन्धा : अजमोदा । ज्वानो । पुदिना । बोभ्को । सेती काठ । बाबरी । (५) ब्रह्मगर्भा, पूतिमयूरिका : पुदिना । बाबरी । (६) ब्राह्मी : घोडताप्रे ।

(ख) राजनिघण्टुका अंग्रेजी अनुवादक डा.सतिश चन्द्र साङ्ख्यधर : अजगन्धालाई कसैले *Cleome viscosa* Linn.(हुहुरे) कसैले *Gynandropsis gynendra* (Linn.), कसैले *Gynandropsis pentaphylla* त कसैले *Saussurea gossipifolia* Don ल्याटिन नाम दिएको पाइन्छ ।



(ग) नेपाली बृहत् शब्दकोश (अजगन्धा) : भ्मण्डै बनमाराजस्तो एक भ्मार; बोकेभ्मार ।

(घ) शब्दकल्पद्रुम (अजगन्धा) : अजस्य गन्धवत् गन्धो यस्या सा, वनयवानी अर्थात् अजगन्धा बोको गनाए जसरी गनाउने बनज्वानो हो भनेको छ ।

(ङ) वाचस्पत्यम् : बोको गनाए जस्तै गनाउने बनज्वानो, अजमोदा ।

(च) अष्टाङ्ग हृदय कोष : कोकोजस्तै गनाउने बुट्यान विशेष । टीकाकार जी.श्रीनिवास मूर्तिः अंग्रजीमा यसलाई Caravalla तथा ल्याटिन भाषामा *Gynandropsis pentaphylla* भनिन्छ । यसलाई कसैले बनतुलसी, कसैले ज्वानु भनेका छन् ।

(छ) धन्वन्तरि निघण्टुका टीकाकार डा.यस.डी.कामत : आंहले या पहेँलो र सेतो गरी दुई थरी पाइन्छ । पहेँलोको वानस्पतिक नाम *Polanisia icosandra* (Linn.) W & A हो । यसको पर्याय एवं आधुनिक वानस्पतिक नाम *Cleome viscosa* Linn. वा *Cleome icosandra* (Linn.) हो । सेतोको वानस्पतिक नाम *Gynandropsis gynandra* Linn. Briquet पर्याय वा आधुनिक वानस्पतिक नाम *G.pentaphylla* DC., *Cleome pentayhalla* linn. वा *Cleome gynandra* Linn. हो ।

(ज) भारत सरकारबाट प्रकाशित द आयुर्वेदिक फर्माकोपिया अफ इण्डिया, भोलम १ : अजमोदाको वानस्पतिक नाम *Cleome gynandra* Linn. Syn. *Gynandropsis gynandra* (Linn.) हो । यो Capparidaceae परिवारमा पर्दछ । यसलाई अंग्रेजीमा Dog Mustard तथा हिन्दीमा हुलहुल, हुरहुर वा कावलिया भनिन्छ । यसको गेडाको धुलो १-३ ग्रामसम्म खोखतीमा प्रयोग गरिन्छ ।

आयुर्वेदमा अजमोदा, बाबरी, घोडतापे्र, ज्वानु आदिको बेग्लै चर्चा गरिएको पाइन्छ । यसैले अजगन्धालाई त्यस अर्थमा प्रयोग गर्नु उपयुक्त देखिएन । बोकेझारको वानस्पतिक नाम यिभन्दा बेग्लै अर्थात् *Leucas aspera* (Willd.) Linn. भनी दिइएको छ । नेपाल सरकारबाट ई.सं.२०१९ मा प्रकाशित जर्नल अफ प्लाण्ट रिसर्सेजमा *Cleome viscosa* Linn. को नेपाली नाम हुहुरे भनी दिइएको छ । तर आयुर्वेदका ग्रन्थमा हुहुरेको बेग्लै परिचय दिइएको छ । यसैले अजगन्धालाई हुहुरे मान्नु पनि उपयुक्त देखिँदैन । यी कारणहरूले गर्दा अजगन्धा भनेको यही नै वनस्पति हो भनी ठोकुवा गर्नसक्ने अवस्था अझसम्म बनिसकेको पाइएन । बोकाको जस्तो गन्ध आउने झारको लागि दिइएका अन्य पर्यायवाची शब्दहरूको समेत सहयोग लिई विवादरहित ढङ्गले पहिचान गर्न बाँकीरहेको देखिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**पशुगन्धा खरपुष्पा बर्बुरिका बर्बुराजगन्धाख्या ।**
**उदकी च कृष्णगन्धा पूत्याह्वा पूति(ग)न्धा च॥**
**शृङ्गी मेध्या कर्बुराशी पूतीकीटस्तृषापहः । श्वानबर्बुरिका पूतिमसूरा प्रोच्यते बुधैः॥**

पशुगन्धा, खरपुष्पा, बर्बुरिका, बर्बुराजगन्धा, उदकी, कृष्णगन्धा, पूत्याह्वा, पूतिगन्धा, शृङ्गी, मेध्या, कर्बुराशी, पूतीकीट, तृषापह, श्वानबर्बुरिका र पूतिमसूरा : यी अजगन्धाका नाम हुन् ।

**(क) कैयदेव निघण्टु :**

**पशुगन्धा वस्तगन्धा बर्बरः पूतिबर्बरः । अजगन्धा पूतिकीट खरपुष्पा शाकम्भरा॥**
**अजगन्धा कटुः पाके रसे रूक्षाग्निदीपनी । हृद्या रुच्या लघुस्तीक्ष्णा दृक्शुक्रकफवातहा॥**

पशुगन्धा, वस्तगन्धा, बबर, पूंतबबर, अजगन्धा, पूंतकांट, खरपुष्पा र शकम्भरा : यां अजगन्धाका नाम हुन् । यो शुरुमा र पचेपछि पिरो, रुखो, पाचनशक्ति बढाउने, मुटुका लागि हितकर, रुचिप्रद, पटाउन सहज, तिक्खर तथा दृष्टिक्षमता, शुक्र, कफविकार र वातविकार नाशगर्ने गुणको हुन्छ ।

(ग) **धन्वन्तरि निघण्टु :**

**अजगन्धा खरपुष्पा बस्तगन्धा विगन्धिका । कारवी बर्बरा गन्धा तुङ्गी पूतिमयूरिका॥**
**अजगन्धा वातहरा वीर्योष्णा तु ज्वरापहा । गुल्माष्ठीलाकफानाहशूलजिद्वह्निकृत्परा॥**

अजगन्धा, खरपुष्पा, बस्तगन्धा, विगन्धिका, कारवी, बर्बरा, गन्धा, तुङ्गी र पूतिमयूरिका : यी अजगन्धाका नाम हुन् । यो वातविकार नाशक, उष्णवीर्यको, जरो नाशक, तथा गुल्म, अष्ठीला, कफविकार, आनाह र शूल रोगलाई जित्ने गुणको हुन्छ । यसले धेरै नै पाचनशक्ति बढाउँदछ ।

(घ) **निघण्टुशेष :**

**बस्तगन्धायां सुगन्धा खरपुष्पी शकम्भरा । कबरी बर्बरी तुङ्गी पूतिमयूर इत्यपि॥**

बस्तगन्धा, सुगन्धा, खरपुष्पी, शकम्भरा, कबरी, बर्बरी, तुङ्गी र पूतिमयूर : यी अजगन्धाका नाम हुन् ।

**बस्तस्येव गन्धोऽस्या सुगन्धा बस्तगन्धा, तस्याम् ।** बोको वा बाख्रो जस्तो गनाउँदछ त्यसैले यसलाई बस्तगन्धा भनिन्छ । **शोभनो गन्धोऽस्याः सुगन्धा , अभ्रादित्वादः; (सुष्ठु) गन्धयति वा** । तिक्खर वा धेरै गन्ध आउँदछ त्यसैले यसलाई सुगन्धा भनिन्छ । **खराणि पुष्पाण्यस्याः खरपुष्पी** । कठोर खालका फूल हुन्छन् त्यसैले यसलाई खरपुष्पी भनिन्छ । **शकं भरति शकम्भरा ।** सागले भरिएको हुन्छ वा शाक देशमा प्रशस्त हुन्छ त्यसैले यसलाई शकम्भरा भनिन्छ । (गोबर मिसिएको पदार्थलाई शकम्भर भनिन्छ । यसको स्पष्ट अर्थ जान्न सकिएन ।) **कूयते कबरी, कवरीव वा** । आईमाईले बाट्ने कपालको चुल्ठो वा जिम्बु वा बाबरीलाई कवरी भनिन्छ । (यो बूटीको कुन भाग केसँग तुलना गर्न खोजिएको हो ठम्याउन सकिएन) । **अत एव बर्बरी-कुटिल-ह्रस्वकेशाभा ।** छोटो कपाल बेरिए जसरी बेरिएको हुन्छ त्यसैले यसलाई बर्बरी भनिन्छ (?) । **"तमुच् काङ्क्षायाम्" ताम्यति तुङ्गी** । (?) । **पूतिश्चासौ मयूरश्च पूतिमयूरः** । मयूर जस्तो गन्ध आउँदछ त्यसैले यसलाई मूतिमयूर भनिन्छ । **एतस्या लोके "जहारि" इति प्रसिद्धिः** । मानिसहरू यसलाई "जहारि" भन्दछन् (?) ।

(ङ) **पर्याय रत्नमाला :**

**वोथालिकाऽजगन्धा च ।**

अजगन्धालाई वोथालिका पनि भनिन्छ ।

(च) **मदनादि निघण्टु :**

**अजगन्धा पशुगन्धा पशुगन्धा स बर्बरः । कबरी सर्वरी गन्धा तुङ्गी पूतिमयुरका॥**

अजगन्धा, पशुगन्धा, बर्बर, कबरी, सर्वरी, गन्धा, तुङ्गी र पूतिमयूरका : यी अजगन्धाका नाम हुन् ।

## (छ) राज निघण्टु :

**अजगन्धा बस्तगन्धा सुरपुष्पी विगन्धिका । उग्रगन्धा ब्रह्मगर्भा ब्राह्मी पूतिमयूरिका ॥**
**अजगन्धा कटूष्णा स्याद्वातगुल्मोदरापहा । कर्णव्रणार्तिशूलघ्नी पीता चेदञ्जने हिता ॥**

अजगन्धा, बस्तगन्धा, सुरपुष्पी, विगन्धिका, उग्रगन्धा, ब्रह्मगर्भा, ब्राह्मी र पूतिमयूरिका : यी नाम अजगन्धाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा वातविकार, गुल्म र पेटका




रोग नाशक हुन्छ । यसले कानको दुखाई र घाउखटिराको दुखाई नाश गर्दछ । पहेँलो अजगन्धा गाजल बनाउनका लागि हितकर हुन्छ ।

## (ज) सोढल निघण्टु :

**कारव्यां बर्बरी गन्धा तुङ्गी पूतिमयूरिका । अजगन्धा खरपुष्पा बस्तगन्धा विगन्धिका ॥**

कारवी, बर्बरी, गन्धा, तुङ्गी, पूतिमयूरिका, अजगन्धा, खरपुष्पा, बस्तगन्धा र विगन्धिका : यी अजगन्धाका नाम हुन् ।

## अजगाल्लिका रोग
## (An infantile disease)

**(क) सुश्रुत संहिता :**

**स्निग्धा सवर्णा ग्रथिता नीरुजा मुद्गसन्निभा । कफवातोत्थिता ज्ञेया बालानामजगल्लिका ॥**

चिल्लो, छालाकै रङको, गाँठो भएको, नदुख्ने, मुगीको गेडाजत्रो तथा कफविकार र वातविकारका कारण बालकका शरीरमा आउने पिलोलाई अजगल्लिका भनी थाहा पाउनु पर्दछ ।

# अजमोदा
Celery fruit

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा गौतम : अजमोदा र उग्रगन्था ज्वानुका भेद (जात) विशेषका नाम हुन् ।

(ख) नेपाली बृहद् शब्दकोश (अजमोदा) : धनियाँका छाँटको पात हुने, मसिना झुप्पाकार फूल फुल्ने, ज्वानुजस्तै फल हुने एक झार, जङ्गली ज्वानु ।

(ग) डा. चुनेकर : यसलाई अंग्रेजीमा Celery fruit (सेलरी फ्रुट) वा Apii fructus (अपि फ्रक्टस्) तथा ल्याटिन भाषामा *Apium graveolens,* Linn. (अपायम ग्रेभोलन्स लिन) भनिन्छ ।

(घ) आचार्य बालकृष्ण : यसको वानस्पतिक नाम *Carum roxburghianum* (क्यारम रक्सबर्जियनम) पनि हो ।



अजमोदा (तस्विर श्रोत : आचार्य बालकृष्ण)

(ङ) डा.साङ्गधर : यसको वानस्पतिक नाम *Carum roxburghianum* Benth ex Kurz. (क्यारम रक्सबर्जियनम बेन्थ् एक्स कुर्ज) वा *Trachyspermum roxburghianum* (DC.) (ट्र्याकिस्परमम रक्सबर्जियनम डी सी) हो ।

(च) एस डी कामत : यो Umbelliferae (अम्बेलिफिरी) वा Apiaceae (इपिएसी) परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Trachyspermum roxburghianum* (DC.) Sprague. (ट्र्याकिस्परमम रक्सबर्जियनम डी सी स्प्राग); *Carum robxburghianum* Benth. & Hook. f. (क्यारम रक्सबर्जियनम बेन्थ् एण्ड हूक यफ); *Apium involucratum* Roxb. (आइपायम इन्भोलुक्रेटम रक्स्ब); *Pimpinella involucratum* W.& A. (पिम्पिनेला इन्भोलुक्रेटम डब्लु एण्ड ए); *Ptychotis roxburghiana* DC. (टाइकोटिस रक्सबर्जिययाना डीसी); *T.roxburghianum* (DC.) Wolff. (ट्र्याकिस्परमम रक्सबर्जियनम डी सी वल्फ) वा *Carum roxburghiamum* Linn. (क्यारम रक्सबर्जियनम लिन) हो ।

(छ) शालिग्राम वैश्य : यसको अंग्रेजी नाम Celery seed (सेलरी फ्रुट) तथा ल्याटिन नाम *Apium Graveolens.* (अपायम ग्रेभोलन्स) हो ।

(ज) द आयुर्वेदिक फर्माकोपिया अफ इण्डिया, भोलम १ : यसको वानस्पतिक नाम *Apium leptophyllum* (Pers.) F.V.M.ex Benth. (अपायम लेप्टोफिलम पर्स यफ भी यम एक्स बेन्थ्) हो । यो Umbelliferae (अम्बेलिफिरी) परिवारमा पर्दछ ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अभिधान मञ्जरी :**

**अजमोजो मोजः स्यान्मर्कटदीप्यश्च दीप्यकः कोलः ।**
**हस्तिमयूरश्च खरः कारव्याख्योऽम्लमोदोत्थः ॥**

अजमोजा, मोज, मर्कट, दीप्य, दीप्यक, कोल, हस्तिमयूर, खर, कारवी र अम्लमोदा : यी अजमोदाका नाम हुन् ।

(ख) **अभिधान रत्नमाला :**

**अजमोदा खराह्वा च यवानी दीप्यकश्च सः ।**

अजमोदा, खराह्वा, यवानी र दीप्यक : यी अजमोदाका नाम हुन् ।

(ग) **अमरकोश :**

**अजमोदा तूग्रगन्धा...।** 

अजमोदा र उग्रगन्धा : यी ज्वानोका भेदका नाम हुन् ।

(ग) **अर्कप्रकाश :**

**अजमोदोद्भवो वातकफहा बस्तिशोधनः॥**

अजमोदाको अर्कले वातविकार र कफविकार नाश गर्नुका साथै बस्ति (नाइटोभन्दा मुनि देखि गुप्ताङ्गभन्दा माथिसम्मको भाग) लाई सफा पार्दछ ।

(घ) **अष्टाङ्ग निघण्टु :**

**अजमोदा खराह्वा च बस्तमोदा च मर्कटी॥**

अजमोदा, खराह्वा, बस्तमोदा र मर्कटी : यी अजमोदाका नाम हुन् ।

(ङ) **कैयदेव निघण्टु :**

**अजमोदा बस्तमोदा मोदा हस्तिमयूरकः । उग्रगन्धा हृद्यगन्धा खराह्वा लोचमर्कटः॥**
**यवानी दीप्यको वल्ली कारवी कृमिनाशिनी । अजमोदा कटुस्तिक्ता कटुपाका विदाहिनी॥**
**दीपनी पाचनी रूक्षा वीर्योष्णा कफवातहा । लघुस्तिक्ता बद्धविट्का हृद्या वृष्या विनाशयेत्॥**
**नेत्ररोगारुचिच्छर्दिहिध्माध्मावस्तिरुक्कृमीन् ।**

अजमोदा, बस्तमोदा, मोदा, हस्तिमयूरक, उग्रगन्धा, हृद्यगन्धा, खराह्वा, लोचमर्कट, यवानी, दीप्यक, वल्ली, कारवी र कृमिनाशिनी : यी अजमोदाका नाम हुन् । यो पिरो, तीतो, पचेपछि पिरो, डाह गर्ने, दीपनी, पाचनी, रुखो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशगर्ने गुणको हुन्छ । यो पचाउन सहज, तीतो, दिसा कस्ने, मुटुका लागि हितकर, वीर्यवर्धक तथा आँखाका रोग, अरुचि, वाकवाकी, बाडुली, आध्मान, मूत्राशय वा तल्लो पेटका रोग र कीरा नाशक हुन्छ ।

**(च) धन्वन्तरि निघण्टु :**

**अजमोदा बस्तमोदा दीप्यको लोचमर्कटः । खराह्वा कारवी वल्लीर्मोदा हस्तिमयूरकः ॥**
**अजमोदा च शूलघ्नी तिक्तोष्णा कफवातजित् । हिक्काध्मानारुचिर्हन्ति कृमिजिद्वह्निदीपनी ॥**

अजमोदा, बस्तमोदा, दीप्यक, लोचमर्कट, खराह्वा, कारवी, वल्ली, मोदा र हस्तिमयूरक : यी अजमोदाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शूल नाश गर्दछ । यो तीतो र उष्णवीर्यको हुन्छ । यसले कफविकार र वातविकारलाई जित्दछ । अजमोदाले बाडुली रोग, आध्मान र अरुचि नाश गर्दछ । यसले कीरालाई जित्दछ र पाचनशक्ति बढाउँदछ ।

**(छ) निघण्टुशेष :**

**अजमोदायां तु मोचा मयूरो लोचमस्तकः । खराश्वा कारवी बस्तगन्धा हस्तिमयूरकः ॥**
**दीप्यो वल्ली ब्रह्मदर्भो लोचमर्कट इत्यपि ।**

अजमोदा, मोचा मयूर, लोचमस्तक, खराश्वा, कारवी, बस्तगन्धा, हस्तिमयूरक, दीप्य, वल्ली, ब्रह्मदर्भा र लोचमर्कट : यी अजमोदाका नाम हुन् ।

**(ज) पर्याय रत्नमाला :**

**अजगन्धाजमोदाख्या खराश्वा कारवी च सा ॥**

अजगन्धा, अजमोदा, खराश्वा र कारवी : यी अजमोदाका नाम हुन् ।

**(झ) भावप्रकाश निघण्टु :**

**अजमोदा खराश्वा च मायूरो दीप्यकस्तथा । तथा ब्रह्मकुशा प्रोक्ता कारवी लोचमस्तका ॥**
**अजमोदा कटुस्तीक्ष्णा दीपनी कफवातनुत् । उष्णा विदाहिनी हृद्या वृष्या बलकरी लघुः ॥**
**नेत्रामय कफच्छर्दिहिक्कावस्तिरुजो हरेत् ।**

अजमोदा, खराश्वा, मायूर, दीप्यक, ब्रह्मकुशा, कारवी र लोचमस्तका-यी जङ्गली ज्वानुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको परपर्‍याउने र तिक्खर स्वाद हुन्छ । यसले पाचकाग्नीलाई सक्रिय बनाउँदछ, कफजन्य र वायुजन्य रोगलाई नष्ट गर्दछ । यसले शरीरमा गर्मी बढाउँदछ र पित्तलाई बढाउँदछ (विदाहकारक) । यो मुटुका लागि लाभदायक, वीर्यवर्द्धक, बलकारक र पचाउन सजिलो हुन्छ । आँखासम्बन्धी रोग, कफ, बमन, बाडुली र तल्लोपेटकाका रोगहरु यसले नष्ट गर्दछ । (नेपाली बृहद् शब्दकोशले अजमोदाको अर्थ धनियाँका छाँटको पात हुने, मसिना झुप्पाकार फूल फुल्ने, ज्वानुजस्तै फल हुने एक झार, जङ्गली ज्वानु भनी दिएको छ ।)

(ञ) **मदनपाल निघण्टु :**

**अजमोदाऽत्युग्रगन्धा मोदा हस्तिमयूरकः । खराह्वा कारवी वल्ली बस्तमोदा च मर्कटः ॥**
**अजमोदा कटुस्तीक्ष्णा दीपनी कफवातनुत् । उष्णा विदाहिनी हृद्या वृष्या बद्धमला लघुः ॥**
**नेत्रामयक्रिमिच्छर्दिसिध्मवस्तिरुजो जयेत् ॥**

अजमोदा, अत्युग्रगन्धा, मोदा, हस्तिमयूरक, खराह्वा, कारवी, वल्ली, बस्तमोदा र मर्कट : यी अजमोदाका संस्कृत पर्यायवाची नामहरू हुन् । अजमोदा पिरो, तिक्खर र दीपनी हुन्छ । यसले कफविकार र वातविकार नाश गर्दछ । यो गर्मी गर्ने, विदाही, मुटुका लागि हितकर, वीर्यवर्धक, दिसा कस्ने र पचाउन सहज हुने गुणको हुन्छ । यसले आँखाका रोग, कीरा, वाकवाकी, दुबी र तल्लो पेटका रोगमाथि विजय प्राप्त गर्दछ ।

(ट) **मदनादि निघण्टु :**

**अजमोदा बस्तमोदा दीप्यकोऽथ यवानिका । उग्रगन्धा हृद्यगन्धा मोदो हस्तिमयूरकः ॥**
**रसे पाके च कटुको वीर्योष्णः कफवातजित् । दीपनः पाचनः शूलकृमिघ्नः स्त्वजमोदकः ॥**

अजमोदा, बस्तमोदा, दीप्यका, यवानिका, उग्रगन्धा, हृद्यगन्धा, मोदा र हस्तिमयूरक : यी अजमोदाका नाम हुन् । यो शुरुमा र पचेपछि पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकार जित्ने गुणको हुन्छ । अजमोदा दीपनी, पाचनी तथा शूल र कीरा नाशक हुन्छ ।



(ठ) **राज निघण्टु :**

**अजमोदा खराह्वा च बस्तमोदा च मर्कटी । मोदा गन्धदला हस्तिकारवी गन्धपत्रिका ॥**
**मायूरी शिखिमोदा च मोदाढ्या वह्निदीपिका । ब्रह्मकोशी विशाली च हृद्यगन्धोग्रगन्धिका ॥**
**मोदिनी फलमुख्या च वसुचन्द्राभिधा मता ॥**
**अजमोदा कटुरुष्णा रूक्षा कफवातहारिणी रुचिकृत् । शूलाध्मानारोचकजठरामयनाशनी चैव ॥**

(१) अजमोदा, (२) खराह्वा, (३) बस्तमोदा, (४) मर्कटी, (५) मोदा, (६) गन्धदला, (७) हस्तिकारवी, (८) गन्धपत्रिका, (९) मायूरी, (१०) शिखिमोदा, (११) मोदाढ्या, (१२) वह्निदीपिका, (१३) ब्रह्मकोशी, (१४) विशाली, (१५) हृद्यगन्धा, (१६) उग्रगन्धिका, (१७) मोदिनी र (१८) फलमुख्या : यी अठार ( वसुचन्द्राभिधा) नाम अजमोदाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, रुखो, कफविकार र वातविकार नाशक तथा रुचिकर हुन्छ । यसले शूल, आध्मान, अरुची र पेटका रोग पनि नाश गर्दछ ।

(ड) **शालिग्राम निघण्टु :**

**अजमोदा खराश्वा च मयूरो दीप्यकस्तथा । तथा ब्रह्मकुशा प्रोक्ता कारबी लोचमस्तकः ॥**

अजमोदा, खराश्वा, मयूर, दीप्यक,ब्रह्मकुशा, कारबी र लोचमस्तक : यी अजमोदाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**(ढ) सरस्वती निघण्टु :**

**अजमोदा दीप्यकस्तु बह्मदर्भा यमानिका । यमानी दीपनी दीप्यं मर्कटी यवधान्यका ॥**

अजमोदा, दीप्यक, बह्मदर्भा, यमानिका, यमानी, दीपनी, दीप्य, मर्कटी र यवधान्यका : यी अजमोदाका नाम हुन् ।



*Carum roxburghianum, ayushvedah.com,* अजमोदा

**(ण) सोढल निघण्टु :**

**मोदायामजमोदा च दीप्यका चैव मर्कटी ॥**
**खराह्वा कारवी वल्ली तथा हस्तिमयूरकः । ब्रह्मकोशोग्रगन्धा च हृद्यगन्धा प्रकीर्तिता ॥**

मोदा, अजमोदा, दीप्यका, मर्कटी, खराह्वा, कारवी, वल्ली, हस्तिमयूरक, ब्रह्मकोश, उग्रगन्धा र हृद्यगन्धा : यी अजमोदाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**(त) सौश्रुत निघण्टु :**

**अजमोदा दीप्यकश्च वस्तमोदा यवानिका । उग्रगन्धा हृद्यगन्धा शब्दैः पर्यायवाचकैः ॥**

अजमोदा, दीप्यक, वस्तमोदा, यवानिका, उग्रगन्धा र हृद्यगन्धा : यी अजमोदाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## अञ्जन (आँखाको रोगविशेष)
## (An eye disease)

(क) **अष्टाङ्ग हृदय :**

**मध्ये वा वर्त्मनोऽन्ते वा कण्डूषारुग्वती स्थिरा । मुद्गमात्राऽसृजा ताम्रा पिटिकाऽञ्जननामिका ॥**

रक्तविकारका कारण आँखाको पलकको बीच भागमा छेउतिर आउने चिलाउने, डाह गर्ने, दुख्ने, साह्रो, मुगीका गेडा जत्रो र तामाका रङ्को खटिरालाई अञ्जन भनिन्छ ।

(ख) **भावप्रकाश संहिता :**

**दाहतोदवती ताम्रा पिडका वर्त्मसम्भवा । मृद्वी मन्दरुजा सूक्ष्मा ज्ञेया साऽञ्जननामिका ॥**

आँखाको पलकमा डाह गराउने, सियोले घोचे जसरी चसचस घोच्ने, रातो, कोमल र हल्का किसिमले दुख्ने जुन् ससाना बिमिरा आउँदछ त्यसलाई अञ्जन भनिन्छ ।

## अञ्जनांत्रितय
## (Anjanatritaya)

(क) **राजनिघण्टु :**

**कालाञ्जनसमायुक्ते पुष्पाञ्जनरसाञ्जने । अञ्जनत्रितयं प्राहुस्त्र्यञ्जनं चाञ्जनत्रयम् ॥**

कालाञ्जन (सुर्मा विशेष), पुष्पाञ्जन र रसाञ्जनको मिश्रणलाई अञ्जनत्रितय, त्र्यञ्जन वा अञ्जनत्रय भनिन्छ ।

## अञ्जीर
(Fig tree)

**परिभाषा :**

(क) के.यन.स्वामीः (१) अञ्जीर : फिका पहेँला साना फूल फुल्ने, रामतोरियाँका जस्ता चुच्चाचुच्ची परेका खस्रा बाक्ला पात हुने, भुटुकको जस्तो फल लाग्ने, पाँच-सात हात अग्लो बोट हुने, अफगानिस्तान-बेलुचिस्तान र काश्मीरको जात असल हुने तथा पाकेको फललाई गोला चाना बनाई सुकाएर बेचिने एक जातको पोथ्रो । (२) काकोदुम्बरिकाफलम् : अञ्जीर ।

(ख) नेपाली बृहत् शब्दकोश (१) अञ्जीर : डाँठ खोक्रो र लेस्याइलो, तीनकुने पात हुने तिमिलाका जस्ता फल फल्ने, मल्बेरी परिवारको, उष्णतटबन्धीय प्रदेशमा हुने एक वृक्ष; पीपलका जस्ता मसिना बियाँ हुने त्यसैको गुलियो फल । (२) निमारो : तिमिलो; नेभारो; निबारो; बेडु ।


अञ्जीर (तस्बिर श्रोत : आचार्य बालकृष्ण)

(ग) आचार्य बालकृष्ण : अञ्जीरलाई अंग्रेजीमा Fig, Common fig वा Brown turkey fig भनिन्छ । नेपालीमा यसलाई अञ्जीर वा फलेदो भनिन्छ । यसलाई संस्कृतमा फल्गुजम्, अञ्जीरकम् र काकोदुम्बरिकाफलम् भनिन्छ ।

(घ) शालिग्राम निघण्टु : यसलाई अंग्रेजीमा Fig tree र ल्याटिन भाषामा *Ficus carica* (फिकस कारिका) भनिन्छ ।

(ङ) चुरिया फरेस्ट्स् अफ नेपाल : यो Moraceae (मोरेसिए) परिवारमा पर्दछ । यसलाई नेपालीमा भोटे दाख वा नेभारो पनि भनिन्छ । यसको वानस्पतिक नाम *Ficus carica* Linn. हो ।

(च) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : तिमिलो Angiosperm समूह अर्न्तगत Moraceae परिवारमा नै पर्दछ । तर यसको वास्पतिक नाम भने *Ficus auriculata* Lour. हो ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) मदनपाल निघण्टु :**

**अञ्जीरं मञ्जलं ज्ञेयं काकोदुम्बरिकाफलम् । अञ्जीरं शीतलं स्वादु गुरु पित्तास्रवातजित्॥
तस्मादन्यगुणं ज्ञेयमञ्जीरं लघु वा गुणैः॥**

अञ्जीर, मञ्जल र काकोदुम्बरिकाफल : यी अञ्जीरका संस्कृत पर्यायवाची नामहरू हुन् । अञ्जीर शीतवीर्यको, स्वादिलो र पचाउन कठिन हुन्छ । यसले पित्तविकार र रक्तविकारलाई जित्दछ । यसबाहेकका (अन्य जातका वा साना) अञ्जीर कम गुणका हुन्छन् ।



Harvesting of Ficus carica (common fig), cabidigitallibrary.org

**(ख) शालिग्राम निघण्टु :**

**अञ्जीरं मञ्जुलं ज्ञेयं काकोदुम्बरिका फलम् ।**

अञ्जीर, मञ्जुल र काकोदुम्बरिका : यी अञ्जीरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**अञ्जीरकं फलमतीव सुशीतलं च सद्यो निवारयति शोणितपित्तमुग्रम् ।
पथ्यं विशेषमपि पित्तशिरोविकारे नासाप्रवृत्तरुधिरे च विशेषतस्तु॥**

अञ्जीरको फल अती नै ठण्डी गर्ने गुणको हुन्छ । यसले कडा खालको रक्तपित्त रोगलाई तुरुन्त नाश गर्दछ । पित्तविकार र टाउकाका रोगमा यो विशेष पथ्य हुन्छ । यसले विशेषगरी नाकबाट रगत बहने रोग (नाथ्री फुट्ने रोग) लाई ठिक गर्दछ ।

**अञ्जीरकं गुरु हिमं मधुरं च वातपित्तास्ररोगहरणं रुचीनाम् ।
सुस्वादुक रसयोर्गुरुशीतलं च श्लेष्मामवातकरमस्रविकारहारि॥**

अञ्जीर पचाउन कठिन, शीतल गर्ने, गुलियो, वातविकार नाशक, रक्तपित्त नाशक, रुचिकर, स्वादिलो, पचेपछि पनि गुलियो, कफविकार गर्ने, आमवात गर्ने र रक्तविकार नाशगर्ने गुणको हुन्छ ।



अञ्जीर (तस्विर श्रोत : आचार्य बालकृष्ण)



अञ्जीर (तस्विर श्रोत : आचार्य बालकृष्ण)

# अटरूष (असुरो)
Malabar Nut

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : अटरूष, सिंही आदि शब्दले असुरोलाई बुझाउँदछ ।

(ख) नेपाली बृहत् शब्दकोश : बाघको मुखजस्तो, सेतो फूल फुल्ने र हरिया पात हुने एक प्रकारको बुटो ।

(ग) भावप्रकाश निघण्टुका टीकाकार डा. कृष्णचन्द्र चुनेकर : यसलाई अंग्रेजीमा Malabar nut तथा ल्याटिन भाषामा *Adhatoda vasica,* Nees. भनिन्छ । रातो फूल फुल्ने असुरोको *Justica picta* Linn. तथा कालो असुरोको *Justicia gendarussa* Burm. वानस्पतिक नाम हो ।

(घ) भावप्रकाश निघण्टुका टीकाकार विश्वनाथ द्विवेदी शास्त्री : यसको वानस्पतिक नाम *Justicia Adhatoda* Roxb. पनि हो ।

(ङ)आचार्य बालकृष्ण : यो सेतो, रातो र कालो गरी तीन किसिमको हुन्छ । सेतो असुरोको वानस्पतिक नाम *Adhatoda zeylanica* Medik., रातो असुरोको वानस्पतिक नाम *Graptophyllum pictum* (Linn.) Grjiff. वा *Graptophyllum hortense* Nees, *Justicia picta* Linn. तथा कालो असुरोको वानस्पतिक नाम *Gendarussa vulgaris* Nees वा *Justicia gendarussa* Burm. हो । यसबाहेक ल्याटिन नाम *Adhatoda beddomei* B.Clarke भएको वनस्पतिलाई पनि असुरोको रूपमा प्रयोग गरिन्छ । यसलाई क्षुद्र असुरो भनिन्छ । असुरोका अन्य वानस्पतिक नाम *Adhatoda vasica* Nees वा *Justicia adhatoda* Linn.klg हुन् । यसलाई अंग्रेजीमा Lion's Muzzle, Malabar Nut, Stallion's tooth वा Vasaka पनि भनिन्छ । यो Acanthaceae परिवारमा पर्दछ ।


सिंही | Justicia adhatoda L., payer.de/amarakosa

(च) पेयर डी अमरकोश : यसको वानस्पतिक नाम *Justicia adhatoda* Linn. हो । कसैले *Justicia gendarussa* Burm. f. लाई पनि असुरो नै मानेका छन् ।

(छ) द आयुर्वेद इन्साइक्लोपेडियामा स्वामी सदाशिव तिर्थ : यसलाई अंग्रेजीमा Malabar Nut तथा ल्याटिन भाषामा *Adhatoda vasica* Nees. (or *Adenanthera vasica*) भनिन्छ ।

(ज) धन्वन्तरी निघण्टुका टीकाकार वैद्य डी.के. कामत र डा. यस.डी.कामत : असुरोको वानस्पतिक नाम *Adhatoda vasica* Nees, *Adhatoda beddomei*, C.B.Clarke. वा *Adhatoda zeylanica* Medik. हो । यो Acanthaceae परिवार भित्र पर्दछ ।

(झ) भारत सरकारबाट प्रकाशित द आयुर्वेदिक फर्माकोपिया अफ इण्डिया : जराको लागि वानस्पतिक नाम *Adhatoda zeylanica* Medic भएको असुरो तथा पातको लागि




वानस्पतिक नाम *Adhatoda vasica* Nees भएको असुरो प्रयोग गरिन्छ । ओखतीका लागि असुरोको जरा ३-६ ग्राम, ताजा पातको रस १०-२० मि.लि. तथा सुकेको पात १०-२० ग्राम मात्रा हुन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**वाशा वृषाऽटरूषः सिंहमुखः सिंहिका भिषड् माता ।**
**वृषको वाशकसञ्ज्ञः शब्दैः पर्यायवाचकैर्गदिता ॥**

वाशा, वृषा, अटरूष, सिंहमुख, सिंहिका, भिषड्माता, वृषक र वाशक : यी असुरोका नाम हुन् ।

**(ख) अभिधान रत्नमाला :**

**वासा वृषा सिंहमुखी भिषङ्माताऽऽटरूषकः ॥**

वासा, वृषा, सिंहमुखी, भिषङ्माता र आटरूषक : यी असुरोका नाम हुन् ।

(ग) **अमरकोश :**

**...वैद्यमातृसिंह्यौ तु वाशिका । वृषोऽटरुषः सिंहास्यो वासको वाजिदन्तकः ॥**

अटरूष, वाजिदन्तक, वाशिका, वासक, वैद्यमातृ, वृष, सिंहास्य र सिंही : यी असुरोका नाम हुन् ।

(घ) **अष्टाङ्ग निघण्टु :**

**सिंहास्यः कर्कटश्चैव वृषकश्चाटरूषकः ।**

सिंहास्य, कर्कट, वृषक र अटरूषक : यी असुरोका नाम हुन् ।

(ङ) **कैयदेव निघण्टु :**

**वासाऽटरूषः सिंहास्यो भिषङ्माताऽटरूषकः । शीतवल्ली सिंहपर्णी मारुका सिंहवल्लिका ॥**
**वृषः सिंही सिंहमुखी वासको वाजिदन्तकः । सिंहास्या तुम्बुरा तिक्ता हृद्या स्वर्या हिमा लघुः ॥**
**वातला**


अटरूषः । Justicia adhatoda L., payer.de/amarakosa

**कफपित्तास्रश्वासकासहरा हरेत् । ज्वरमेहारुचिच्छर्दिकुष्ठतृष्णाक्षतक्षयान् ॥**
**क्षयघ्नं वातलं पुष्पं वृषजं कफपित्तजित् ।**

वासा, अटरूष, सिंहास्य, भिषङ्माता, अटरूषक, शीतवल्ली, सिंहपर्णी, मारुका, सिंहवल्लिका, वृष, सिंही, सिंहमुखी, वासक र वाजिदन्तक : यी असुरोका नाम हुन् । असुरो तीतो, मुटुका लागि हितकर, स्वरका लागि लाभदायक, शीतवीर्यको, पचाउन सहज, वातविकार गर्ने तथा कफविकार, पित्तविकार, रक्तविकार, दम, खोकी, जरो, प्रमेह, अरुची, वाकवाकी, कुष्ठ, तिर्खारोग, चोटपटक र क्षयरोग नाशक हुन्छ । यसको फूलले कफविकार पित्तविकारलाई जित्दछ र वीर्य बढाउँदछ ।

**(च) धन्वन्तरी निघण्टु :**

**वासकः सिंहपर्णी च वृषो वासाऽथ सिंहिका । आटरूषः सिंहमुखी भिषङ्माताऽऽटरूषकः ॥**
**आटरूषो हिमस्तिक्तः पित्तश्लेष्मास्रकासजित् । क्षयहृच्छर्दिकुष्ठघ्नो ज्वरतृष्णाविनाशनः ॥**

वासक, सिंहपर्णी, वृष, वासा, सिंहिका, आटरूष, सिंहमुखी, भिषङ्माता र आटरूषक : यी असुरोका नाम हुन् । असुरो शीतवीर्यको र तीतो हुन्छ । यसले पित्तविकार, कफविकार, रक्तविकार र खोकीलाई जित्दछ । असुरोले क्षयरोग, मुटुका रोग, वाकवाकी, कुष्ठ, जरो र तिर्खारोग नाश गर्दछ ।


Justicia gendarussa Burm. f., payer.de/amarakosa

**(छ) निघण्टुशेष :**

**आटरूषे वृषो वासा वासिका वाजिदन्तकः ॥ भिषग्माता सिंहमुखः सिंहिका सिंहपर्णिका ॥**

आटरूष, वृष, वासा, वासिका, वाजिदन्तक, भिषग्माता, सिंहमुख, सिंहिका र सिंहपर्णिका : यी असुरोका नाम हुन् ।

**(ज) भावप्रकाश निघण्टु :**

**वासको वासिका वासा भिषङ्माता च सिंहिका ॥**
**सिंहास्यो वाजिदन्ता स्यादाटरूषोऽटरूषकः । अटरूषो वृषस्ताम्रः सिंहपर्णश्च स स्मृतः ॥**
**वासको वातकृत्स्वर्यः कफपित्तास्रनाशनः । तिक्तस्तुवरको हृद्यो लघुशीतस्तृडर्त्तिहृत् ॥**
**श्वासकासज्वरच्छर्दिमेहकुष्ठक्षयापहः ।**

वासक, वासिका, वासा, भिषङ्माता, सिंहिका, सिंहास्य, वाजिदन्ता, आटरूष, आटरूषक, अटरूष, वृष, ताम्र र सिंहपर्ण : यी असुरोका नाम हुन् । असुरोले वातविकार बढाउँदछ । यसले स्वर

खुलाउँदछ । यसले कफविकार, पित्तविकार र रक्तविकार नाश गर्दछ । यो तीतो र टर्रो हुन्छ तथा मुटुका लागि लाभकारी हुन्छ । पचाउन हलुका हुनुका साथै शीतल गर्दछ । तिर्खा मेट्दछ तथा दम, खोकी, जरो, वाकवाकी, प्रमेह, कुष्ठ र क्षयरोग नाश गर्दछ ।

**(झ) मदनपाल निघण्टु :**



Justicia adhatoda Linn., Dipesh Pyakurel, NEHHPA

**अरूषकेणाववासा वृषा सिंहमुखी भिषक् । सिंहपर्णी वृषो वासा सिंहकोत्पाटरूषकः ॥**
**वासको वातकृत्स्वर्यः कफपित्तास्रनाशनः । श्वासकासज्वरच्छर्दिमेहकुष्ठक्षयापहः ॥**

असुरोका अरूषक, इणाववासा, वृषा, सिंहमुखी, भिषक, सिंहपर्णी, वृष, वासा, सिंहक र उत्पाटरूषक नाम हुन् । असुरोले वायु बढाउँदछ । घाँटी सफा गर्दछ । कफदोष, रक्तपित्त, दम, खोकी, जरो, वाकवाकी, प्रमेह, कुष्ठ र क्षयरोग ठिक गर्दछ ।

**(ञ) राज निघण्टु :**

**वासकः सिंहिका वासा भिषग्माता वसादनी । आटरूषः सिंहमुखी सिंही कण्ठीरवी वृषः ॥**
**शितपर्णी वाजिदन्ता नासा पञ्चमुखी तथा । सिंहपर्णी मृगेन्द्राणी नामान्यस्यास्तु षोडश ॥**
**वासा तिक्ता कटुः शीता कासघ्नी रक्तपित्तजित् । कामलाकफवैकल्यज्वरश्वासक्षयापहा ॥**

(१) वासक, (२) सिंहिका, (३) वासा, (४) भिषग्माता, (५) वसादनी, (६) आटरूष, (७) सिंहमुखी, (८) सिंही, (९) कण्ठीरवी, (१०) वृष, (११) शितपर्णी, (१२) वाजिदन्ता, (१३) नासा, (१४) पञ्चमुखी, (१५) सिंहपर्णी र (१६) मृगेन्द्राणी : यी सोह्र वटा नाम असुरोका नाम हुन् । असुरो तीतो, पिरो, शीतवीर्यको, खोकी नाशक र रक्तपित्तलाई जित्ने गुणको हुन्छ । यसले कमलपित्त, कफविकार, जरो, दम र क्षयरोग नाश गर्दछ ।

**(ट) राजवल्लभ निघण्टु :**

**वासकस्य च पुष्पाणि ...कटुपाकानि तिक्तानि कासक्षयहराणि च ॥**

असुरोको फूल पचेपछि पिरो, स्वादमा तीतो तथा खोकी र क्षयरोग नाशगर्ने गुणको हुन्छ ।

**वासकः कासवैस्वर्यरक्तपित्तकफापहः ॥**

असुरोले खोकी, स्वर-समस्या, रक्तपित्त र कफविकारलाई नाश गर्दछ ।

**(ठ) शालिग्राम निघण्टु :**

**वासको वासिका वासा सिंहिका रामरूपकः । मातृसिंही वैद्यमाता कसनोत्पाटनोवृषः ॥**


Justicia gendarussa Burm. f., payer.de/amarakosa

वासक, वासिका, वासा, सिंहिका, रामरूपक, मातृसिंही, कसनोत्पाटन र वृष : यी असुरोका नाम हुन् ।

**(ड) सोढल निघण्टु :**

**वासके सिंहपर्णी च वृषो वासा च सिंहिका । आटरूषः सिंहमुखी भिषङ्माताऽऽटरूषकः ॥**
**श्वेतमुखोऽश्वदन्तश्च कर्कशः पित्तरक्तनुत् । दन्तसत्वप्रदायी च कफहा रक्तमूत्रजित् ॥**

# अण्डकोष
# Scrotum

(क) **नेपाली बृहत् शब्दकोश :**

(१) अण्ड : जीवजन्तुको भाले जातिको जननेन्द्रियका फेदमा झुन्डिएका छालाका थैलाभित्रका दुई बाटुला गेडा; आँडा; अण्डकोश । (२) अण्डकोष : स्तनपायी जीवजन्तुका भाले जातको लिङ्ग वा जननेन्द्रियको मन्तिरको वीर्यवाहक द्विफलक छालाको थैली; आँड ।

(ख) **डा.साङ्कचधर :** अण्डकोषलाई अग्रेजीमा Scrotum भनिन्छ ।

(ग) **अमरकोश :**

**मुष्कोऽण्डकोशो वृषणः...**

मुष्क, अण्डकोश र वृषण : यी अण्डकोशका नाम हुन् ।

(घ) **राज निघण्टु :**

**मुष्कोऽण्डमण्डकोषश्च वृषणो बीजपेशिका॥** 

मुष्क, अण्ड, अण्डकोष, वृषण र बीजपेशिका : यी नाम अण्डकोषका नाम हुन् ।

(ङ) **शार्ङ्गधर संहिता :**

**वीर्यवाहिशिराधारौ वृषणौ पौरुषावहौ ।**

अण्डकोष वीर्य बहने नसाको आधार हो । अतः यसले पुरुषार्थ दिन्छ । (यसलाई बीजवाही पनि भनिन्छ) ।

# अतसी (आलस)
Common flax

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश : (१) आलस : गहतजस्तो थेप्चो, कैलो रङको, चिल्लो र लाम्चो तैलान्न; तिसी । (२) तिसी : दाँती परेका खस्रा मालाकार पात हुने, आँपका जस्तै हरिया फूल फुल्ने, तिलभन्दा सेख ठूला चिल्ला गेडा फल्ने, सानो चौडाइ हुने, एक बोट वा त्यसैको तेलालु दाना; आलस ।

(ख) विश्वनाथ द्विवेदी शास्त्री : यसलाई अंग्रेजीमा Lin seed (लिन सीड) तथा ल्याटिन भाषामा *Lini Semina* (लिनि सेमिना) भनिन्छ ।



Linum usitatissimum L., .payer.de/ayurveda

(ग) डा. चुनेकर : यसलाई अंग्रेजीमा Common Flax (कमन फ्लाक्स) तथा ल्याटिन भाषामा *Linum usitatissimum* Linn. (लिनम युसिटेटिसिमम लिन) भनिन्छ ।

(घ) आचार्य बालकृष्ण : यसको ल्याटिन नाम *Linum usitatissimum* L. (लिनम युसिटेटिसिमम लिन) वा *Linum humile Mill.* (लिनम ह्युमाइल मिल) पनि हो । यसलाई अंग्रेजीमा Linseed (लिनसीड) वा Flax plant (फ्लाक्स प्लाण्ट) वा Common flax (कमन फ्लाक्स) पनि भनिन्छ । यसलाई हिन्दीमा तिसी वा अलसी भनिन्छ ।

(ङ) फर्माकोपिया : यो Linaceae (लाइनेसिइ) परिवारमा पर्दछ । यसको बोट ०.६-१.२ मिटर अग्लो हुन्छ । यसका बीजको धुलो ३-६ ग्रामसम्म ओखतीमा प्रयोग गरिन्छ ।

**प्रचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**उमा क्षमातसी नीलपुष्पिका च कलायिका । कुम्भ्यगस्त्यः कुम्भयोनिः कलाय इति कथ्यते ॥**

उमा, क्षमा, अतसी, नीलपुष्पिका, कलायिका, कुम्भी, अगस्त्य, कुम्भयोनि र कलाय : यी आलसका नाम हुन् ।


Linum usitatissimum L., .payer.de/ayurveda

**(ख) अमरकोश :**

**...अतसी स्यादुमा क्षुमा ।**

अतसी, उमा र क्षमा : यी आलसका नाम हुन् ।

**(ग) अष्टाङ्ग हृदय :**

**उमाकुसुम्भजं तूष्णं त्वग्दोषकफपित्तकृत् ॥ स्निग्धोमा स्वादुतिक्तोष्णा कफपित्तकरी गुरुः । दृक्शुक्रहृत्कटुः पाके...॥**

आलस र कुसुमको तेल उष्णवीर्यको, छालाका दोष निकाल्ने तथा कफविकार र पित्तविकार बढाउने गुणको हुन्छ । आलस : चिल्लो, स्वादिलो, केही तितो, गर्मी गर्ने र दृष्टि एवं शुक्र नाशक तेलहन हो । पचेपछि पिरो हुन्छ । कुसुमका गेडामा पनि आलसकै गुण हुन्छ ।



*Linum usitatissimum* L., .payer.de/ayurveda

**(ढ) आयुर्वेद महोदधि :**

**क्षौमं तैलमचक्षुष्यं पित्तकृद्वातनाशनम् ॥**

आलसको तेल आँखाका लागि लाभदायक हुँदैन । यसले पित्तविकार बढाउँदछ तर वातविकार नाश गर्दछ ।

**उष्णातसी स्वादुरसानिलघ्नी पित्तोल्बणा स्यात् कटुका विपाके ॥**

आलस (अतसी) : गर्मी गर्ने, स्वादिलो रस भएको, वातविकार नाशक, पित्तवर्धक र विपाकमा वा पचेपछि पिरो हुन्छ ।

प्राचीन ग्रन्थमा केही टीकाकारहरूले आलसको बोटबाट सनपाटको जस्तै रेसा निकालिन्छ र यो घाउखटिरा आदि बाँध्न प्रयोग गरिन्छ पनि भनेका छन् ।


आलसका बोटको रेसा,*Linum usitatissimum* L., .payer.de/ayurveda

(झ) **कैयदेव निघण्टु :**

**रुद्रपत्नी नीला नीलपुष्पी सुवर्चला । उमाऽतसी च मसृणा वेणुः क्षौमी क्षुमा स्मृता ॥**
**अतसी मधुरा तिक्ता स्निग्धा पाके कटुर्गुरुः । उष्णा दृक्शुक्रवातघ्नी कफपित्तप्रकोपनी ॥**
**कासे श्रेष्ठमुमापत्रं वातरोगे तथा कफे ।**

रुद्रपत्नी, नीला, नीलपुष्पी, सुवर्चला, उमा, अतसी, मसृणा, वेणु, क्षौमी र क्षुमा : यी आलसका नाम हुन् । आलस गुलियो, तीतो, चिल्लो र पचेपछि पिरो हुन्छ । यो पचाउन कठिन र उष्णवीर्यको हुन्छ । यसले दृष्टिक्षमता, शुक्र र बातविकार नाश गर्दछ तथा कफविकार र पित्तविकारलाई उत्तेजित बनाउँदछ । खोकी लाग्दा, वातरोगमा र कफरोगमा आलसको पात उत्तम हुन्छ ।

**उमातैलं गुरु स्निग्धं मधुरं दीपनं घनम् ॥**
**ग्राह्युष्णं कटुकं पाके कफपित्तबलप्रदम् । त्वग्दोषहृदचक्षुष्यं पिच्छिलं मलवृद्धिकृत् ॥**

आलसको तेल पचाउन कठिन, चिल्लो, गुलियो, दीपनी र बाक्लो हुन्छ । यो ग्राहि, उष्णवीर्यको, पचेपछि पिरो तथा कफविकार र पित्तविकारलाई बल दिने खालको हुन्छ । आलसको तेलले छालाका विकार नाश गर्दछ तर आँखाका लागि हितकर हुँदैन । यो लेस्याइलो र दिसा (मल) बढाउने गुणको हुन्छ ।

(च) **धन्वन्तरि निघण्टु :**

**प्रतरीर्कतमा प्रोक्ता रुद्रपत्नी सुवल्कला ॥**
**उमा सुनीलपुष्पा च वसुतर्का क्षुमाऽपि च । शीता तैलफला चैव पालिका पूतिपूरकः ॥**
**रुद्रपत्नी तु मधुरा स्निग्धा च बलकारिका । कफवातकरी चेषत्पित्तहृत्कुष्ठवातजित् ॥**

**(अन्यच्च)**
**अतसी नीलपुष्पी च पार्वती स्यादुमा क्षमा ॥**

प्रतरीर्कतमा, रुद्रपत्नी, सुवल्कला, उमा, सुनीलपुष्पा, वसुतर्का, क्षुमा, शीता, तैलफला, पालिका र पूतिपूरक : यी आलसका नाम हुन् । यो गुलियो, चिल्लो, बलदायक, कफविकार र वातविकार गर्ने, अलिअलि पित्तविकार नाशगर्ने तथा कुष्ठ र वातविकार (?) जित्ने गुणको हुन्छ । अरूपनि भनेर अतसी, नीलपुष्पी, पार्वती, उमा र क्षुमा भनी आलसका संस्कृत पर्यायवाची शब्दहरू दिइएका छन् ।

**वातघ्नं मधुरं तेषु क्षौमं तैलं बलासकृत् ॥**

आलसको तेल गुलियो हुन्छ । यसले वातविकार नाश गर्दछ तर कफविकार गर्दछ ।

(ङ) **निघण्टु रत्नाकर :**

**अतसी मधुरा स्निग्धा गुर्वी चोष्णा बलप्रदा । पाके कट्वी च तिक्ता च कफवातव्रणापहा ॥**
**पृष्ठशूलं च शोथं च पित्तं शुक्रदृशंजयेत् । पर्णमस्याः कासकफवातनुच्छ्वासहृत्तथा ॥**

आलस गुलियो, चिल्लो, पचाउन कठिन, उष्णवीर्यको, बलदायक, पचेपछि पिरो, तीतो तथा कफविकार, वातविकार र घाउखटिरा नाशक हुन्छ । ढाडको दुखाई, सुजन, पित्तविकार, शुक्र र दृष्टिशक्ति नाश गर्दछ । आलसका पातले खोकी, कफविकार, वातविकार र दम नाश गर्दछ ।


आलसका बीज (तस्विर श्रोत : वनएमजीडटकममा रहेको आचार्य बालकृष्णको लेख)

(ञ) **पर्यायरत्नमाला :**

**चणकोमातसी क्षौमी रुद्रपत्नी सुवर्चला ॥**

चणक, उमा, अतसी, क्षौमी, रुद्रपत्नी र सुवर्चला : यी आलसका नाम हुन् ।

(ख) भावप्रकाश निघण्टु :

**अतसी नीलपुष्पी च पार्वती स्यादुमा क्षुमा ॥**
**अतसी मधुरा तिक्ता स्निग्धा पाके कटुर्गुरुः । उष्णा दृक्छुक्रवातघ्नी कफपित्तविनाशिनी ॥**

अतसी, नीलपुष्पी, पार्वती, उमा र क्षुमा : यी आलसका नाम हुन् । आलस गुलियो, तीतो, चिल्लो, पचेपछि पिरो र पचाउन कठिन हुन्छ । यसले गर्मी गर्दछ तथा दृष्टि, शुक्र, वातविकार, कफविकार र पित्तविकार नाश गर्दछ । (यस श्लोकमा प्रयोग भएको दृक्छुक्र शब्दको अर्थ कसैकसैले दृष्टिविकार र शुक्रविकार भनी लगाएका छन्) ।

**अतसीतैलमाग्नेयं स्निग्धोष्णं कफपित्तकृत् ॥**
**कटुपाकमचक्षुष्यं बल्यं वातहरं गुरु । मलकृद्रसतः स्वादु ग्राहि त्वग्दोषहृद् घनम् ॥**
**वस्तौ पाने तथाऽभ्यङ्गे नस्ये कर्णस्य पूरणे । अनुपानविधौ चापि प्रयोज्यं वातशान्तये ॥**

आलसको तेलमा अग्निको अंश बढी हुन्छ । यो चिल्लो, गर्मी गर्ने तथा कफविकार र पित्तविकार गर्ने गुणको हुन्छ । यो पचेपछि पिरो हुन्छ । यसले आँखालाई फाइदा गर्दैन । यो बलदायक, वातविकार नाशक र पचाउन कठिन हुन्छ । यसले दिसा बढाउँदछ । यो गुलियो, ग्राहि र छालाका रोग नाशक हुन्छ । आलसको तेल बाक्लो हुन्छ । यो तेल वस्तिकर्ममा पिउन, मालिस गर्न, नस लिन, कानमा हाल्न तथा वातविकार शान्त पार्ने उद्देश्यले पिउन प्रयोग गर्नु पर्दछ ।

(घ) मदनपाल निघण्टु : 

**अतसीतैलमाग्नेयं स्निग्धोष्णं कफपित्तनुत् । कटुपाकमचक्षुष्यं बल्यं वातहरङ्गुरु ॥**

आलसको तेलले पाचनशक्ति बढाउँदछ । यो तेल चिल्लो, उष्णवीर्यको तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यो पचेपछि पिरो हुन्छ, आँखाको लागि लाभदायक हुँदैन, बल दिन्छ, वातविकार नाश गर्दछ र पचाउन कठिन हुन्छ ।

**अतसी मसृणा नीलपुष्पा चेलूत्तमा क्षुमा । अतसी शुक्रदृष्टिघ्नी स्निग्धा वातास्रजिद्गुरुः ॥**

अतसी, मसृणा, नीलपुष्पा, चेलूत्तमा र क्षुमा : यी आलसका नाम हुन् । आलसले शुक्र र दृष्टिक्षमता नाश गर्दछ । यो चिल्लो, वातरक्तलाई जित्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

(ग) राज निघण्टु :

**अतसी पिच्छला देवी मदगन्धा मदोत्कटा । उमा क्षुमा हैमवती सुनीला नीलपुष्पिका ॥**
**अतसी मदगन्धा स्यान्मधुरा बलकारिका । कफवातकरी चेषत् पित्तहृत् कुष्ठवातनुत् ॥**

अतसी, पिच्छला, देवी, मदगन्धा, मदोत्कटा, उमा, क्षुमा, हैमवती, सुनीला र नीलपुष्पिका : यी आलसका नाम हुन् । यो मदिरा जस्तो गन्ध आउने, गुलियो, बलदायक, कफविकार र वातविकार गर्ने तथा थोरै पित्तविकार, कुष्ठजन्य वातविकार नाशक हुन्छ ।

**मधुरं त्वतसीतैलं पिच्छिलं चानिलापहम् । मदगन्धि कषायञ्च कफकासापहारकम् ॥**

आलसको तेल मिठो, लेस्याइलो र वातविकार नाशक हुन्छ । यो मदिरा जस्तो गन्ध दिने, टर्रो तथा कफविकार र खोकी नाशक हुन्छ ।

(ट) **राजबल्लभ निघण्टु :**

**स्वाद्वम्लमतसीतैलं वीर्योष्णं कटुपाकि च ॥**

आलसको तेल गुलियो, अमिलो, उष्णवीर्यको र पचेपछि पिरो हुने गुणको हुन्छ ।

**अतस्युष्णा च तिक्ता च वातघ्नी श्लेष्मपित्तला ॥**

आलस उष्णवीर्यको, तीतो, वातविकार नाशक तथा कफविकार र पित्तविकार गराउने गुणको हुन्छ ।



Leinsamen, April 2004, fotografiert von Sönke Behrends; GNU FDL
*Linum usitatissimum* L., .payer.de/ayurveda

(ठ) **शालिग्राम निघण्टु :**

**अतसी पिच्छिला देवी मदगन्धा मदोत्कटा । उमा क्षुमा हैमवती सुनीला नीलपुष्पिका ॥**

अतसी, पिच्छिला, देवी, मदगन्धा, मदोत्कटा, उमा, क्षुमा, हैमवती, सुनीला र नीलपुष्पिका : यी आलसका नाम हुन् ।

(ज) **हारीत संहिता :**

**अतसीप्रभवं तैलं घनं मधुरपिच्छलम् । विपाके चोष्णवीर्यं च वातश्लेष्मनिवारणम् ॥**

आलसको तेल गाढा वा बाक्लो, मिठो र चिप्लो हुन्छ । पचेपछि यसले शरीरलाई गर्मी गर्दछ । वातविकार र कफविकार यसले ठिक गर्दछ ।

# अतीस

## Atees

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा गौतम : विषा, प्रतिविषा आदि भनेको उत्तिस (अतीस) हो ।

(ख) के.यन.स्वामी (अतिविषा : अतीस) सिम्ला, कुमाउँ आदि हिमालयको आसपासमा उम्रने, डेढ अङ्गुल लामो, आधा अङ्गुल मोटो, खाकी रङको बोक्रा, सेतो गुदी, हात्तीको सुँढको आकारको गानो, एकदेखि तीन हातसम्म अग्लो बोट, तीन चार अङ्गुल चौडा, ६-७ अङ्गुल लामो चुच्चे पात भएको र नीलो, पहेँलो र बैजनी धर्का भएको फूल र चिल्लो घुम्रिएको बिउ हुने एक पोथ्रा । यो कालो, रातो र सेतो गरी तीन जातको हुन्छ, यसको गानोलाई अतीस भनिन्छ ।

(ग) नेपाली बृहत् शब्दकोश : (१) अतीस : लामालामा फूल फुली किम्बुको जस्तो फल लाग्ने एक प्रकारको उत्तिसजस्तो रूख । (२) उत्तिस : किम्बुको जस्तो फल हुने, लहरे फूल फुल्ने र तीन-चार इञ्च लामो केही चौडा पात हुने एक जातको रूख ।

(घ) भावप्रकाश निघण्टुका टीकाकार डा. कृष्णचन्द्र चुनेकर : यसको अंग्रेजी नाम Indian Atees र ल्याटिन नाम *Aconitum heterophyllum,* Wall (एकोनिटम हेटेरोफिलम वाल) हो । यसको बोट २-४ फुट अग्लो हुन्छ । फेद गोलो र सोझो हुन्छ तथा अनेक आकारका पातले ढाकेको हुन्छ । पातका छेउमा करौँतीको धार जस्तो दाँती हुन्छ । जमिन भित्र दुई गाना हुन्छन्, एउटा पुरानो र अर्को नयाँ । यसलाई फोर्दा बीचमा सेतो र चार वटा काला दाग देखिन्छ । गन्ध आउँदैन । चाँडै कीरा पर्दछ । यो तीन चार जातको हुन्छ भनिएको छ । तर आजकल *Aconitum palmatum D.Don* (एकोनिटम पाल्माटम डी डन) नामक जात मात्र पाइएको छ ।

(ङ) भावप्रकाश निघण्टुका टीकाकार विश्वनाथ द्विवेदी शास्त्री : अतीस उच्च हिमाली प्रदेशमा हुन्छ । फूलको आकार टोपी जस्तो हुन्छ । यसको गानुलाई नै अतीस भनिन्छ । यसको कतै तीन त कतै चार जात हुन्छन् भनिएको छ । तर आजभोली केही खैरो गानु हुने अतीस मात्र पाइएको छ । यो गानु अती नै तीतो हुन्छ ।

(च) वन एम जी डटकममा आचार्य बालकृष्ण : यसको वानस्पतिक नाम *Aconitum heterophyllum* Wall. ex Royle (एकोनिटम हेटेरोफिलम वाल एक्स रोयल) वा *Aconitum cordatum Royle* (एकोनिटम कोर्डाटम रोयल) हो । यसलाई अंग्रेजीमा Indian Aconite (इण्डियन याकोनाइट) , Atees root ( अतीस रुट) वा Indian Atees (इण्डियन अतीस) भनिन्छ । यसको नेपाली नाम विषा वा बिख हो । यो २-५ हजार मिटरको उचाइमा पाइन्छ । यसको वर्णन यजुर्वेदको अध्याय १२ मन्त्र ८४ मा समेत पाइन्छ । यो वनस्पति


अतीस (तस्बिर श्रोतः आचार्य बालकृष्ण)

विषवर्गमा गणना भएपनि ससाना जीव बाहेक अन्यलाई विषालु हुँदैन । यो ओखती धेरै दिन टिक्दैन दुई महिनामै कीरा पर्दछ ।

यजुर्वेदको उक्त मन्त्र "ॐ अति विश्वाः परिष्ठा स्तेनऽइव व्रजमक्रमुः । ओषधीः प्राचुच्च्यवुर्यत्किं च तन्वो रपः ॥" हो । अतिविश्श्वा÷ ॥ परिष्ठ्ठास्त्तेनऽइवव्व्रजमक्क्रमुंः ॥ ओषधींःप्प्राचुच्च्यवुर्ष्यत्त्किञ्चतन्न्वोरप÷ ॥ हो ।


उत्तीस, *Alnus nepalensis* D.Don, Catalogue of Plants of NBG, Nepal

यो मन्त्रका अनेक थरी अर्थ लगाइएको छ । यसको वैदिक कोशमा दिइएका मध्येका अर्थमध्ये अतिविश्श्वाको अर्थ अतीस । परिष्ठाको अर्थ सर्वत स्थिता । स्तेन इव । व्रजम्को अर्थ निवासस्थानम् वा गोस्थानम् । अक्रमुः को अर्थ क्राम्यन्ति । ओषधीः । प्राचुच्यवुः को अर्थ प्रच्यावयन्ति वा नाशयन्ति । यत्किं च-जेजति छन् । तन्वोको अर्थ शरीरस्य तथा रपः को अर्थ पापफलमिव रोगास्य दुराम् । भनी अर्थ लगाउँदा "मानिसको वासस्थान वा गोठलाई चोरले आक्रमण गरेजसरी मानिसको शरीरलाई आक्रमण गर्ने पापको फलरूपी जेजति रोग छन् ती रोगलाई अतीसले नाश गर्दछ" भन्ने भावार्थ लाग्न पुग्दछ ।

(छ) डी.के. कामत र डा. यस.डी.कामत : उत्तर-पश्चिम हिमाली भेगमा पाइने सेतो अतीसको *Aconitum heterophyllum* Wall. (एकोनिटम हेटेरोफिलम वाल) तथा कालो अतीसको *Aconitum palmatum* D.Don. (एकोनिटम पाल्माटम डी डन) ल्याटिन नाम हो ।

(ज) फर्माकोपिया : यो Ranunculaceae परिवारमा पर्दछ : यसको वानस्पतिक नाम *Aconitum heterophyllum* Wall. ex. Royle हो । यसको जराको धुलो ०.६-२.० ग्रामसम्म ओखतीमा प्रयोग हुन्छ ।

(झ) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 M नेपालतिर पाइने उत्तिस Angiosperm समूह अन्तर्गत Betulaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Alnus nepalensis* D.Don हो ।

नोट : नेपालमा यत्रतत्र पाइने, सुरिलो भई चाँडै बढ्ने उत्तिसलाई यहाँ अतिविषा वा अतीस भनी बताउन खोजिएको होइन ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**घुणवल्लभा घुणेष्टा घुणप्रिया शृङ्गिका च शुककन्दा ।**
**विषमोपविषातिविषा विषा च विश्वेति माद्री स्यात्॥**
**द्वितीयातिविषा रक्ता श्वेतरक्तविषा वृषा । पाचनी दीपनी चातिपचा (प्रति) विषा स्मृता॥**

घुणवल्लभा, घुणेष्टा, घुणप्रिया, शृङ्गिका, शुककन्दा, विषम, उपविषा, अतिविषा, विषा, विश्वा र माद्री : यी अतीसका नाम हुन् । दोश्रो थरी अतीस रातो हुन्छ । दुवै थरी अतीस वीर्यवर्धक, पाचनी, दीपनी र अति नै पचाउने गुणका हुन्छन् ।



*Aconitum heterophyllum* Wall. ex Royle (payer.de/amarakosa)

**(ख) अभिधान रत्नमाला :**

**भङ्गुराऽतिविषा शृङ्गी शुक्लकन्दा घुणप्रिया ।**
**द्वितीया प्रत्युपविषा श्वेतरक्तविषाऽविषा॥**

भङ्गुरा, अतिविषा, शृङ्गी, शुक्लकन्दा र घुणप्रिया : यी अतीसका नाम हुन् । दोश्रो थरी अतीसलाई प्रत्युपविषा, श्वेतरक्तविषा र अविषा भनिन्छ ।

**(ग) अमरकोश :**

**विश्वा विषा प्रतिविषाऽतिविषोपविषारुणा । शृङ्गी महौषधं...॥**

विश्वा, विषा, प्रतिविषा, अतिविषा, उपविषा, अरुणा, शृङ्गी र महौषध : यी उत्तिस (अतीस) का नाम हुन् ।

**(घ) अष्टाङ्ग निघण्टु :**

**भङ्गुरातिविषा माद्री शुक्लकन्दा घुणप्रिया । द्वितीया तु प्रतिविषा श्वेतरक्तविषा मता ॥**

भङ्गुरा, अतिविषा, माद्री, शुक्लकन्दा र घुणप्रिया : यी अतीसका नाम हुन् । दोश्रो थरी अतीसलाई प्रतिविषा र श्वेतरक्तविषा भनिन्छ ।

**(ङ) कैयदेव निघण्टु :**

**अतिविषा शुक्लकन्दाऽपरा प्रतिविषा विषा । लघुप्रिया घुणा माद्री श्यामकन्दा सितारुणा ॥**
**भङ्गुरोपविषा विश्वा शृङ्गी चोपविषाणिका । विषा सोष्णा लघुस्तिक्ता दीपनी पाचनी जयेत् ॥**
**कफपित्तातिसारामविषकासवमिकृमीन् ।**



*Aconitum heterophyllum* Wall. ex Royle (payer.de/amarakosa)

अतिविषा र शुक्लकन्दा यी सेतो कन्द हुने अतीसका नाम हुन् । प्रतिविषा, विषा, लघुप्रिया, घुणा, माद्री, श्यामकन्दा, सितारुणा, भङ्गुरा, उपविषा, विश्वा, शृङ्गी र उपविषाणिका : यी कालो कन्द हुने अतीसका नाम हुन् । अतीस उष्णवीर्यको, पचाउन सहज, तीतो, दीपनी र पाचनी हुन्छ । यसले कफविकार, पित्तविकार, अतिसार, आमविकार, विषविकार, खोकी, वाकवाकी र कीरालाई जित्दछ ।

**(च) धन्वन्तरि निघण्टु :**

**अतिविषा शुक्लकन्दा ज्ञेया विश्वा च भङ्गुरा ॥ श्यामकन्दा प्रतिविषा शृङ्गी चोपविषा विषा ।**
**आर्द्रा श्वेता विरूपा च विषदा पित्तवल्लभा ॥ घुणप्रियाऽतिसारघ्नी बालानां रोगनाशिनी ।**

अतीस दुई थरी हुन्छ । शुक्लकन्दा, विश्वा र भङ्गुरा : यी सेतो कन्द हुने अतीसका तथा श्यामकन्दा, प्रतिविषा, शृङ्गी, उपविषा, विषा, आर्द्रा, श्वेता, विरूपा, विषदा, पित्तवल्लभा, घुणप्रिया, अतिसारघ्नी र बालरोगनाशिनी : यी कालोकन्द हुने अतीसका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**कटूष्णाऽतिविषा तिक्ता कफपित्तज्वरापहा ॥ आमातीसारकासघ्नी विषच्छर्दिविनाशिनी ।**

अतीस पिरो, उष्णवीर्यको, तीतो तथा कफविकार, पित्तविकार, जरो, आमविकार जन्य अतिसार, खोकी, विषविकार र वाकवाकी नाशक हुन्छ ।

**(छ) निघण्टु रत्नाकर (शा.नि.) :**

**त्रिप्रकारं चातिविषं किञ्चिदुष्णं च तिक्तकम् । अग्निदीप्तिकरं ग्राहि त्रिदोषाणां च पाचकम्॥**
**कफपित्तज्वरामातिसारकासविषापहम् ।**
**यकृद्वान्तितृषां चैव कृमिनर्शांश्च पीनसम्॥**
**पित्तोदरं चातिसारं हर्षाव्याधि हरं मतम् ।**

निघण्टु रत्नाकर (शालि.नि.) : तीन किसिमका अतीस केही उष्णवीर्यका, तीता, पाचनशक्ति बढाउने, ग्राहि, त्रिदोषलाई पचाउने तथा कफविकार, पित्तविकार, जरो, आमातिसार, खोकी र विषविकार नाशक हुन्छ । यसले फियोका रोग, वाकवाकी, तिर्खा लागिरहने रोग, पेटका कीरा, अल्काई, पिनास, पित्तोदर (पित्त बिग्रेर हुने पेटको रोगविशेष), अतिसार र सबै किसिमका रोग नाश गर्दछ ।

**(ज) निघण्टुशेष :**

**अतिविषायां तु विश्वा भङ्गुरा श्वेतकन्दिका । उपविषा श्यामकन्दा शृङ्गी प्रतिविषा विषा॥**

अतिविषा, विश्वा, भङ्गुरा र श्वेतकन्दिका तथा उपविषा, श्यामकन्दा, शृङ्गी, प्रतिविषा र विषा : यी अतीसका नाम हुन् ।

**(झ) पर्याय रत्नमाला :**

**काश्मीरातिविषा श्वेता विषा प्रतिविषारुणा॥**

काश्मीरा, अतिविषा, श्वेता, विषा, प्रतिविषा र अरुणा : यी अतीसका नाम हुन् ।

**(ञ) भावप्रकाश निघण्टु :**

**विषा त्वतिविषा विश्वा शृङ्गी प्रतिविषाऽरुणा॥ शुक्लकन्दा चोपविषा भङ्गुरा घुणवल्लभा ।**
**विषा सोष्णा कटुस्तिक्ता पाचनी दीपनी हरेत्॥ कफपित्तातिसारामविषकासवमिकृमीन् ।**

विषा, अतिविषा, विश्वा, शृङ्गी, प्रतिविषा, अरुणा, शुक्लकन्दा, उपविषा, भङ्गुरा र घुणवल्लभा : यी अतीसका नाम हुन् । यसले गर्मी गर्दछ । यो पिरो र तीतो हुन्छ । यो पाचनी र दीपनी हुन्छ । यसले कफविकार, पित्तविकार, अतिसार, आमविकार, विषविकार, खोकी, वाकवाकी र कीरा नाश गर्दछ ।

(ट) **मदनपाल निघण्टु :**

**अतिविषा शुक्लकन्दा विषा प्रतिविषाऽपरा । श्यामकन्दा शिता श्रृङ्गी भङ्गुरोपविषाणिका॥**
**विषोष्णा पाचनी तिक्ता श्लेष्मपित्तातिसारजित् । श्यामकन्दा चोपविषा सा विज्ञेया चतुर्विधा॥**
**रक्ता श्वेता भृशं कृष्णा पीतवर्णा तथैव च । यथापूर्वं च विज्ञेया बल्या श्रेष्ठा गुणोत्तमा॥**
**सर्वदोषहराऽग्र्यत्वाल्लेपात् श्वयथुनाशिनी । श्लेष्मजान् विंशतिरोगान् सद्यो हन्याद्रसायनी॥**

अतिविषा, शुक्लकन्दा, विषा, प्रतिविषा, श्यामकन्दा, शिता, श्रृङ्गी भङ्गुरा र उपविषाणिका : यी अतीसका नाम हुन् । यो गर्मी गर्ने, पाचनी, तीतो तथा कफविकार, पित्तविकार र अतिसार नाश गर्ने गुणको हुन्छ । श्यामकन्दा वा उपविषा अर्थात् अतीस रातो, सेतो गाढा कालो र पहेँलो गरी चार प्रकारको हुन्छ । यी क्रमैले कम गुनिला र कम श्रेष्ठ हुन्छन् । यसले उत्तम भई सबै दोष गर्दछ । दल्नाले सुजन ठिक गर्दछ । यसले कफजन्य बीस किसिमका रोगहरू तुरुन्त ठिक गर्दछ । यो रसायनी हुन्छ ।

(ठ) **मदनादि निघण्टु :**

**शुक्लकन्दा अतिविषा भङ्गुरा घुणवल्लभा । प्रतिविषाश्यामकन्दा विषामाद्रिक च शृङ्गिका॥**
**दीपनी पाचनी शीता कफपित्तविनाशिनी । आमातिसारशमनी कृमिघ्नाऽतिविषापहा॥**

शुक्लकन्दा, अतिविषा, भङ्गुरा र घुणवल्लभा तथा प्रतिविषा, श्यामकन्दा विषामाद्रिक र शृङ्गिका : यी अतीसका नाम हुन् । यो दीपनी, पाचनी, शीतवीर्यको तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यसले आमविकार र अतिसारलाई शान्त पार्दछ, कीरा नाश गर्दछ र कडा विषविकारलाई नाश गर्दछ ।

(ड) **माधव द्रव्यगुण :**

**दोषघ्नं पाचनं ग्राही तिक्तं चातिविषाद्वयम्॥**

दुई थरी अतीस त्रिदोष नाशक, पाचनी, ग्राही र तीतो स्वादका हुन्छन् ।

(ढ) **राज निघण्टु :**

**अतिविषा श्वेतकन्दा विश्वा शृङ्गी च भङ्गुरा । विरूपा श्यामकन्दा च विश्वरूपा महौषधी॥**
**वीरा प्रतिविषा चान्द्री विषा श्वेतवचा स्मृता । अरुणोपविषा चैव ज्ञेया सप्तदशाह्वया॥**
**कटूष्णाऽतिविषा तिक्ता कफपित्तज्वरापहा । आमातीसारकासघ्नी विषच्छर्दिविनाशनी॥**

(१) अतिविषा, (२) श्वेतकन्दा, (३) विश्वा, (४) शृङ्गी, (५) भङ्गुरा, (६) विरूपा, (७) श्यामकन्दा, (८) विश्वरूपा, (९) महौषधी, (१०) वीरा, (११) प्रतिविषा, (१२) चान्द्री, (१३) विषा, (१४) श्वेतवचा, (१५) अरुणा र (१६) उपविषा : यी सत्र नाम अतीसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो,

उष्णवीर्यको, तातो तथा कफविकार, पित्तविकार र ज्वर नाशक हुन्छ । यसले आमविकार, अतिसार, खोकी, विषविकार र वाकवाकी नाश गर्दछ ।

**त्रिविधाऽतिविषा ज्ञेया शुक्ला कृष्णा तथारुणा । रसवीर्यविपाकेषु निर्विशेषगुणा च सा॥**

अतीस सेतो, कालो र रातो (अरुण) गरी तीन प्रकारको हुन्छ । यी तीन थरी अतीसको रस, वीर्य र विपाक समान हुन्छ ।

**दोलायां गोमयक्वाथे पचेदतिविषां ततः । सूर्यतापे भवेच्छुष्का योजयेत् तां भिषग्वरः॥**

अतीसलाई गोबरको काँडापानीमा दोलायन्त्रमा राखी पकाउनू । यसरी राख्दा अतीसले भाँडाको पिँधलाई छुनु हुँदैन । यसपछि (राम्ररी उम्लेपछि) निकाली अतीसलाई घाममा सुकाउनू र विज्ञ-वैद्यले ओखतीका लागि यसको प्रयोग गर्नू ।

**(ण) राजवल्लभ निघण्टु :**

**पाचन्यतिविषा तिक्ता ग्राहिणी दोषनाशिनी॥**

अतीस पाचनी, तीतो, ग्राही र त्रिदोष नाशक हुन्छ ।

**(त) शालिग्राम निघण्टु :**

**काश्मीराऽतिविषा श्वेता विषा प्रतिविषाऽरुणा॥**



काश्मीरा, अतिविषा, श्वेता, विषा, प्रतिविषा र अरुणा : यी अतीसका नाम हुन् ।

**(थ) सरस्वती निघण्टु :**

**विश्वा विषा शुक्लकन्दा सविषा विषगन्धिनी । विषरूपा श्वेतविषा सुगन्धा च घुणप्रिया॥**

विश्वा, विषा, शुक्लकन्दा, सविषा, विषगन्धिनी, विषरूपा, श्वेतविषा, सुगन्धा र घुणप्रिया : यी अतीसका नाम हुन् ।

**(थ) सोढल निघण्टु :**

**कषाया भङ्गुरा विश्वातिविषोपविषाह्वया॥**
**श्यामकन्दा प्रतिविषा विरूपा घुणवल्लभा । अरुणा मध्यदेशस्था कृष्णा माद्री च शृङ्गिका॥**
**मृद्वी च शिशुभैषज्यं विषरूपं महौषधम् । शोफापहातिसारघ्नी शुक्लकन्दा तथा स्मृता॥**

कषाया, भङ्गुरा, विश्वा, अतिविषा, उपविषा, श्यामकन्दा, प्रतिविषा, विरूपा र घुणवल्लभा : यी अतीसका तथा अरुणा, कृष्णा, माद्री र शृङ्गिका : यी मध्यदेशतिर हुने अतीसका नाम हुन् । अतीस वालकको उपचारका लागि कोमल हुन्छ । यो विषालु र महाऔषधी पनि हुन्छ । सेतो कन्द हुने अतीसले सुजन र अतिसार नाश गर्दछ ।

**(द) सौश्रुत निघण्टु :**

**अतिविषा चोपविषा शृङ्गीका घुणवल्लभा । तथा श्वेतविषा चापि विषरूपा च शब्दिता ॥**

अतिविषा, उपविषा, शृङ्गीका, घुणवल्लभा तथा श्वेतविषा र विषरूपा : यी अतीसका नाम हुन् ।

**(ध) हृदयदीपक निघण्टु :**
**घुणप्रियाऽरुणा माद्रिर्विषा प्रतिविषाऽपरा ॥ शुक्लकन्दा चातिविषा...।**

घुणप्रिया, अरुणा, माद्रि, विषा र प्रतिविषा : एक थरी अतीसका तथा शुक्लकन्दा र अतिविषा : यी अर्को थरी अतीसका नाम हुन् ।

## आंतसार (छेरपटी)
## Diarrhea

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश (अतिसार) : खाएका कुरा नपची पातलो दुर्गन्धी दिसा भइरहने रोग; आउँको रोग ।

(ख) अतिसारलाई अंग्रेजीमा Diarrhea वा Scouring भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अमरकोश :**

**...ग्रहणीरुक् प्रवाहिका ।**

ग्रहणी (ग्रहणीरुज्) र प्रवाहिका : यी ग्रहणीका नाम हुन् ।

**(ख) अष्टाङ्ग हृदय :**



**...तद्विधैः कुपितोऽनिलः ।**
**विस्रंसयत्यधोऽब्धातुं हत्वा तेनैव चानलम्॥**
**व्यापद्यानुशकृत्कोष्ठं पुरीषं द्रवतां नयन् । प्रकल्पतेऽतिसाराय ...॥**

उल्लेखित (विविध) कारणले उत्तेजित भएको वायुले शरीरमा रहेको जल धातुलाई तल्लो भाग अर्थात् तल्लो आन्द्रातिर लैजान्छ । यसले गर्दा जठराग्निलाई मन्द बनाउँदै त्यसपछि मलाशयलाई विकृत पारी दिसालाई पातलो बनाएर अतिसार नामक रोग उत्पन्न हुन पुग्दछ ।

**(ग) भावप्रकाश संहिता :**

**संशम्यापां धातुरग्निं प्रवृद्धो वर्चोमिश्रो वायुनाऽध प्रणुन्नः ।**
**सरत्यतीवातिसारं तमाहुर्व्याधिं घोरं ...।**

रस, जल, पिसाब, पसिना, भित्री बोसो, कफ, पित्त र रगत आदि तरल धातु बढी पेट भित्रको अग्निलाई बुझाउँदै वा निभाउँदै दिसासँग मिली हावाका बलले मलद्वार हुँदै दिसाका रूपमा खस्न थाल्दछ । यसरी प्रेरित भएको धातु आफ्नो स्वभावलाई छाडी नदी जसरी बग्दै तल्लो भागबाट निस्कन्छ । यस्तो रोगलाई अति डरलाग्दो अतिसार रोग भनिन्छ ।

(घ) **चरक सांहेता :**

**भगवन्तं खल्वात्रेयं कृताह्निकं हुताग्निहोत्रमासीनमृषिगणपरिवृतमुत्तरे हिमवतः पार्श्वे विनयादुपेत्याभिवाद्याग्निवेश उवाच-भगवन्नतीसारस्य प्रागुत्पत्तिनिमित्तलक्षणोपशमनानि तु प्रजानुग्रहार्थमाख्यातुमर्हसीति॥**

कुनै समयमा जब भगवान् आत्रेय नित्यकर्म र होम सकी हिमालयका काखमा ऋषिहरूले घेरिएर बस्नु भएको थियो तब शिष्य अग्निवेशले नम्रतापूर्वक नजिकै आएर अभिवादन गरी भने-"हे भगवन् ! प्रजाको अनुग्रहका लागि हजुर अतीसारको पहिलो उत्पत्ति, यसको लक्षण र उपचारका बारेमा उपदेश दिनुहवस् ।" ।

**अथ भगवान् पुनर्वसुरात्रेयस्तदग्निवेशवचनमनुनिशम्योवाच-श्रूयतामग्निवेश सर्वमेतदखिलेन व्याख्यायमानम्-आदिकाले खलु यज्ञेषु पशवः समालम्भनीया बभूवुर्नालम्भाय प्रक्रियन्ते स्म, ततो दक्षयज्ञं प्रत्यवरकालं मनोः पुत्राणां नरिष्यन्नाभागेक्ष्वाकुरिष्टशर्यात्यादीनां क्रतुषु पशूनामेवाभ्यनुज्ञानात् पशवः प्रोक्षणमवापुः, अतश्च प्रत्यवरकालं पृषध्रेण दीर्घसत्रेण यजता पशूनामलाभाद् गवामालम्भः प्रवर्तितः (प्रदर्शितः), तं दृष्ट्वा प्रव्यथिता भूतगणाः, तेषां चोपयोगादुपाकृतानां गवां गौरवादौष्ण्यादसात्म्यत्वादस्तोपयोगात्स्वाद्वनुपयोगाच्चोपहताग्नी-नामुपहतमनसां चातीसारः पूर्वमुत्पन्नः पृषध्रझे॥**

अग्निवेशको यस्तो प्रश्न सुनेपछि भगवान् पुनर्वसु आत्रेयले भन्नुभयो-"हे अग्निवेश ! सुन । म यस सबै विषय पूरै बताउँदछु ।" । प्राचीन कालमा निश्चय नै यज्ञमा पशुहरूलाई स्पर्श योग्य अथवा पूजाका लागि केसर आदि दल्न योग्य मानि गर्दथ्यो । तिनलाई मारिँदैनथ्यो । दक्षप्रजापति भन्दा पछिको समयमा इक्ष्वाकु, रिष्ट, शर्याति आदि मनुका पुत्रहरूले गरेको यज्ञमा पशुहरूको नै बलि दिन अनुमति दिइएका कारण तिनलाई बलि दिन थालियो । यसभन्दा पनि पछि राजा पृषध्र (यी पनि मनुकै पुत्र थिए) का पालामा लामो समयमा सकिने खालको दीर्घसत्र नामक यज्ञको आयोजना गरियो । त्यस यज्ञमा बलि दिनका लागि जब अन्य पशुहरू पाउन नसकिने स्थिति आयो तब त्यसबेला गाईलाई मारेर बलि दिइयो । यस्तो देखेर सबै प्राणी अत्यन्त दुखित भए । त्यसबेला गाईहरू अभिमन्त्रित गरेर मारिए । गाईको मासु जो पचाउन कठिन, उष्णवीर्यको तथा अप्राकृतिक हुने हुनाले त्यसको प्रयोग गर्नु सही थिएन । यो स्वादिलो पनि थिएन । यसरी त्यसबेला गाईको मासु खाएका कारण खाने जतिको शरीर भित्रको अग्नि कमजोर भयो । यसले गर्दा तथा मानसिक आघात परेका कारण पृषध्र राजाको उक्त यज्ञबाट नै सर्वप्रथम अतिसार वा छेरपटी रोगको उत्पत्ति भएको थियो ।

(ङ) **सुश्रुत संहिता :**

**संशम्यापां धातुरन्तः कृशानुं वर्चोमिश्रो मारुतेन प्रणुन्नः ।**
**वृद्धोऽतीवाधः सरत्येष यस्माद्व्याधिं घोरं तं त्वतीसारमाहुः॥**

अति बढेको जलीय गुणको शरीरको धातु (कफ, रस, पित्त, भित्री बोसो, रगत, पसिना, पिसाब) आन्तरिक पाचक अग्नि (अथवा १३ थरी शरीर भित्रका अग्नि) लाई मन्द वा कमजोर पारी दिसासँग

मिलेर वा मिसिएर वायुबाट प्रेरित भई मलद्वार हुँदै प्रशस्त मात्रामा बाहिर निस्कन्छ । यसैले यो डरलाग्दो रोगलाई अतिसार भनिन्छ ।

**(च) राज निघण्टु :**

**मलवेगस्त्वतीसारो ग्रहणीरुक् प्रवाहिका ।**

तारन्तार दिसा लागिरहने रोगलाई मलवेग वा अतीसार वा ग्रहणी वा प्रवाहिका भनिन्छ ।

# अत्यम्लपर्णी
# (Atyamlaparnee)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) अत्यम्लपर्णी : चर्चरे । जोगे लहरो । पुनरी । (२) तीक्ष्णा : चर्चरे लहरो । पुरनी । (३) करवडा : चर्चरे लहरो । जोगे लहरो । (४) वनस्था : चर्चरे लहरो । (५) अरण्यवासिनी : चर्चरे लहरो । जोगे लहरो । पुरेनी ।



अत्यम्लपर्णी, *Vitis pentaphylla*

(ख) नेपाली बृहत् शब्दकोश : (१) पुरनी : लाम्चा पात, काला गोला फल र राता डाँठ हुने, आयुर्वेदमा रुचिकारक र पथ्य गुण बताइएको एक जातको अङ्गुर वा दाखजातिको लहरो; सुपर्णी; पलाशी; पुरुनी । (२) जोगे लहरो : कोक्याउने र अमिलो स्वाद हुने एक प्रकारको जङ्गली लहरो । (३) चर्चरे : च्याप्टो प्रकारको डाँठ भएको ससाना राता फूल फुल्ने र काला गेडा हुने एक जङ्गली लहरो ।




अत्यम्लपर्णीको बिरुवा (श्रोत : कुशवाहा आयुर्वेदको युटयुब भिडियो)

(ग) बाबाआयुर्वेदडटकम : यसलाई संस्कृतमा अत्यम्लपर्णी, कण्डुला, अम्लवेतस र गन्धीराह भनिन्छ । यसैगरी हिन्दीमा रामचना र ल्याटिन भाषामा *Vitis Carnosa* वा *Cayratia Trifolia* भनिन्छ । यसलाई अंग्रेजीमा Bush Grape भनिन्छ ।

(घ) हिन्दी विश्वकोश : (१) अत्यम्लपर्णी : अत्यम्लानि पर्णानि पत्राणि यस्याः , वल्लिसूरण (चर्चरे) लताविशेष । अम्ललोनी; खट्टी चौपतिया । यो लहरामा गोलाकार अमिलो रसका चार-चार पात एक-एक भेट्नामा लागेका हुन्छन् । (२) तीक्ष्णा : अत्यम्लपर्णी लता । (३) कण्डु(रा)ला : अति

अमिलो पात हुने एक लहरा; अत्यम्लपर्णी । (४) वल्लिशूरणा : वल्लिप्रधानः शूरणः । अत्यम्लपर्णी, रामचना । (५) बरबडावल्ली : अत्यम्लपर्णी, वल्लीपूरन । (६) अरण्यवासिनी : अत्यम्लपर्णी लता, अमरवेल ।



अत्यम्लपर्णी (श्रोत : बाबा आयुर्वेदको यूटघुब भिडियो)

(ङ) कामत द्वय : यसलाई हिन्दीमा रामचना तथा ल्याटिन भाषामा *Vitis pentaphylla* भनिन्छ । यसको लहरा ठूलो हुन्छ । एक एक डाँठमा पाँच-पाँच पात हुन्छन् । झुप्पामा फल लाग्दछ । यसको लहरा पात सबै अमिलो हुन्छ ।

(च) धन्वन्तरि निघण्टुले पञ्चसू(शू)रणमा अत्यम्लपर्णीलाई गणना गरेको छ ।

कसैले तीनपाते, कसैले चारपाते त कसैले पाँचपाते लहरालाई अत्यम्लपर्णी भनी परिभाषा दिएको पाइन्छ । यसको गाना घोटेर लेप बनाइ कपासमा हालेर टाँस्नाले हरेक किसिमका दाद र लुतो नास हुन्छ पनि भनिन्छ तर आधिकारिक श्रोतमा यी कुरा लेखिएको हालसम्मको सङ्कलनमा पाइएन । समग्रमा भन्नुपर्दा अत्यम्लपर्णीको सर्वसम्मत पहिचान भइसकेको देखिँदैन ।





अत्यम्लपर्णी (श्रोत : आयुर्वेद एक्सपर्टको यूटघुब भिडियो)

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**अत्यम्लपर्णी तीक्ष्णा च कण्डुला वल्लिसूरणा । वल्ली करवडादिश्च वनस्थाऽरण्यवासिनी ॥**
**अत्यम्लपर्णी तीक्ष्णाम्ला प्लीहशूलविनाशनी । वातहृद्दीपनी रुच्या गुल्मश्लेष्मामयापहा ॥**

अत्यम्लपर्णी, तीक्ष्णा, कण्डुला, वल्लिसूरणा, वल्ल, करवडादि, वनस्था र अरण्यवासिनी : यी अत्यम्लपर्णीका नाम हुन् । यो तिक्खर, अमिलो तथा फियोका रोग, शूल र वातविकार नाशक हुनुका साथै दीपनी, रुचिकर तथा गुल्म र कफविकारजन्य रोग नाशक हुन्छ ।


अत्यम्लपर्णीको कन्द (श्रोत : बाबा आयुर्वेदको यूटयुब भिडियो)

**(ख) शालिग्राम निघण्टु :**

**अत्यम्लपर्णी तीक्ष्णा च कण्डूरा वल्लिसूरणा । वल्लीकरवडादिश्च वनस्थारण्यवासिनी ॥**

अत्यम्लपर्णी, तीक्ष्णा, कण्डूरा, वल्लिसूरणा करवडवल्ली, वनस्था र अरण्यवासिनी : यी अत्यम्लपर्णीका नाम हुन् ।

## आंधेप वा आंधेपांते
## (Confluence of sinuses)

(क) **अष्टाङ्ग हृदय :**

**आन्तरो मस्तकस्योर्ध्वं सिरासन्धिसमागमः॥ रोमावर्तोऽधिपो नाम मर्म सद्यो हरत्यसून्।**

टाउको भित्र, माख्लो भागमा सिराहरूको सङ्गमस्थल रहेको स्थान जहाँ बाहिरतिर भुमरी हुन्छ त्यसलाई 'अधिप' मर्मस्थल भनिन्छ। यहाँका नसा छिनिए मानिसको तुरुन्त मृत्यु हुन्छ।

(ख) **सुश्रुत संहिता :**

**मस्तकाभ्यन्तरत उपरिष्टात् सिरासन्धिसन्निपातो रोमावर्तोऽधिपतिः तत्रापि सद्य एव।**

टाउको भित्र माख्लो भागमा जहाँ बाहिर कपालको भुमरी परेको हुन्छ त्यहाँ सिराहरू जोडिने 'अधिपति' नामक मर्मस्थल हुन्छ। यहाँ छेडिए वा चोट लागे मानिसको तुरुन्त मृत्यु हुन्छ।

# आंधमन्थ (आँखाको रोगविशेष)
# (Glaucoma)

(क) **अष्टाङ्ग हृदय :**

**...सोऽभिष्यन्द उपेक्षितः ॥ अधिमन्थो भवेत् तत्र कर्णयोर्नदनं भ्रमः ।**
**अरण्येव च मथ्यन्ते ललाटाक्षिभ्रुवादयः ॥ हताधिमन्थः सोऽपि स्यात् प्रमादात् तेन वेदनाः ।**

आँखाको वातजन्य अभिष्यन्द रोगको उपेक्षा गर्नाले अथवा समयमा उपचार नगर्नाले अधिमन्थ नामक रोग हुन पुग्दछ वा हुन सक्दछ । यो रोग हुँदा कान गुञ्जिन्छ, टाउको रिँगटा लागेर घुम्दछ अनि टाउको, आँखा र आँखीभौँमा मदानीले मथेको जसरी अति धेरै पीडा हुन्छ ।

(ख) **भावप्रकाश संहिता :**

**उत्पाटयत इवात्यर्थं तथा निर्मथ्यतेऽपि च । शिरसोऽर्द्धं तु तं विद्यादधिमन्थं स्वलक्षणैः ॥ स्वलक्षणैः-यथोक्तवातादिकृताभिक्ष्यन्दलक्षणैरधिमन्यं विद्यात् । अभिक्ष्यन्देभ्योऽधिमन्थानां भेदार्थमाह-शिरसोऽर्द्धमुत्पाटयत इव तथा निर्मथ्यतेऽपिचेति चतुर्ष्वधिमन्थेषु बोद्धव्यम् । शिरसोऽर्द्धवेदना व्याधिप्रभावात्॥**

जुन् अधिमन्थ रोग जुन् अभिष्यन्द रोगबाट उत्पन्न भएको हुन्छ त्यो अधिमन्थमा त्यही अभिष्यन्दका सबै लक्षण हुनुका साथै आधा टाउको उखेलिन लागेको जसरी तथा मथिएको जसरी अति दुख्ने गर्दछ । टाउकाको आधा भाग उखेलिएको जस्तो हुनु तथा मथे जसरी दुख्नु नै अभिष्यन्द र अधिमन्थमा हुने भिन्नता हो । यो बेग्लै लक्षण चारै थरी अधिमन्थमा उस्तै हुन्छन् । टाउकाको आधा भाग रोगको वेदनाले गर्दा दुख्दछ भनी थाहा पाउनू ।

## आंधमांसक (गिजाको रोगविशेष
## (A sort of cancer in the back of the gums)

(क) **अष्टाङ्ग हृदय :**

**दन्तान्ते कीलवच्छोफो हनुकर्णरुजाकरः॥ प्रतिहन्त्यभ्यवहृतिः श्लेष्मणा सोऽधिमांसकः ।**

कफविकारका कारण दाँतको लहरको अन्तिम दाँतको जरामा कीलोजस्तो कडा सुजन भई च्यापुका हाड र कान समेत दुख्ने रोगलाई 'अधिमांसक' भनिन्छ । यसले खान र चबाउन समस्या हुने गर्दछ ।

(ख) **सुश्रुत संहिता, भावप्रकाश संहिता :**

**हानव्ये पश्चिमे दन्ते महाशोथो महारुजः । लालास्रावी कफकृतो विज्ञेयः सोऽधिमांसकः॥**
**हानव्ये-हनुभवे । पश्चिमे दन्ते-अन्तजे ।**

कफविकारका कारण तल्लो च्यापुको अन्तिम बङ्गारामा अति दुखाउने तथा पानी आदि बहिरहने खालको सुजन हुने गिजाको रोगलाई 'अधिमांसक' भनिन्छ ।

# आंधमांसार्म (आँखाको रोगविशेष)
# (An eye disease)

(क) **अष्टाङ्ग हृदय :**

**शुष्कासृक्पिण्डवच्छ्यावं यन्मांसं बहलं पृथु॥ अधिमांसार्म, ...।**

आँखाको सेतो भागमा सुकेको रगत जस्तो वर्णको, मोटो, फराकिलो र केही कुरा ओछ्याइएको जस्तो जुन् मासुसहितको चिह्न देखिन्छ त्यसलाई 'अधिमांसार्म' भनिन्छ ।

(ख) **भावप्रकाश संहिता :**

**पृथु मृद्वधिमांसार्म बहलञ्च यकृन्निभम्॥**
**पृथु-विस्तीर्णम्। बहलं-पुष्टम्। यकृन्निभम्-ईषत्कृष्णलोहितम्।**

आँखाको सेतो भागमा फराकिलो, कोमल, गाढा र केही कालोपन सहितको रातो जुन् मासु बढ्दछ त्यसलाई 'अधिमांसार्म' भनिन्छ ।

## अध्यर्बुद र द्विरर्बुद (रोगविशेष)
## (A tumour, Goitre)

(क) **सुश्रुत संहिता :**

**यज्जायतेऽन्यत् खलु पूर्वजाते ज्ञेयं तदध्यर्बुदमर्बुदज्ञैः ।**
**यद्दे द्वन्द्वजातं युगपत् क्रमाद्वा द्विरर्बुदं तच्च भवेदसाध्यम् ॥**

पहिले नै अर्बुद रोग हुँदाहुँदै थप अर्बुद उत्पन्न भए त्यसलाई अर्बुदका विज्ञ वैद्यले 'अध्यर्बुद' भनी जान्नू । एउटै समयमा अथवा अगिपछि गरेर दुई वटा उत्पन्न भएको अर्बुद रोगलाई 'द्विरर्बुद' भनिन्छ । यी निको नहुने खालका हुन्छन् ।

## अनाजका ।कांसम
## (Types of cereals)

(क) **राज निघण्टु :**

**तच्च तावत् त्रिधा ज्ञेयं शूकशिम्बीतृणाह्वयम्॥**

अनाज शूक, शिम्बी र तृण गरी तीन प्रकारका हुन्छन् ।

(ख) **भावप्रकाश निघण्टु :**

**शालिधान्यं व्रीहिधान्यं शूकधान्यं तृतीयकम् । शिम्बीधान्यं क्षुद्रधान्यमित्युक्तं धान्यपञ्चकम्॥**

शालि, व्रीहि, शूक, शिम्बी र क्षुद्र गरी पाँच किसिमका अनाज (धान्य) हुन्छन् ।

## अनाजको तेल
## (Cereals-oil)

### (क) राज निघण्टु :

**गोधूमयावनालव्रीहियवाद्यखिलधान्यजं तैलम् ।**
**वातकफपित्तशमनं कण्डूकुष्ठादिहारि चक्षुष्यम् ॥**

गहुँ, जुनेलो, व्रीहि (धान विशेष), जौ आदि समस्त अनाजजन्य तेलले वातविकार, कफविकार पित्तविकारलाई शान्त पार्दछ । यो तेल लुतो, कुष्ठ जस्ता रोग नाशक र आँखाका लागि हितकारी हुन्छ ।

## अनिच्छा
(Unwill)

(क) **नेपाली बृहत् शब्दकोश :**

अनिच्छा : इच्छाको अभाव वा कमी; चाहनाको अभाव वा कमी; अरुचि; अमन; वितृष्णा । अनिच्छित : इच्छा नगरिएको; चाहना नगरिएको; रुचि नराखिएको; अवाञ्छित । अनिच्छ वा अनिच्छुक : इच्छा, रुचि वा चाहना नभएको; खायस नराख्ने ।

(ख) **राज निघण्टु :** अनभिलाष र अश्रद्धा : यी अनिच्छाका पर्यायवाची नाम हुन् ।

(ग) अनिच्छालाई अंग्रेजीमा Reductance, Unwillingness, Disinclination वा Unwill भनिन्छ ।

# अनुपान
# (Anupaana)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) अनुपान : औषधिको साथै या ओखती खाने बितिकै खाइने वा पिइने वस्तुलाई अनुपान भनिन्छ । (२) पाचन : खाएको चिज पचाउने । (३) पाचनम् : खाएको कुरा पचाउने ओखती ।

(ख) नेपाली बृहत् शब्दकोश (अनुपान वा अनुपाम) : आयुर्वेदिक औषधीमा एक औषधीका साथसाथै मिसाइएको कुनै अर्को औषधी । औषधी खाएपछि वा साथसाथै खाइने अर्को औषधी वा खाद्य वस्तु । औषधीको ठिक्क अड्कलिएको मात्रा ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अष्टाङ्ग हृदय :**

**अनुपानं हिमं वारि यवगोधूमयोर्हितम्॥**
**दध्नि मद्ये विषे क्षौद्रे, कोष्णं पिष्टमयेषु तु । शाकमुद्गादिविकृतौ मस्तुतक्राम्लकाञ्जिकम्॥**
**सुरा कृशानां पुष्ट्यर्थं स्थूलानां तु मधूदकम् । शोषे मांसरसो, मद्यं मांसे स्वल्पे च पावके॥**
**व्याध्यौषधाध्वभाष्यस्त्रीलङ्घनातपकर्मभिः । क्षीणे वृद्धे च बाले च पयः पथ्यं यथाऽमृतम्॥**

गहुँ, जौ, दही, मद्य, विष (वा विषालु पदार्थ)र मह वा औषधीको अनुपान चिसो पानी हो । पिठोले बनाइएका खाद्य पदार्थको अनुपान मनतातो पानी हो । अनेक किसिमका सागपात तथा मुँगी, माष आदिले बनाइएका खाद्य पदार्थको अनुपान दही फटाइएको पानी, लस्सी वा अमिलो काँजी हो । दुब्लो मानिसलाई मोटो बनाउन मदिरा र मोटो मानिसलाई दुब्लो बनाउन मह-पानी अनुपान हुन्छ । क्षयरोगमा मासुको झोल अनुपान हुन्छ । मासु खाएपछि पाचन शक्ति कमजोर हुँदा अनुपानका लागि मद्य पिउन दिनु । रोगी, औषधी खाइरहेका व्यक्ति, हिँडेर थकित भएका व्यक्ति, भाषण गरेर थाकेको व्यक्ति, ग्राम्यधर्मले लखतरान भएका व्यक्ति, शरीरलाई स्वस्थ बनाउन खोज्दा कमजोर भएका व्यक्ति (लङ्घन), गर्मीले आलसतालस परेका व्यक्ति, काम गरेर कमजोर भएका व्यक्ति, बालक र वृद्ध-यि सबैलाई अनुपानमा दूध पिउन दिनु, अमृत सरह लाभदायी हुन्छ ।

नोट : अनुपान-औषधीसँगै वा औषधी खाएपछि पिइने कुरा (शब्दकल्पद्रुम) । यहाँ (खाना खाने प्रसङ्गमा) कुनै कुरा खाएपछि त्यसको प्रभावकारिता वृद्धि गर्न त्योसँगै वा त्यसपछि पिइने कुरालाई अनुपान भनी बुझ्नु पर्दछ ।

**विपरीतं यदन्नस्य गुणैः स्यादविरोधि च । अनुपानं समासेन, सर्वदा तत्प्रशस्यते॥**

खाइएको आहारको विपरीत गुण भएको तर अविरोधी अनुपानलाई प्रशंसनीय अनुपान मानिन्छ ।

व्याख्या :- ठण्डी गर्ने आहारका लागि गर्मी गर्ने तथा रुखो आहारका लागि चिल्लो अनुपान उत्तम हुन्छ ।

**अनुपानं करोत्यूर्जां तृप्तिं व्याप्तिं दृढाङ्गताम् । अन्नसङ्घातशैथिल्यविक्लित्तिजरणानि च ॥**

उचित अनुपानले शरीरलाई ऊर्जा (बल एवं दीर्घायु) दिन्छ । साथै यसले शरीरलाई तृप्त पार्दै आहारको रसलाई शरीरभरी फैलाउन मद्दत गर्दछ । अङ्गहरूलाई सुदृढ पार्नुका साथै खाइएका कुरालाई खुकुलो पार्ने, गिलो बनाउने र पच्न मद्दत गर्ने कार्य गर्दछ ।

**नोर्ध्वजत्रुगदश्वासकासोरःक्षतपीनसे । गीतभाष्यप्रसङ्गे च स्वरभेदे च तद्धितम् ॥**

घाँटी वा चिउँडो माथिका मुख, कान, आँखा, टाउको आदिमा कुनै रोग हुनेले; दम आदि श्वासप्रश्वासका रोगीले, खोकी लागेका बेलामा, छातीमा वा फोक्सोमा घाउ हुने (क्षयरोगी) ले, पिनासका रोगीले, गाउनु र भाषणगर्नुपर्ने अवस्थामा र स्वर बसेका बेलामा अनुपान गर्नु हितकारी हुँदैन ।

**प्रक्लिन्नदेहमेहाक्षिगलरोगव्रणातुराः । पानं त्यजेयुः....।**

शरीरको कुनै भाग गलेको वा सडेको अवस्थामा (क्लिन्नता), प्रमेहका रोगमा, आँखाका रोगमा, घाँटीका रोगमा र घाउखटिरा आएका बेलामा अनुपान सेवन नगर्नु ।



**...सर्वश्च भाष्याध्वशयनं त्यजेत् ॥ पीत्वा, भुक्त्वाऽऽतपं वह्निं यानं प्लवनवाहनम् ।**

रोगी वा स्वस्थ सबै व्यक्तिले अनुपान सेवन गरेपछि भाषण गर्न, हिँड्न र दिउस सुत्न छाड्नु । खाना खानासाथ वा पानी पिउनासाथ घाम वा आगो ताप्न हुन्न । सवारी साधन चढी कतै हिँडडुल गर्न हुन्न । कुद्ने, नाघ्ने र घोडा आदि चढ्ने काम पनि गर्न हुन्न ।

**(ख) आयुर्वेद महोदधि :**

**अम्लेन केचिद्विहता मनुष्या माधुर्ययोगे प्रणयी भवन्ति ।**
**तथाम्लयोगे मधुरेण तृप्तास्तेषां यथेष्टं प्रवदन्ति पथ्यम् ॥**

अमिलो खाएर वाक्क भई कोही मानिस गुलियो खान खोज्दछन् । गुलियो खाएर वाक्क भएका कोही अमिलो खान खोज्दछन् । जे खाएर अमन भएको हुन्छ त्यसको विरोधी रस अनुपानका लागि योग्य हुन्छ भन्दछन् ।

**शीतोष्णतोयासवमद्ययूषफलाम्लधान्याम्लपयोरसानाम् ।**
**यस्यानुपानं तु हितं भवेद्यत्तस्मै प्रदेयं त्विह मात्रया तत् ॥**

चिसो पानी, तातो पानी, आसव, मदिरा, सूप, फलफूलको अमिलो रस, काँजी, दूध वा अन्य रसमध्ये जसलाई जुनबेला जुन अनुपानका लागि उचित बताइएको हुन्छ त्यही अनुपान उचित मात्रामा दिनु ।

**व्याधिं च कालं च विभाव्य धीरैर्देयानि भोज्यानि च तानि तानि ।**
**सर्वानुपानेषु वरं वदन्ति मेध्यं यदम्भः शुचिभाजनस्थम् ॥**

रोग, समय आदि हेरेर वैद्यले मानिसलाई उचित र पथ्य खानेपिउने कुराका साथमा उचित अनुपान पनि दिनु पर्दछ । पवित्र भाँडामा राखिएको शुद्ध जल सबै अनुपानमा उत्तम अनुपान मानिन्छ ।

**लोकस्य जन्मप्रभृति प्रशस्तं तोयात्मकाः सर्वरसाश्च दृष्टाः ।**
**संक्षेप एषो विहितोऽनुपानेऽप्यन्नैश्च तैर्विस्तरितं समस्तम् ॥**

मानिसका लागि पानी जन्मेदेखि नै शरीरका लागि सात्म्य (सहने) हुन्छ । अन्य सबै खाले रसमा पनि पानी नै हुन्छ । त्यसैले पानी नै सर्वोत्तम अनुपान हुन्छ । यहाँ संक्षेपमा मात्र अनुपानका कुरा बताइयो, अरु विद्वानहरूले यसका बारेमा विस्तृत कुरा बताएका छन् ।

**पिष्टान्नेम्बुहिमं पयश्च तिलजे तक्रं शुभं माषजे**
**गोधूमेषु च कर्कटी च सततं मांसाशने काञ्जिकम् ।**
**नालीकेरफलेषु तन्दुलकणान् सर्पिस्तु मोचाफले**
**नारिङ्गं गुरु भक्षणे च सततं पिण्डालुकेकोद्रवान् ॥**



पिँधिएका अनाजमा शीतल पानी, तिलजन्य पदार्थमा दूध, माषजन्य पदार्थमा तक्र, गहुँजन्य पदार्थमा काँक्रो, मासु खाएकोमा काँजी, नरिवलमा कनिका, केरामा घिउ, धेर खाइए सुन्तला र पिँडालुमा कोदोजन्य पदार्थ अनुपान हुन्छ ।

**(ग) काश्यप संहिता :**

**अनुपानमुष्णमुदकं घृतस्य तैलस्य यूषमिच्छन्ति । मज्जवसयोस्तु मण्डं, सर्वेषां कश्यपः पूर्वम् ॥**

घिउको तातो पानी, तेलको यूष तथा मासी र बोसोको माँड अनुपान हो । (अर्थात् घिउ खाएपछि तातोपानी पिउनु वेश हुन्छ) । अथवा सबै स्नेहपानका लागि तातोपानी अनुपान हुन सक्दछ भन्नुहुन्छ कश्यप मुनि ।

व्याख्या : पहिले खाएपिएको कुरालाई विरोध नगर्ने वा विरोधाभाष नहुने तर पहिले खाएपिएका कुरालाई पचाउन बल पुग्ने खालका, खाँदै पिउँदै गर्दा, खाएपिएको तत्काल पछि वा खाएपिएको केहीबेर पछि पिइने कुरालाई “अनुपान” भनिन्छ) ।

**पादावशेषसिद्धं तद्दोषघ्नैः शृतं जलं मुख्यम् । पेयं कवलग्राह्यं स्नेहं हि तथा विलाययति ॥**

फरकफरक शारीरिक दोष ठिक गर्नका लागि तोकिएका फरकफरक औषधी मिसाई उमालेर एक चौथाई बाँकी भएको तातोपानीलाई अनुपानकारूपमा स्नेहपान पछि तातोपानीकारूपमा पिउनु पर्दछ वा कुला गर्नु पर्दछ । यस्तो पानीले खाइएको चिल्लो (स्नेह) शरीरभित्र विलाउँदछ (वा पच्दछ र चिल्लोले अर्को असर गर्न पाउँदैन) ।

व्याख्या : संस्कृतमा तरल पदार्थ मुखमा केहीबेर लिएर थुक्नुलाई गण्डूष र कुला गर्नुलाई कवल भनिन्छ ।

(घ) **मदनपाल निघण्टु :**

**वातेऽनुपानं स्निग्धोष्णं रूक्षोष्णं श्लेष्मणि स्मृतम् । पित्ते स्निग्धं हिमं स्नेहपाने तोयमशीतलम्॥**

आफ्नो शरीरमा वायुले असर गरिरहेको छ भने खाना खाएपछि कुनै पनि शरीरलाई लाभ गर्ने तातो पेयपदार्थ पिउनु हितकर हुन्छ । कफले असर गरिरहेको छ भने रुखो र तातो पेय पदार्थ पिउनु पर्दछ । पित्तले असर गरिरहेको छ भने चिल्लो कुरा पिउनु पर्दछ । चिल्लो कुरा खाएपछि तातोपानी पिउनु हितकर हुन्छ ।

**भल्लातकस्नेहमूर्च्छाव्याप्तानां शीतलं जलम् । शालिमुद्गादिभक्ष्याणां यूषो मांसरसस्तथा॥**

भलायोको तेल खाई बेहोस भएका व्यक्तिले चिसो पानी, मार्सीचामल र मुगी आदिको रस वा मासुको रस पिउनु हितकर हुन्छ ।



**माषादिभोजिनां मस्तु धान्याम्लं दधि वा स्मृतम् । मद्यंशोषिविषार्तानामल्पाग्नीनां च शस्यते॥**

भोजनमा मासु आदि खाने व्यक्तिका लागि दहीको पानी, काजी अथवा दहीको घोल पिउनु हितकर हुन्छ । शरीर सुन्निएका, विषविकारले पीडित र कमजोर पाचनशक्ति हुने व्यक्तिले खाना खाएपछि मात्रा मिलाएर मदिरा पिउनु हितकर हुन्छ ।

**क्लान्तनामुपवासाध्वभारस्त्रीसुरतादिभिः । पयः सुधासमं प्रोक्तं क्षीणानां रक्तपित्तिनाम्॥**

व्रत बस्नेले, थकित हुनेले, भारी बोक्नेले, सहवासका कारण लखतरान हुनेले, दुब्ला मानिसले र रक्तपित्तका रोगीले खाना खाएपछि दूध पिउनु अमृत समान गुनिलो हुन्छ ।

**असात्म्यं दोषलं शीतमतिमात्रमथो गुरु । उक्तानुपानतो भुक्तं सुखमन्नं प्रजीर्यते॥**

शरीरले नसहने, दोष गर्ने, अति चिसो, धेरै मात्राको र पचाउन कठिन खानेकुरा (अन्न) खाइएको अवस्थामा मदिरा वा ताततातो दूध पिउनु, खाएको कुरा राम्ररी पच्दछ ।

(ङ) **राजांनघण्टु :**

**ज्ञेयं रसादिकथनादनन्तरं किलानुपानं कथयन्ति सूरयः ।**
**विलम्ब्य च क्रामणमेतदीरितं रात्रौ पुनः पाचनमेतदूचिरे ॥**

रस आदिका बारेमा बताए पछि विज्ञहरू अनुपानका बारेमा बताउँदछन् । ओखती सँगसँगै पिउने वा ओखती खाएपछि पिउने तोकिएको तरल पदार्थलाई अनुपान भनिन्छ । ओखती खाएको केही समय पछि पिइने यस्तो पदार्थलाई क्रामण र रातमा पिइने यस्तो पदार्थलाई पाचन भनिन्छ ।

(च) **शार्ङ्गधर संहिता :**

**चूर्णावलेहगुटिकाकल्कानामनुपानकम् । वातपित्तकफातङ्के त्रिद्व्येकपलमाहरेत् ॥**

धुलो, लेदो, गोली र कल्कमा जेजस्ता अनुपान बताइएका छन् ती पित्तरोग हुँदा तीन पल (एक सय बीस ग्राम) लिनू । वातरोगमा दुई पल (अस्सी ग्राम लिनू) । कफरोगमा एक पल (चालीस ग्राम लिनू) । यसरी खाँदा ओखती राम्ररी शरीरमा फैलन्छ ।

**यथा तैलञ्जले क्षिप्तं क्षणेनैव प्रसर्पति । अनुपानबलादङ्गे तथा सर्पति भेषजम् ॥**

जसरी पानीमा तेलको थोपा हाल्दा सरर चारैतिर फैलन्छ, त्यसरी अनुपानका प्रभावले शरीरमा ओखती फैलन्छ ।



**घृते कोष्णजलं पेयं तैले यूषः प्रशस्यते । वसामज्ज्ञोः पिबेन्मण्डमनुपानं सुखावहम् ॥**

घिउ खाएपछि तातोपानी पिउनू, तेल खाएपछि यूष पिउनू तथा बोसो र मासी खाएपछि मण्ड (माड) पिउनू । यसरी अनुपान गर्नाले शरीरलाई सुखी बनाउँदछ ।

(छ) **सुश्रुत संहिता :**

**अम्लेन केचिद्विहता मनुष्या माधुर्ययोगे प्रणयीभवन्ति ।**
**तथाऽम्लयोगे मधुरेण तृप्तास्तेषां यथेष्टं प्रवदन्ति पथ्यम् ॥**

अब सबै अनुपानका बारेमा बताउँदछु । अमिलोले पीडित भएका मानिस गुलियोको चाहना गर्दछन् । यसैगरी गुलियोले अघाएका मानिस अमिलाको चाहना गर्दछन् ।  यसरी छ रस मध्येका कुनै रस खाएर अघाएका मानिसलाई जे पिउनाले पथ्य हुन्छ त्यसलाई अनुपान भनिन्छ ।

**शीतोष्णतोयासवमद्ययूषफलाम्लधान्याम्लपयोरसानाम् ।**
**यस्यानुपानं तु हितं भवेद्यत्तस्मै प्रदेयं त्विह मात्रया तत् ॥**

चिसो पानी, तातो पानी, आसव, मद्य, यूष फलाम्ल, धान्याम्ल, दूध र मासुको रस : यिमध्ये जे अनुपान जसका लागि हितकर हुन्छ त्यो उसलाई तोकिएको परिमाणमा पिउन दिनुपर्दछ ।

**व्याधिं च कालं च विभाव्य धीरैर्द्रव्याणि भोज्यानि च तानि तानि ।**
**सर्वानुपानेषु वरं वदन्ति मेध्यं यदम्भः शुचिभाजनस्थम् ॥**

रोग र समय परिस्थिति विचार गरी बुद्धिमान मानिसले सोही अनुसारका विविध प्रकारका खानेकुरा खानु पर्दछ । सबै अनुपानमध्ये शुद्ध भाँडामा जम्मा पारिएको आन्तरिक्ष जल उत्तम अनुपान हुने गर्दछ ।

**लोकस्य जन्मप्रभृति प्रशस्तं तोयात्मकाः सर्वरसाश्च दृष्टाः ।**
**सङ्क्षेप एषोऽभिहितोऽनुपानेष्वतः परं विस्तरतोऽभिधास्ये ॥**

प्रायः जन्मेदेखि नै मानिसलाई तरल अवस्थाका सबै रस पथ्य हुनेगरेको देखिएको छ । अनुपानका सम्बन्धमा संक्षेपमा वर्णन गरियो । अब यसपछि विस्तारमा बताइन्छ ।

(नोट- प्रायः अनुपान आहार गरेपछि नै पिइन्छ । आवश्यकता अनुसार खाना खानुअघि वा खाना खाँदा बीचमा पनि अनुपान लिन सकिन्छ ।) ।

**उष्णोदकानुपानं तु स्नेहानामथ शस्यते । ऋते भल्लातकस्नेहात् स्नेहात्तौवरकात्तथा ॥**



भलायोको र रहरको तेल बाहेकका सबै प्रकारकम चिल्ला पदार्थ खाएपछि तातोपानीको अनुपान उपयुक्त हुन्छ ।

**अनुपानं वदन्त्येके तैले यूषाम्लकाञ्जिकम् । शीतोदकं माक्षिकस्य पिष्टान्नस्य च सर्वशः ॥**

कोही कोही तेलका लागि यूष वा अमिलो काँजीको अनुपान दिनुपर्दछ भन्दछन् । मह र पिसिएका अनाजको लागि हमेशा चिसो पानी अनुपान हुन्छ ।

**दधिपायसमद्यार्तिविषजुष्टे तथैव च । केचित् पिष्टमयस्याहुरनुपानं सुखोदकम् ॥**

दही र दूध वा खीर खाएपछि तथा मदात्यय र विषको पीडा हुँदा पनि चिसो पानी नै अनुपानका लागि उपयुक्त हुन्छ । पिसेका पदार्थ खाएपछि मनतातो पानी अनुपानका लागि उपयुक्त हुन्छ ।

**पयो मांसरसो वाऽपि शालिमुद्गादिभोजिनाम् । युद्धाध्वातपसंतापविषमद्यरुजासु च ॥**

मार्सी चामल, मुगी आदि खाने गरेका अवस्थामा; युद्ध वा हिँडाईबाट थाक्दा तथा घाम, अग्नि, विष र मद्यबाट पीडित हुँदा दूध वा मासुको रस अनुपान हुन्छ ।

**माषादेरनुपानं तु धान्याम्लं दधिमस्तु वा । मद्यं मद्योचितानां तु सर्वमांसेषु पूजितम् ॥**

मास आदिमा धान्याम्ल वा दहीको पानी अनुपान हुन्छ । मदिरा पिउनेहरूका लागि सबै खालका मासु खाँदा मदिरा नै (मद्य) उचित अनुपान हुने गर्दछ ।

**अमद्यपानामुदकं फलाम्लं वा प्रशस्यते । क्षीरं घर्माध्वभाष्यस्त्रीक्लान्तानाममृतोपमम् ॥**

मासु खाने तर मदिरा नपिउनेहरूका लागि पानी वा फलाम्ल उचित अनुपान हुन्छ । घाम, हिँडाई, भाषण र ग्राम्यधर्मबाट थाकेका मानिसका लाागि दूध नै अमृतसमान अनुपान हुने गर्दछ ।

**सुरा कृशानां स्थूलानामनुपानं मधूदकम् । निरामयानां चित्रं तु भ(भु)क्तमध्ये प्रकीर्तितम् ॥**

दुब्लो मानिसका लागि सुरा र मोटो मानिसका लागि मह-पानी अनुपान हुन्छ । स्वस्थ मानिसका लागि खाना खाँदा बीचबीचमा अनेक थरी अनुपान पदार्थ पिउनु उपयुक्त हुन्छ ।

**स्निग्धोष्णं मारुते पथ्यं कफे रूक्षोष्णमिष्यते । अनुपानं हितं चापि पित्ते मधुरशीतलम् ॥**

वायुविकारमा चिल्लो र गर्मीगर्ने खालको, कफविकारमा रुखो र गर्मीगर्ने खालको तथा पित्तविकारमा गुलियो र शीतलगर्ने खालको अनुपान हितकारी हुन्छ ।

**हितं शोणितपित्तिभ्यः क्षीरमिक्षुरसस्तथा । अर्कशेलुशिरीषाणामासवास्तु विषार्तिषु ॥**



रक्तपित्तका रोगीका लागि दूध र उखुको रसको अनुपान हितकर हुन्छ । विषविकारमा आँक, लप्सी र शिरीषको आसवको अनुपान लाभदायक हुन्छ ।

**तत्र पूर्वशस्यजातानां बदराम्लं, वैदलानां धान्याम्लं, जङ्गालानां धन्वजानां च पिप्पल्यासवः, विष्किराणां कोलबदरासवः, प्रतुदानां क्षीरवृक्षासवः, गुहाशयानां खर्जूरनालिकेरासवः, प्रसहानामश्वगन्धासवः, पर्णमृगाणां कृष्णगन्धासवः, बिलेशयानां फलासवः, एकशफानां त्रिफलासवः, अनेकशफानां खदिरासवः, कूलचराणां शृङ्गाटककशेरुकासवः, कोशवासिनां पादिनां च स एव, प्लवानामिक्षुरसासवः, नादेयानां मत्स्यानां मृणालासवः, सामुद्राणां मातुलुङ्गासवः, अम्लानां फलानां पद्मोत्पलकन्दासवः, कषायाणां दाडिमवेत्रासवः, मधुराणां त्रिकटुकयुक्तः खण्डासवः, तालफलादीनां धान्याम्लं, कटुकानां दूर्वानलवेत्रासवः, पिप्पल्यादीनां श्वदंष्ट्रावसुकासवः, कूष्माण्डादीनां दार्वीकरीरासवः, चुच्चूप्रभृतीनां लोध्रासवः, जीवन्त्यादीनां त्रिफलासवः, कुसुम्भशाकस्य स एव, मण्डूकपर्ण्यादीनां महापञ्चमूलासवः, तालमस्तकादीनामम्लफलासवः, सैन्धवादीनां सुरासव आरनालं च, तोयं च सर्वत्रेति ॥४३२॥**

यिमध्ये पहिले बताइएका जातका अनाज (शूकधान्य) मा बयरको अमिलो, दुई फग्लेँटा हुने (केराउ आदि) गेडागुडीमा धान्याम्ल, छिटो कुद्ने मृग आदि जनावर वा मरुभूमिमा हुने जीवको मासुमा पिप्पल्यासव, नङ्ग्राले कातेर्ने खोस्रने जीवको मासुमा कोलबरासव, चुच्चोले ठुँगेर आहार गर्ने चराको मासुमा डुम्री आदिको क्षीरवृक्षासव, गुफामा बस्ने जीवको मासुमा खजूर र नरिवलको आसव, सिकारी पशुपंक्षीको मासुमा अश्वगन्धासव, रूखका हाँगा चहार्ने (वानर आदि) जीवको मासुमा सजिवनको

कृष्णगन्धासव, दुलामा बस्ने जांवको मासुमा दाख आंदको फलासव, एक खुर हुने जांवको मासुमा त्रिफलासव, अनेक खुर हुने जीवको मासुमा खयरको खदिरासव, जलाशयका छुउछाउ हुने जीवको मासुमा सिँगडा र कशेरुकको आसव, खोलभित्र रहने र छोटा खुट्टा हुने जीवको मासुमा पनि यही, पानीमा पौडने जीवको मासुमा उखुको आसव, नदीका माछाको मासुका लागि कमलनालको आसव, समुद्री जीवको मासुमा बिमिरोको आसव, अमिला फलका लागि कमल वा नीलकमलको कन्दको आसव, टर्रो फलका लागि दारिम र बेतको आसव, गुलियो फलका लागि त्रिकटु र सखर मिसाइएको आसव, ताड आदि फलका लागि धान्याम्ल, पिरो फलका लागि दूबो, निगालो र बेतको आसव, पिप्ला आदिका लागि ओदानेकाँडो र आँकको आसव, कुभिण्डो आदिका लागि चुत्रो र करीलको आसव, चुच्चू आदि सागको लागि लोधको आसव, जिरी आदि सागका लागि त्रिफलासव, कुसुमको सागका लागि पनि यही, घोडताप्रे आदि पत्रशाकका लागि पञ्चमूलको आसव, ताड आदि फलको गुदीका लागि अमिलो फलको आसव तथा सिँधे आदि नुनका लागि सुरासव वा आरनाल अनुपान हितकर हुन्छ । अथवा पानी सबैका लागि अनुपान हुन्छ ।

भवन्ति चात्र-
**सर्वेषामनुपानानां माहेन्द्रं तोयमुत्तमम् । सात्म्यं वा यस्य यत्तोयं तत्तस्मै हितमुच्यते ॥**
**उष्णं वाते कफे तोयं पित्ते रक्ते च शीतलम् ।**

सबै अनुपानमा आश्विन-कार्तिक महिनामा आबाशबाट परेको पानी अनुपानका लागि श्रेष्ठ हुन्छ । अथवा जसको शरीरले जस्तो जल सहन्छ त्यही जल उचित अनुपान हुने गर्दछ । वातविकार र कफविकारमा तातोपानी तथा पित्तविकार र रक्तविकारमा चिसोपानी अनुपानका लागि हितकर हुन्छ ।



**दोषवद्गुरु वा भुक्तमतिमात्रमथापि वा ॥ यथोक्तेनानुपानेन सुखमन्नं प्रजीर्यति ।**
**रोचनं बृंहणं वृष्यं दोषसङ्घातभेदनम् ॥ तर्पणं मार्दवकरं श्रमक्लमहरं सुखम् ।**
**दीपनं दोषशमनं पिपासाच्छेदनं परम् ॥ बल्यं वर्णकरं सम्यगनुपानं सदोच्यते ।**

कुनै दोष भएको खाना खाए पछि अथवा धेरै खाएपछि तोकिएको अनुपान पिउनाले खाएको कुरा आनन्दसँग पच्दछ । सामान्यतः यथोचित विधिले प्रयोग गरिने तोकिएको अनुपान सधैँ रुचिप्रद, पुष्टिदायक, वीर्यवर्धक, विकारलाई भेदन गर्ने, तृप्तिदायक, शरीरलाई कोमल बनाउने, मानसिक र शारीरिक थकाई नाशगर्ने, सुखदायक, दीपनी र शरीरको वर्णमा निखार लेराउने गुणको हुन्छ ।

**तदादौ कर्शयेत्पीतं स्थापयेन्मध्यसेवितम् ॥ पश्चात्पीतं बृंहयति तस्माद्वीक्ष्य प्रयोजयेत् ।**
**स्थिरतां गतमक्लिन्नमन्नमद्रवपायिनाम् ॥ भवत्याबाधजननमनुपानमतः पिबेत् ।**

खाना खानुअघि पिइने अनुपानले शरीर दुब्लो हुन्छ । भोजनको बीचमा पिइने अनुपानले शरीरलाई सन्तुलनमा राख्दछ । खाना खाएपछि पिइने अनुपानले शरीरलाई पुष्ट वा मोटो बनाउँदछ । यसैले यी कुरा पूर्णरूपमा विचार गरी अनुपान गर्नुपर्दछ ।

**न पिबेच्छ्वासकासार्तो रोगे चाप्यूर्ध्वजत्रुगे ॥ क्षतोरस्कः प्रसेकी च यस्य चोपहतः स्वरः ।**
**पीत्वाऽध्वभाष्याध्ययनगेयस्वप्नान्न शीलयेत् ॥**

**प्रदूष्यामाशयं तांद्ध तस्य कण्ठोरांसं ास्थतम् । स्यन्दांाग्नसादच्छद्यादांनामयाञ्जनयेद् बहून्॥**

जसलाई दमको रोग छ, खोकी लागिरहेको छ, जसलाई नाक-कान आदि टाउकाको रोग छ, जसको छाती दुख्दछ वा जसलाई बाडुली लागिरहन्छ, जसको कुनै कारणले शरीरका कुनै भागबाट रगत बगिरहेको छ र जसको स्वर बिग्रेको वा बसेको छ उसले अनुपान सेवन गर्न हुँदैन । अनुपान सेवन गरेपछि (तुरुन्त) हिँडडुल गर्न, धेरै बोल्न वा भाषण गर्न, पढ्न, गाउन र सुत्न हुँदैन । (यसो गरिए) पिइएको अनुपानले आमाशयलाई दूषित पार्दै घाँटी र छातीमा बसी रगत बगाउने, पाचनशक्ति कमजोर पार्ने, बवाबाकी गराउने जस्ता अनेक थरी रोग निकाल्न सक्दछ ।

**गुरुलाघवचिन्तेयं स्वभावं नातिवर्तते । तथा संस्कारमात्रान्नकालांश्चाप्युत्तरोत्तरम्॥**
**मन्दकर्मानलारोग्याः सुकुमाराः सुखोचिताः । जन्तवो ये तु तेषां हि चिन्तेयं परिकीर्त्यते॥**
**बलिनः खरभक्ष्या ये ये च दीप्ताग्नयो नराः । कर्मनित्याश्च ये तेषां नावश्यं परिकीर्त्यते॥**

पदार्थको पचाउन सहजता वा असहजता, बनाउने विधि, खानपिनको मात्रा, मूल पदार्थबाट बनाइएका विभिन्न थरी खानेकुरा र समय परिस्थिति : यी कुरालाई कहिल्यै अतिक्रमण वा वेवास्ता गर्नु हुँदैन । यी कुरा क्रमशः बलिया वा बढी ध्यानदिन योग्य हुन्छन् । जो विशेष परिश्रम नगरी अल्छी गर्दछन्, जसको पाचनशक्ति कमजोर छ, जसको स्वास्थ्य ठिक छैन, जसको शरीर कोमल छ अनि जो आराम गर्न मात्र मन गर्दछ त्यस्ता मानिसका लागि यहाँ पदार्थको पचाउन सहज र कठिनका बारेमा यहाँ बताइएको छ (हो) । जो बलिया छन्, जो कठिन खालका चना आदि कुरा दिनहुँ खान्छन्, जसको पाचनशक्ति बलियो छ, जो हरदम परिश्रम वा कष्ट गरिरहन्छन् तिनका लागि पचाउन सहज वा असहज भन्ने कराको विचार गरिरहनु आवश्यक छैन ।

## अनुलोमन द्रव्य
## (Anulomana)

(क) **शार्ङ्गधर संहिता :**

**कृत्वा पाकं मलानां यद्भित्त्वा बन्धमधो नयेत्॥ तच्चानुलोमनं ज्ञेयं यथा प्रोक्ता हरीतकी ।**

कब्जियत भएर पेटभित्र रहेको मल वा रोकिएको मूत्रलाई खुकुलो बनाई आन्द्राभुँडी सफा गर्दै तलतिर धकेलेर दिसापिसाब मार्फत बाहिर निकाल्ने औषधीलाई "अनुलोमन" औषधी भनिन्छ । जस्तै : हर्रो ।

## अनुशयी रोग
## (A boil on the head)

(क) **सुश्रुत संहिता :**

**गम्भीरामल्पसंरम्भां सवर्णामुपरिस्थिताम् । कफादन्तःप्रपाकां तां विद्यादनुशयीं भिषक् ॥**

गहिरो, थोरै सुन्निने, छालाका रङ्को, टाउका माथि आउने, भित्रभित्रै पाक्ने तथा कफविकारले गर्दा आउने पिलोलाई वैद्यले 'अनुशयी' भनी थाहा पाउनू ।

## आन्द्रा
## (Instestine)

**परिभाषा :**

**(क) के.यन.स्वामी :**

(१) अन्त्र : आन्द्रा । (२) पुरीतन् : मुटुनिरको एक आन्द्रा (पुरीतत्) ।

**(ख) डा.साङ्ग्यधर :**

आन्द्रालाई अंग्रेजीमा Instestine भनिन्छ ।

**(ग) नेपाली बृहत् शब्दकोश :**

आन्द्रो वा आन्रो : पेटभित्रको मल निकाल्ने, गुदद्वारसम्म पुगेको नली; आँत ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अमरकोश :**

**अन्त्रं पुरीतत्...।**

अन्त्र (आन्त्र) र पुरीतत् : यी आन्द्रोका नाम हुन् ।



**(क) राज निघण्टु :**

**अन्त्रं पुरीतदाख्यातं ...॥**

संस्कृतमा आन्द्रालाई अन्त्र वा पुरीतद् भनिन्छ ।

## अन्धकार
## (Darkness)

**(क) अमरकोश :**

**अन्धकारोऽस्त्रियां ध्वान्तं तमिस्रं तिमिरं तम : । ध्वान्ते गाढेऽन्धतमसं क्षीणेऽवतमसं तमः ॥ विष्वक् सन्तमसं...।**

अन्धकार, ध्वान्त, तमिस्र, तिमिर र तमस् : यी अन्धकारका नाम हुन् । गाढा अन्धकारलाई अन्धतमस, घटेको अन्धकारलाई अवतमस तथा सबैतिर फैलिएको अन्धकारलाई सन्तमस भनिन्छ । (अन्ध र वृत्र शब्दले अन्धकारलाई पनि बुझाउँदछ ।) ।

**(ख) नेपाली बृहत् शब्दकोश :**

अँधेर, अँधेरो, अँध्यार, अन्ध, तम, तमस, तमिस्र, भाल, मेचक, राहु, शार्वरी : अँध्यारो । अँध्यारो : प्रकाशको अभाव; उज्यालोको अभाव । अन्धकार : प्रकाशको अभाव; अँध्यारो । अन्धमुष्टि : निस्पट्ट अँध्यारो; घोर अन्धकार; गाढा अन्धकार; निस्पट्ट; महान्धकार । कालो : प्रकाश नभएको स्थिति; अन्धकार । घनान्धकार : घोर अन्धकार; गाढा अँध्यारो; चुक घोप्टयाएजस्तो अँध्यारो; ध्वान्त । तमोमय : तमले भरिएको; अन्धकारपूर्ण । निस्तेज : तेज वा प्रकाश नभएको; अन्धकारयुक्त ।

**(ग) भावप्रकाश निघण्टु :**



**तमो भयावहं मोहकफपित्तक्लमप्रदम् ।**

अन्धकारले डर, मोह, कफविकार, पित्तविकार र मानसिक थकाई प्रदान गर्दछ ।

**(घ) राज निघण्टु :**

**तमस्तमिस्रं तिमिरं ध्वान्तं सन्तमसं तमः । अन्धकारश्च भूच्छायं तच्चान्धतमसं घनम्॥ ... सर्वव्याधिकरं तमः ॥**

तमस्, तमिस्र, तिमिर, ध्वान्त, सन्तमस, तम, अन्धकार, भूच्छाय, अन्धतमस र घन : यी अन्धकारका पर्यायवाची नाम हुन् । अन्धकारले सबै किसिमका रोगहरू जन्माउँदछ ।

**(ङ) राजवल्लभ निघण्टु :**

**तमो भयावहं तिक्तं दृष्टितेजोऽवरोधनम्॥**

अन्धकार भयदायी, तीतो तथा दृष्टि-तेजलाई अवरोध गर्ने गुणको हुन्छ ।

**(च)** अन्धकारलाई अंग्रेजीमा Darkness भनिन्छ ।

# अपचीं रोग
# (Serofula)

**(क) सुश्रुत संहिता :**

**हन्वस्थिकक्षाक्षकबाहुसन्धिमन्यागलेषूपचितं तु मेदः ।**
**ग्रन्थिं स्थिरं वृत्तमथायतं वा स्निग्धं कफश्चाल्परुजं करोति ॥**
**तं ग्रन्थिभिस्त्वामलकास्थिमात्रैर्मत्स्याण्डजालप्रतिमैस्तथाऽन्यैः ।**
**अनन्यवर्णैरुपचीयमानं चयप्रकर्षादपचीं वदन्ति ॥**

चिउँडोको हाड, कोख, कन्पारो, हातको जोर्नी, घिच्रो, घाँटी जस्ता स्थानमा जम्मा भएको कफ र भित्री बोसोले स्थिर, गोलाकार अथवा लामो, कोमल र थोरै दुख्ने खालको गाँठा उत्पन्न गराउँदछ । अमलाको गेडाजत्रो, जालमा रहेको माछाको फुल जस्तो र अन्य गाँठाले बाक्लो गरी घेरिएको गाँठोमा हुने सञ्चितिको अधिकतम तह वा मात्रालाई ‘अपची’ रोग भनिन्छ ।

## अपतन्त्रक रोग
## (A kind of Hysteria)

(क) **सुश्रुत संहिता :**

**वायुरूर्ध्वं व्रजेत् स्थानात् कुपितो हृदयं शिरः । शङ्खौ च पीडयत्यङ्गान्याक्षिपेन्नमयेच्च सः ॥**
**निमीलिताक्षो निश्चेष्टः स्तब्धाक्षो वाऽपि कूजति ।**
**निरुच्छ्वासोऽथवा कृच्छ्रादुच्छ्वस्यान्नष्टचेतनः ॥**
**स्वस्थः स्याद्धृदये मुक्ते ह्यावृते तु प्रमुह्यति । कफान्वितेन वातेन ज्ञेय एषोऽपतन्त्रकः ॥**

यदि उत्तेजित भएको वायु आफ्नो ठाउँभन्दा माथि हृदयतिर छिरी टाउको र कञ्चट दुखाउने, शरीरका अङ्गमा सङ्कोच पैदा गराउने तथा टेढो बनाउने कार्य गर्दछ अनि मानिस आँखा बन्द गर्ने, होस गुमाउने वा एकटक लगाएर हेर्ने, परेबा घुरे जसरी घुर्ने, सास रोक्ने वा कष्टपूर्ण तरिकाले सास लिने गर्दछ तथा उसको हृदय यस्तो वायुले छाड्दा स्वस्थ हुने र आक्रान्त पार्दा अस्वस्थ हुने गर्दछ भने यस्तो रोगलाई 'अपतन्त्रक' भनिन्छ । यो रोग कफ सहितको वातविकारका कारण उत्पन्न हुन्छ भनी जान्नू ।

## अपतानक (धनुष्टङ्कार)
## (Tetanus)

(क) **सुश्रुत संहिता :**

**सोऽपतानकसंज्ञो यः पातयत्यन्तराऽन्तरा ।**

जुन आक्षेपक रोगले बीचबीचमा मानिसलाई लडाउँदछ त्यस्तो रोगलाई 'अपतानक' भनिन्छ ।

# अपराजिता
(Blue pea)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : आस्फोता, गिरिकर्णी आदि नाम अपराजिताका नाम हुन् ।

(ख) के.यन.स्वामी : (१) श्वेतस्यन्दा, श्वेता, सिता : अपराजिताको फूल । (२) कटभी, गिरिकर्णिका, श्वेतपुष्पा : अपराजिता । (३) नीलस्यन्दा, नीलपुष्पा, व्यक्तगन्धा, : विष्णुक्रान्ता फूल । (४) गवादनी : अपराजिता । (५) अपराजिता : एक वनस्पति । यसको केराउको जस्तो कोसा हुन्छ, बदामी छाँटको एक-दुई अङ्गुल लामो एक अङ्गुल चौडा पात हुन्छ । सेतो, योनिको आकारको वर्षायाममा फुल्ने बास्ना नभएको फूल हुन्छ । यसका तीन भेद छन्-सेतो, नीलो र गुलाफी नीलो । नीलोलाई विष्णुक्रान्ता भनिन्छ ।

(ग) नेपाली बृहत् शब्दकोश : (१) अपराजिता : केराउका जस्ता कोसा हुने र सेतो वा नीलो फूल फुल्ने एक खालको लहरो । सेता फूल फुल्नेलाई गिरिकर्णिका र नीलो फूल फुल्नेलाई विष्णुक्रान्ता भनिन्छ । (गिरिकर्णिका : सेतो रङको फूल फुल्ने अपराजिता । (३) शङ्खपुष्पिका : सेतो अपराजिता; सिन्काउली ।

(घ) डा.कृष्णचन्द्र चुनेकर : अपराजितालाई अंग्रेजीमा Winged-leaved clitoria तथा ल्याटिन भाषामा *Clitoria ternatea* Linn. भनिन्छ ।


अपराजिता | *Clitoria ternatea* L., payer.de/amarakosa

(ङ) विश्वनाथ द्विवेदी शास्त्री : यसलाई अंग्रेजीमा Megrin भनिन्छ । सेता र नीला फूल फुल्ने गरी अपराजिता दुई थरी हुन्छन् ।

(च) आचार्य बालकृष्ण : अपराजिताको फूलको आकार गाईको कानका आकारको हुने हुनाले यसलाई गोकर्णी पनि भनिन्छ । यो सेतो र नीलो फूल फुल्ने गरी दुई थरी हुन्छ । नीलो फूल फुल्ने अपराजिता पनि एकोहोरो र दोहोरो फूल फुल्ने गरी दुई थरी हुन्छ । यसको वानस्पतिक नाम *Clitoria ternatea L.* वा *Clitoria bracteata Poir.* हो । यसलाई अंग्रेजीमा Winged-leaved clitoria, Butterfly pea, Blue pea वा Pigeon wings भनिन्छ ।

(छ) डी.के.कामत र डा.यस.डी.कामत : यसलाई ल्याटिन भाषामा *Clitoria ternatea* Linn. भनिन्छ । यो Leguminosae वा Fabaceae परिवारमा पर्दछ ।

(ज) शालिग्राम निघण्टु : यसको वानस्पतिक नाम *Cletorea ternatea* वा Megorian हो ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अमरकोश :**

**आस्फोता गिरिकर्णीस्याद्विष्णुक्रान्ताऽपराजिता ।**

आस्फोता(टा), गिरिकर्णी, विष्णुक्रान्ता र अपराजिता : यी अपराजिताका नाम हुन् ।

**स्याद्वातकः शीतलोऽपराजिता शणपर्ण्यपि ।**

वातक, शीतल, अपराजिता र शण(सन)पर्णी (असनपर्णी, आसनपर्णी) : यी अपराजिताविशेषका नाम हुन् ।


अपराजिता I Clitoria ternatea L., payer.de/amarakosa

**(ख) अर्कप्रकाश :**

**गिरिकन्या (कर्ण्या) कुष्ठशूलशोथव्रणविषापहः ॥**

अपराजिताको अर्कले कुष्ठरोग, शूल, शरीर सुन्निएको, घाउखटिरा र विषको असर नाश गर्दछ ।

**शङ्खपुष्प्या विषहरः स्मृतिकान्तिबलाग्निदः ।**

अपराजिताको फूलको अर्कले विषविकार नाश गर्दछ, स्मरणशक्ति, कान्ति, बल र जठराग्नि बढाउँदछ ।

**श्वेतापराजितामूलजातोऽर्कः सर्पिषा सह । गलगण्ड हरेदेव मण्डलात्पथ्यभोजनः ॥**

सेतो अपराजिताको जराको अर्क घिउसँग खानाले गलगण्ड रोग नाश गर्दछ । तर पन्ध्र दिनसम्म पथ्य भोजन गर्नुपर्दछ ।

**(ग) काश्यप संहिता :**

**...शङ्खिनीभ्यां स्रंसनमन्यद्रसायनं नास्ति ॥**

सेतो अपराजिताको तेलले जति पेट सफा अरु कुनै पनि रसायनले हुँदैन ।

**(घ) कैयदेव निघण्टु :**

**महाश्वेता श्वेतधामा श्वेतस्यन्दापराजिता । कटभी किणिही ज्ञेया लोहिनी गिरिकर्णिका ॥**
**शिरीषपत्रा कालिन्दी विषघ्नी शतपद्यपि । श्वेतपुष्पा वाजिखुरा श्वेतपाटलिपिण्डिका ॥**
**अपराऽव्यक्तगन्धाह्वा नीलपुष्पी गवादनी । किणिही तुवरा तीक्ष्णा कटुका विनियच्छति ॥**
**दोषत्रयविषश्वित्रव्रणग्रहशिरोगदान् ।**



महाश्वेता, श्वेतधामा, श्वेतस्यन्दा, अपराजिता, कटभी, किणिही, लोहिनी, गिरिकर्णिका, शिरीषपत्रा, कालिन्दी, विषघ्नी, शतपदी, श्वेतपुष्पा, वाजिखुरा, श्वेतपाटलि र पिण्डिका : यी सेतो अपराजिताका तथा अव्यक्तगन्धाह्वा, नीलपुष्पी र गवादनी : यी नीलो अपराजिताका नाम हुन् । सेतो अपराजिता टर्रो, तिक्खर, पिरो तथा त्रिदोष, विषविकार, सेतो कुष्ठ, खटिरा, ग्रहबाधा र टाउकाका रोग नाशगर्ने गुणको हुन्छ ।



गिरिकर्णी । Clitoria ternatea L., payer.de/amarakosa

**(ङ) धन्वन्तरि निघण्टु :**

**अश्वक्षुरा श्वेतपुष्पी श्वेता च गिरिकर्णिका ॥ कटभी श्वेतानामा च श्वेतस्यन्दाऽपराजिता ।**

**नीलपुष्पी महाश्वेता गिरीकर्णी गवादनी ॥ वल्ली चात्युग्रगन्धा च नीलस्पन्दा प्रकीर्तिता ।**
**(गिरिकर्णी हिमा तिक्ता पित्तोपद्रवनाशिनी । विषनेत्रविकारांश्च हन्ति कुष्ठरुजापहा ॥)**
**गिरिकर्णीद्वयं तिक्तं पित्तोपद्रवनाशनम् ॥ चक्षुष्यं विषदोषघ्नं त्रिदोषशमनं च तत् ।**


विष्णुक्रान्ता | Clitoria ternatea L., payer.de/amarakosa

अश्वक्षुरा, श्वेतपुष्पी, श्वेता, गिरिकर्णिका, कटभी, श्वेतनामा, श्वेतस्पन्दा र अपराजिता : यी सेतो अपराजिताका तथा नीलपुष्पी, महाश्वेता, गिरिकर्णी, गवादनी, वल्ली, अत्युग्रगन्धा र नीलस्पन्दा : यी नीलो अपराजिताका नाम हुन् । (सेतो अपराजिता शीतवीर्यको, तीतो, पित्तविकार नाशक, विषविकार नाशक, आँखाका विकार नाशक र घाँटीका रोग नाशक हुन्छ ।) दुवै थरी अपराजिता तीता, पित्तविकार नाशक, आँखाका लागि लाभदायक, विषविकार नाशक र त्रिदोषलाई शान्तपार्ने गुणका हुन्छन् ।

(च) **निघण्टुशेष :**

**स्याद् गिरिकर्ण्यामास्फोता विष्णुक्रान्ताऽपराजिता ।**

गिरिकर्णी, आस्फोता, विष्णुक्रान्ता र अपराजिता : यी अपराजिताका नाम हुन् ।



**सा तु श्वेता श्वेतनामा कटभी श्वेतनामिका । श्वेतस्यन्दाऽश्वखुरश्च...॥**

श्वेता, श्वेतनामा, कटभी, श्वेतनामिका, श्वेतस्यन्दा र अश्वखुर : यी सेता अपराजिताका नाम हुन् ।

**.. .. .. कृष्णा त्वव्यक्तगन्धिका । नीलस्यन्दा नीलपुष्पी महाश्वेता गवादनी ॥**

कृष्णा, अव्यक्तगन्धिका, नीलस्यन्दा, नीलपुष्पी, महाश्वेता र गवादनी : यी नीलो (वा कालो) अपराजिताका नाम हुन् ।

(छ) **पर्यायरत्नमाला :**

**गवाक्ष्यश्वखुरी श्वेता श्वेतभण्डापराजिता । द्विविधा सा सिता नीला गिरिकर्णी गवादनी ॥**

गवाक्षी, अश्वखुरी, श्वेता, श्वेतभण्डा र अपराजिता : यी सेतो अपराजिताका नाम हुन् । यो दुई थरी हुन्छ । नीलो अपराजितालाई गिरिकर्णी र गवादनी भनिन्छ ।

(ज) **भावप्रकाश निघण्टु :**

**आस्फोता गिरिकर्णीस्याद्विष्णुक्रान्ताऽपराजिता । अपराजिते कटू मेध्ये शीते कण्ठ्येसुदृष्टिदे ॥**
**कुष्ठमूत्रत्रिदोषामशोथव्रणविषापहे । कषाये कटुके पाके तिक्ते च स्मृतिबुद्धिदे ॥**

(अपराजिता सेतो र नीलो फुल्ने गरी दुई किसिमको हुन्छ) । आस्फोता, गिरिकर्णी, विष्णुक्रान्ता र अपराजिता : यी अपराजिताका नाम हुन् । दुवैको स्वाद पिरो, तीतो र टर्रो हुन्छ । दुवैले ग्रहणगर्ने शक्ति बढाउँदछन्, शीतल गर्दछन्, घाँटीलाई फाइदा गर्दछन् तथा दृष्टिशक्ति बढाउँदछन् । यिनले कुष्ठ, मुत्ररोग, त्रिदोष, आमविकार, सुजन, घाउखटिरा र विषविकार नाश गर्दछन् । यी पचेपछि पिरा हुन्छन् । यिनले सम्झनाशक्ति र बुद्धि दिन्छन् ।

## (झ) मदनपाल निघण्टु :

**विष्णुक्रान्ता नीलपुष्पी जया वश्याऽपराजिता । विष्णुक्रान्ता कटुर्मेध्या कृमिव्रणकफाञ्जयेत् ॥**

विष्णुक्रान्ता, नीलपुष्पी, जया, वश्या र अपराजिता : यी अपराजिताका नाम हुन् । यो पिरो, बुद्धिवर्धक तथा कीरा, घाउखटिरा र कफविकार नाश गर्ने गुणको हुन्छ ।

**श्वेतस्यन्दा श्वेतपुष्पा कटभिर्गिरिकर्णिका । सिताऽपराजिता श्वेता विषघ्नी मे(मो)हनाशिनी ॥**

श्वेतस्यन्दा, श्वेतपुष्पा, कटभि, गिरिकर्णिका, सिता, अपराजिता, श्वेता, विषघ्नी र मे(मो)हनाशिनी : यी सेतो अपराजिताका नाम हुन् ।

**नीलस्यन्दा व्यक्तगन्धा नीलपुष्पा गवादिनी । श्वेतस्यन्दाद्वयं शीतं ग्रहघ्नं दृष्टिकुण्ठकृत् ॥**
**कुष्ठशूलत्रिदोषामशोफव्रणविषापहम् ॥**

नीलस्यन्दा, व्यक्तगन्धा, नीलपुष्पा र गवादिनी : यी नीलो अपराजिताका नाम हुन् । दुवै अपराजिता शीतल गर्ने, ग्रहदोष नाशक, दृष्टिबाधक तथा कुष्ठ, शूल, त्रिदोष, आमविकार, सुजन, घाउखटिरा र विषविकार नाशक हुन्छन् ।

## (ञ) राज निघण्टु :

**अश्वक्षुरादिकर्णी च कटभी दधिपुष्पिका । गर्दभी सितपुष्पी च श्वेतस्यन्दाऽपराजिता ॥**
**श्वेता भद्रा सुपुष्पी च विषहन्त्री त्रिरेकधा । नागपर्यायकर्णी स्यादश्वाह्वादिक्षुरीस्मृता ॥**
**गिरिकर्णी हिमा तिक्ता पित्तोपद्रवनाशिनी । चक्षुष्या विषदोषघ्नी त्रिदोषशमनी च सा ॥**


आस्फोटा | Clitoria ternatea L., payer.de/amarakosa

अश्वक्षुरा, अद्रिकर्णी, कटभी, दधिपुष्पिका, गर्दभी, सितपुष्पी, श्वेतस्यन्दा अपराजिता, श्वेता, भद्रा, सुपुष्पी, विषहन्त्री, नागका पर्यायवाची शब्दका पछाडि कर्णी आउने शब्द र घोडा अर्थ बुझाउने शब्दका पछाडि क्षुर आउने शब्द : यी सेतो अपराजिताका नाम हुन् । यो शीतवीर्यको, तीतो र पित्तले उपद्रो नाश गर्ने, आँखाका लागि हितकर, विषविकार नाशक र त्रिदोष शान्त पार्ने गुणको हुन्छ ।

**नीलपुष्पी महानीला स्यान्नीला गिरिकर्णिका । गवादनी व्यक्तगन्धा नीलस्यन्दा षडाह्वया॥**
**नीलाद्रिकर्णी शिशिरा सतिक्ता रक्तातिसारज्वरदाहहन्त्री ।**
**विच्छर्दिकोन्मादमदभ्रमार्तिश्वासातिकासामयहारिणी च॥**

नीलपुष्पी, महानीला, नीला-गिरिकर्णिका, गवादनी, व्यक्तगन्धा र नीलस्यन्दा : यी नीलो अपराजिताका नाम हुन् । यो शीतवीर्यको र तीतो तथा रक्तातिसार, जरो, डाह, वाकवाकी, उन्माद, भ्रमजन्य पीडा, दम र लहरे खोकी नाशक हुन्छ ।


सेतो अपराजिता (तस्बिर श्रोत : आचार्य बालकृष्ण)

(ट) **राजवल्लभ निघण्टु :** 

**शोथघ्नी कासहा कण्ठ्या विषघ्नी गिरिकर्णिका॥ आस्फोता विषकुष्ठघ्नी ...॥**

गिरिकर्णिका खोकी नाशक, घाँटीका लागि हितकर र विषविकार नाशगर्ने गुणको हुन्छ । अपराजिताले विषविकार र कुष्ठरोग नाश गर्दछ ।

(ठ) **शार्ङ्गधर संहिता :**

**विष्णुक्रान्ताजटाकल्कः सिताक्षौद्रघृतैर्युतः । परिणामभवं शूलं नाशयेत् सप्तभिर्दिनैः॥**

अपराजिताको जराको कल्कमा खुँदो, मह र घिउ मिसाएर खाए खाना पच्ने बेलामा पेटमा हुने शूल वा दुखाई सात दिनमा नाश हुन्छ ।

(ड) **शालिग्राम निघण्टु :**

**आस्फोता गिरिकर्णी स्याद्भूमिलग्नाऽपराजिता । नगपर्य्यायकर्णी च गवाक्षी गिरिशालिनी॥**

आस्फोता, गिरिकर्णी, भूमिलग्ना, अपराजिता, पर्वतवाची शब्दका पछाडिकर्णी जोडिएका शब्दहरू, गवाक्षी र गिरिशालिनी : यी अपराजिताका नाम हुन् ।

**नीलपुष्पी महानीला स्यान्निला गिरिकर्णिका ।**
**गवादिनी व्यक्तगन्धा विष्णुक्रान्ता विभाण्डिका॥**

नीलपुष्पी, महानीला, निला, गिरिकर्णिका, गवादिनी, व्यक्तगन्धा, विष्णुक्रान्ता र विभाण्डिका : यी नीलो अपराजिताका नाम हुन् ।

**श्वेता गोकर्णिका कट्वी शीता तिक्ता च बुद्धिदा । चक्षुष्या तुवरा चैव सरा विषविनाशिनी ॥**
**त्रिदोषं शीर्षशूलञ्च दाहं कुष्ठञ्च शूलकम् । आमं पित्तरुजं चैव शोथं जन्तून् व्रणं कफम् ॥**
**ग्रहपीडा शीर्षरोगं विषं सर्पस्यनाशयेत् ।**

सेतो अपराजिता पिरो, शीतवीर्यको, तीतो, बुद्धिवर्धक, आँखाका लागि हितकर टर्रो, मलमूत्रलाई तलतिर सार्ने, विषविकार नाशगर्ने तथा त्रिदोष टाउकाको शूल डाह कुष्ठ, शूल, आमविकार, पित्तविकार, सुजन, कीरा, घाउखटिरा, कफविकार, ग्रहबाधा, टाउकाका रोग र सर्पको विषविकार नाश गर्दछ ।

**कृष्णगोकर्णिका तिक्ता रसे स्निग्धा त्रिदोषहा । शीतवीर्य्या वातपित्तज्वरदाहभ्रमापहा ॥**
**पिशाचबाधारक्तातिसारोन्मादमदापहा । अतिकासश्वासकफकुष्ठजन्तुक्षयापहा ॥**
**अन्येगुणास्तु सुश्वेतगोकर्णीसदृशा मता ।**

कालो अपराजिता तीतो, चिल्लो, त्रिदोष नाशक, शीतवीर्य भएको हुन्छ । यसले वातविकार, पित्तविकार, जरो, डाह र भ्रम नाश गर्दछ । यसले पिशाचबाधा, रक्तातिसार, पागलपन, नसा, कडा खालको खोकी, कफविकार, कुष्ठ, कीरा र क्षयरोग नाश गर्दछ । यसका अन्य गुण सेतो अपराजिताका जस्तै हुन्छन् ।



**(ढ) सोढल निघण्टु :**

**अश्वखुर्या श्वेतपुष्पी श्वेता च गिरिकर्णिका ॥**
**कटभी श्वेतनामा च श्वेतस्पन्दाऽपराजिता । विषघ्नी जनिका भण्डा गर्दभी दधिपुष्पिका ॥**

अश्वखुर्य, श्वेतपुष्पी, श्वेता, गिरिकर्णिका, कटभी, श्वेतनामा, श्वेतस्पन्दा, अपराजिता, विषघ्नी, जनिका, भण्डा, गर्दभी र दधिपुष्पिका : यी सेतो अपराजिताका नाम हुन् ।

**नीलपुष्पा महानीला गिरिकर्णी गवादनी । वल्ली चात्युग्रगन्धा च नीलस्पन्दा गवाक्ष्यपि ॥**

नीलपुष्पा, महानीला, गिरिकर्णी, गवादनी, वल्ली, अत्युग्रगन्ध, नीलस्पन्दा र गवाक्षी : यी नीलो अपराजिताका नाम हुन् ।



नीलो अपराजिता (तस्बिर श्रोत : आचार्य बालकृष्ण)

# अपस्मार (छारेरोग)
## Epilepsy

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश (अपस्मार) : रोगीको कलेजो काँपेर बेहोस भई जमिनमा गिर्ने काम; मूर्च्छा पर्ने रोग; छारेरोग; मिरगी; मिर्गी ।

(ख) अपस्मारलाई अंग्रेजीमा Epilepsy भनिन्छ ।

**प्राचीन ग्रन्थका वचनहरू :**

**(क) अष्टाङ्ग हृदय :**

**स्मृत्यपायो ह्यपस्मारः स धीसत्त्वाभिसम्प्लवात् । जायतेऽभिहते चित्ते चिन्ताशोकभयादिभिः ॥**

स्मृति-ज्ञानको अभाव हुनुलाई "अपस्मार" भनिन्छ । अर्थात् जब यो रोगले च्याप्दछ तब स्मृति पूर्णतः नाश हुन्छ । यतिखेर बुद्धि र मन (वा सोचविचार) को लोप हुन्छ ।

**(ख) चरक संहिता :**

**अपस्मारं पुनः स्मृतिबुद्धिसत्त्वसम्प्लवाद्बीभत्सचेष्टमावस्थिकं तमः प्रवेशमाचक्षते ॥**

स्मृति, बुद्धि र मन विकृत हुनाले मुखमा फिँज आउने, बान्ता गर्ने, हातखुट्टा भट्कार्ने जस्ता शारीरिक चेष्टा गरी तमोगुणका कारण (अँध्यारोमा पसेको भान भई) अकस्मात् बेहोस हुने रोगलाई "अपस्मार" भनिन्छ ।



**(ग) भावप्रकाश संहिता :**

**तमःप्रवेशः संरम्भो दोषोद्रेकहतस्मृतिः । अपस्मार इति ज्ञेयो गदो घोरतरो हि सः ॥**
**(संरम्भ : नेत्राविकृतिहस्तपादादिविक्षेपणादिकम्) ।**

अन्धकारमा छिरिरहेको जस्तो भान हुने तथा दोषवृद्धिले सम्झनाशक्ति नाश हुने, आँखामा विकार आउने एवं हातगोडा भट्कार्ने खालको अति डरलाग्दो रोगलाई अपस्मार भनिन्छ ।

**(घ) राज निघण्टु :**

**अपस्मारोऽङ्गविकृतिर्लोलाङ्गो भूतविक्रिया ।**

अपस्मार, अङ्गविकृति, लोलाङ्ग र भूतविक्रिया : यी छारेरोगका पर्यायवाची नामहरू हुन् ।

**(ङ) सुश्रुत संहिता :**

**स्मृतिर्भूतार्थविज्ञानमपश्च परिवर्जने । अपस्मार इति प्रोक्तस्ततोऽयं व्याधिरन्तकृत् ॥**

**(अपशब्दो गमनार्थः, स्मारः स्मरणम्, अपगतः स्मारो यस्मिन् रोगे सोऽपस्मारः । (डल्हणः))**

स्मरणशक्तिको एवं आगो, जल आदिमा स्पर्श वा प्रवेश गर्दा हानी हुन्छ भन्ने कुराको सम्झना हराई तिनमा लडेर र मृत्यु समेत हुने हुनाले यो रोगलाई अपस्मार नाम दिइएको हो । (बितेका घटनाको ज्ञान हुनुको अर्को नाम स्मृति हो । यसको विनाशलाई नै अपस्मार भनिन्छ) ।

## अपाङ्ग र आवर्त्त (शरीरका मर्मस्थलविशेष)
## (The outer corner of the eye & the two depressions of the forehead above the eyebrows)

(क) **अष्टाङ्ग हृदय :**

**नेत्रयोर्बाह्यतोऽपाङ्गौ भ्रुवोः पुच्छान्तयोरधः । तथोपरि भ्रुवोर्निम्नावावर्तावान्ध्यमेषु तु ॥**

दुई आँखाको बाहिरपट्टी, आँखीभौंको छेउमा तलतिर अपाङ्ग नामका दुई वटा मर्मस्थल हुन्छन् । यस्तै आँखीभौंको माथितिर अलि साना आवर्त्त नामका दुई मर्मस्थल हुन्छन् । यी चार वटा मर्मस्थल चुँडिएमा अन्धोपन वा दृष्टिसम्बन्धी विकार उत्पन्न हुन्छ ।

(ख) **सुश्रुत संहिता :**

**भ्रूपुच्छान्तयोरधोऽक्ष्णोर्बाह्यतोऽपाङ्गौ तत्रान्ध्यं दृष्ट्युपघातो वा; भ्रुवोरुपरि निम्नयोरावर्तौ नाम, तत्राप्यान्ध्यं दृष्ट्युपघातो वा;**

आँखीभौंको छेउमा तलतिर आँखाका बाहिरपट्टि अपाङ्ग नामक मर्मस्थल हुन्छ । यहाँ छेडिन गए अन्धोपन वा दृष्टिक्षमता कमजोर हुन जान्छ । आँखीभौंको छेउमा माथितिर तल्लो भागमा आवर्त नामक मर्मस्थल हुन्छ । त्यहाँ चोट लागे पनि अन्धोपन वा दृष्टिक्षमता कमजोर हुन जान्छ ।

# अपाटव (सुस्ती)
Lethargy

**परिभाषा :**

(क) के.यन.स्वामी (अपाटव) : सुस्त वा सुस्ती ।
(ख) हिन्दी विश्वकोश : (१) अपाटव : न विद्यते पाटवं यस्मिन् । पटु अर्थात् उद्यम गर्ने स्वभाव नहुने अवस्था । (२) शीतलत्व : जडता ।
(ग) हलायुध कोश (अपाटवम्) : पटोर्भावः । नास्ति पाटवं पटुता यत्र । अपटुता, जडता ।
(घ) आयुर्वेदीय महाकोश : अपाटव : रोगः, जाड्यम् ।
(ङ) अंग्रेजीमा यसलाई Lethargy भन्न सकिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**...शीतलत्वमपाटवम्॥**

शीतलत्व र अपाटव : यी सुस्तीका पर्यायवाची नाम हुन् ।

# अपान वायु
# (Ventris crepitus, Fart)

(क) **सुश्रुत संहिता :**

**पक्वाधानालयोऽपानः काले कर्षति चाप्यधः । समीरणः शकृन्मूत्रं शुक्रगर्भार्तवान्यधः ॥**
**क्रुद्धश्च कुरुते रोगान् घोरान् बस्तिगुदाश्रयान् ।**

अपानवायु पक्वाशयमा रहने गर्दछ । यही वायुले दिसा, पिसाब, शुक्र, गर्भ र रज उचित समयमा तलतिर तान्ने वा निकाल्ने गर्दछ । यो वायु विकृत हुँदा तल्लो पेट (वा मूत्राशय) र मलद्वार क्षेत्रमा डरलाग्दा रोगहरू निकाल्न थाल्दछ ।

(ख) **अष्टाङ्ग हृदय :**

**अपानोऽपानगः श्रोणिवस्तिमेढ्रोरुगोचरः । शुक्रार्तवशकृन्मूत्रगर्भनिष्क्रमणक्रियः ॥**

अपान वायु रहने मुख्य स्थान शरीरको मलद्वार वा गुदद्वार हो । यो कम्मर, तल्लो पेट (बस्ति), मूत्रमार्ग र तिघ्रामा घुमिरहने गर्दछ (पाइन्छ) । शुक्र (वीर्य), रज, मल, मूत्र, गर्भ आदिलाई उचित समयका बाहिर निकाल्नु नै अपानवायुको मुख्य काम हुने गर्दछ ।



(ग) **भावप्रकाश संहिता :**

**पक्वाशयालयोऽपानः काले कर्षति चाप्ययम् ॥ समीरणः शकृन्मूत्रशुक्रगर्भार्त्तवान्यधः ।**
**क्रुद्धस्तु कुरुते रोगान् घोरान्वस्तिगुदाश्रयान् ॥ शुक्रदोषप्रमेहांश्च व्यानापानप्रकोपजान् ॥**

(शरीरमा रहने पाँच वायुमध्ये) पक्वाशयमा रहने चौथो अपान वायुले मल, मूत्र, शुक्र, गर्भ र रजलाई बाहिर निकाल्ने कार्य गर्दछ । यो वायु दूषित हुँदा मूत्राशय र मलाशय सम्बन्धी अनेकौं रोग जन्माउँदछ । साथै शुक्रदोष, प्रमेह तथा अरु व्यान तथा अपान वायु दूषित हुँदा हुने रोग समेत उत्पन्न गराउँदछ ।

(घ) **शार्ङ्गधर संहिता :**

**मलाशये चरेत्...अपानः ।**

पक्वाशयमा रहने वायुलाई “अपान” भनिन्छ ।

(ङ) **प्रश्नोपनिषद्, तृतीय प्रश्न :**

**पृथिव्यां या देवता सैषा पुरुषस्यापानमवष्टभ्यान्तरा ।**

पृथ्वीमा जो देवता छन् उनै यो मनुष्यको अपानवायुलाई स्थिर गर्दै रहन्छन् ।

## अपामार्ग (दांतवन)
## The Prickly-Chaff Flower

(क) कुलचन्द्र शर्मा : अपामार्ग, शैखरिक आदि भनेको अपामार्ग हो ।

(ख) नेपाली बृहत् शब्दकोश : (१) अपामार्ग : भुवादार पात हुने, आँख्लै आँख्ला परेका राता, हरिया तथा सेता डाँठ हुने, मञ्जरीजस्तो फूल फुल्ने र तिलका दानाजस्तो फल फल्ने एक झारविशेष; एक प्रकारको दतिवन (भाद्रशुक्ल पञ्चमी वा ऋषिपञ्चमीका दिन हिन्दू नारीजातिले लगाउने दतिवन) । (२) दतिउन : अमामार्ग; दतिवन ।

(ग) डा.चुनेकर : अपामार्गलाई अंग्रेजीमा The Prickly-Chaff Flower (द प्रिक्ली चाफ फ्लावर) तथा ल्याटिन भाषामा *Achyranthes aspera* Linn. (याकऱ्यान्थिस यास्पेरा लिन) भनिन्छ ।

(घ) विश्वनाथ द्विवेदी शास्त्री : यसको अंग्रेजी नाम Rough chaff tree (रफ चाफ ट्री) हो ।

(ङ) आचार्य बालकृष्ण : सेतो दतिवनलाई अंग्रेजीमा Washerman’s plant (वासरम्यान्स प्लाण्ट) , Rough chaff flower (रफ चाफ फ्लावर) वा The prickly-chaff flower (द प्रिक्ली चाफ फ्लावर) भनिन्छ । नेपालीमा सेतो अपामार्गलाई दतिवन भनिन्छ । रातो अपामार्गका डाँठ र मञ्जरी रातो हुन्छ । यसमा पातमा ससाना राता दाग हुन्छन् । रातो दतिवनलाई ल्याटिन भाषामा *Cyathula prostrata* (Linn.) Blume ( क्याथुला प्रास्ट्राटा ब्लुम) तथा अंग्रेजीमा Purple princess (पर्पल प्रिन्सेस), Pastureweed (पास्चरवीड) वा Prostrate pasture weed (प्रास्ट्रेट पाश्चर वीड) भनिन्छ ।

(च) स्वामी सदाशिव तिर्थ : यसलाई अंग्रेजीमा Rough Chaff Tree (रफ चाफ ट्री) वा Prickly Chaff Flower (प्रिक्ली चाफ फ्लावर) तथा ल्याटिन भाषामा *Achyranthes aspera*, Linn. (याकऱ्यान्थिस यास्पेरा लिन) भनिन्छ ।



(ग) डा.साङ्ग्वधर : ल्याटिन भाषामा सेतो फुल्ने दतिवनलाई *Achyranthes aspera* Linn. ( याकऱ्यान्थिस यास्पेरा लिन) तथा रातो फुल्ने दतिवनलाई *Achyranthes rubro-fusca* ( याकऱ्यान्थिस रुब्रो फुस्का) भनिन्छ । यसैगरी ठूलो खालको दतिवनलाई *Achyranthes porphyristachya* Wall. (याकऱ्यान्थिस पर्फिरिस्टचाचा वाल), सेतो पात हुने दतिवनलाई *Achyranthes argentea* Thw.(याकऱ्यान्थिस अर्जेन्टिया थ), सेतो ठाँठ हुने दतिवनलाई *Pupalia lappacea* Moq.(प्युपालिया लापासि मक) र आसामतिर पाइने एक अर्को थरी दतिवनलाई *Achyranthes bidentata* Blume.(याकऱ्यान्थिस बाइडेन्टाटा ब्लुम) ल्याटिन नाम दिइएको छ ।

(घ) वैद्य डी.के. कामत र डा.यस.डी.कामत : यो Amaranthaceae (यामरनथेसी) परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Achyranthes aspera Linn.* (याकऱ्यान्थिस यास्पेरा लिन) हो ।

(छ) शालिग्राम निघण्टु : यसलाई अंग्रेजीमा Rough chalff tree (रफ चाफ ट्री) तथा ल्याटिन भाषामा *Achyranthes aspera* (याकऱ्यान्थिस यास्पेरा)वा *Achyranthes alternifolia* (याकऱ्यान्थिस अल्टरनिफोलिया) भनिन्छ । रातो दतिवनलाई ल्याटिन भाषामा एकेरेंथिस लेपेरिया भनिन्छ ।

(ज) फर्माकोपिया : यो Amaranthaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Achyranthes aspera* Linn. हो । काँढापानीका लागि एक मात्रामा यसको २०-५० ग्राम प्रयोग हुन्छ ।

(झ) Journal of Plant Resources, Vol. 17, No. 1, Government of Nepal, 2019 : यो Amaranthaceae परिवारमा पर्दछ । यसलाई अंग्रेजीमा Prickly chaff flower तथा ल्याटिन भाषामा *Achyranthes aspera* L. वा *Achyranthes bidentata* Blume भनिन्छ ।

(ञ) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : यो Angiosperm समूह अन्तर्गतको Amaranthaceae परिवारमा पर्दछ । यसलाई ल्याटिन भाषामा *Achyranthes aspera* L. वा *Achyranthes bidentata* Blume भनिन्छ ।


अपामार्गः | Achyranthes aspera L., payer.de/amarakosa

**प्राचीन ग्रन्थका वचनहरू :**

**(क) अग्निपुराण :**

**पुत्रार्थिनी विबेत्...। अपामार्गस्य पुष्पाग्रं नवं समहिषीपयः ॥**

पुत्र चाहने स्त्रीले दतिवनका कलिला फूलको टुप्पातिरको भागलाई पिँधेर भैंसीको दूधसँग पिउनू ।

**(ख) अभिधान मञ्जरी :**

**प्रोक्तोऽपामार्गोऽधशल्यः किणिही च दुर्ग्रहो घोण्टा ।**
**खरमञ्जरी च शिखरी प्रत्यक्पुष्पी मयूरकश्चेति ॥**
**कर्कटपिप्पल्यपरा शिखरी कूटश्च कर्कटी वसिरः । प्रत्यक्पुष्पी कथिता दुरभिग्रहनामधेया च॥**

अपामार्ग, अधशल्य, किणिही, दुर्ग्रह, घोण्टा, खरमञ्जरी, शिखरी, प्रत्यक्पुष्पी, मयूरक र कर्कपिप्पली : यी दतिवनका नाम हुन् । शिखरी, कूट, कर्कटी, वसिर, प्रत्यक्पुष्पी र दुरभिग्रह : यी अर्को थरी दतिवनका नाम हुन् ।

(ग) **अभिधान रत्नमाला :**

**अपामार्गस्तु शिखरी प्रत्यक्पुष्पी मयूरकः । धामार्गव शैखरिको दुर्ग्रहः खरमञ्जरी ॥**

अपामार्ग, शिखरी, प्रत्यक्पुष्पी र मयूरक : यी दतिवनका तथा धामार्गव, शैखरिक, दुर्ग्रह र खरमञ्जरी : यी अर्को थरी दतिवनका नाम हुन् ।

(घ) **अमरकोश :**

**अपामार्गः शैखरिकोऽधामार्गवमयूरकौ । प्रत्यक्पर्णी केशपर्णी किणिही खरमञ्जरी ॥**

अपामार्ग, शैखरिक, अधामार्गव (धामार्गव), मयूरक, प्रत्यक्पर्णी, केशपर्णी (कीशपर्णी), किणिही र खरमञ्जरी : यी दतिवनका नाम हुन् ।

(ङ) **अर्कप्रकाश :**



**अपामार्गोद्भवच्छर्दि कफमेदोनिलापहः । आरक्तापामार्गभवो धातुस्तम्भनकारकः ॥**

दतिवनको अर्कले वाकवाकी, कफविकार, बोसोविकार र वातविकार नाश गर्दछ । रातो दतिवनको अर्कले शरीरका धातुलाई रोक्दछ ।

**अपामार्ग...अर्को वा ... सदुग्धकः ॥ ... श्वविषघ्नः पृथक् पृथक् ।**

दतिवनको अर्क दूधसँग पिउनाले कुकुरको विष नाश हुन्छ ।

(च) **अष्टाङ्ग निघण्टु :**

**अपामार्गः शैखरिकः प्रत्यक्पुष्पी मयूरकः ॥**

अपामार्ग, शैखरिक, प्रत्यक्पुष्पी र मयूरक : यी दतिवनका नाम हुन् ।

(छ) **कैयदेव निघण्टु :**

**अपामार्गः शैखरिकः शिखरी खरमञ्जरी । अधःशल्यः क्षारमध्या दुर्ग्रहा दुरभिग्रहः ॥**

**आघाटः किणिही मार्गः प्रत्यक्पुष्पी मयूरकः । अपामार्गः कटुस्तिक्तस्तीक्ष्णोष्णो दीपनः सरः ॥**
**पाचनो वामनश्छेदी कफमेदोऽनिलापहः । निहन्ति शूलहिध्मार्शोकण्डूदद्रूदरापचीः ॥**

अपामार्ग, शैखरिक, शिखरी, खरमञ्जरी, अधःशल्य, क्षारमध्या, दुर्ग्रहा, दुरभिग्रह, आघाट, किणिही,मार्ग, प्रत्यक्पुष्पी र मयूरक : यी दतिवनका नाम हुन् । दतिवन पिरो, तीतो, तिक्खर, उष्णवीर्यको, दीपनी, मलमूत्रलाई तलतिर सार्ने, पाचनी, वान्ता गराउन उपयुक्त वा गराउने, छेदनी तथा कफविकार, बोसोविकार र वातविकार नाशक हुन्छ । यसले शूल, बाडुली, अल्काई, लुतो, दाद, पेटका रोग र अपची पनि नाश गर्दछ ।

**अन्यो वृत्तफलो रक्तबिन्दुकः कपिपिप्पली । वशिरो मर्कटी कण्ठः प्रत्यक्श्रेणी खरच्छदः ॥**
**वशिरस्तद्गुणैर्न्यूनो वातविष्टम्भकृद्धिमः । तत्फलं शीतलं स्वादु रसे पाके च दुर्जरम् ॥**
**विष्टम्भि वातलं रूक्षं रक्तपित्तप्रसादनम् ।**

वृत्तफल, रक्तबिन्दुक, कपिपिप्पली, वशिर, मर्कटी, कण्ठ, प्रत्यक्श्रेणी र खरच्छद : यी अर्को थरी अर्थात् रातो दतिवनका नाम हुन् । यसको गुण सेतो दतिवनको भन्दा कम हुन्छ । यसले वातविकार र कब्जियत गर्दछ तथा शीतवीर्यको हुन्छ । यसका बीज शीतवीर्यको, शुरुमा र पचेपछि स्वादिलो, ढिलो पच्ने, वातविकार गर्ने, रुखो र रक्तपित्तलाई प्रशोधन गर्ने गुणको हुन्छ ।

**समष्ठिल स्तोयवृत्ती रामठस्तोयमञ्चरी ॥**
**उलकः शोषहा तोयापामार्गश्च मयूरकः । रामठः कटुकः शोफकफमारुतनाशनः ॥**



समष्ठिल, स्तोयवृत्ती, रामठ, तोयमञ्चरी, उलक, शोषहा, तोयापामार्ग र मयूरक : यी जल-दतिवनका नाम हुन् । यो पिरो तथा सुजन, कफविकार र वातविकार नाशगर्ने गुणको हुन्छ ।


प्रत्यक्पर्णी | Achyranthes aspera L., payer.de/amarakosa

(झ) **गरुडपुराण :**

**एकं ...अपामार्गस्य वा शिव ।**
**सरसं योनिनिः क्षिप्तं वराङ्गस्य व्यथां हरेत् । प्रसूतिवेदनाञ्चैव तरुणीनां व्यथां हरेत् ॥**

पुनर्नवा वा दतिवनको जराको रस विधिपूर्वक जननेन्द्रियमा प्रयोग गर्नाले सुत्केरी व्यथा लागेकी स्त्रीको पीडा नाश हुन्छ ।

**अपामार्गस्य वै मूले नारीणां शिरसि स्थिते । गर्भशूलं विनश्येत नात्र कार्या विचारणा ॥**

दतिवनको जरा टाउकामा बाँध्नाले स्त्रीलाई गर्भजन्य पीडा हुँदैन । यसमा शङ्का नगर्नू ।

(ञ) **देवी भागवत् :**

**अपस्मारविनाशः स्यादपामार्गस्य तण्डुलैः ॥**

दतिवनको गेडाको (देवीलाई) होम हाल्नाले छारेरोग नाश हुन्छ ।

(ट) **धन्वन्तरि निघण्टु :**

**अपामार्गस्तु शिखरी प्रत्यक्पुष्पी मयूरकः । अधःशल्योऽथ किणिही दुर्ग्रहा खरमञ्जरी ॥**
**स चैवोक्तः शैखरिको मर्कटी दुरभिग्रहः । पराक्पुष्पी वशीरश्च कण्टी मर्कटपिप्पली ॥**
**अपामार्गस्तु तिक्तोष्णः कटुश्च कफनाशनः । अर्शःकण्डूदरामघ्नो रक्तहृद् ग्राहिवान्तिकृत् ॥**

अपामार्ग, शिखरी, प्रत्यक्पुष्पी, मयूरक, अधःशल्य, किणिही, दुर्ग्रहा, खरमञ्जरी, शैखरिक, मर्कटी, दुरभिग्रह, पराक्पुष्पी, वशीर, कण्टी र मर्कटपिप्पली : यी दतिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । दतिवन तीतो, उष्णवीर्यको, पिरो तथा कफ, अल्काई, लुतो, पेटको आम रोग र रक्तविकार नाशक हुन्छ । यो ग्राहि र बान्ता गराउने गुणको हुन्छ ।

**अन्यो रक्तो रक्तपुष्पो वशीरः कपिपिप्पली । क्षुद्रापामार्गको रक्तः ख्यातको रक्तपूर्वकः ॥**
**अपामार्गोऽरुणो वातविष्टम्भी कफनाशनः । व्रणकण्डूविषघ्नश्च सङ्ग्राही वान्तिकृत्परः ॥**

रक्तपुष्प, वशीर, कपिपिप्पली, क्षुद्रापामार्गक, रक्त र रक्तपूर्वक : यी रातो दतिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो वातविकार गर्ने, विष्टम्भी तथा कफविकार, घाउखटिरा, लुतो र विषविकार नाशक हुन्छ । यो सङ्ग्राही र अत्यन्त बान्ता गराउने गुणको हुन्छ ।

(ठ) **निघण्टु रत्नाकर (शा.नि.) :**

**रक्तापामार्गः किञ्चित्कटुकः शीतलः स्मृत । मलावष्टम्भवमिकृद्वातविष्टम्भकारकः ॥**
**रूक्षो व्रणं विषं वातं कफं कण्डूं च नाशयेत् । बीजमस्य रसे पाके दुर्जरं स्वादु शीतलम् ॥**
**मलावष्टम्भकं रूक्षं वान्तिकृद्रक्तपित्तजित् । कासनाशकरं प्रोक्तमुनिभिस्तत्त्वदर्शिभिः ॥**

रातो दतिवन केही पिरो, शीतवीर्यको हुन्छ । यसले कब्जियत गर्ने, बान्ता गराउने, पेटको हावा रोक्ने, रुखो तथा घाउखटिरा, विषविकार, वातविकार, कफविकार र लुतो नाश गर्दछ । यसको गेडा पहिले

र पचेपछिको रस पनि ढिलो पच्दछ । यो गुलियो र शीतल गर्ने हुन्छ । यसले कब्जियत गर्दछ, रुखो हुन्छ, बान्ता गराउँदछ तथा रक्तपित्तलाई जित्दछ ।

**(ड) निघण्टुशेष :**

**अपामार्गे त्वधःशल्या किणिही खरमञ्जरी । धामार्गवः शैखरिको वशिरः कपिपिप्पली ॥**
**कपिवल्ली मर्कटिका शिखर्याघाट-दुर्ग्रहौ । प्रत्यक्पुष्पी पत्रपुष्पी केशवल्ली मयूरकः ॥**

अपामार्ग, अधःशल्या, किणिही, खरमञ्जरी, धामार्गव, शैखरिक, वशिर, कपिपिप्पली, कपिवल्ली, मर्कटी, शिखरी, आघाट, दुर्ग्रह, प्रत्यक्पुष्पी, पत्रपुष्पी, केशवल्ली र मयूरक : यी दतिवनका नाम हुन् ।


मयूरकः | Achyranthes aspera L., payer.de/amarakosa

**(ढ) पर्याय रत्नमाला :**

**स्थलमञ्जर्यपामार्गः प्रत्यक्पुष्पी मयूरकः । क्षारमध्यस्त्वधोघण्टा शिखरी खरमञ्जरी ॥**

स्थलमञ्जरी, अपामार्ग, प्रत्यक्पुष्पी, मयूरक, क्षारमध्य, अधोघण्टा, शखरी र खरमञ्जरी : यी दतिवनका नाम हुन् ।

**(ण) भावप्रकाश निघण्टु :**

**अपामार्गस्तु शिखरी ह्यधः शल्यो मयूरकः ॥**
**मर्कटी दुर्ग्रहा चापि किणिही खरमञ्जरी । अपामार्गः सरस्तीक्ष्णो दीपनस्तिक्तकः कटुः ॥**
**पाचनो रोचनश्छर्दिकफमेदोऽनिलापहः । निहन्ति हृद्रुजाध्मार्शः कण्डूशूलोदरापचीः ॥**

अपामार्ग, शिखरी, अधःशल्य, मयूरक, मर्कटी, दुर्ग्रहा, किणिही र खरमञ्जरी : यी दतिवनका नाम हुन् । यो तीतो, पिरो र तिक्खर स्वादको हुन्छ । यसले मल खुलाउँदछ । यो दीपनी हुन्छ । यसले मुटुका रोग, आध्मान, अल्काई, लुतो, शूल, पेटका रोग र अपची नाश गर्दछ ।

**रक्तोऽन्यो वशिरो वृत्तफलो धामार्गवोऽपि च । प्रत्यक्पर्णी केशपर्णी कथिता कपिपिप्पली ॥**
**अपामार्गोऽरुणो वातविष्टम्भी कफहृद्धिमः । रूक्षः पूर्वगुणैर्न्यूनः कथितो गुणवेदिभिः ॥**

वृत्तफल, धामार्गव, प्रत्यक्पर्णी, केशपर्णी र कपिपिप्पली : यी रातो दतिवनका नाम हुन् । यो वायु अड्काउने, कफनाशक, शीतल गर्ने र रुखो हुन्छ । गुणका बारेमा जानिफकारहरूले यसलाई दतिवनभन्दा कम गुण भएको हुन्छ भनेका छन् ।

**अपामार्गफलं स्वादु रसे पाके च दुर्जरम् । विष्टम्भि वातलं रूक्षं रक्तपित्तप्रसादनम् ॥**

दतिवनका गेडा पचेपछि गुलियो हुन्छ, चाँडै पच्दैन, कब्जियत गराउँदछ, वातविकार बढाउँदछ, रुखो हुन्छ तर रक्तपित्त नाश गर्दछ ।

**(ण) मदनपाल निघण्टु :**

**अपामार्गस्तु शिखरी किणिही खरमञ्जरी । अधःशल्यः शैखरीकः प्रत्यक्पुष्पी मयूरका ॥**
**अपामार्गः सरस्तीक्ष्णो दीपनः कफवातजित् । निहन्ति दद्रुसिध्मार्शः कण्डुशूलोदरारुचीः ॥**

अपामार्ग, शिखरी, किणिही, खरमञ्जरी, अधःशल्यः, शैखरीकः, प्रत्यक्पुष्पी र मयूरका : यी दतिवनका नाम हुन् । यसमा दिसापिसाब खुलाउने, तिक्खर, जठराग्निलाई बाल्ने वा भोक जगाउने, कफविकार र वायुविकार नास्ने तथा दाद-दुभी-अल्काई-लुतो-शूल र अरुची नाश गर्ने गुण हुन्छ ।

**अन्यो रक्तो वृन्तफलो वशिरः कपिपिप्पली । अपामार्गोऽरुणो वातविष्टम्भी कफनाशनः ॥**
**ऊनः पूर्वगुणै रूक्षस्तत्पत्रं रक्तपित्तनुत् ॥**

अन्यरक्त, वृन्तफल, वशिर र कपिपिप्पली : यी रातो दतिवनका नाम हुन् । यसले वायुविकार बढाउँदछ र कब्जियत गर्दछ तर कफविकार नाश गर्दछ । अन्य गुण दवितवनका जस्तै तर केही कम प्रभावशाली हुन्छन् । यो रुखो हुन्छ । यसका पातले पनि रक्तपित्त नाश गर्दछ ।

**(ण) मदनादि निघण्टु :**

**अपामार्गश्शैखरिक प्रत्यक्पुष्पी मयूरकः । खरमञ्जर्यधःशल्यः क्षुधापोमार्गवस्तथा ॥**
**कफमेदोनिलहरः छेदनः स्रंसनस्तथा । रसे पाके च कटुका वीर्योष्णा खरमञ्जरी ॥**

अपामार्ग, शिखरिक, प्रत्यक्पुष्पी, मयूरक, खरमञ्जरी, अधःशल्य, क्षुधाप र अपामार्ग : यी दतिवनका नाम हुन् । यसले कफविकार, बोसोविकार र वातविकार नाश गर्दछ । यो छेदनी र संस्रनी हुन्छ । शुरुमा र पचेपछि पिरो हुन्छ । यो उष्णवीर्यको हुन्छ ।

(त) **माधवद्रव्यगुण :**

**अपामार्गोऽग्निकृत्तीक्ष्णः,**

दतिवनले पाचनशक्ति बढाउँदछ । यो तिक्खर हुन्छ ।

(थ) **राज निघण्टु :**

**अपामार्गस्तु शिखरी किणिही खरमञ्जरी । दुर्ग्रहश्चाप्यधःशल्यः प्रत्यक्पुष्पी मयूरकः ॥**
**काण्डकण्टः शैखरिको मर्कटी दुरभिग्रहः । वशिरश्च पराक्पुष्पी कण्टी मर्कटपिप्पली ॥**
**कटुर्माञ्जरिको नन्दी क्षवकः पङ्क्तिकण्टकः । मालाकण्टश्च कुब्जश्च त्रयोविंशतिनामकः ॥**
**अपामार्गस्तु तिक्तोष्णः कटुश्च कफनाशनः । अर्शकण्डूदरामघ्नो रक्तहृद्ग्राहिवान्तिकृत् ॥**

(१) अपामार्ग, (२) शिखरी, (३) किणिही, (४) खरमञ्जरी, (५) दुर्ग्रह, (६) अधःशल्य, (७) प्रत्यक्पुष्पी, (८) मयूरक, (९) काण्डकण्ट, (१०) शैखरिक, (११) मर्कटी, (१२) दुरभिग्रह, (१३) वशिर, (१४) पराक्पुष्पी, (१५) कण्टी, (१६) मर्कटपिप्पली, (१७) कटु, (१८) माञ्जरिक, (१९) नन्दी, (२०) क्षवक, (२१) पङ्क्तिकण्टक, (२२) मालाकण्ट र (२३) कुब्ज : यी तेइस वटा नाम दतिवनका नाम हुन् । दतिवन तीतो, उष्णवीर्यको, पिरो र कफनाशक हुन्छ । यसले अल्काई, लुतो र आमविकार नाश गर्दछ । दतिवनले रक्तविकार पनि नाश गर्दछ । यो ग्राहि र बान्ताकारक हुन्छ ।

**अन्यो रक्तो ह्यपामार्गः क्षुद्रापामार्गकस्तथा । आघट्टको दुग्धनिका रक्तबिन्दुरल्पपत्रिका ॥**
**रक्तोऽपामार्गकः शीतः कटुकः कफवातनुत् । व्रणकण्डूविषघ्नश्च सङ्ग्राही वान्तिकृत् परः ॥**

रक्त अपामार्ग, क्षुद्र अपामार्ग, आघट्टक, दुग्धनिका, रक्तबिन्दु र अल्पपत्रिका : यी रातो दतिवनका नाम हुन् । यो शीतवीर्यको, पिरो तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले घाउखटिरा, लुतो र विषविकार समेत नाश गर्दछ । यो ग्राही र अत्यन्त बान्ताकारक हुन्छ ।

(द) **राजवल्लभ निघण्टु :**

**अपामार्गोऽग्निवत्तीक्ष्णः क्लेदनः स्रंसनः प(स)रः ॥**

दतिवन आगो जस्तै तिक्खर, पसिना निकाल्ने र अत्यन्त संस्रनी हुन्छ । (यो मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ) ।

(ध) **रावण सांहेता :**

**पुष्यार्केऽह्नि समादाय खरमञ्जरीमूलकम् । पिष्ट्वा लिपेच्छरीरेषु शस्त्रस्तम्भः प्रजायते ॥**

पुष्य नक्षत्रको सङ्क्रान्तिमा दतिवनको जरा खनेर लेराई घोटेर त्यसको लेप शरीरमा दल्नाले हतियार-स्तम्भन हुन्छ अर्थात् जतिसुकै चोखा वा बलिया हतियारले पनि शरीरमा घाउ बनाउन सक्दैनन् ।

कन्याका हातबाट कातिएको बत्ती वा धागोले दतिवनको जरालाई टुपीमा बाँध्नाले बालकलाई आउने ऐकाहिक जरो ठिक हुन्छ ।

(न) **शार्ङ्गधर संहिता :**

**अपामार्गस्य बीजानां कल्कस्तण्डुलवारिणा । पीतो रक्तार्शसां नाशं कुरुते नात्र संशयः ॥**

दतिवनका गेडाको धुलो वा लेदोलाई चौलानी पानीमा मिसाएर पिउने गरे रगत बहने खालको अल्काई रोग ठिक हुन्छ ।

(प) **शालिग्राम निघण्टु :**



**अपामार्गः शैखरिकोधामार्गवमयूरकौ । प्रत्यक्पर्णी कीशपर्णी किणिही खरमञ्जरी ॥**

अपामार्ग, शैखरिक, धामार्गव, मयूरक, प्रत्यक्पर्णी, कीशपर्णी, किणिही र खरमञ्जरी : यी दतिवनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**रक्तोन्यो वशिरो वृत्तफलो धामार्गवोऽपि च । प्रत्यक्पर्णी केशपर्णी कथिता कपिपिप्पली ॥**

वशिर, वृत्तफल, धामार्गव, प्रत्यक्पर्णी, केशपर्णी र कपिपिप्पली : यी अर्कोथरी रातो दतिवनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

(फ) **सरस्वती निघण्टु :**

**अपामार्गः शैखरिको धामार्गवमयूरकौ । प्रत्यक्पर्णी केशपर्णी किणिही खरमञ्जरी ॥**

अपामार्ग, शैखरिक, धामार्गव, मयूरक, प्रत्यक्पर्णी, केशपर्णी, किणिही र खरमञ्जरी : यी दतिवनका नाम हुन् ।

(ब) **सोढल निघण्टु :**

**अपामार्गे तु शिखरी प्रत्यक्पुष्पी मयूरकः ॥ अधःशल्योऽथ किणिही कण्टी मर्कटपिप्पली ।**

**क्षवोऽधोमार्कवो घण्टा मर्कटी दुरभिग्रहः ॥ प्रत्यक्श्रेणी च वशिरः कटुश्च खरमञ्जरी ।**

अपामार्ग, शिखरी, प्रत्यक्पुष्पी, मयूरक, अधशल्य, किणिही, कण्टी, मर्कटपिप्पली, क्षव, अधोमार्कव, घण्टा, मर्कटी, दुरभिग्रह, प्रत्यक्श्रेणी, वशिर, कटु र खरमञ्जरी : यी दतिवनका नाम हुन् ।

**(भ) सौश्रुत निघण्टु :**

**मायूरको ह्यपामार्गः प्रत्यक्पुष्पी क्षवस्तथा । खरमञ्जरिकाघाटाः स चापामार्गको मताः ॥**

मायूरक, अपामार्ग, प्रत्यक्पुष्पी, क्षव, खरमञ्जरिका र घाटा : यी दतिवनका नाम हुन् ।

**(म) हृदयदीपक निघण्टु :**

**ज्योतिर्वह्निश्च हुतभुक् प्रत्यक्पुष्पी मयूरकः । मार्गोऽपामार्ग आघाटो शिखरी खरमञ्जरी ॥**

(ज्योति, वह्नि, हुतभुक्,?) प्रत्यक्पुष्पी, मयूरक, मार्ग, अपामार्ग, आघाट, शिखरी र खरमञ्जरी : यी दतिवनका नाम हुन् ।



खरमञ्जरी | Achyranthes aspera L., payer.de/amarakosa

दाँत माझ्नका लागि प्रयोग गरिने अनेक थरी डाँठ मध्ये दतिवनको डाँठ पनि एक हो । सनातन (हिन्दू) धर्मावलम्बीले जनैपूर्णिमाका दिन पुरुषले तथा ऋषिपञ्चमीका दिन स्त्रीले पाप नाश गरी शरीर शुद्धिका लागि दतिवनको डाँठ प्रयोग गर्ने विधान छ । यसैगरी तिहारमा नरके चतुर्दशीका दिन बिहान नुहाउँदा पनि पाप नाशगर्न दतिवन समेतको प्रयोग गर्ने विधान पाइन्छ । दतिवनको समिधा बाल्ने तथा यसका गेडाले होम गर्ने, दतिवनका पात र फूल देवीदेवतालाई चढाउने आदि कुरा पनि पुराणहरूमा पाइन्छ । आयुर्वेदलाई पन्छाएर धर्मका कुरा मात्र गर्नु बाटो बिराउनु हो कि जस्तो मलाई लाग्दछ ।

## अपीनस
## (The mucus of the nose)

(क) **अष्टाङ्ग हृदय :**

**कफः प्रवृद्धो नासायां रुद्ध्वा स्रोतांस्यपीनसम् । कुर्यात् सघुर्घुरश्वासं पीनसाधिकवेदनम्॥**
**अवेरिव स्रवत्यस्य प्रक्लिन्ना तेन नासिका । अजस्रं पिच्छिलं पीतं पक्वं सिङ्घाणकं घनम्॥**

टाउको भित्र नाक रहेको भागमा कफ बढी नासा भित्री प्वाल बन्द गरेर 'अपीनस' नामक रोग उत्पन्न गराउँदछ । यो रोग हुँदा सा फेर्दा घुरघुर आवाज आउँदछ र पिनासको भन्दा बढी दुःख हुन्छ । भेडाको नाकजस्तो जतिखेर पनि नाकबाट जतिखेर पनि पानी बगिरहन्छ र ओसिलो हुनेगर्दछ । च्याटच्याट लाग्ने पहेँलो, पाकेको र बाक्लो सिङान निस्किरहन्छ । (कुनै कुनै प्रतिमा अवीनस पाठ पाइन्छ । यसको अर्थ भेडाको जस्तो सिङान बगिरहने नाक हुने रोग भनिएको हो ।

(ख) **चरक संहिता :**

**आनह्यते यस्य विशुष्यते च प्रक्लिद्यते धूप्यति चापि नासा॥**
**न वेत्ति यो गन्धरसांश्च जन्तुर्जुष्टं व्यवस्येत्तमपीनसेन ।**
**तं चानिलश्लेष्मभवं विकारं ब्रूयात् प्रतिश्यायसम्॥**



जसको नाकमा रुकावट हुन्छ, सुन्निन्छ, भिजि रहन्छ, धुवाँ जस्तो निस्कन्छ तथा गन्ध वा रसको राम्रो ज्ञान हुँदैन त्यस्तो मानिसलाई 'अपीनस'को रोगी भनी थाहा पाउनु पर्दछ । यो रोग वातविकार र कफविकारका कारण उत्पन्न हुन्छ । यसका अन्य लक्षण पिनासका जस्तै हुन्छन् ।

## आभिष्यांन्द्
## (Abhishyandee)

(क) **शार्ङ्गधर संहिता :**

**पैच्छिल्याद्गौरवाद्द्रव्यं रुद्ध्वा रसवहाः शिराः॥ धत्ते यद्गौरवं तत् स्यादभिष्यन्दि यथा दधि ।**

जुन द्रव्यले आफ्नो चिल्लो र रसिलो गुण मार्फत गह्रौं गर्दै शरीरका रस बहने चौबीस शिरालाई रोकी शरीर भारी बनाउँदछ त्यसलाई "अभिष्यन्दि" भनिन्छ । जस्तै : दही ।

व्याख्या : शरीर सक्रिय हुँदा वा दिउस मात्र दही खान र राती दही खान निषेध गरिएको यही कारणले हो । राती आराम गरिरहेका शिरालाई दहीले थप शिथिल बनाउँदछ ।

## अभ्रक
## Talc Glimmer

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : अभ्रक, अमल र गिरिज : यी अभ्रकका नाम हुन् ।
(ख) नेपाली बृहत् शब्दकोश (अभ्रक) : आगाले नजल्ने पारदर्शी र पत्रदार खनिज पदार्थविशेष; अब्रख; अभ्रख ।
(ग) विश्वनाथ द्विवेदी शास्त्री : अभ्रख पारो र फलामको यौगिक द्रव्य हो । यसलाई अंग्रेजीमा Talc Glimmer भनिन्छ । यसको ल्याटिन नाम *Mica* हो ।
(घ) आयुर्वेदका अनुसार अभ्रक एक उपधातु हो ।
(ङ) शालिग्राम निघण्टु : यसलाई अंग्रेजीमा Talc Glimmer र ल्याटिन भाषामा *Mica* भनिन्छ ।



अभ्रख (तस्विर श्रोत : टप्चरसोर्सडटकम)

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **अभिधान मञ्जरी :**

**अभ्रकमभ्रं शुभ्रं कमलं नवनीतपीतकं श्लक्ष्णम् । अभ्रपटलं च गिरिजं पर्यायैर्निर्मलं कथितम्॥**

अभ्रक, अभ्र, शुभ्र, कमल, नवनीतपीतक, श्लक्ष्ण, अभ्रपटल, गिरिज र निर्मल : यी अभ्रकका नाम हुन् ।

**(ख) अभिधान रत्नमाला :**

**अभ्रकं पर्वतोद्धूतं निर्मलं विमलं स्मृतम् ।**

अभ्रक, पर्वतोद्धूत, निर्मल र विमल : यी अभ्रकका नाम हुन् ।

**(ग) अमरकोश :**

**...अभ्रकं गिरिजामले ।**

अभ्रक, सगरिज र अमल (वा गिरिजामल) : यी अभ्रकका नाम हुन् । ।

**(घ) अर्कप्रकाश :**

**यदभ्रकं गजपुटे यत्नतश्च पुटीकृतम्॥**
**सहस्राभ्रन्तदाख्यातं वयसः स्थापनं परम् । त्रिदोषं हरतं कुष्ठमेहप्लीहव्रणकृमीन्॥**

जुन अभ्रख दुई हात लामो, दुई हात चौडा र दुई हात गहिरो इँटले बनाएको खाल्टोमा गुइँठा बालेर एक हजार पटक पुटपाक (गजपुट) गरिन्छ त्यसलाई सहस्राभ्रख भनिन्छ । यसले आयु बढाउँदछ, त्रिदोष नाश गर्दछ, कुष्ठ, प्रमेह, फियोका रोग र घाउका किरा नाश गर्दछ ।

**(ङ) अष्टाङ्ग निघण्टु :**
**अभ्रकं पार्वतीबीजं शैलोद्धूतं तथाम्बरम् ।**



अभ्रक, पार्वतीबीज, शैलोद्धूत र अम्बर : यी अभ्रकका नाम हुन् ।

**(च) कैयदेव निघण्टु :**

**अभ्रकं चाभ्रपटलं निर्मलं वरपीतकम्॥ मेघाह्वं पीतकं शुभ्रं गिरिजं गिरिजामलम् ।**
**अभ्रकं मधुरं शीतं कषायं गुरु धातुकृत्॥ हन्ति दोषत्रयं कुष्ठं व्रणमेहविषकृमीन् ।**

अभ्रक, अभ्रपटल, निर्मल, वरपीतक, मेघ र यसका पर्यायवाची शब्द, पीतक, शुभ्र, गिरिज र गिरिजामल : यी अभ्रकका नाम हुन् । यो गुलियो, शीतवीर्यको, टर्रो, पचाउन कठिन, शरीरका धातु बढाउने तथा त्रिदोष, कुष्ठ, खटिरा, प्रमेह, विषविकार र कीरा नाशगर्ने गुणको हुन्छ ।

**(च) पर्याय रत्नमाला :**

**अभ्रं व्योमाख्यमभ्रकम् ।**

अभ्र, व्योमाख्य र अभ्रक : यी अभ्रकका नाम हुन् ।

**(छ) भावप्रकाश निघण्टु :**

**पुरा वधाय वृत्रस्य वज्रिणा वज्रमुद्धृतम् । विस्फुलिङ्गास्ततस्तस्य गगने परिसर्पिताः॥**
**ते निपेतुर्घनध्वानाच्छिखरेषु महीभृताम् । तेभ्य एव समुत्पन्नं तत्तद्गिरिषु चाभ्रकम्॥**

परापूर्वकालमा जब वृत्रासुरलाई मार्न भनी इन्द्रले वज्र उठाए, तब त्यो बज्रबाट प्रकाश निस्की आकाशमा फैलियो । त्यो प्रकाश बादलको जस्तो शब्द गर्दै पहाडका टाकुरामा बज्रन पुग्यो । यसैबाट पर्वतहरूमा अभ्रकको जन्म हुन पुग्यो ।

**तद्वज्रं वज्रपातत्वादभ्रमभ्ररवोद्भवात् । गगनात्स्खलितं यस्माद्गगनं च ततो मतम्॥**

वज्रपात भई जन्मिएको हुनाले अभ्रखको एक नाम वज्र रहन गयो । आकाश (गगन) बाट खसेको हुनाले यसलाई गगन पनि भनिन्छ ।

**विप्रक्षत्रियविट्शूद्र भेदात्तत्स्याच्चतुर्विधम् । क्रमेणैव सितं रक्तं पीतं कृष्णं च वर्णतः॥**

अभ्रखका ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र गरी चार जात हुन्छन् । यी क्रमशः सेता, राता, पहेँला र काला हुन्छन् ।

**प्रशस्यते सितं तारे रक्तं तत्तु रसायने । पीतं हेमनि कृष्णं तु गदेषु द्रुतयेऽपि च॥**

चाँदी आदि बनाउन सेतो, रसायन-कर्ममा रातो, सुन बनाउन पहेँलो र रोगको उपचार गर्न कालो अभ्रक उत्तम हुन्छ । पगाल्नका लागि पनि कालो अभ्रख नै उत्तम हुन्छ । (के.यन.शर्मा (द्रुति) : पग्लाई, भगाइ, गति) ।

**पिनाकं दर्दुरं नागं वज्रं चेति चतुर्विधम् । मुञ्चत्यग्नौ विनिक्षिप्तं पिनाकं दलसञ्चयम्॥**



कालो अभ्रख पनि पिनाक, दर्दुर, ना र वज्र गरी चार किसिमको हुन्छ । जुन अभ्रक आगोमा हाल्दा त्यसबाट पत्र निस्कन्छ त्यस्तो अभ्रखलाई पिनाक भनिन्छ ।

**अज्ञानाद्भक्षणं तस्य महाकुष्ठप्रदायकम् । दुर्दरं त्वग्निनिक्षिप्तं कुरुते दुर्दरध्वनिम्॥**
**गोलकान्बहुशः कृत्वा स स्यान्मृत्युप्रदायकः ।**

थाहा नपाएर यस्तो अभ्रख खानाले कडाखालको कुष्ठरोग हुन्छ । जुन् अभ्रख आगोमा हाल्दा भ्यागुतो कराए जसरी आवाज निस्कन्छ त्यसलाई दर्दुर भनिन्छ । यसले शरीरमा अनेक थरी गाँठागुँठी निकालेर मानिसलाई मार्दछ ।

**नागं तु नागवद्बह्नौ फूत्कारं परिमुञ्चति ॥ तद्भक्षितमवश्यं तु विदधाति भगन्दरम् ।**

जुन अभ्रख आगोमा हाल्दा सर्प सुसाए जसरी सुसाउँदछ त्यसलाई नाग भनिन्छ । यो खानाले निश्चितरूपमा भगन्दर रोग हुन्छ ।

**वज्रं तु वज्रवत्तिष्टेत्तन्नाग्नौ विकृतिं व्रजेत्॥ सर्वाभ्रेषु वरं वज्रं व्याधिवार्द्धक्यमृत्युहृत् ।**

जुन अभ्रक आगोमा पोल्दा कुनै आवाज ननिकाली जस्ताका तस्तै रहन्छ त्यसलाई वज्र भनिन्छ । यो सर्वोत्तम अभ्रख हो । यसले रोग, बुढ्यौली र मृत्युलाई नाश गर्दछ ।

**अभ्रमुत्तरशैलोत्थं बहुसत्त्वं गुणाधिकम्॥ दक्षिणाद्रि भवं स्वल्पसत्वमल्पगुणप्रदम्॥**

उत्तर दिशाका पर्वतमा उत्पन्न हुने अभ्रख गुणिलो र शक्तिशाली हुन्छन् । दक्षिण दिशामा उत्पन्न हुने अभ्रख कम गुणस्तरका र कम शक्तिशाली हुन्छन् ।

**अभ्रं कषायं मधुरं सुशीतमायुष्करं धातुविवर्द्धनं च ।**
**हन्यात्त्रिदोषं व्रणमेहकुष्ठप्लीहोदरग्रन्थिविषकृमींश्च ॥**

अभ्रख टर्रो र गुलियो हुन्छ । यसले शीतल गर्दछ तथा आयु र धातु बढाउँदछ । यसले त्रिदोष, घाउखटिरा, प्रमेह, कुष्ठ, फियोका रोग, पेटका रोग, गाँठागुँठी, विषविकार र कीरा नाश गर्दछ ।

**रोगान्हन्ति द्रढयति वपुर्वीर्यवृद्धिं विधत्ते तारुण्याढ्यं रमयति शतं योषितां नित्यमेव ।**
**दीर्घायुष्काञ्जनयति सुतान्विक्रमैः सिंहतुल्यान् मृत्योर्भीतिं हरति सततं सेव्यमानं मृताभ्रम् ॥**

प्रशोधित शुद्ध अभ्रख भस्म नियमित सेवन गर्नाले रोगहरू नष्ट हुन्छन्, शरीर बलियो हुन्छ र वीर्य समेत बढ्दछ । सधैं तरुनो बनी सयवटी स्त्रीहरूसँग रमाउन सक्दछ । लामो आयु र सिंहजस्ता पुत्र जन्माउन सक्दछ । यसले अकालमृत्युको डर हटाउँदछ ।

**पीडां विधत्ते विविधां नराणां कुष्ठं क्षयं पाण्डुगदं च शोथम्**
**हृत्पार्श्वपीडां च करोत्यशुद्धमभ्रं त्वसिद्धं गुरु तापदं स्यात् ॥**

अप्रशोधित र राम्ररी भस्म नगरिएको अभ्रखभस्म खानाले अनेक थरीका पीडा दिन्छ । यसले कुष्ठ, क्षयरोग, पाण्डु, सुजन, मुटुको पीडा, कोखको पीडा, भारीपन र डाह गराउँदछ ।



(ज) **मदनपाल निघण्टु :**

**अभ्रकं स्वच्छमाकाशं पटलं वरपीतकम् । अभ्रं गुरु हिमं बल्यं कुष्ठमेहत्रिदोषनुत् ॥**
**गगनं कृमिकुष्ठमेहहृद् विशदं शुक्रकरं च दीपनम् ।**
**कथितं मुनिभिश्च पूर्वजैर्बलकृच्छुक्रकरं च सेवितम् ॥**

अभ्रक, स्वच्छ, आकाश, पटल र वरपीतक : यी अभ्रखका नाम हुन् । अभ्रख पचाउन कठिन, शीतवीर्य भएको, बलदायक तथा कुष्ठ, प्रमेह र त्रिदोष नाशक हुन्छ । यसको सेवन गर्नाले कीरा, कुष्ठ र प्रमेह नाश हुन्छ । यसले रसलाई स्पष्ट पार्नुका साथै शुक्र समेत वृद्धि गर्दछ । यो दीपनी हुन्छ । पहिलेका मुनिजनले यसलाई बलदायक र शुक्रवर्धक बताएका छन् ।

(झ) **माधव द्रव्यगुण :**

**अभ्रं गुरु हिमं बल्यं कुष्ठमेहत्रिदोषनुत् ।**

अभ्रक शीतवीर्यको तथा बलदायक हुन्छ । यसले कुष्ठ, प्रमेह र त्रिदोष नाश गर्दछ ।

(ञ) **रसरत्न समुच्चय (वाग्भट) :**

**गौरीतेजः परममृतं वातपित्तक्षयघ्नम् प्रज्ञाबोधिः प्रशमितरुजं वृष्यमायुष्यमग्र्यम् ।**
**बल्यं स्निग्धं रुचिदमकफं दीपनं शीतवीर्यम् तत्तद्योगैः सकलगदहृद्व्योम सूतेन्द्रबन्धि ॥**
**राजहस्तादधस्ताद्यत्समानीतं घनं खनेः । भवेत्तदुक्तफलदं निःसत्त्वं निष्फलं परम् ॥**

पार्वतीको तेज अर्थात् वीर्यरूपी अभ्रक अति श्रेष्ठ अमृत हो । यसले वातविकार, पित्तविकार र क्षयरोग नाश गर्दछ । अभ्रकले बुद्धिलाई तीक्ष्ण पार्दछ र सबै खालका रोगलाई शान्त पार्दछ । यो विशेषतः वीर्यवर्धक, आयुवर्धक, बलदायक, चिल्लो, रुचिप्रद, कफविकार नगर्ने, दीपनी र शीतवीर्यको हुन्छ । कफविकार नगर्ने हुनाले यसलाई बेग्लाबेग्लै विधिको प्रयोग गरी खाने गर्नाले सबै खालका रोगलाई नाश गर्दछ तथा पारोलाई बाँढ्छ । आठ हात गहिरो खानीबाट निकालिएको अभ्रकले उल्लेखित फल दिन्छ । अन्य गुणहीन अभ्रक सबै निष्फल हुन्छन् ।

**पीनाकनागमण्डूकवज्रमित्यभ्रकं मतम् । श्वेतादिवर्णभेदेन प्रत्येकं तच्चतुर्विधम् ॥**

पिनाक, नाग, मण्डुक र वज्र गरी चार प्रकारका अभ्रक हुन्छन् । सेतो आदि रङ्का आधारमा पनि यो चार किसिमको हुन्छ ।

**पीनाकं पावकोत्तप्तं विमुञ्चति दलोच्चयम् । तत्सेवितं मलं बद्ध्वा मारयत्येव मानवम् ॥**

पीनाक नामक अभ्रकलाई आगोमा तताउँदा यसका पाप्रा वा पत्र निस्कन्छन् । यस्तो अभ्रख खाना साथ दिसा रोकेर मानिसको ज्यान लिन्छ ।

**नागाभ्रं नागवत्कुर्याद्ध्वनिं पावकसंस्थितम् । तद्भुक्तं कुरुते कुष्ठं मण्डलाख्यं न संशयः ॥**

नाग नामक अभ्रकलाई आगोमा तताउनाले यसबाट सर्पको जस्तो फुङ्कार (सुसाई) निस्कन थाल्दछ । यस्तो अभ्रक खानाले अवश्य नै मानिसलाई मण्डल नामक कुष्ठरोग उत्पन्न हुन्छ ।



**उत्प्लुत्योत्प्लुत्य मण्डूकं ध्मातं पतति चाभ्रकम् । तत्कुर्यादश्मरीरोगमसाध्यं शस्त्रतोऽन्यथा ॥**

मण्डूक नामक अभ्रकआगोमा तताउँदा भ्यागुतो जसरी उफ्रिएर (उछिट्टिएर) जान थाल्दछ । यो अभ्रक खानाले शल्यक्रिया (अप्रेशन) नगरी ठीक नहुने खालको पत्थरी रोग हुन्छ ।

**वज्राभं वह्निसन्तप्तं विमुक्तोऽशेषवैकृतम् । देहलोहकरं तच्च सर्वरोगहरं परम् ॥**

वज्र नाम अभ्रकलाई आगोमा तताउँदा भने यसमा पनि विकार उत्पन्न हुँदैन । यसको सेवन गर्नाले शरीर फलाम जस्तो बलियो हुन्छ र सबै प्रकारका रोग नाश हुन्छन् ।

**श्वेतं रक्तं च पीतं च कृष्णमेवं चतुर्विधम् । श्वेतं श्वेतक्रियासूक्तं रक्ताभं रक्तकर्मणि ॥**
**पीताभमभ्रकं यत्तु श्रेष्ठं तत्पीतकर्मणि । चतुर्विधं परं व्योम यद्यप्युक्तं रसायने ॥**
**तथापि कृष्णवर्णाभं कोटिकोटिगुणाधिकम् । स्निग्धं पृथुदलं वर्णसंयुक्तं भारतोऽधिकम् ॥**
**सुखाग्निर्मोच्य पत्रं च तदभ्रं शस्तमीरितम् ॥**

सेतो, रातो, पहेँलो र कालो भनी रङ अनुसार चार किसिमका भनी बताइएका अभ्रकमध्ये सेतो अभ्रक चाँदि आदि बनाउन, रातो अभ्रक रङ्गरोगनमा र पहेँलो अभ्रक सुन आदि बनाउन उत्तम हुन्छ भनी बताइएको छ । यी तीन अभ्रक रसायन कर्ममा उपयोगी हुन्छन् नै तरपनि कालो अभ्रख अरु अभ्रकभन्दा करोडौँ गुना बढी गुनिलो हुन्छ । चिल्लो, मोटा पत्र वा पाप्रा हुने, उत्तम वर्णको, गह्रौं र सजिलै पाप्रा नउप्कने खालको अभ्रकलाई उत्तम अभ्रक भनी बताइएको छ ।

**सचन्द्रिकं च किट्टाभं व्योम न ग्रासयेद्रसम् । ग्रसितश्च नियोज्योऽसौ लोहे चैव रसायने ॥**

**निश्चान्द्रकं मृतं व्योम सेव्यं सर्वगदेषु च । सावर्तं चन्द्रसंयुक्तं मेहं मन्दानलं चरेत्॥**
**यैरुक्तं युक्तिनिर्मुक्तैः पत्राभ्रकरसायनम् । तैर्दिष्टं कालकूटाख्यं विषं जीवनहेतवे॥**
**सत्त्वार्थं सेवनार्थं च योजयेच्छोधिताभ्रकम् । अन्यथा त्वगुणं कृत्वा विकरोत्येव निश्चितम्॥**

चम्किलो र धातुको कीट वा मलजस्तो अभ्रक भस्मले पारोलाई समाउँदैन । धातुलाई सिद्ध गर्न तथा रसायन कर्ममा जुन पारो प्रयोग गरिन्छ त्यो अभ्रकले समाएको (ग्रसित) हुनु पर्दछ । चमक नभएको अभ्रकको भस्मलाई सबै खालको रोगमा सेवन गर्नुपर्दछ । चम्किलो अभ्रक भस्म खानाले प्रमेह र मन्दाग्नि रोग हुन्छ । विवेकहीन जो मानिस पत्र उप्कने खालको अभ्रक भस्मलाई रसायन भनी खुवाउन खोज्दछन् ती उपचारका नाउँमा कालकूट विष खुवाउँदछन् । सत्व निकाल्नका लागि वा भस्मका रूपमा खानका लागि उत्तम तरिकाले शुद्ध गरिएको अभ्रकको नै प्रयोग गरिनु पर्दछ । यसो नगर्नाले अवगुण दिन्छ र लाभको साटो हानी गर्दछ ।

**(ट) रस रत्नाकर :**

**अशुद्धाभ्रं निहन्त्यायुर्वर्द्धयेन्मारुतं कफम् । अहतं छेदयेद्देहं मन्दाग्निक्रिमिदायकम्॥**

अशुद्ध (अप्रशोधित) अभ्रक आयुनाशक तथा वातविकार र कफविकार बढाउने गुणको हुन्छ । यस्तो (नमारिएको) अभ्रक देहनाशक तथा पाचनशक्ति नाशक एवं कीरा उत्पन्न गराउने खालको हुन्छ ।

**कृष्णं पीतं सितं रक्तं योज्यं योगे रसायने । पिनाक दर्दुरं नागं वज्रश्चेति चतुर्विधम्॥**

कालो, पहेँलो, सेतो र रातो गरी चार प्रकारका अभ्रकलाई रसायन-कर्ममा प्रयोग गर्नुपर्दछ । यसैगरी पिनाक, दर्दुर, नाग र वज्र गरअर्को  चार किसिमले पनि यसको वर्गीकरण गरिएको हुन्छ ।



**पिनाकाद्यास्त्रयो वर्ज्या वज्रं यत्नात् समाहरेत् । मुञ्चत्यग्नौ विनिक्षिप्ते पिनाको दलसञ्चयम्॥**
**अज्ञानाद्भक्षणन्तस्य महाकुष्ठप्रदायकम् ।**

पिनाक आदि शुरुका तीन थरी अभ्रकलाई छाडी चौथो वज्र नामक अभ्रकलाई प्रयत्नपूर्वक प्रयोग गर्नुपर्दछ । आगोमा हाल्दा पत्र-पत्र भएर उप्कने खालको अभ्रकलाई पिनाक भनिन्छ । थाहा नपाएर पनि जसले यस्तो अभ्रक खान्छ उसलाई महाकुष्ठरोग उत्पन्न हुन्छ ।

**दर्दुरो निहितो ह्यग्नौ कुरुते दार्दुरध्वनिम्॥**
**नागश्चाग्निगतः शब्दं फूत्कारं च विमुञ्चति । स च देहगतो नित्यं व्याधिं कुर्याद्भगन्दरम्॥**

दर्दुर अभ्रक आगोमा हाल्दा भ्यागुतो कराए जसरी कराउँदछ । नाक अभ्रक आगोमा हाल्दा सर्प सुसाए जसरी सुसाउँदछ । यी दुई अभ्रक नित्य शरीरभित्र जानाले यिनले भगन्दर रोगलाई जन्माउँदछन् ।

**वज्राभकं वह्निसंस्थं न किञ्चिद्विकृतिं व्रजेत् । तस्माद्वज्राभ्रकं योज्यं व्याधिवार्द्धक्यमृत्युजित्॥**

वज्र नामक अभ्रक आगोमा हाल्दा कुनै पनि विकार आउँदैन । यसैले ओखतीका लागि यही अभ्रक प्रयोग गर्नुपर्दछ । यसले रोग, बूढचौली र मृत्युलाई जित्दछ ।

**धमेद्वज्राभ्रकं वह्नौ ततः क्षीरे निषेचयेत् । भिन्नपत्रं तु तं कृत्वा मेघनादद्रवाम्लयोः॥**
**भावयेदष्टयामन्तन्धान्याभ्रं कारयेत् सुधीः । अथवाऽभ्रस्य भागौ द्वौ टङ्कश्चैकं जलैः सह॥**

द्विदिनं स्थापयेत् पात्र सूक्ष्मं कृत्वा प्रपेषयेत् । बद्ध्वा धान्ययुतं वस्त्रे मर्दयेत् काञ्जिकैः सह ॥
अधो यद्गालितं सूक्ष्मं शुद्धं धान्याभ्रकं भवेत् ॥

वज्र अभ्रकलाई आगोमा तताउनू । त्यसपछि दूधमा डुबाउनू र यसको पत्रलाई छुट्याउनू । यसपछि यसलाई लुँडे सागको रस र काँजीमा आठ प्रहरसम्म भिजाएर राख्नू र धान्याभ्रक बनाउनू । अथवा दुई भाग वज्र अभ्रक र एक भाग स्वागलाई पानीमा भिजाएर राम्ररी पिस्नू । यसपछि धान मिसाएर कपडामा पोको पारी काँजी मिसाएर माड्नू । यसपछि छान्नू । निथारमा जुन मसिनो भाग बस्दछ त्यसलाई धान्याभ्रक भनिन्छ ।

(ड) **राज निघण्टु :**

**अभ्रकमभ्रं भृङ्गं व्योमाम्बरमन्तरिक्षमाकाशम् । बहुपत्रं खमनन्तं गौरीजं गौरिजेयमिति रवयः ॥**
**श्वेतं पीतं लोहितं नीलमभ्रं चातुर्विध्यं याति भिन्नक्रियार्हम् ।**
**श्वेतं तारे काञ्चने पीतरक्ते नीलं व्याधावग्र्यमग्र्यं गुणाढ्यम् ॥**
**नीलाभ्रं दर्दुरो नागः पिनाको वज्र इत्यपि । चतुर्विधं भवेत्तस्य परीक्षा कथ्यते क्रमात् ॥**
**यद्वह्नौ निहितं तनोति नितरां भेकारवं दर्दुरो नागः फूत्कुरुते धनुःस्वनमुपादत्ते पिनाकः किल ।**
**वज्रं नैव विकारमेति तदिमान्यासेवमानः क्रमात्**
**गुल्मी च व्रणवांश्च कुत्सितगदी नीरुक्च सञ्जायते ॥**
**मनोजभावभावितौ यदा शिवौ परस्परम् । तदा किलाभ्रपारदौ गुहोद्भवौ बभूवतुः ॥**

(१) अभ्रक, (२) अभ्र, (३) भृङ्ग, (४) व्योम, (५) अम्बर, (६) अन्तरिक्ष, (७) आकाश, (८) बहुपत्र, (९) ख, (१०) अनन्त, (११) गौरीज र (१२) गौरिजेय : यी बाह्र नाम अभ्रकका संस्कृत पर्यायवाची नामहरू हुन् । अभ्रक सेतो, पहेँलो, रातो र नीलो गरी चार प्रकारको हुन्छ र फरकफरक काम गर्दछ । सेतो अभ्रक चाँदी बनाउन, पहेँलो र रातो अभ्रक सुन बनाउन तथा नीलो अभ्रक रोग निको पार्ने उपचारमा बढी उपयोगी हुन्छ । यी क्रमशः बढी गुनिला हुन्छन् । नीलो अभ्रक पनि दर्दुर, नाग, पिनाक र वज्र गरी चार प्रकारको हुन्छ । यिनको विशेषता र गुणका बारेमा क्रमशः बताइन्छ । जुन नीलो अभ्रख आगोमा बाल्दा भ्यागुतो कराए जसरी टरटर आवाज निकाल्दछ त्यसलाई दर्दुर भनिन्छ । यसरी बाल्दा सर्प सुसाए जस्तो सुसाउने अभ्रकलाई नाग भनिन्छ । बाल्दा धनुषको टङ्कार जस्तो आवाज निस्कने अभ्रकलाई पिनाक भनिन्छ । बाल्दा कुनै पनि किसिमको परिवर्तन नआउने खालको नीलो अभ्रकलाई वज्र भनिन्छ । यी चार थरी अभ्रक क्रमशः गुल्म, घाउखटिरा, पुराना रोग र निरोगिताका लागि उपयोगी हुन्छन् । भनिन्छ कि शिव र पार्वती गुफाभित्र एक आपसमा रासलिलामा संलग्न हुँदा त्यहीँ अभ्रक र पारोको उत्पत्ति भएको थियो ।



(ढ) **शार्ङ्गधर संहिता :**

**कृष्णाभ्रकं धमेद्वह्नौ ततः क्षीरे विनिक्षिपेत् । भिन्नपत्रन्तु तत्कृत्वा तन्दुलीयाम्लयोर्द्रवैः ॥**
**भावयेदष्टयामन्तदेवं शुद्ध्यति चाभ्रकम् ।**

कालो अभ्रख (वज्र अभ्रख) लाई आरनमा रातो नहुँदासम्म पोल्नू । त्यसपछि झिकेर दूधमा डुबाउनू । फेरी यसका पत्र अलग गरी लुँडे सागको रस र कागतीको रस मिसाएर आठ प्रहरसम्म भिजाएर राख्नू, अभ्रख शुद्ध हुन्छ ।

**कृत्वा धान्याभ्रकन्तत्तु शोषयित्वाऽथ मर्दयेत्॥ अर्कक्षीरैर्दिनं खल्वे चक्राकारञ्च कारयेत्।**
**वेष्टयेदर्कपत्रैश्च सम्यग्गजपुटे पचेत्॥ पुनर्मर्द्यं पुनः पाच्यं सप्तवारं प्रयत्नतः।**
**ततो वटजटाक्वाथैस्तद्वद्देयं पुटत्रयम्॥ म्रियते नात्र सन्देहः सर्वरोगेषु योजयेत्।**

यसपछि यो अभ्रखलाई धानका सहायताले शुद्ध पारी आँकको दूधमा एक दिनसम्म भिजाउनू र गोलाकार चक्की बनाउनू। यसको चारैतिर आँकका पात बेरी माटाका भाँडामा राखी मुख बन्द गरी माटोले लेपी घाममा सुकाउनू। यसपछि गजपुटमा पोल्नू। यसै गरी आँकको दूधमा एकदिन भिजएर रातमा पुनः पोल्नू। यसरी सात पटक पोल्नू। अनि बरोको जराको काँढापानीमा एक दिन भिजाएर अभ्रखलाई पुन तीन पटक गजपुटमा पोल्नू। यसपछि उत्तम अभ्रख भस्म तयार हुन्छ, कुनै शङ्का छैन। यो सबै रोगमा उपयोग गर्न हुन्छ।

**तुल्यं घृतं मृताभ्रेण लोहपात्रे विपाचयेत्॥ घृते जीर्णे तदभ्रन्तु सर्वयोगेषु योजयेत्।**

अभ्रख भस्ममा त्यति नै घिउ हाली फलामको भाँडामा पकाउनू। घिउ सुकेर अभ्रख मात्र बाँकी भएपछि त्यसलाई सबै योगमा मिसाउनू।

**मृतं त्वभ्रं हरेन्मृत्युं जरापलितनाशनम्॥ अनुपानैश्च संयुक्तं तत्तद्रोगहरं परम्।**

अभ्रख भस्मले मृत्युलाई समेत नाश गर्दछ। यसले बुढ्यौली नाश गर्दछ, फुलेको कपाल कालो हुन्छ। यसलाई उपयुक्त पेय पदार्थसँग जे जे रोगमा खुवाइन्छ त्यही त्यही रोग यसले नाश गर्दछ।

**शुद्धं धान्याभ्रकं मुस्तं शुण्ठी षड्भागयोजितम्॥ मर्दयेत् काञ्जिकेनैव दिनं चित्रकजै रसैः।**

**ततो गजपुटं दद्यात्तस्मादुद्धृत्य मर्दयेत्॥ त्रिफलावारिणा तद्वत्पुटेदेवं पुटैस्त्रिभिः।**
**बलागोमूत्रमुसलीतुलसीसूरणद्रवैः॥ मर्दितं पुटितं वह्नौ त्रिस्त्रिवेलं व्रजेन्मृतिम्।**

प्रशोधन गरिएको धान्याभ्रख लिनू। यसको छ भागको एक भाग नागरमोथे र सुठोको धुलो यसमा मिसाउनू। अनि यसलाई एक दिन काँजीमा भिजाउनू। फेरी एकदिन चितूको रसमा भिजाउनू। अनि माटाको प्यालामा राखी मुख बन्द गरेर लिपी गजपुटमा पोल्नू। सेलाएपछि बाहिर निकाली त्रिफलाको काढापानीमा हालेर माड्नू। तीन दिनसम्म यसो गरेपछि बलु, गहुँत, मुसलीकन्द, तुलसी र ओलको काँढापानीमा बेग्लाबेग्लै भिजाउनू। हरेक पटक तीन तीन गजपुट दिनू। यसरी अभ्रखको अति उत्तम भस्म तयार हुन्छ।

(धान्याभ्रक : टुक्रा पारिएका अभ्रकलाई यसको एक चौथाई धानमा मिसाउनू र कुनै बलियो कपडामा पोको पार्नू। अनि कुनै फराकिलो भाँडामाथि यसलाई हातले समाउनू र पानी हाल्दै माड्दै गर्नू। यसो गर्दा पोकोमा भएको जति अभ्रख तल भाँडामा पानी मिसिएर आउँदछ। यसरी सबै अभ्रख पानीसँग मिसिएर आएपछि पानी निथारेर फाल्नू। अभ्रखको धुलो घाममा सुकाउनू। यसलाई धान्याभ्रख भनिन्छ।)

**(धान्याभ्रकस्य भागेकं द्वौ भागौ टङ्कणस्य च॥ पिष्ट्वा तदन्धमूषाणं रुद्ध्वा तीव्राग्निना पचेत्।**
**स्वभावशीतलश्चूर्णं सर्वयोगेषु योजयेत्॥ : प्रक्षिप्त श्लोक)**

धान्याभ्रख एक भाग र दुई भाग सुहागा घलुवामा हाली धुलो बनाउनू। यसलाई कडा आगोमा पोल्नू। यसपछि बन्ने स्वभावैले शीतल धुलो सबै संयोजनमा प्रयोग गर्नू।

**लाक्षामीनपयश्छागं टङ्कणं मृगशृङ्गकम् । पिण्याकं सर्षपाः शिग्रुगुञ्जोर्णागुडसैन्धवाः॥**
**यवस्तिक्ता घृतं क्षौद्रं यथालाभं विचूर्णयेत् । एभिर्विमिश्रिताः सर्वे धातवो गाढवह्निना॥**
**मूषाध्माताः प्रजायन्ते मुक्तसत्त्वा न संशयः ।**

लाहा, साना माछा, बाख्रीको दूध, सुहागा, हरिणको सिङ, पिना, सर्सिउँ, सैजनको गेडा, रातीगेडी, भेडाको ऊन, सक्खर, सिधे नुन, जौ, कटुकी, घिउ र महको धुलो बनाएर जुन कुराको सार तत्व निकाल्नू छ त्यसलाई पनि धुलो वा टुक्रा पारी यसले मोरेर गोली बनाउनू र कोइलाको रापमा पूर्ववत् तरिकाले पोल्नू । यसरी सार तत्व निकाल्न सकिन्छ ।

(ण) **शालिग्राम निघण्टु :**

**अभ्रक गिरिजाबीजं निर्मलं गिरिजामलम् । अब्दं व्योम घनं शुभ्रं बहुपत्रं घनाह्वकम्॥**

अभ्रक, गिरिजाबीज, निर्मल, गिरिजामल, अब्द, व्योम, घन, शुभ्र, बहुपत्र र घनाका पर्यायवाची शब्द : यी अभ्रकका नाम हुन् ।

**अभ्रं कषायं मधुरं सुशीतलायुष्करं धातुविवर्द्धनञ्च ।**
**हन्यात्त्रिदोषं व्रणमेहकुष्ठं प्लीहोदरग्रन्थिविषकृमींश्च॥**
**रोगान्हन्ति द्रढयतिवपुर्वीर्यवृद्धिं विधत्ते तारुण्याढ्यं रमयति शतं योषितां नित्यमेव ।**
**दीर्घायुष्काञ्जनयति सुतान्विक्रमैः सिंहतुल्यान्मृत्योर्भीतिं हरति सततं सेव्यमानं मृताभ्रम्॥**



अभ्रक (भष्म) शीतवीर्यको, आयुवर्धक र धातुवर्धक हुन्छ । यसले त्रिदोष, घाउखटिरा, प्रमेह, कुष्ठ, फियोका रोग, पेटका रोग, ग्रन्थि (गाँठा), विषविकार र कीरा नाश गर्दछ । यो रोगनाशक, शरीरलाई बलियो बनाउने, वीर्यवर्धक, सधैं जवान बनाएर नित्य सय वटी स्त्रीसँग रमण गर्नसक्ने बनाउने, आयुवर्द्धक, सिंहसमानका पुत्र जन्माउन सक्ने बनाउने र मृत्यु भयबाट मुक्त बनाउने गुणको हुन्छ ।

**मृताभ्रकं कामबलप्रदं च विषं मरुछ्वासभगन्दरान्ध्यम् ।**
**मेहभ्रमं पित्तकफं च कासं क्षयं निहन्त्येव यथानुपानात्॥**

प्रशोधित अभ्रकलाई यथाविधि सेवन गर्नाले यो यौनशक्ति वर्धक, बलकारक तथा विषविकार, वातविकार, दम, भगन्दर, आन्ध्य (अन्धोपन), प्रमेह, भ्रम, पित्तविकार, कफविकार, खोकी र क्षयरोग नाशक हुने गर्दछ ।

**विप्रक्षत्रियविट्शूद्र भेदात्स्यात्तच्चतुर्विधम् । क्रमेण च सितं रक्तं पीतं कृष्णञ्च वर्णतः॥**
**पिनाकं दर्दुरं नागं वज्रञ्चेति चतुर्विधम् । पिनाकं वर्जयेद्धीमान्दर्दुरञ्च विशेषतः॥**
**तृतीयं नागसंज्ञञ्च दूरतः परिवर्ज्जयेत् । मुञ्चत्यग्नौ विनिःक्षिप्तं पिनाकं दलसञ्चयम्॥**
**अज्ञानाद्भक्षणात्तस्य महाकुष्ठप्रदायकम् । दर्दुरं त्यग्निनिःक्षिप्तं कुरुते दर्दुरध्वनिम्॥**
**गोलकान् बहुशः कृत्वा तत्स्यान्मृत्युप्रदायकम् । तद्भक्षितमवश्यन्तु विदधाति भगन्दरम्॥**
**वज्रन्तु वज्रवत्तिष्ठेत्तन्नाग्नौ विकृतीं व्रजेत् । वज्रं संज्ञं हितं योग्यमभ्रं सर्वत्र नेतरेत्॥**
**सर्वाभ्रेषु वरं वज्रं व्याधिवार्द्धक्यमृत्युहृत् । अभ्रमुत्तरशैलोत्थं बहुसत्वगुणाधिकम्॥**
**दक्षिणाद्रि भवं चाभ्रं स्वल्पसत्वगुणप्रदम् ।**

अभ्रक ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र गरी चार जातको हुन्छ । यी जातका क्रमशः सेतो, रातो, पहेँलो र कालो वर्ण हुन्छ । पिनाक, दर्दुर, नाग र वज्र गरी अभ्रख चार थरी हुन्छ । यिमध्ये पिनाक, दर्दुर र नाग नामका अभ्रक त्याग्न योग्य हुन्छन् । पिनाक नामक अभ्रक आगोमा बाल्दा पत्र पत्र हुन जान्छ । यदि यो अभ्रकलाई नजानेर कसैले खायो धने उसलाई महाकुष्ठ रोग हुन्छ । दर्दुर नामक अभ्रक आगोमा बाल्दा भ्यागुता कराए जसरी आवाज निस्कन्छ र गोलो बन्दछ । यो अभ्रक खानाले मृत्यु हुन्छ । नाग नामक अभ्रक आगोमा बाल्दा सर्प सुसाए जसरी सुसाउँदछ । यो अभ्रक खानाले अवश्य भगन्दर रोग हुन्छ । वज्र नामक अभ्रक आगोमा बाल्दा वज्र जसरी नै जस्ताको तस्तै रहन्छ । कुनै विकार आउँदैन । यही वज्र नामक अभ्रक नै सबै अभ्रकमा उत्तम हुन्छ । यसले सबै खालका रोग, बुढ्यौली, र मृत्युलाई नाश गर्दछ । उत्तरतिरका पहाडमा पाइने अभ्रकमा अधिक तेजिला र गुनिला हुन्छन् । दक्षिणतिरका पहाडमा पाइने अभ्रक कम तेजिला र कम गुनिला हुन्छन् ।


कालो अभ्रख (तस्बिर श्रोत : थटको डटकम)

**क्षाराम्लं द्विदलं चैव कर्कटी कारवेल्लकम् । वृन्ताकं च करीरं च तैलं चाभ्रे विवर्ज्जयेत्॥**

अभ्रख भस्म खाइरहेका मानिसले क्षार, अमिलो, दुई फग्ल्याँटा हुने गेडागुडी, काँक्रो, करेलो, भण्टा, करील वा बाँसको तामा र तेल खान बन्द गर्नुपर्दछ ।

प्राचीन ग्रन्थमा अभ्रक भस्म बनाउने र शुद्ध पार्ने आदि अनेक विधि बताइएका छन् । अन्य पारद संहिता आदि ग्रन्थमा पनि अभ्रकका बारेमा विस्तृत विवरण पाइन्छन् । ती सबै विवरण समेट्दा एउटा बेग्लै ग्रन्थ बन्न पुग्दछ । त्यसैले यहाँ समावेश गर्न सकिएन ।

## आंमलांको सबतांवशेष

## Amili syrup

(क) **भावप्रकाश निघण्टु :**

**अम्लिकायाः फलं पक्वं मर्दितं वारिणा दृढम्॥ शर्करामरिचैर्मिश्रं लवङ्गेन्दुसुवासितम्। अम्लिकाफलसम्भूतं पानकं वातनाशनम्॥ पित्तश्लेष्मकरं किञ्चित्सुरुच्यं वह्निबोधनम्।**

अमिलीलाई पानीमा भिजाई हातले बेस्सरी माड्नू र रस छान्नू। यो रसमा चिनी, मरिच, ल्वाङ र कपूरको धूलो हाल्नू। अमिलीको सर्बत तयार हुन्छ। यो सर्बत वातविकार नाशक, केही पित्तविकार गर्ने, केही कफविकार गर्ने, रुचिकर र जठराग्निलाई बाल्ने गुणको हुन्छ।

# अमृतफल (मिठाईविशेष)
# (A kind of sweet)

(क) **आयुर्वेद महोदधि :**

**शमयति बहुपित्तं श्लेष्मकोपं करोति जनयति जठराग्निं वातरोगान्निहन्ति ।**
**सुरतजनितखेदं तत्क्षणादेव हन्याद् अमृतफलमुदारं चारु शंसन्ति वैद्याः ॥**

अमृतफल नामक मिठाईले बढेको पित्त घटाउँदछ तर कफविकार बढाउँदछ । यसले जठराग्निलाई बाल्नुका साथै वातजन्य विकार नाश गर्दछ । अमृतफलले रतिजन्य थकाई तुरुन्त मेट्दछ । यो उत्तम मिठाईको वैद्यहरू खुब प्रशंसा गर्दछन् ।

**अमृतरसाख्यं भक्ष्यं तिलललितं खण्डघृतपक्वम् ।**
**शमयत्यर्शः कृच्छ्रान् हरति सवातं तथा पित्तम् ॥**

गहुँ वा मार्सी चामलको पिठोमा तिल मिसाएर त्यसलाई खुँदो र घिउमा पकाउनु पर्दछ अमृतफल नामक मिठाई बन्दछ । यसरी तयार गरिएको यो मिठाईले अलकाई र मूत्रकृच्छ्र रोग निको पार्दछ एवं वातविकार पित्तविकार पनि ठिक गर्दछ ।

## अमृतस्रवा (जडेलो वा रुदिलो)
## Littoralbind weed

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) अमृतस्रवा : जडेलो । रुदिलो । (२) तोयवल्लिका : जडेलो । (३) सितलता : जडेलो । पानी लहरो ।

(ख) नेपाली बृहत् शब्दकोश : (१) जडेलो : अङ्गुरका जस्तै लहरो, पात र फल भएको एक जातको जङ्गली अङ्गुर; दाख । (२) रुदिलो : रातो खालको भेट्नु भएको, पातको तल्लो भाग दाँती परेको हुने, अति बास्ना आउने फूल फुल्ने र पात एवं जरो, बाथ, जुका र चुर्नामा औषधी लाग्ने बुटोविशेष; रुधिलो । (यसबाट निकालिएको मह बजारमा किन्न पाइन्छ) ।

(ग) डा.सतिश चन्द्र साङ्ख्यधर : यो एक पहिचान हुन बाँकी एक ओखती हो । ल्याटिन नाम *Cressa cretica* Linn. (Convolvulaceae) र *Capparis moonii* Wight (Capparidaceae) नामका विरुवालाई रुदन्तीका रूपमा प्रयोग गरिरहेको पाइन्छ ।

(घ) आचार्य बालकृष्ण : यसलाई संस्कृतमा रुदन्तिका, रुद्रवन्ती, रुदन्ती आदि भनिन्छ । दुई वटा वानस्पतिक नाम भएका (जातका) विरुवालाई रुदन्ती भनिन्छ । पहिलो *Astragalus candolleanus* Royle ex Benth. हो । यसको बोट ससाना हाँगाबिँगा सहित जमिनमा फैलिएको हुन्छ । यसका पात चनाका जस्ता हरिया र भुस भएका हुन्छन् । यसका पहेँला साना फूल फुल्दछन् । दोश्रो थरी रुदन्तीलाई *Cresa cratica* Linn. भनिन्छ । यसको बोट सोभ्फो, सानो र हाँगाबिँगा सहितको हुन्छ । यसका पात छदेखि आठ मि.मि.लामा, चनाका जस्ता, तिखो टुप्पो भएका र भुसिला हुन्छन् । यसको फूल सेतो हुन्छ । रुदन्तीलाई अंग्रेजीमा Littoralbind weed भनिन्छ । हिन्दीमा यसलाई रुद्रवन्ती भनिन्छ ।


चनाको पात र फल (तस्वर श्रोत : हलोखबरडटकम)

(ङ) राज निघण्टु : यसको बोट र पात चनाको बोट र पात जस्तै हुन्छन् । यो पात अमिलो हुन्छ । शिशिर ऋतुमा यी पातबाट आँशु भरे जसरी नै पानीका थोपा चुहिने हुनाले यसको नाम रुदन्ती रहेको हो ।

(च) हिन्दी विश्वकोश : (१) अमृतस्रवा : अमृतमिव स्रवति, रुदन्तीलता । (२) घनवल्ली : घनस्य मेघस्य वल्लीव, अमृतस्रवा नामक लहरा । (३) चणपत्री : चणस्य चणकस्य पत्रमिव पत्रमस्याः, रुदन्ती नामक विरुवा, जसका पात चनाका पात जस्ता हुन्छन् । (४) तोयवल्लिका : अमृतस्रवा लता । (५) महामांसी : रुदन्तीवृक्ष, संजीवनी नामक विरुवा । (६) सुधास्रवा : रुदन्ती, रुद्रवन्ती । (७) स्रवत्तोया : रुद्रवन्ती, रुदन्ती । (८) सितलता : अमृतवल्ली नामको लहरा । (९) वृक्षरुहा : वृक्षे रोहतीति, रुद्रवन्ती ।

(छ) कामत द्रव्य : यसको ल्याटिन नाम *Cressa cretica* हो । यसका ससाना बोट हुन्छन् । यो प्रायः नुनिलो जमिनमा र पानीका नजिक हुन्छ । जमिनमा फैलन्छ । पात चनाका जस्ता हुन्छन् । यसमा शीत पर्दा पानीका थोपा चुहिएर तल रहेको जमिन भिज्ने हुनाले यसलाई रुदन्ति भनिएको हो ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**


*Astragalus candolleanus* Royle ex Benth, (Source : link.springer.com)

**स्याद्रुदन्ती स्रवत्तोया सञ्जीवन्यमृतस्रवा । रोमाञ्चिका महामांसी चणपत्री सुधास्रवा ॥ रुदन्ती कटुतिक्तोष्णा क्षयक्रिमिविनाशिनी । रक्तपित्तकफश्वासमेहहारी रसायनी ॥ चणपत्रसमं पत्रं क्षुपञ्चैव तथाऽम्लकम् । शिशिरे जलबिन्दूनां स्रवन्तीति रुदन्तिका ॥**

रुदन्ती, स्रवत्तोया, सञ्जीवनी, अमृतस्रवा, रोमाञ्चिका, महामांसी, चणपत्री र सुधास्रवा : यी रुदिलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको तथा क्षयरोग र कीरा नाशक हुन्छ । यसले रक्तपित्त, कफविकार, दम र प्रमेह समेत नाश गर्दछ । यो रसायनी हुन्छ । यसको बोट र पात चनाको बोट र पात जस्तै हुन्छन् । यो पात अमिलो हुन्छ । शिशिर ऋतुमा यी पातबाट आँशु झरे जसरी नै पानीका थोपा चुहिने हुनाले यसको नाम रुदन्ती रहेको हो ।

**(ख) राजवल्लभ निघण्टु :**


रुदिलो (तस्बिर श्रोत : क्यानाडानेपालडटकम)

**रुदन्ती वह्निकृद्वृष्या पित्तघ्नी च रसायनी ।**

रुदन्तीमा पाचनशक्ति बढाउने, वीर्यवर्धक, पित्तविकार नाशक र रसायनी गुण हुन्छ ।

**(ग) सोढल निघण्टु :**

**वृद्धपलितके ज्ञेयो रुदन्ती च प्रकीर्तितः ।**

वृद्धपलितक र रुदन्ती : यी रुदिलोका नाम हुन् ।

# अम्बष्ठा
# (Ambashthaa)

**पहिचानको प्रयाश :**

(क) के.यन.स्वामी : (१) अम्बष्ठा-गुन्दरगानु । ठोट्ने । चरिअमिलो । सेतोजूही (फूल) । (२) अम्बा-गानेगुर्जो । ठोट्ने । (३) अम्बालिका-ठोट्ने । गानेगुर्जो । (४) अम्बिका-कुटकी । गानेगुर्जो । ठोट्ने । (५) कषाया-सानो काँडे लहरे दुरालभा । खजुर । (६) केशी-ठुलो जटामसी । (७) गन्धपत्री-ठोट्ने । अश्वगन्धा । (८) चित्रपुष्पी-घाँसविशेष । ठोट्ने । (९) छिन्नपत्रा-ठोट्ने । (१०) दन्तशठा-चरिअमिलो । अमिली । (११) दृढवल्का-ठोट्ने । सागविशेष । (१२) प्रस्थिका-पुदीना । अमारो । (१३) बालमूलिका-अमारोको रूख । (१४) बालिका-सुकुमेल । (१५) भूरिमल्ली-ठोट्ने । (१६) मयूरविदला-ठोट्ने । (१७) मयूरिका-ठोट्ने । (१८) माचिका-अमारोको रूख । ठोट्ने । (१९) शठी-कपुर । सेतो हलेदो । कालो हलेदो । (२०) श्रेयसी-दयाँलो, प्रियङ्गु । गजपिप्ला । गाईतिहारे । हर्रो । ठोट्ने । गदेरगानु ।

(ख) नेपाली बृहत् शब्दकोश : लाम्चा पात, सेता मसिना फूल, राता साना फल र अमिलो डाँठ हुने एक जातको बोट वा तरकारी, अचार बनाएर खाइने त्यसैको डाँठ भनी ठोट्नेको परिभाषा लेखेको छ । (ठोट्नेको वानस्पतिक नाम *Aconogonum molle* (D. Don) Hara भनी लेखिएको छ । गुन्दरगानुको वानस्पतिक नाम जेजति दिइएका छन् ती पनि भावप्रकाश निघण्टुका टीकाकार द्वयले दिएका वनस्पति नामसँग मेल खाँदैनन् । चरीअमिलोको वानस्पतिक नाम *Oxalis corniculata* Linn.भनी दिइएको छ) ।



(ग) डा. चुनेकर : यसको पहिचानमा मतभेद भएपनि *Tamarix articulata & T.gallica* वानस्पतिक नाम भएको वनस्पतिलाई अम्बष्ठा मान्नु उपयुक्त हुन्छ ।

(घ) विश्वनाथ द्विवेदी शास्त्रीले अम्बष्ठा भनेको *Solanum Nigrum* हो । अथवा जसले जे भने पनि *Tamarix gallica* लाई माचिका मान्नु उपयुक्त हुन्छ भनी लेख्नु भएको छ ।

(ङ) कामत द्वय : यो Malvaceae परिवारमा पर्दछ र यसको वानस्पतिक नाम *Hibiscus cannabinus* Linn. हो । (यो वानस्पतिक नामले भने गाँजाविशेष वा जूटविशेषलाई बुझाउँदछ) ।

(च) ग्लोबल साइन्स रिसर्च जर्नलमा प्रकाशित भी शशिकला र टी सुथीको लेखमा तथा भारत सरकारबाट प्रकाशित *MEDICINAL PLANTS RESEARCH* को भोलम-३ मा *Hibiscus sabdariffa* L. वानस्पतिक नाम भएको वनस्पतिको संस्कृत नाम अम्बष्ठिका भनी दिइएको छ ।

(छ) यसको पर्यायवाची वानस्पतिक नाम Research Journal of Pharmacognosy and Phytochemistry मा प्रकाशित विजय जे तिवारी र अभय इत्वाद्दर को Philological study of Sanskrit names of Medicinal plants शीर्षकको अनुसन्धानात्मक लेखमा *Abelsmoschus cogner* Walp. भनी दिइएको छ ।

(ज) नाबिक नेपाल नामक अर्धवार्षिक खबर पत्रिकामा सिन्धुली जिल्लाका बाली संरक्षण अधिकृत देवराज अधिकारीले लेखेको लेख अनुसार यो सुक्खा एवं रुखो जमिनमा समेत राम्रोसँग हुर्कने एक झाडीदार वनस्पति हो । यसका राता र सेता गरी दुई थरी फल लाग्दछन् । स्थानीय दनुवार आदि समुदायले राता रङका फल औषधीय गुणले भरिपूर्ण भन्ने गर्दछन् । ताजा एवं सुकाएर राखेका यसका पात र फलका बोक्रा सुप बनाएर सुत्केरीलाई खुवाएमा तिनको स्वास्थ्य राम्रो हुन्छ भनी ती विश्वास

गर्दछन् । यसलाई स्थानीय भाषामा चण्डा, चन्दा, कुत्रु, अमिली भनिन्छ । (कतै कतै यसको नाम बेलीचन्दा पनि उल्लेख भएको पाइन्छ) । यसको अंग्रेजी Roselle Plant नाम हो । यो Malvaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Hibiscus sabdariffa* L. हो ।



बेलीचन्दा वा राते, हिन्दीमा अम्बाडा (तस्बिर श्रोत : अमेजनडटइन)

**प्राचीन ग्रन्थका वचन :**

(क) **अभिधान मञ्जरी :**

**अम्बष्ठा माचीका शठाम्बिका गन्धिका च कपिचूडा ।**
**आम्राता बहुमूला तन्वङ्ग्याम्रातकी सहस्रा च ॥**
**चुम्बीका फलचुम्बी मसूरविदलाह्वयातिसारघ्नी ।**
**एकैषिकाम्रिकाख्या ताम्रफला बालिका प्रोक्ता ॥**

अम्बष्ठा, माचीका, शठाम्बिका, गन्धिका, कपिचूडा, आम्राता, बहुमूला, तन्वङ्गी, आाम्रातकी, सहस्रा, चुम्बीका, फलचुम्बी, मसूरविदलाह्वया, अतिसारघ्नी, एकैषिका, अम्रिकाख्या, ताम्रफला र बालिका : यी अम्बष्ठाका नाम हुन् ।

**(ख) कैयदेव निघण्टु :**

**अम्बष्टाऽम्बष्ठकी दन्तशठा चाम्बालिकाम्बिक॥**
**बहुमूला सूचिमुखी सहस्रीमाचिकाशची । मधूकपर्णिकेशिका मयूरविदला तथा॥**
**अम्बष्ठा मधुरा तिक्ता लघ्वम्ला रसपाकयोः । कफपित्तहरा कण्ठ्या पक्वातीसारनाशिनी॥**

अम्बष्ठा, अम्बष्ठकी, दन्तशठा, अम्बालिका, अम्बिक, बहुमूला, सूतिमुखी, सहस्री, माचिका, शची, मधूकपर्णी, केशिका र मयूरविदला : यी अम्बष्ठाका नाम हुन् । योगुलियो, तीतो, पचाउन सहज, शुरुमा र पचेपछि अमिलो, कफविकार र पित्तविकार नाशक, घाँटीका लागि हितकर तथा पक्वातीसार नाशगर्ने गुणको हुन्छ ।

**(ग) धन्वन्तरि निघण्टु :**

**माचिका प्रथिताऽम्बष्ठा तथाऽम्बाऽम्बालिकाऽम्बिका ।**
**अम्बष्ठका कषाया च सा प्रोक्ता मुखवाचिका॥**
**अम्बिका तु रसे तिक्ता तथोष्णा कफनाशनी । अर्शोघ्नी श्वयथूत्थानपरिपन्थितया स्मृता॥**
**माचिका तु कषाया च कण्ठ्या वातबलासजित् । पित्तप्रकोपशमनी व्रणशोधनरोपणी॥**

माचिका, अम्बष्ठा, अम्बा, अम्बालिका, अम्बिका, अम्बष्ठका, कषाया र मुखवाचिका : यी अमिली विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, उष्णवीर्यको, कफविकार नाशक, अल्काई नाशक, श्वयथु नाशक हुन्छ । अन्यका मतमा यो टर्रो, घाँटीका लागि लाभदायक तथा वातविकार र कफविकारलाई जित्ने गुणको हुन्छ । यसले पित्तको प्रकोपलाई शान्त पार्दछ तथा घाउ प्रशोधन र भर्ने काम गर्दछ ।

**(घ) भावप्रकाश निघण्टु :**

**माचिकाप्रस्थिकाम्बष्ठा तथाम्बाम्बालिकाम्बिका । मयूरविदला केशी सहस्रा बालमूलिका॥**
**माचिकाम्ला रसे पाके कषाया शीतला लघुः । पक्वातीसारपित्तास्रकफकण्ठामयापहा॥**

माचिका, प्रस्थिका, अम्बष्ठा, अम्बा, अम्बालिका, अम्बिका, मयूरविदला, केशी, सहस्रा र बालमूलिका : यी अम्बष्ठाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रसमा अमिलो र पचेपछिको रसमा टर्रो हुन्छ । यसले शीतल गर्दछ, पचाउन हलुका हुन्छ, यसले पक्वातिसार, रक्तपित्त, कफविकार र घाँटीको रोग नाश गर्दछ । पक्वातिसार :- गाढा पहेंलो र पातलो दिसा हुने रोग (ब्लोस डाएरिया) ।

**(ङ) मदनपाल निघण्टु :**

**माचिका बालिकाऽम्बष्ठा शठी दन्तशठाऽम्बिका । अम्बष्ठकी सूचिमुखी कषाया कण्ठमुख्यपि॥**
**माचिकोष्णा रसे पाके कषाया शीतला लघुः । पक्वातीसारपित्तास्रकफकण्ठामयापहा॥**

माचिका, बालिका, अम्बष्ठा, शठी, दन्तशठा, अम्बिका, अम्बष्ठकी, सूचिमुखी, कषाया र कण्ठमुखी : यी अम्बष्ठाका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यसको रस तातो हुन्छ । यो पचेपछि टर्रो हुन्छ । यसले शीतल गर्दछ । यो पचाउन हलुका हुन्छ । यसले पक्वातिसार, पित्तविकार, रक्तविकार, कफविकार र घाँटीका रोग नाश गर्दछ ।

**(च) राज निघण्टु :**

**अम्बष्ठाऽम्बालिकाऽम्बाला शठाम्बाऽम्बष्ठिकाऽम्बिका ।**
**अम्बा च माचिका चैव दृढवल्का मयूरिका ॥**
**गन्धपत्री चित्रपुष्पी श्रेयसी मुखवाचिका । छिन्नपत्रा भूरिमल्ली विज्ञेया षोडशाह्वया ॥**
**अम्बष्ठा सा कषायाम्ला कफकण्ठरुजापहा । वातामयबलासघ्नी रुचिकृद्दीपनी परा ॥**

(१) अम्बष्ठा, (२) अम्बालिका, (३) अम्बाला, (४) शठाम्बा, (५) अम्बष्ठिका, (६) अम्बिका, (७) अम्बा, (८) माचिका, (९) दृढवल्का, (१०) मयूरिका, (११) गन्धपत्री, (१२) चित्रपुष्पी, (१३) श्रेयसी, (१४) मुखवाचिका, (१५) छिन्नपत्रा र (१६) भूरिमल्ली : यी सोह्र वटा नाम अम्बष्ठाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र अमिलो हुन्छ । यसले कफविकार र घाँटीका रोग ठिक गर्दछ । अम्बष्ठा वातजन्य रोग र बलास रोग निको पार्दछ । यसले रुची जगाउँदछ र अत्यन्त दीपनी हुन्छ ।

उपरोक्त विवदास्पद पहिचानको वनस्पति ठोट्ने वा बेलिचन्दा वा अरु कुनै वनस्पति हो भन्ने सर्वसम्मत धारणा भएको पाइएन । यहाँ मैले अमिली अर्थलाई आधार बनाएर यो तस्बिर राखेको हुँ । पहिले पहिले गाउँतिर ढुङ्गेन बारीमा यसको खेती गरेको र बारीमै बसेर सेमत चाखेको सम्झना छ ।

## अम्ल विदग्धा दृष्टि (आँखाको रोगविशेष)
## (An eye disease)

(क) **अष्टाङ्ग हृदय :**

**भृशमम्लाशनाद्दोषैः सास्रैर्या दृष्टिराचिता॥ सक्लेदकण्डूकलुषा विदग्धाम्लेन सा स्मृता ।**

अमिलो रस धेरै खानाले रगत सहितको त्रिदोषको विकारले गएर जब आँखाको दृष्टिमण्डललाई घेर्दछ तब दृष्टि दुख्ने र चिलाउने भई मलिन हुन पुग्दछ । यो रोगलाई अम्लविदग्धा भनिन्छ ।

# अम्लवर्ग
# (Amlawarga)

## (क) अर्कप्रकाश :

**आम्र आम्रातको धात्री लकुचं च कपित्थकम् । नारङ्गं द्विविधा जम्बुः करमर्दं पियारकम्॥**
**बीजपूरं च जम्बीरं निम्ब्वम्लीकाम्लवेतसम् । दाडिमं पर्वतद्राक्षा द्विधा बदरतूदकम्॥**
**वृक्षाम्लं हरमन्थं च चाङ्गेरी त्वम्लवर्गकः ।**

आँप, अमारो, अमला, बडहर, कैथ, दुई किसिमका सुन्तला,जामुनु, पनेरु, चिरौँजी, बिमिरो, ज्यामिर, कागती, अमिली,अम्लवेत, दारिम, पहाडी अङ्गुर, दुई किसिमका बयर, किम्बू, चुक अमिलो, हरमन्थ (चना ?) र चरिअमिलो अम्लवर्गमा गनिन्छन् ।

## (ख) राजनिघण्टु :

**चाङ्गेरी लिकुचाम्लवेतसयुतं जम्बीरकं पूरकं**
**नारङ्गं फलषाडवस्त्विति तु पिण्डाम्लश्च बीजाम्लकम् ।**
**अम्बष्ठासहितं द्विरेतदुदितं पञ्चाम्लकं तद्द्वयं विज्ञेयं करमर्दनिम्बुकयुतं स्यादम्लवर्गाह्वयम्॥**



चरिअमिलो (चाङ्गेरी), बडहर (लिकुच), अम्लवेतस, ज्यामिर र बिमिरो तथा सुन्तला, अनार (फलषाडव), कैथ (पिण्डाम्ल), वृक्षाम्ल वा कोकम र अम्बष्ठा : यी दुई पञ्चाम्ल अनि पनेरु (करमर्द) र कागती समेतलाई अम्लवर्ग भनिन्छ ।

# अम्लवल्ली
# (Amlawallee)

**परिभाषा :**

(क) के.यन.स्वामी : बृहत्पत्रा, छिन्नग्रन्थिका, अम्लवल्ली : तीन पाते गुर्बो ।

(ख) डा.सतिश चन्द्र साङ्ख्यधर : यो पहिचान हुन नसकेको एक वनस्पति हो ।

(ग) दिनेश वाल्के : यसको हिन्दी नाम पित्तमारी र ल्याटिन नाम *Naregamia alata* हो । तर यसको नेपाली नाम पित्तपापडा भनी दिइएको छ । पित्तपापडाका लागि राज निघण्टुमा बेग्लै वर्णन गरिएको छ ।

(घ) नेपाली बृहत् शब्दकोश (गुर्बो) : एउटै भेट्नामा सेता टीका-टीका परेका अनेक पात हुने र बीचमा घुम्रेको शङ्खाकार रातो रङ्को ठूलो एउटा पात हुने, त्यसका बीचमा घोगो र घोगाका माथिल्लापट्टि पहेँलो कोपिला हुने, भ्याकुरजस्तो सेतो कन्द फल्ने एक वनस्पति; आयुर्वेदका अनुसार शूलरोग र अलकाईलाई नाश गर्ने त्यसैको कन्द ।


अम्लवल्ली (तस्विर श्रोत : दिनेश वाल्के, फ्लिकर)

(ङ) एक थरी जङ्गली वनस्पति हुन्छ जसलाई सर्पको मकै वा बाँको भनिन्छ । त्यसको वानस्पतिक नाम *Arisaema jacquemontii* Blume वा *Arisaema tortuosum* (Wall.) Schott हो । यो पनि गुर्बो जस्तै हुन्छ । बारीतिर उम्रने बाँको विषालु हुन्छ ।

(च) हिन्दी विश्वकोश : अम्लवल्ली-अम्ल तद्रसवती वल्ली यस्याः, त्रिपर्णीकन्द, जवासा, यसको गाँठि जराबाट अमिलो रस निस्कन्छ । कन्दबहुला-कन्दादारभ्य कन्देन कन्देषु वा बहुला । त्रिपर्णी, एक हाँगे विरुवा । कन्दालु- त्रिपर्णिका, एक हाँगे । छिन्नग्रन्थिका-छिन्नग्रन्थिनिका, छिन्नग्रन्थिनी । त्रिपर्णिका लता । एक किसिमको लहरा । त्रिपर्णिका-त्रीणि त्रीणी पर्णानि यस्याः । कन्द विशेष । एक प्रकारको मूला । बृहत्पत्री-बृहत्पत्रा । बृहत् पत्रं यस्याः । त्रिपर्णिका । विषापहा-विषं अपहन्तेति । त्रिपर्णी नामक महाकन्द ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**त्रिपर्णिका बृहत्पत्री छिन्नग्रन्थिनिका च सा । कन्दालः कन्दबहुलाऽप्यम्लवल्ली विषापहा ॥**
**त्रिपर्णी मधुरा शीता श्वासकासविनाशनी । पित्तप्रकोपशमनी विषव्रणहरा परा ॥**

त्रिपर्णिका, बृहत्पत्री, छिन्नग्रन्थिनिका, कन्दाल, कन्दबहुला, अम्लवल्ली र विषापहा : यी त्रिपर्णीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको तथा दम, खोकी, पित्तविकार, विषविकार र विशेषतः घाउखटिरा नाशक हुन्छ ।

# अम्लवेतस
# (Amlavetas)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : सहस्रवेधिन्, चुक्र आदि शब्दले अम्लवेतलाई बुझाउँदछ । अम्लवेत शब्दले कोही शङ्खत्रो लिन्छन् , कोही जल्लीबीर लिन्छन्, कोही पदमचाल्नु लिन्छन् । अम्लवेतका पर्याय शब्द देखाउँदा आयुर्वेदीयनिघण्टुमा फलाम्लः, शङ्खद्रावी, मांसद्रावी इत्यादि शब्द लेखेको देखिनाले शङ्खद्रावीको अपभ्रंश हुँदा-हुँदा शङ्खत्रो बन्न गएको हो भन्न पनि सकिन्छ । त्यसमा पनि शङ्ख गलाउनु, मासु गलाउनु इत्यादि गुण देखिन्छन् । यिनै गुण जल्लीबीरमा पनि पर्याप्त देखिन्छन् । अब यी दुईमा विनिगमना (निश्चय गराउने सबुती) नदेखिएपछि अम्लवेतस शब्दले स्पष्ट बुझिने अर्थ (वेतको आकार भएको अमिलो वस्तु) लाई लिएर पदमचाल्नु ठहराउनु अति उचित हुनेछ । कुनै निघण्टुमा 'भोटदेशे प्रसिद्धः' यस्तो पनि लेखिएको छ । शङ्खत्रो, जल्लीवीर अन्यत्र पनि पाइन्छ ।

(ख) के.यन.स्वामी : (१) अम्लवेतस : शङ्खत्रो । चखेत्रो । चुल्ठे अमिलो । (२) चुक्र, सहस्रनुत् : सङ्खत्रो । (३) शतवेधी, सहस्रवेधी : शङ्खत्रो । चुल्ठे अमिलो ।

(ग) नेपाली बृहत् शब्दकोश : (१) पदमचाल : कर्कलाका आकारका ठूला पात, खैरा फल, हरियोमा खैरा र पहेँला टीका परेका फूल र पहेँलो ठूलो कन्द हुने, लेकाली जङ्गलमा पाइने एक बुटी; पदमचाल्नु; पद्मचारिणी । आयुर्वेदमा अजीर्ण, अतिसार तथा अरुचि नाश गर्ने र हलुको जुलाफ हुने गुण बताइएको त्यसैको अमिलो र ठूलो कन्द । (२) सङ्खेत्रो : भोगटेका छाँटका लाम्चा पात र सेता फूल हुने एक जातको बोट; आयुर्वेदमा चखेत्रोको जस्तो गुण बताइएको, शङ्खलाई गाल्ने कीपजस्तो त्यसैको फल ।



पदमचाल्नु (तस्बिर श्रोत : इण्डियनमेडिसिनप्लान्टडटइन्फो)

(घ) डा.चुनेकर : यसको यकीन हुन सकेको छैन । *Rheum emodi* Wall.(पदमचाल्नु), *Garcinia pedunculata* Roxb., *Rumex vesicarius* Linn. (अमिलो पालुङ्गो, सङ्खत्रो) र Citrus लाई अम्लबेत मानिएको पाइन्छ ।

(ङ) शास्त्री : यसलाई अंग्रेजीमा *Common Soral* र ल्याटिन भाषामा *Acidozeyfolia* भनिन्छ । यसलाई फलका लागि बगैंचामा रोपिन्छ । यसको वृक्ष ठूलो हुन्छ तथा फराकिला खस्रा र ठूला पात हुन्छन् । असारमा सेता फूल फुल्दछन् । शरद् ऋतुमा पाक्ने, काँचोमा हरियो र पाकेपछि हलेदोजस्तो वर्णको हुने, नासपाती जस्तै तर त्योभन्दा तीन-चार गुना ठूलो तथा काटी सुकाएर अमिलो बनाइने फल फल्दछ । यो अती नै अमिलो हुन्छ ।

(च) पेयर डां अमरकोश : यसको वानस्पांतक नाम *Garcinia* pedunculata Roxb. ex Buch. Ham. हो । कसैले *Rumex acetosa* L. (अमिली घाँस) लाई पनि अम्लवेतस् मानेका छन् ।

(छ) स्वामी सदाशिव तिर्थ : अम्लवेतसलाई अंग्रेजीमा Rhubarb तथा ल्याटिन भाषामा *Rheum emodi Wall.* (पदमचाल्नु), *(R.officinale, R.acuminatum, R.speciforme, R. webbianum, R.moorcroftianum, R australe)* भनिन्छ ।

(ज) राजनिघण्टु : यो भोटदेशमा प्रसिद्ध छ ।

(झ) हिन्दी विश्वकोश (भाग २) : यो प्रतिवर्ष फल्दछ, पछि मर्दछ, ६-१२ इञ्च अग्लो हुन्छ ।

(ञ) नेपालको चुरे जङ्गल नामक पुस्तिका, जुलाई २०१४, नेपाल सरकार : अम्लवेत वा चुल्ठी अमिलोको वानस्पतिक नाम *Rheum webbianum* Royle.हो ।

(ट) छत्तीसगढ मेडिकल सर्विसेज कार्पोरेश लि., भारतको एक पुस्तिका : अम्लवेत वा अम्लपर्णीको वानस्पतिक नाम *Garcinia Pedunculata* हो ।

(ठ) रिसर्चगेट डट नेटमा प्रकाशित एक लेखमा अम्लवेतसको वास्पतिक नाम *Garcinia pedunculata Roxb. ex Buch.-Ham.*भनी दिइएको छ ।

(ड) विभिन्न शब्दकोश : (१) अम्लनायक-अम्लवेतस् । चूक । (२) अम्लभेदन-अम्लार्थं अम्लरसप्राप्त्यर्थं भिद्यतेऽसौ । अम्लवेतस, चूक । चुक्र, अमिलो पालुङ्गो । अमिलोको लागि अमिलो रसका लागि यसलाई चुँडिन्छ । (३) अम्लवेतस- अम्लं रसं वयति सर्वपत्रेषु वहति । सबै पातमा अमिलो रस बहन्छ । अम्लश्चासौ वेतसश्च (अष्टाङ्ग हृदय कोशमा के.यम.वैद्य) । अमिलो र वेत जस्तो । (४) अम्लाङ्कुश- अम्लं अङ्कुशः अङ्कुशाकाराग्रं यस्य । .अम्लवेतस । .चुक्र । यसको टुप्पोतिरको भाग अमिलो र अङ्कुश आकारको हुन्छ । (५) गुल्मकेतु-गुल्मः केतुरस्य । अम्लवेतस । एक प्रकारको वेत, सरकण्डा । पुच्छ्रेतारा जस्ता गाँठा हुन्छन् । (६) चुक्र-चक्रते तृप्यत्यनेन चक्-रक् उत्तं च । .अमिलो रस, सडाइएको अमिलो रस, कांजी, सन्धान । अमिलो पदार्थविशेष, चूक नामको अमिलो, चूकमहाम्ल । यसको पर्याय-तिन्तिडीक, वृक्षाम्ल, चुक्रक, महाम्ल, अम्लवृक्षक । पात खाइने सागविशेष, एक प्रकारको अमिलो साग, चुकाका साग । यसको पर्याय-चुक्रवास्तूक, लिकुच, अम्लवास्तुक, दलाम्ल, अम्लशाकाख्य, अम्लादि र हिलमोचिका । यसका गुण-अम्लरस, लघु, उष्ण, वातगुल्मनाशक, रुचिकर, अग्निवृद्धिकर, पित्तवृद्धिकर र पथ्य । शुक्तविशेष । काञ्जिकविशेष, कांजी । यसको पर्याय-सहस्रवेध, रसाम्ल, चुक्रवेधक, शाकाम्ल, भेदन, चन्द्र, अम्लसार र चुक्रिका । यसका गुण-स्वादु, तिक्त, अम्ल एवं कफ, पित्त, नासिका रोग, दुर्गन्ध र शीरपीडा नाशक । रसाम्ल । सन्धान विशेष, सडाइएको अमिलो रस । वैद्यक परिभाषाको मत अनुसार मस्तु आदि, सखर, मह र कांजीलाई एक सफा भाँडामा हाली तीन रातसम्म धानका बीचमा राख्नू । यसलाई चुक्र भनिन्छ । (यन्मस्त्वादि शूचौ भाण्डे सगुडक्षौद्रकाञ्जिकम् । धान्यराशौ त्रिरावश्यं शुक्तं चुक्रं तदुच्यते ।।) । अम्लवेतस, अमलवेत । यसले तृप्ति दिन्छ । (७) फलाम्ल-फलमम्लं यस्य । वृक्षाम्ल, खट्टा फल । अम्लवेतस, अम्लवेत । विषावली, विषाविल । अमिलो फल हुन्छ । (८) भीम-विभेत्यस्मादिति । अम्लवेतस । यसले डर पैदा गर्दछ । (९) महाक्षार-तेजस्कर क्षारविशेष । कडा क्षार हुन्छ । (१०) मांसद्राविन्-मांसं द्रावयति । अम्लवेतस । मासु पगाल्दछ । (११) रक्तसार- रक्तवर्णः सारोऽस्य । अम्लवेतस । रस रातो रङको हुन्छ । (१२) रसाम्ल- अम्लवेतस । (१३) राजाम्ल- अम्लानां राजा श्रेष्ठत्वात् । अम्लवेतस । अमिलोको राजा वा उत्तम अमिलो हो । (१४) वीरवेतस- अम्लवेतस । (१५) वेधक- अम्लवेतस । (१६) शतवेधिन्-अम्लवेतस । चुक्रिका । (१७) सहस्रनामन् - अम्लवेतस ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**वेतसोऽम्लो वेतसाम्लो रक्तस्रावश्च वेधकः । शतवेधी रसाम्लं स्यात् भीमश्चेत्यम्लवेतसम् ॥**

वेतस, अम्ल, वेतसाम्ल, रक्तस्राव, वेधक, शतवेधी, रसाम्ल, भीम र अम्लवेतस : यी अम्लवेतसका नाम हुन् ।

**(ख) अमरकोश :**

**सहस्रवेधी चुक्रोऽम्लवेतसःशतवेध्यपि ।**

सहस्रवेधी, चुक्र, अम्लवेतस र  शतवेधिन् : यी अम्लवेतका नाम हुन् ।

**(ग) कैयदेव निघण्टु :**

**वेतसोम्लोऽलाम्बुसुहृच्छतवेधी सहस्रभित् । आम्लोऽम्लवेतसो भीमः शाखाम्लो वरवेतसः ॥**
**रक्तस्रावश्च मांसारिश्चुक्रकोऽग्निकवेतसः । बोधको वेधको द्रावी रसाम्लो वातिकप्रियः ॥**
**अम्लवेतफलं चोष्णं तीक्ष्णं स्निग्धं च दीपनम् । बद्धमूलानपि व्याधीन् भिन्द्याद् वज्रं गिरीनिव ॥**
**सशूलानाहविष्टम्भान् जयेद् वातकफामयान् । अम्लवेतसमम्लं च तीक्ष्णोष्णं लघु भेदनम् ॥**
**दीपनं पाचनं हृद्यं कफपित्तास्रदूषणम् । रूक्षं विण्मूत्रदोषघ्नद्रोगाध्मानगुल्मजित् ॥**
**हिध्मानाहानिलश्वासकासशूलवमिप्रणुत् । द्रवीभवत्यजामांसं मलवस्त्रं सितं भवेत् ॥**
**चणकाम्लोपमं स्वादु साम्लं स्यादम्लवेतसम् ।**



वेतस, अम्ल, अलाम्बु, सुहृत्, शतवेधी, सहस्रभित्, आम्ल, अम्लवेतस, भीम, शाखाम्ल, वरवेतस, रक्तस्राव, मांसारि, चुक्रक, अग्निकवेतस, बोधक, वेधक, द्रावी, रसाम्ल र वातिकप्रिय : यी अम्लवेतसका पर्यायवाची नाम हुन् । यसको फल उष्णवीर्यको, तिक्खर, चिल्लो र दीपनी हुन्छ । यसले जरो गाढेर बसेका शूल, आनाह, विष्टम्भ जस्ता रोगहरू पनि चटचाङले पर्वत नाश गरेजसरी नै नाश गर्दछ । अम्लवेतसले वातविकार, कफविकार र आमविकारलाई जित्दछ । यो अमिलो, तिक्खर, उष्णवीर्यको, पचाउन सहज र भेदनी हुन्छ । अम्लवेतस दीपनी, पाचनी, मुटुका लागि हितकर तथा कफविकार, पित्तविकार र रक्तविकारलाई दूषित बनाउँदछ । यो रुखो, मलमूत्रमा हुने विकार नाशक तथा आधान र गुल्मलाई जित्ने गुणको हुन्छ । अम्लवेतसले बाडुली, आध्मान, वातविकार, दम, खोकी, शूल र वाकवाकी नाश गर्दछ ।  यसले बोकाको मासुलाई पगाल्दछ तथा मैलो लुगालाई सेतो बनाउँदछ । यो चणकाम्ल जस्तै स्वादिलो र अमिलो हुन्छ ।

**(ग) धन्वन्तरि निघण्टु :**

**अम्लोऽम्लवेतसो भीमो रसाम्लो वरवेतसः । रक्तस्रावी वेतसाम्लः शतवेधी च भेदकः ॥**

**कषायं कटुरूक्षोष्णमम्लवेतसकं विदुः । तृट्कफानिलजन्त्वर्शोहृद्बाधाश्मारिगुल्मजित् ॥**

अम्ल, अम्लवेतस, भीम, रसाम्ल, वरवेतस, रक्तस्रावी, वेतसाम्ल, शतवेधी र भेदक : यी अम्लवेतका नाम हुन् । यो टर्रो, पिरो, रुखो र उष्णवीर्यको हुन्छ भनी बताइएको छ । यसले तिर्खा, कफविकार, वातविकार, कीरा, अल्काई, मुटुको अडचन, पत्थरी र गुल्मलाई जित्दछ ।

(घ) **पारद संहिता** : अमिलोमा अम्लवेतसको अमिलो सबभन्दा उत्तम हुन्छ ।

(ङ) **भावप्रकाश निघण्टु :**

**स्यादम्लवेतसश्चुक्रं शतवेधि सहस्रनुत् ॥**
**अम्लवेतसमत्यम्लं भेदनं लघु दीपनम् । हृद्रोगशूलगुल्मघ्नं पित्तलं लोमहर्षणम् ॥**
**रूक्षं विण्मूत्रदोषघ्नं प्लीहोदावर्त्तनाशनम् । हिक्काऽऽनाहारुचिश्वासकासाजीर्णवमिप्रणुत् ॥**
**कफवातामयध्वंसिच्छागमांसद्रवत्वकृत् । चणकाम्लगुणं ज्ञेयं लोहसूचीद्रवत्वकृत् ॥**

अम्लवेतस, चुक्र, शतवेधि र सहस्रनुत् : यी अम्लवेतका नाम हुन् । यो अति नै अमिलो, भेदनी, पचाउन हलुका, दीपनी तथा मुटुका रोग, शूल र गुल्म नाशक हुन्छ । यसले पित्तविकार बढाउँदछ र रौं नै ठाडा हुनेगरी जीउलाई सिरिङ्ग पार्दछ । यो रुखो हुन्छ । यसले दिसापिसाबका विकार, फियोका रोग, उदावर्त, बाडुली, आनाह, अरुची, दम, खोकी, अजीर्ण र वाकवाकी नाश गर्दछ । यसले कफविकार र वातविकार नाश गर्दछ तथा बोकाको मासुलाई गाल्दछ । यसका गुण चनाको खार सरह हुन्छन् र फलामको सियोलाई समेत गलाउँदछ ।

(च) **मदनपाल निघण्टु :**

**अम्लोऽम्लवेतसश्चुक्रो वेतसः शरभेदकः । अम्लवेतसमत्युष्णं भेदनं लघु दीपनम् ॥**
**हृद्रोगशूलगुल्मघ्नं पित्ततृट्कफदूषणम् ॥**

अम्ल, अम्लवेतस, चुक्र, वेतस र शरभेदक : यी अम्लवेतसका संस्कृत पर्यायवाची नामहरू हुन् । अम्लवेतस अति नै उष्णवीर्यको हुन्छ । यो भेदनी, पचाउन सहज र दीपनी हुन्छ । यसले मुटुका रोग, शूल, गुल्म, पित्तविकार, तिर्खा र कफविकार नाश गर्दछ । (यस ग्रन्थमा साराम्लक आदि पर्याय राखी शङ्खद्रावीको बेग्लै चर्चा गरिएको छ) ।

(छ) **राज निघण्टु :**

**अम्लोऽम्लवेतसो वेधी रसाम्लो वीरवेतसः । वेतसाम्लश्चाम्लसारः शतवेधी च वेधकः ॥**
**भीमश्च भेदनी भेदी राजाम्लश्चाम्लभेदनः । अम्लाङ्कुशो रक्तसारः फलाम्लश्चाम्लनायकः ॥**
**सहस्रवेधी वीराम्ली गुल्मकेतुर्धराक्षिधा । शङ्खमांसादिद्रावी स्याद्द्विधा चैवाम्लवेतसः ॥**
**अम्लवेतसमत्यम्लं कषायोष्णं च वातजित् । कफार्शःश्रमगुल्मघ्नमरोचकहरं परम् ॥**

(१) अम्ल, (२) अम्लवेतस, (३) वेधी, (४) रसाम्ल, (५) वीरवेतस, (६) वेतसाम्ल, (७) अम्लसार, (८) शतवेधी, (९) वेधक, (१०) भीम, (११) भेदनी, (१२) भेदी, (१३) राजाम्ल, (१४) अम्लभेदन, (१५) अम्लाङ्कुश, (१६) रक्तसार, (१७) फलाम्ल, (१८) अम्लनायक, (१९) सहस्रवेधी, (२०) वीराम्ली र (२१) गुल्मकेतु : यी एक्काईस (धराक्षि) नाम अम्लवेतसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति अमिलो, टर्रो र उष्णवीर्यको हुन्छ । यसले वातविकारलाई जित्दछ । अम्लवेतसले कफविकार, अल्काई, थकाई र गुल्म नाश गर्दछ तथा प्रभावकारी ढङ्गले अरुचीलाई नाश गर्दछ ।

## (ज) राजवल्लभ निघण्टु :

**अम्लवेतसमत्यम्लमानाहकफवातजित् । तदेव सिद्धं दोषघ्नं श्रमघ्नं ग्राहि गुर्वपि ॥**

अम्लवेत अति अमिलो हुन्छ । यसले आनाह र कफविकारलाई जित्दछ । राम्ररी पकाएर तयार पारिएको (पाकेको, सिद्ध) अम्लवेत दोष र थकाई नाशक, ग्राहि र पचाउन कठिन पनि हुन्छ ।



Rumex acetosa L., पेयर डी अमरकोश

## (झ) शालिग्राम निघण्टु :

**शालिग्राम निघण्टु :** अम्लवेतस, चुक्र, शतवेधी र सहस्रजित् : यी अम्लवेतका नाम हुन् ।

## (ञ) सोढल निघण्टु :

**अम्लवेतसके भीमो रसाम्लः सर्वरोगनुत् । फलाम्लो गुल्महा हृद्यः शतवेधी च भेदकः ॥**
**अस्थिद्रावी महाक्षारो वेतसाम्लोऽथशूलहृत् । सहस्रवेध्यम्लरसो मांसद्रावी च दीपनः ॥**
**रक्तस्रावो वराम्लश्च केशद्रावी च पाचनः ॥**

अम्लवेतस, भीम, रसाम्ल, सर्वरोगनुत्, फलाम्ल, गुल्महा, हृद्य, शतवेधी, भेदक, अस्थिद्रावी, महाक्षार, वेतसाम्ल, शूलहृत्, सहस्रवेधी, अम्लरस, मांसद्रावी, दीपन, रक्तस्राव, वराम्ल, केशद्रावी र पाचन : यी अम्लवेतका संस्कृत पर्यायवाची नामहरू हुन् ।

गाउँतिर भोगटे भन्दा साना झण्डै निबुवा जत्रै रूखमा त्यत्रै फल फल्ने अति अमिलो फललाई शङ्खेत्रो भनिन्थ्यो । पाकेपछि टिपेर चूक अमिलो पकाएर राखिन्थ्यो ।

# अम्लातक
# (Amlaataka)

यसको पहिचान हुन सकेको देखिएन । केही उपलब्ध जानकारी यस्ता पाइएका छन् ।

**परिभाषा :**

(क) के.यन.स्वामी : अम्लातकी : ठूलोपाते अमिले लहरो । कुरण्टक : पहेँलो कटसरैयाको फूल । महासहा : कटसरैया ।
(ख) शब्दकल्पद्रुम : अम्लातक : अम्लानवृक्ष । अम्लान : महासहा वृक्ष, आँयला इति भाषा ।
(ग) कुलचन्द्र शर्मा : यी कटसरैयाका नाम हुन् ।
(घ) प्रेअर डी अमरकोशले *Barleria strigosa* Wild अर्थात् नीलो कटसरैयालाई अम्लान र महासहा भनी सचित्र व्याख्या गरेको छ ।
(ङ) भावप्रकाश निघण्टुका टीकाकार डा. कृष्णचन्द्र चुनेकरले यसलाई कटसरैयाको एक भेद हुन सक्ने बताएका छन् । नीलो कटसरैयाको बेग्लै पर्याय राखिएका छन् ।
(च) हिन्दी विश्वकोश : अम्लाटन- महासहा वृक्ष । झाडीविशेष । कटसरैया । कुरण्टक-पहेँलो वा रातो कटसरैया । महासह-कुञ्जकवृक्ष, वाणपुष्प । वर्णपुष्प-राजतरिणी पुष्पवृक्ष ।

**प्राचीन ग्रन्थका वचन :**



**(क) कैयदेव निघण्टु :**

**विम्लग्नः परिम्लानोऽम्लातकश्च मलातकः । अविम्लानोऽम्लानकोऽथ कामुको रक्तकोमुर॥**
**महासहो वर्णपुष्पश्चारटश्चोरटस्तथा । अम्लायनः कषायोष्णः स्वादुः स्निग्धः सतिक्तकः॥**

विम्लग्रन, परिम्लान, अम्लातक, मलातक, अविम्लान, अम्लानक, कामुक, रक्तकोमुर, महासह,वर्णपुष्प, चारट र चोरट : यी अम्लातकका नाम हुन् । यो टर्रो, उष्णवीर्यको, स्वादिलो, चिल्लो र हल्का तीतो हुन्छ ।

**(ख) भावप्रकाश निघण्टु :**

**अम्लातोऽम्लाटनः प्रोक्तस्तथाऽम्लातक इत्यपि । कुरण्टको वर्णपुष्पः स एवोक्तो महासहः॥**
**अम्लाटनः कषायोष्णः स्निग्धः स्वादुश्च तिक्तकः ।**

अम्लात, अम्लाटन, अम्लातक, कुरण्टक, वर्णपुष्प र महासह : यी अम्लातकका नाम हुन् । यो टर्रो, स्वादिलो र तीतो हुन्छ । यो चिल्लो हुन्छ । यसले गर्मी गर्दछ ।

# अम्लिका (अमिली वा तित्री)
Tamarind Tree

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : तिन्तिडी, चिञ्चा आदि भनेको अमिली हो ।

(ख) नेपाली बृहत् शब्दकोश : (१) अमिली : साना मसिना पात हुने र लामा कोसादार अमिलो फल फल्ने ठूलो जातको रूख; त्यसैको फल; तित्री । (२) आम्ल : अमिलीको रूख; अमिली । (३) आम्लिका : अमिली । (४) तित्री : खँदिलो साह्रो काठ हुने, अमलाका जस्ता पात हुने, कोसाभित्र काँचो छँदा अमिलो र पाकेपछि अमिलो र गुलियो गुदी हुने फल फल्ने बोट; त्यसै बोटको फल; अमिली ।



तिन्तिडी (तस्बिर श्रोत : पेयर डी अमरकोश)

(ग) डा. चुनेकर : यसलाई अंग्रेजीमा Tamarind Tree तथा ल्याटिन भाषामा *Tamarindus indica* Linn. भनिन्छ ।

(घ) आचार्य बालकृष्ण : यसलाई अंग्रेजीमा Indian date पनि भनिन्छ ।

(ङ) के.यन.स्वामी : (१) चिञ्चा, अम्लिका, अम्ली : अमिली । (२) चुक्रिका, अम्ला : चरिअमिलो । अमिली । (३) चुक्रा : अमिली । अमिलो पालुङ्गो । (४) शाकचुक्रिका : अमिली । कुल्फा साग । (५) तिन्तिडी : अमिलीको फल वा रूख ।

(च) धन्वन्तरि निघण्टु : यो Leguminosae वा Caesalpiniaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Tamarindus indica* Linn. हो ।

(च) शालिग्राम निघण्टु : यसलाई अंग्रेजीमा Tamarind Tree भनिन्छ । यसको ल्याटिन नाम *Tamarindus Indicus* हो ।

(छ) नेपाल सरकारबाट प्रकाशित चुरिया फरेष्ट अफ नेपाल नामक पुस्तिका : यसलाई नेपालमा इमिली, तित्री, तेटोर वा तालेअमिलो पनि भनिन्छ ।

(ज) फर्माकोपिया : यसमो रूख चौबीस मिटरसम्म अग्लो रसदाबहार हुन्छ । अमिली Fabaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Tamarindus indica* Linn. हो । यसलाई अंग्रेजीमा Tamarind Tree तथा हिन्दीमा इम्ली भनिन्छ । यो ४-१० ग्रामसम्म ओखतीमा प्रयोग हुन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अमरकोश :**

**...तिन्तिडी चिञ्चाम्लिकाथो...।**

तिन्तिडी (तिन्तिली), चिञ्चा र अम्लिका (आम्लीका, आम्लिका) : यी अमिलीका नाम हुन् ।

**(ख) अर्कप्रकाश :**



**...चिञ्चार्क ... रक्तगुल्मनुत्॥८७॥**

अमिलीको अर्कले रक्तगुल्म नाश गर्दछ ।

**(ग) आयुर्वेद महोदधि :**

**अम्लिकायाः फलं पक्वं रक्तपित्तकरं सरम् । तृष्णाघ्नं स्यात्कषायोष्णं कफजित्वनिलापहम्॥**

अमिलीको पाकेपछिको फलले रक्तपित्त बढाउने र दिसापिसाब खुलाउने काम गर्दछ । यसले तिर्खा मेट्दछ, टर्रो हुन्छ, गर्मी गर्दछ तथा कफविकार र वायुविकार नाश गर्दछ ।

**(घ) धन्वन्तरि निघण्टु :**

**अम्लिका चुक्रिका चुक्रा साम्ला शुक्ताऽथ शुक्तिका ।**
**अम्लीका चिञ्चिका चिञ्चा तिन्तिडीका सुतिन्तिडी॥**
**अम्लिकायाः फलं चाम्लमत्यन्तं पित्तकृल्लघु । रक्तकृद्वातशमनं बस्तिशुद्धिकरं परम्॥**
**पक्वं तु मधुराम्लं च भेदि विष्टम्भि वातजित् ।**
**त्वक्भस्म स्यात्कषायोष्णं कफघ्नं त्वनिलापहम्॥**

अम्लिका, चुक्रिका, चुक्रा, साम्ला, शुक्ता, शुक्तिका, अम्लीका, चिञ्चिका, चिञ्चा, तिन्तिडीका र सुतितित्तिडी : यी अमिलीका संस्कृत पर्यायवाची नामहरू हुन् । अमिलीको फल अति अमिलो हुन्छ । यसले पित्तविकार गर्दछ । यो पचाउन हलुका हुन्छ । यसले रक्तविकार गर्दछ तर वातविकारलाई शान्त पार्दछ । अमिलीले प्रभावकारी ढङ्गले तल्लोपेट प्रशोधन गर्दछ । पाकेको अमिली गुलियो र अमिलो हुन्छ । यसमा भेदन, विष्टम्भी र वातविकारलाई जित्ने गुण हुन्छ । अमिलीको बोक्राको भस्म टर्रो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ ।

(ङ) **भावप्रकाश निघण्टु :**

**अम्लिका चुक्रिकाऽम्ली च चुका दन्तशठाऽपि च॥**
**अम्ला च चिञ्चिका चिञ्चा तिन्तिडीका च तिन्तिडी ।**
**अम्लिकाऽम्ला गुरुर्वातहरी पित्तकफास्रकृत्॥ पक्वा तु दीपनी रूक्षा सरोष्णा कफवातनुत् ।**

अम्लिका, चुक्रिका, अम्ली, चुक्रा, दन्तशठा, अम्ला, चिञ्चिका, चिञ्चा, तिन्तिडीका र तिन्तिडी : यी अमिलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अमिलो, पचाउन कठिन, वातविकार नाशक तथा पित्तविकार, कफविकार र रक्तविकार गराउने गुणको हुन्छ । पाकेको अमिली भने दीपनी, रुखो, गर्मी गर्ने तथा कफविकार र वातविकार नाश गर्ने गुणको हुन्छ ।

(च) **मदनपाल निघण्टु :** 

**अम्लिका चुक्रिका चिञ्चा तिन्तिडी शुक्तिचन्द्रिका ।**
**अम्लिकाऽऽमा गुरुर्वातहरा पित्तकफास्रजित्॥**

अम्लिका, चुक्रिका, चिञ्चा, तिन्तिडी र शुक्तिचन्द्रिका : यी अमिलीका संस्कृत पर्यायवाची नामहरू हुन् । काँचो अमिली पचाउन कठिन, वातविकार नाशक तथा पित्तविकार र कफविकार माथि जित हासिल गर्ने गुणको हुन्छ ।

**पक्वा तद्वत्सरा रुच्या वह्निबस्ति विशुद्धिकृत् । शुष्का हृद्या श्रमभ्रान्तितृष्णाक्लमहरा लघुः॥**

पाकेको अमिली मलमूत्र तलतिर सार्ने, रुचि जगाउने तथा पाचनशक्ति र तल्लो पेटलाई शुद्ध बनाउने गुणको हुन्छ । सुकेको अमिलीले मुटुलाई लाभ दिन्छ तथा थकाई, भ्रम, तिर्खा र ग्लानी नाश गर्दछ । यो पचाउन हलुका हुन्छ ।

**अम्लिकाया रसस्तृष्णाकृमिदाहश्रमापहः॥**

अमिलीको रसले तिर्खा, पेटका कीरा, डाह र थकाई नाश गर्दछ ।

**(छ) राज निघण्टु :**

**चिञ्चा तु चुक्रिका चुक्रा साम्लिका शाकचुक्रिका ।**
**अम्ली सुतिन्तिडी चाम्ला चुक्रीका च नवाभिधा॥**
**चिञ्चाऽत्यम्ला भवेदामा पक्वा तु मधुराम्लिका । वातघ्नी पित्तदाहास्रकफदोषप्रकोपणी॥**
**अम्लिकायाः फलं त्वाममत्यम्लं लघु पित्तकृत् । पक्वं तु मधुराम्लं स्याद्भेदि विष्टम्भवातजित्॥**
**पक्वचिञ्चाफलरसो मधुराम्लो रुचिप्रदः । शोफपाककरो लेपाद्व्रणदोषविनाशनः॥**
**चिञ्चापत्रञ्च शोफघ्नं रक्तदोषव्यथापहम् । तस्याः शुष्कत्वचाक्षारं शूलमन्दाग्निनाशनम्॥**


चिञ्चा (तस्बिर श्रोत : पेयर डी अमरकोश)

(१) चिञ्चा, (२) चुक्रिका, (३) चुक्रा, (४) अम्लिका, (५) शाकचुक्रिका, (६) अम्ली, (७) तिन्तिडी, (८) अम्ला र (९) चुक्री(का) : यी नौ नाम अमिलीका संस्कृत पर्यायवाची नामहरू हुन् । काँचो अमिली अति नै अमिलो हुन्छ तर पाकेपछि अमलो र गुलियो हुन्छ । अमिलीले वातविकार नाश गर्दछ तर पित्तविकार, डाह, रक्तविकार र कफविकार बढाउँदछ । अमिलीको काँचो फल अति अमिलो, पचाउन सहज र पित्तविकार गर्ने गुणको हुन्छ । पाकेको अमिली गुलियो र अमिलो हुन्छ । यो भेदनी हुन्छ र यसले विष्टम्भ र वातविकारलाई जित्दछ । पाकेको अमिलीको रस अमिलो र गुलियो हुन्छ । यसले रुचि जगाउँदछ र सुजनलाई पकाउँदछ । यो रस दल्नाले घाउखटिराको विकार नाश हुन्छ । अमिलीको पातले सुजन तथा रक्तविकारजन्य पीडा नाश गर्दछ । यसको सुकेको बोक्राको क्षारले शूल र कमजोर पाचनशक्तिलाई नाश गर्दछ ।

**अम्लसारस्तु शाकाम्लं चुक्राम्लं चाम्लचुक्रिका । चिञ्चाम्लमम्लचूडश्च चिञ्चारसोऽपि सप्तधा॥**
**अम्लसारस्त्वतीवाम्लो वातघ्न कफदाहकृत् । साम्येन शर्करामिश्रो दाहपित्तकफार्तिनुत्॥**

(१) अम्लसार, (२) शाकाम्ल, (३) चुक्राम्ल, (४) अम्लचुक्रिका, (५) चिञ्चाम्ल, (६) अम्लचूड र (७) चिञ्चारस : यी सात नाम अमिलीको रसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रस अति नै अमिलो, वातविकार नाशक तथा कफविकार र डाहकारक हुन्छ । बराबर मात्रामा सखर वा चिनी मिसाएपछि यसले डाह, पित्तविकार कफविकार नाश गर्दछ ।

**यच्च चिञ्चाभवं तैलं कटु पाके विलेखनम् । कफवातहरं रुच्यं कषायं नातिशीतलम्॥**

आमिलाको तेल पिरो र पचेपछि लेखनो हुन्छ । यसले कफविकार र वातविकार नाश गर्दछ । यो रुचिप्रद, टर्रो र थोरै शीतवीर्यको हुन्छ ।

**(ज) राजवल्लभ निघण्टु :**

**अम्लिकाया: फलं बालं वातघ्नं कफपित्तकृत्॥ तत्पक्वं दीपनं रुच्यमत्युष्णं कफवातजित्॥**

काँचो अमिलीको फल (चिचिलो) वातविकार नाशक तथा कफविकार र पित्तविकार गर्ने गुणको हुन्छ । पाकेको अमिलीको फल दीपनी, रीचप्रद, अति उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ ।

**चुक्रकं दुर्जरं भेदी वातजित्पित्तलं गुरु॥**

अमिलीको साग ढिलो पच्ने, भेदनी, वातविकारलाई जित्ने, पित्तविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

**(ज) शालिग्राम निघण्टु :**

**अम्लिका चुक्रिकाम्ली च चुक्रा दन्तशठापि च ।**
**अम्ला च चिञ्चका चिञ्चा तिन्तिडीका च तित्तिडी॥**



अम्लिका, चुक्रिका, आम्ली, चुक्रा, दन्तशठा, अम्ला, चिञ्चका, चिञ्चा, तिन्तिडीका र तित्तिडी : यी अमिलीका नाम हुन् ।

**अम्लिकाम्ला गुरुर्वातहरी पित्तकफास्रकृत् ।**
**पक्का तु दीपनी रूक्षा सरोष्णा कफवातनुत्॥**

काँचो अमिली पचाउन कठिन, वातविकार नाशक तथा पित्तविकार, कफविकार र रक्तविकार गर्ने गुणको हुन्छ । पाकेको अमिली दीपनी, रुखो, मलमूत्रलाई तलतिर सार्ने, उष्णवीर्यको तथा कफविकार वातविकार नाशगर्ने गुणको हुन्छ ।

**अम्लिकाया फलं बालं वातघ्नं कफपित्तकृत् ।**
**तत्पक्वं दीपनं रुच्यमत्युष्णं कफवातजित्॥ (रा.ब.नि.)**

काँचो वा कलिलो अमिली वातविकार नाशक तथा कफविकार र पित्तविकार गर्ने गुणको हुन्छ । पाकेको अमिली दीपनी, रुचिप्रद, अति उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ ।

**चिञ्चा वृक्षो गुरुश्चोष्णश्चाम्लः पित्तकफप्रदः । रक्तकोपनकारी च वातनाशकरो मत :॥**
**चिञ्चापुष्पन्तु तुवरं स्वाद्वम्लं च रुचिप्रदम् । विशदं चाग्निजनकं लघु वातकफापहम्॥**
**प्रमेहघ्नं समुद्दिष्टं पर्णं शोथहरं मतम् । रक्तदोषहरं चैव फलं चास्य तु कोमलम्॥**

**अत्यम्लं ग्राहकं चोष्णं रुच्यं चाग्निप्रदीपकम् । रक्तपित्तस्य पित्तस्य कफरक्तस्य कोपनम्॥
वातनाशकरं प्रोक्तं तत्पक्वं वातलं मतम् । कफपित्तकरं चैव तत्पक्वं मधुरं सरम्॥
अम्लं हृद्यं भेदकञ्च मलस्तम्भकरं मतम् । दीपनं रुचिदं चोष्णं रूक्षं वस्तिविशोधनम्॥
व्रणदोषं कफं वातं जन्तूंश्चैव विनाशयत् । शुष्कं चिञ्चाफलं हृद्यं लघु भ्रान्तिश्रमापहम्॥
तृषाहरं क्लमहरं कृमिनाशकरं मतम् ।**

अमिलीको वृक्ष पचाउन कठिन, उष्णवीर्यको, अमिलो तथा पित्तविकार कफविकार गर्ने गुणको हुन्छ । यो रक्तविकारलाई उत्तेजित पार्ने र वातविकार नाशक हुन्छ ।अमिलीको फूल टर्रो, गुलियो र अमिलो स्वादको हुन्छ । यो रुचिप्रद, आकर्षक, पाचनशक्ति वर्धक, पचाउन सहज तथा वातविकार, कफविकार र प्रमेह नाशगर्ने गुणको हुन्छ । अमिलीको पातमा सुजन र रक्तविकार नाशगर्ने गुण हुन्छ । अमिलीका कलिला फल अति अमिलो, कब्जियत गराउने, उष्णवीर्यको, रुचिप्रद र पाचनशक्ति बढाउने गुणको हुन्छ । यसले रक्तपित्त, पित्तविकार, कफविकार र रक्तविकारलाई उत्तेजित पार्ने गुणको हुन्छ । अमिलीको छिप्पिएको फल वातविकार नाशक हुन्छ । अमिलीको यस्तो फल कफविकार र वातविकार गर्ने खालको हुन्छ । यसको पाकेको फल गुलियो, मलमूत्रलाई तलतिर सार्ने, अमिलो, मुटुका लागि हितकर, भेदनी, दिसा रोक्ने, दीपनी, रुचिप्रद, उष्णवीर्यको, रुखो, तल्लोपेट वा मूत्राशय सफा गर्ने तथा खटिराका विकार, कफविकार, वातविकार र कीरा नाशगर्ने गुणको हुन्छ । सुकेको अमिलीको फल मुटुका लागि हितकर,, पचाउन सहज तथा भ्रम, थकाई, तिर्खा, मानसिक थकाई र कीरा नाशक हुन्छ ।


अम्लिका (तस्विर श्रोत : पेयर डी अमरकोश)

**चिञ्चा तु नूतना वातकफस्यकरिणी मता । सा वार्षिकी वातपित्तनाशिनी परिकीर्त्तिता॥**

नयाँ अमिलेले वातविकार र कफविकार गर्दछ । एक वर्ष पुरानो अमिलीले वातविकार र पित्तविकार नाश गर्दछ ।

**चिञ्चाक्षारश्चाग्निमान्द्यशूलनाशकरोमतः ।**

अमिलीको क्षारले कमजोर अग्नि र शूल नाश गर्दछ ।

**पक्वचिञ्चारसश्चाम्लो मधुरो रुचिकृन्मतः । व्रणनाशकरश्चैव लेपनाच्छोथपंक्तिहृत्॥**

पाकेको अमिलीको रस अमिलो, गुलियो, रुचिप्रद, खटिरा नाशक तथा दल्नाले सुजन एवं पंक्तिशूल नाशगर्ने गुणको हुन्छ ।


अमिली (तस्बिर श्रोत : आचार्य बालकृष्ण)

**चिञ्चासारं दाहकफकारकं चातिअम्लकम् । वातनाशकरं प्रोक्तं समानशर्करायुतम्॥**
**दाहं पित्तं कफं चैव नाशयेदिति कीर्त्तितम्॥ (नि.र.)**

अमिलीको सार डाहकारी, कफविकार गर्ने, अति अमिलो, वातविकार नाशक तथा समान मात्रामा चिनी मिसाएर खाए डाह, पित्तविकार र कफविकार नाशगर्ने गुणको हुन्छ भनिएको छ ।

**(झ) सोढल निघण्टु :**

**अम्लिकायां तु चुक्रा च चुक्रिका शुक्तिका तथा ।**
**अम्लिकाऽम्ला च शुक्ता च चिञ्चा तिन्तिडिका तथा॥**

अम्लिका, चुक्रा, चुक्रिका, शक्तिका, अम्ला, शुक्ता, चिञ्चा र तिन्तिडिका : यी अमिलीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## आंमिली-फुरौला (आंम्लिका वटका, A dish of Tamarind)

(क) **भावप्रकाश निघण्टु :**

**अम्लिकां स्वेदयित्वा तु जलेन सह मर्दयेत्॥ तन्नीरे कृतसंस्कारे वटकान्मज्जयेज्जनः ।**
**अम्लिकावटकास्ते तु रुच्या वह्निप्रदीपनाः॥ वटकस्य गुणैः पूर्वैरेतेऽपि च समन्विताः ।**

अमिलीलाई उमालेर पानीमा मोल्नू र रस निकाल्नू । अनि यसमा सर्सिउँ, हिङ, जीरा, सिधेनुन, सुठो, बेसार आदि मसला हाली अन्तमा मासका सुक्खा फुरौला डुबाउनू । जब फुरौला भिज्दछ तब खान तयार हुन्छ । यसलाई अमिली-फुरौला भनिन्छ । यो फुरौला रुचिकारक र पाचकाग्नि वर्धक हुन्छ । यसमा मासको सुक्खा फुरौलामा हुने गुण पनि समावेश भएको हुन्छ ।

## अम्लोंषत (ऑखाको रोगांवशेष)
## (An eye disease)

(क) **अष्टाङ्ग हृदय :**

**अन्नसारोऽम्लतां नीतः पित्तरक्तोल्बणैर्मलैः ॥ सिराभिर्नेत्रमारूढः करोति श्यावलोहितम् । सशोफदाहपाकाश्रु भृशं चाविलदर्शनम् ॥ अम्लोषितोऽयम् ...।**

अधिक पित्त एवं रक्त उत्तेजित भएका बखतमा वातविकार एवं पित्तविकारले गर्दा आहार-रस अमिलो हुन जान्छ । यस्तो अमिलो रस मसिना नसा हुँदै आँखामा पुग्दछ । तब यसले आँखा कालो-रातो बनाउँदछ । अनि त्यहाँ सुजन, डाह, पाक्ने कार्य र आँशु आइरहने कार्य हुन थाल्दछ । आँखाको दृष्टिक्षमता पनि मलिन हुन पुग्दछ । यो रोगलाई 'अम्लोषित' भनिन्छ ।

(ख) **भावप्रकाश संहिता :**

**श्यावं लोहितपर्यन्तं सर्वमक्षि प्रपच्यते । सदाहशोथं सास्रावमम्लाध्युषितमम्लतः ॥ (अम्लतः अम्लभोजनात् । तथा च सुश्रुतः-अम्लेन भुक्तेन इत्यादि ॥)**

अमिलो रस आदि खानाले आँखाको कुनो कालो, रातो, डाह हुने, सुन्निने र आँशु बहिरने खालको हुन्छ । यो रोगलाई 'अम्लाध्युषित' रोग भनिन्छ ।

# अयन
# (Ayana)
## The sun's passage, north and south of the equator.

**संहिता ग्रन्थ**

(क) वशिष्ठसंहिता, अर्कचाराध्याय : सूर्य मकरबाट ६ राशिसम्म हुँदा उत्तरायण तथा कर्कट राशिबाट ६ राशिसम्म हुँदा दक्षिणायण हुन्छ ।

(ख) नारदसंहिता, तेश्रो अध्याय : सूर्यले भोग्ने राशि अनुसार मकरदेखि मिथुनसम्मका ६ राशिको उत्तरायण देवताको दिन र कर्कटदेखि धनुसम्मका ६ राशिको दक्षिणायण देवताको रात हुन्छ । उत्तरायणमा क्रमैले शिशिर, वसन्त र ग्रीष्म तथा दक्षिणायणमा वर्षा, शरद र हेमन्त ऋतुहरु हुन्छन् ।

(ग) नारदसंहिता, एघारौं अध्याय : मकर संक्रान्तिबाट उत्तरायण र कर्कट संक्रान्तिबाट दक्षिणायण शुरु हुन्छ । तुला र मेष संक्रान्तिका दिन विषुवत् काल (दिनरात) समान हुन्छ । उत्तरायणमा क्रमैले शिशिर, वसन्त र ग्रीष्म तथा दक्षिणायणमा वर्षा, शरद र हेमन्त ऋतुहरु हुन्छन् ।

**पुराण**

(क) विष्णुपुराण, प्रथम अंश, अध्याय ३ : त्यो (महिना) ६ वटाको १ अयन हुन्छ ।

(ख) विष्णुपुराण, दोश्रो अंश, अध्याय ८ : सूर्य कर्कट राशिमा उपस्थित हुने समयलाई दक्षिणायन र मकर राशिमा आउँदा उत्तरायण भनिन्छ । तीन ऋतुको एक अयन हुन्छ । माघ-फागुन, चैत्र-वैशाख र जेठ-असार : यी ६ महिना उत्तरायण हुन्छ । साउन-भदौ, असौज-कार्तिक र मंसिर-पुस : यी ६ महिना दक्षिणायण हुन्छ ।

(ग) नरसिंहपुराण, अध्याय २ : ६ महिनाको १-१ अयन दक्षिणायन र उत्तरायन हुन्छन् ।



(घ) कूर्मपुराण, पूर्वविभाग, अध्याय ५ : छ महिना को १ अयन हुन्छ ।

(ङ) श्रीमद्भागवतमहापुराण, तेश्रो स्कन्ध, अध्याय ११ : छ महिनाको एक अयन हुन्छ । दक्षिण र उत्तर गरी दुई वटा अयन हुन्छन् ।

(च) बृहन्नारदीयपुराण, पूर्वभाग, प्रथमपाद, अध्याय ५ : तीन ऋतुको एक अयन हुन्छ ।

(छ) ब्रह्मवैवर्तपुराण, श्रीकृष्णजन्मखण्ड, अध्याय ९६ : १ वर्षमा उत्तर र दक्षिण गरी २ अयन हुन्छन् । माघ आदि ६ महिनालाई उत्तरायण र श्रावण आदि ६ महिनालाई दक्षिणायण भनिन्छ । माघदेखि आषाढसम्म क्रमैले दिन बढ्दछ । श्रावणदेखि पौषसम्म क्रमैले रात बढ्दछ ।

(ज) मार्कण्डेयपुराण, अध्याय ४६ : ६ महिनाको १ अयन हुन्छ ।

(झ) वायुपुराण, अध्याय ५० : ३ ऋतुको १ अयन हुन्छ ।

(ञ) भविष्यमहापुराण, ब्रह्मपर्व, अध्याय २ : ३-३ ऋतुको १ अयन हुन्छ ।

(ट) स्कन्द महापुराण, नागरखण्ड, अध्याय २७२ वा २२७ : ३ ऋतुको १ अयन हुन्छ ।

(ठ) देवीभागवत्, नवौं स्कन्ध, अध्याय ८ : दुई अयन हुन्छन् ।

(ड) शिवमहापुराण, वायवीयसंहिता, पूर्वभाग, अध्याय ८ : ६ महिनाको १ अयन हुन्छ ।

(ढ) विष्णुधर्मोत्तरपुराण, प्रथमखण्ड, अध्याय ७३ : ३ ऋतुको १ अयन हुन्छ । बराबर अवधिका २ अयन हुन्छन् ।

(ण) पद्मपुराण, सृष्टिखण्ड, अध्याय ३ : ६ महिनाको १ अयन हुन्छ ।

(त) ब्रह्मवैवर्तपुराण, प्रकृतिखण्ड, अध्याय ७ : २ अयन हुन्छन् ।

आयुर्वेद ग्रन्थ :

(क) **राज निघण्टु :** तीन तीन वटा ऋतुको क्रमशः उत्तरायण र दक्षिणायन गरी दुई वटा अयनहरू हुन्छन् । माघेसङ्क्रान्तिका दिनदेखि सूर्य उत्तरायणमा प्रवेश गर्दछन् । साउने सङ्क्रान्तिदेखिको सूर्यको गतिलाई दक्षिणायन भनिन्छ ।

(ख) **हारीत संहिता :**

**प्रकोपं शमनं ज्ञात्वा अयने द्वे स्मृते बुधैः ॥२०॥ दक्षिणायनमेकं स्यात् द्वितीयं चोत्तरायणम् ।**

वर्षा, शरद्, हेमन्त, शिशिर, वसन्त र ग्रीष्म एकपछि अर्को गरेर आउने क्रमैले छ ऋतुहरू हुन् भनिएको छ । यी ऋतुका बारेमा बेग्लाबेग्लै बताउनेछु । सूर्यको गतिका कारण प्रकोप हुने र त्यसलाई शान्त पार्ने कुरा जानी पण्डितहरुले दुई अयन बताएका छन् । एउटा दक्षिणायन र अर्को उत्तरायण हुन्छ ।

**वर्षा शरच्च हेमन्तो दक्षिणायनमध्यगाः ॥ शिशिरश्च वसन्तश्च ग्रीष्मः स्यादुत्तरायणे ।**

वर्षा, शरद् र हेमन्त : यी तीन ऋतु दक्षिणायनमा हुन्छन् । शिशिर, वसन्त र ग्रीष्म : यी तीन ऋतु उत्तरायणमा हुन्छन् ।

**याम्ये गतिर्यदा भानोस्तदा चान्द्रगुणा मही ॥ वारि शीतलसम्भूतं शीतं तत्र प्रजायते ।**
**बलिनो मधुरास्तिक्ताः कषायास्तु विशेषतः ॥ जीवानां सात्म्यमतुलमोषधीनां च वीर्यता । आर्द्रत्वं**
**भूधराणाञ्च दिशश्चाप्यतिशीतलाः ॥ सक्लेदा पृथिवी सर्वा तस्मादार्द्रा सफेनिला ।**
**कथं चिकित्सयेत् पित्तं कोपं याति विलीयते ॥ तस्मादनुविपर्यासादुपचारेण शाम्यति ।**



जबको सूर्यको गति दक्षिणतिर हुन्छ, तब पृथ्वी चन्द्रगुणी हुन्छे । यसबेला पानी चिसो हुन्छ, शीत पर्दछ र तितो र टर्रो रस विशेषतः बलियो हुन जान्छ । यस्तै, अनाज र जीवको अवस्था अति राम्रो हुन्छ, पाखापर्वत पनी ओसिला हुन्छन् र दिशाहरू पनि शीतल हुने गर्दछन् । पृथ्वीभर दुःखी भाव हुँदैन, ओसिलो र फिँजले युक्त पृथ्वी हुन जान्छ । यस अवस्थामा कहिले पित्त बढ्दछ त फेरी आफैं उल्टो चिकित्सा (रोग विपरित व्यवहार) ले गर्दा यो शान्त हुने गर्दछ ।

**यदोदीच्यां गतिर्भानोस्तदा सूर्य्यो जलाधिपः ॥**
**तस्मादुष्णगुणास्तीव्राः सम्भवन्ति विदाहिनः । खरसूर्यांशुजालैस्तु शुष्यते वनकानन् ॥**
**संशुष्का मेदिनी सर्वादिशः पानादिनोरसाः । बलिनोऽम्लकटुक्षाराः सम्भवन्ति विदाहिनः ॥**
**तस्मात्संकुप्यते पित्तं रक्तेन सह मूर्च्छितम् । संशुष्क ओषधिरसो गोजातीनां पयांसि च ॥**
**अल्पं बलं च जन्तूनां कथञ्चित्कफसम्भवः । दृश्यते च वसन्ते च स्वयमेव शमं व्रजेत् ॥**
**एवं ज्ञात्वा सुधीः सम्यक्कुर्य्यात्सर्वप्रतिक्रियाम् ॥**

जब सूर्यको गति उत्तरतिर हुन्छ तब जलका स्वामी सूर्य हुन्छन् । यसले गर्दा गर्मी गर्ने, तिब्र र पोल्ने गुणका पदार्थहरु यसबेला उत्पन्न हुन्छन् । यसबेला सारा पृथ्वी सुक्दछ, सबै दिशा जलहीन हुन पुग्दछन् । पिरो, अमिलो, नुनिलो जस्ता पोल्ने खालका रस बलिया हुन्छन् । यी रसले गर्दा रगतसँग

मिसिएर बसेको पित्त बिग्रन थाल्दछ अनि औषधी आदिका रस र गाई आदि जनावरको दूध पनि सुक्दछ । यसबेला जीव कम बलियो हुन्छ, यदाकदा कफ पनि उब्जन्छ (खोकी समेत लाग्दछ) र यो वसन्त ऋतुमा देखिन्छ र आफैं निको हुन्छ । यी कुरा राम्ररी जानी वैद्यले सबै रोगको उपचार गर्नु पर्दछ ।

**शब्दकोश :**

(क) अमरकोश, प्रथम काण्ड : तीन ऋतुको १ अयन हुन्छ । सूर्यको उत्तरतिरको गतिलाई उत्तरायण र दक्षिणतिरको गतिलाई दक्षिणायन भनिन्छ । वर्षाऋतुदेखिका तीन ऋतुसम्म दक्षिणायन र शिशिरदेखिका तीन ऋतुसम्म उत्तरायण हुन्छ ।

**दक्षिणायण र उत्तरायणमा गर्न हुने नहुने काम :**

(क) नारदसंहिता, अध्याय ३ : गृह प्रवेश, विवाह, प्रतिष्ठा, मौञ्जीबन्धन, यज्ञ आदि मङ्गल कार्य उत्तरायणमा नै गर्नु पर्दछ । दक्षिणायणमा अशुभकर्म तथा मास प्रधान कर्म गर्नु पर्दछ ।

## अयोग्य अनाज
## (Unfit grains)

**(क) अष्टाङ्ग हृदय :**

**हिमानलोष्णदुर्वातव्याललालादिदूषितम् ॥ जन्तुजुष्टं जले मग्नमभूमिजमनार्तवम् । अन्यधान्ययुतं हीनवीर्यं जीर्णतयाऽति च॥ धान्यं त्यजेत्...।**

हिउँ पर्नाले, असिना पर्नाले, चर्को घाम लाग्नाले, आगोले पोल्नाले, प्रदूषित हावाको स्पर्शले, सर्प आदि विषालु जीवको र्‍याल पर्नाले, कीरा पर्नाले, पानीमा डुब्नाले, आफ्नो प्रतिकूल जमिनमा उत्पन्न हुनाले, विपरीत ऋतुमा उत्पन्न हुनाले, विपरीत गुण भएका अनाजसँग मिसाउनाले र शक्तिहीन हुनाले वा धेरै बासी वा पुरानो हुनाले अनाज गुणहीन हुन पुग्दछ । यस्तो अनाज नखानू ।

**(ख) आयुर्वेद महोदधि :**

**पुनरुष्णीकृतं सर्वं सर्वं धान्यं विरूढजम् ।...नाद्यात्...।**

चिसो भएपछि फेरी तताइएका टुसा उम्रिएका सबै खालका अनाज खान हुँदैन ।

**(ग) मदनपाल निघण्टु :** 

**अपर्याप्तं व्याधिहतमनार्तवमभूमिजम् । नवं जन्त्वादिभिर्जुष्टं न धान्यं गुणवन्मतम्॥**

शक्तिहीन, रोगले नष्ट, बेमौसमको, खराब जमिनमा उम्रेको, नयाँ र कीरा आदि परेको अनाज वास्तवमा गुनिलो हुँदैन ।

## जङ्गली कुसुम (अरण्यकुसुम्भ)
Wild-Safflower

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) अरण्यकुसुम्भ, अग्निसम्भव : जङ्गली कुसुम । (२) कौसुम्भ : वनकुसुम ।
(ख) नेपाली बृहत् शब्दकोश (वनकुसुम) : जङ्गलमा फुल्ने एक जातको कुसुम फूल; बनैयाँ कुसुम ।
(ग) डा.साङ्ग्यधर : यसको वानस्पतिक नाम *Carthamus tinctorious* Linn. हो ।
(घ) मोनियर विलियम्स : कौसुम्भको अंग्रेजी नाम Wild-Safflower हो ।
(ङ) वनकुसुमको वानस्पतिक नाम *Carthamus oxyacantha* हो । यो Asteraceae परिवारमा पर्दछ ।



अरण्यकुसुम्भ, वन-कुसुम : Wild Safflower (Picture Source : Samir Takaochi)

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**ज्ञेयोऽरण्यकुसुम्भः स्यात् कौसुम्भश्चाग्निसम्भवः । कौसुम्भः कटुकः पाके श्लेष्महृद्दीपनश्च सः ॥**

अरण्यकुसुम्भ, कौसुम्भ र अग्निसम्भव : यी वनकुसुमका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचेपछि पिरो हुन्छ । यसले कफविकार नाश गर्दछ । यो दीपनी हुन्छ ।

# अरण्यार्द्रक (बन अदुवा)
# (Wild- Zingiber)

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश (बन अदुवा) : डाँठबाटै पात निस्कने, कालो कन्द हुने एक जातको अदुवा ।

(ख) डा.सतिश चन्द्र साङ्ग्चधर : बन अदुवालाई ल्याटिन भाषामा *Zingiber cassumunar* Roxb. भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अभिधान मञ्जरी :**

**कञ्चुकं कर्णशूलघ्नं कर्णभेषजमार्द्रकम् । आम्रार्द्रकं केबुकं च वनार्द्रकमुदाहृतम्॥**



बन अदुवा (तस्विर श्रोत : ईयनडटविकिपेडियाडटओआरजी)



कञ्चुक, कर्णशूलघ्न, कर्णभेषज, आर्द्रक, आम्रार्द्रक, केबुक र वनार्द्रक : यी बन-अदुवाका नाम हुन् ।

(ख) **राज निघण्टु :**

**पेऊर्वनार्द्रका प्रोक्ता वनजाऽरण्यजार्द्रका । पेऊस्तु कटुकाऽम्ला च रुचिकृद्बल्यदीपनी ॥**

पेऊ, वनार्द्रका, वनजा र अरण्यजार्द्रका : यी बन-अदुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अदुवा पिरो, अमिलो, रुचिकर, बलदायक र दीपनी हुन्छ ।

(ग) **राजवल्लभ निघण्टु :**

**महार्द्रं दीपनं ग्राहि रूक्षं वातकफापहम्॥**

बन-अदुवा दीपनी, ग्राहि, रुखो तथा वातविकार र कफविकार नाशगर्ने गुणको हुन्छ ।

# अरिमेद (गनाउने खयर)
White babool

**परिभाषा :**

(क) **कुलचन्द्र शर्मा :** अरिमेद र विट्खदिर गनाउने खयरका संस्कृत नामहरू हुन् ।

(ख) **के.यन.स्वामी :** अरिमेद, कालस्कन्ध, विट्खदिर भनेको गनाउने खयर हो ।

(ग) **डा. चुनेकर :** यसको ल्याटिन नाम *Acacia farnesiana* Wild र अंग्रेजी नाम The Cassie Flower हो ।

(घ) **पेयर डी अमरकोश :** यसको ल्याटिन नाम *Acacia farnesiana* (L.) Willd. हो ।

(ङ) **Indian Medicinal Plants : A Compendium of 500 Species, Volume 1 :** यो Mimosaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Acasia leucophloea* (Roxb.) Wild. हो । यसलाई अंग्रेजीमा White babool वा Distiller's acacia भनिन्छ । यसको संस्कृत नाम अरिमेद हो ।




Source : Indian Medicinal Plants : A Compendium of 500 Species, Volume 1

**प्राचीन ग्रन्थका वचन :**

**(क) अमरकोश :**

**अरिमेदो विट्खदिरे....।**

अरिमेद र विट्खदिर : यी गनाउने खयरका नाम हुन् ।

**(ख) कैयदेव निघण्टु :**

**इरिमेदः सर्वमेदोगन्धा स्कन्धोऽहिमेदकः । अरिमेदो विट्खदिरोऽरिमो मेदो रिपू रिसः ॥**
**रिमः कटुः कषायोष्णस्तीक्ष्णो हन्ति कफं कृमीन् । कण्डूरक्तग्रहान् वस्तिमुखदन्तगदानपि ॥**
**तत्फलं तिक्तमधुरं स्निग्धोष्णं कफवातनुत् ।**


विट्खदिरः | *Acacia farnesiana (L.) Willd. 1806 - Antillen Akazie - Scented Wattle, Arizona USA*
*[Bildquelle: Don A.W. Carlson / Wikimedia. -- GNU FDLicense]*

इरिमेद, सर्वमेद, गन्धा, स्कन्ध, अहिमेदक, अरिमेद, विट्खदिर, अरिम, मेद, रिपू र रिस : यी गनाउने खयरका पर्यायवाची नाम हुन् । यो पिरो, टर्रो, उष्णवीर्यको, तिक्खर तथा कफविकार, कीरा, लुतो, रक्तविकार, ग्रहदोष, मूत्राशयका रोग, मुखका रोग र दाँतका रोग नाशगर्ने गुणको हुन्छ । त्यसको फल तितो, गुलियो, चिल्लो, उक्ष्णवीर्यको तथा कफविकार र वातविकार नाशगर्ने गुणको हुन्छ ।

## (ग) धन्वन्तरि निघण्टु :

**इरिमेदोऽरिमेदश्च गोधास्कन्धोऽरिमेदकः । अहिमेदोऽहिमारश्च पूतिमेदोऽहिमारकः ॥**
**मुखरोगहरः शीतो रक्तामस्तम्भकारकः ॥**

इरिमेद, अरिमेद, गोधास्कन्ध, अरिमेदक, अहिमेद, अहिमार, पूतिमेद र अहिमारक : यी गनाउने खयरका पर्यायवाची नाम हुन् । यो मुखका रोग नाशगर्ने, शीतवीर्यको तथा रगत र आमलाई रोक्ने गुणको हुन्छ ।


विट्खदिरः । *Acacia farnesiana (L.) Willd. 1806 - Antillen Akazie - Scented Wattle*
*[Bildquelle: USGS / Wikipedia. -- Public domain]*

## (घ) निघण्टुशेष :

**विट्खदिरे त्वरिमेदो गोधास्कन्धोऽरिमेदकः । अहिमारोऽरिमः पूत्यरिमेदो मुखशोधनः ॥**

विट्खदिर, अरिमेद, गोधास्कन्ध, अरिमेदक, अहिमार, अरिम, पूत्यरिमेद र मुखशोधन : यी गनाउने खयरका पर्यायवाची नाम हुन् ।

**विट्-विष्ठा तद्गन्धः खदिरः विट्खदिरः पूतिखदिराख्यः । अरिः-दुस्सहो मेदः-स्रावोऽस्य अरिमेदः । गोधेव स्कन्धोऽस्य गोधास्कन्धः । अरिमेद एव अरिमेदकः । अहीन् मारयति अहिमारः । अरिरिव मथ्नाति गन्धेन नक्रमिति अरिमः । पूतिश्चासौ अरिमेदश्च पूत्यरिमेदः । मुखस्य शोधनो मुखशोधनः । एतस्य लोके "अरञ्चु" इति प्रसिद्धिः ।**

**(ङ) भावप्रकाश निघण्टु :**

**इरिमेदो विट्खदिरः कालस्कन्धोऽरिमेदकः । इरिमेदः कषायोष्णो मुखदन्तगदास्रजित्॥**
**हन्ति कण्डूविषश्लेष्मकृमिकुष्ठविषव्रणान् ।**

इरिमेद, विट्खदिर, कालस्कन्ध र अरिमेदक : यी गनाउने खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र गर्मी गर्ने तथा मुखका रोग, दाँतका रोग र रक्तविकार नाशक हुन्छ । यसले लुतो, विषविकार, कफविकार, कीरा, कुष्ठ, विषविकार र घाउखटिरा निको पार्दछ ।

**(च) मदनपाल निघण्टु :**

**अरिमेदो विट्खदिरो गोधास्कन्धोऽरिमेदकः । अरिमेदः कषायोष्णो मुखदन्तगदास्रनुत्॥**
**तथा कण्डूविषश्लेष्मक्रिमिकुष्ठव्रणाञ्जयेत्॥**

अरिमेद, विट्खदिर, गोधास्कन्ध र अरिमेदक : यी गनाउने खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, उष्णवीर्यको तथा मुख, दाँत तथा रगत सम्बन्धी रोग नाशगर्ने गुणको हुन्छ । यसले लुतो, विषविकार, कफविकार, कीरा, कुष्ठ र घाउखटिरा माथि विजय हासिल गर्दछ ।

**(छ) राज निघण्टु :** 

**विट्खदिरः काम्भोजी कालस्कन्धश्च गोरटो मरुजः ।**
**पत्रतरुर्बहुसारः संसारः खादिरो ग्रहैर्महासारः ॥**
**विट्खदिरः कटुरुष्णस्तिक्तो रक्तव्रणोत्थदोषहरः । कण्डूतिविषविसर्पज्वरकुष्ठोन्मादभूतघ्नः ॥**

(१) विट्खदिर, (२) काम्भोजी, (३) कालस्कन्ध, (४) गोरट, (५) मरुज, (६) पत्रतरु, (७) बहुसार, (८) संसार र (९) महासार : यी नौ नाम गनाउने खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो खयर पिरो, उष्णवीर्यको, तीतो तथा रक्तविकार र घाउखटिराजन्य विकार नाशक हुन्छ । यसले चिलाउने रोग, विषविकार, विसर्प, ज्वर, कुष्ठ, पागलपन र भूतबाधा नाश गर्दछ ।

डा.सतिश चन्द्र साङ्ख्यधर : नरहरीले बिट्खदिरको बारेमा वर्णन गरि सकेका छन् । इरिमेदका धेरै कुरा सोही बिट्खदिरसँग मिल्दछन् । यहाँ बेग्लै उल्लेख गर्नुको कारण जान्न सकिएन ।

**इरिमेदोऽरिमेदश्च गोधास्कन्धोऽरिमेदकः । अहिमेदोऽहिमारश्च पूतिमेदोऽहिमेदकः ॥**
**अरिमेदः कषायोष्णस्तिक्तो भूतविनाशकः । शोफातिसारकासघ्नो विषवीसर्पनाशनः ॥**

इरिमेद, अरिमेद, गोधास्कन्ध, अरिमेदक, अहिमेद, अहिमार, पूतिमेद र अहिमेदक : यी अरिमेदका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, उष्णवीर्यको, तीतो र भूतबाधा नाशक हुन्छ । यसले सुजन, अतिसार, खोकी, विषविकार र वीसर्प नाश गर्दछ ।

## (ज) शालिग्राम निघण्टु :

**इरिमेदोविट्खदिरः कालस्कन्धोऽरिमेदकः ।**

इरिमेद, विट्खदिर, कालस्कन्ध र अरिमेदक : यी गनाउने खयरका पर्यायवाची नाम हुन् ।




**अरिमेदस्य निर्य्यासो मधुरस्तु बलप्रदः ।**
**धातुवृद्धिकरश्चैव मुनिभिः सम्प्रभाषितः ॥ (निघण्टु रत्नाकर)**

गनाउने खयरको चोप गुलियो, बलदायक र धातु बढाउने गुणको हुन्छ भनेर मुनिजनले बताएका छन् ।

## अरिष्ट (अर्कविशेष)
## A medicated spirituous liquid

(क) **अभिधान मञ्जरी :**

**यथायोगेन यः क्वाथः सगुलः संस्थितो घटे । सन्धाय भेषजं सम्यक् सोऽरिष्टः कथ्यते बुधैः ॥**

मिसाउनु पर्ने ओखती विधिपूर्वक मिसाई काँढा पकाएर सखर मिसाई घैँटोमा राखी अमिलो बनाइएको मद्यलाई विद्वानहरूले अरिष्ट भनी बताएका छन् ।

(ख) **अर्कप्रकाश :**

**पक्वौषधाम्बुसंसिद्धो योऽर्कः स स्यादरिष्टकम् । अरिष्टं लघुपाकेन सर्वतो हि गुणाधिकम् ॥**

औषधीलाई पानीमा पकाई त्यसबाट निकालिने अर्कलाई "अरिष्ट" भनिन्छ । यो अर्क सजिलै र छिट्टै पच्दछ तथा सबैभन्दा बढी गुनिलो हुन्छ ।

(ग) **अष्टाङ्ग हृदय :**

**यथाद्रव्यगुणोऽरिष्टः सर्वमद्यगुणाधिकः ॥**

**ग्रहणीपाण्डुकुष्ठार्शःशोफशोषोदरज्वरान् । हन्ति गुल्मकृमिप्लीह्नः कषायकटुवातलः ॥**

अरिष्ट जे पदार्थ हालेर बनाइएको हुन्छ त्यही पदार्थको गुण अरिष्टमा हुन्छ । मद्यमध्ये अरिष्ट सबैभन्दा बढी गुणकारी मद्य हो । दिसापिसाब बन्द हुँदा, कमलपित्त आदि पित्तसम्बन्धी रोगमा, कुष्ठरोगमा, छारेरोगमा, जोर्नीहरु दुख्ने रोगमा, सुकेनास-क्षयरोग आदि शरीर क्षय हुने रोगमा, पेटसम्बन्धी रोगमा, जरो आउँदा, गानुगोलामा, पेटमा कीरा पर्दा र फियोमा समस्या हुँदा अरिष्ट औषधीमा प्रयोग हुन्छ । अरिष्टको स्वाद तीतो-टर्रो हुन्छ र यसले शरीरभित्र वायु बढाउँदछ ।

(घ) **आयुर्वेद महोदधि :**

**यथाद्रव्यगुणोऽरिष्टः सर्वमद्यगुणाधिकः । ग्रहणीपाण्डुकुष्ठार्शःशोषशोफोदरज्वरान् ॥**
**हन्ति गुल्मकृमिप्लीह कषायं कटु वातलम् ॥**

सबै खालका अरिष्टमा जे द्रव्यले त्यो बनाइएको हो त्यसैका गुण हुन्छन् । यसले ग्रहणी, पाण्डुरोग, कुष्ठरोग, अलकाई, सुकेनाश, सुन्निने रोग, पेटका रोग र जरो निको पार्दछ । साथै, गुल्म, किरा (पेटका) र फियोको रोग पनि हटाउँदछ । अरिष्ट टर्रो र पिरो हुन्छ तथा यसले वातविकार बढाउँदछ ।

(ङ) **कैयदेव निघण्टु :**

**क्वथितौषधिमद्यं यत् सोऽरिष्टः क्वथितद्रवः । यथाद्रव्यगुणोऽरिष्टः सर्वमद्यगुणाधिकः ॥**
**दीपनो पाचनो रुच्यः कषायः कटुको लघुः । पित्ताविरोधको हृद्यो वातश्लेष्महरः सरः ॥**
**निहन्ति कुष्ठगुल्मार्शःशोषशोफोदरज्वरान् । ग्रहणीपाण्डुताप्लीहशूलानाहक्लमकृमीन् ॥**
**मद्यं यथोल्वणं विद्यान्मद्यस्याकरसङ्करात् ।**

औषधीको काँढा पकाएर तयार पारिने मद्यलाई अरिष्ट भनिन्छ । काँढा पकाउँदा हालिने ओखती पदार्थमा जे गुण हुन्छ त्यसको अरिष्टमा पनि त्यही गुण हुन्छ । अरिष्ट मद्यहरूमा सबभन्दा बढी गुनिलो हुन्छ । यो दीपनी, पाचनी, रुचिप्रद, टर्रो, पिरो, पचाउन हलुका, शरीरमा रहेको पित्तसँग वैरभाव नराख्ने, मुटुका लागि हितकर, वातविकार नाशक, कफविकार नाशक, मलमूत्रलाई तलतिर सार्ने तथा कुष्ठ, गुल्म, अल्काई, सुकेनास वा क्षयरोग, सुजन, पेटका रोग, जरो, ग्रहणी, पाण्डु, फियोका रोग, शूल, आनाह, परिश्रम बिनाको (मानसिक) थकाई र कीरा नाशगर्ने गुणको हुन्छ । मद्यमा जति बढी र जस्ता (ओखतीका प्रकार) मिश्रण हुन्छ त्यति बढी र त्यस्तै यो गुनिलो हुन्छ भनी जान्नू ।

(च) **चरक संहिता :**

**शोफार्शो-ग्रहणीदोष-पाण्डुरोगारुचिज्वरान् । हन्त्यरिष्टः कफकृतान् रोगान् रोचनदीपनः ॥**

अरिष्टले सुजन, अल्काई, ग्रहणीदोष, पाण्डुरोग, अरुचि, जरो र कफजन्य रोगहरू नाश गर्दछ । यो रुचिप्रद र पाचन-अग्नि वर्धक हुन्छ ।

(छ) **द्रव्यगुण सङ्ग्रह :**

**अरिष्टो द्रव्यसंयोगसंस्कारादधिको गुणैः ॥ बहुदोषहरश्चैव रोगाणां शमनश्च सः ।**
**दीपनः कफवातघ्नः सरः पित्ताविरोधनः ॥ शूलाध्मानोदरप्लीहज्वराजीर्णार्शसां हितः ।**

(हर्रो, चितू आदि जस्ता) द्रव्य हाली राम्ररी पकाईतुल्याई गरिने हुँदा अरिष्टमा बढी गुण हुन्छ । यसले अनेक रोग नाश गर्दछ वा शान्त पार्दछ । यो दीपनी, काफविकार वातविकार नाशक, मलमूत्रलाई तलतिर सार्ने, पित्तको अविरोधी तथा शूल, आध्मान, पेटका रोग, फियोका रोग, जरो, अजीर्ण र अल्काईमा हितकर हुन्छ ।

(ज) **धन्वन्तरि निघण्टु, माधवद्रव्यगुण :**

**अरिष्टो द्रव्यसंयोगात्संस्कारादधिको गुणैः । बहुदोषहरश्चैव दोषाणां शमनश्च सः ॥**
**दीपनः कफवातघ्नः सरः पित्तविरोधनः । शूलाध्मानोदारप्लीहज्वराजीर्णार्शसां हितः ॥**
**पिप्पल्यादिकृतो गुल्मकफरोगहरः स्मृतः ।**

ओखतीहरूको सम्मिश्रण र यसलाई बनाउने विधिले गर्दा अरिष्टमा बढी गुण हुन्छ । यसले धेरै किसिमका दोषहरू नाश गर्दछ अथवा शान्त पार्दछ । यो दीपनी, कफविकार र वातविकार नाशक, मलमूत्रलाई तलतिर सार्ने तथा पित्तको अविरोधी हुन्छ । यो शूल, आध्मान, पेटका रोग, फियोका रोग, जरो, अजीर्ण र अल्काईमा हितकारी हुन्छ । पिप्ला आदि हालेर बनाइएको अरिष्टले गुल्म र कफविकार नाश गर्दछ भनिएको छ ।

(झ) **भावप्रकाश निघण्टु :**

**पक्वौषधाम्बुसिद्धं यन्मद्यं तत्स्यादरिष्टकम् । अरिष्टं लघुपाकेन सर्वतश्च गुणाधिकम् ॥**
**अरिष्टस्य गुणा ज्ञेया बीजद्रव्यगुणैः समाः ।**

पकाइएको औषधी र पानीबाट निकालिने अर्कलाई 'अरिष्ट' भनिन्छ । अरिष्ट पचेपछि हलुका र सबैभन्दा बढी गुनिलो हुन्छ । अरिष्ट जे द्रव्यले बनाइन्छ त्यही द्रव्यको गुणले युक्त हुन्छ ।

(ञ) **भावप्रकाश संहिता :**

**पक्वौषधाम्बुसिद्धं यन्मद्यं तत्स्यादरिष्टकम् ॥**
**अरिष्टं मद्यमिति लोके । यथा द्राक्षारिष्टम् । दशमूलारिष्टम् । बब्बूलारिष्टमिति ।**
**अरिष्टं लघु पाकेन सर्वतश्च गुणाधिम् । अरिष्टस्य गुणा ज्ञेया बीजद्रव्यगुणैः समाः ॥**



पकाएका ओखती र पानी अथवा काँढा आदि हालेर जुन् मद्य बनाइन्छ त्यसलाई अरिऋ भनिन्छ । (लोकमा अरिष्टलाई पनि मद्य नै भन्ने गरिन्छ । जस्तो-द्राक्षारिष्ट, दशमूलारिष्ट, बब्बूलारिष्ट । अरिष्ट पचाउन सहज र सबभन्दा बढी गुनिलो हुन्छ । जे पदार्थ हाली अरिष्ट बनाइन्छ त्यो अरिष्टमा त्यही पदार्थको जस्तै गुण हुन्छ ।

**अरिष्टः क्वाथसाध्यः स्यात्तयोर्मानं पलोन्मितम् ॥**

काँढा पकाएर जुन् मद्य बनाइन्छ त्यसलाई अरिष्ट भनिन्छ । दुवै (आसव र अरिष्ट) को मात्रा १ पल हो ।

**अनुक्तमानारिष्टेषु द्रवाद् द्रोणं गुडात्तुलाम् । क्षौद्रं क्षिपेद् गुडादर्द्ध प्रक्षेपं दशमांशकम् ॥**
**दशमांशकम् गुडस्यैव दशमांशकम् ।**

जहाँ अरिष्ट बनाउँदा के कुरा कति हाल्ने भनी तोकिएको छैन त्यहाँ पानी १०२४ तोला, सखर ४०० तोला, मह २०० तोला र ओखती ४० तोला हाल्नू ।

(ट) **मदनपाल निघण्टु :**

**अरिष्टं बृंहणं दाहि दुर्गन्धि विशदं गुरु ॥**

अरिष्ट नामक मदिरा पौष्टिक, डाह गराउने, गनाउने, मनमोहक र पचाउन कठिन हुने गुणको हुन्छ ।

(ठ) **शार्ङ्गधर संहिता :**

**द्रवेषु चिरकालस्थं द्रव्यं यत् सन्धितं भवेत् । आसावारिष्टभेदैस्तु प्रोच्यते भेषजोचितम्॥**

कुनै भाँडामा हालिएको जल आदि तरल पदार्थमा ओखतीलाई भिजाएर त्यो भाँडाको मुख बन्द गरी एक महिना वा पन्ध्र दिनसम्म रहन दिनाले उत्तम ओखती तयार हुन्छ । यस्तो ओखती आसव, अरिष्ट आदि विभिन्न प्रकारको हुन्छ । यसका बारेमा बताइन्छ ।

**अरिष्टः क्वाथसाध्यः स्यात्तयोर्मानं प(ज)लोन्मितम्॥**

काँढापानी पकाएर त्यसमा पूर्वोक्त विधिले तयार पारिने ओखतीलाई "अरिष्ट" भनिन्छ । मात्रा नतोकिएको अवस्थामा यसको सेवन गर्ने मात्रा एक पल (चालीस ग्राम) हुन्छ ।

**अनुक्तमानारिष्टेषु द्रवद्रोणे तुलां गुडम् । क्षौद्रं क्षिपेद्गुडादर्धं प्रक्षेपं दशमांशिकम्॥**

जुन अरिष्ट बनाउँदा पानी कति हाल्ने भनी बताइएको छैन, त्यहाँ जल आदि तरल पदार्थ एक द्रोण (१०.२४ लिटर), मिस्री वा सक्खर एक तुला (४.८ किलो) र मिस्रीको आधा मह हाल्नु पर्दछ । ओखतीको धुलो हाल्नुपर्दा मिस्री जति हालिएको हो त्यसको दश भागको एक भाग हाल्नु पर्दछ ।

(ड) **सुश्रुत संहिता :**

**अरिष्टो द्रव्यसंयोगसंस्कारादधिको गुणैः । बहुदोषहरश्चैव दोषाणां शमनश्च सः॥**
**दीपनः कफवातघ्नः सरः पित्ताविरोधनः । शूलाध्मानोदरप्लीहज्वराजीर्णार्शसां हितः॥**
**पिप्पल्यादिकृतो गुल्मकफरोगहरः स्मृतः ।**

पदार्थ (ओखती) को मिश्रण हुने कारणले गर्दा तथा अनेक थरी संस्कार हुनाले गर्दा अरिष्ट बढी गुनिलो हुन्छ । यसले अनेक थरी रोग नाश गर्दछ अथवा शान्त पार्दछ । यो दीपनी, कफविकार नाशक, वातविकार नाशक, मलमूत्रलाई तलतिर सार्ने, पित्तको अविरोधी तथा शूल, आध्मान, पेटका रोग, फियोका रोग, जरो, अजीर्ण र अल्काईमा हितकर हुन्छ । पिप्पल्यादि गण हालेर बनाइएको अरिष्टले गुल्म र कफविकार नाश गर्दछ ।

# अरिष्टक (रिट्ठो)
# Soap nut

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा र के.यन.स्वामीले उल्लेखित संस्कृत पर्यायवाची नामको नेपाली नाम रिट्ठो भनी उल्लेख गर्नुभएको छ ।

(ग) नेपाली बृहत् शब्दकोश (रिट्ठो) : लामालामा पात हुने, सेता फूल फुल्ने, भित्र कालो बियाँ हुने, फलको बोक्रा लुगा धुने काममा प्रयोग गरिने एक जातको रूख वा त्यसैको खैरो गोलो फल ।

(घ) आचार्य बालकृष्ण : रिट्ठोका *Sapindus mukorossi* र *Sapindus trifoliatus* गरी दुई प्रजाति हुन्छन् । पहिलोको बोट लगभग १५ मी. अग्लो, सेता वा बैजनी रङ्का फूल र पाकेपछि काला देखिने फल हुन्छन् । दोश्रोको आकार अण्डकोष जस्तो र अलग्याउँदा मुटु जस्तो चिह्न देखिने, पाकेपछि हल्का रातो र खरानी रङ्का देखिने जोल्टिएका फल हुन्छन् ।



फलिल: I *Sapindus trifoliatus* L. 1753 - Soap tree - Round soap nut tree [Image source: Hortus malabaricus IV. Fig. 19, 1683]

(ङ) भावप्रकाश निघण्टुका टीकाकार डा. कृष्णचन्द्र चुनेकर : यसको अंग्रेजी नाम Soap nut Tree of North India र ल्याटिन नाम *Sapindus mukorossi* Gaertn. हो । यसका *S.trifoliatus* Linn. र *S.emarginatus Vahl.* गरी दुई प्रजाति हुन्छन् ।

(च) पेयर डी अमरकोश : यसलाई *Sapindus trifoliatus* L. (Round soap nut tree) वा *Sapindus emarginatus* Vahl भनिन्छ ।

(छ) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : यो Angiosperm समूह अन्तर्गत Sapindaceae परिवारमा पर्दछ । यसको ल्याटिन नाम *Sapindus mukorossi* Gaertn. हो ।

(ज) Journal of Plant Resources, Vol. 17, No. 1, Government of Nepal, 2019 : यसलाई अंग्रेजीमा Soap nut भनिन्छ ।

अरु लाभहानी त्यसबेला जानिएन, बालककालमा यसको गेडा ढुङ्गामा घोटेर एकले अर्कालाई पोलिदिने काम भने गरिन्थ्यो ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अग्निपुराण, अमरकोश :**

**...स्यादरिष्ट फेनिल समौ ।**

अरिष्ट र फेनिल : यी रिठ्ठोका नाम हुन् ।




Fig.: Sapindus emarginatus Vahl
[Image source: Wight: Illustrations I, Tab. 51, 1840]

**(ख) कैयदेव निघण्टु :**

**रक्षाबीजः कुम्भबीजः पीतफेनोऽथ फेनिलः । अरिष्टको गर्भपाती रक्तबीजार्थसाधनः ॥**
**रक्तबीजः कटुः पाके तीक्ष्णोष्णो लेखनो लघुः । दोषत्रयहरो गर्भपातनो ग्रहनाशनः ॥**


फेनिलः | Sapindus trifoliatus L. 1753 - soap tree - Round soap nut tree [Image source: dinesh_valke]

रक्षाबीज, कुम्भबीज, पीतफेन, फेनिल, अरिष्टक, गर्भपाती, रक्तबीज र अर्थसाधन : यी रिठ्ठोको नाम हुन् । यो पचेपछि पिरो, तिक्खर, उष्णवीर्यको, लेखनी, पचाउन सहज, त्रिदोष नाशक, गर्भपतन गराउने र ग्रहबाधा नाशगर्ने गुणको हुन्छ ।

**(ग) निघण्टुशेष :**

**अरिष्टे स्यात् कृष्णबीजो रक्षाबीजोऽर्थसाधनः । शुभनामा शीतफेनः फेनिलो गर्भपातनः ॥**



अरिष्ट, कृष्णबीज। रक्षाबीज, अर्थसाधन, शुभनामा, शीतफेन, फेनिल र गर्भपातन : यी रिठ्ठोका नाम हुन् ।

**(घ) भावप्रकाश निघण्टु, शालिग्राम निघण्टु :**

**अरिष्टकस्तु मङ्गल्यः कृष्णवर्णोऽर्थसाधनः । रक्तबीजः पीतफेनः फेनिलो गर्भपातनः ॥**
**अरिष्टकस्त्रिदोषघ्नो ग्रहजिद् गर्भपातनः ।**

अरिष्टक, मङ्गल्य, कृष्णवर्ण, अर्थसाधन, रक्तबीज, पीतफेन, फेनिल र गर्भपातन : यी रिठ्ठोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले त्रिदोष नाश गर्दछ, ग्रहदोष हटाउँदछ र गर्भपतन गराउँदछ ।

**(ङ) मदनपाल निघण्टु :**

**अरिष्टको गर्भपाती कुम्भवीर्यश्च फेनिलः । कृष्णबीजो रक्तबीजः पीतफेनोऽर्थसाधनः ॥**
**अरिष्टकस्त्रिदोषघ्न उष्णो गर्भग्रहापहः ॥**


अरिष्ट (रिठ्ठो), तस्विर श्रोत : वनएमजीडटकममा आचार्य बालकृष्णको लेख

अरिष्टक, गर्भपाती, कुम्भवीर्य, फेनिल, कृष्णबीज, रक्तबीज, पीतफेन र अर्थसाधन : यी रिठ्ठोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले त्रिदोष नाश गर्दछ । यो उष्णवीर्यको हुन्छ । यसले गर्भजन्य दोष र ग्रहदोष नाश गर्दछ ।

## (च) राज निघण्टु :

**रीठाकरञ्जंवन्यो गुच्छलो गुच्छपुष्पकः । रीठा गुच्छफलोऽरिष्टो मङ्गल्यः कुम्भबीजकः॥**
**प्रकीर्यः सोमवल्कश्च फेनिलो रुद्रसञ्ज्ञकः॥**
**रीठाकरञ्जस्तिक्तोष्णः कटुः स्निग्धश्च वातजित् । कफघ्नः कुष्ठकण्डूतिविषविस्फोटनाशनः॥**

(१) रीठाकरञ्जक, (२) गुच्छल, (३) गुच्छपुष्पक, (४) रीठा, (५) गुच्छफल, (६) अरिष्ट, (७) मङ्गल्य, (८) कुम्भबीजक, (९) प्रकीर्य, (१०) सोमवल्क र (११) फेनिल : यी एघार नाम रिठ्ठोका संस्कृत पर्यायवाची नामहरू हुन् । रिठ्ठो तीतो, उष्णवीर्यको, पिरो, चिल्लो र वातविकार नाशक हुन्छ । यसले कफविकार, कुष्ठ, चिलाउने रोग, विषविकार र विस्फोट रोग नाश गर्दछ ।


अरिष्ट (रिठ्ठो), तस्विर श्रोत : वनएमजीडटकममा आचार्य बालकृष्णको लेख

## (छ) शालिग्राम निघण्टु :

**अरिष्टकः कटुः पाके तीक्ष्णोष्णो लेखनो गुरुः । दोषत्रयहरोगर्भपातनो गर्भशान्तिकृत्॥**
**तज्जलं वामकं पानान्नस्याच्छीर्षरुजापहम् । अर्धशीर्षव्यथां हन्ति वमनाद्विषनाशनम्॥**

रिठ्ठो पचेपछि पिरो, तिक्खर, उष्णवीर्यको, लेखनी, पचाउन कठिन, त्रिदोष नाशक, गर्भपतन गराउने र गर्भलाई शान्तपार्ने गुणको हुन्छ । यसको पानी पिउनाले बान्ता हुन्छ र बान्ता भएपछि विषविकार नाश हुन्छ । यसको जलको नस लिनाले टाउकाका रोग र अधा दुख्नेरोग नाश हुन्छ । (यसको फिँजले कपडा धुने गरिन्छ) ।

## अरुंषिका (टाउकाको रोगविशेष)
## (Eczema of the face and Scalp)

(क) **अष्टाङ्ग हृदय :**

**कपाले क्लेदबहुलाः पित्तासृक्श्लेष्मजन्तुभिः ॥ कङ्गुसिद्धार्थकनिभाः पिटिकाः स्युररूंषिकाः ।**

टाउकामा पित्त, रगत, कफ र कीराको विकृतिले गर्दा कागुनु वा सर्सिउँ जस्ता साना-साना, धेरै, पसिना निकालिरहने वा दुख्ने खालका विमिरा आउने रोगलाई 'अरुंषिका' भनिन्छ ।

(ख) **सुश्रुत संहिता :**

**अरूंषि बहुवक्त्राणि बहुक्लेदीनि मूर्धनि । कफासृक्कृमिकोपेन नृणां विद्यादरुंषिकाम्॥**

कफविकार, रक्तविकार तथा कीराका कारण मानिसका टाउकामा आउने धेरै मुख भएको, रस बहिरहने खटिरालाई 'अरुंषिका' भनिन्छ ।

## अरुचि
## (Anorexia)

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश (अरुचि) : रुचि नहुने स्थिति वा परिस्थिति; अनिच्छा । रुचि नहुने रोग; अग्निमन्दता । रुचि नहुने वा रुचि नगराउने ।

(ख) विश्व हिन्दीकोश : नास्ति रुचिर्भोजनाभिलाषी यत्र । खान मन नलाग्नु ।

(ग) यसलाई अंग्रेजीमा Anorexia भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**...स्यादरुचिश्चाप्यरोचकः ॥**

अरुचि र अरोचक : यी रुचि नहुनुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

# अरुण कुष्ठरोग
# (A kind of Leprosy)

**(क) सुश्रुत संहिता :**

**तत्र वातेनारुणाभानि तनूनि विसर्पीणि तोदभेदस्वापयुक्तान्यरुणानि;... ।**

वातविकारका कारण केही रातो देखिने, सानो, फैलने, सियोले घोचे जसरी चसचस घोच्ने, फुट्ने र छालाको स्पर्शज्ञान नहुने खालको कुष्ठरोगलाई 'अरुण' भनिन्छ ।

# अर्क (आँक)
# (Mudar)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : अर्काह्व, वसुक, अलर्क आदि नाम आँकका नाम हुन् ।

(ख) के.यन.स्वामी : (१) अर्कपर्ण : आँकको पात । (२) अर्काह्व, सदापुष्प : आँक । (३) आस्फोट, वसुक, र विकीरण : आँकको रूख । (४) गणरूपक र मन्दार : बाह्रमासे आँक । (५) अलर्क र प्रतापस : सेतो आँक । (६) शुक्लार्क, तपन, शङ्करपुष्प, अत्यर्क, वृत्तमल्लिका : सेतो आँक । (७) प्रताप : रातो वा सेतो आँक । (८) सितार्कक : सेतो आँक (रूख) । (९) श्वेतमन्दारक : सेतो फुल्ने आँक । (१०) दीर्घपुष्प, दीर्घात्यर्क : सेतो ठूलो आँक । (११) पृथ्वीकुरवक : सेतो आँक ।



रातो र सेतो आँक, *Calotropis gigantea* (L.) R.Br., payer.de/ayurveda



(ग) नेपाली बृहत् शब्दकोश (१) आँक : वरका छाँटको, भुवादार, दूध आउने र सेतो वा प्याजी रङ्को फूल फुल्ने एक बोट; अर्क । (२) अर्क : आँक; मन्दार । (३) द्वादशात्मा : आँक । (४) भास्कर : आँकको बोट । (५) मन्दार, मार्तण्ड : आँकको रूख ।

(घ) डा. चुनेकर : सेतो आँकलाई अंग्रेजीमा Mudar वा Gigantic Swallow-wort तथा ल्याटिन भाषामा *Calotropis gigantea* (Linn.) R.Br. ex Ait. भनिन्छ ।

(ङ) विश्वनाथ द्विवेदी शास्त्री : यसलाई अंग्रेजीमा Calotropis procera पनि भनिन्छ ।

(च) पेयरडी अमरकोश : ल्याटिन भाषामा सेतो आँकलाई *Calotropis gigantea* (L.) R. Br. तथा रातो आँकलाई *Calotropis proera* भनिन्छ ।

(छ) डा.साङ्ख्यधर : आँकलाई ल्याटिन भाषामा *Calotropis procera* (Ait.) R. Br.भनिन्छ ।

(ज) नेपालको चुरे जङ्गल : सेतो आँकको वानस्पतिक नाम *Calotropis gigantea* (L.) Dryand. हो । यसलाई बाह्रमासे आँक पनि भनिन्छ ।


वसुक: 1 *Calotropis gigantea* (L.) W. T. Aiton., payer.de/amarakosa

(झ) द आयुर्वेदिक फर्माकोपिया अफ इण्डिया : ARKA (Root & Leaf) : *Calotropis procera* (Ait.) R.Br. (Fam.Asclepiadaceae). Dose : 1-3 g of the drug for decoction.

DOSE 0f Stem bark - 0.5-1 g in powder form. यसलाई अंग्रेजीमा Madar Tree भनिन्छ ।

(ञ) नेपाल सरकारबाट सन् २०२२ मा प्रकाशित Catalogue of Plants of National Botanical Garden, Nepal नामक पुस्तिका : आँक Apocynaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Calotropis gigantea* (L.) W.T.Aiton हो ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**अर्कः स्यादास्फोतो विकीरणो जां... लोऽर्कपुष्पश्च ।**
**क्षीरिण्यादित्याह्वः सुरूपिणी दुग्धिनी शुकफलश्च ॥**



Calotropis procera (Aiton) Dryand., payer.de/amarakosa

**स एव क्षीरवर्णश्च विक्षुरो दुग्धिका तथा । एकैषिकेति विज्ञेयः शब्दैः पर्यायवाचकैः ॥**

अर्क, आस्फोत, विकीरण, अर्कपुष्प, क्षीरिणी, आदित्याह्व, सुरूपिणी, दुग्धिनी, शुकफल, क्षीरवर्ण, विक्षुर, दुग्धिका र एकैषिक : यी आँकका नाम हुन् ।



**अन्योऽलर्कोऽत्यर्को राजार्कः श्वेतपुष्पश्च । श्वेतार्को मन्दारो वसुको गणरूपिकः सदापुष्पी ॥**
**शिवशेखरश्च वृक्षो वसुप्रदो दीर्घपुष्पश्च ।**
**शिवमल्लिका शुकश्च प्रतापसाख्यो महापशुपतिः स्यात् ॥**

अलर्क, अत्यर्क, राजार्क, श्वेतपुष्प, श्वेतार्क, मन्दार, वसुक, गणरूपिक, सदापुष्पी, शिवशेखर, वसुप्रद वृक्ष, दीर्घपुष्प, शिवमल्लिका, शुक, प्रतापसाख्य र महापशुपति : यी सेतो आँकका नाम हुन् ।

**(ख) अमरकोश :**

**अर्काह्ववसुकाऽऽस्फोतगणरूपविकीरणाः ॥ मन्दारश्चार्कपर्णेऽत्र शुक्लेऽलर्कप्रतापसौ ।**

अर्क अर्थात् सूर्य र यसका पर्याय, वसुक (वसूक), आस्फोत (आस्फोट), गणरूप, विकीरण (विकिरण), मन्दार र अर्कपर्ण : यी आँकका नाम हुन् । अलर्क र प्रतापस : यी सेतो आँकका नाम हुन् ।

(ग) **अर्कप्रकाश :**

**मन्दारजो वातकुष्ठकण्डूव्रणविषापहः ॥**

बाह्रमासे आँकको अर्कले वातविकार, कुष्ठ, शरीर चिलाउने रोग, घाउखटिरा र विषको असर ठिक गर्दछ ।


अर्कपर्णः । Calotropis gigantea (L.) W. T. Aiton

**अर्कार्कः प्लीहगुल्मार्शश्लेष्मोदरकृमीन् हरेत् ।**

आँकको अर्कले फियोका रोग, गुल्म, अल्काइ, कफविकार र किरा नाश गर्दछ ।

**अर्कपुष्प्याः कृमिश्लेष्ममेहपित्तविकारनुत् ॥**

आँकको फूलको अर्कले किरा, कफविकार, प्रमेह र पित्तविकार नाश गर्दछ ।

**अर्कार्को वा सलवणः प्लीहरोग विनाशनः ॥**

आँकको अर्क सिधेनुनसँग खानाले फियोका रोग निको हुन्छ ।

(घ) **कैयदेव निघण्टु :**

**सूर्याह्वोऽर्कः सदापुष्पी रूपिका सूर्यपुष्पकः ॥**
**आस्फोता जम्भलाः क्षीरी क्षीरपर्णो विकीरणः । क्षतक्षीरी दुग्धनिका पुष्पी कीरतनूफला ॥**

सूर्याह्व, अर्क, सदापुष्पी, रूपिका, सूर्यपुष्पक, आस्फोता, जम्भला, क्षीरी, क्षीरपर्ण, विकीरण, क्षतक्षीरी, दुग्धनिका, पुष्पी र कीरतनूफला : यी रातो आँकका नाम हुन् ।

**मन्दारो वसुकोऽलर्कोऽध्यर्कोऽध्यक्षः प्रतापलः । एकाष्ठीला श्वेतपुष्पः सदापुष्पो विकीर्णकः ॥**
**राजार्कः फलदो दीर्घपुष्पको गणरूपक ।**

मन्दार, वसुक, अलर्क, अध्यर्क, अध्यक्ष, प्रतापल, एकाष्ठीला, श्वेतपुष्प, सदापुष्प, विकीर्णक, राजार्क, फलद, दीर्घपुष्पक र गणरूपक : यी सेता आँकका नाम हुन् ।

**अर्कालर्कौ शरो तिक्तावुष्णौ वातकफौ हतः ॥ कृमिकुष्ठव्रणार्शोऽस्रप्लीहगुल्मविषग्रहान् ।**

दुवै आँक मलमूत्रलाई तलतिर सार्ने, तीता, उष्णवीर्यका तथा वातविकार, कफविकार, कीरा, कुष्ठ, घाउखटिरा, अल्काई, फियोको रोग, गुल्म, विषविकार र ग्रहदोष नाशक हुन्छन् ।

**अर्कस्य पुष्पं मधुरं सतिक्तं कुष्ठं क्रिमिघ्नं कफनाशनञ्च ॥**


Calotropis procera, medicinal-plants-of-nepal

**आखोर्विषं हन्ति च रक्तपित्तं सङ्ग्राहि शोफे च हितं सगुल्मे॥**

रातो आँकको फूल गुलियो र तीतो हुन्छ। यसले कुष्ठ, कीरा, कफविकार, मूसाको विषविकार, रक्तपित्त, सुजन र गुल्म नाश गर्दछ। यो ग्राहि हुन्छ।

**अलर्ककुसुमं वृष्यं लघु पाचनदीपनम्। अरोचकप्रसेकार्शःकासश्वासनिबर्हणम्॥**

सेतो आँकको फूल वीर्यवर्धक, पचाउन सहज, पाचनी, दीपनी तथा अरुची, प्रसेक, अल्काई, खोकी र दम नाशक हुन्छ।

**अर्कक्षीरं स्नुहीक्षीरं स्निग्धं वा कटुकं लघु।**
**गुल्मिनां कुष्ठिनां चापि तथैवोदररोगिणाम्॥**
**श्रेष्ठमेतद्विरेकार्थे ये चान्ये दीर्घरोगिणः। क्षीरमर्कस्य तिक्तोष्णं स्निग्धं सलवणं लघु॥**
**कुष्ठगुल्मोदरहरं श्रेष्ठमेतद्विरेचनम्॥**

आँकको दूध सिउँडीको जस्तै चिल्लो, पिरो र पचाउन हलुका हुन्छ। गुल्मका रोगी, कुष्ठरोगी, पेटका रोगी र अन्य दीर्घरोगीलाई विरेचन गराउन यो उत्तम हुन्छ। आँको दूध तीतो, उष्णवीर्यको, चिल्लो, नुनिलो र वचाउन हलुका हुन्छ। यसले कुष्ठ, गुल्म र पेटका रोग नाश गर्दछ। यो विरेचनका लागि उत्तम हुन्छ।

## (ङ) धन्वन्तरि निघण्टु :

**अर्कः सूर्याह्वयः पुष्पी विक्षीरोऽथ विकीरणः।**
**जम्भलः क्षीरपर्णी स्यादास्फोटो भास्करो रविः॥**
**अर्कस्तिक्तो भवेदुष्णः शोधनः परमः स्मृतः।**
**कण्डूव्रणहरो हन्ति जन्तुसन्ततिमुद्धताम्॥**
**अर्कस्तु कटुरूष्णश्च वातहृद्दीपनः सरः।**
**शोफव्रणहरः कण्डूकुष्ठप्लीहकृमीञ्जयेत्॥**


अर्कपर्णः । Calotropis gigantea (L.) W. T. Alton, payer.de/amarakosa

अर्क, सूर्याह्वय, पुष्पी, विक्षीर, विकीरण, जम्भल, क्षीरपर्णी, आस्फोट, भास्कर र रवि : यी रातो आँकका नाम हुन्। यो आँक तीतो, उष्णवीर्यको, अत्यन्त शोधनी तथा लुतो, घाउखटिरा र कीरा नाशक हुन्छ। यो पीरो, उष्णवीर्यको, वातविकार नाशक, दीपनी र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ। यसले सुजन र घाउखटिरा नाश गर्दछ तथा लुतो, कुष्ठ, फियोका रोग र कीरा माथि विजय हासिल गर्दछ।

**राजार्को वसुकोऽत्यर्को मन्दारो गणरूपकः । एकाष्ठीलः सदापुष्पी स चालर्कः प्रतापनः ॥**
**राजार्कः कटुतिक्तोष्णो वीर्यमेदोविषापहः । वातकुष्ठव्रणान्हन्ति शोफकण्डूविसर्पनुत् ॥**

राजार्क, वसुक, अत्यर्क, मन्दार, गणरूपक, एकाष्ठील, सदापुष्पी, अलर्क र प्रतापन : यी सेतो आँकका नाम हुन् । यो आँक पिरो, तीतो, उष्णवीर्यको तथा वीर्य, बोसो र विषविकार नाशक हुन्छ । यसले वातविकार, कुष्ठ, घाउखटिरा, सुजन, लुतो र विसर्प नाश गर्दछ ।


अर्कपर्णः । Calotropis gigantea (L.) W. T. Aiton, payer.de/amarakosa

(च) **निघण्टुशेष :**

**अर्के विकीरणोऽर्काह्वो जम्भलाऽऽस्फोट-विष्किराः । क्षीरा-ऽर्कपर्णः .. .. ..॥**

अर्क, विकीरण, अर्काह्व, जम्भल, आस्फोट, विष्किर, क्षीरपर्ण र अर्कपर्ण : यी रातो आँकका नाम हुन् ।

**.. .. .. .. राजार्के त्वलर्को गणरूपकः ॥ एकाष्ठीलः सदापुष्पी मन्दारश्च प्रतापसः ।**

राजार्क, अलर्क, गणरूपक, एकाष्ठील, सदापुष्पी, मन्दार र प्रतापस : यी सेतो आँकका नाम हुन् ।

(छ) **भावप्रकाश निघण्टु :** 

**श्वेतार्को गणरूपः स्यान्मन्दारो वसुकोऽपि च ॥**
**श्वेतपुष्पः सदापुष्पः स चालर्कः प्रतापसः ।**
**रक्तोऽपरोऽर्कनामा स्यादर्कपर्णो विकीरणः ॥**
**रक्तपुष्पः शुक्लफलस्तथाऽऽस्फोटः प्रकीर्त्तितः ।**
**अर्कद्वयं सरं वातकुष्ठकण्डूविषव्रणान् ॥ निहन्ति प्लीहगुल्मार्शःश्लेष्मोदरशकृत्कृमीन् ।**

श्वेतार्क, गणरूप, मन्दार, वसुक, श्वेतपुष्प, सदापुष्प, अलर्क र प्रतापस : यी सेतो आँकका नाम हुन् । रक्तार्क, अर्कनामा (सूर्यवाचक शब्द सबै), अर्कपर्ण, विकीरण, रक्तपुष्प, शुक्लफल र आस्फोट : यी रातो आँकका नाम हुन् । दुवै आँकले दिसा लगाउँदछन् तथा वातविकार, कुष्ठ, लुतो, विषविकार, घाउखटिरा, फियोका रोग, गुल्म, अल्काई, कफविकार, पेटका रोग र कीरा नाश गर्दछन् ।



अर्कः । Calotropis gigantea (L.) W.T. Aiton, payer.de/amarakosa: ।

**अलर्ककुसुमं वृष्यं लघु दीपनपाचनम् । अरोचकप्रसेकार्शः कासश्वासनिवारणम् ॥**
**रक्तार्कपुष्पं मधुरं सतिक्तं कुष्ठकृमिघ्नं कफनाशनञ्च ।**
**अर्शो विषं हन्ति च रक्तपित्तं संग्राहि गुल्मे श्वयथौ हितं तत् ॥**

सेतो आँकको फूल वीर्यवर्धक, पचाउन हलुका, दीपनी र पाचनी हुन्छ । यसले अरुची, प्रसेक, अल्काई, खोकी र दम नाश गर्दछ । राता आँकको फूल गुलियो र हल्का तीतो हुन्छ । यसले कुष्ठ, कीरा, कफविकार, अल्काई, विषविकार र रक्तपित्त नाश गर्दछ । यो सङ्ग्राही तथा गुल्म र सुजनमा लाभकारी हुन्छ ।


Calotropis procera (Aiton) Dryand., payer.de/amarakosa

**क्षीरमर्कस्य तिक्तोष्णं स्निग्धं सलवणं लघु । कुष्ठगुल्मोदरहरं श्रेष्ठमेतद्विरेचनम्॥**

आँकको दूध तीतो, गर्मी गर्ने, चिल्लो र नुनिलो हुन्छ । यो पचाउन हलुका हुन्छ तथा कुष्ठ, गुल्म र पेटका रोग नाश गर्दछ । विशेषतः यो विरेचनका लागि लाभदायक हुन्छ ।

**(ज) मदनपाल निघण्टु :**

**अर्कः सूर्याह्वयः क्षीरी सदापुष्पो विकीरणः । मन्दारो वसुकोऽलर्को राजाह्वो दीर्घपत्रकः॥**
**अर्कद्वयं शंखवातकुष्ठकण्डू विषव्रणान् । निहन्ति प्लीहगुल्मार्शोयकृच्छ्लेष्मोदरक्रिमीन्॥**

अर्क, सूर्याह्वय, क्षीरी, सदापुष्प, विकीरण, मन्दार, वसुक, अलर्क, राजाह्व र दीर्घपत्रक : यी आँकका नाम हुन् । यो रातो र सेतो गरी दुई थरी हुन्छ) । दुवै आँकले टाउको दुखेको (शंखवात), कुष्ठ, लुतो, विषविकार र घाउखटिरा ठिक गर्दछन् । यिनले फियोका रोग, गुल्म, अल्काई, कलेजोका रोग, कफविकार, पेटका रोग र कीरा नाश गर्दछन् ।



**(झ) राज निघण्टु :**


Calotropis procera (Aiton) Dryand., payer.de/amarakosa

**अर्कः क्षीरदलः पुष्पी प्रतापः क्षीरकाण्डकः ।**
**विक्षीरो भास्करः क्षीरी खर्जूघ्नः शिवपुष्पकः॥**
**भञ्जनः क्षीरपर्णी स्यात् सविता च विकीरणः ।**
**सूर्याह्वश्च सदापुष्पो रविरास्फोटकस्तथा॥**
**तूलफलः शुकफलो विंशत्येकसमाह्वयः॥**
**अर्कस्तु कटुरुष्णश्च वातजिद्दीपनीयकः ।**
**शोफव्रणहरः कण्डूकुष्ठकृमिविनाशनः॥**

(१) अर्क, (२) क्षीरदल, (३) पुष्पी, (४) प्रताप, (५) क्षीरकाण्डक, (६) विक्षीर, (७) भास्कर, (८) क्षीरी, (९) खर्जूघ्न, (१०) शिवपुष्पक, (११) भञ्जन, (१२) क्षीरपर्णी, (१३) सविता, (१४) विकीरण, (१५) सूर्या र सूर्यका पर्यायवाची शब्द, (१६) सदापुष्प, (१७) रवि, (१८) आस्फोटक, (१९) तूलफल र (२०) शुकफल : यी बीस नाम

आँकका नाम हुन् । आँक पिरो, उष्णवीर्यको, वातविकारलाई जित्ने र दीपन गुणको हुन्छ । यसले सुजन, घाउखटिरा, चिलाउने रोग, कुष्ठ र कीरा नाश गर्दछ ।


Calotropis procera (Aiton) Dryand., payer.de/amarakosa

**शुक्लार्कस्तपनः श्वेतः प्रतापश्च सितार्ककः ।**
**सुपुष्पः शङ्करादिः स्यादत्यर्को वृत्तमल्लिका ॥**
**श्वेतार्कः कटुतिक्तोष्णो मलशोधनकारकः ।**
**मूत्रकृच्छ्रास्रशोफार्तिव्रणदोषविनाशनः ॥**

शुक्लार्क, तपन, श्वेत, प्रताप, सितार्कक, शङ्करसुपुष्प, अत्यर्क र वृत्तमल्लिका : यी सेतो आँकका नाम हुन् । सेतो आँक पिरो, तीतो, उष्णवीर्यको र शरीरको मल-शोधक हुन्छ । यसले मूत्रकृच्छ्र, रक्तविकार, सुजन र घाउखटिरा विनाश गर्दछ ।

**राजार्को वसुकोऽलर्को मन्दारो गणरूपकः ।**
**एकाष्ठीलः सदापुष्पो ज्ञेयोऽत्र सप्तसम्मितः ॥**
**राजार्कः कटुतिक्तोष्णः कफमेदोविषापहः ।**
**वातकुष्ठव्रणान् हन्ति शोफकण्डूविसर्पनुत् ॥**

(१) राजार्क, (२) वसुक, (३) अलर्क, (४) मन्दार, (५) गणरूपक, (६) एकाष्ठील र (७) सदापुष्प : यी सात नाम राज-आँकका नाम हुन् । राज-आँक पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार, बोसोविकार र विषविकार नाशक हुन्छ । यसले वातविकार, कुष्ठ, घाउखटिरा, सुजन, चिलाउने रोग र विसर्प नाश गर्दछ ।



**श्वेतमन्दारकस्त्वन्यः पृथ्वीकुरवकः स्मृतः । दीर्घपुष्पः सितालर्को दीर्घात्यर्कः शराह्वयः ॥**
**श्वेतमन्दारकोऽत्युष्णस्तिक्तो मलविशोधनः । मूत्रकृच्छ्रव्रणान् हन्ति कृमीनत्यन्तदारुणान् ॥**

(१) श्वेतमन्दारक, (२) पृथ्वीकुरवक, (३) दीर्घपुष्प, (४) सितालर्क र (५) दीर्घात्यर्क : यी पाँच नाम सेतो आँकविशेषका नाम हुन् । यो आँक अति उष्णवीर्यको, तीतो र शरीरको मल प्रशोधन गर्ने गुणको हुन्छ । यसले मूत्रकृच्छ्र, घाउखटिरा र कडा खालका पेटका कीरा नाश गर्दछ ।


Calotropis gigantea : Iidigenons Plants At Biodiversity Park, Ranchi

### (ञ) राजवल्लभ निघण्टु :

**अर्कः कृमिहरस्तीक्ष्णः सरोर्शःकफदोषजित् ॥**
**तत्पयः कृमिदोषघ्नं हितं कुष्ठोदरार्शजित् ॥**

आँक कीरा नाशक, तिक्खर, मलमूत्रलाई तलतिर सार्ने तथा अल्काई र कफविकारलाई जित्ने गुणको हुन्छ । आँकको दूधले कीराको विकार नाश गर्दछ तथा कुष्ठ, पेटका रोग र अल्काईलाई जित्दछ ।

**(ट) शार्ङ्गधर संहिता :**


रातो आँक, *Calotropis procera* (Aiton) Dryand., payer.de/ayurveda

**अर्कसेहुण्डधत्तूरलाङ्गलीकरवीरकम्॥**
**गुञ्जाऽहिफेनावित्येताः सप्तोपविषजातयः ।**

आँक, सिउँडी, धतुरो, हलहले, करवीर वा कँडेल, रातीगेडी, अहिफेन यी सात उपविष हुन्।

**अर्कक्षीरहरिद्राभ्यां मर्दयित्वा विलेपनात्॥**
**मुखकार्ष्ण्यं शमं याति चिरकालोद्भवं ध्रुवम्।**

आँकको दूधमा हलेदो पिसेर लेप बनाई दल्ने गर्नाले अनुहारमा आएको पुरानो कालोपोतो निश्चय नै नाश हुन्छ ।

**पीतार्कपत्रमाज्येन लिप्तं वह्नौ प्रतापयेत्। तद्रसः श्रवणे क्षिप्तः कर्णशूलहरः परः॥**

आँकका पहेँला पातमा घिउ दलेर आगोमा सेकाउनू । त्यसपछि यसको रस निकालेर कानमा हाल्नू। कान दुखेको निको हुन्छ ।

**(ठ) शालिग्राम निघण्टु :**

**क्षीरदल शुकफल तूर्लाकश्च सदासुमः।** 

क्षीरदल, शुकफल, तूल, अर्क र सदासुम : यी रातो आँकका नाम हुन्।


रातो आँक, *Calotropis procera* (Aiton) Dryand., payer.de/ayurveda

**श्वेतार्कोऽलर्क राजार्को मन्दारोगणरूपकः॥**

श्वेतार्क, अलर्क, राजार्क, मन्दार र गणरूपक : यी सेतो आँकका नाम हुन्।

**रक्तार्क पुष्पं मधुरं स तिक्तं कुष्ठक्रिमिघ्नं कफनाशनञ्च ।**
**आखोर्विषं हन्ति च रक्तपित्तं संग्राहि गुल्मेश्वयथौ हितं तत्॥**

रातो आँकको फूल गुलियो, तीतो, ग्राही तथा कुष्ठ, कीरा, कफविकार, मूसाको विष, रक्तपित्त, गुल्म र श्वयथुमा हितकर हुन्छ ।

**अर्कमूलत्वचा स्वेदकरी श्वासनिबर्हणी । उष्णा च वामिका चैव ह्युपदंशविनाशिनी ॥**

आँकको जराको बोक्रो पसिना निकाल्ने, दम नाशक, उष्णवीर्यको, बान्त गराउने र उपदंश रोग नाशक हुन्छ ।

**अर्कद्वयं सरं वातकुष्ठकण्डूविषव्रणान् । निहन्ति प्लीहगुल्मार्शः श्लेष्मोदरयकृत्कृमीन् ॥**



सेतो आँक, *Calotropis gigantea* (L.) R.Br., payer.de/ayurveda, Dinesh walke

दुवै थरी आँक रेचक तथा वातविकार, कुष्ठ, लुतो, फियोका रोग, गुल्म, अल्काई, कफविकार, पेटका रोग, कलेजोका रोग र कीरा नाशक हुन्छन् ।

**अलर्क कुसुमं वृष्यं लघु दीपन पाचनम् । अरोचकप्रसेकार्शःकासश्वासनिवारणम् ॥**

सेतो आँकको फूल वीर्यवर्धक, पचाउन सहज, दीपनी, पाचनी तथा अरुची, प्रसेक, अल्काई, खोकी र दम नाशक हुन्छ ।

**श्वेतमन्दारकोत्युष्णस्तिक्तोमलविशोधनः । मूत्रकृच्छ्रव्रणान्हन्ति कृमीनत्यन्तदारुणात् ॥**
**राजार्कः कटुतिक्तोष्णः कफभेदोविषापहः । वातकुष्ठव्रणान्हन्ति शोफकण्डूविसर्पनुत् ॥**

सेतो आँक अति उष्णवीर्यको, तीतो, मल प्रशोधक तथा मूत्रकृच्छ्र, घाउखटिरा र अती कडा कीरारोग नाशक हुन्छ । यो पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार, बोसोविकार,विषविकार, वातविकार, कुष्ठ, घाउखटिरा, सुजन, लुतो र विसर्प नाशक हुन्छ ।

**(ड) सरस्वती निघण्टु :**

**अर्कः शुक्लः प्लवः क्षीरी गणरूपो विकीरणः । श्वेतः शोणः सदापुष्पी सूर्यपर्यायवाचकः ॥**

अर्क, शुक्ल, प्लव, क्षीरी, गणरूप, विकीरण, श्वेत, शोण, सदापुष्पी र सूर्यका पर्यायवाची शब्द : यी (रातो आँक वा) आँकका नाम हुन् ।

**द्वितीयार्कस्तु राजार्क श्वेतार्क गणरूपिकाः । विकीरणफलोऽलर्कः क्षीरपर्णी समीरणः ॥**



सेतो आँक, *Calotropis gigantea* (L.) R.Br., payer.de/ayurveda, Dinesh walke

राजार्क, श्वेतार्क, गणरूपिका, विकीरणफल, अलर्क, क्षीरपर्णी र समीरण : यी सेतो आँकका नाम हुन् ।

**(ढ) सोढल निघण्टु :**

**अर्कः सूर्याह्वयः पुष्पी विष्किरोऽथ विकीरणः । जम्भलः क्षीरपर्णः स्यादास्फोटश्च तूलफलः ॥**

अर्क, सूर्यवाचक शब्दका पछाडी पुष्पी जोडिएका शब्द, विष्किर, विकीरण, जम्भल, क्षीरपर्ण, आस्फोट र तूलफल : यी आँकका नाम हुन् ।


सेतो आँक, *Calotropis gigantea* (L.) R.Br., payer.de/ayurveda, Dinesh walke

**श्वेतार्को दीर्घपत्रश्च श्वेतपुष्पस्तथैव च ।**

श्वेतार्क, दीर्घपत्र र श्वेतपुष्प : यी सेतो आँकका नाम हुन् ।



**राजार्को वसुकः प्रोक्तो मन्दारो गणरूपकः ॥ एकाष्ठीलः सदापुष्पः स चालर्कः प्रतापनः ।**

राजार्क, वसुक, मन्दार, गणरूपक, एकाष्ठील, सदापुष्प, अलर्क र प्रतापन : यी राजआँकका नाम हुन् ।

**(ण) सौश्रुत निघण्टुः-**

**अर्कश्च रूषिकश्चैव सदापुष्पश्च शब्दितः । क्षतक्षीरी दुग्धिनिका तथा शुकफला च सा ॥**

अर्क, रूषिक, सदापुष्प, क्षतक्षीरी, दुग्धिनिका र शुभफला : यी रातो आँकका नाम हुन् ।

**अलर्को दीर्घपुष्पश्च मन्दारः कनरुषिकः । राजार्कः सूर्यसाह्वश्च विकीरणफलश्च सः ॥**

अलर्क, दीर्घपुष्प, मन्दार, कनरुषिक, राजार्क, सूर्यसाह्व र विकीरणफल : यी सेतो आँकका नाम हुन् ।



Calotropis procera (Aiton) Dryand., payer.de/amarakosa

# अर्कपुष्पी
# (Arkapushpee)

**परिभाषा :**

(क) के.यन.स्वामी : अति सानो फिका रातो झुसे दूधे झार । सूर्यमुखी ।

(ख) डा. चुनेकर : यो एकमत हुन नसकेको वनस्पति हो । कसैले *Holostemma rheedianum* Spreng वानस्पतिक नाम भएको लहरा विशेषलाई अर्कपुष्पी मानेका छन् । यसका पात र जरा ओखतीमा प्रयोग हुन्छन् ।



Hibiscus Hirtus, Mohan Prasad Sapkota's photography

(ग) हिन्दी विश्वकोषले अर्कपुष्पीलाई सूर्यमुखी फूल पनि मानेको पाइन्छ । यसलाई अंग्रेजीमा Sonflower भनिन्छ । यसको वैज्ञानिक नाम *Helianthus annus* वा *Helianthus* annuus f. fallax B.Boivin हो ।

(घ) कसैले Apocynaceae (Oleander) परिवारमा पर्ने *Cynanchum reticulatum.* पर्याय रहेको *Leptadenia reticulata* (Retz.) Wight & Arn. लाई अर्कपुष्पी बताएका छन् ।



Leptadenia reticulata (Retz.) Wight & Arn., instituteofayurveda.org

(ङ) कसैले Apocynaceae (Oleander) परिवारमा पर्ने Holostemma annulare. पर्याय रहेको *Holostemma ada-kodien* Schult. लाई अर्कपुष्पी बताएका छन् ।


Holostemma ada-kodien, by Dr. Raju Kasambe

(च) मोनियर विलियम्सको संस्कृत-अंग्रेजी शब्दकोशमा अर्कपुष्पीलाई Hibiscus Hirtus भनी लेखिएको छ ।

(छ) सूर्यमुखीका बारेमा सुवर्चला भनी बेग्लै वर्णन गरिएको पाइन्छ ।


Helianthus annus, instituteofayurveda.org

**प्राचीन ग्रन्थका वचन :**

**(क) भावप्रकाश निघण्टु :**

**अर्कपुष्पी क्रूरकर्मा पयस्या जलकामुका॥ अर्कपुष्पी कृमिश्लेष्ममेहपित्तविकारजित् ।**

अर्कपुष्पी, क्रूरकर्मा, पयस्या र जलकामुका : यी अर्कपुष्पीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कीरा, कफविकार, प्रमेह र पित्तविकार नाश गर्दछ ।

**(ख) मदनपाल निघण्टु :**

**अर्कपुष्पी क्रूरकन्दा जलकामाऽभिरिण्डिका । अर्कपुष्पी कृमिश्लेष्ममेहपित्तविकारजित्॥**

अर्कपुष्पी, क्रूरकन्दा, जलकामा र अभिरिण्डिका : यी अर्कपुष्पीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कीरा, कफविकार, प्रमेह र पित्तविकार नाश गर्दछ ।

## अर्कादि गण
## (Arkaadi-Gana)

(क) **सुश्रुत संहिता :**

**अर्कालर्ककरञ्जद्वयनागदन्तीमयूरकभार्गीरास्नेन्द्रपुष्पीक्षुद्रश्वेतामहाश्वेतावृश्चिकाल्यलवणास्तापसवृक्षश्चेति॥**
**अर्कादिको गणो ह्येष कफमेदोविषापहः । कृमिकुष्ठप्रशमनो विशेषाद्व्रणशोधनः॥**

आँक, सेतो आँक, दुई थरी करञ्ज, नागदन्ती (कुकुरडाइनु), दतिवन, भारङ्गी, रास्ना (फ्याक्सेकन्द), इन्द्रपुष्पी (कलिहारी), क्षुद्रश्वेता (रातो दतिवन वा सानो सेतो अपराजिता), महाश्वेता (फल नफल्ने चट्टेल वा ठूलो अपराजिता), मेषशृङ्गी (भेडासिङ्गी), अलवणा (मालकागुनु वा हर्रो) र तापसवृक्ष (चिउरी) : यी औषधीको समूहलाई अर्कादि गण भनिन्छ । यो गणको औषधीले कफविकार, भित्री बोसोविकार र विषविकार नाश गर्दछ । कीरा र कुष्ठ शान्त पार्दछ । यसले विशेषगरी घाउखटिरा प्रशोधन गर्दछ ।

## अर्जुन रोग (आँखाको रोगविशेष)
## (An eye disease)

(क) **अष्टाङ्ग हृदय :**

**नीरुक् श्लक्ष्णोऽर्जुनं बिन्दुः शशलोहितलोहितः ।**

आँखाको सेतो भागमा नदुख्ने, कमलो चिल्लो एवं नरम तथा खरायोको रगत जस्तो रातो थोप्लोजस्तो देखिने रोगलाई अर्जुन भनिन्छ ।

(ख) **भावप्रकाश संहिता :**

**एको यः शशरुधिरप्रभस्तु बिन्दुः शुक्लस्थो भवति तमर्जुनं वदन्ति॥**

आँखाको सेतो भागमा खरोयोको रगत जस्तो एउटा थोप्लो हुन्छ, त्यसलाई अर्जुन भनिन्छ ।

# अर्जुन (खरी)
# (Arjuna myrobalan)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : अर्जुन, ककुभ आदि खरीका नाम हुन् ।

(ख) के.यन.स्वामी : (१) ककुभ : खरीको वृक्ष । (२) अर्जुन : करवीर, काउलो । (३) इन्द्रद्रु : खरी, काउलो । वीर : खरी, काउलो । (४) धवल : काउलो ।

(ग) नेपाली बृहत् शब्दकोश : (१) काउलो : चिलाउनेका जस्ता पात हुने र गोल फल फल्ने, हृदयरोगलाई हित हुने फलविशेष । (२) खरी : ससाना खस्रा पात हुने, मसिना सेता फूल फुल्ने, मरीचका जत्रा दाना फल्ने र डाँठको बोक्रा सेतो हुने ठूलो एक रूख ।

(घ) आचार्य बालकृष्ण : यसको वानस्पतिक नाम *Terminalia arjuna (Roxb.ex DC.)W. & A.* र अंग्रेजी नाम Arjuna myrobalan वा White murdah हो । नेपालीमा यसलाई "काहु" भन्दछन् ।



अर्जुन: 1 Sykes' Warbler (Iduna rama) mit Blüten von Terminalia arjuna W. & A., Kolkata, West Bengal [Bildquelle: J. M. Garg / Wikipedia. -- GNU FDLicense]

(ङ) डा.चुनेकर : यसको ल्याटिन नाम *Terminalia arjuna W. & A.* हो । यसको रूख ६०-७० फीट अग्लो हुन्छ । आँपका जस्तै ३-६ इञ्च लामा पात हुन्छन् । पहेँला फूल फुल्दछन् ।

(च) स्वामी सदाशिव तिर्थ : यसलाई अंग्रेजीमा Arjuna Myrobalan तथा ल्याटिन भाषामा *Terminalia arjuna W. & A., Pentaptera glabra* वा *P. angustifolia* भनिन्छ ।

(छ) फर्माकोपिया : अर्जुन नामक वृक्ष Combretacea परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Terminalia arjuna* W.& A. हो । यसको रूखको बोक्राको धुलो ३-६ ग्रामसम्म ओखतीमा प्रयोग हुन्छ ।

(ज) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : अर्जुन वृक्ष Angiosperm समूह अन्तर्गत Combretaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Terminalia arjuna* (Roxb. ex DC.) Wight & Arn. हो ।

यसको एक संस्कृत पर्यायवाची नाम "नदीसर्ज" का बारेमा लगाइने गरिएको अर्थ अलि नमिलेको जस्तो देखिन्छ । धेरैले नदीका किनारतिर बढी हुने हुनाले यसलाई नदीसर्ज भनिएको हो भनेका छन् । तर सर्जको अर्थ "सृजति निर्यासादीनिति" हुन्छ । निर्यासको अर्थ कुनै रूखबाट आफैँ झर्ने वा कुनै अङ्ग काट्दा निस्कने रस वा चोप वा बहने कार्य भन्ने हुन्छ । अर्जुन वृक्षको चोपका कुरा आयुर्वेदका ग्रन्थमा उल्लेख भएको हालसम्म पाइएको छैन । निघण्टुशेषले "नद्याः सर्जो नदीसर्जः" भनी व्युत्पत्ति गरेको छ । यसैले नदीसर्जको अर्थ पानीको मूल फुटाउँदछ भन्न खोजिएको हुनुपर्दछ । अर्जुन वृक्षका आसपास मूल फुटेको पाइएमा यही अर्थ नै बढी उपयुक्त हुने देखिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**पार्थोऽर्जुनः किरीटी वीरो वैरान्तको नदीसर्जः । हीनः ककुभश्च श्रीफलसञ्ज्ञः श्वेतवाह इति ॥**
**रालो भवेद्धीनपुष्पो माधुगन्धिकपुष्पकः । अर्जुने यानि नामानि तैरेनं भिषजो विदुः ॥**

पार्थ, अर्जुन, किरीटी, वीर, वैरान्तक, नदीसर्ज, हीन, ककुभ, श्रीफलसञ्ज्ञ, श्वेतवाह, राल, हीनपुष्प, माधुगन्धिकपुष्पक तथा अर्जुनका पर्यायवाची शब्द : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् ।

**(ख) अभिधान रत्नमाला :**

**नदीसर्जस्तु ककुभो मधुग्रन्थिकपुष्पकः । जघनच्छदनः पार्थनामा वैकान्तकश्च सः ॥**



अर्जुन । Terminalia arjuna W. & A., Kolkata, West Bengal, [Bildquelle: J. M. Garg / Wikipedia. -- GNU FDLicense]

नदीसर्ज, ककुभ, मधुग्रन्थिकपुष्पक, जघनच्छदन, अर्जुनका पर्यायवाची शब्द र वैकान्तक : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् ।

**(ग) अमरकोश :**

**नदीसर्जो वीरतरुरिन्द्रद्रुः ककुभोऽर्जुनः ।**

नदीसर्ज, वीरतरु, इन्द्रद्रु, ककुभ र अर्जुन : यी खरी वृक्षका नाम हुन् ।

**(घ) अष्टाङ्ग निघण्टु :**

**पार्थोऽर्जुनः श्वेतवाहः ककुभः फाल्गुनाह्वयः ।**

पार्थ, अर्जुन, श्वेतवाह, ककुभ र फाल्गुन अर्थात् अर्जुनका पर्यायवाची शब्द : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् ।

**(ङ) आयुर्वेद महोदधि :**

**...अर्जुनकाष्ठैश्च संततं तापितं जलम् । बलमेधाप्रजननं (आ) मैत्रेयेण प्रदर्शितम् ॥**

अर्जुनको दाउराले तताइएको पानीले बल र सम्झना शक्ति दिन्छ ।


अर्जुनः [Terminalia arjuna W. & A. Bildquelle: Line1 / Wikipedia. --GNU FDLicense]

(च) कैयदेव निघण्टु :

**अर्जुनः फाल्गुनः पार्थः ककुभो धूर्तभूरुहः । श्वेतवाहो नदीसर्जोः जयोसितकेशुव्रणात् ॥ अर्जुनस्तुवरः शीतो जयेत् पित्तकफव्रणान् । मेदोमेहास्रद्रोगस्वेदभग्नक्षतक्षयान् ॥**

अर्जुन, फाल्गुन, पार्थ, ककुभ, धूर्तभूरुह, श्वेतवाह, नदीसर्ज र जयोसितकेशुव्रणात् : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् । यो टर्रो र शीतवीर्यको हुन्छ । यसले पित्तविकार, कफविकार, खटिरा, बोसोविकार, प्रमेह, रक्तविकार, भाँचिएका स्थान, घाउ र क्षयरोगलाई जित्दछ ।

(छ) धन्वन्तरि निघण्टु :

**अर्जुनः ककुभः पार्थश्चित्रयोधी धनञ्जयः । वीरान्तकः किरीटी च नदीसर्जोऽपि पाण्डवः ॥ ककुभस्तु कषायोष्णः कफघ्नो व्रणनाशनः । पित्तश्रमतृषार्तिघ्नो मारुतामयकोपनः ॥**

अर्जुन, ककुभ, पार्थ, चित्रयोधी, धनञ्जय, वीरान्तक, किरीटी, नदीसर्ज र पाण्डव : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् । यो टर्रो, उष्णवीर्यको तथा कफविकार, खटिरा, पित्तविकार, थकाई, तिर्खारोग, वातविकार र आमविकार नाशगर्ने गुणको हुन्छ ।

(ज) निघण्टुशेष :

**देवसालः शक्रतरुर्नदीसर्जोऽर्जुनाह्वयः । अर्जुनः ककुभः सेव्यः सर्पणो धूर्तपादपः ॥**

देवसाल, शक्रतरु, नदीसर्ज, अर्जुनका पर्यायवाची शब्द, अर्जुन, ककुभ, सेव्य, सर्पण र धूर्तपादप : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् ।

(झ) पर्याय रत्नमाला :

**धन्वी धनञ्जयः सालो नदीजः ककुभोऽर्जुनः ।**

धन्वी, धनञ्जय, साल, नदीज, ककुभ र अर्जुन : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् ।

## (ञ) भावप्रकाश निघण्टु :

**ककुभोऽर्जुननामाख्यो नदीसर्जश्च कीर्त्तितः॥ इन्द्रद्रुर्वीरवृक्षश्च वीरश्च धवलः स्मृतः ।**
**कुकुभः शीतलो हृद्यः क्षतक्षयविषास्रजित्॥ मेदोमेहव्रणान् हन्ति तुवरः कफपित्तहृत् ।**


अर्जुनः | Terminalia arjuna W. & A., Rangareddy District, Andhra Pradesh. [Bildquelle: J. M. Garg / Wikipedia. -- GNU FDLicense]

ककुभ, अर्जुन (तथा अर्जुनलाई बुझाउने सबै शब्द), नदीसर्ज, इन्द्रद्रु, वीर र धवल : यी खरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ तथा मुटुलाई फाइदा गर्दछ । यसले चोटपटक, क्षयरोग, विषविकार र रक्तविकार समेत नाश गर्दछ । बोसोका विकार, प्रमेह, घाउखटिरा, कफविकार र पित्तविकार नाश गर्दछ । यो टर्रो हुन्छ ।

## (ट) मदनपाल निघण्टु :

**ककुभोऽर्जुननामा स्यात् नदीसर्जः शठद्रुमः । ककुभः शीतलो भग्नक्षतक्षयविषास्रजित्॥**



ककुभ, अर्जुन र अर्जुनका पर्यायवाची शब्दहरू, नदीसर्ज र शठद्रुम : यी खरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्य भएको तथा भाँचिएको, घाउ, क्षयरोग, विष र रक्तविकार माथि जित हासिल गर्ने गुणको हुन्छ ।

## (ठ) मदनादि निघण्टु :

**अर्जुनः ककुभः पार्थ नदीसर्जो धनञ्जयः । मधुगन्धः पुष्पफलो फाल्गुनः क्षत्रियोध्यपि॥**
**कषायः कफहृद्वर्ण्यो मेदो दोषनिबर्हणः । पाण्डुरोग प्रमेहघ्नी पित्तसंशमनोऽर्जुनः॥**

अर्जुन, ककुभ, पार्थ, नदीसर्ज, धनञ्जय, मधुगन्ध, पुष्पफल, फाल्गुन र क्षत्रियोधी : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् । यो टर्रो तथा कफविकार नाशक हुन्छ । यसले वर्णमा निखार लेराउँदछ र बोसोविकार नाश गर्दछ । अर्जुनले पाण्डुरोग र प्रमेह नाश गर्दछ । यसले पित्तविकारलाई शान्त पार्दछ ।

## (ड) माधव द्रव्यगुण :

**पार्थः पथ्यः क्षते भग्ने रक्तस्तम्भनहृद्रुजोः ।**

अर्जुन वृक्ष चोटपटकमा, हाड भाँचिएकोमा, रगत रोक्नमा र मुटुका रोगमा पथ्य हुन्छ ।

**(ढ) राज निघण्टु :**

**अर्जुनः शम्बरः पार्थश्चित्रयोधी धनञ्जयः । वैरान्तकः किरीटी च गाण्डीवी शिवमल्लकः ॥**
**सव्यसाची नदीसर्जः कर्णारिः कुरुवीरकः । कौन्तेय इन्द्रसूनुश्च वीरद्रुः कृष्णसारथिः ॥**
**पृथाजः फाल्गुनो धन्वी ककुभश्चैकविंशतिः ॥**
**अर्जुनस्तु कषायोष्णः कफघ्नो व्रणनाशनः । पित्तश्रमतृषार्तिघ्नो मारुतामयकोपनः ॥**

(१) अर्जुन, (२) शम्बर, (३) पार्थ, (४) चित्रयोधी, (५) धनञ्जय, (६) वैरान्तक, (७) किरीटी, (८) गाण्डीवी, (९) शिवमल्लक, (१०) सव्यसाची, (११) नदीसर्ज, (१२) कर्णारि, (१३) कुरुवीरक, (१४) कौन्तेय, (१५) इन्द्रसूनु, (१६) वीरद्रु, (१७) कृष्णसारथि, (१८) पृथाज, (१९) फाल्गुन, (२०) धन्वी र (२१) ककुभ : यी एक्काईस नाम खरीका संस्कृत पर्यायवाची नामहरू हुन् । खरी टर्रो, उष्णवीर्यको तथा कफविकार र घाउखटिरा नाशक हुन्छ । यसले पित्तविकार, थकाई र तिर्खारोग नाश गर्दछ तर वातविकार बढाउँदछ ।

**(ण) राजवल्लभ निघण्टु :**



ककुभ । Terminalia arjuna W. & A., Javadi Hills, Tamil Nadu, [Bildquelle: Shyamal / Wikimedia. Creative Commons Lizenz (Namensnennung)]

**पार्थः पथ्यः क्षते भग्ने**
**रक्तस्तम्भनकृच्छ्रयोः ॥**



काउलो घाउ लाग्दा, भाँचिंदा, रगत रोक्न र मूत्रकृच्छ्र रोगमा हितकर हुन्छ ।

**(त) शार्ङ्गधर संहिता :**

**व्यङ्गेषु चार्जुनत्वक्...समाक्षिकः(का)**
**लेपः सनवनीतो ... ।**

खरीको बोक्राको धुलो मह र नौनीमा मिसाई लेप बनाएर दल्नाले व्यङ्ग रोग नाश हुन्छ । (अनुहारमा मसिना खटिरा आउने र कालो दाग बस्ने रोगलाई व्यङ्ग भनिन्छ) ।

**(थ) शालिग्राम निघण्टु :**

**अर्ज्जुनः फाल्गुनः पार्थश्चित्रयोधीधनञ्जयः । वैरान्तकः किरीटी च नदीसर्जोऽथपाण्डवः ॥**

अर्जुन, फाल्गुन, पार्थ, चित्रयोधी, धनञ्जय, वैरान्तक, किरीटी, नदीसर्ज र पाण्डव : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् ।

**अर्जुनस्तुवरश्चोष्णमधुरः शीतलःस्मृतः । कान्तिदोबलकृच्चैव लघुर्व्रणविशोधकः ॥**

**अस्थिभङ्गास्थिसंहारोहितः कफविनाशकः । पित्तश्रमतृषादाहमेहवातविनाशकः ॥**
**हृद्रोगं पाण्डुरोगं च विषबाधां क्षतक्षयम् । मेदोवृद्धिं रक्तदोषं घर्म्मश्वासं क्षतं तथा ॥**
**भस्मरोगं नाशयति पूर्वैरितिनिरुपितम् । (नि.र.) ।**

अर्जुन टर्रो, उष्णवीर्यको, गुलियो, शीतल गर्ने, कान्तिदायक, बलदायक, पचाउन सहज, खटिरा प्रशोधन गर्ने, भाँचिएका वा नाश भएका हाडमा हितकर, तथा कफविकार, पित्तविकार, थकाई, तिर्खा, डाह, प्रमेह, वातविकार, मुटुका रोग, पाण्डुरोग, विषविकार, घाउ, क्षयरोग र भस्मरोग नाशगर्ने गुणको हुन्छ ।

(द) **सरस्वती निघण्टु :**

**नदीसर्जोवीरतरुरिन्द्रद्रुः ककुभोऽर्जुनः ।**
**पार्थकीकीटविजया श्वेतवाहो धनञ्जयः ॥**

नदीसर्ज, वीरतरु, इन्द्रद्रु, ककुभ, अर्जुन, पार्थ, कीकीटविजया, श्वेतवाह र धनञ्जय : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् ।

(ध) **सोढल निघण्टु :**

**अर्जुने ककुभः पार्थः चित्रयोधी धनञ्जयः ।** 

अर्जुन, ककुध, पार्थ, चित्रयोधी र धनञ्जय : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् ।

(न) **सौश्रुत निघण्टु :**

**ककुभोऽर्जुनः सालसारादौ ।**

ककुभ, अर्जुन र सालसार (?) : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् ।

(प) **हृदयदीपक निघण्टु :**

**अर्जुनः ककुभः पार्थो धनञ्जयः श्वेतवाह इन्द्रतरुः ।**

अर्जुन, ककुभ, पार्थ, धनञ्जय, श्वेतवाह र इन्द्रतरु : यी अर्जुन वृक्षका पर्यायवाची नाम हुन् ।

## आंदेत रोग
## (Facial Palsy Bell's paralysis)

(क) सुश्रुत संहिता :

**गर्भिणीसूतिकाबालवृद्धक्षीणेष्वसृक्क्षये । उच्चैर्व्याहरतोऽत्यर्थं खादतः कठिनानि वा ॥**
**हसतो जृम्भतो भाराद्विषमाच्छयनादपि । शिरोनासौष्ठचिबुकललाटेक्षणसन्धिगः ॥**
**अर्दयित्वाऽनिलो वक्त्रमर्दितं जनयत्यतः ।**

गर्भवतीमा, सुत्केरीमा , बालकमा, रगत क्षय हुँदा, ठूलो स्वरले बोल्दा, अति पचाउन कठिन खानेकुरा खाँदा, हाँस्दा, आङ बटार्दा वा हाई गर्दा, कठिन वा असजिलो भारी उठाउँदा तथा असजिलो वा नमिलेको ओछ्यानमा सुत्दा टाउको, नाक, ओठ, गाला, निधार र आँखाका जोर्नीमा रहेको वायु उत्तेजित भई मुखलाई पीडित पार्न थाल्दछ । यसबाट उत्पन्न हुने रोगलाई 'अर्दित' भनिन्छ ।

**वक्रीभवति वक्त्रार्धं ग्रीवा चाप्यपवर्तते ॥ शिरश्चलति वाक्सङ्गो नेत्रादीनां च वैकृतम् ।**
**ग्रीवाचिबुकदन्तानां तस्मिन् पार्श्वे तु वेदना ॥ यस्याग्रजो रोमहर्षो वेपथुर्नेत्रमाविलम् ।**
**वायुरूर्ध्वं त्वचि स्वापस्तोदो मन्याहनुग्रहः ॥ तमर्दितमिति प्राहुर्व्याधिं व्याधिविशारदाः ॥**
**क्षीणस्यानिमिषाक्षस्य प्रसक्तं सक्तभाषिणः । न सिध्यत्यर्दितं बाढं त्रिवर्षं वेपनस्य च ॥**

लक्षण-यो रोग हुँदा आधा अनुहार टेढो हुन्छ, घाँटी पनि बाङ्गो हुन्छ । टाउको हल्लिरहन्छ, बोली राम्ररी निस्कँदैन र आँखा आदि पनि विकृत हुन्छन् । जुन भागमा अर्दित हुन्छ त्यो भागको घाँटी, गाला र दाँत दुख्दछ । पूर्वलक्षण-रौं ठाडा हुनु, शरीर काम्नु, आँखाबाट मलिन पानी बहनु, ऊर्ध्ववात हुनु, छाला लाटो जस्तो हुनु, सियोले घोचे जसरी दुख्नु, मन्यास्तम्भ हुनु र हनुग्रह हुनु यसका पूर्वलक्षण हुन् । यस्तो रोगलाई विद्वान वैद्यले 'अर्दित' रोग भनी बताएका छन् । जो दुब्लो छ, जो आँखा बन्द गर्न सक्दैन, जो ठूलो कष्टले बोल्दछ र जो कामिरहन्छ यस्ता मानिसलाई लागेको तीन वर्ष पुरानो अर्दित रोग बिलकुल ठिक हुँदैन ।

## अर्धावभेदक (अधा)
## (Hemicrania, Migrain)

(क) **नेपाली बृहत् शब्दकोश (अधकपाली)** : रुघा बिग्रिई वा पिनास पल्टिई आधा कपाल (टाउकाको आधा पाटो) दुख्ने रोग; अधा ।

(ख) **अष्टाङ्ग हृदय :**

**शिरस्तापोऽयम् अर्धे तु मूर्ध्नः सोऽर्धावभेदकः ॥७॥**

यस्तो किसिमले (अवभेदकमा जसरी) आधा कपाल (टाउको) दुख्नुलाई अधा भनिन्छ ।

## अर्भक (बालकविशेष)
## (Arbhaka)

(क) **कुलचन्द्रशर्मा गौतम :** अर्भक भनेको बच्चाको पर्यायवाची नाम हो ।

(ख) **राज निघण्टु :**

**जातोऽर्भकः पक्षदिनेन मासतः ...।**

पन्ध्र दिनदेखि एक महिनासम्मको बालकलाई अर्भक भनिन्छ ।

# अर्श (हर्सा)
# (Piles)

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश (हर्सा) : गुदद्वारको भित्रपट्टि खटिरो आउने र रगत बग्ने एक रोग; अल्काई; अर्श । हर्से : हर्साको रोग लागेको ।

(ख) हर्सालाई अंग्रेजीमा Hemorrhoids वा Piles भनिन्छ ।

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **अमरकोश :**

**...दुर्नामकार्शसी । ...स्यादर्शोरोगयुतोऽर्शसः ।**

दुर्नामक (दुर्नामन्) र अर्शस् : यी अल्काई (हर्सा) का पर्यायवाची नाम हुन् । अल्काई रोग हुने व्यक्तिलाई अर्शस भनिन्छ ।

(ख) **गरुड पुराण :**



**अथार्शसां निदानं च व्याख्यास्यमि च सुश्रुत ! । सर्वदा प्राणिनां मांसे कीलकाः प्रभवन्ति ये ॥१॥
अर्शांसि तस्मादुच्यन्ते गुदमार्गनिरोधनात् । दोषस्त्वङ्मांसमेदांसि सन्दूष्य विविधाकृतीन् ॥२॥
मांसांकुरानपानादौ कुर्वन्त्यर्शांसि ताञ्जगुः ।**

हे सुश्रुत अब म अल्काई (पाइल्स) रोगका बारेमा बताउँदछु । जीवको मासुमा सधैं जुन किला वा खिल (मासुमा पलाएको अतिरिक्त मासु) उम्रने गर्दछ, त्यसैलाई मल निष्काशन हुने बाटो अवरोध गर्ने हुनाले अल्काई भन्ने गरिन्छ । (अर्थात् मलद्वारको मुखमा रहेको ठूलो आन्द्राको भित्री सतहमा पलाउने मासु र त्यसले दिने दुःख सहितको रोगलाई अल्काई भनिन्छ) । त्रिदोषले शरीरको छाला, मासु र बोसोमा विकार उत्पन्न गरी अपानवायु निस्कने बाटोमा अनेक आकारप्रकारका मासुका टुसा उमार्दछ, तिनै टुसालाई अर्श वा अल्काई मानिएको छ ।

(ग) **अष्टाङ्ग हृदय :**

**अरिवत्प्राणिनो मांसकीलका विशसन्ति यत् । अर्शांसि तस्मादुच्यन्ते गुदमार्गनिरोधतः ॥**

मलद्वारमा निस्कने मासुको टुसा जसले दिसाको बाटो छेकी जीवलाई शत्रुले दिएजसरी दुःख दिने रोगलाई “अर्श” भनिन्छ ।

**दोषास्त्वङ्मांसमेदांसि सन्दूष्य विविधाकृतीन् । मांसाङ्कुरानपानादौ कुर्वन्त्यर्शांसि तान् जगुः ॥**

वात, कफ आदि दोषले मलद्वार, कान, नाक आदिका छाला, मासु र भित्री बोसो दूषित पारी अनेक आकारका मासुका टुसा उत्पन्न गर्ने रोगलाई नै अर्श वा अल्काई भनिन्छ ।

(घ) **भाव्रकाश संहिता :**

**दोषास्त्वङ्मांसमेदांसि सन्दूष्य विविधाकृतीन् । मांसाङ्कुरानपानादौ कुर्वन्त्यर्शांसि ताञ्जगुः ॥ त्वङ्मांसपदेन त्वङ्मांससमाश्रितं रक्तमपि गृह्यते किञ्चित्साधारणरक्तश्रावणोपदेशात् । आदिशब्देन नासानेत्रनाभिमेढ्रादिषु अपि कुर्वन्ति ।**


हर्सा (अर्श, अल्काई, hemorrhoids)

पित्त आदि दोष छाला, मासु र भित्री बोसोलाई दूषित पारी मलद्वार, नाक, आँखा, नाइटो , लिङ्ग आदि स्थानमा अनेक किसिमका पूर्ण आकारका मासुका टुसा पैदा गर्दछन् । यी टुसालाई अल्काई भनिन्छ । छाला र मासु : यी वचनले छाला र मासुमा हुने रगतलाई पनि ग्रहण गरिन्छ । यसैले रगतलाई पनि दूषित गरी अल्काई उत्पन्न गर्दछन् भनी थाहा पाउनू । किन कि अल्काईको पीडामा केही सामान्य किसिमले रगत पनि बहन्छ भनिएको छ ।

(ङ) **सुश्रुत संहिता :**

**तत्रानात्मवतां यथोक्तैः प्रकोपणैर्विरुद्धाध्यशनस्त्रीप्रसङ्गोत्कटुकासनपृष्ठयानवेगविधारणादिभिर्विशेषैः प्रकुपिता दोषा एकशो द्विशः समस्ताः शोणितसहिता वा यथोक्तं प्रसृताः प्रधानधमनीरनुप्रपद्याधो गत्वा गुदमागम्य प्रदूष्य गुदवलीर्मांसप्रोहाञ्जनयन्ति विशेषतो मन्दाग्नेः,**

**तथातृणकाष्ठोपललोष्ठवस्त्रादिभिः शीतोदकसंस्पर्शनाद्वा कन्दाः परिवृद्धिमासादयन्ति, तान्यर्शांसीत्याचक्षते॥**

व्रणप्रश्न (सूत्रस्थान अध्याय २१) मा बताइएका कारण तथा परस्पर विरोधी खानपिन, पहिले खाएपिएको नपची पुनः गरिने खानपिन, अत्यधिक स्त्री-सेवन, घोडा-साँढे- उँट आदिको ढाडमा बसेर गरिने (लामो) यात्रा तथा शरीरका हाच्छिउँ, दिसा, सपसाब आदिको वेग रोकेर बस्ने आदि जस्ता कारणले अनि विशेष कुपथ्यले उत्तेजित भएको अल्छी मानिसको पित्त आदि एक-दुई-तीन दोष तथा रगत सहित अनेक किसिमले फिँजिएर मुख्य नसामा छिरी तलतिर सर्दै मलद्वार रहेको भागमा पुगी त्यहाँ रहेको तीन तहको छाला (त्रिवलि) लाई दूषित पार्दै त्यहाँ रहेको मांसुलाई उठाउन थाल्दछ । विशेष गरी पाचनशक्ति कमजोर भएका मानिसलाई यस्तो बढी हुने गर्दछ । अनि त्यो उठेको मांसखण्ड घाँसपात, काठ, पत्थर, माटाको डल्लो, कपडा वा चिसो पानीको स्पर्शले गर्दा बढ्न थाल्दछ । यसरी बढ्ने मासुको भागलाई पहिलेका आचार्यहरूले अर्श वा अल्काई भनी बताएका छन् ।

**(च) राज निघण्टु :**

**अर्शांसि गुदकीलाः स्युर्दुर्नामानि गुदाङ्कुराः॥**

अल्काईलाई अर्श, गुदकील, दुर्नाम वा गुदाङ्कुर भनिन्छ ।

# अर्शोघ्न (ओल)
# (Elephant foot)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : अर्शोघ्न, शू(सू)रण र कन्द भनेको ओल हो ।


कन्दः । Amorphophallus paeoniifolius (Dennst.) Nicolson 1977. payer.de/amarakosa

(ख) नेपाली कृहत् शब्दकोश (ओल) : एकै भेट्नामा लामालामा धेरै पात हुने बाँकाको जस्तो नीलो फूल फुल्ने, हरियो घोगामा राता, पहैँला फल फल्ने र ठूलो कन्द हुने सानो एक बोट; एक प्रकारको जङ्गली कन्द; ओलक; सूरण ।

(ग) डा.चुनेकर : यसलाई ल्याटिन भाषामा *Amorphophallus campanulatus* Blume. (एमोर्फोफालस क्याम्पानुलाटस ब्लुम) भनिन्छ । राम्ररी पखाल्नाले वा धेरैबेर पकाउनाले वा अमिलो मिसाउनाले यसका दोष नाश हुन्छन् ।

(घ) आचार्य बालकृष्ण : यसको वानस्पतिक नाम *Amorphophallus paeoniifolius* (Dennst-Nicolson) (एमोर्फोफालस पायोनिफोलियस डेन्स्ट निकोल्सन) वा *Amorphophallus campanulatus* (Roxb.) Bl. ex. Decne. (एमोर्फोफालस क्याम्पानुलाटस रक्स्ब बीयल एक्स डेन्स) हो । यसका *Amorphophallus paeoniifolius* (Denst.) (एमोर्फोफालस पायोनिफोलियस डेन्स्ट), *Amorphophallus bulbife* (Roxb.) Blume (एमोर्फोफालस बुल्बिफर सक्स्ब ब्लुम) र *Amorphophallus margaritifer* (Roxb.)Kunth (एमोर्फोफालस मार्गारिटिफर रक्स्ब कुन्थ) गरी मुख्य तीन प्रजाति हुन्छन् । यसलाई अंग्रेजीमा Elephant yam भनिन्छ ।

(ङ) पेयर डी अमरकोश : यसको ल्याटिन नाम *Amorphophallus paeoniifolius* (Dennst.) (एमोर्फोफालस पायोनिफोलियस डेन्स्ट) हो ।

(च) के.यन.स्वामी : (१) शूरण : सूरण, जमीकन्द । (२) कण्डूल, दुर्नामारि, कन्दसूरण, तीव्रकन्द, कन्दाह, कन्दवर्धन, रुच्यकन्द : सूरण । (३) सुकन्दी, सुवृत्त, वातारि : सूरण, ओल । (४) स्थूलकन्दक, बहुकन्द : शूरण, ओल । (५) अर्शोघ्न : शूरण ।


कन्दः । Amorphophallus paeoniifolius (Dennst.) Nicolson 1977. payer.de/amarakosa

(छ) डा.साङ्ग्यधर : बन ओल (सितसूरण) लाई ल्याटिन भाषामा *Amorphophallus sylvaticus* (Roxb.) Kunth. (एमोर्फोफालस सिल्भाटिकस (रक्स्ब) कुन्थ) भनिन्छ । दुवै थरी ओललाई शुद्ध नपारी खान हुँदैन । यसलाई अमिली वा इमिलीका पात

हालेर उमाली शुद्ध पारिन्छ । यसको अंग्रेजी नाम Telugo-Potato वा Elephant's foot हो ।



Amorphophallus paeoniifolius (Dennst.) Nicolson 1977, payer.de/amarakosa

(ज) फर्माकोपिया : सूरणको वानस्पतिक नाम *Amorphophallus campanulatus* (Roxb.) Blume. (एमोर्फोफालस क्याम्पानुलाटस (रक्स्ब) ब्लुम) हो । यो Araceae (एरासिएइ) परिवारमा पर्दछ । ओखतीका लागि यसको गानुको धुलो २-१० ग्राम प्रयोग गरिन्छ । यसलाई अंग्रेजीमा Elephant foot भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधानमञ्जरी :**

**सूरणः स्याच्छत्रकः स्यान्महानालस्त्रिशीर्षपात् । त्रयङ्कुरश्चूञ्चुमारिश्च छत्रवृन्तस्सितात्मकः ॥**
**सूरणोऽन्योऽरुणश्छत्रकटाही कटही तथा । तीक्ष्णकन्दोऽहिकण्ठी च त्रिदण्डमधुरः स्मृतः ॥**
**भूकन्दो भूस्फोटः पूतिविरूढस्त्रिशीर्षको नग्नः ।**
**प्रावृड्भवोऽहिनालो वनसूरण उच्यते ककुत्स्फोटः ॥**





Amorphophallus paeoniifolius (Dennst.) Nicolson 1977, payer.de/amarakosa

सूरण, छत्रक, महानाल, त्रिशीर्षपात्, त्रयङ्कुर, चूञ्चुमारि, छत्रवृन्त र सितात्मक : यी ओलका नाम हुन् । अरुण, छत्रकटाही, कटही, तीक्ष्णकन्द, अहिकण्ठी र त्रिदण्डमधुर : यी अर्को थरी ओलका नाम हुन् । भूकन्द, भूस्फोट, पूतिविरूढ, त्रिशीर्षक, नग्न, प्रावृड्भव, अहिनाल, वनसूरण र ककुत्स्फोट : यी जङ्गली ओलका नाम हुन् ।

**(ख) अभिधान रत्नमाला :**

**सर्पनालः क्रूरकन्दो दार्वीकन्दश्च सूरणः ॥**

सर्पनाल, क्रूरकन्द, दार्वीकन्द र सूरण : यी ओलका नाम हुन् ।

**(ग) अमरकोश :**

**अर्शोघ्नः शूरणः कन्दो...।**

अर्शोघ्न र शू(सू)रण : यी ओलका नाम हुन् ।

**(घ) आयुर्वेद महोदधि :**

**रुच्यो दीपनपाचनः कृमिहरो मन्दानलोद्दीपनो हृद्यः श्लेष्महरो लघुर्बलकरो दुर्नामनिर्नाशना ।**
**अक्षाणामपि पाटवं प्रकुरुते सश्वासकासापहश्चक्षुष्योऽपि च सूरणः स्मृतिकरो हृत्पार्श्वशूलापहः ॥**


Amorphophallus paeoniifolius (Dennst.) Nicolson 1977, payer.de/amarakosa

ओल रुचिकारक, दीपनी, पाचनी, किरा नाशक, मन्दाग्निलाई ठिक गर्ने, मुटुका लागि फाइदाजनक, कफनाशक, पचाउन हलुका र बलदायक हुन्छ । यसले अल्काई, खोकी र दम निको पार्दछ तथा इन्द्रियलाई कुशल बनाउँदछ । यो आँखाका लागि लाभदायक, सम्झना शक्ति बढाउने तथा मुटु एवं कोखा दुखेको ठिक गर्ने गुणको हुन्छ ।

**(ङ) कैयदेव निघण्टु :**

**अर्शोघ्नः सूरणः कन्दः कण्डूलश्चित्रदण्डक ।**
**समष्ठीलोऽपरश्चौल्ल ओल्लो उल्ल वनोद्भवः ॥**

अर्शोघ्न, सूरण, कन्द, कण्डूल, चित्रदण्डक र समष्ठील एकथरी तथा ओल्ल, उल्ल र वनोद्भव अर्कोथरी (वन ओल) का नाम हुन् ।

**सूरणो विशदो रूक्षः कषायः कटुको लघुः । विष्टम्भो दीपनो रुच्यो बलासगुदकीलहृत् ॥**
**वनसूरणकन्दस्तु विशेषादर्शसां हितः । गुल्मे स्थौल्ये तथा वाते श्लेष्मवाते हितः परम् ॥**
**रक्तपित्तप्रकोपि स्याच्छाकं सूरणसम्भवम् ।**
**नालं सूरणजं रुच्यं कफवातहरं लघु ॥**
**अर्शसां तु विशेषेण हितं कामाग्निदीपनम् ।**
**वनसूरणजं रूक्षं नालं कटुविपाकि च ॥**
**दीपनं स्रंसनं गुल्मकृमिशूलनिषूदनम् ।**


Amorphophallus paeoniifolius (Dennst.) Nicolson 1977, payer.de/amarako

ओल सुन्दर, रुखो, टर्रो, पिरो, पचाउन सहज, कब्जियत गराउने, दीपनी, रुचिप्रद तथा कफविकार र अल्काई (गुदकील) नाशगर्ने गुणको हुन्छ । वन ओल विशेषगरी अल्काईमा हितकर हुन्छ । गुल्म, मोटोपन, वातविकार र कफ-वातविकारमा यो अति हितकर हुन्छ । ओलका सागले रक्तपित्तलाई उत्तेजित बनाउँदछ । ओलको डाँठ रुचिप्रद, कफविकार नाशक, वातविकार नाशक, पचाउन सहज, अल्काईमा विशेष लाभदायक र कामोत्तेजना बढाउने गुणको हुन्छ ।

वन ओलको डाँठ रुखो, पचेपछि पिरो, दीपनी, बहाउने तथा गुल्म, कीरा र शूल नाशगर्ने गुणको हुन्छ ।

(च) **द्रव्यगुणसङ्ग्रह :**

**शूरणो दीपनो रुच्यः कफघ्नो विशदो लघुः॥ विशेषादर्शसां पथ्यो भूकन्दस्त्वतिदोषलः ।**

ओल दीपनी, रुचिप्रद, कफविकार नाशक, सुन्दर, पचाउन सहज र विशेषगरी अल्काईरोगमा पथ्य हुन्छ । जङ्गली ओल भने अति दोषकारी हुन्छ ।



Amorphophallus paeoniifolius (Dennst.) Nicolson 1977. payer.de/amarakosa

(छ) **धन्वन्तरि निघण्टु :**

**अर्शोघ्नः सूरणः कन्दः कन्दार्हः कन्दवर्धनः । दुर्नामारिः सुवृत्तिश्च वातारिः कन्दसूरणः॥**
**सूरणः कटुको रुच्यो दीपनः पाचनस्तथा । कृमिदोषहरो वातशूलगुल्मास्रदोषनुत्॥**
**श्वासं कासं च च्छर्दिं च निवारयति सेवितः ।**

अर्शोघ्न, सूरण, कन्द, कन्दार्ह, कन्दवर्धन, दुर्नामारि, सुवृत्ति, वातारि र कन्दसूरण : यी ओलका पर्यायवाची नाम हुन् । यो पिरो, रुखो, दीपनी, पाचनी तथा कीराका विकार, वातविकार, शूल, गुल्म, रक्तविकार, दम, खोकी र वाकवाकी नाश गर्ने गुणको हुन्छ ।

(ज) **निघण्टुशेष :**

**सूरणे कण्डुरः कन्दोऽर्शोघाती चित्रदण्डकः ।**

सूरण, कण्डूर, कन्द, अर्शोघाती र चित्रदण्डक : यी ओलका नाम हुन् ।

(झ) **पर्यायरत्नमाला :**

**ओल्लः कन्दः शूरणश्च ।**

ओल्ल, कन्द र शूरण : यी ओलका नाम हुन् ।

(ञ) **भावप्रकाश निघण्टु :**

**सूरणः कन्द ओलश्च कन्दलोऽर्शोघ्न इत्यपि । सूरणो दीपनो रूक्षः कषायः कण्डुकृत् कटुः ॥**
**विष्टम्भी विशदो रुच्यः कफार्शः कृन्तनो लघुः । विशेषादर्शसे पथ्यः प्लीहगुल्मविनाशनः ॥**
**सर्वेषां कन्दशाकानां सूरणः श्रेष्ठ उच्यते । दद्रूणां कुष्ठिनां रक्तपित्तिनां न हितो हि सः ॥**
**सन्धानयोगं सम्प्राप्तः सूरणो गुणवत्तरः ।**



शूरणः । Amorphophallus paeoniifolius (Dennst.) Nicolson 1977, payer.de/amarakosa

सूरण, कन्द, ओल, कन्दल र अर्शोघ्न : यी ओलका नाम हुन् । ओलले पाचकाग्निलाई बाल्दछ । यो रुखो, टर्रो, शरीर चिलाउने बनाउने र पिरो हुन्छ । यसले कब्जियत गर्दछ । यो सेतो वा सफा हुन्छ । ओलले रुचि जगाउँदछ तथा कफविकार र अल्काई नाश गर्दछ । यो पचाउन हलुका हुन्छ । ओल विशेषतः अल्काई रोगमा पथ्य हुन्छ । यसले फियोका रोग र गुल्म नाश गर्दछ । सबै खालका कन्द-शाकमध्ये ओललाई श्रेष्ठ मानिन्छ । तर, दादका रोगी, कुष्ठका रोगी र रक्तपित्तका रोगीलाई ओल हितकर हुँदैन । अफ ओललाई साँधेर अचार आदि बनाउने हो भने यो बढी गुणकारी हुन्छ ।

(ट) **मदनपाल निघण्टु :**

**सूरणः कन्दलः कन्दो गुदामयहरोऽपरः । वल्लकन्दः सुरेन्द्रः स्याद्वन्योऽन्यश्चित्रकन्दकः ॥**

सूरण, कन्दल, कन्द र गुदामयहर : यी ओलका; वल्लकन्द र सुरेन्द्र : यी अर्को थरी ओलका तथा चित्रकन्दक : यो तेश्रो थरी बनमा हुने ओलका नाम हुन् ।

**सूरणो दीपनो रूक्षः कषायः कटुकण्डुकृत् । विष्टम्भी विशदो रुच्यः कफार्शः कृन्तनो लघुः ॥**
**नालं सूरणक रुच्यं कफवातहरं लघु । अर्शसां तु विशेषेण हितं कामाग्निदीपनम् ॥**
**सूरणो दीपनो रूक्षः कफार्शः कृन्तनो लघुः । तद्वदन्यो वज्रकन्दः कफघ्नः पित्तरक्तकृत् ॥**

ओल दीपनी, रुखो, टर्रो, पिरो, चिलाउने (वा कोक्याउने), कब्जियत गराउने, फैलने, रुचिप्रद, कफविकार र अल्काईलाई कोतरेर निकाल्ने र पचाउन सहज हुने गुणको हुन्छ । यसको डाँठ रुचिप्रद तथा कफविकार र वातविकार नाशक र पचाउन सहज हुन्छ । यसले अल्काई नाश गर्दछ र सहवासको चाहना बढाउँदछ । ओल दीपनी, रुखो, कफ र अल्काईलाई कोतरेर निकाल्ने र पचाउन सहज हुने गुणको हुन्छ । वज्रकन्दको नामले चिनिने वन-ओलमा पनि यिनै गुण हुन्छन् । यो ओल कफविकार नाशक र रक्तपित्त गराउने गुणको हुन्छ ।

(ठ) **माधवद्रव्यगुण :**

**दीपनः सूरणो रुच्यः कफघ्नो विशदो लघुः ॥ विशेषादर्शसां पथ्यो भूकन्दस्त्वतिदोषलः ।**

ओल दीपनी, रुचिप्रद, कफविकार नाशक, सुन्दर र पचाउन सहज हुन्छ । यो विशेषगरी अल्काईमा पथ्य हुन्छ । जङ्गली ओल अति दोषजनक हुन्छ ।

(ड) **राजनिघण्टु :**

**कण्डूलः शूरणः कन्दी सुकन्दी स्थूलकन्दकः । दुर्नामारिः सुवृत्तश्च वातारिः कन्दशूरणः ॥**
**अर्शोघ्नस्तीव्रकन्दश्च कन्दार्हः कन्दवर्धनः । बहुकन्दो रुच्यकन्दः शूरकन्दस्तु षोडशः ॥**
**शूरणः कटुकरुच्यदीपनः पाचनः क्रिमिकफानिलापहः ।**
**श्वासकासवमनार्शसां हरः शूलगुल्मशमनोऽस्रदोषनुत् ॥**


ओलको बोट (तस्बिर श्रोत : ईजनकपुरटुडे डटकम)

(१) कण्डूल, (२) शूरण, (३) कन्दी, (४) सुकन्दी, (५) स्थूलकन्दक, (६) दुर्नामारि, (७) सुवृत्त, (८) वातारि, (९) कन्दशूरण, (१०) अर्शोघ्न, (११) तीव्रकन्द, (१२) कन्दार्ह, (१३) कन्दवर्धन, (१४) बहुकन्द, (१५) रुच्यकन्द र (१६) शूरकन्द : यी सोह्र नाम ओलका नाम हुन् । ओल पिरो, रुचिकर, दीपनी, पाचनी तथा कीरा, कफविकार र वातविकार नाशक हुन्छ । यसले दम, खोकी, वाकवाकी, अल्काई, शूल, गुल्म र रक्तविकार नाश गर्दछ ।

**सितशूरणस्तु वन्यो वनकन्दोऽरण्यशूरणो वनजः ।**
**स श्वेतशूरणाख्यो वनकन्दः कण्डूलश्च सप्ताख्यः ॥**
**श्वेतशूरणको रुच्यः कटूष्णः कृमिनाशनः । गुल्मशूलादिदोषघ्नः स चारोचकहारकः ॥**

(१) सितशूरण, (२) वन्य, (३) वनकन्द, (४) अरण्यशूरण, (५) वनज, (६) वनकन्द र (७) कण्डूल : यी सात नाम जङ्गली ओलका नाम हुन् । यो रुचिकर, पिरो, उष्णवीर्यको र कीरा नाशक हुन्छ । यसले गुल्म, शूल आदि रोग र अरुची पनि नाश गर्दछ ।

**(ढ) राजवल्लभ निघण्टु :**

**शूरणो दीपनो रुच्यः कफघ्नो विशदोलघुः । विशेषादर्शसां पथ्यो ग्राम्यः कन्दस्तु दोषलः ॥**

ओल दीपनी, रुचिप्रद, कफविकार नाशक, सुन्दर र पचाउन सहज हुन्छ । यो विशेषगरी अल्काईमा पथ्य हुन्छ । गाउँघरतिर हुने ओलको कन्द (?) भने दोषकारक हुन्छ ।



अल्काई, बवासिर, अर्शः । hemorrhoid, payer.de/amarakosa

**(ण) शार्ङ्गधर संहिता :**

ओलले शरीरलाई छुँदा शरीर अति नै चिलाउँदछ र डाह हुन्छ ।

**(त) शालिग्राम निघण्टु :**

**सूरणः कन्दओल्लश्च कन्दलोऽर्शोघ्न इत्यपि । वज्रकन्दः सुरेन्द्रः स्याद्वन्योऽन्यश्चित्रकन्दकः । तद्वन्यो वज्रकन्दः कफघ्नः पित्तरक्तकृत् ।**

सूरण, कन्द, ओल्ल, कन्दल र अर्शोघ्न : यी ओलका नाम हुन् । वज्रकन्द, सुरेन्द्र र चित्रकन्दक : यी जङ्गली ओलका नाम हुन् । जङ्गली ओलले कफविकार नाश गर्दछ तर पित्तविकार र रक्तविकार गर्दछ ।

**(थ) सरस्वती निघण्टु :**

**अर्शोघ्नः शूरणः कन्दः सर्पनाली त्रिशीर्षकः । सूरणश्चेति कथितः शब्दाः पर्यायवाचकाः ॥**

अर्शोघ्न, शूरण, कन्द, सर्पनाली, त्रिशीर्षक र सूरण : यी ओलका नाम हुन् ।

**(द) हारीत संहिता :**

**दीपनः सूरणो रुच्यः कफघ्नो विशदो लघुः । विशेषात्सर्वपथ्यः स्यात्प्लीहगुल्मविनाशनः ॥**

ओल दीपनी र रुचिकर हुन्छ । यसले कफविकार नाश गर्दछ । मनोहर वा सुन्दर हुन्छ । पचाउन हलुका र सबै रोगमा पथ्य हुन्छ । यसले फियोका रोग र गुल्म नाश गर्दछ ।

# अलक्तक (माहुर)
(Alaktaka)

**परिभाषा :**

(क) **के.यन.स्वामी :** (१) अलक्तक : माहुर । लाहा । रूखको रातो बोक्रो । (२) राग : लाहाको रङ्ग । बुकुवा वा अङ्गराग । सधवाले हातगोडामा लगाउने माहुर । (३) निर्भर्त्सन, चक्रमर्दिनी : माहुर । (४) जननी : लाहा । माहुर । (५) जन्तुका : लाहा । लाक्षा ।

(ख) **नेपाली बृहत् शब्दकोश (माहुर) :** सधवा स्त्रीहरूले हात, गोडा र नङमा लगाउने, लाहाका फूलबाट तयार पारिएको पदार्थ; नखराग; माउर ।

(ग) **हिन्दी विश्वकोश (अलक्तक) :** महाभर । यो लाहाबाट बन्दछ र सौभाग्वती स्त्रीका गोडामा लगाइने गरिन्छ ।

(घ) **अंग्रेजी परिभाषा :** Red color painted by a still married woman in her nails and in the margins of her soles; lacquer.



आलक्तक (माहुर, महावर), तस्बिर श्रोत : गोवानवार्ताडटनेट

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**लाक्षाकुसुम्भमञ्जिष्ठाहिङ्गुलीगैरिकादिकम् । द्रव्यं विपाचिन्त रक्तमलक्तकमिति स्मृतम्॥**

लाहा, कुसुम, मजिठो, हिङ्गुली (माटोविशेष) र गेरु : यी पदार्थबाट विधिपूर्वक पकाएर निस्कने रातो पदार्थलाई अलक्तक भनिन्छ ।

**(ख) कैयदेव निघण्टु :**

**अलक्तको गुणैस्तद्वद्विशेषाद् व्यङ्गनाशनः ।**

अलक्तकको गुण पनि लाहाको जस्तै हुन्छ । यो विशेषगरी व्यङ्गरोग नाशगर्ने गुणको हुन्छ ।

**(ग) शालिग्राम निघण्टु :**

**अलक्तको रजारोधी रक्तपित्तक्षयापहः ।**
**प्रदरञ्चाप्यतीसारं सरक्तं क्षपयेद् ध्रुवम्॥ (आत्रेयसंहिता) ।**



अलक्तक रज रोक्ने तथा रक्तपित्त, क्षयरोग, प्रदर, रक्तातीसार नाशगर्ने गुणको हुन्छ । (पीपल, सिसौ आदि अनेक थरी रूखमा लाहा हुन्छ । सबैभन्दा उत्तम पीपलको रूखमा पाइने लाहा हुन्छ ।) ।

**(घ) राज निघण्टु :**

**अलक्तको जन्तुरसो रागो निर्भर्त्सनस्तथा । जननी जन्तुकारी च सन्धर्षा चक्रमर्दिनी॥**
**अलक्तकः सुतिक्तोष्णः कफवातामयापहः । कण्ठरुक्शमनो रुच्यो व्रणदोषार्तिनाशनः॥**

अलक्तक, जन्तुरस, राग, निर्भर्त्सन, जननी, जन्तुकारी, सन्धर्षा र चक्रमर्दिनी : यी माहुरका संस्कृत पर्यायवाची नामहरू हुन् । माहुर तीतो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले घाँटीका रोग शान्त पार्दछ, रुची जगाउँदछ र घाउखटिराको पीडा नाश गर्दछ ।

**शृङ्गारमा माहुरको प्रयोग :**

**(क) सुभाषितावली :**

**आदौ मज्जनचीरहारतिलकं नेत्राञ्जनं कुण्डले नासामौक्तिककेशपाशरचना सत्कञ्चुकं नूपुरौ ।**
**सौगन्ध्यं करकङ्कणं चरणयो रागो रणन्मेखला ताम्बूलं करदर्पणं चतुरता श्रृङ्गारकाः षोडश॥**

मयल माडेर पूरा शरीर नुहाउनु, सुन्दर वस्त्र लगाउनु, हार लगाउनु, तिलक वा टीका लगाउनु, आँखामा गाजल लगाउनु, कानमा (सुहाउँदा) कुण्डल वा गहना लगाउनु, नाकमा मोती लगाउनु, कपाल सजाउनु वा आकर्षक तरिकाले बाट्नु, राम्रो खालको चोलो लगाउनु, गोडामा पाउजु लगाउनु, शरीरमा अत्तर आदि सुगन्ध हाल्नु, हातमा बाला वा चुरा लगाउनु, गोडामा माहुर लगाउनु, कमरमा भुम्का भएको करधनी (गहना) लगाउनु, पान चपाउनु, हातमा ऐना लिएर अनुहार हेर्नु (कसैले यसको अर्थ औँठीविशेष भनी अर्थ लगाएका छन्) र (चलाख हुनु) : यी सोह्र शृङ्गार हुन् ।

(ख) **के.यन.स्वामी :** सोह्र किसिमका शृङ्गारहरू – बुकुवा लगाउनु, नुहाउनु, वस्त्र पहिरनु, मिस्सी लगाउनु, कपाल कोर्नु, गाजल, सिन्दूर, माहुर, टीका लगाउनु, कोठी बनाउनु, तिलहरी, अत्तर, गहना र फूलको माला लगाउनु, पान खानु र लाली लगाउनु ।

(ग) **नेपाली बृहत् शब्दकोश :** स्त्रीहरूले शरीर सजाउन अँगाल्ने सोह्र प्रकारका शृङ्गार : बुकुवा लाउनु, स्नान गर्नु, वस्त्रधारण गर्नु, मिसी लाउनु, कपाल कोर्नु, गाजल लाउनु, सिउँदोमा सिन्दूर लगाउनु, माहुर लगाउनु, निधारमा टिको लाउनु, चिउँडा वा गालामा कोठी बनाउनु, तिउरी लाउनु, अत्तर आदि सुगन्ध छर्कनु, गहनाहरू लाउनु, फूलको माला पहिरिनु, पान खानु र ओठमा लाली लाउनु ।

(घ) **हिन्दी विश्वकोश :** बुकुवा घस्नु, नुहाउनु, कपडा लगाउनु, कपाल सजाउनु, गाजल लगाउनु, सिउँदोमा सिन्दूर लगाउनु, गोडामा माहुर लगाउनु, टीका लगाउनु, चिउँडोमा कोठी बनाउनु, मेहन्दी लगाउनु, अत्तर आदि लगाउनु, गहना लगाउनु, फूलको माला लगाउनु, मिस्सी लगाउनु, पान चपाउनु र ओठ रङ्गाउनु ।

# अलजी (आँखाको रोगविशेष)
# (Inflammation of the eye etc.)

**(क) अष्टाङ्ग हृदय :**

**कनीनस्यान्तरलजी शोफो रुक्तोददाहवान् ।**

आँखाको पुतली भित्र सियोले घोचेजसरी चसचस गरी पीडा दिने जुन् सुजन हुन्छ त्यसलाई 'अलजी' भनिन्छ ।

**(ख) भावप्रकाश संहिता :**

**रक्ताऽसिता स्फोटचिता विज्ञेया त्वलजी बुधैः ।**

प्रमेहका कारण आउने राता र कालो रङको देखिने र वरिपरि अरू पिला पनि हुने पिलोलाई 'अलजी' भनिन्छ ।

**जाता सन्धौ कृष्णशुक्लेऽलजी स्यात्तस्मिन्नेव व्याहृता पूर्वलिङ्गैः ॥११३॥**
**रक्ता सिता स्फोटचिता दारुणा त्वलजी भवेत् ॥११४॥**



प्रमेहाधिकार खण्डमा बताइए अनुसार राता, सेता बिमिराले ढाकेको र रुखो वा डरलाग्दो खटिरालाई अलजी भनिन्छ । जोर्नीमा कालो वा सेतो भाग भएको खटिरा भए त्यसलाई 'अलजी' भनी जान्नू ।

**अलजी स्यात्तथा यादृक्प्रमेहपिडका तथा । सा च रक्तासिता स्फोटचिता च कथिता बुधैः ॥९॥**
**एषा रक्तपित्त निमित्ता ज्ञेया ॥**

पुरुष जननेन्द्रियमा उत्पन्न हुने रातो वा कालो हुने तथा अरु खटिराले घेरिएको हुने प्रमेहजन्य अलजी जस्तै नामक खटिरालाई 'अलजी' भनिन्छ । यो खटिरा रक्तविकार र पित्तविकारका कारण आउने गर्दछ ।

**(ग) सुश्रुत संहिता :**

**घनामवक्त्रां पिडकामुन्नां परिमण्डलाम् । अन्धालजीमल्पपूयां तां विद्यात् कफवातजाम् ॥**
**(वाग्भट-अलजी । माधव निदान-अन्त्रालजी ।)**

साह्रो, मुख नहुने, मास्तिरतिर उठेको, गोलो र थोरै पीप हुने खालको पिलोलाई 'अन्धालजी' भनिन्छ । यो कफविकार र वातविकारका कारण आउने गर्दछ ।

**अलजीलक्षणैर्युक्तामलजीं च वितर्कयेत् ।**

प्रमेहजन्य अलजी नामक पिलोका लक्षण हुने पुरुष जननेन्द्रियमा आउने पिलोलाई 'अलजी' भनी थाहा पाउनू ।

# अलस रोग
# (Chilblain)

**(क) सुश्रुत संहिता, माधव निदान :**

**क्लिन्नाङ्गुल्यन्तरौ पादौ कण्डूदाहरुगन्वितौ । दुष्टकर्दमसंस्पर्शादलसं तं विनिर्दिशेत्॥**

फोहोर हिलोमा लामो समय चल्ने कारणले जब दुवै गोडाका औंलाका बीचमा गिलोपन भई चिलाउने, पोल्ने र दुख्ने गर्दछ तब त्यस रोगलाई अलस भनी थाहा पाउनु पर्दछ ।

# अलास रोग
# (Sublingual abscess)

(क) **सुश्रुत संहिता :**

**जिह्वातले यः श्वयथुः प्रगाढः सोऽलाससंज्ञः कफरक्तमूर्तिः ।**
**जिह्वां स तु स्तम्भयति प्रवृद्धो मूले तु जिह्वा भृशमेति पाकम् ॥**

जिभ्रोको तलतिर मुख्यरूपमा कफविकार र रक्तविकारका कारण जुन् गम्भीर सुजन हुने गर्दछ त्यसलाई अलास भनिन्छ । यो रोग बढेपछि जिभ्रोलाई लाटो पार्दछ र फेदमा बेस्सरी पाक्न थाल्दछ ।

## अवपाटिका रोग
## (Laceration of the prepuce)

**(क) अष्टाङ्ग हृदय :**

**दुरूढं स्फुटितं चर्म निर्दिष्टम् अवपाटिका ।**

यदि कुनै कारणले पुरुष जननेन्द्रियको टुप्पातिर रहेको छाला च्यातिन्छ वा फुट्दछ भने त्यसको उपचार कठिनतापूर्वक मात्र सम्भव हुन्छ । यस्तो च्यातिने अवस्थालाई अवपाटिका भनिन्छ ।

**(ख) सुश्रुत संहिता, भावप्रकाश संहिता :**

**अल्पीयःखां यदा हर्षाद्बालां गच्छेत् स्त्रियं नरः । हस्ताभिघातादथवा चर्मण्युद्वर्तिते बलात्॥**
**मर्दनात्पीडनाद्वाऽपि शुक्रवेगविघाततः । यस्यावपाटयते चर्म तां विद्यादवपाटिकाम्॥**

जब कुनै पुरुष साना जननेन्द्रिय भएका बालिकाका साथ बलपूर्वक ग्राम्यधर्ममा संलग्न हुन्छ अथवा जब कुनै पुरुषको हातको कडा घर्षणका कारण जननेन्द्रियको छाला बलपूर्वक माथितिर सर्दछ अथवा मालिस गर्नाले, थिच्नाले वा वीर्यको वेग रोक्नाले त्यो भागको छाला फाट्दछ भने त्यस्तो रोगलाई अवपाटिका भनिन्छ ।

## अवमन्थ (रोगविशेष)
## Swellings caused by boils or contusions

(क) **अष्टाङ्ग हृदय :**

**पिटिका बहवो दीर्घा दीर्यन्ते मध्यतश्च याः । सोऽवमन्थः कफासृग्भ्यां वेदनारोमहर्षवान्॥**

कफविकार र रक्तविकारका कारण पुरुष जननेन्द्रियमा आउने ठूलो, लामो, दुखाउने, सिरिङ्ङ पार्ने (रोमाञ्चित) र बीचमा फुटेको हुने खटिरालाई अवमन्थ भनिन्छ ।

(ख) **सुश्रुत संहिता :**

**दीर्घा बह्व्यश्च पिडका दीर्यन्ते मध्यतस्तु याः । सोऽवमन्थः कफासृग्भ्यां वेदनारोमहर्षकृत्॥**

जब कफविकार र रक्तविकारका कारण दुखाउने र रोमाञ्चित पार्ने अति ठूलो पिलो पुरुष जननेन्द्रियमा आई बीचमा फुटेर जाने गर्दछ तब त्यसलाई अवमन्थ भनिन्छ ।

# अशोक
# (Sorrow-less tree)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) अशोक : एक रूख । यसका दुई भेद छन् । एक आँपको जस्तो किनारा खुम्चिएको पात, वसन्तमा फुल्ने बाहिर सेतो पानाको भित्र हरियो हुने छ वटा एक सरो मुसाका पुच्छर जस्तो पङ्खडी र बीचमा डल्लो केशर भएको फूल हुने । दुई फागुनमा फुल्ने हलुवाबेतको जस्तो पात हुने, आधा अङ्गुल लामो सेतो बोक्रा हुने र बीचमा दुई खण्ड परेझैं धर्का हुने ( असारमा पाक्ने) फल भएको ठूलो झुम्म परेको बोट हुने रूख । (२) अशोकम् : अशोकको फूल । (३) हेमपुष्प : अशोकको रूख । (४) वञ्जुल : अशोक । (५) ताम्रपल्लव : अशोकको रूख । (६) कङ्केल्लि : अशोकको रूख । (७) पिण्डपुष्प : अशोकको फूल । (८) पिण्डपुष्पम् : अशोकको रूख । (९) गन्धपुष्पम् : अशोक । (१०) नट : अशोकको रूख ।


अशोकः | *Saraca indica L., payer.de/amarakosa*

(ख) नेपाली बृहत् शब्दकोश : आँपका जस्ता पात हुने एक प्रकारको प्रसिद्ध रूख ।

(ग) भावप्रकाश निघण्टुका टीकाकार डा. कृष्णचन्द्र चुनेकर : सक्कली अशोकको ल्याटिन नाम *Saraca indica* Linn. हो तर मानिसहरू *Polyathia longifolia* Benth. & Hook.f. ल्याटिन नाम भएको वनस्पतिलाई गल्तीले अशोक मान्ने गर्दछन् ।

(घ) आचार्य बालकृष्ण : अशोकका दुई प्रजाति हुन्छन् । प्रायः *Polyathia longifolia* लाई अशोक मानिन्छ, यो गलत हो । वास्तविक अशोक *Saraca asoca* हो । वास्तविक अशोकका फूल सिन्दुरे वा राता हुन्छन् । यसलाई अंग्रेजीमा Sorrow-less tree भनिन्छ । नक्कली अशोकको संस्कृत नाम काष्ठदारु हो । यसलाई अंग्रेजीमा Indian fir, Buddha tree र Indian willow भनिन्छ । यो Caesalpiniaceae परिवारमा पर्दछ ।

(ङ) प्रेअर डी अमरकोशमा अशोकलाई *Saraca indica* वानस्पतिक नाम दिइएको छ ।

(च) द आयुर्वेद इन्साइक्लोपेडिया, स्वामी सदाशिव तिर्थ : यसलाई अंग्रेजीमा Ashoka Tree तथा ल्याटिन भाषामा *Saraca indica* Linn. भनिन्छ । (वीभर्टन सिटि लाइब्रेरी) ।

(छ) डा.सतिश चन्द्र साङ्ख्यधर : यसको ल्याटिन नाम *Suraca asoca* (Roxb.)De Wild वा *Suraca indica* auct., non Linn. हो ।

(ज) धन्वन्तरि निघण्टुका टीकाकार : अशोक Leguminosae; Caesalpiniaceae परिवारमा पर्दछ । यो सक्कली र नक्कली गरी दुई प्रकारको हुन्छ । सक्कली अशोकको वानस्पतिक नाम *Saraca indical* Linn. Syn. *Jonesia asoka* R. हो । यो ओखतीका लागि प्रयोग हुने रामायणमा आसुगी भनी वर्णन गरिएको सक्कली अशोक हो । यसका फूल राता हुन्छन् । नक्कली अशोकको वानस्पतिक नाम *Polyalthia longifolia* Benth. & Hook. हो । यसको फूल पहेँलो हुन्छ । यसलाई हिन्दीमा खोटा अशोक पनि भनिन्छ ।



अशोकः | *Saraca indica L., payer.de/amarakosa*

(झ) फर्माकोपिया : अशोकको वानस्पतिक नाम *Saraca asoca* (Rose.) De. Willd, Syn. *Saraca indica* Linn. हो । यो Leguminosae परिवारमा पर्दछ । यसको रूखको बोक्राको काँढा २०-३० ग्रामसम्म ओखतीमा प्रयोग हुन्छ ।



(ञ) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : यो Angiosperm समूह अन्तर्गत Fabaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Saraca asoca* (Roxb.) W.J.de Wilde हो ।

(ट) कुमारसम्भव, सर्ग ३ मा कालिदासले सुन्दरी कन्याका गोडाले छोएपछि यो अशोक फुल्दछ भन्ने भाव व्यक्त गर्दै लेखेका छन् - "अशोक रूखका हाँगाबिँगा सबै नयाँपालुवा र फूलका मञ्जरीले भरिपूर्ण भए । उसले सुन्दरीहरूको छमछम नूपुर बज्ने गोडाको स्पर्शलाई पनि कुरेन" । सम्भवतः अशोकको एक पर्यायवाची शब्द "स्त्रीपादादहतिदोहद" को अर्थलाई यसले पनि स्पष्ट पार्न मद्दत गर्दछ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**गतशोकोऽशोकाह्वः पिण्डीपुष्पश्च रक्तको राजी । चित्रश्च कर्णपूरो मञ्जरिको हेमपुष्प इति**
**निर्दिश्यते शोकनाशः चित्रस्तबकमञ्जरी । विशोको वीतशोकश्च शब्दैः पर्यायवाचकैः ॥**

गतशोक, शोकाह्व, पिण्डीपुष्प, रक्क, राजी, चित्र, कर्णपूर, मञ्जरिक, हेमपुष्प, शोकनाश, चित्रस्तबकमञ्जरी, विशोक र वीतशोक : यी अशोकका नाम हुन् ।


वञ्जुलः। Saraca indica L., payer.de/amarakosa

(ख) अभिधान रत्नमाला :

**अशोकः कर्णपूरश्च सुगन्धस्ताम्रपल्लवः ।**
**हेमपुष्पः पीतशाखो रक्तकश्चित्रकश्च सः ॥**

अशोक, कर्णपूर, सुगन्ध, ताम्रपल्लव, हेमपुष्प, पीतशाख, रक्तक र चित्रक : यी अशोकका नाम हुन् ।

(ग) अमरकोश :

**...वञ्जुलोऽशोके...।६४।**

वञ्जुल र अशोक : यी अशोकका नाम हुन् ।

(घ) अष्टाङ्ग निघण्टु :

**अशोको विगतशोकः सुभगस्ताम्रपल्लवः ।**



अशोक, विगतशोक, सुभग र ताम्रपल्लव : यी अशोकका नाम हुन् ।

(ङ) कैयदेव निघण्टु :

**गतशोको वीतशोको विशोकस्ताम्रपल्लवः ॥ पिण्डीपुष्पो हेमपुष्पः सुभगः कर्णपूरकः ।**
**विचित्रो रक्तको रागी रामस्तवकमञ्जरी ॥ चित्रशोकः शोकनाशः स्त्रीपादहतिदोहदः।**
**अशोकः शीतलः स्निधो वर्ण्यो ग्राही कषायकः ॥ दोषापचीतृषादाहकृमिशोषविषास्रजित् ।**

गतशोक, वीतशोक, विशोक, ताम्रपल्लव, पिण्डीपुष्प, हेमपुष्प, सुभग, कर्णपूरक, विचित्र, रक्तक, रागी, रामस्तवकमञ्जरी, चित्रशोक, शोकनाश, स्त्रीपाद र अतिदोहद : यी अशोकका नाम हुन् । यो शीतवीर्यको, चिल्लो, वर्णमा निखार लेराउने, ग्राही र टर्रो हुन्छ । यसले त्रिदोष, अपची, तिर्खा, डाह, कीरा, सुकेनाश, विषविकार र रक्तविकारलाई जित्दछ ।


अशोकः। Saraca indica L., payer.de/amarakosa

**(च) धन्वन्तरि निघण्टु :**

**अशोकः शोकनाशश्च विचित्रः कर्णपूरकः ॥**
**विशोको रक्तको रागी चित्रः षट्पदमञ्जरी । अशोकः शीतलश्चार्शः कृमीन् हन्ति प्रयोजितः ॥**
**अपचीं नाशयत्येव सर्वव्रणविनाशनः । अशोको मधुरो हृद्यः सन्धानीयः सुगन्धिकः ॥**

अशोक, शोकनाश, विचित्र, कर्णपूरक, विशोक, रक्तक, रागी, चित्र र षट्पदमञ्जरी : यी अशोकका नाम हुन् । अशोक शीतवीर्यको हुन्छ । यसको मिश्रण गरी तयार पारिएका ओखतीले अल्काई र कीरा नाश गर्दछ । यसले अपची त नाश गर्दछ नै सबै खालका घाउखटिरा पनि नाश गर्दछ । अशोक गुलियो, मुटुका लागि हितकर, अमिल्च्याउन वा दुई वस्तु मिलाउन उपयुक्त र (फूल) अत्तर बनाउन उपयोगी हुन्छ ।


सक्कली अशोकको फूल (तस्बिर श्रोत : आचार्य बालकृष्ण)

**(छ) निघण्टुशेष :**

**अशोके स्त्रीप्रियः शोकनाशनः स्यन्दनोऽलसः । वञ्जुलो मदनावासः स्त्रीपादाहतिदोहदः ॥**
**हेमपुष्पः कर्णपूरः कङ्केल्लिर्मधुमण्डनः । पिण्डपुष्पो लतावृक्षः पौलोमी-रोहिणीद्रुमः ॥**

अशोक, स्त्रीप्रिय, शोकनाशन, स्यन्दन, अलस, वञ्जुल, मदनावास, स्त्रीपादादहतिदोहद, हेमपुष्प, कर्णपूर, कङ्केल्लि, मधुमण्डन, पिण्डपुष्प, लतावृक्ष, पौलोमीद्रुम र रोहिणीद्रुम : यी अशोकका संस्कृत पर्यायवाची नामहरू हुन् ।
जसका कारण मृत्यु हुँदैन अथवा जसले गर्दा शोक हुँदैन त्यस्तो वृक्षलाई अशोक भनिन्छ । स्त्रीहरूलाई मनपर्ने हुनाले यसलाई स्त्रीप्रिय भनिन्छ । शोक नाश गर्दछ त्यसैले यसलाई शोकनाशन भनिन्छ । वृक्षबाट थोपा थोपा गरी रस चुहिने हुनाले यसलाई स्यन्दन भनिन्छ । नरम वा कमलो वा लचिलो हुन्छ त्यसैले यसलाई अलस भनिन्छ । हल्लिन्छ वा लहराउँदछ त्यसैले यसलाई बञ्जुल भनिन्छ । यो वृक्ष कामदेवको वासस्थान हुनाले यसलाई मदनवास भनिन्छ । गर्भवतीको गोडाको चाहना अनुकूलको कोमल हुनाले यसलाई स्त्रीपादाहतिदोहद भनिन्छ । पहेँला फूल हुन्छन् त्यसैले यसलाई हेमपुष्प भनिन्छ । कानलाई अलङ्कृत बनाउँदछ त्यसैले यसलाई कर्णपूर भनिन्छ । सुख दिन्छ वा पानी निकाल्दछ (चुहाउँदछ) यसैले यसलाई कङ्केल्लि भनिन्छ । वसन्त ऋतुलाई सजाउँदछ त्यसैले यसलाई मधुमण्डन भनिन्छ । डल्लो आकारका फूलका झुप्पा हुन्छन् त्यसैले यसलाई पिण्डपुष्प भनिन्छ । लहरा आकारको रूख हुन्छ त्यसैले यसलाई लतावृक्ष भनिन्छ । इन्द्रकी पत्नीको प्रिय वृक्ष हुनाले पौलोमीद्रुम तथा चन्द्रमाकी पत्नीको प्रिय वृक्ष हुनाले यसलाई रोहिणीवृक्ष भनिन्छ ।

**(ज) पर्यायरत्नमाला :**

**हेमपुष्पस्त्वशोकश्च कर्णपूरोऽङ्गनाप्रियः ॥**

हेमपुष्प, अशोक, कर्णपूर र अङ्गनाप्रिय : यी अशोकका नाम हुन् ।

(झ) **भावप्रकाश निघण्टु :**

**अशोको हेमपुष्पश्च वञ्जुलस्ताम्रपल्लवः । कङ्केलि पिण्डपुष्पश्च गन्धपुष्पो नटस्तथा ॥**
**अशोकः शीतलस्तिक्तो ग्राही वर्ण्यः कषायकः । दोषापचीतृषादाहकृमिशोषविषास्रजित् ॥**


अशोकः । *Saraca indica L., payer.de/amarakosa*

अशोक, हेमपुष्प, वञ्जुल, ताम्रपल्लव, कङ्केलि, पिण्डपुष्प, गन्धपुष्प र नट : यी अशोकका नाम हुन् । यसले शीतल गर्दछ । यो तीतो, सङ्ग्राही, वर्णमा निखार लेराउने र टर्रो हुन्छ । यसले त्रिदोष, अपची, तिर्खा, डाह, कीरा, सुजन, विषविकार र रक्तविकार नाश गर्दछ ।

(ञ) **मदनादि निघण्टु :**

**अशोको वीतशोकश्च सुभगस्ताम्रपल्लवः ।**
**पिण्डीपुष्पो हेमपुष्पो शोकघ्नः कर्णपूरकः ॥**
**तृड्दाहशोकमोहोघ्नः शीतवीर्योऽतिसारजित् ।**
**व्रण्यो विषघ्नः शोकघ्नः अशोकस्तिक्तको रसे ॥**



अशोक, वीतशोक, सुभग, ताम्रपल्लव, पिण्डीपुष्प, हेमपुष्प, शोकघ्न र कर्णपूरक : यी अशोकका नाम हुन् । यसले तिर्खा, डाह, शोक र मोह नाश गर्दछ । यो शीतवीर्यको हुन्छ । यसले अतिसारलाई जित्दछ । यसले खटिरा निकाल्दछ (वा खटिराका लागि हितकर ?) तथा विषविकार र शोक नाश गर्दछ । अशोक तीतो हुन्छ ।

(ट) **राज निघण्टु :**

**अशोकः शोकनाशः स्याद्विशोको वञ्जुलद्रुमः । मधुपुष्पोऽपशोकश्च कङ्केलिः केलिकस्तथा ॥**
**रक्तपल्लवकश्चित्रो विचित्रः कर्णपूरकः । सुभगः स्मराधिवासो दोषहारी प्रपल्लवः ॥**
**रागीतरुर्हेमपुष्पो रामावामङ्घ्रिघातकः । पिण्डीपुष्पो नटश्चैव पल्लवद्रुर्द्विविंशतिः ॥**
**अशोकः शिशिरो हृद्यः पित्तदाहश्रमापहः । गुल्मशूलोदराध्माननाशनः क्रिमिका(हा)रकः ॥**

(१) अशोक, (२) शोकनाश, (३) विशोक, (४) वञ्जुलद्रुम, (५) मधुपुष्प, (६) अपशोक, (७) कङ्केलि, (८) केलिक, (९) रक्तपल्लवक, (१०) चित्र, (११) विचित्र, (१२) कर्णपूरक, (१३) सुभग, (१४) स्मराधिवास, (१५) दोषहारी, (१६) प्रपल्लव, (१७) रागीतरु, (१८) हेमपुष्प, (१९) रामावामङ्घ्रिघातक, (२०) पिण्डीपुष्प, (२१) नट र (२२) पल्लवद्रु : यी बाईस नाम अशोकका नाम हुन् । अशोक शीतवीर्यको, मुटुका लागि हितकर तथा पित्तविकार, डाह र थकाई नाशक हुन्छ । यसले गुल्म, शूल,

पेटका रोग र आध्मान नाश गर्दछ तर कीरा पार्दछ । (पेटका रोग नाश गर्ने ओखतीले पेटमा कीरा पार्दछ भन्दा युक्तिसङ्गत हुँदैन । यसैले छपन्नौ श्लोकको अन्तिममा कृमिकारकको साटो कृमिहारक पाठ उपयुक्त हुने देखिन्छ) ।

(ठ) **शालिग्राम निघण्टु :**

**अशोकः शोकनाशश्च विचित्रः कर्णपूरकः । कङ्केलिर्हेमपुष्पश्च पिण्डपुष्पस्तथैव च ॥**

अशोक, शोकनाश, विचित्र, कर्णपूरक, कङ्केलि, हेमपुष्प र पिण्डपुष्प : यी अशोकका नाम हुन् ।

**अशोकोमधुरः शीतश्चास्थिसन्धानकृन्मतः । प्रियः सुगन्धिः कृमिकृत्तुवरोष्णश्च तिक्तकः ॥**
**शरीरकान्तिकृच्चैव स्त्रीणामुच्छोकनाशनः । ग्राहीपित्तहरो दाहश्रमगुल्मोदरापहः ॥**
**शूलाध्मोविषंचार्शो व्रणं सर्वां तृषं तथा । शोथापचीतृषश्चैव नाशयेद्रक्ताजां रुजम् ॥**


लहरे हुर्केका नक्कली अशोक वृक्ष नजिकै संकलक, ने.रा.बैङ्क, अतिथि गृह परिसर, पोखरा, नेपाल

अशोक गुलियो, शीतवीर्यको, हाडलाई जोड्ने, प्रिय, सुगन्धी, कीरानाशक, टर्रो, उष्णवीर्यको, तीतो, शरीरको चमक बढाउने, स्त्रीको शोक नाश गर्ने, ग्राही, पित्तविकार नाशक, डाह, थकाई, गुल्म र पेटका रोग नाशक, शूल, आध्मान, विषविकार, अल्काई, सबै प्रकारका घाउखटिरा, तिर्खा, सुजन, अपची र रक्तविकार नाशक हुन्छ ।



(ड) **सरस्वती निघण्टु :**

**अशोको वञ्जुलो माली सुभगस्ताम्रपल्लवः ॥ पिण्डीपुष्पश्च कङ्केल्लिः कर्णपूरः सुपुष्पकः ॥**

अशोक, वञ्जुल, माली, सुभग, ताम्रपल्लव, पिण्डीपुष्प, कङ्केल्लि, कर्णपूर, सुपुष्पक : यी अशोकका नाम हुन् ।

(ढ) **सोढल निघण्टु :**

**अशोके शोकनाशश्च विचित्रः कर्णपूरकः ॥ कङ्केलिर्हेमपुष्पश्च पिण्डपुष्पस्तथैव च ॥**

अशोक, शोकनाश, विचित्र, कर्णपूरक, कङ्केलि, हेमपुष्प र पिण्डपुष्प : यी अशोकका नाम हुन् ।

(ण) **सौश्रुत निघण्टु :**

**अशोको वीतशोकश्च पिण्डीपुष्पस्तथैव च । हेमपुष्पः कर्णपूरः शोकनाशन एव च ॥**

अशोक, वीतशोक, पिण्डीपुष्प, हेमपुष्प, कर्णपूर र शोकनाशन : यी अशोकका नाम हुन् ।

# अश्मरी (पत्थरी)
# (Bladder stone)

**परिभाषा :**

(क) **नेपाली बृहत् शब्दकोश :** खास गरी मृगौला वा पित्तथैलीमा पत्थरजस्तै साह्रो बनी वेदना बढाउने एक खालको रोग । उक्त रोगद्वारा जमेको पत्थर ।

(ख) आयुर्वेदको दिइएको विवरण अनुसार यसलाई अंग्रेजीमा Bladder stone मान्नु उपयुक्त हुन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अमरकोश :**

**अश्मरी मूत्रकृच्छ्रं स्यात्... ।**

अश्मरी र मूत्रकृच्छ्र : यी मूत्रकृच्छ्रका नाम हुन् । मूत्रस्थानमा ढुङ्गो जम्ने रोगलाई मूत्रकृच्छ्र भनिन्छ ।




(ख) **अष्टाङ्ग हृदय :**

**यदा वायुर्मुखं वस्तेरावृत्य परिशोषयेत् । मूत्रं सपित्तं सकफं सशुक्रं वा तदा क्रमात्॥
संजायतेऽश्मरी घोरा पित्ताद् गोरिव रोचना । श्लेष्माश्रया च सर्वा स्याद्...।**

जब वायुले मूत्राशयको मुखलाई बन्द गरी वा रोकी पित्त, कफ वा शुक्र सहितको पिसाबलाई सुकाउन थाल्दछ तब बिस्तारै बिस्तारै डरलाग्दो पत्थरी रोग उत्पन्न हुने गर्दछ । यो त्यसरी नै उत्पन्न हुन्छ जसरी गाईको पित्त सुकेर उसको पित्ताशयमा गोरोचन उत्पन्न हुने गर्दछ ।

(ग) **चरक संहिता, भावप्रकाश संहिता र माधव निदान :**

**विशोषयेद्वस्तिगतं सशुक्रं मूत्रं सपित्तं पवनः कफं वा ।
यदा तदाऽश्मर्युपजायते तु क्रमेण पित्तेष्विव रोचना गोः॥ नैकदोषाश्रयाः सर्वाः ।**

शरीर भित्रको वायुले मूत्राशयमा हुने वीर्य सहितको पिसाबलाई अथवा पित्त सहितको कफलाई सुकाउँदछ, तब पत्थरी हुने गर्दछ । यो पत्थरी जसरी गाईका पित्तथैलीमा गोरोचन बढ्दछ त्यसरी नै क्रमशः बढ्दछ । (सबै खालका पत्थरी एक थरी नभई अनेक थरी दोष मिलेर हुने गर्दछन् ।

(घ) **राज निघण्टु :**

**...मूत्ररोधोऽश्मरी च सा॥**

मूत्ररोध र अश्मरी : यी पत्थरीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

# अश्व (घोडा)
# (Horse)

**विस्तृत परिभाषा :**

**(क) नेपाली बृहत् शब्दकोश :**

चार खुट्टामा नफाटेका खुर हुने, गर्धनमा लामालामा भुत्ला हुने, सवारीको काममा आउने तथा मालसामान बोकाउन र गाडीमा जोत्नसमेत हुने प्रसिद्ध घरपाला पशु; घोडा; तुरग; तुरङ्ग; मराल; यवन; वाजी; वातायन; वृषल; हटहट (बालबोलीमा); हय । (१) पोथी घोडालाई घोडी भनिन्छ । (२) घोडाको बच्चीलाई बछेडी र घोडाको बच्चोलाई बछेडो भनिन्छ । (३) अँधेरी : सधिएका हात्ती, घोडा आदिको आँखामा लगाइने पर्दा । (४) कणेली : घोडाको लगाम; करेली । (५) करेली : काठी कसेको बखत घोडाका टाउकामा लाउने छालाको साज; मोहोडा । (६) काठी : घोडाको पिठचूँमा बस्नाका निम्ति जिनकनि कसिने खास गरी छालाको आसन वा काठको साँचो । (७) कोर्रा : काठ वा बेतको समाउने मूठ भएको र छालाका लोतीहरूको चुल्ठी वा डोरी बाटिएको, घोडालाई तह लाउन पिट्ने साधन । (८) कौल : घोडाका काठीको अघिल्लो भागमा दायाँबायाँ दुवैतिर पर्ने गरी अड्याइने ब्यागजस्तो वस्तु । (९) कौलतड : घोडाको काठीमा कौल कस्ने छालाको पेटी । (१०) खररा : घोडाको जीउ मल्ने र बुरुसमा लागेका रौँ र धूलोसमेत झार्ने बुरुसजस्तै फलामे साधन । (११) खुर्ची : घोडालाई बोकाइने भारी हाल्ने ठूलो थैलो । (१२) गलथना : छाँद्ने क्रममा घोडाको थुतुनामा लगाइने छालाको साज । (१३) चौरास : चढिने घोडाका घाँटीमा लगाइने ससाना घण्टाहरूको माला । (१४) जयपत्र : अश्वमेधका घोडाका टाउकामा टाँसिने पत्र; विजयपत्र । (१५) जिन : सवारी गर्नुपर्दा घोडा आदिको पिठिउँमा रादिने आसन । (१६) जिनकाठी : घोडाको पिठिउँमा ओछ्याइने जीन र त्यसमाथि राखिने काठी । (१७) जिनपोस : घोडाको काठीमनि बिछ्याइने बाक्लो ऊनी कपडा । (१८) जेरबन्द : घोडाको पेटमा बाँध्ने काठीको साज; जेडबन्दा । (१९) डहना : लगाम झुन्ड्याउनका निम्ति घोडाका मुखभित्र रहने काँडादार फलामे डन्डी; नारी । (२०) तङ : घोडामा काठी कस्ने पेटी; पटार । (२१) ताजन : घोडालाई पिट्ने र तह लाउने छडी । (२२) दुम्ची : घोडाको पुच्छरमा अड्काइने काठीको अवयव । (२३) नाल : घोडाका टापमा ठोकिने अर्ध-चन्द्रकार फलामे साधन । (२४) नालबन्दी : घोडाको टापमा नाल ठोक्ने काम । त्यस्तो काम गर्ने पेसा भएको व्यक्ति । (२५) पछाड : घोडाको पछाडिका खुट्टा बाँध्ने डोरी । (२६) बाग : घोडा आदिको लगाम; बागडोर । (२७) बालतङ : घोडाको काठीमा पटार कस्ने वा जडिने छाला । (२८) मोहडा : घोडाका टाउकामा लगाइने लगाम आदि साज । (२९) रज्जु : घोडाको मुखमा लगाउने डोरी; लगामडोरी । (३०) रश्मि : रथ वा सादा घोडाका मुखबाट चालकको हातसम्म पुग्ने डोरी; चालकले घोडालाई वशमा राख्न प्रयोग गर्ने साधन । घोडाको लगाम; गाडाको रास । (३१) रिकाब : घोडा चढ्दा गोडा अड्याउने काठमि झुन्ड्याइएको पाउदान । (३२) रिकाबद्वार : काठीमा दायाँबायाँ दुवैतिर रिकाब अड्याउन बाँधिने छालाको फित्ता । (३३) शिरद्वार : घोडाका टाउकामा कसिने छालाको उपकरण । (३४) साज : सवारीका निम्ति घोडा आदि सजाउने (काठी, लगाम आदि) सामान । (३५) हेल : घोडाको गलथना र गर्धन बाँध्ने धागाको डोरी ।

(१) अडियल : हिँड्दा-हिँड्दै बीचमा अडिने वा रोकिने स्वभाव भएको (घोडा); अडाहा; अडिलो । (२) आख्ता : खसी पारिएको घोडा; सुमरेको घोडा । (३) आख्ते : खसी पारिएको (घोडा) । (३)

बाइपङ्खी : हावा-जस्तै छिटो दौडने वा हावामा उड्ने (घोडा) । दन्त्यकथामा वर्णित, पखेटा भएको र प्रसिद्ध (काल्पनिक घोडा) । (४) लताहा : लात्ती हान्ने स्वभावको घोडा ।

(१) अरबी : पानीदार र ठूलो जातको घोडा । अरब देशमा पाइने घोडा । (२) कक्रेजा : रातो भुइँमा सेतो वा सेतोमा रातो बुट्टा भएको घोडा । (३) कुमेद : गाढा तेल रङ्गको एक थरी घोडा । (४) चिनियाँ च्यान्टा : एक प्रकारको च्यान्टे पुड्के घोडा । (५) च्यान्टा घोडा : सानो गाँठीको फुर्तिलो घोडा । (६) टाँगन : होचो कदको फुर्तिलो घोडा; च्यान्टे घोडा; पहाडी टट्टु; टाँगन; टाँगनघोडा । (७) ताजी : अरब देशमा पाइने एक जातको घोडा । (८) तिलौरा : कालो र सेतो मिसिएको वा खैरा तिलको जस्तो रङ हुने घोडा । (९) भोटेघोडा : लेकमा विशेष गरी भोटतिरबाट आउने लामालामा बाक्ला रौँ हुने एक जातको घोडा । (१०) महावीर : सेतो घोडा । (११) वैला : एक जातको असल घोडा । (१२) श्यामकर्ण : सबै शरीर सेतो र कानमात्र कालो भएको उत्तम जातको घोडा; श्यामकर्ने । (यस्तो घोडा फापिलो र अश्वमेध यज्ञका निम्ति उपयोगी मानिन्छ) । (१३) सब्जा : कालो भाव मिसिएको सेतो रङको घोडा । (१४) सैन्धव : सिन्धुदेशमा हुने घोडाको एक जात ।

(१) अश्वकर्ण : घोडाको कान । (२) केशर : घोडाका घिच्रामाथि हुने लामालामा रौँ; याल; जगर; शटा । (३) टाप : घोडा, गधा आदिका गोडाको टेक्ने भाग; घोडा आदिको खुर । (४) देवमणि : घोडाका गर्दनमा हुने रौँको भुमरी । (५) मुसुरो : घोडाको पहिले आउने दाँतको कोथो । (६) लादी : घोडाको बिष्ठा; लिदी ।

(१) अश्वमेध : गोत्रहत्या, विप्रहत्या आदि महापापको प्रायश्चितको निम्ति वा छेउछाउका सबै राजाहरूलाई अधिकारमा राखी चक्रवर्ती बन्नका लागि एक वर्षसम्म खास लक्षणयुक्त घोडालाई स्वतन्त्र छाडी पछि त्यही घोडाको बलि दिएर गरिने एक किसिमको ठूलो यज्ञ । (२) यायावर : अश्वमेध यज्ञमा छोडिएको घोडा ।



(१) अश्वयान : घोडाले चलाउने सवारी; बग्गी; एक्का; घोडागाडी । (२) एक्का : एकएक घोडा मात्र नारिएको बग्गी; एकघोडे बग्गी । (३) घोडागाडी : घोडाले तान्ने गाडी; बग्गी; एक्का; टमटम । (४) चौघडी : चारवटा घोडाद्वारा तानिने बग्गी; चौघोडी । (५) टमटम : एउटै घोडाले तान्ने, दुई अग्लाअग्ला पाङ्ग्रा भएको हल्का बग्गी; एक्का । (६) टाँगा : एउटा घोडाले तान्ने अग्ला दुई पाङ्ग्रा भएको सानो बग्गी; टमटम; टाङा । (७) नार्नु : बग्गीमा घोडा जोत्नु । (८) प्रवहण : गोरु वा घोडाले तान्ने, पर्दा भएको बग्गी वा पालकी; पर्दावाल सवारी । (९) बग्गी : कोठाजस्तो बस्ने ठाउँ भएको, घोडाले तान्ने एक किसिमको सवारी । (१०) बग्गीखाना : बग्गी राख्ने ठाउँ । (११) बम : बग्गीमा नारिएका घोडाहरूका माझमा रहेने लामो काठ । (१२) सवार : सवारीका लागि घोडामाथि चढ्ने व्यक्ति; घोडसवार; घोडचढी । बग्गी, घोडा आदि हाँक्ने व्यक्ति; सारथि । (१३) सवारी : घोडा वा घोडा नारिएको वाहनमा बसेर कहीँ जाने काम । (१४) सवारी साधन : सवारीका निम्ति प्रयोग गरिने घोडा (आदि) साधन । (१५) सवारी सुविधा : सवारीका लागि प्राप्त हुने घोडा (आदि) साधन । (१६) सालेबम : चारवटा घोडा जोतेर तानिने ठूलो बग्गी ।

(१) कदमः तालिम पाएका घोडाको हिँडाइका प्रकारमध्ये केही विशेष प्रकार (छोटी कदम, कडी कदम) । (२) कावा : घोडालाई सधाउन वा रफत गराउन वृत्तमा दौडाउने काम । (३) चाल : घोडाको हिँडाइ । (४) टिम्नु : घोडचडीको नियन्त्रणमा नरही घोडा वेगले दौडनु । (५) डुल्की : उफ्रेजस्तो गरी

चारै खुट्टा छुट्टछुट्टै वा क्रमैले उठाएर दगुर्ने घोडाको चाल । (६) पैयाँ : घोडाको दगुर्ने किसिम; फर्दचालभन्दा कम र कदमचालभन्दा धेरै गतिशील चाल । (७) रेचित : घोडाको एक चाल । (८) सर्पट : अगाडिका दुबै खुट्टा एकसाथ फालेर वेगसित दुगुर्ने घोडाको एक चाल ।


घोडा (तस्बिर श्रोत : पेयर डी अमरकोश)

(१) अश्वशाला : घोडा बाँध्ने ठाउँ; तबेला । (२) तबेला : घोडा बाँध्ने ठाउँ; अस्तबलखाना; अश्वशाला ।

(१) अश्वशास्त्र : घोडाका विषयमा शालिहोत्रीले लेखेको पुस्तक वा ग्रन्थ । घोडाको उपचारका सम्बन्धमा लेखिएको विषय; अश्वशुभाशुभपरीक्षा । (२) अश्वायुर्वेद : अश्वचिकित्सा शास्त्र; शालिहोत्र; घोडाको उपचारका सम्बन्धमा जानकारी दिने ग्रन्थ ।



(१) आरोह : घोडा आदि चढ्ने मानिस । (२) आरोहक : घोडचढी; आरोही । (३) घोडचढी : घोडा चढ्ने; घोडा चढेर सवार हुने; घोडसवार । (४) राग : घोडाको काठीमा बसेर जाँघले च्याप्ने एक प्रक्रिया । (५) सधाउनु : घोडा (आदि) लाई आफूले चाहे अनुसार हिँड्ने वा काम गर्ने पार्नु । (६) हटहट : घोडा चढ्ने कामको अनुकरणका रूपमा प्रयोग हुने शब्द ।

(१) चिरुवादार : घोडाको हेरचाह, सेवा-शुश्रूषा आदि गर्ने मानिस; सइस । (२) सइस : घोडाको रेखदेख वा स्याहारसुसार गर्ने नोकर; चिरुवादार ।

(१) हिलिनु : घोडा कराउनु; हिनहिनाउनु । (२) हीही : घोडा कराएको आबाज; हिनहिनाहट ।

(१) अश्वशक्ति : घोडाको शक्तिबराबर नाप गर्ने एक नापो । आजभोलिको चलनअनुसार पौने सात मन वा ५५० पाउण्ड अथवा लगभग २५० किलोको भार एक फुट माथि उठाउनलाई चाहिनेजति तागत । (हर्श पावर) । (२) चौघडे : चारवटा घोडा भएको; चौघोडे; चौघरा (३) पोलो : हात्ती वा घोडामा चढेर खेलिने खेलविशेष । (४) मखौरो : लौरीका टुप्पामा घोडाका पुच्छरका रौं आदि बाँधेर बनाइएको, झिँगा आदि धपाइने चमरजस्तो साधन ।

सारथि : घोडा आदिको लगाम समातेर रथ वा बग्गी हाँक्ने व्यक्ति; कोचवान; चालक ।

**(ख) डा. साङ्ग्रधर :**

घोडालाई अंग्रेजीमा Horse तथा ल्याटिन भाषामा *Equus caballus* भनिन्छ । घोडीलाई अंग्रेजीमा The Mare भनिन्छ । घोडाका बच्चालाई अंग्रेजीमा Young offspring of Horse भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**तुरगतुरङ्गतुरङ्गमसप्त्यैकशफविवाजिमुद्गभुजः । हयवाहहंसहरयोऽण्डघोटश्रीसुतभ्रमणा ॥**
**वृषोण्डजश्शालिहोत्रस्तुङ्गको बहुविक्रमः । विलास्यश्च इति प्रोक्ताश्शब्दाः पर्यायवाचकाः ॥**

तुरग, तुरङ्ग, तुरङ्गम, सप्ति, एकशफ, वाजिन्, मुद्गभुज, हय, वाह, हंस (तुरङ्गभेद), हरयोऽण्ड ? घोट, श्रीसुतभ्रमणा ? वृषोण्डज ? शालिहोत्र, तुङ्गक ? बहुविक्रम ? र विलास ? : यी घोडाका नाम हुन् ।

**(ख) अमरकोश :**

**वीतं त्वसनरं...अश्वं...।**



युद्धमा काम नलाग्ने खालको अर्थात् चुत्थो घोडालाई 'वीत' भनिन्छ ।

**घोटके वीतितुरगतुरङ्गाश्वतुरङ्गमाः ॥ वाजिवाहार्हगन्धर्वहयसैन्धवसप्तयः ।**

घोटक, वीति(पीति), तुरग, तुरङ्ग, वाजिन्, वाह, अर्वन्, गन्धर्व, हय, सैन्धव र सप्ति : यी घोडाका पर्यायवाची नाम हुन् ।

**आजानेयाः कुलीनाः स्युर्विनीताः साधुवाहिनः ॥**
**वनायुजाः पारसीकाः काम्बोजा वाह्लिका हयाः । ययुरश्वोऽश्वमेधीयो जवनस्तु जवाधिकः ॥**

आजानेय र कुलीन : यी ताजी वा असल घोडाका नाम हुन् । विनीत र साधुवाहिन् : यी चालमा लागेको घोडाका नाम हुन् । वनायुज, पारसीक, काम्बोज र वाह्लिक : यी क्रमैले वनायु, पारसी, कम्बोज र वाह्लिक देशमा पैदा भएका चार थरी घोडाविशेषका एक-एक नाम हुन् । अश्वमेध यज्ञ गर्न छाडिने घोडालाई ययु भनिन्छ । खुब दगुर्ने अर्थात् तेजगतिको घोडालाई जवन भनिन्छ ।

**पृष्ठ्यः स्थौरी सितः कर्को रथ्यो वोढा रथस्य यः । बालः किशोरो वाम्यश्वा वडवा वाडवं गणे ॥**

पृष्ठ्य र स्थौरिन् : यी लद्दू वा टट्टूका नाम हुन् । सेतो घोडालाई कर्क भनिन्छ । बग्गीको घोडालाई रथ्य भनिन्छ । घोडाको बच्चालाई किशोर भनिन्छ । वामी, अश्वा र वडवा : यी घोडीका नाम हुन् । घोडीको समूहलाई वाडव भनिन्छ ।

**त्रिष्वाश्वीनं यदश्वेन दिनेनैकेन गम्यते । कश्यं तु मध्यमश्वानां हेषा ह्रेषा च निःस्वनः ॥**
**निगालस्तु गलोद्देशो वृन्दे त्वश्वीयमाश्ववत् । आस्कन्दितं धौरितकं रेचितं वल्गितं प्लुतम् ॥**

घोडाले एक दिनमा हिँड्न सक्ने मार्गप्रभृतिलाई आश्वीन भनिन्छ । घोडाको कम्मरलाई कश्य भनिन्छ । हेषा, ह्रेषा र निस्वन : यी घोडाले गरेको शब्दका नाम हुन् । घोडाको घाँटीलाई निगाल भनिन्छ । आश्वीय र आश्व : यी घोडाको समूहका नाम हुन् । आस्कन्दित, धौरितक, रेचित, वल्गित र प्लुत : यी घोडाको चालविशेषका एक-एक नाम हुन् । (हेर्नु-सुन्नु केही नगरेर भएको घोडाको दौडाइलाई आस्कन्दित, सोझो मध्यम चालको हिँडाइलाई धौरितक, मध्यम चालले घुमेर हिँड्नुलाई रेचित, अघिल्लो भाग खुव उचालेर हिँड्नुलाई वल्गित र उफ्रेर दौडनुलाई प्लुत भन्दछन् ।) ।

**गतयोऽमूः पञ्च धारा घोणा तु प्रोथमस्त्रियाम् । कविका तु खलीनोऽस्त्री शफं क्लीबे खुः पुमान् ॥**
**पुच्छो स्त्री लूमलाङ्गूले वालहस्तश्च वालधिः । त्रिषूपावृत्तलुठितौ परावृत्ते मुहुर्भुवि ॥**

घोडाका उल्लेखित पाँच गति वा चाललाई धारा भनिन्छ । घोणा र प्रोथ : यी घोडाका नाकका नाम हुन् । कसैकसैले घोडाको थुतुनुको नाम पनि भनेका छन् । कविका र खलीन : यी लगामका नाम हुन् । शफ र खुर : यी घोडाप्रभृतिको खुरका नाम हुन् । पुच्छ, लूम र लाङ्ग(ङ्गु)ल : यी पुच्छरका नाम हुन् । वालहस्त र वालधि : यी पुच्छरका रौंको गुच्छका नाम हुन् । उपावृत्त र लुठित : यी भुइँमा लडीबुडी गर्ने घोडाप्रभृतिका नाम हुन् ।



**...खुरेऽप्यश्वस्य वर्तकः । ...सादिनौ द्वौ सारथिहयारोहौ...। ..भाण्डमश्वाभरणे...। ललामं...पुण्ड्राश्वभूषा...।**

घोडाको खुरलाई वर्तक पनि भनिन्छ । सारथि वा घोडसवारलाई सादिन् भनिन्छ । घोडाको साजलाई भाण्ड भनिन्छ । ललाम शब्दले घोडाको निधारमा हुने जन्मसिद्ध चिह्न (तारो), घोडाको साज र घोडालाई बुझाउँदछ ।

(ग) **अष्टाङ्ग निघण्टु :**

**हयोऽश्वस्तुरगो वाजी सप्तिर्वाहस्तु बाडवः ।**

हय, अश्व, तुरग, वाजी, सप्ति, वाह र बाडव : यी घोडाका नाम हुन् ।

(घ) **आयुर्वेद महोदधि :**

**उष्णमैकशफं बल्यं श्वासवातहरं पयः । मधुराम्लरसं रूक्षं लवणानुरसं लघु ॥**

घोडी आदि एकखुरे जनावरको दूध तातो, बलदायक र दम एवं वातरोग नाशक हुन्छ । यो दूध रुखो, मिठो, सजिलै पच्ने र केही अमिलो हुन्छ । यी जनावरको दूधमा पचेपछि केही नुनिलोपन हुन्छ ।

**वाडवं सुमधुरं बलवर्णस्वेददाहमुपयाति विनाशम् ।**
**दीपनीयमपि दोषलं सदा चाक्षुषं च मरुतः प्रविकोपि ॥**

घोडीको दही मिठो, बल-वर्णकारक, पसिना र डाह हटाउने तथा दीपन हुन्छ । यसले दोष बढाउँदछ । यो हरहमेशा आँखाको लागि अहितकर र वातदोष बढाउने गुणको हुन्छ ।

**दीपनीयमचक्षुक्ष्यं वातलं दधि वाडवम् । गुरु चोष्णं कषायं च कफमूत्रावहं च तत् ॥**

घोडीको दही दीपन, आँखाका लागि हानिकारक र वातदोष बढाउने गुणको हुन्छ । यो पचाउन कठिन, गर्मी गर्ने र टर्रो स्वादको हुन्छ । यसले मूत्रविकार ठिक गर्दछ ।

**पाके लघूष्णं वीर्ये च कषायं कफनाशनम् । दीपनं बद्धमूत्रं च विद्यादैकशफं घृतम् ॥**

घोडी आदि एक खुर हुने पशुको घिउ पचेपछि हलुका हुन्छ, गर्मी गर्दछ, टर्रो हुन्छ र कफविकार नाश गर्दछ । यो दीपन हुन्छ तर मूत्रमा रोकावट पुऱ्याउँदछ ।

**... हयं मूत्रं तैलयोग्यं क्वचिद्भवेत् । सक्षारं कटुकं तिक्तमुन्मादकुष्ठरोगजित् ॥**

घोडाको मूत्र तैलीय औषधी बनाउन प्रयोग गरिन्छ । यो नुनिलो, पिरो र तितो हुन्छ । यसले पागलपन र कुष्ठरोग भगाउँदछ ।



(ङ) **कैयदेव निघण्टु :**

**घोटो वाहो हरिः सप्तिर्वीतिरश्वस्तुरङ्गमः ॥**
**अर्वा वाजी हयो हंसो गन्धर्वः सैन्धवो जवी । शालिहोत्रः कीकटश्च तुरङ्गस्तुरगो यजुः ॥**
**वाजिनी वडवा वामी प्रसूकाश्वा च घोटिका । किशोरः पोतको बालो दुर्विनीतस्तु सूकलः ॥**

घोट, वाह, हरि, सप्ति, वीति, अश्व, तुरङ्गम, अर्वा, वाजी, हय, हंस, गन्धर्व, सैन्धव, जवी, शालिहोत्र, कीकट, तुरङ्ग, तुरग र यजु : यी घोडाका नाम हुन् । वाजिनी, वडवा, वामी, प्रसूका र घोटिका : यी घोडीका नाम हुन् । किशोर र पोतका : यी घोडाका बछडाका नाम हुन् । खराब स्वभावको घोडालाई सूकल भनिन्छ ।

**बाडवं ... क्षीरं साम्लं सलवणं लघु । शाखावातहरं बल्यं रूक्षोष्णं मधुरं रसे ॥**

घोडीको दूध केही अमिलो, केही नुनिलो, पचाउन सहज, शाखावात नामक रोग नाशगर्ने, बलदायक, रुखो, उष्णवीर्यको र गुलियो हुन्छ ।

**अश्वाद्येकशफस्याज्यं पाके कटु कफप्रणुत् । सकषायं बद्धमूत्रं लघूष्णं वह्निदीपनम् ॥**

घोडा आदि एकखुरे जनावरको घिउ पचेपछि पिरो, कफविकार नाशगर्ने, केही टर्रो, पिसाब रोक्ने, पचाउन सहज, उष्णवीर्यको र अग्निवर्धक हुन्छ ।

**अश्वमूत्रं कटु क्षारं तीक्ष्णोष्णं दीपनं जयेत् । उन्मादकुष्ठदद्रुश्च कृमिमेहकफानिलान्॥**
**शस्येत दारुणे शूले किलासे क्षारकर्मणि ।**

घोडाको मूत्र पिरो, क्षारयुक्त, तिक्खर, उष्णवीर्यको तथा पागलपन, कुष्ठ, दाद, कीरा, प्रमेह र वातविकारलाई जित्ने गुणको हुन्छ । यो कडा खालको शूलरोगमा, किलास रोगमा र क्षरकर्ममा उपयोगी हुन्छ ।

**अश्वमांसं लघु स्वादु बृंहणं कटुपाकि च । चक्षुष्यं दीपनं बल्यं वृष्यं पित्तकफप्रदम्॥**

घोडाको मासु पचाउन सहज, स्वादिलो, पौष्टिक र पचेपछि पिरो हुन्छ । यो आँखाका लागि हितकर, दीपनी, बलदायक, वीर्यवर्धक तथा पित्तविकार र कफविकार गर्ने गुणको हुन्छ ।

**(च) चरक संहिता :**

**बल्यं स्थैर्यकरं सर्वमुष्णं चैकशफं पयः । साम्लं सलवणं रूक्षं शाखावातहरं लघु॥**

घोडा आदि एकखुरे जनावरको दूध बलदायक, शरीरलाई स्थिर राख्ने, उष्णवीर्यको, केही अमिलो, केही नुनिलो, रुखो, शाखावात नामक वातरोग नाशक र पचाउन सहज हुने गुणको हुन्छ ।

**(छ) द्रव्यगुणसङ्ग्रह :**

**आश्वं कफहरं मूत्रं वातचेतोविकारनुत्॥ (चेतोविकारौ उन्मादापस्मारौ) ।**

घोडाको मूत्र कफविकार, पापलपन र छारेरोग नाशगर्ने गुणको हुन्छ ।

**हयमांसं बलकरमुष्णं मारुतनाशनम् ।**

घोडाको मासु बलदायक, उष्णवीर्यको र वातविकार नाशगर्ने गुणको हुन्छ ।

**(ज) धन्वन्तरि निघण्टु :**

**अश्वाक्षीरं स्मृतं साम्लं लवणं दीपनं लघु । देहस्थैर्यकरं बल्यं गौरवकान्तिकृत् सरम्॥**
**श्वासवातहरं साम्लं लवणं रुचिदीप्तिकृत् ।**

घोडाको दूध केही अमिलो, नुनिलो, दीपनी, पचाउन सहज, शरीरलाई स्थिर बनाइराख्ने, बलदायक, भारी, चमक दिने, मलमूत्रलाई तलतिर सार्ने, दम र वातविकार नाशक, हल्का अमिलो, नुनिलो, रुचिप्रद र तेजदायक गुणको हुन्छ ।

**दीपनीयमचक्षुष्यं वातलं दधि वाडवम् । रूक्षमुष्णं कषायं च कफमूत्रापहं च तत्॥**

घोडीको दही आँखाका लागि अहितकर, वातविकार गर्ने, रुखो, उष्णवीर्यको, टर्रो तथा कफविकार र मूत्रविकार नाशगर्ने गुणको हुन्छ ।

**अश्वासर्पिस्तु कटुकं मधुरं च कषायकम्॥ ईषद्दीपनदं मूर्च्छाहारि वाताल्पदं गुरु ।**

घोडीको घिउ पिरो, गुलियो, टर्रो, केही दीपनी, बेहोसी नाशक, थोरै वातविकार गर्ने र पचाउन कठिन हुन्छ ।

**घोटोऽश्वस्तुरगो वाजी हरिर्हंसस्तुरङ्गमः । शालिहोत्रो जवी सप्तिस्तुरङ्गश्च ययुर्हयः॥**
**घोटिका वडवा वामी प्रसूकाऽश्वा च वाजिनी । आश्वं सलवणं स्निग्धं बल्यं च गुरु बृंहणम्॥**
**घोटकस्तु कटुः पाके दीपनः कफपित्तकृत् । वातहृद्बृंहणो बल्यश्चक्षुष्यो मधुरो लघुः॥**

घोट, अश्व, तुरग, वाजी, हरि, हंस, तुरङ्गम, शालिहोत्र, जवी, सप्ति, तुरङ्ग, ययु र घोटहय : यी घोडाका तथा घोटिका, वडवा, वामी, प्रसूका, अश्वा र वाजिनी : यी घोडीका पर्यायवाची नाम हुन् । घोडाको मासु नुनिलो, चिल्लो, बलदायक, पचाउन कठिन र पौष्टिक हुन्छ । घोटकको मासु (?) पचेपछि पिरो, दीपनी, कफविकार र पित्तविकार गर्ने, वातविकार नाश गर्ने, पुष्टिदायक, बलदायक, आँखाका लागि हितकर, गुलियो र पचाउन सहज हुन्छ ।



(झ) **पर्यायरत्नमाला :**

**अश्वस्तुरङ्गमो वाजी तुरङ्गस्तुरगो हयः ।**

अश्व, तुरङ्गम, वाजी, तुरङ्ग, तुरग र हय : यी घोडाका नाम हुन् ।

(ञ) **भावप्रकाश निघण्टु :**

**घोटकेऽप्यश्वतुरगास्तुरङ्गमाश्च तुरङ्गाः । बाजिवाहार्वगन्धर्वहयसैन्धवसप्तयः॥**

घोटक, अश्व, तुरग, तुरङ्ग, तुरङ्गम, बाजि, वाह, अर्व (अर्वन्), गन्धर्व, हय, सैन्धव र सप्ति : यी घोडाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**रूक्षोष्णं वडवाक्षीरं बल्यं शोषानिलापहम्॥ अम्लं पटु लघु स्वादु सर्वमेकशफं तथा ।**

घोडीको दूध रुखो, गर्मी गर्ने, बलदायक, शोष नाशक, वातविकार नाशक, अमिलो, नुनिलो, पचाउन सहज र स्वादिलो हुन्छ । सबैखाले एकखुरे जनावरको दूध यही गुणको हुन्छ ।

**वृद्धिं करोति देहाग्नेर्लघु पाके विषापहम् । तर्पणं नेत्ररोगघ्नं दाहनुद् वडवाघृतम् ॥**

घोडीको घिउले शरीर र जठराग्निलाई बढाउँदछ । यो पचेपछि हलुका हुन्छ । यसले विषविकार नाश गर्दछ र तृप्ति दिन्छ । यो घिउले आँखाका रोग र डाह नाश गर्दछ ।

**अश्वमांसन्तु तुवरं वह्निकृत्कफपित्तलम् । वातहृद् बृहणं बल्यं चक्षुष्यं मधुरं लघु ॥**

घोडाको मासु टर्रो र गुलियो मिश्रित स्वादको हुन्छ । यसले जठराग्निलाई बाल्दछ तथा कफविकार र पित्तविकार गर्दछ । यो मासुले वातविकार नाश गर्दछ । घोडाको मासु पौष्टिक, बलदायक, आँखाका लागि हितकारी र पचाउन सहज हुन्छ ।

**(ट) मदनपाल निघण्टु :**

**घोटकः सैन्धवो वाजी तुरङ्गस्तुरगो हयः । तुरङ्गमोऽश्वो गन्धर्वो वाहः सप्तिर्यजुर्जवी ॥**
**घोटिका वडवा वामी प्रसूताऽश्वा च वाजिनी ।**



घोटक, सैन्धव, वाजी, तुरङ्ग, तुरग, हय, तुरङ्गम, अश्व, गन्धर्व, वाह, सप्ति, यजु र जवी : यी घोडाका संस्कृत पर्यायवाची नामहरू हुन् । घोटिका, वडवा, वामी, प्रसूता, अश्वा र वाजिनी : यी घोडीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**आश्वमुष्णं पयो रूक्षं बल्यं वातकफापहम् । लावणाम्लं लघु स्वादु सर्व मैकशफं तथा ॥**

घोडीको दूध उष्णवीर्यको, रुखो, बलदायक तथा वातविकार र कफविकार नाशक हुन्छ । यो नुनिलो, अमिलो, पचाउन सहज र स्वादिलो हुन्छ । एकखुरे सबै जनावरको दूधमा पनि यिनै गुणहरू हुन्छन् ।

**अश्वाद्यैकशफं रूक्षं दध्यभिष्यन्दि दोषलम् । दीपनम् स्वादु चक्षुष्यं वातकृत्कफमूत्रनुत् ॥**

घोडी आदि एकखुरे पशुको दही रुखो, अभिष्यन्दी, दोषकारक, दीपनी, स्वादिलो, आँखाका लागि हितकर, वातविकार गर्ने तथा कफविकार र मूत्ररोग नाश गर्ने गुणको हुन्छ ।

**आश्वं भेदि विशेषेण कफदद्रुकृमीन्हरेत् ॥**

घोडाको मूत्र विशाषतः भेदनी हुन्छ । यसले कफविकार, दाद र कीरा नाश गर्दछ ।

**घोटकः कटुकः पाके दीपनः कफपित्तकृत् ॥ वातहृद्बृंहणो बल्यश्चक्षुष्यो मधुरो लघुः ॥**

घोडाको मासु पचेपछि पिरो हुन्छ । यो दीपनी, कफविकार गर्ने, पित्तविकार गर्ने, वातविकार नाशक, पौष्टिक, बलदायक, आँखाका लागि हितकर, गुलियो र पचाउन सहज हुन्छ ।

## (ठ) राज निघण्टु :

**अश्वो घोटस्तुरङ्गोऽर्वा तुरगश्च तुरङ्गमः । वाहो वाजी मुद्गभोजी वीतिः सप्तिश्च सैन्धवः ॥**
**हरिर्हयश्च धाराटो जवनो जीवनो जवी । गन्धर्वो वाहनश्रेष्ठः श्रीभ्राताऽमृतसोदरः ॥**

अश्व, घोट, तुरङ्ग, अर्वा, तुरग, तुरङ्गम, वाह, वाजी, मुद्गभोजी, वीति, सप्ति, सैन्धव, हरि, हय, धाराट, जवन, जीवन, जवी, गन्धर्व, वाहनश्रेष्ठ, श्रीभ्राता र अमृतसोदर : यी घोडाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**आरट्टसिन्धुजवनायुजपारसीककाम्बोजबाह्लिकमुखा विविधास्तुरङ्गाः ।**
**साम्राणशेफकमुखा अपि देशतः स्युर्वर्णेन तेऽपि च पुनर्बहुधा भवन्ति ॥**

आरट्ट, सिन्धुज, वनायुज, पारसीक, काम्बोज, बाह्लिकमुख, साम्राण, शेफकमुखा आदि जस्तो घोडाका अनेक जात हुन्छन् । यी पनि देश र रङ अनुसार अनेक थरी हुन्छन् ।

**श्वेतः कर्कः सोऽथ रक्तस्तु शोणो हैमः कृष्णो नीलवर्णस्तु नीलः ।**
**शुभ्रैर्नेत्रैर्मल्लिकाक्षो निदिष्टः कृष्णैरुक्तः सोऽयमिन्द्रायुधाख्यः ॥**
**इत्थं नानावर्णभेदेन वाजी ज्ञातव्योऽयं लोकरूढैः सुधीभिः ।**
**अत्रास्माभिर्न प्रपञ्चः कृतोऽस्मादाजानेयोऽप्यत्र वाजी कुलीनः ॥**

सेतो घोडालाई कर्क, रातो घोडालाई शोण, कालो घोडालाई हैम, नीलो घोडालाई नील, सेतो आँखा हुने घोडालाई मल्लिकाक्ष र गाढा कालो रङको घोडालाई इन्द्रायुध भनिन्छ । यसरी रङ र चलन अनुसार घोडाको वर्गिकरण गरिएको हुन्छ । यस सम्बन्धमा यस क्षेत्रका विज्ञहरूलाई बढी ज्ञान हुन्छ, त्यसैले हामीले राम्रा जातका घोडाहरूमा (मात्र) ध्यान दिएका छौं ।

**सुकुलः सुविनीताश्वः किशोरस्तुरगार्भकः ॥ वाजिनी वडवा चापि प्रसूरश्वाऽश्विनी च सा ॥**

सुकुल, सुविनीताश्व, किशोर र तुरगार्भक : यी नाम घोडाको बछडाका संस्कृत पर्यायवाची नामहरू हुन् । वाजिनी, वडवा, प्रसू, अश्वा र अश्विनी : यी घोडीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**अश्वीक्षीरं तु रूक्षाम्लं लवणं दीपनं लघु । देहस्थैर्यकरं बल्यं गौरवं कान्तिकृत् परम् ॥**

घोडीको दूध रुखो, अमिलो, नुनिलो, दीपनी, पचाउन सहज, शरीरलाई स्थिर राख्ने, बलदायक, भारीपन गराउने र शरीरमा अत्यन्त चमक लेराउने गुणको हुन्छ ।

**अश्वादधि स्यान्मधुरं कषायं कफार्तिमूर्च्छाऽऽमयहारि रूक्षम् ।**
**वाताल्पदं दीपनकारि नेत्रदोषापहं तत् कथितं पृथिव्याम् ॥**

घोडीको दही गुलियो, टर्रो तथा कफविकार र बेहोसीपना नाशक र रुखो हुन्छ । यसले थोरै वातविकार गर्दछ । यो दही पृथिवीमा दीपनी र आँखाका रोग नाशक हुन्छ भनिएको छ ।

**अश्वीयं नवनीतं स्यात् कषायं कफवातजित् । चक्षुष्यं कटुकं चोष्णमीषद्वातापहारकम् ॥**

घोडीको नौनी टर्रो, कफविकार र वातविकारलाई जित्ने, आँखाका लागि फाइदाजनक, पिरो, उष्णवीर्यको र थोरै मात्रामा वातविकार नाशक समेत हुन्छ ।

**अश्वीसर्पिस्तु कटुकं मधुरं च कषायकम् । ईषद्दीपनदं मूर्च्छा हारि वाताल्पदं गुरु ॥**

घोडीको घिउ पिरो, गुलियो, टर्रो, थोरै दीपनी, बेहोसीपन नाशक, थोरै वातविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

**अश्वमूत्रं तु तिक्तोष्णं तीक्ष्णं च विषदोषजित् । वातप्रकोपशमनं पित्तकारि प्रदीपनम् ॥**

घोडाको मूत्र तीतो, उष्णवीर्यको, तिक्खर र विषविकारलाई जित्ने गुणको हुन्छ । यसले वातविकारलाई शान्त पार्दछ, पित्तविकार बढाउँदछ र दीपनी हुन्छ ।



**अश्वमांसं भवेदुष्णं वातघ्नं बलदं लघु । पित्तदाहप्रदं नृणां तदेतच्चातिसेवनात् ॥**

घोडाको मासु उष्णवीर्यको, वातविकार नाशक, बलदायक, पचाउन सहज तथा धेरै खाँदा पित्तविकार र डाह गराउने गुणको हुन्छ ।

(ड) **राजवल्लभ निघण्टु :**

**अश्वीक्षीरं सलवणं मधुराम्लरसं गुरु । वाडवं दधि वातघ्नं दीपनं चक्षुषोर्हितम् ।**
**हयमांसं बलकरमुष्णं मारुतनाशनम् ॥**

घोडीको दूध केही नुनिलो, गुलियो, अमिलो र पचाउन कठिन हुन्छ । घोडाको दही वातविकार नाशक, दीपनी र आँखाका लागि हितकर हुन्छ । घोडाको मासु बलदायक, उष्णवीर्यको र वातविकार नाशगर्ने गुणको हुन्छ ।

(ढ) **शालिग्राम निघण्टु :**

**वाजिजं समधुरं बलवर्णद दाहमुपयाति गुरुत्वम् ।**

**दीपनीयमतिदोषलं सदा चाक्षुषं दधि मरुत्प्रकोपि च॥**

घोडीको दही गुलियो, बल र वर्ण दिने, डाह गर्ने, पचाउन कठिन, दीपनी, अति दोषकारक, आँखाका लागि हितकर र वातविकारलाई उत्तेजित पार्ने गुणको हुन्छ ।

**अश्वीतक्रं तु तुवरं किञ्चिद्वातकरं मतम् । अग्निदीप्तिकरं रूक्षं नेत्र्यं मूर्च्छाकफापहम्॥**

घोडीको तक्र टर्रो, केही वातविकार गर्ने, पाचनशक्ति बढाउने, रुखो, आँखाका लागि हितकर तथा बेहोसी र कफविकार नाश गर्ने गुणको हुन्छ ।

**आश्विन्यानवनीतन्तु तुवरं कटुकं मतम् ।**
**अचक्षुष्यं स्मृतं चोष्णं कफवातविनाशनम्॥ (निघण्टु रत्नाकर)**

घोडीको नौनी टर्रो, पिरो, आँखाका लागि लाभ नगर्ने, उष्णवीर्यको तथा कफविकार र वातविकार नाश गर्ने गुणको हुन्छ ।

**वृद्धिं करोति देहाग्नेर्लघुपाके विषापहम् । तर्पणं नत्रेरोगघ्नं दाहनुद्वडवाघृतम्॥**

घोडीको घिउ शरीर बढाउने, पाचनशक्ति बढाउने, चाँडै पच्ने वा पचेपछि हलुका हुने, विषविकार नाश गर्ने, तृप्तिदायक, आँखाका रोग नाश गर्ने र डाह नाश गर्ने गुणको हुन्छ ।

**अश्वीघृतं तु मधुरं किञ्चिच्चाग्निप्रदीपकम् । तुवरं कटुकं चैव मलमूत्रावरोधकम्॥**
**किञ्चिच्च वातलं चोष्णं पाककाले लघुस्कृतम् । गुरु च कफमूर्च्छानां नाशनं परमं मतम्॥**

घोडीको घिउ गुलियो, थोरै पाचनशक्ति बढाउने, टर्रो, पिरो, दिसापिसाब रोक्ने, केही वातविकार गर्ने, उष्णवीर्यको, पचेपछि पचाउन सहज, शुरुमा पचाउन कठिन तथा कफविकार र बेहोसीलाई प्रभावकारी ढङ्गले नाश गर्ने गुणको हुन्छ ।

**छर्दिकासकफहरं कृमिकुष्ठविनाशनम् । दीपनं कटूतीक्ष्णोष्णं वातश्लेष्मविकारनुत्॥**

घोडीको मूत्र वाकवाकी, खोकी, कफविकार, कीरा र कुष्ठ नाश गर्ने; दीपनी, पिरो, तिक्खर, उष्णवीर्यको तथा वातविकार र कफविकार नाश गर्ने गुणको हुन्छ ।

(ण) सुश्रुत संहिता :

**उष्णमैकशफं बल्यं शाखावातहरं पयः । मधुराम्लरसं रूक्षं लवणानुरसं लघु॥**

घोडी आदि एकखुरे जनावरको दूध बलदायक, शाखावात नामक वातरोग नाशक, गुलियो, अमिलो, पछिल्लो रस नुनिलो र पचाउन सहज हुन्छ ।

**दीपनीयमचक्षुष्यं वाडवं दधि वातलम् । रूक्षमुष्णं कषायं च कफमूत्रापहं च तत्॥**

घोडीको दही दीपनी, आँखाका लागि हितकर, वातविकार गर्ने, रुखो, उष्णवीर्यको, टर्रो तथा कफविकार र मूत्रविकार नाशगर्ने गुणको हुन्छ ।

**पाके लघूष्णवीर्यं च कषायं कफनाशनम् । दीपनं बद्धमूत्रं च विद्यादैकशफं घृतम्॥**



घोडीको दूध दुहुने कार्य, किर्जिगिस्तान (तस्बिर श्रोत : यूटघुब)

घोडी आदि एकखुरे जनावरको घिउ पचाउन सहज, उष्णवीर्यको, टर्रो, कफविकार नाशक, दीपनी र पिसाब कम गर्ने वा रोक्ने गुणको हुन्छ ।

**दीपनं कटु तीक्ष्णोष्णं वातचेतोविकारनुत् । आश्वं कफहरं मूत्रं कृमिदद्रुषु शस्यते॥**

घोडीको मूत्र दीपनी, पिरो, तिक्खर, उष्णवीर्यको तथा वातविकार, मानसिक रोग र कफविकार नाशगर्ने एवं कीरा र दादका लागि हितकर हुन्छ ।

**(त) हारीत संहिता :**

**कफकासहरं छर्दिक्रिमिकुष्ठविनाशनम् । दीपनं कटु तीक्ष्णोष्णं वातश्लेष्मविकारनुत्॥**

घोडाको मूत्रले कफ र खोकी नाश गर्दछ, रुघा ठिक गर्दछ, पेटका कीरा र कुष्ठरोगमा औषधी हुन्छ, पाचक अग्निलाई बाल्दछ, पिरो र तिक्खर हुन्छ, गर्मी गर्दछ तथा वात एवं कफजन्य विकारलाई नाश गर्दछ ।

**...तुरङ्गमाः । विबन्धिगुरवः स्निग्धा वातालस्ये प्रकीर्त्तिताः॥**

घोडाको मासु कब्जियत गर्ने, पचाउन कठिन र चिल्लो तथा वातविकार र आलस्यमा हितकर हुन्छ ।

# अश्वगन्धा
# (Winter cherry)

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश : लाम्चा पात र खैरो प्युठाने मुलाका झैँ कन्द हुने एक बुटी वा त्यसैको कन्द ।

(ख) के.यन.स्वामी : एकदेखि पाँच फुट अग्लो बोट हुने पोथ्रो । यसको सेतो, झुस भएको, २-४ इञ्च लामो र बाटुलो खालको पात हुन्छ । पहेँलो भावको हरियो र चिलिमका छाँटको झुप्पा लागी शरद् ऋतुमा फूल फुल्दछ । मकैका झैं बाहिरी बोक्रा भएको पाकेपछि रातो हुने सानो डल्लो फल र फलभित्र सानो चेप्टो बियाँ लाग्दछ । एक डेढ फुट लामो औंला जति मोटो बाहिर फुस्रो र भित्र सेतो हुने जरा हुन्छ । काँचो जरामा घोडाको झैं गन्ध आउने हुँदा यसको नाम अश्वगन्धा रहेको हो । यसको जरालाई पनि अश्वगन्धा नै भनिन्छ ।



अश्वगन्धा, वैद्य श्री मधु वज्र वज्राचार्य

(ग) डा.चुनेकर : यसलाई अंग्रेजीमा Winter cherry तथा ल्याटिन भाषामा *Withania somnifera Dunal* भनिन्छ । एक नयाँ प्रजाती *Withania Ashwagandha* पनि भेटिएको छ ।

(घ) आचार्य बालकृष्ण : यसको विरुवा र ताजा जरा माड्दा घोडाको पिसाबको जस्तो गन्ध आउँदछ । यो सानो र ठूलो गरी दुई जातको हुन्छ । देश अनुसार यसका विभिन्न प्रजाति हुन्छन् । बजारमा दुई किसिमका अश्वगन्धा पाइन्छन् । ०.३-२ मिटर अग्लो हुने *Withania somnifera (Linn.) Dunal* तथा १-२ मिटर अग्लो हुने *Withania coagulans (Stocks) Duanl.* । घोडाको पिसाबको जस्तो गन्ध आलो जरामा बढी तेजिलो हुन्छ । वनमा पाइने अश्वगन्धाको तुलनामा खेती गरिने अश्वगन्धा बढी गुनिलो हुन्छ । तर तेल निकाल्नका लागि भने जङ्गली अश्वगन्धालाई राम्रो मानिन्छ ।



*Ashwagandha, Hari Prasad Nadig, wikimedia*

(ङ) स्वामी सदाशिव तिर्थ : यसलाई अंग्रेजीमा Winter cherry तथा ल्याटिन भाषामा *Withania somnifera dunal (Physalis flexuosa)* भनिन्छ । यो Solanaceae परिवारमा पर्दछ ।

(च) धन्वन्तरि निघण्टु : यो Solanaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Withania somnifera* Dunal वा *Physalis flexuosa* Linn. वा *Withania somnifera* (Linn.) Dunal. हो ।

(छ) फर्माकोपिया : अश्वगन्धा Solanaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Withania somnifera* Dunal हो । यसको जराको धुलो ३-६ ग्रामसम्म ओखतीमा प्रयोग हुन्छ ।

(ज) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : यो Angiosperm समूह अन्तर्गत Solanaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Withania somnifera* (L.) Dunal हो ।

**प्राचीन ग्रन्थका वचनहरू :**

**(क) अभिधान मञ्जरी :**


अश्वगन्धा (तस्बिर : खिलेन्द्र गुरुङ्ग, NEHHPA)

**अश्वगन्धोच्यते सद्भिर्नामतोऽश्वावरोहकः॥**

असल विचारका मानिसले अश्वगन्धालाई अश्वावरोहक पनि भन्दछन् ।

**(ख) अष्टाङ्ग निघण्टु :**

**कालकर्णी भूतवल्ली बल्या गन्धाऽश्वगन्धिका॥**

कालकर्णी (?), भूतवल्ली (?), बल्या, गन्धा र अश्वगन्धिका : यी अश्वगन्धाका नाम हुन् ।

**(ग) कैयदेव निघण्टु :**

**अश्वगन्धा कुष्ठगन्धा हयाह्वाऽश्वावरोहका ॥ वराहकर्ण स्तुरगी तुरगी वरदा वृषा ।**
**बल्या वाजीकरी पीता बर्हिपिच्छं च कञ्चुकी॥ अश्वगन्धा कषायोष्णा तिक्ता वृष्या रसायनी ।**
**बलपुष्टिप्रदा हन्ति कफकासानिलव्रणान्॥ शोफकण्डूविषश्वित्रकृमिश्वासक्षतक्षयान् ।**

अश्वगन्धा, कुष्ठगन्धा, हयाह्वा, अश्वावरोहका, वराहकर्ण, तुरगी, वरदा, वृषा, बल्या, वाजीकरी, पीता, बर्हिपिच्छं र कञ्चुकी : यी अश्वगन्धाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, उष्णवीर्यको, तीतो, वीर्यवर्धक, रसायनी, बलदायक, पुष्टिदायक तथा कफविकार, खोकी, वातविकार, घाउखटिरा, सुजन, लुतो, विषविकार, सेतोकुष्ठ, कीरा, दम, चोटपटक र क्षयरोग नाशक हुन्छ ।

**(घ) धन्वन्तरि निघण्टु :**

**अश्वगन्धा वाजीगन्धा कञ्चुकाऽश्वावरोहकः । वराहकर्णी तुरगी बल्या वाजीकरी स्मृता॥**
**अश्वगन्धा कषायोष्णा तिक्ता वातकफापहा । विषव्रणक्षयान् हन्ति कान्तिवीर्यबलप्रदा॥**

अश्वगन्धा, वाजीगन्धा, कञ्चुका, अश्वावरोहक, वराहकर्णी, तुरगी, बल्या र वाजीकरी : यी अश्वगन्धाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, उष्णवीर्यको, तीतो तथा वातविकार कफविकार नाशक हुन्छ । यसले विषविकार, घाउखटिरा र क्षयरोग नाश गर्दछ । यसले शरीरको चमक, वीर्य र बल दिन्छ ।

**(ङ) निघण्टु रत्नाकर (शा.नि.) :**

**अश्वगन्धोजराव्याधिनाशकस्तुवरः स्मृतः । धातुवृद्धिकरः किञ्चित्कटुकोबलदः स्मृतः ॥**
**कान्तिप्रदश्च सम्प्रोक्तस्तथा च मधुगन्धिकः । शरीरपुष्टिकारी च वृष्यश्चोष्णो लघुः स्मृतः ॥**
**वातं क्षयं श्वासकासौ व्रणं श्वेतञ्चकुष्ठकम् । कफं विष कृमीञ्शोथं तथा चैव क्षतक्षयम् ॥**
**कण्डूं नाशयतीत्येवं पूर्वाचार्यैर्निरूपितम् ॥**


Ashwagandha. nccih.nih.gov

अश्वगन्धाले बुढ्यौली र रोग नाश गर्दछ । यो टर्रो हुन्छ भनिएको छ । यसले धातु बढाउँदछ । यो थोरै पिरो हुन्छ । यसले बल दिन्छ । अश्वगन्धाले शरीरको कान्ति बढाउँदछ । यो महजस्तो बास्ना आउँदछ । यसले शरीरलाई पुष्ट पार्दछ । यो वीर्यवर्धक, उष्णवीर्यको र पचाउन हलुका हुन्छ । यसले वातविकार, क्षयरोग, दम, खोकी, घाउखटिरा, सेतो कुष्ठ, कफविकार, विषविकार, कीरा, सुकेनाश र चोटपटक नाश गर्दछ ।

**(च) निघण्टुशेष :**

**अश्वगन्धायां तुरगी कञ्चुकाऽश्वावरोहकः । अश्वकन्दो बहुगन्धा पुत्रदा लोककर्ण्यपि ॥**


Ashwagandha. आशीष भटनागर. wikimedia

अश्वगन्धा, तुरगी, कञ्चुका, अश्वावरोहक, अश्वकन्द, बहुगन्धा, पुत्रदा र लोककर्णी : यी अश्वगन्धाका संस्कृत पर्यायवाची नामहरू हुन् । (घोडाको जस्तै गन्ध आउँदछ त्यसैले यसलाई अश्वगन्धा भनिन्छ । चाँडै असर गर्दछ त्यसैले यसलाई तुरग भनिन्छ । यसले शरीरलाई बाँध्दछ त्यसैले यसलाई कञ्चुका भनिन्छ । घोडालाई पनि रोक्दछ त्यसैले यसलाई अश्वावरोहक भनिन्छ । यसको कन्द घोडालाई मन पर्दछ त्यसैले यसलाई अश्वकन्द भनिन्छ । धेरै गन्ध आउँदछ त्यसैले यसलाई बहुगन्धा भनिन्छ । पुत्र वा सन्तान दिन्छ त्यसैले यसलाई पुत्रदा भनिन्छ । लोकलाई सुनाउँदछ वा सुन्ने बनाउँदछ त्यसैले यसलाई लोककर्णी भनिन्छ ।) ।

## (छ) पर्याय रत्नमाला :

**हयगन्धाश्वगन्धाख्या वाजिगन्धाश्वगन्धकः । बल्या तुरगगन्धा च कम्बुकाश्वावरोहकः ॥**

हयगन्धा, अश्वगन्धा, वाजिगन्धा, अश्वगन्धक, बल्या, तुरगगन्धा, कम्बुका र अश्वावरोहक : यी अश्वगन्धाका नाम हुन् ।


Ashwagandha, Wowbobwow12, wikimedia

## (ज) भावप्रकाश निघण्टु :

**गन्धान्ता वाजिनामादिरश्वगन्धा हयाह्वया ॥**
**वराहकर्णी वरदा बलदा कुष्ठगन्धिनी ।**
**अश्वगन्धाऽनिलश्लेष्मश्वित्रशोथक्षयापहा ॥**
**बल्या रसायनी तिक्ता कषायोष्णाऽतिशुक्रला ।**

अश्वगन्धा, हयाह्वया, हय शब्दका पर्यायवाची शब्द, वराहकर्णी, वरदा, बलदा, कुष्ठगन्धिनी र घोडालाई बुझाउने शब्दका अन्तमा गन्ध शब्द जोडिएका शब्दहरु : यी अश्वगन्धाका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यसले वातविकार, कफविकार, सेतो कुष्ठ, सुजन र क्षयरोग नाश गर्दछ । यसले बल दिन्छ, रसायनी हुन्छ, तीतो र टर्रो हुन्छ । यसले गर्मी गर्दछ तथा अति नै बीर्य बढाउँदछ ।

## (झ) मदनपाल निघण्टु :

**अश्वगन्धा तुरङ्गाह्वा गोकर्णश्चावरोहकः । वराहकर्णी वरदा बल्या वाजीकरी वृषा ॥**
**अश्वगन्धाऽनिलश्लेष्मशोफश्वित्रक्षयापहा । बल्या रसायनी तिक्ता कषायोष्णाऽतिशुक्रला ॥**

अश्वगन्धा, तुरङ्गाह्वा,गोकर्ण, अवरोहक, वराहकर्णी, वरदा, बल्या, वाजीकरी र वृषा : यी अश्वगन्धाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले वातविकार, कफविकार, सुजन, श्वेतकुष्ठ र क्षयरोग नाश गर्दछ तथा बल दिन्छ । यो रसायनी, तीतो, टर्रो र अति नै शुक्रवर्धक हुन्छ ।

## (ञ) माधवद्रव्यगुणः

**बल्याश्वगन्धा वातघ्नी कासश्वासक्षये हिता ।**

अश्वगन्धा बलदायक, वातविकार नाशक तथा खोकी, दम र क्षयरोगमा हितकर हुन्छ ।

**(ट) राज निघण्टु :**

**अश्वगन्धा वाजिगन्धा कम्बुकाष्ठा वराहिका । वराहकर्णी तुरगी वनजा वाजिनी हयी ॥**
**पुष्टिदा बलदा पुण्या हयगन्धा च पीवरा । पलाशपर्णी वातघ्नी श्यामला कामरूपिणी ॥**
**कालप्रियकरी बल्या गन्धपत्री हयप्रिया । वराहपत्री विज्ञेया त्रयोविंशतिनामका ॥**
**अश्वगन्धा कटूष्णा स्यात्तिक्ता च मदगन्धिका । बल्या वातहरा हन्ति कासश्वासक्षयव्रणान् ॥**


Ashwagandha, Roger Culos, wikipedia

(१) अश्वगन्धा, (२) वाजिगन्धा, (३) कम्बुकाष्ठा, (४) वराहिका, (५) वराहकर्णी, (६) तुरगी, (७) वनजा, (८) वाजिनी, (९) हयी, (१०) पुष्टिदा, (११) बलदा, (१२) पुण्या, (१३) हयगन्धा, (१४) पीवरा, (१५) पलाशपर्णी, (१६) वातघ्नी, (१७) श्यामला, (१८) कामरूपिणी, (१९) कालप्रियकरी, (२०) बल्या, (२१) गन्धपत्री, (२२) हयप्रिया र (२३) वराहपत्री : यी तेइस वटा नाम अश्वगन्धाका संस्कृत पर्यायवाची नामहरू हुन् । अश्वगन्धा पिरो, उष्णवीर्यको, तीतो र मदिरा जस्तो गनाउने हुन्छ । यसले बल दिनुका साथै वातविकार, खोकी, दमरोग, क्षयरोग र घाउखटिरा नाश (ठिक) गर्दछ ।



**(ठ) राजवल्लभ निघण्टु :**

**अश्वगन्धा तु वातघ्नी बल्या वृष्या रसायनी ॥**

अश्वगन्धा वातविकार नाशक, बलदायक, वीर्यदायक र रसायनी हुन्छ ।

**(ड) विष्णुधर्मोत्तर पुराण :**

**अश्वगन्धाविपक्वेन वराहस्य तु मेदसा ।**
**ग्रन्थीकरणमभ्यङ्गं योषितां परिकीर्तितम् ॥**

सुँगुर वा बनेलको बोसोमा पकाइएको अश्वगन्धा दल्ने गर्दा नारीको स्तन (आदि) कसिलो हुन्छ ।


Root of Winter cherry, paavaniayurveda.com (अश्वगन्धाको आलो जरा)

**अश्वगन्धां पयस्यां च संसृज्य पयसा पिबेत् । मासमेतत्प्रयुञ्जाना कृशा भवति मांसला ॥**

अश्वगन्धा (लाम्चा पात खैरो प्यूठाने मुलाकाझैं कन्द हुने एक बुटी वा त्यसैको कन्द) लाई दूधमा उमालेर पकाई दूधसँगै एक महिनासम्म खाने गरे मोटी स्त्री पनि दुब्ली हुन्छे ।

**वराहवसया कार्यमश्वगन्धाविपक्वया । स्तनानां मर्दनं तेन नारी पीनस्तनी भवेत्॥**

बँदेल (वा सोजातका) जनावरको बोसो अश्वगन्धासँग पकाई त्यसको लेप स्तनमा दल्ने गरे (स्त्री) स्तन झोलिँदैन ।

**(ढ) शालिग्राम निघण्टु :**


अश्वगन्धाको जरा (तस्बिर : खिलेन्द्र गुरुङ्ग, NEHHPA)

**अश्वगन्धा वाजिगन्धा कटुकाऽश्वावरोहकः ।**
**वाराहकर्णी तुरगी बल्या वाजिकरी हया॥**

अश्वगन्धा, वाजिगन्धा, कटुका, अश्वावरोहक, वाराहकर्णी, तुरगी, बल्या, वाजिकरी र हया : यी अश्वगन्धाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**(ण) सरस्वती निघण्टु :**

**अश्वगन्धा वाजिगन्धा ऋक्षगन्धा कुलाङ्गना । वराहकर्णी बलदा वराहश्च व्रणोज्झितः॥**



अश्वगन्धा, वाजिगन्धा, ऋक्षगन्धा, कुलाङ्गना, वराहकर्णी, बलदा, वराह र व्रणोज्झित : यी अश्वगन्धाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**(त) सोढल निघण्टु :**

**वराहकर्ण्यां तुरगी बल्या वाजीकरी स्मृता । अश्वगन्धा कुष्ठगन्धा कन्दराऽश्वावरोहकः॥**
**वरगात्रकरी पुण्या शिष्टगन्धा च पीवर । एलापर्णी मारुतघ्नी श्यामला कामरूपिणी॥**

वराहकर्णी, तुरगी, बल्या, वाजीकरी, अश्वगन्धा, कुष्ठगन्धा, अश्वावरोहक, वरगात्रकरी, पुण्या, शिष्टगन्धा, पीवर, एलापर्णी, मारुतघ्नी, श्यामला र कामरूपिणी : यी अश्वगन्धाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**(थ) हृदयदीपक निघण्टु :**

**...स्यादश्वगन्धा हयाह्वया ।**

अश्वगन्धालाई हयाह्वया भनिन्छ ।

# अश्वखरज (खच्चड)
# (The Mule)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) अश्वखरज : खच्चड । घोडा र गधीबाट जन्मेको पशु । (२) सकृद्गर्भ : खच्चड ।

(ख) नेपाली बृहत् शब्दकोश : (१) खच्चड : गधा र घोडीको संयोगबाट जन्मिएको पशु; खच्चर । (२) खच्चड-डाक : ई.१८६० अप्रिलदेखि १८६१ अक्टोबरसम्म “पोन्नी-एक्सप्रेस” का नाउँले प्रचलित, खच्चरबाट हुलाक ओसारपसार गर्ने डाक । (२) जाख्नु : खच्चडका पिठिउँमा राखी मालसामान ओसारपसार गर्नु; मालसामान ढुवानी गर्नु ।

(ग) डा.साङ्ग्चधर : खच्चडलाई अंग्रेजीमा The Mule भनिन्छ ।



खच्चड (तस्बिर श्रोत : कोलिन्सडिक्स्नरीडटकम)

**प्राचीन ग्रन्थका वचन :**

(क) **कैयदेव निघण्टु :**

**गर्दभेन तु सञ्जातो वाम्यामश्वतरो मतः । शीघ्रगामी वेगसरो मेदःपुच्छस्तु डुम्वकः ॥**
**मांसमाश्वतरं बल्यं बृंहणं कफपित्तलम् । मेदःपुच्छोद्भवं वृष्यं पित्तश्लेष्मकरं गुरु ॥**

गधा र घोडीको समागमबाट जन्मने जीवलाई खच्चड भनिन्छ । अश्वतर, शीघ्रगामी, वेगसर, मदपुच्छ र डुम्बक : यी खच्चडका पर्यायवाची नाम हुन् । यसको मासु बलदायक, वीर्यवर्धक, पित्तविकार र कफविकार गर्ने र पचाउन कठिन हुन्छ । खच्चडजन्य खानेकुरा वीर्यवर्धक, पित्तविकार र कफविकार गर्ने तथा पचाउन कठिन हुने गुणका हुन्छन् ।

**(ख) धन्वन्तरि निघण्टु :**

**तज्जो घोगाम्यश्वतरः शीघ्रगो वेगपूजितः । बल्यमाश्वतरं मासं बृंहणं कफपित्तलम्॥**

ती दुई (गधा र घोडी) को समागमबाट जन्मने जनावरलाई खच्चड भनिन्छ । अश्वतर, शीघ्रग र वेगपूजित : यी खच्चडका पर्यायवाची नाम हुन् । यसको मासु बलदायक, पौष्टिक तथा कफविकार र पित्तविकार गर्ने गुणको हुन्छ ।

**(ग) पर्याय रत्नमाला :**

**अश्वतरो वेगसरो ।**

अश्वतर र वेगसर : यी खच्चडका पर्यायवाची नाम हुन् ।



**(घ) मदनपाल निघण्टु :**

**तज्जो घोटचामश्वतरः शीघ्रवेगोऽङ्गपूजितः । बल्यमाश्वतरं मांसं बृंहणं कफपित्तलम्॥**

अश्वतर, शीघ्रवेग र अङ्गपूजित : यी खच्चडका संस्कृत पर्यायवाची नामहरू हुन् । खच्चडको मासु बलदायक, पौष्टिक तथा कफविकार र पित्तविकार बढाउने गुणको हुन्छ ।

**(ङ) राज निघण्टु :**

**वेसरस्त्वश्वखरजः सकृद्गर्भोऽध्वगः क्षमी । सन्तुष्टो मिश्रजः प्रोक्तो मिश्रशब्दोऽतिभारगः॥**

वेसर, अश्वखरज, सकृद्गर्भ, अध्वग, क्षमी, सन्तुष्ट, मिश्रज, मिश्र र अतिभारग : यी खच्चडका संस्कृत पर्यायवाची नामहरू हुन् ।

# अश्वत्थ (पीपल)
# (Sacred fig)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : अश्वत्थ आदि पीपलका नाम हुन् ।

(ख) नेपाली बृहत् शब्दकोश : पानका आकारको तर टुप्पाको भाग केही लामो हुने, डाँठ हुने, बरकै किसिमका मसिना गोल फल फल्ने, बोक्रा हुने र खोटो निस्कने एक जातको वृक्ष; अश्वत्थ; पिप्पल; पीपल ।

(ग) आचार्य बालकृष्ण : यसलाई अंग्रेजीमा Peepal tree, The bo tree, Bodh tree, The tree of intelligence वा Sacred fig भनिन्छ ।

(घ) डा. चुनेकर : यसको ल्याटिन नाम *Ficus religiosa* Linn. हो ।

(ङ) फर्माकोपिया : यो Moraceae परिवारमा पर्दछ । यसको वास्पतिक नाम *Ficus religiosa* Linn. हो । यसको बोक्रा २०-३० ग्रामसम्म काँढापानीमा प्रयोग हुन्छ ।

(च) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : यो Angiosperm समूह अन्तर्गतको Moraceae परिवारमा पर्दछ यसको वानस्पतिक नाम *Ficus religiosa* L.हो ।

(छ) Journal of Plant Resources, Vol. 17, No. 1, Government of Nepal, 2019 : यसलाई अंग्रेजीमा Bodhi tree वा Sacred fig भनिन्छ ।



**प्राचीन ग्रन्थका वचन :**

(क) **अभिधान मञ्जरी :**

**पिप्पल उक्तोऽश्वत्थः पवित्रको मङ्गलश्च चलपत्रः ।**
**बोधिः श्यामलसञ्ज्ञो गजाशनः केशवावासः ॥**

पिप्पल, अश्वत्थ, पवित्रक, मङ्गल, चलपत्र, बोधि, श्यामल, गजाशन र केशवावास : यी पीपलका पर्यायवाची नाम हुन् ।

(ख) **अभिधान रत्नमाला :**

**पवित्रः पिप्पलो बोधिवृक्षोऽश्वत्थो गजाशनः । दीर्घायुः श्यामलश्चैत्रपादोश्चलपत्रकः ॥५५॥**

पवित्र, पिप्पल, बोधिवृक्ष, अश्वत्थ, गजाशन, दीर्घायु, श्यामल, चैत्रपाद र चलपत्रक : यी पीपलका पर्यायवाची नाम हुन् ।

(ग) **अमरकोश :**

**बोधिद्रुमश्चलदलः पिप्पलः कुञ्जराशनः । अश्वत्थ...॥**

बोधिद्रुम, चलदल, पिप्पल, कुञ्जराशन र अश्वत्थ : यी पीपलका नाम हुन् ।

## (घ) अष्टाङ्ग निघण्टु :

**अश्वत्थः पिप्पलो बोधिश्चैत्यद्रुश्चलपत्रकः॥**

अश्वत्थ, पिप्पल, बोधि, चैत्यद्रु र चलपत्रक : यी पीपलका पर्यायवाची नाम हुन् ।

## (ङ) कैयदेव निघण्टु :

**अश्वत्थः पिप्पलो बोधिः बोधिसत्त्वौ गजान(श)नः ।**
**शुचिश्चैत्यश्चलदलः श्यामलः स्वादुबीजकः॥**
**मङ्गल्यः केशवावासो लक्ष्मीवान् क्षीरपादपः । अश्वत्थः शीतलो रूक्षः कषायो दुर्जरो गुरुः॥**
**व्रणपित्तकफास्रघ्नो वर्ण्यो योनिविशोधनः ।**

अश्वत्थ, पिप्पल, बोधि, बोधिसत्त्व, गजान(श)न, शुचि, चैत्य, चलदल, श्यामल, स्वादुबीजक, मङ्गल्य, केशवावास, लक्ष्मीवान् र क्षीरपादप : यी पीपलका पर्यायवाची नाम हुन् । पीपल शीतवीर्यको, रुखो, टर्रो, ढिलो पच्ने, पचाउन कठिन; घाउखटिरा, पित्तविकार, कफविकार र रक्तविकार नाशगर्ने; वर्णमा निखार लेराउने तथा स्त्री-जननेन्द्रियलाई प्रशोधन गर्ने गुणको हुन्छ ।

## (च) द्रव्यगुणसङ्ग्रह :

**...अश्वत्थ..पल्लवाः । कषायास्तम्भनाः शीता हिताः पित्तातिसारिणाम्॥**

पीपलको पालुवा टर्रो, अङ्ग लाटो पार्ने, शीतवीर्यको तथा पित्तविकार र अतिसारमा हितकर हुन्छ ।

## (छ) धन्वन्तरि निघण्टु :

**पिप्पलः केशवावासश्चलपत्रः पवित्रकः । मङ्गल्यः श्यामलोऽश्वत्थो बोधिवृक्षो गजाशनः॥**
**श्रीमान्क्षीरद्रुमो विप्रः शुभदः श्यामलच्छदः । पिप्पलो गुह्यपत्रस्तु सेव्यः सत्यः शुचिद्रुमः॥**
**चैत्यद्रुमो धर्मवृक्षः चन्द्रकरमिताह्वयः । अश्वत्थोऽपि स्मृतस्तद्वद् रक्तपित्तकफापहः॥**

पिप्पल, केशवावास, चलपत्र, पवित्रक, मङ्गल्य, श्यामल, अश्वत्थ, बोधिवृक्ष, गजाशन तथा श्रीमान्, क्षीरद्रुम, विप्र, शुभद, श्यामलच्छद, पिप्पल (?), गुह्यपत्र, सेव्य, सत्य, शुचिद्रुम, चैत्यद्रुम र धर्मवृक्ष : यी एक्काईस नाम पीपलका पर्यायवाची नाम हुन् । पीपल पनि त्यस्तै (बर जस्तै) रक्तपित्त र कफविकार नाशगर्ने गुणको हुन्छ ।

(ज) निघण्टुशेष :

**पिप्पले बोधिरश्वत्थः श्रीवृक्षश्चलपत्रकः । मङ्गल्यः केशवावासः श्यामलो द्विरदाशनः ॥**

पिप्पल, बोधि, अश्वत्थ, श्रीवृक्ष, चलपत्रक, मङ्गल्य, केशवावास, श्यामल र द्विरदाशन : यी पीपलका पर्यायवाची नाम हुन् ।

(झ) पर्यायरत्नमाला :

**पिप्पलो बोधिरश्वत्थश्चैत्यवृक्षो गजाशनः ।**

पिप्पल, बोधि, अश्वत्थ, चैत्यवृक्ष र गजाशन : यी पीपलका पर्यायवाची नाम हुन् ।

(ञ) भावप्रकाश निघण्टु :

**बोधिद्रुः पिप्पलोऽश्वत्थश्चलपत्रो गजाशनः । पिप्पलो दुर्जरः शीतः पित्तश्लेष्मव्रणास्रजित्॥**
**गुरुस्तुवरको रूक्षो वर्ण्यो योनिविशोधनः ।**

बोधिद्रु, पिप्पल अश्वत्थ, चलपत्र र गजाशन : यी पीपलका पर्यायवाची नाम हुन् । यो पचाउन कठिन, शीतल गर्ने तथा पित्तविकार, कफविकार, घाउखटिरा र रक्तविकार नाशक हुन्छ । यो टर्रो र रुखो हुन्छ । यसले वर्णमा निखार लेराउँदछ र स्त्री-जननेन्द्रियलाई सफा गर्दछ ।



(ट) मदनपाल निघण्टु :

**पिप्पलः श्यामलोऽश्वत्थः क्षीरवृक्षो गजाशनः । हरिवासश्चलदलो मङ्गल्यो बोधिपादपः ॥**
**पिप्पलो दुर्जयः शीतः पित्तश्लेष्मव्रणास्रजित्॥**

पिप्पल, श्यामल, अश्वत्थ, क्षीरवृक्ष, गजाशन, हरिवास, चलदल, मङ्गल्य र बोधिपादप : यी पीपलका पर्यायवाची नाम हुन् । यो सजिलै जित्न नसकिने (पचाउन कठिन), शीतवीर्य भएको तथा पित्तविकार, कफविकार र घाउखटिरा माथि जित हासिल गर्ने गुणको हुन्छ ।

(ठ) मदनादि निघण्टु :

**अश्वत्थ पिप्पलो बोधिश्चैत्यवृक्षोऽथलक्ष्मिवान् । चलपत्रः क्षीरिवृक्षः स्वादुर्बीजो गजाशनः ॥**
**कषायकफपित्तघ्नो वर्ण्यो योनिविशोधनः । अश्वत्थः शीतलो वृष्यो दुर्जरो मधुरः फले ॥**

अश्वत्थ, पिप्पल, बोधि, चैत्यवृक्ष, लक्ष्मिवान्, चलपत्र, क्षीरिवृक्ष, स्वादुर्बीज र गजाशन : यी पीपलका पर्यायवाची नाम हुन् । यो टर्रो, कफविकार र पित्तविकार नाशगर्ने, वर्णमा निखार लेराउने र

स्त्री-जननेन्द्रिय प्रशोधन गर्ने गुणको हुन्छ । पीपलको फल शीतवीर्यको, वीर्यवर्धक, ढिलो पच्ने र गुलियो स्वादको हुन्छ ।

(ड) **माधवद्रव्यगुण :**

**अश्वत्थ... फलानि च । कषायमधुराम्लानि वातलानि गुरूणि च॥**

पीपलको फल टर्रो, गुलियो र अमिलो तथा वातविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

(ढ) **राज निघण्टु :**

**अश्वत्थश्चाच्युतावासश्चलपत्रः पवित्रकः । शुभदो बोधिवृक्षश्च याज्ञिको गजभक्षकः॥**
**श्रीमान् क्षीरद्रुमो विप्रो मङ्गल्यः श्यामलश्च सः । पिप्पलो गुह्यपुष्पश्च सेव्यः सत्यः शुचिद्रुमः॥**
**चैत्यद्रुमो धर्मवृक्षो ज्ञेयो विंशतिसञ्ज्ञकः॥**
**पिप्पलः सुमधुरस्तु कषायः शीतलश्च कफपित्तविनाशी ।**
**रक्तदाहशमनः स हि सद्यो योनिदोषहरणः किल पक्वः॥**
**अश्वत्थवृक्षस्य फलानि पक्वान्यतीवहृद्यानि च शीतलानि ।**
**कुर्वन्ति पित्तास्रविषार्तिदाहविच्छर्दिशोषारुचिदोषनाशम्॥**



(१) अश्वत्थ, (२) अच्युतावास, (३) चलपत्र, (४) पवित्रक, (५) शुभद, (६) बोधिवृक्ष, (७) याज्ञिक, (८) गजभक्षक, (९) श्रीमान्, (१०) क्षीरद्रुम, (११) विप्र, (१२) मङ्गल्य, (१३) श्यामल, (१४) पिप्पल, (१५) गुह्यपुष्प, (१६) सेव्य, (१७) सत्य, (१८) शुचिद्रुम, (१९) चैत्यद्रुम र (२०) धर्मवृक्ष : यी बीस नाम पीपलका पर्यायवाची नाम हुन् । पिप्पल गुलियो, टर्रो, शीतवीर्यको तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यसले रक्तविकारजन्य डाहलाई शान्त पार्दछ । यसको पाकेको फलले योनिका रोगहरू निश्चय नै तुरुन्त निको पार्दछ । पिप्पलको पाकेको फल मुटुका लागि अति नै हितकारी र शीतवीर्यको हुन्छ । यो फलले पित्तविकार, रक्तविकार, विषविकार, डाह, वाकवाकी, सुजन र अरुची नाश गर्दछ ।

(ण) **सरस्वती निघण्टु :**

**मङ्गल्यः केशवावासश्चैत्यवृक्षः पवित्रकः । अश्वत्थबोधीदीर्घायुश्चलपत्रो गजाशनः॥**
**पिप्पलः क्षीरवृक्षश्चश्यामलोबहुपर्णिकः ।**

मङ्गल्य, केशवावास, चैत्यवृक्ष, पवित्रक, अश्वत्थ, बोधी, दीर्घायु, चलपत्र, गजाशन, पिप्पल, क्षीरवृक्ष, श्यामल र बहुपर्णिक : यी पीपलका पर्यायवाची नाम हुन् ।

(त) **सुश्रुत संहिता :**

**पैत्तिकेषु नीलमेहिनं ...अश्वत्थकषायं वा पाययेद् ।**

पित्तजन्य प्रमेहमध्ये नीलप्रमेहीलाई पीपलको काँढापानी पिउन दिनू ।

**अश्वत्थफलमूलत्वक्शुङ्गासिद्धं पयो नरः ॥ पीत्वा सशर्कराक्षौद्रं कुलिङ्ग इव हृष्यति ।**

पीपलको फल, जरा, बोक्रा र आँकुरालाई दूधमा सिद्ध गरी (विधिपूर्वक पकाई) मिस्री र महसँग पिउनाले मानिस भँगेरो जस्तै कामुक हुन्छ ।

**(थ) सौश्रुत निघण्टु :**

**अश्वत्थः पिप्पलः शृङ्गी चलपर्णो गजाशनः । दीर्घायुश्चैत्यवृक्षश्च बोधिवृक्षश्च शब्दितः ॥**

अश्वत्थ, पिप्पल, शृङ्गी, चलपर्ण, गजाशन, दीर्घायु, चैत्यवृक्ष र बोधिवृक्ष : यी पीपलका पर्यायवाची नाम हुन् ।

**(द) हृदयदीपक निघण्टु :**

**पिप्पलो बोधिरश्वत्थः ... ।**

पिप्पल, बोधि र अश्वत्थ : यी पीपलका पर्यायवाची नाम हुन् ।



**पुराणहरूमा पीपल :**

(क) देवीभागवत् :

**अश्वत्थवटनिम्बाम्रकपित्थबदरीगते । पनसार्ककरीरादिक्षीरवृक्षस्वरूपिणी ॥५४॥**

पीपल, बर, नीम, आँप, कैथ र बयरको रूखमा निवास गर्ने हे देवी ! हजुर कटहर, आँक, करील आदी दुधालु वृक्षस्वरूपकी हुनुहुन्छ ।

**अश्वत्थवृक्षमारोप्य प्रतिष्ठां यः करोति च । स प्रयाति तपोलोकं वर्षाणामयुतं सति ।**

जसले पीपलको रूख रोपेर त्यसको विधिपूर्वक प्रतिष्ठा गर्दछ उ तपोलोकमा दश हजार वर्षसम्म बस्न पाउँदछ ।

**अश्वत्थसमिधो हुत्वा युद्धादौ जयमाप्नुयात् ।**

लडाईंमा जानु अघि पीपलका समिधा बालेर होम हाले विजयी हुन्छ ।

(ख) **नारद पुराण :** कुनै सङ्कट पर्दा पीपलको फेदमा लगेर हनुमानका नाममा दीपदान गर्नू । वृक्षहरूमा पीपल श्रेष्ठ हुन्छ ।

(ग) **पद्मपुराण :** पीपलको बोट रोपेर हुर्काउनाले सबै सन्तान एक भई मिलेर बस्दछन् । पीपल रोप्नाले न प्राप्त हुन्छ । पीपलले रोग नाश गर्दछ । पीपलको जरामा विष्णु, बीच भागमा शिव र टुप्पाका ब्रह्माको वास हुन्छ । पीपल रोप्नाले, रक्षा गर्नाले, छुनाले, पूजा गर्नाले यसले अनेकौं फाइदा दिन्छ । पीपलको कुनै भाग जसले काट्दछ त्यो चन्द्रसूर्य रहेसम्म नरकमा पर्दछ र त्यसपछि चाण्डाल भएर जन्मन्छ । यसको फल हजारौं जीवजन्तुले खान्छन् । यसको छहारीमा हजारौं जीव बस्दछन् । यो सबै ऋतुमा सुखदायी हुन्छ । जुन गाउँमा पीपलको रूख हुन्छ त्यो तीर्थ समान हुन्छ । पीपल, तुलसी र गाई बाटामा भेटिए दाहिने पारेर घुम्नू ।

**अश्वत्थरूपी भगवान्विष्णुरेव न संशयः।**

पीपल भगवान् विष्णुकै रूप हो, यसमा शङ्का नगर्नू ।
समुद्र मन्थनका समयमा समुद्रबाट उत्पन्न भएकी लक्ष्मीलाई श्रीविष्णुले विवाह गर्ने बेलामा "मेरो दीदि अलक्ष्मीको नै विवाह भएको छैन । म कसरी तपाईँसँग विवाह गरौं ? पहिले मेरी दीदिको बिहे होस् अनि मात्र म हजुरसँग विवाह गर्नेछु" भनेपछि । श्रीविष्णुले उद्दालक मुनिसँग अलक्ष्मीको विवाह गरिदिनु भयो । उद्दालक मुनिसँग विवाह भएर गएपछि अलक्ष्मीले उनको आश्रममा बस्न मानिनन् । उनले "देवता र पितृलाई मन नपर्ने स्थानमा मात्र आफू बस्न सक्ने अन्यत्र नसक्ने" कुरा बताइन् । ज्यादै ढिपी गरेपछि अलक्ष्मीलाई पीपलको रूखको फेदमा कुर्न लगाएर उनी बस्ने उपयुक्त ठाउँको खोजीमा उद्दालक मुनि हिँडे । तर लामो समयसम्म कुर्दा पनि मुनि त्यहाँ फर्केर गएनन् । अलक्ष्मी रुन लागिन् । वैकुण्ठकी लक्ष्मीले थाहा पाएर विष्णुलाई दीदिको दुःख नाश गर्न अनुरोध गरिन् । त्यसपछि विष्णु र लक्ष्मी त्यहाँ पीपलको फेदमा अलक्ष्मी भएका ठाउँमा जानु भयो । अनि अलक्ष्मीलाई सम्झाउँदै "मेरो अंशबाट उत्पन्न यो पीपलको रूखमा नै तिमी शनिबार बाहेक अरु दिन सदाका लागि खुशी भएर बस । शनिबार चाहिँ तिम्री बहिनी लक्ष्मी आएर यहाँ बस्नेछिन्" भन्नुभयो । यसैले शनिबार मात्र पीपलको वृक्ष पूजनीय भएको हो ।



**अश्वत्थो वृक्षराजोऽयं हरिमूर्तिः प्रकीर्तितः । तस्मादश्वत्थहन्तृणां त्राता कोऽपि न विद्यते ॥४६॥**

वृक्षको राजा पीपल साक्षात् भगवान् विष्णुको मूर्ति हो । जसले पीपलको रूख काट्दछ त्यसको कसैले पनि उद्धार गर्न सक्दैन ।

(घ) **ब्रह्मपुराण :** पीपलको वृक्ष मासिँदै गएपछि पृथ्वी नै मरुभूमि हुन थाल्दछ ।

(ङ) **शिवपुराण :** घरमा गरेको देवकर्मभन्दा पीपलका बोट मुनि गरेको देवकर्मको एक लाख गुना बढी मिल्दछ ।

(च) **लिङ्गपुराण :** पीपल सबै वृक्षका पिता हुन् ।

आठ चिरञ्जीवी भित्र पर्ने द्रोणाचार्य र उनका पुत्र अश्वत्थामा वनस्पति जगत्सँग सम्बन्धित लाक्षणिक नाम हुन सक्दछन् । तर पौराणिक प्रमाण हालसम्म पाइएको छैन । प्रायः सबै पुराणमा पीपलको अनेक महत्व बताइएको छ । विष्णुधर्मोत्तर पुराणमा पीपलको ओखतीमा प्रयोग गर्ने विधि समेत लेखिएको छ । पृथ्वीको सृष्टीको क्रममा

पहिले फणिर, पिपल र बरको रूख सृष्टि भएको र त्यसका आधारमा सिञ्चित क्षेत्र विस्तार भएको कथाप्रसङ्ग पनि पाइन्छ ।



अश्वत्थ (पीपल), कुम्भेश्वर, ललितपुर (श्रोतः हिमाखबर, हरिकृष्ण सैंजू)

# अष्टवर्ग
# (Ashtavarga)

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश (अष्टवर्ग) : आठ औषधीहरूको समूह (जीवक, ऋषभक, मेदा, महामेदा, काकोली, क्षीरकाकोली, ऋद्धि र वृद्धि) ।

(ख) के.यन.स्वामी (अष्टवर्गः) : जीवक, ऋषभक, मेदा, महामेदा, काकोली, क्षीरकाकोली, ऋद्धि र वृद्धि : यी आठ जरीबुटी ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**काकोल्यौ जीवकं मेदे पुण्ड्रः पद्मकर्षभकौ । एताभिरष्टको वर्ग औषधीभिर्निगद्यते ॥**
**स्वादुस्कन्धः स्वादुवर्गः काकोल्यादिश्च नामतः ॥**

कल्छे लहरो, दुधे कल्छे लहरो, जीवक, मेदा, महामेदा, पाखरी, कूट र ऋषभक : यी आठ प्रकारको ओखतीको समूहलाई अष्टवर्ग भनिन्छ । कल्छे लहरो आदिका जरा गुलिया हुन्छन् यसैले या वर्गलाई स्वादुवर्ग पनि भनिन्छ ।

**(ख) अभिनव निघण्टु :**



**जीवकर्षभकौमेदेकाकोल्यौऋद्धिवृद्धिके । अष्टवर्गोऽष्टभिर्द्रव्यैः कथितश्चरकादिभिः ॥**
**अष्टवर्गोहिमः स्वादुर्बृंहणः शुक्रलोगुरुः । भग्नसन्धानकृत्कामबलासबलवर्द्धनः ॥**
**वातपित्तास्रतृड्दाहज्वरमेहक्षयप्रणुत् ॥**

जीवक, ऋषभक, मेदा, महामेदा, काकोली, क्षीरकाकोली, ऋद्धि र वृद्धि : यी आठ थरी ओखतीको मिश्रणलाई अष्टवर्ग भनिन्छ भनी चरक आदि ऋषिहरूले बताएका छन् । यो मिश्रण शीतवीर्यको, स्वादिलो, पुष्टिदायक, वीर्यजनक, पचाउन कठिन, भाँचिएका अङ्गलाई जोड्ने, यौन क्षमता बढाउने, कफ बढाउने (वा खुकुल्याउने), बल बढाउने तथा वातविकार, पित्तविकार, रक्तविकार, तिर्खा, डाह, जरो, प्रमेह र क्षयरोग नाशगर्ने गुणको हुन्छ ।

**(ग) कैयदेव निघण्टु :**

**अष्टवर्गो द्विकाकोलीद्विमेदाजीवकर्षभैः ॥**
**ऋद्धिवृद्धियुतैः क्वापि जीवन्तीमधुकान्वितैः । अष्टवर्गो हिमः स्वादुः बृंहणः शुक्रलो गुरुः ॥**
**भग्नसन्धानकृत्स्तन्यबलासबलवर्धनः । वातपित्तास्रतृड्दाहज्वरशोषक्षतप्रणुत् ॥**

कल्छे लहरो, दुधे कल्छे लहरो, मेदा, महामेदा, जीवक, ऋषभक, ऋद्धि र वृद्धि सहितको ओखतीको समूहलाई अष्टवर्ग भनिन्छ । कसैकसैले ऋद्धि र वृद्धिको स्थानमा जीवन्ती र जेठीमधुलाई लिने गर्दछन् । यो वर्ग शीतवीर्यको, गुलियो, पौष्टिक, शुक्रवर्धक, पचाउन कठिन, भाँचिएको वा च्यातिएको

वा फुटेको अङ्गलाइ जोड्ने, दूध बढाउने, बलास रोग बढाउने, बल बढाउने तथा वातविकार, पित्तविकार, रक्तविकार, तिर्खारोग, डाह, जरो, सुकेनाश र चोटपटक नाग्ने गुणको हुन्छ ।

**(घ) भावप्रकाश निघण्टु :**

**जीवकर्षभकौ मेदे काकोल्यौ ऋद्धिवृद्धिके । अष्टवर्गोऽष्टभिर्द्रव्यैः कथितश्चरकादिभिः॥**
**अष्टवर्गो हिमः स्वादुर्बृंहणः शुक्रलो गुरुः । भग्नसन्धानकृत्कामबलासबलवर्द्धनः॥**
**वातपित्तास्रतृड्दाहज्वरमेहक्षयापहः ।**

जीवक, ऋषभक, मेदा, महामेदा, काकोली, क्षीरकाकोली, ऋद्धि र वृद्धि : यी औषधीको समूहलाई अष्टवर्ग भनिन्छ । यस्तो चरकादि ऋषिले भनेका छन् । यो अष्टवर्गले शरीरलाई ठण्डी गर्दछ, पकाएर खाँदा मिठो हुन्छ, पुष्टिकारक, वीर्यवर्धक, ढिलो पच्ने, भाँचिएका मर्किएका भाग जोड्ने, काम-कफ-बल बढाउने तथा वात-पित्त-रक्त दोष, तिर्खा, जलन, जरो, प्रमेह र क्षय रोगलाई नष्ट गर्दछ ।

**राज्ञामप्यष्टवर्गस्तु यतोऽयमतिदुर्लभः । तस्मादस्य प्रतिनिधिं गृह्णीयात्तद्गुणं भिषक्॥**
**मेदा जीवक काकोली वृद्धिद्वन्द्वेऽपि चासति । वरीविदार्यश्वगन्धावाराहींश्च क्रमात् क्षिपेत्॥**
**मेदामहामेदास्थाने शतावरीमूलम् । जीवकर्षभस्थानेऽपि विदारीमूलम्॥**
**काकोलीक्षीरकाकोलीस्थाने अश्वगन्धामूलम् ।**
**ऋद्धिवृद्धिस्थाने वाराहीकन्दगुणैस्तत्तुल्यं क्षिपेत्॥**

यी आठ प्रकारका औषधी जतिसुकै सम्पन्न राजाका लागि पनि दुर्लभ छन् । अतः यी जस्तै गुण भएका वैकल्पिक औषधीको प्रयोग गर्नु उचित हुन्छ । जस्तै :- मेदा र महामेदाको साटो कुरिलाको कन्द, जीवक र ऋषभकको साटो भुइँकुभिण्डाको कन्द, काकोली र क्षीरकाकोलीको साटो अश्वगन्धाको गानु तथा ऋद्धि र वृद्धिको साटो गिठोको जराको गानु ।

**(ङ) मदनपाल निघण्टु :**

**अष्टवर्गोऽष्टभिर्द्रव्यैरेतैः शीतोऽतिशुक्रलः । बृंहणः पित्तदाहास्रशोषघ्नः स्तन्यगर्भकृत्॥**

ऋद्धि, वृद्धि, काकोली, क्षीरकाकोली, मेदा, महामेदा, जीवक र ऋषभक यी आठ द्रव्यको सामूहिक नामलाई “अष्टवर्ग” भनिन्छ । यसले ठण्डी गर्नुका साथै अति नै शुक्र बढाउँदछ । पौष्टिक हुन्छ । पित्तविकार, डाह, रक्तविकार र क्षयरोग निको पार्दछ । दूध फुटाउँदछ र गर्भधारण गराउँदछ ।

**(च) राजनिघण्टु :**

**जीवकर्षभकौ मेदे काकोल्यावृद्धिवृद्धिके । एकत्र मिलितैरेतैरष्टवर्गः प्रकीर्तितः॥**

जीवक, ऋषभक, मेदा, महामेदा, काकोली, क्षीरकाकोली, ऋद्धि र वृद्धिको मिश्रणलाई अष्टवर्ग भनिन्छ ।

**(छ) राजवल्लभ निघण्टु :**

**अष्टवर्गोऽस्रपित्तघ्नो व्रणहा वातपित्तनुत्॥**

अष्टवर्गले रक्तपित्त, घाउखटिरा, वातविकार र पित्तविकार नाश गर्दछ ।

**(ज) शार्ङ्गधर संहिता :**

**द्वे मेदे द्वे च काकोल्यौ जीवकर्षभकौ तथा॥**
**ऋद्धिवृद्धी च तैः सर्वैरष्टवर्ग उदाहृतः । अष्टवर्गो बुधैः प्रोक्तो जीवनीयसमो गुणैः॥**

खिरौंलो, ठूलो खिरौंलो, कल्छे लहरो, दूधे कल्छे लहरो, जीवक, ऋषभक, ऋद्धि र वृद्धिको सम्मिश्रणलाई अष्टवर्ग भनिन्छ । यसका गुण जीवनीय गणका ओखतीको गुण समान हुन्छ ।

## अष्टादशाङ्ग
## (Ashtaadashaanga)

(क) **राजनिघण्टु :**

**भार्गीशटीपुष्करवत्सबीजदुरालभाशृङ्गिपटोलतिक्ताः ।**
**किरातविश्वेन्द्रकणेन्द्रबीजधान्यानि तिक्तं सुरदारुकञ्च ॥**
**अष्टादशाङ्गाभिध एष योगः समागमे स्याद्दशमूलकेन ।**
**द्विधा च भार्ग्यादिक एक एष ज्ञेयो द्वितीयस्तु किरातकादिः ॥**

चिण्डे, कपुरहलेदो, पुष्कर, इन्द्रजौ, दुरालभा, शृङ्गि, परबर र कटुकीमा दशमूल मिसाएपछि यसलाई भार्ग्यादि गण भनिन्छ । चिराइतो, सुठो, ठुलोकुरो, जीरा वा पिप्ला, इन्द्रजौ, धनिया, कुटकी र देवदारमा दशमूल मिसाएपछि किरातकादि गण भनिन्छ । यी दुवैको मिश्रणलाई **अष्टादशाङ्ग** भनिन्छ ।

## अष्ठीलिका रोग
## (A kind of abscess)

(क) **अष्टाङ्ग हृदय :**

**विषमा कठिना भुग्ना वायुनाष्ठीलिका स्मृता॥**

वायुविकारका कारण पुरुष जननेन्द्रियमा आउने अग्लोहोचो खालको र छाम्दा कडा हुने पिलोलाई ‘अष्ठीलिका’ भनिन्छ ।

(ख) **भावप्रकाश संहिता :**

**कठिना विषमैर्भुग्नैर्वायुनाष्ठीलिका भवेत्॥**

**अष्ठीला–लौहकारस्य भाण्डविशेषः “निहार” इति लोके । ततः कठिनेत्यष्ठीलिका विषमैर्भुग्नैरिति वक्ष्यमाणशूकविशेषणम् । विषमः ह्रस्वदीर्घैः । भुग्नैः वक्रैः॥**

साना, बाङ्गाटिङ्गा मुख हुने र छाम्दा साह्रो हुने पुरुष जननेन्द्रियमा आउने पिलोलाई ‘अष्ठीलिका’ भनिन्छ ।



लोहकारसँग एक प्रकारको ‘अष्ठीलिका’ नामको औजार हुन्छ । त्यो जस्तै साह्रो हुने हुनाले यो खटिरालाई ‘अष्ठीलिका’ भनिएको हो । यो औजारलाई लौकिक भाषामा ‘निहार’ भनिन्छ । यो खटिरा वायुविकारका कारण आउने गर्दछ ।

(ग) **सुश्रुत संहिता :**

**कठिना विषमैरन्तैर्मारुतस्य प्रकोपतः । शूकैस्तु विषसंभुग्नैः पिडकाऽष्ठीलिका भवेत्॥**

विषाक्त पुरुष जननेन्द्रियका कारण वायुविकारबाट उत्पन्न हुने नमिलेको छेउ हुने कडा खालको पिलोलाई ‘अष्ठीलिका’ भनिन्छ ।

# असिशिम्बी (तरबारे सिमी)
# (Sword Bean)

**परिभाषा :**

**(क) के.यन.स्वामी :** (१) असिशिम्बी, खड्गशिम्बी, महाशिम्बी, बृहच्छिम्बी : खड्गेसिमी । (२) स्थूलशिम्बी : सेतो सिमी । भटमास ।



तरबारे सिमी (तस्बिर श्रोत : साम्सगार्डेनस्टोरडटकम)

**(ख) डा.सतिश चन्द्र साङ्ख्यधर :** यसलाई ल्याटिन भाषामा *Canavalia gladiata* (Jacq.) DC. भनिन्छ ।

**(ग)** यसको अंग्रेजी नाम Sword Bean हो ।

**(घ) नेपाली बृहत् शब्दकोश ( तरबारे सिमी)** : भेट्नैपिच्छे तीन-तीनवटा पात हुने, राता फूल फुल्ने, तरबारका ढाँचाका कोसा लाग्ने, तरकारी खाइने एक जातको सिमी ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**असिशिम्बी खड्गशिम्बी शिम्बी निस्त्रिंशशिम्बिका ।**
**स्थूलशिम्बी महाशिम्बी बृहच्छिम्बी सुशिम्बिका ॥**
**असिशिम्बी तु मधुरा कषाया श्लेष्मपित्तजित् । व्रणदोषापहन्त्री च शीतला रुचिदीपनी ॥**

असिशिम्बी, खड्गशिम्बी, शिम्बी, निस्त्रिंशशिम्बिका, स्थूलशिम्बी, महाशिम्बी, बृहच्छिम्बी र सुशिम्बिका : यी तरबारे सिमीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सिमी गुलियो, टर्रो तथा कफविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले घाउखटिराको विकार नाश गर्दछ । यो शीतवीर्यको (ठण्डी गर्ने), रुचिप्रद र दीपनी (पचाउने गुणको) हुन्छ ।

# आस्थि (हाड)
# (Bone)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) शरीरास्थि : शरीरको हाड । (२) कङ्काल वा कङ्कालम् : हाडमात्रको शरीर । (३) करङ्क : हाडमात्रको शरीर; कङ्काल । (४) अस्थिपञ्जर : कङ्काल; हाडमात्रको शरीर । (५) नलक : नलीजस्तो शरीरको हाड वा नली हाड ।

(ख) नेपाली बृहत् शब्दकोश : अस्थि : हाड; हाडखोर; हड्डी । अस्थिकला : हाडमा कुँदिएको कालिगडी; अस्थिशिल्प । अस्थिक्षय : तरुण अवस्थामा लाग्ने हाडको क्षयरोग । अस्थिछेदक : शरीरका हाड काट्ने साधन वा उपकरण । अस्थिपञ्जर : अस्थिपञ्जर : हाडैहाडको शरीरको पिँजरा; अस्थिमय शरीरको आकार; कङ्काल । दुब्लाएर हाड मात्र बाँकी रहेको शरीरको अवस्था । अस्थिशोथ : हाडको सुज । हाड सुनिने एक प्रकारको रोग । अस्थिसञ्चय : शवदाह गरिसकेपछि कुनै पवित्र नदी वा पुण्य तीर्थमा प्रवाहित गर्नाका निम्ति हाड, खरानी आदि जम्मा गर्ने काम । हाडको थुप्रो वा रास । आँठ : शरीरका करङको जोर्नी; करङ र मेरुदण्डका बीचको सन्धिस्थल । आँठअठिङर : शरीरका अङ्ग-उपाङ्गहरूको सन्धिस्थल; हाडहरूको जोर्नी । कङ्काल : हाडखोर । प्राणीका शरीरका हाड मात्रको आकार; अस्थिपञ्जर । कङ्कालमाली : कङ्कालको कुनै अंशको माला उनेर लाउने । कन्डेउली : ढाडदेखि चाकका फिलाको माझसम्मको भाग । कण्डेउली हाड : सोही भागको ठाडो हाड । कपाल : कुनै पनि प्राणीको टाउकाको प्रायः सिङ्गो हाड; खप्पर । कपाली : खप्परमा भीख मागेर खाने व्यक्ति । कप्पु : टाउकाको एउटा हाड । करङ : हाडखोर । ढाडबाट आरम्भ भएर छातीको मध्य भागमा पुगी जोडिने र भित्र्याँस (मुटु, कलेजो, फोक्सो, फियो आदि) रक्षा गर्न सघाउ पुऱ्याउने हाडका पाताहरूबाट निर्मित पिँजडाका आकारको अस्थिप्रणाली । आकारमा दोब्रिएको तरबारझैँ देखिने उक्त प्रणालीको कुनै एक हाड । कशेरु : मेरुदण्डको हाड । किरकिर : भाँचिएको हाडको टुप्पा घोटिँदा आउने आवाज । कुरकुरेहाड : ढाडमा हुने नरम हाड । कोमलास्थि : कमलो वा कलिलो हाड; कुरकुरेहाड । खगाल्नु : काँधमन्तिरको तेर्सो हाड; खगालो । खप्पर : टाउकाको माथिल्लो भागमा रहेको हाड; कपाल; खोपडी । खप्परे : ठूलो वा अग्लो खप्पर भएको । हातमा खप्पर लिएको । खोपडी : टाउकाको सबभन्दा माथिको हाड; खप्पर । गण्डास्थि : गालाको माथिल्लो भाग र आँखाको तल्लो भागमा पर्ने हाड; गालाको हड्डी । गेडी : शरीरका अङ्गहरूका हाडको जोर्नी । (उखान-घाँटी हेरी हाड निल्नू) । चुलैँसी हाड : चुलैँसीजस्तो परेको टाउकाका बीचको माथिदेखि तलसम्मको हाड; मेरुदण्ड । जघनास्थि : पुट्ठे हाड; टुइँकेहाड । टुइँके हाड : नितम्बको हाड । ढड्नेसो : ढाडको हाड । धोऱ्याङ : गर्धनदेखि पुठ्ठासम्म गएको ढाडको सोझो हाड; मेरुदण्ड । नलीखुट्टे हाड : नलीखुट्टाको हाड । नितम्बास्थि : नितम्ब वा फिलाको हाड; पुट्ठाको हाड । निरस्थि : हाड नभएको; हाडका टुक्राहरू हटाइएको । पञ्जर : शरीरका हाडहरूको आकृति; कङ्काल । पिञ्जर : आँठ-अठिङ्गर । शरीरका हाडहरूबाट बनेको पिँजराको आकार; अस्थिपिञ्जर; पिञ्जरा । पुट्ठेहाड : पुट्ठाको हाड; टुइँके हाड । पृष्ठास्थि : शरीरको पछिल्तिरको हाड; ढाड । प्रपदास्थि : गोलीगाँठाभन्दा मुनि र कुर्कुचाभन्दा अगाडिपट्टिको हाडका ससाना टुक्रा । महाशङ्ख : कनपट्टीको हाड; खप्पर; कपाल । मुन्टेठिङ्गुरोः मुन्टो अडिने गर्दनको हाड । मृतास्थि : मुर्दाको हाड; अस्तु । शरीरको काम नलाग्ने हाड । मेरुदण्ड : गर्धनदेखि गुदद्वारसम्म गएको पिठिउँका बीचको ठाडो हाड; पृष्ठवंश । रीढ : शरीरको पृष्ठभागमा गर्धनदेखि गुदद्वारसम्म फैलिएको लाम्चो करङ; पछाडिको हाड । वंश : ढाडको हाड; मेरुदण्ड । नाकको डाँडी । शङ्खास्थि : कन्चटको हाड । शलाका : नलीखुट्टाको हाड । शल्य : हाड; अस्थि ।

शुक्तिका : शरीररचना-विज्ञानमा तख्ताकार वा कुनै वस्तु रहने, हाडको खोक्रो भागको नाम । सन्धिभङ्ग : वैद्यशास्त्रका अनुसार, हातगोडा आदिको जोर्नीको हाड भाँचिनेफुट्ने क्रिया वा अवस्था । हड्डी : हाड; अस्थि । हाड मात्र भएका दुब्लो । हाड : मानिस, पशुपक्षी आदिका शरीरभित्र रहने सात धातुमध्ये सबभन्दा कडा धातु; शरीरभित्र शरीरकै अङ्गका रूपमा रहने सेतो कडा पदार्थ; अस्थि; हड्डी । हाडखोड : शरीर सडेर पनि धेरै वर्षसम्म रहने हाड, खुर आदि वस्तु । हाडछाला : हाड र छाला मात्र बाँकी रहेजस्तो; ज्यादै दुब्लो । हाड र छाला । हाडमासु : हाड र मासु । हाडे : हाड भएको । हाडेजिउ : हाड देखिने जीउ; खबटे जीउ । हाडैहाड : धेरै हाड; हाडहाडको मात्र भाग वा अंश ।

(ग) डा. साङ्ग्यधर : हाडलाई अंग्रेजीमा Bone भनिन्छ । अस्थिपञ्जरलाई अंग्रेजीमा Skeleton भनिन्छ । ढाडलाई अंग्रेजीमा Back भनिन्छ र त्यहाँ हुने हाडलाई Back bone भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अमरकोशः**

**स्यात्कर्परः कपालोऽस्त्री कीकसं कुल्यमस्थि च॥**
**स्याच्छरीरास्थि कङ्कालः पृष्ठास्थ्नि तु कशेरुका ।**
**शिरोऽस्थनि करोटिः स्त्री पार्श्वास्थनि तु पर्शुका॥**
**...पृष्ठवंशाधरे त्रिकम् । स्कन्धो...सन्धी तस्यैव जत्रुणी । ...तत्परा हनु : ।**



कर्पर र कपाल : यी कपालका नाम हुन् । कीकस, कुल्य र अस्थि : यी हाडका नाम हुन् । अस्थिपञ्जरलाई कङ्काल र डँडाल्नोको हाडलाई कशेरुका भनिन्छ । खप्परलाई करोटि (करोटी) तथा कोखाको हाड वा करङलाई पर्शुका भनिन्छ । कम्मरको हाडलाई त्रिक भनिन्छ । काँधको जोर्नी वा खगाले हाडलाई जत्रु भनिन्छ । गालाको तलतिर रहेको हाडलाई हनु भनिन्छ ।

**(ख) अष्टाङ्ग निघण्टु :**

**मेदःसम्भवमस्थि स्याद्देहसन्धानधारणम् ।**

भित्री बोसोबाट हाड बन्दछ र यसले शरीरको संरचनालाई बोक्ने काम गर्दछ ।

**(ग) अष्टाङ्ग हृदय :**

**अस्थ्यध्यस्स्थ्यधिदन्तांश्च...। अस्थ्न्यस्थितोदः शदनं दन्तकेशनखादिषु ।**

विविध कारणले बढेको अस्थिधातुले हाडलाई अनावश्यकरूपमा बढाउँदछ । अधिक संख्यामा दाँतहरू उमार्दछ । शरीमा हाड धातुको मात्रा कम भएमा हाड करकर खान थाल्दछ । दाँत, कपाल र नङ झर्न थाल्दछ ।

(घ) **काश्यप सांहेता :**

**द्वात्रिंशत्तु मता दन्तास्तावन्त्यूखलिकानि च । पाणिपादाङ्गुलास्थीनि षष्टिः स्युर्विंशतिर्नखाः ॥**
**पाणिपादशलाकास्तु विंशतिः परिकीर्तिताः । पाणिपादशलाकानामधिष्ठानचतुष्टयम् ॥**
**द्वे पार्ष्णोरस्थिनी कूर्चाश्चत्वारः पादयोः स्मृताः । द्वावेव हस्तमणिकौ चत्वार्याहुररत्निषु ॥**
**जान्वस्थिनी द्वे संख्याते चत्वार्यस्थीनि जङ्घयोः । द्वावूरुनलकौ द्वे च ख्याते जानुकपालिके ॥**
**द्वावंसावंसफलकावपि द्वावेव चाक्षकौ । द्वे बाहुनलके द्वे द्वे श्रोणितालूषके तथा ॥**
**एकं जत्रु भगास्थ्येकं ग्रीवा पञ्चदशास्थिकी । भार्गवाऽस्थीनि पृष्ठ्यानि चत्वारिंशच्च पञ्च च ॥**
**चतुर्दशास्थीन्युरसि हन्वस्थ्येकं तु निर्दिशेत् । शिरसस्तु कपालानि चत्वार्याहुर्मनीषिणः ॥**
**चतुर्विंशतिः पार्श्वे च तावन्ति स्थालकानि च । चतुर्विंशतिरेवाहुः स्थालकार्बुदकानि च ॥**
**द्वौ शङ्खौ परिसंख्यातौ द्वे हनुमूलबन्धने । ललाटनासिकागण्डकूटास्थ्येकं विनिर्दिशेत् ॥**
**इत्यस्थिसंख्या सामान्याद् वृद्धिह्रासौ निमित्तजौ ॥**

(यो अध्यायको शुरुका श्लोक पाइएको छैन) । मानवका शरीरमा दाँत ३२, दाँतका खाल्डा ३२, हात तथा गोडाका औँलाका हाड ६०, नङ २०, हात तथा गोडाका हाड (Metacarpus & metatarsus bones, शलाका) २०, शलाकाको अधिष्ठान ४, पार्ष्णिका हाड २, कुर्कुच्चाका हाड ४, हातको मणिबन्धका हाड २, अरत्निका हाड ४, जानुका हाड २, जङ्घाका हाड ४, ऊरुनलक २, जानुकपालिका (Patella) २, अंस २, अंसफलक २, अक्षकास्थि (Cotterbones) २, बाहुनलक २, श्रोणिका हाड २, तालुका हाड २, जत्रुको १, भगको १, ग्रीवाका १५, ढाडका ४५, छातीका १४, हनुको १, कपाल ४, कोख २४, स्थालक (Facets) २४, अर्बुदकाकृति स्थालक २४, शङ्ख २, हनुमूलबन्धन २, ललाट १, नासिका १, गण्डास्थि १ र कूटास्थि १ गरी जम्मा ३६३ वटा हाड हुन्छन् । (आधुनिक विज्ञान मानव शरीरमा २०६ हाड हुन्छन् भन्दछ) ।



(ङ) **धन्वन्तरि निघण्टु :**

**अस्थि हड्डं बलकरं सन्धानं देहधारणम् । सकलं मांसलिप्तं च सर्वमेदःसमुद्भवम् ॥**

अस्थि, हड्ड, बलकर, सन्धान, देहधारण, सकल-मांसलिप्त र सर्वमेद-समुद्भव : यी हाडका पर्याय हुन् । (कतिपय टीकाकारले भने यो श्लोकको शाब्दिक अर्थ लगाएर हाडको काम र गुण बताएको पाइन्छ) ।

(च) **भावप्रकाश संहिता :**

**मेदो यत् स्वाग्निना पक्वं वायुना चातिशोषितम् । तदस्थिसंज्ञां लभते स सारः सर्वविग्रहे ॥**
**अभ्यन्तरगतैः सारैर्यथा तिष्ठन्ति भूरुहाः । अस्थिसारैस्तथा देहा ध्रियन्ते देहिनो ध्रुवम् ॥**
**तस्माच्चिरविनष्टेषु त्वङ्मांसेषु शरीरिणाम् । अस्थीनि न विनश्यन्ति सारा एतानि सर्वथा ॥**

आफ्नै आंग्नेबाट पचेको वा पाकेको र वायुले कडा बनाएर सुकाएको बोसोलाइ हाड भनिन्छ । हाड सम्पूर्ण शरीरको साररूप (चुरो) हो । जसरी रुखको भित्र बीचमा चुरो हुन्छ र रुख यही चुरोले गर्दा पृथ्वीमा ठडिएर रहन सक्दछ त्यसरी नै मानिसको पनि हाडरूपी सारको कारणले शरीर धारण भइरहेको हुन्छ । छाला र मासु नष्ट हुँदा पनि हाड नष्ट नभई लामो समयसम्म रहिरहन्छ । (मरेपछि पनि सैयौं वर्षसम्म हाडको ढाँचा जस्ताको तस्तै रहने गर्दछ) । यसैले सबै शरीरको सार भनेको हाडहरु नै हुन् ।

**शल्यतन्त्रेऽस्थिखण्डानां शतत्रयमुदाहृतम् । तान्येवात्र निगद्यन्ते तेषां स्थानानि यानि च ॥**
**सविंशतिशतं त्वस्थ्नां शाखासु कथितं बुधैः । पार्श्वयोः श्रोणिफलके वक्षःपृष्ठोदरेषु च ॥**
**जानीयाद्विषगेतेषु शतं सप्तदशोत्तरम् । ग्रीवायामूर्ध्वगां विद्यादस्थ्नां षष्टिं त्रिसंयुताम् ॥**

शल्यतन्त्रमा मानिसका शरीरमा तीन सय वटा हाडहरू हुन्छन् भनिएको छ । ती हाड र ती रहने स्थानका बारेमा यहाँ बताइन्छ । विद्वानहरूले दुई हात र दुई गोडामा गरी जम्मा एक सय बीस हाड हुन्छन् भनेका छन् । दुबै कोखा, कमर, नितम्ब, छाती, ढाड र पेटमा गरी जम्मा एक सय सत्र हाड हुन्छन् । यसैगरी गर्दन र यसभन्दा जम्मा त्रिसठ्ठी वटा हाड हुन्छन् ।

**एकैकस्यां पादांगुल्यां त्रीणित्रीणि तानि पञ्चदश ।**
**पादतले पञ्चास्थिशलाकास्तदाधरभूतमेकमस्थि एवं षट् ।**
**कूर्चे द्वे । गुल्फे द्वे । पार्ष्णाविकम् । जङ्घयोर्द्वे । जानुन्येकम् ।**
**ऊरावेकम् । एवं त्रिंशदेकस्मिन्सक्थिनि भवन्ति । एतेन इतरसक्थिनि बाहू च व्याख्यातौ ॥**

गोडाका प्रत्येक औंलामा तीन तीन वटाका दरले पाँच औंलामा पन्ध्र, पैंतालामा पाँचवटा छेस्का जस्ता र एउटा त्यसको मूल गरी छ वटा हाड, बूढी औंला र चोर औंलाका बीचमा दुई, गोलिगाँठामा दुई, कुर्कुचामा एक, तिघ्रामा दुई, घुँडामा एक, ऊरु (?) मा एक । यसरी एउटा गोडामा जम्म तीस वटा हाड हुन्छन् । यसैगरी अर्को गोडामा र दुवै हातमा हुन्छन् ।

**पार्श्वयोः षट्त्रिंशत्-षट्त्रिंशत् । गुदे एकम् । शिश्ने भगे वा एकम् । नितम्बयोरेकैकम् । त्रिके एकम् । वक्षसि अष्टौ । पृष्ठे त्रिंशत् । अक्षकसंज्ञे द्वे ।**

दुवै कोखामा छत्तीस, छत्तीस; मलद्वारमा एक, लिङ्ग वा योनिमा एक, नितम्बमा एक एक; कण्डेउलोमा एक, छातीमा आठ, ढाडमा तीस र घाँटी नजिक छातीमाथी रहेका धनुष आकारका हाड दुई ।

**ग्रीवायां नव । कण्ठनाड्यां चत्वारि । हन्वोरेकैकम् । दन्ताः द्वात्रिंशत् । नासायां त्रीणि । तालुनि एकम् । गण्डयोरेकैकम् । कणयोरेकैकम् । भ्रुवयोरेकैकम् । शिरसि षट् ।**

गर्दनमा नौ, घाँटीमा चार, चिउँडोमा एक एक, दाँत बत्तीस, नाकमा तीन, तालुमा एक, गालामा एक एक, कानमा एक एक, आँखीभुइँमा एक एक र खोपडीमा छ ।

**एतान्यस्थीनि पञ्चविधानि भवन्ति तानि यथा-**

**तरुणानि कपालानि रुचकानि भवन्ति हि । वलयानीति तानि स्युर्नलकानि च कानि चित्॥**
**अक्षिकोश श्रुतिघ्राणग्रीवासु तरुणानि च । शिरः शङ्खकपोलेषु ताल्वं सप्रोथजानुषु॥**
**कपालानि भवन्त्येषु दन्तेषु रुचकानि च । पाण्योः पार्श्वयुगे पृष्ठे वक्षोजठरपायुषु॥**
**पादयोर्वलयानि स्युर्नलकानि ब्रुवेऽधुना । हस्ते पादाङ्गुलितले कूर्चे च मणिबन्धके॥**
**बाहूजङ्घाद्वये चापि जानीयान्नलकानि तु॥**
**(जानुनितम्बांसगण्डतालुशङ्खशिरःसुकपालानि । दशनास्तु रुचकाः ।)**

हाड तरुण, कपाल, रुचक, बलय र नलक गरी पाँच किसिमका हुन्छन् । आँखाको खोपिल्टो, कान, नाक र गर्दनका हाडलाई तरुण हाड भनिन्छ । टाउको, कञ्चट, गाला, तालु, काँध, कम्मर र घुँडाका हाडलाई कपाल भनिन्छ । दाँतका हाडलाई रुचक भनिन्छ । दुई हात, दुई गोडा, ढाड, छाती, पेट, मलद्वार र दुवै पैँतालाका हाडलाई वलय भनिन्छ । हातगोडाका औँलाका तल, बुढी औँला र चोर औँलाको बीचमा, नाडी, पाखुरा र तिघ्रामा हुने हाडलाई नलक भनिन्छ ।

(छ) **राज निघण्टु :**

**मेदोजमस्थिधातुः स्यात् कुल्यं कीकसकञ्च तत्॥**

मेदोज, अस्थिधातु, कुल्य र कीकसक : यी हाडका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**शिरोऽस्थि तु करोटिः स्यात् शिरस्त्राणं तु शीर्षकम् ।**
**तत् खण्डं खर्परं प्राहुः कपालञ्च तदीरितम्॥**
**पृष्ठास्थि तु कसेरुः स्यात् शाखास्थि नलकं स्मृतम्॥ पार्श्वास्थि पर्शुका प्रोक्तम्...॥**

टाउकाको पूरा हाडलाई करोटि र शिरको बीचको भागको हाडलाई शिरस्त्राण वा शीर्षक भनिन्छ । टाउकाको कचौरा जस्तो हाडको खण्डलाई वा खप्परलाई खर्पर वा कपाल वा शीर्षखण्ड भनिन्छ । ढाडको हाडलाई कसेरु र नलीहाडलाई नलक भनिन्छ । करङलाई पर्शुका भनिन्छ । (बोसोबाट हाड बन्दछ) ।

(ज) **शाङ्र्गधर संहिता :**

**...अस्थ्नाञ्च त्रिशतन्तथा॥ मेदसोऽस्थि ...सम्भवः॥**
**आधारश्च तथा सारः कायेऽस्थीनि बुधा जगुः॥**

मानव शरीरमा तीन सय हाडहरू हुन्छन् । शरीरमा बोसोले हाड बन्दछ । शरीरको सार वा आधार हाड हो भनी विद्वानहरू भन्दछन् ।

(झ) **हलायुधकोशः**

**अस्थीनि धातुकीकसकुल्यानि भवन्ति तुल्यानि॥ शरीरस्यास्थि कङ्कालं तथा स्यादस्थिपञ्जरम्।**
**शिरसोऽस्थि करोटिः स्यात्कपालं शकलं च तत्॥**
**शाखास्थि नलकं प्रोक्तं पृष्ठस्यास्थि कसेरु च।**

अस्थि, कीकस, कुल्य : यी हाडका नाम हुन्। शरीरमा रहेको पूरै हाडको मात्र संरचनालाई कङ्काल वा अस्थिपञ्जर भनिन्छ। टाउकाको हाडलाई करोटि र पूरै हाडलाई कपाल भनिन्छ। नलीहाडलाई नलक र ढाडको हाडलाई कसेरु भनिन्छ।


Skull
Cranium
Mandible
Spinal Column
Cervical Vertebrae (I-VII)
Thoracic Vertebrae (T I - T XII)
Lumbar Vertebrae (L I - L V)
Sacrum
Coccyx
Clavicle
Manubrium
Scapula
Sternum
Ribs
Humerus
Ulna
Radius
Pelvic Girdle
Carpals
Metacarpals
Phalanges
Femur
Patella
Tibia
Fibula
Tarsals
Metatarsals
Phalanges

# आंस्थिसंहारक (हडचूर)
# (Bone setter)

**परिभाषा :**

(क) **के.यन.स्वामी :** अस्थिसंहारी र वज्राङ्गी भनेको हडचूर हो ।

(ख) **नेपाली बृहत् शब्दकोश (हडचूर) :** अरू नै रूखका फेद हुँदी उम्रने, सिउँडीजस्तो र आयुर्वेदका अनुसार भाँचिएको वा फुटेका हाड जोड्न उपयोग हुने एक प्रकारको लहरो; अस्थिसंयोजक ।

(ग) **भावप्रकाश निघण्टुका टीकाकार डा. कृष्णचन्द्र चुनेकर :** यसलाई ल्याटिन भाषामा *Vitis quadrangularis* Wall. भनिन्छ । यो प्रायः गर्मीप्रदेशमा हुन्छ । रुखमा चढ्दछ तर झुण्डिएर बस्दछ ।

(ख) **आचार्य बालकृष्ण :** यसको लहरा करिब आठ मिटरसम्म लामो हुन्छ । अर्को रुखमा चढ्दछ । डाँठ चार कुना परेका हुन्छन् । छिप्पिए पछि पात हुँदैन । डाँठहरू हाड जोडिए जसरी जोडिएका हुन्छन् । यसको वानस्पतिक नाम *Cissus quadrangularis* Linn. वा *Vitis quadrangularis* (Linn.) Wall. ex. Wight हो । यसलाई अंग्रेजीमा Bone setter, Edible stemmed vine, Veld grape वा Winged tree vine भनिन्छ ।

(ग) **फर्माकोपिया :** यो Vitaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Cissus quadrangularis* Linn. हो । यसलाई हिन्दीमा हडजोड भनिन्छ । संस्कृतमा यसलाई वज्रवल्ली, चतुर्धारा भनिन्छ । यसको स्वरस १०-२० मि.लि(. तथा धूलो ३-६ ग्राम ओखतीमा प्रयोग हुन्छ ।

(घ) **Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 :** यो Angiosperm समूह अन्तर्गत Santalaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Viscum album* L. हो । यसलाई नेपालीमा ऐँजेरु वा हडचूर भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अभिधान मञ्जरी :**

**वज्री वज्रलता गृष्टिः स्पृक्किका वज्रवल्लिका । धारावल्ली चतुर्धारा तण्डुली पर्विका भवेत्॥**

वज्री, वज्रलता, गृष्टि, स्पृक्किका, वज्रवल्लिका, धारावल्ली, चतुर्धारा, तण्डुली र पर्विका : यी हडचूरका पर्यायवाची नाम हुन् ।

(ख) **अर्कप्रकाश :**

**अस्थिसंहारकायास्तु भग्नसन्धान कृच्छिवे॥**

हडचूरको अर्क टुटेफुटेका हाड जोड्ने जस्ता कल्याणदायी काम गर्दछ ।

(ग) **कैयदेव निघण्टु :**

**वज्रप्रोक्तास्थिसंहारो वज्राङ्गी क्रोष्टुघण्टिका । अस्थिशृङ्खलिका ज्ञेया ग्रन्थिला वज्रवल्लरी ॥**
**वज्रवल्ली सरा रूक्षा कृमिदुर्नामनाशिनी । दीपन्युष्णा विपाके च स्याद्वी वृष्या बलप्रदा ॥**
**अस्थिसन्धानजननी वातश्लेष्महरा गुरुः ।**

वज्री, अस्थिसंहारी, वज्राङ्गी, क्रोष्टुघण्टिका, अस्थिशृङ्खलिका, ग्रन्थिला र वज्रवल्लरी : यी हडचूरका पर्यायवाची नाम हुन् । यो मलमूत्रलाई तलतिर सार्ने, रुखो, कीरा र हर्सा नागर्ने, दीपनी, उष्णवीर्यको, पचेपछि गुलियो हुने, वीर्यवर्धक, बलदायक, हाडलाई जोड्ने, वातविकार र कफविकार नाशगर्ने तथा पचाउन कठिन हुने गुणको हुन्छ ।

(घ) **पर्यायरत्नमाला :**

**वज्रपर्ण्यस्थिसंहारो ग्रन्थिमान् कुलिशोऽमरः ।**

वज्रपर्णी, अस्थिसंहार, ग्रन्थिमान्, कुलिश र अमर : यी हडचूरका पर्यायवाची नाम हुन् ।



(ङ) **भावप्रकाश निघण्टु :**

**ग्रन्थिमानस्थिसंहारीवज्राङ्गीवाऽस्थिशृङ्खला । अस्थिसंहारकः प्रोक्तो वातश्लेष्महरोऽस्थियुक् ॥**
**उष्णः सरः कृमिघ्नश्चदुर्नामघ्नोऽक्षिरोगजित् । रूक्षः स्वादुर्लघुर्वृष्यः पाचनः पित्तलः स्मृतः ॥**

ग्रन्थिमान्, अस्थिसंहारी, वज्राङ्गी र अस्थिश्रृङ्खला : यी हडचूरका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले वातविकार र कफविकार नाश गर्नुका साथै फुटेका वा भाँचिएको हाड जोड्दछ । यसले गर्मी गर्नुका साथै मल खुलाउँदछ । कीरा, अल्काई र आँखाका रोग नाश गर्दछ । यो रुखो, स्वादिलो, पचाउन सहज, वीर्यवर्धक, पाचनी र पित्तवर्धक हुन्छ ।

**काण्डं त्वग्विरहितमस्थिशृङ्खलायामाषार्द्ध द्विदलमकञ्चुकं तदर्द्धम् ।**
**संपिष्टं सुतनु ततस्तिलस्य तैलेसंपक्वं वटकमतीव वातहारि ॥**

हडचूरका टुक्रालाई बोक्रा ताछेर त्यसमा बोक्रा नभएका मास आधा मिसाई पिँध्नू । अनि ससाना गोली बनाउनू र तिलको तेलमा पकाउनू । यसले वातरोग ठिक हुन्छ । (मात्रा १-२ तोला) ।

(च) **मदनपाल निघण्टु :**

**अस्थिसंहारको वज्रवल्लरी क्रोष्टुघण्टिका । वज्राङ्गी ग्रन्थिमान्वज्रप्रोक्ता स्यादस्थिशृङ्खला ॥**

**आस्थिसंहारकः शांतो वृष्यो वातहरोऽस्थियुक्॥**

अस्थिसंहारक, वज्रवल्लरी, क्रोष्टुघण्टिका, वज्राङ्गी, ग्रन्थिमान्, वज्रप्रोक्ता र अस्थिशृङ्खला : यी हडचूरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतल गर्ने, वीर्यवर्धक, वातविकार नाशक र हाडहरू जोड्ने गुणको हुन्छ ।

**अस्थिशृङ्खलिका वज्री ग्रन्थिमानस्थिसंहतिः । अस्थिशृङ्खलिका वृष्या श्लेष्मला मधुरा हिमा॥**
**अस्थिसन्धानकृद्बल्या पित्तरक्तानिलापहा॥**

अस्थिशृङ्खलिका, वज्री, ग्रन्थिमान् र अस्थिसंहति : यी हडचूर विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । हडचूर वीर्यवर्धक, कफविकार गराउने, गुलियो र शीतवीर्यको हुन्छ । यसले हाडलाई जोड्दछ, बल दिन्छ तथा रक्तपित्त र वातविकार नाश गर्दछ ।

(छ) **माधवद्रव्यगुण :**

**अस्थिभग्नेऽस्थिसंहारो हितो बल्योऽनिलापहः ।**

हाड भाँचिंदा हडचूर हितकर हुन्छ । यो बलदायक र वातविकार नाशगर्ने गुणको हुन्छ ।

(ज) **राजवल्लभ निघण्टु :**

**अस्थिभग्नेऽस्थिसंहारो हितो बल्योनिलापहः॥**

हडचूर हाड भाँचिंदा हितकर हुन्छ । यो बलदायक र वातविकार नाशगर्ने गुणको हुन्छ ।

(झ) **सोढल निघण्टु :**

**अस्थिशृङ्खलिकायां तु शृङ्खला चास्थिका तथा ।**

अस्थिशृङ्खलिका, शृङ्खला र अस्थिका : यी हडचूरका पर्यायवाची नाम हुन् ।



हडचूर (तस्बिर श्रोत : आचार्य बालकृष्ण)



हडचूर (तस्बिर श्रोत : "Iidigenous Plants At Biodiversity Park, Ranchi" नामक पुस्तक

# अहङ्कार
# (Ego, Pride)

(क) **नेपाली बृहत् शब्दकोश (अहङ्कार) :**

आफूलाई सर्वेसर्वा सम्झने क्रिया, भाव वा गुण; अभिमान; घमन्ड; सेखी; मपाइँ, अहमत्याइँ । रिस; क्रोध ।

(ख) **राज निघण्टु :**

**अहङ्कारोऽभिमानः स्यादहन्ताऽहम्मतिस्तथा॥**

अहङ्कार, अभिमान, अहन्ता र अहंमति : यी अहङ्कारका संस्कृत पर्यायवाची नामहरू हुन् ।

(ग) **शार्ङ्गधर संहिता :**

**अहमित्यभिमानेन यः क्रियासु प्रवर्तते । कार्यकारणयुक्तस्तु तदहङ्कारलक्षणम्॥**

जब प्राणी कार्य र कारण दुवै म गर्दछु भन्ने अभिमानले कर्ममा लाग्दछ तब त्यसलाई अहङ्कार भनिन्छ ।



(घ) अहङ्ककारलाई अंग्रेजीमा Ego वा Pride आदि भनिन्छ ।

(ङ) **अमरकोश :**

**अहङ्कारवानहंयुः...।**

अहङ्कारवत् र अहंयु : यी अहङ्कारीका नाम हुन् ।

अहङ्कारलाई सृष्टिका चौबीस तत्वमध्ये एक मानिन्छ । संसारका सबै कुरा सृष्टि हुँदा यो तत्व पनि स्वाभाविक रूपमा स्वतः समावेश हुने गर्दछ । अर्थात् मानिसमा पनि अहङ्कार गर्भैदेखि आउने गर्दछ ।

## आंहेपूतन रोग
## (Napkin rash, Sore buttocks)

(क) **सुश्रुत संहिता :**

**शकृन्मूत्रसमायुक्तेऽधौतेऽपाने शिशोर्भवेत् । स्विन्नस्यास्नाप्यमानस्य कण्डू रक्तकफोद्भवा ॥**
**कण्डूयनात्ततः क्षिप्रं स्फोटाः स्रावश्च जायते । एकीभूतं व्रणैर्घोरं तं विद्यादहिपूतनम् ॥**

पसिनाले भिजिरहने तर समयमै नुहाउन नपाउने बालकको मलद्वार क्षेत्र, मलमूत्रले दूषित एवं दुर्गन्धित भएपछि मात्र धुने कारणले रक्तविकार र कफविकारका कारण त्यस भागमा चिलाउन थाल्दछ । जब त्यहाँ कन्याइन्छ तब फोका वा बिमिरा उठ्दछन् र ती फुटेर पानी बहन थाल्दछन् । यसपछि त्यहाँ खटिरा निस्कन थाल्दछ । यस्तो मलद्वार क्षेत्रको डरलाग्दो रोगलाई अहिपूतन भनिन्छ ।

# अहिफेन (अफिम)
# (Opium)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) तिलभेद, खसतिल : पोस्ता दाना । (२) खाखस : अफिमको बोट ।

(ख) नेपाली बृहत् शब्दकोश : (१) अफिम : काँढादार केस्रा परेका पात हुने, सेतो कलेजी, रातो वा नीलो रङको फूल फुल्ने, डल्ला परेका फलभित्र मसिना लट्टेजस्ता दाना फल्ने, एक जातको बोट वा त्यसैबाट निस्कने नशादार चोप, अहिफेन । (२) चन्डु : अफिमबाट बनाइएको नशादार धुम्रपान-विशेष । (३) पोस्त : अफिमको फल; खसखसको दाना । (४) पोस्ता : अफिम । (५) बिरो : पोस्ताको दाना; अफिमका बोटमा फल्ने दाना । (६) बिर्रो : अफिमको बोटमा फल्ने सिलामका जस्ता मसिना दाना ।

(ग) डा.चुनेकर : यसको ल्याटिन नाम *Papaver semniferum,* Linn. हो । वास्तवमा अफिम भनेको यसको फलको दूध वा चोप मात्र हो तर अनेक कुरा मिसाएर अफिम भनी बेच्ने गरिन्छ । यसलाई अंग्रेजीमा Opium भनिन्छ । अफिमका गेडालाई अंग्रेजीमा Poppy Capsule वा Puppy Seeds तथा ल्याटिन भाषामा *Papaveris capsulae* भनिन्छ ।

(घ) धन्वन्तरि निघण्टुका टीकाकार... : यसको वानस्पतिक *Papaver semniferum* Linn. नाम हो ।

(ङ) शालिग्राम निघण्टु : अफिमको फललाई अंग्रेजीमा Popyveapsulea तथा ल्याटिनभाषामा *Pabaveris Capsulae* भनिन्छ । अफिमलाई अंग्रेजीमा Opium भनिन्छ । अफिमका बीजलाई अंग्रेजीमा Poppy seeds तथा ल्याटिनभाषामा *Apavar somuiferum* भनिन्छ ।

(च) भारत सरकारबाट प्रकाशित द आयुर्वेदिक फर्माकोपिया अफ इण्डिया, भोलम ५ : अफिमलाई वनस्पति शास्त्रमा *Papaver somniferum* Linn.भनिन्छ । यो Papaveraceae परिवारमा पर्दछ । यसका दाना ५-१० ग्रामसम्म ओखतीमा प्रयोग हुन्छ ।

(छ) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : अफिमको वानस्पतिक नाम *Papaver somniferum* L. हो । यो Angiosperm समूह अन्तर्गत Papaveraceae परिवारमा पर्दछ ।


अफिमको बोट (तस्बिर श्रोतः विकिपेडिया)

**प्राचीन ग्रन्थका वचन :**

**(क) अर्कप्रकाश :**

**..खाखसोत्थन्तदुद्भवः । ...हरेत्पानात्ययम्प्रिये ॥**

अफिमको अर्कले अफिमको मदात्ययलाई नाश गर्दछ ।

**...खाखसार्कैर्व्रणशोथः क्षयं व्रजेत् ॥**

घाउजन्य सुजन अफिमको अर्कले सेक्नाले ठिक हुन्छ ।

**(ख) धन्वन्तरि निघण्टु :**

**खस्तिलस्तिलभेदस्तु शुभ्रपुष्पो लसत्फलः । वृष्यो बल्यश्च खस्तिलः श्लेष्मघ्नो वातजिद् गुरुः ॥**
**वल्कलस्तत्फलो ज्ञेयो रूक्षो ग्राही विशोषणः ।**

खस्तिल, तिलभेद, शुभ्रपुष्प र लसत्फल : यी खसखसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो वीर्यवर्धक, बलदायक, कफविकार नाशक, वातविकारलाई जित्ने र पचाउन कठिन हुने गुणको हुन्छ । यसको फलको बोक्रा रुखो, ग्राहि र सोस्ने गुणको हुन्छ ।

**अफूकं तद्द्रवीभूतमहिफेनमफेनकम् ॥ अफूकं शोषणं ग्राहि श्लेष्मघ्नं वातपित्तलम् ।**



खसखसको चोपलाई अफूक, अहिफेन र अफेनक भनिन्छ । यसमा सोस्ने, ग्राहि, कफविकार नाश गर्ने तथा वातविकार र पित्तविकार गर्ने गुण हुन्छ ।

**(ग) निघण्टु रत्नाकर (शा.नि.) :**

**जारणोमारणश्चैव धारणः सारणस्तथा । अहिफेनश्चतुर्धोक्तो गुणांस्तस्य ब्रवीमिते ॥**
**वृष्यो बलकरो ग्राही सप्तधातु विशोषकः । वातपित्तकृदानन्दकारको नेत्रमादकः ।**
**वीर्य्यस्तम्भकरस्तिक्तो मधुरश्च प्रकीर्तितः ॥ सन्निपातकृमिकफपाण्डुक्षयविनाशकः ।**
**मेहादीञ्छ्वासकासौ च प्लीहां धातु क्षयं तथा ॥ नाशयेदिति च प्रोक्तो विशेषस्तस्य कथ्यते ।**
**श्वेतवर्णो जारणः स्याद्भुक्तमन्नं च जारयेत् ॥ मृतिप्रदः कृष्णवर्णो मारणस्तु प्रकीर्तितः ।**
**जरानाशकरः पीतोधारणः सम्प्रकीर्तितः ॥ चित्रवर्णः सारणः स्यान्मलसारणकार्यतः ।**

अफीम जारण, मारण, धारण र सारण गरी चार किसिमको हुन्छ । यो वीर्यवर्धक, बलकारक, ग्राहि, सातवटा धातुलाई सोस्ने वातकारक, पित्तकारक, आनन्दकारक, आँखा आदिलाई नसालु बनाउने, वीर्यलाई रोक्ने, तीतो, गुलियो तथा सन्निपात, कीरा, कफविकार, पाण्डु, क्षयरोग, प्रमेह, दम, खोकी, फियोका रोग, धातु-क्षय नाशक हुन्छ । अब यिनका विशेष गुण बताउँदछु । सेतो रङ्को अफिमले खाएको अन्न पचाउँदछ यसैले यसलाई जारण भनिन्छ । कालो रङ्को अफिमले ज्या लिन्छ त्यसैले यसलाई मारण भनिन्छ । पहेँलो रङ्को अफिमले रोग नाश गर्दछ त्यसैले यसलाई धारण भनिन्छ । छिरबिरे रङ्को अफिमले दिसालाई तलतिर सार्दछ त्यसैले यसलाई सारण भनिन्छ ।

**खसखसं ग्राहकं बल्यं गुरु वृष्यं कफप्रदम् । पाके च मधुरं वीर्य्ये कान्तिदं बलदं मतम्॥**
**वातपित्तं नाशयति फलं रूक्षञ्च ग्राहकम् । रक्तशोषकरं प्रोक्तं मुनिभिस्तत्त्वदर्शिभिः॥**

अफिम ग्राहि, बलदायक, पचाउन कठिन, वीर्यवर्धक, कफविकार गर्ने, पचेपछि गुलियो हुने, शुक्र बढाउने, कान्ति दायक, बल दायक, वातविकार नाशक, पित्तविकार नाशक हुन्छ । यसको फल रुखो, ग्राही र रगतलाई सोस्ने गुणको हुन्छ ।

(घ) **भावप्रकाश निघण्टु :**

**तिलभेदः खसतिलः खाखसश्चापि संस्मृतः । स्यात् खाखसफलोद्भूतं वल्कलं शीतलं लघु॥**
**ग्राहि तिक्तं कषायं च वातकृत् कफकासहृत् । धातूनां शोषकं रूक्षंमदकृद्वाग्विवर्द्धनम्॥**
**मुहुर्मोहकरं रुच्यं सेवनात्पुंस्त्वनाशनम् ।**

तिलभेद, खसतिल र खाखस : यी अफिम फलको बोक्राका संस्कृत पर्यायवाची नामहरू हुन् । अफिमको फलको बोक्रा शीतल गर्ने, पचाउन हलुका, सङ्ग्राही, तीतो, टर्रो, वातविकार गर्ने, कफविकार नाशक, खोकी नाशक, शरीरका धातुलाई सुकाउने, रुखो, नसा लगाउने, बोली बढाउने, पटक पटक मोह गराउने र रुची जगाउने हुन्छ । तर यसको लगातार सेवनले नुपंसकत्व हुन्छ ।

**उक्तं खसफलक्षीरमाफूकमहिफेनकम्॥ आफूकं शोषणं ग्राहि श्लेष्मघ्नं वातपित्तलम्॥**
**तथा खसफलोद्भूतवल्कलप्रायमित्यपि॥**

खसफलक्षीर, आफूक र अहिफेनक : यी अफिमका संस्कृत पर्यायवाची नामहरू हुन् । अफिम शोषक, सङ्ग्राही, कफनाशक, वातकारक र पित्तकारक हुन्छ । यसका साथै अफिमको बोक्रामा गुण पनि यसमा हुन्छन् ।



**उच्यन्ते खसबीजानि ते खाखसतिला अपि । खसबीजानि बल्यानि वृष्याणि सुगुरूणि च॥**
**शमयन्ति कफं तानि जनयन्ति समीरणम् ।**

खसबीज र खाखसतिल : यी अफिमका गेडाका संस्कृत पर्यायवाची नामहरू हुन् । अफिमका दाना बल र वीर्य वर्धक, पचाउन कठिन, कफनाशक र वातवर्धक हुन्छ ।

**तैलं तु खसबीजानां बल्यं वृष्यं गुरुस्मृतम् । वातहृत्कफहृच्छीतं स्वादुपाकरसं च तत्॥**

अफिमको तेल बलदायक, वीर्यवर्धक, पचाउन कठिन, वातविकार नाशक, कफविकार नाशक, शीतल गर्ने र पचेपछि गुलियो हुने गुणको हुन्छ ।

(ङ) **भावप्रकाश संहिता :**

**दुग्धेन खाखसं बीजं प्रलेपाद्दारुणं हरेत्॥**

अफिमको गेडा दूधमा पिसेर दल्नाले टाउकाको रुखोपन नाश हुन्छ ।

(च) **मदनपाल निघण्टु :**

**तिलभेदाः खसतिलः शुभ्रपुष्पो लसत्फलः । वृष्यो बल्यः खसतिलः श्लेष्मलो वातजिद्गुरुः॥**

**वल्कलस्तत्फलोद्भूतो रूक्षो ग्राही विशेषतः॥**

तिलभेद, खसतिल, शुभ्रपुष्प र लसत्फल : यी अफिम फलका संस्कृत पर्यायवाची नामहरू हुन्। यो वीर्यवर्धक, बलवर्धक, कफकारक, वातविकार नाशक र पचाउन कठिन हुन्छ । यसको फलको बोक्रा विशेषतः रुखो र ग्राही हुन्छ ।

**आफूकं तद्रसोद्भूतमहिफेनं सफेनकम् । आफूकं शोषणं ग्राहि श्लेष्मघ्नं वातपित्तलम्॥**

आफूक, आफूकरसोद्भूत, अहिफेन र सफेनक : यी अफिमको रसका संस्कृत पर्यायवाची नामहरू हुन्। यसले सोस्दछ । यो ग्राही, कफविकार नाशक तथा वातविकार पित्तविकार गर्ने गुणको हुन्छ ।

## (छ) राज निघण्टु :

**खस्खसः सूक्ष्मबीजः स्यात् सुबीजः सूक्ष्मतण्डुलः । खस्खसो मधुरः पाके कान्तिवीर्यबलप्रदः॥**

खस्खस, सूक्ष्मबीज, सुबीज र सूक्ष्मतण्डुल : यी अफिमको गेडाका संस्कृत पर्यायवाची नामहरू हुन्। यो पचेपछि गुलियो तथा कान्ति र वीर्यप्रदायक हुन्छ ।

**अफेनं खस्खसरसो निफेनं चाहिफेनकम् । अफेनं सन्निपातघ्नं वृष्यं बल्यं च मोहदम्॥**

अफेन, खस्खसरस, निफेन र अहिफेनक : यी अफिमका संस्कृत पर्यायवाची नामहरू हुन्। अफिमले सन्निपात रोग नाश गर्दछ । यसले वीर्य, बल र मोह (नसा) दिन्छ ।



**चतुर्विधमफेनं स्यात् जारणं मारणं तथा । धारणं सारणं चैव क्रमाद्वक्ष्ये तु लक्षणम्॥**
**श्वेतञ्च जारणं प्रोक्तं कृष्णवर्णञ्च मारणम् । धारणं पीतवर्णन्तु कर्बुरं सारणं तथा॥**
**जारणं जारयेदन्नं मारणं मृत्युदायकम् । धारणञ्च वयःस्तम्भं सारणं मलसारणम्॥**


अफिमको फल र दाना (तस्विर श्रोत : डेलीहन्ट डट इन)

जारण, मारण, धारण र सारण गरी अफिम चार थरीको हुन्छ । यिनको लक्षण क्रमशः बताउँदछु । सेतोलाई जारण, कालोलाई मारण, पहेँलोलाई धारण र छिरबिरे वा रङ्गीचङ्गीलाई सारण भनिन्छ । जारणले अन्नलाई पचाउँदछ, मारणले ज्यान लिन्छ, धारणले उमेरलाई स्थिर राख्दछ र सारणले दिसालाई तलतिर सार्दछ ।

## (ज) शालिग्राम निघण्टु :

**खसफले खाखसफलमुल्लसत्फलमित्यपि । अफेनं खसखसरसं निफेनं चाहिफेनकम् ।**
**उच्यन्ते खसबीजानि ते खाखसतिला अपि॥**

खसफल, खाखसफल र उल्लसत्फल : यी अफिमका फलका नाम हुन्। अफेन, खसखसरस, निफेन र अहिफेनक : यी अफिमका संस्कृत पर्यायवाची नामहरू हुन् । अफिमका बीजलाई खसबीज वा खाखसतिल भनिन्छ ।

# आकाशवल्ली (आकाश बेली)
# (Gaint-dodder)

**परिभाषा :**

(क) के.यन.स्वामी : अमरवल्ली : आकाशबेली । आकाशवल्ली : अमरवेल / आकाशवेली । खवल्ली : आकाशबेली ।


आकाश बेली, आचार्य बालकृष्णको लेखबाट, वनप्स जीडटकम

(ख) नेपाली बृहत् शब्दकोश : (१) अमरवल्ली : आकाशवल्ली । (२) आकाशवल्ली : सिमाली आदिको बोट वा झाङमा स्वतः फैलिने पात, फल आदि केही नहुने हरियो वा पहेँलो लहरो; अमरवल्ली । (३) आकाशबेली : चमेलीका आकारको एक प्रकारको फूल फुल्ने लहरो ।

(ग) विश्वनाथ द्विवेदी शास्त्री : यसको जरा, पात आदि हुँदैन र पहेँलो वर्णको हुन्छ जुन बोटमा यो रहन्छ त्यहाँबाट चाँडै मासिँदैन । जुन बोटमा लगेर राख्यो त्यसैमा फैलन्छ । पहाडतिर शरद ऋतुमा यो लहरामा कर्णफूल जस्ता मसिना सुगन्धी फूल फुलेको पनि पाइएको छ । जाडोमा यो सुक्दछ ।

(घ) डा. चुनेकरले *Cuscuta reflexa* Roxb. र *Cassytha filiformis* वानस्पतिक नाम भएका गरी दुई थरी आकाशवल्लीको बारेमा व्याख्या गरेका छन् ।

(ङ) आचार्य बालकृष्ण : यसको अंग्रेजी नाम Gaint-dodder वा Reflexed dodder हो । यो जुन रूखमा झाङ्गिन्छ बरु त्यो रूखलाई सुकाउला तर आफू मर्दैन । यो लहरा मसिना रेसा मार्फत आफू रहेको रूखको रस चुसेर बाँच्ने गर्दछ । कतै कतै फूल र फल समेत फल्ने आकाशवल्ली पनि पाइन्छ । केही विद्वानहरू आँपको बोटमा हुनेलाई अमरवेल र अन्यलाई आकाशवल्ली मान्दछन् । यसको ल्याटिन नाम *Cuscuta reflexa* Roxb. वा *Cuscuta hookeri* Sweet हो । यो Cuscutaceae परिवारमा पर्दछ । यसलाई अमरलता पनि भनिन्छ ।


आकाश बेली, आचार्य बालकृष्णको लेखबाट, वनप्स जीडटकम

(च) Catalogue of Plants of National Botanical Garden, Nepal नामक पुस्तिका : यो Angiosperm समूह अन्तर्गत Convolvulaceae परिवारमा पर्दछ । यसको ल्याटिन नाम *Cuscuta reflexa* Roxb. हो । यसलाई नेपालीमा आकाश बेली वा अमरलता भनिन्छ ।

(छ) नेपालको चुरे जङ्गल : आकाशवल्लीको वानस्पतिक नाम *Cuscuta reflexa* Roxb. वा *Cuscuta reflexa* Roxb. var. brachystigma Engelm. हो ।

यसका विभिन्न जात र रङ हुन्छन् । नेपालतिर प्रायः सिमालीका बोट हुँदी पहेँलो रङको फूल र फल नलाग्ने जात नै बढी पाइन्छ । यसको एक प्रजाति विशेषले भएरभरका बोटविरुवा नै ऐँजेरुले जसरी सखाप पारेका समाचार पनि यत्रतत्र पाइन्छन् ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अर्कप्रकाश :**

**आकाशवल्याः शीतोऽर्कः पित्तश्लेष्मामनाशनः ॥**

आकाशवेलीको अर्कले शीतल गर्दछ । यसले पित्त, कफ र आम विकार नाश गर्दछ ।



आकाश बेली, आचार्य बालकृष्णको लेखबाट, वनएमजीडटकम

**(ख) कैयदेव निघण्टु :**

**आकाशवल्ली खवल्ली दुःस्पर्शा व्योमवल्लिका ॥**
**अवन्ती ग्राहिणी तिक्ता पिच्छिलाऽक्ष्यामयापहा ॥**

आकाशवल्ली, खवल्ली, दुःस्पर्शा, व्योमवल्लिका र अवन्ती : यी आकाशवल्लीका नाम हुन् । यो ग्राहि, तीतो, लेस्याइलो र आँखाका रोग नाशक हुन्छ ।

**(ग) भावप्रकाश निघण्टु :**

**आकाशवल्ली तु बुधैः कथिताऽमरवल्लरी ।**
**खवल्ली ग्राहिणी तिक्ता पिच्छिलाऽक्ष्यामयापहा ॥**
**तुवराऽग्निकरी हृद्या पित्तश्लेष्मामनाशिनी ।**



आकाश बेली, आचार्य बालकृष्णको लेखबाट, वनएमजीडटकम


Cassytha filiformis , Pauline Anders

विद्वानहरू अमरवल्लरीलाई आकाशवल्ली मान्दछन् । आकाशवल्ली, खवल्ली र अमरवल्लरी : यी आकाशवेलीका नाम हुन् । यो सङ्ग्राही, तीतो र लेस्याइलो हुन्छ । यसले आँखाका रोग नाश गर्दछ । यो टर्रो हुन्छ । यसले पाचकाग्नि बाल्दछ । यो मुटुका लागि लाभदायक हुन्छ तथा पित्तविकार र कफविकार नाश गर्दछ ।

**(घ) मदनपाल निघण्टु :**

**आकाशवल्ली तु बुधैः कथिताऽमरवल्लरी । खवल्ली ग्राहिणी तिक्ता पिच्छिलाख्यामयापहा॥**

आकाशवल्लीलाई विज्ञहरूले अमरवल्लरी भनी बताएका छन् । यो ग्राहि, तीतो, लेस्याइलो तथा वातजन्य र कफजन्य रोग नाशक हुन्छ ।

**(ङ) राजनिघण्टु :**

**खवल्ल्याकाशवल्ली स्यादस्पर्शा व्योमवल्लिका ।**
**आकाशनामपूर्वा सा वल्लीपर्य्यायगा स्मृता॥**
**आकाशवल्ली कटुका मधुरा पित्तनाशिनी । वृष्या रसायनी बल्या दिव्यौषधिपरा स्मृता॥**



(१) खवल्ली, (२) आकाशवल्ली, (३) अस्पर्शा, (४) व्योमवल्लिका तथा (५) आकाशका पर्यायवाची नामका पछाडि वल्ली शब्द जोडिएका सबै नामले आकाशवल्लीलाई बुझाउँदछ । यो पिरो, गुलियो र पित्तविकारनाशक हुन्छ । आकाशवल्ली वीर्यवर्धक, रसायनी र बलदायक एक दिव्य ओखती हो भनिएको छ ।


casuta reflexa, vijayanrajapuram in en.wikipedia

# आकाशीयगुणप्रधान भूमि
# (Aakaasheeya Bhoomi)

**(क) सुश्रुत संहिता :**

**मृद्वी समा श्वभ्रवत्यव्यक्तरसजला सर्वतोऽसारवृक्षा महापर्वतवृक्षप्राया श्यामा चाकाशगुणभूयिष्ठा ॥**

कोमल, सम्म, दुलैदुला हुने, रस र जल थोरै हुनाले नदेखिने, जतातत्तै सारहीन ठूलठुला रूख हुने, अग्ला एवं विशाल पहाड हुने र माटो कालो हुने जमिनलाई आकाशगुणप्रधान जमिन भनिन्छ ।

## आक्षेपक रोग
## (Convulsions)

**(क) सुश्रुत संहिता :**

**यदा तु धमनीः सर्वाः कुपितोऽभ्येति मारुतः । तदाक्षिपत्याशु मुहुर्मुहुर्देहं मुहुश्चरः ॥**
**मुहुर्मुहुस्तदाक्षेपादाक्षेपक इति स्मृतः ॥**

जब चलायमान वायु उत्तेजित भई पटकपटक शरीरका सबै धमनीमा पस्दछ तब पटकपटक शरीरलाई झट्कार्दछ । यसरी पटकपटक झट्कार्ने (आक्षेपण) गर्ने हुनाले नै यो रोगलाई आक्षेपक भनिएको हो ।

# आ(अ)क्षोट (ओखर)
(Walnut)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : अक्षोट भनेको सामान्य ओखर हो ।

(ख) के.यन.स्वामी : (१) पीलु : दँति ओखर वा यसको फल । (२) अक्षोट, कन्दराल र कर्पराल : ओखर । (३) धानी, श्याम : दँति ओखर । (४) गुडफल, शाखी : सानो दँति ओखर ।

(ग) नेपाली बृहत् शब्दकोश (१) ओखर : लाम्चा पात हुने, आरूजस्तो फल फल्ने र जमानेमान्द्राका जस्ता लामालामा मञ्जरी लाग्ने, हाडे दानाभित्र गुलियो खाद्य पदार्थ हुने ठूलो जातको रूख; हाडे र दँति गरी दुई प्रकारको हुने त्यसैको फल । (२) दँति ओखर : विशेषत हिमाली भागमा हुने, पातलो र दाँतले फोर्न सकिने कमलो बोक्रा हुने र धेरै गुदी भएको एक जातको ओखर । (३) पीलु : साधारणतः पात, फल, फूल ओखरका जस्तै हुने विशेष प्रकारको ओखर; दँति ओखर । (४) पोला : ओखरको भित्रपट्टिको भाग; ओखरको गुदी । (५) हाडे ओखर : कडा बोक्रा भएको भाइटीकामा प्रायः सर्जामका रूपमा लिइने ओखर; खपटे बोक्रा भएको र भित्रको गुदी खाइने एक मसला ।



अक्षोटः | *Juglans regia L., Image source: Köhler, 1883-1914*

(घ) भावप्रकाश निघण्टुका टीकाकार डा. कृष्णचन्द्र चुनेकर : यसलाई अंग्रेजीमा Walnut तथा ल्याटिन भाषामा *Juglans regia* Linn. भनिन्छ । यस्तै खालको जङ्गली ओखर पनि हुन्छ । जसलाई ल्याटिन भाषामा *Aleurites moluccana,* Wild. भनिन्छ । यो जङ्गली ओखरको बीजलाई बत्ती बनाएर बालिने हुनाले यसलाई The candle nut tree भन्ने गरिन्छ ।

(ङ) फर्माकोपिया : यो Juglandacea परिवारमा पर्दछ । यसलाई अंग्रेजीमा Walnut भनिन्छ । यसको वानस्पतिक नाम *Juglans regia* Linn. हो । यसको गुदी १०-२५ ग्रामसम्म ओखतीका लागि प्रयोग गरिन्छ ।

(च) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : यो Angiosperm समूह अन्तर्गतको Juglandaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Juglans regia* L. हो ।

(छ) Journal of Plant Resources, Vol. 17, No. 1, Government of Nepal, 2019 : यसलाई अंग्रेजीमा Common walnut भनिन्छ ।

**प्राचीन ग्रन्थका वचनहरू :**

**(क) अभिधान मञ्जरी :**

**अक्षोदलः स्नेहफलो गुडाश्रयः कन्दरालश्च । पृथुलच्छदः करीष्टः पार्वत्यः स्वादुमज्जः स्यात्॥**

अक्षोदल, स्नेहफल, गुडाश्रय, कन्दराल, पृथुलच्छद, करीष्ट, पार्वत्य र स्वादुमज्ज : यी ओखरका नाम हुन् ।

**(ख) अभिधान रत्नमाला :**

**आक्षोटः पर्वतीयस्यात् फलाश्रय गुडाश्रयौ । कीरेष्टः कन्दरालस्यात् स्वादुमज्जाफलश्च स॥**

आक्षोट, पर्वतीय, फलाश्रय, गुडाश्रय, कीरेष्ट, कन्दराल र स्वादुमज्जाफल : यी ओखरका नाम हुन् ।

**(ग) अमरकोश :**

**पीलौ गुडफलः संस्री तस्मिंस्तु गिरिसम्भवे । अक्षोटकन्दरालौ ...।**

पीलु, गुढफल र संस्री : यी दाँते ओखरका नाम हुन् । अक्षोट (आक्षोट, आक्षोड) र कन्दराल (कर्पराल) : यी पहाडतिर हुने हाडे ओखरका नाम हुन् ।

**(घ) अष्टाङ्ग निघण्टु :**
**अक्षोडः पर्वतीयश्च फलस्नेहो गुडा(हा?)श्रयः॥ कीरेष्टः कर्परालश्च स्वादुमज्जा पृथुच्छदः ।**

अक्षोड, पर्वतीय, फलस्नेह, गुडा(हा?)श्रय, कीरेष्ट, कर्पराल, स्वादुमज्जा र पृथुच्छद : यी ओखरका नाम हुन् ।

**(ङ) कैयदेव निघण्टु :**

**आखोडकः कन्दरालः फलस्नेहो गुडाशयः । पार्वतीयो वृन्तफलः स्वादुमज्जा पृथुल्लदः॥**
**आक्षोडकं सरं स्निग्धं मधुरं रसपाकयोः । गुरूष्णं बृंहणं वृष्यं बल्यं विष्टम्भि रोचनम्॥**
**हृद्यं क्षयास्रपवनदाहघ्नं कफपित्तलम् ।**

आखोडक, कन्दराल, फलस्नेह, गुडाशय, पार्वतीय, वृन्तफल, स्वादुमज्जा र पृथुल्लद : यी ओखरका नाम हुन् । ओखर मलमूत्रलाई तलतिर सार्ने, चिल्लो, शुरुमा र पचेपछि गुलियो, पचाउन कठिन, उष्णवीर्यको, पौष्टिक, वीर्यवर्धक, बलदायक, कब्जियत गराउने, रुचिप्रद, मुटुका लागि हितकर तथा क्षयरोग, रक्तविकार, वातविकार र डाह नाशगर्ने गुण हुन्छ । यसले कफविकार र पित्तविकार गर्दछ ।

(च) धन्वन्तरि निघण्टु :

**अक्षोडः पार्वतीयश्च फलस्नेहो गुडाश्रयः । कीरेष्टः कर्परालश्च स्वादुमज्जा पृथुच्छदः॥**
**अक्षोडकः स्वादुरसो मधुरः पुष्टिकारकः । पित्तश्लेष्महरो बल्यः स्निग्धोष्णो गुरुबृंहणः॥**

अक्षोड(क), पार्वतीय, फलस्नेह, गुडाश्रय, कीरेष्ट, कर्पराल, स्वादुमज्जा र पृथुच्छद : यी ओखरका नाम हुन्। ओखर स्वादिलो, गुलियो, पुष्टिदायक, पित्तविकार र कफविकार नाशगर्ने, बलदायक, चिल्लो, उष्णवीर्यको, पचाउन कठिन र पौष्टिक गुणको हुन्छ ।


(ओखर) *Juglans regia,* Catalogue of Plants of NBG, Nepal

(छ) निघण्टुशेष :

**पीलौ स्रंसी सहस्राङ्गी शीतः करभवल्लभः । गुल्मारिर्गुडफलश्च...॥**

पीलु, संस्री, सहस्राङ्गी, शीत, करभवल्लभ, गुल्मारि र गुडफल : यी दाँते ओखरका नाम हुन्।

**...तस्मिंस्तु गिरिसम्भवे । अक्षोटः कर्परालश्च फलस्नेहो गुहाश्रयः॥**

अक्षोट, कर्पराल, फलस्नेह र गुहाश्रय (गिरिपीलु) : यी पर्वतीय ओखर (हाडे ओखर) का नाम हुन्।

(ज) भावप्रकाश निघण्टु :

**पीलुर्गुडफलः स्रंसी तथा शीतफलोऽपि च॥**
**पीलु श्लेष्मसमीरघ्नं पित्तलं भेदि गुल्मनुत्। स्वादु तिक्तञ्च यत्पीलु तन्नात्युष्णं त्रिदोषहृत्॥**

पीलु, गुडफल, संस्री र शीतफल : यी पीलु (सानो दाँति ओखर) का नाम हुन् । यसले कफविकार र वातविकार नाश गर्दछ तर पित्तविकार बढाउँदछ । यो भेदनी हुन्छ र गुल्म ठिक गर्दछ । जुन् दाँति ओखर स्वादिलो र तीतो हुन्छ त्यो उतिसारो गर्मी गर्ने पनि हुँदैन र त्रिदोष नाशक हुन्छ ।

**पीलुः शैलभवोऽक्षोटः कर्परालश्च कीर्तितः । अक्षोटकोपि वातादसदृशः कफपित्तकृत्॥**

पर्वततिर हुने पीलु (हाडे ओखर) लाई अक्षोट र कर्पराल भनिन्छ । यो मदिसे बदाम जस्तै गुणको हुन्छ । यसले कफविकार र पित्तविकार बढाउँदछ ।

**(झ) मदनपाल निघण्टु :**

**आक्षोटो वैधृतफलं कन्दलाभः पृथुच्छदः । आक्षोटं मधुरं बल्यं गुरूष्णं वातहृत्सरम्॥**

आक्षोट, वैधृतफल, कन्दलाभ र पृथुच्छद : यी (हाडे) ओखरका नाम हुन् । ओखर गुलियो, बलदायक, पचाउन कठिन, उष्णवीर्यको, वातविकार नाशक र मलमूत्र तलतिर सार्ने गुणको हुन्छ ।

**(ञ) मदनादि निघण्टु :**

**पीलुस्तीक्ष्णतरु स्रंसी शाड्गी करभवल्लभः । गुडफलः शीतसहो विरेचनफलः स्मृतः॥**
**रसायनो गुल्महरो भेदनोऽर्शोविकारहा । पीलुस्तीक्ष्णश्च मधुरः कफहा वह्निदीपनः॥**

पीलु, तीक्ष्णतरु, स्रंसी, शाङ्गी, करभवल्लभ, गुडफल, शीतसह र विरेचनफल : यी दाँति ओखरका नाम हुन् । यो रसायनी, गुल्म नाशक, भेदनी, अल्काईका विकार नाशक, तिक्खर, गुलियो, कफविकार नाशक र पाचनशक्ति बढाउने गुणको हुन्छ ।

**(ट) माधव द्रव्यगुण :**
**अक्षोडं मधुरं बल्यं गुरूष्णं वातहृत् सरम्॥**

ओखर गुलियो, बलदायक, पचाउन कठिन, उष्णवीर्यको, वातविकार नाशक तथा मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

**(ठ) राज निघण्टु :**

**अक्षोटः पार्वतीयश्च फलस्नेहो गुडाशयः । कीरेष्टः कन्द्रालश्च मधुमज्जा बृहच्छदः॥**
**अक्षोटो मधुरो बल्यो स्निग्धोष्णो वातपित्तजित् । रक्तदोषप्रशमनः शीतलः कफकोपनः॥**

अक्षोट, पार्वतीय, फलस्नेह, गुडाशय, कीरेष्ट, कन्दराल, मधुमज्जा र बृहच्छद : यी हाडे ओखरका संस्कृत पर्यायवाची नामहरू हुन् । ओखर गुलियो, बलदायक, चिल्लो, उष्णवीर्यको तथा वातविकार

र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले रक्तविकारलाई शान्त पार्दछ । यसले पचेपछि शीतल गर्दछ र कफविकार बढाउँदछ ।

**पीलुः शीतः सहस्रांशी धानी गुडफलस्तथा । विरेचनफलः शाखी श्यामः करभवल्लभः ॥**
**अङ्काह्वः कटुकः पीलुः कषायो मधुराम्लकः । सरः स्वादुश्च गुल्मार्शःशमनो दीपनः परः ॥**

(१) पीलु, (२) शीत, (३) सहस्रांशी, (४) धानी, (५) गुडफल, (६) विरेचनफल, (७) शाखी, (८) श्याम र (९) करभवल्लभ : यी नौ नाम दँतिओखरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो ओखर पिरो, टर्रो, गुलियो र अमिलो हुन्छ । यसले मलमूत्रलाई तलतिर सार्दछ । यो स्वादिलो हुन्छ । यसले गुल्म र अल्काईलाई शान्त पार्दछ । यो अत्यन्त दीपनी हुन्छ ।

**अन्यश्चैव बृहत्पीलुर्महापीलुर्महाफलः । राजपीलुर्महावृक्षो मधुपीलुः षडाह्वयः ॥**
**मधुरस्तु महापीलुर्वृष्यो विषविनाशनः । पित्तप्रशमनो रुच्य आमघ्नो दीपनीयकः ॥**

(१) बृहत्पीलु, (२) महापीलु, (३) महाफल, (४) राजपीलु, (५) महावृक्ष र (६) मधुपीलु : यी छ नाम ठुलो दँति ओखरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो ओखर गुलियो, वीर्यवर्धक र विषविकार नाशक हुन्छ । यसले पित्तविकारलाई शान्त पार्दछ, रुची जगाउँदछ र आमविकार नाश गर्दछ । यो दीपनी हुन्छ ।

(ड) **शालिग्राम निघण्टु :** सङ्कलन : मोहन प्रसाद सापकोटा

**पीलुः शीतसहः स्रंशीधानीगुडफलस्तथा । विरेचनफलः शाखीश्यामः करभवल्लभः ॥**

पीलु, शीतसह, स्रंशी, धानी, गुडफल, विरेचनफल, शाखी, श्याम र करभवल्लभ : यी सानो दँति ओखरका नाम हुन् ।

**अन्यश्चैव बृहत्पीलुर्महापीलुर्महाफलः । राजपीलुर्महावृक्षोमधुपीलुः षडाह्वयः ॥**

बृहत्पीलु, महापीलु, महाफल, राजपीलु, महावृक्ष र मधुपीलु : यी छ नाम ठूलो दँति ओखरका नाम हुन् ।

**लघुपीलुस्तु कटुकः कषायोमधुरोम्लकः । सरः स्वादुर्दीपनश्चतिक्तस्तीक्ष्णश्चभेदकः ॥**
**रक्तपित्तकरोश्चोष्णो विदाही चार्शगुल्मनुत् । स्निग्धः कफं वातरक्तं प्लीहानाहरुजं तथा ॥**
**उदरं विषबाधां च नाशयेदितिकीर्तितम् ।**

सानो दँति ओखर पिरो, टर्रो, गुलियो र अमिलो स्वादको हुन्छ । यो मलमूत्रलाई तलतिर सार्ने, स्वादिलो, दीपनी, तीतो, तिक्खर, भेदनी, रक्तपित्त गराउने, उष्णवीर्यको, डाहकारी तथा अल्काई र गुल्म नाशक हुन्छ । यो ओखर चिल्लो तथा कफविकार, वातविकार, रक्तविकार, फियोका रोग, आनाह, पेटका रोग र विषविकार नाशक हुन्छ ।

**बृहत्पीलुस्तु मधुरो वृष्यः पित्तविषापहः । आमहा दीपनोरुच्यस्तैलं चास्य लघुस्मृतम्॥**
**कफवातरुजं हन्ति चेति पूर्वबुधैः स्मृतम् । (नि.र) ।**

ठूलो दँति ओखर गुलियो, वीर्यवर्धक, पित्तविकार नाशक, विषविकार नाशक, आमविकार नाशक, दीपनी र रुचिप्रद हुन्छ । यसको तेल पचाउन सहज तथा कफविकार र वातविकार नाशक हुन्छ भनी पहिलेका विद्वानहरूले बताएका छन् ।

**अखरोटः पार्वतीयः फलस्नेहोगुडाशयः । कीरेष्टः कर्परालश्च स्वादुमज्जः पृथक्छदः॥**

अखरोट, पार्वतीय, फलस्नेह, गुडाशय, कीरेष्ट, कर्पराल, स्वादुमज्ज र पृथक्छद : यी हाडे ओखरका नाम हुन् ।

**अखूरोटो मधुरः किञ्चिदम्लः स्निग्धश्च शीतलः । वीर्यवृद्धिकरश्चोष्णो रुचिदः कफपित्तकृत्॥**
**गुरुः प्रियो बलकरः कफकृन्मलबद्धकृत् । वातपित्तक्षयवातं हृद्रोगं रक्तदोषकम्॥**
**रक्तवातं च दाहं च नाशयेदिति कीर्तितम् ।**

हाडे ओखर गुलियो, केही अमिलो, चिल्लो, शीतल गर्ने, वीर्यवर्धक, उष्णवीर्यको (?), रुचिप्रद, कफ-पित्त विकार गर्ने, पचाउन कठिन, मनपर्ने, बलदायक, कफविकार गर्ने, कब्जियत गराउने तथा वात-पित्त, क्षय-वात, मुटुका रोग, रगतका विकार, रक्त-वात र डाह नाशगर्ने गुणको हुन्छ भनी बताइएको छ ।



(ढ) **सरस्वती निघण्टु :**

**अक्षोडो गिरिजापीलुः खर्जूरी लोध्रपीलुका॥**

अक्षोड, गिरिजापीलु, खर्जूरी र लोध्रपीलुका : यी हाडे ओखरका नाम हुन् ।

**पीलुर्गुडफलः स्रंसी पीलुको बहलत्वचः ।**

पीलु, गुडफल, स्रंसी, पीलुक र बहलत्वच : यी दँति ओखरका नाम हुन् ।

(ण) **सोढल निघण्टु :**

**अक्षोडे पर्वतीयश्च फलस्नेहो गुडाश्रयः । कीरेष्टः कर्परालश्च स्वादुमज्जा पृथुच्छदः॥**

अक्षोड, पर्वतीय, फलस्नेह, गुडाश्रय, कीरेष्ट, कर्पराल, स्वादुमज्जा र पृथुच्छद : यी (हाडे) ओखरका नाम हुन् ।

**(त) हारीत संहिता :**

**...पीलूद्भवम् । वातपित्तहृदशोघ्नं श्लेष्मलं गुरु शीतलम् ॥**

दँति ओखरको तेलले वातविकार, पित्तविकार र अल्काइ नाश गर्दछ । कफ बढाउँदछ, पचाउन कठिन हुन्छ र शीतल गर्दछ ।



अक्षोटः । *Juglans regia L., Image source: Böhringer Friedrich / Wikipedia.*

# आखुपर्णी (मुसाकाने झार)
# (Kidney leaf morning glory)

**परिभाषा :**

(क) **के.यन.स्वामी :** आखुपर्णी भनेको मुसा काने झार हो ।

(ख) **नेपाली बृहत् शब्दकोश :** (१) मुसा काने : साना पात हुने एक प्रकारको उद्भिद; मुसा कानी । (२) मूषककर्णी : मुसाकाने (लता) ।

(ग) **डा.चुनेकर :** यसको ल्याटिन नाम *Ipomoea reiniformis,* Chois. हो । यो वर्षातमा उम्रन्छ । हरेक गाँठाबाट जरा निस्केर फैलन्छ । पहेँला र साना फूल फुल्दछन् । फलमा दुई-दुई वटा बीज हुन्छन् ।

(घ) **आचार्य बालकृष्ण :** यसको नेपाली नाम मुस्कारी हो । यसको वानस्पतिक नाम *Merremia gangetica* (Linn.) Cufodont *Syn-Ipomoea reniformis* Chois. र अंग्रेजी नाम Kidney leaf morning glory, Rats ear हो । यसको लहरा फैलन्छ । पात नीलो शङ्खपुष्पीका जस्ता र हेर्दा मुसाका कानजस्ता हुन्छन् । यो Convolvulaceae परिवारमा पर्दछ । यसलाई संस्कृतमा मूसाकर्णी, आखुकर्णी, आखुपर्णी, पर्णिका, भूदरीभवा, भेकपर्णी तथा हिन्दीमा मूसाकानी भनिन्छ ।



श्रोत : Indian Medicinal Plants : A Compendium of 500 Species, Volume 4

(ङ) **डा.सतिश चन्द्र साङ्ख्यधर :** राज निघण्टुमा दिइएको दोश्रो थरीको मुसाकाने झारका विषयमा थप अनुसन्धान गर्नुपर्ने देखिन्छ किन कि यसका बारेमा पहिले नै लेखि सकिएको छ ।

(च) **कामतद्वय :** यो Euphorbiaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Jatropha glandulifera* Roxb. हो ।

(छ) **Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 :** मुसाकाने Angiosperm समूह अन्तर्गत

Caryophyllaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Cerastium glomeratum* Thuill. हो । (यसको अंग्रेजी नाम clammy chickweed, mouse-ear chickweed, sticky mouse-ear, sticky mouse-ear chickweed लेखिएको पाइन्छ ।)

(ज) **Indian Medicinal Plants : A Compendium of 500 Species, Volume 4 :** यो Convolvulaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Merremia emarginata* (Burm.f.) Hall.f. वा *M.gangetica* (Linn.) Cuf. हो ।

मुसाका अनेक जात हुन्छन् र जात अनुसार कानको बनोटमा पनि केही भिन्नता हुन्छ । मुसाका कानजस्ता पात भएका अनेक थरी विरुवालाई मुसाकाने नाम दिइने गरिएको भएपनि आयुर्वेदमा बताइएको विवरण अनुसार *Merremia gangetica* (Linn.) लाई नै आखुपर्णी मान्नु उपयुक्त हुने देखिन्छ ।

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **कैयदेव निघण्टु :**

**मूषकश्रावणी लीका भूदर्याखुश्रुतिच्छदा । वृषकर्णी चाखुकर्णी श्रावणी भूदराश्रया ॥**
**आखुकर्णी कटुस्तिक्ता कषाया शीतला लघुः । विपाके कटुका हन्ति कफमूत्रामयकृमीन् ॥**



मूषकश्रावणी, लीका, भूदर्या, आखुश्रुतिच्छदा, वृषकर्णी, आखुकर्णी, श्रावणी र भूदराश्रया : यी मुसाकानेका पर्यायवाची नाम हुन् । यो पिरो, तीतो, टर्रो, शीतवीर्यको, पचाउन सहज, पचेपछि पिरो तथा कफविकार, पिसाविकार र पेटका कीरा नाशगर्ने गुणको हुन्छ ।

(ख) **धन्वन्तरि निघण्टु :**

**द्रवन्ती शम्बरी चित्रा न्यग्रोधा मूषकाह्वया । प्रत्यक्श्रेणी वृषा चण्डा पुत्रश्रेण्याखुपर्णिका ॥**
**द्रवन्ती ग्रहणीतृष्णात्रिदोषशमनी हिता । अभिष्यण्णतनौ ग्रन्थ्यां प्रमेहे जठरे गरे ॥**
**कफपित्तामये पाण्डौ कृमिकोष्ठभगन्दरे । द्रवन्ती हृद्रोगहरा कफकृमिविनाशनी ॥**

द्रवन्ती, शम्बरी, चित्रा, न्यग्रोधा, मूषकाह्वया (मुसाका पर्याय), प्रत्यक्श्रेणी, वृषा, चण्डा, पुत्रश्रेणी र आखुपर्णिका : यी मुसाकानेका पर्यायवाची नाम हुन् । मुसाकानेले ग्रहणी, तिर्खा र त्रिदोष शान्त पार्दछ । यो गाँठा सुन्निएर शरीर लाटो हुँदा, प्रमेहमा, पेटका रोगमा, कृत्रिम विषविकारमा, कफविकारमा, पित्तविकारमा, पाण्डुरोगमा, पेटमा कीरा पर्दा र भगन्दर रोगमा पनि यो हितकर हुन्छ । यसले मुटुका रोग तथा कफजन्य कीरा नाश गर्दछ ।

**(ग) निघण्टुशेषः**

**आखुपर्ण्यां पुष्पश्रेणी न्यग्रोधी शम्बरी वृषा । चित्रोपचित्रा रण्डा च प्रत्यक्श्रेणी द्रवन्त्यपि ॥**

आखुपर्णी, पुष्पश्रेणी, न्यग्रोधी, शम्बरी, वृषा, चित्रा, उपचित्रा, रण्डा, प्रत्यक्श्रेणी र द्रवन्ती : यी मुसाकानेका पर्यायवाची नाम हुन् ।

**(आखुकर्णाभपत्रत्वाद् आखुपर्णी, आखोः कर्ण इव कर्णः-पत्रं यस्याः सा आखुकर्णी, पुष्पाणां श्रेणी अस्याः पुष्पश्रेणी, न्यग् रोहति रुणद्धि वा बहुमूलत्वात् न्यग्रोधी, शं वृणोति शम्बरी, वर्षति वृषा, वृणोति वा, चित्रा अनेकवर्णपत्रा, उप-समीपे चित्राण्यस्या उपचित्रा, रम्यते रमते वा रण्डा, प्रतीची श्रेणी अस्याः प्रत्यक्श्रेणी, द्रवति द्रवन्ती । एतस्या लोके उन्दिरकनी इति प्रसिद्धिः ।) ।**

**(घ) पर्याय रत्नमाला :**

**प्रत्यक्श्रेणी द्रवन्ती च पुत्रश्रेण्याखुपर्णिका । वृषपर्ण्याखुपर्णी च मूषिका फञ्जिपत्रिका ॥**

प्रत्यक्श्रेणी, द्रवन्ती, पुत्रश्रेणी, आखुपर्णिका, वृषपर्णी, आखुपर्णी, मूषिका र फञ्जिपत्रिका : मुसाकाने विशेषका नाम हुन् ।



**(ङ) भावप्रकाश निघण्टु :**

**आखुकर्णी त्वाखुपर्णी पर्णिका भूदरीभवा । आखुकर्णी कटुस्तिक्ता कषाया शीतला लघुः ॥**
**विपाके कटुका मूत्रकफामयकृमिप्रणुत् ॥**

आखुकर्णी, आखुपर्णी, पर्णिका र भूदरीभवा : यी मुसाकाने झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो र टर्रो हुन्छ । यसले शीतल गर्दछ । यो पचाउन हलुका हुन्छ । पचेपछि पिरो हुन्छ । यसले मुत्ररोग, कफविकार र कीरा नाश गर्दछ ।

**(च) मदनादि निघण्टु :**

**वृषकर्ण्याखुकर्णी च तथा भूमिदराश्रया । मूषिकश्रवणी लीका तथावोन्दुरुकर्णिका ॥**
**कृमिघ्नो मूत्रकृच्छ्रघ्नो तिक्ता पाके कटुर्लघु । कषायमधुरा शीता श्लेष्मघ्नी चाखुकर्णिका ॥**

वृषकर्णी, आखुकर्णी, भूमिदराश्रया, मूषिकश्रवणी, लीका र उन्दुरुकर्णिका : यी मुसाकानेका पर्यायवाची नाम हुन् । यो कीरा नाशक, मूत्रकृच्छ्र नाशक, तितो, पचेपछि पिरो, पचाउन सहज, टर्रो, गुलियो, शीतवीर्यको र कफविकार नाशगर्ने गुणको हुन्छ ।

**द्रवन्ती शम्बरी चित्रा न्यग्रोधो मूषिकाह्वया । पृथक्पर्णी वृषैरुबु ततः श्रेण्याखुपर्णिका ॥**

द्रवन्ती, शाम्बरी, चित्रा, न्यग्रोधा, मूषिका र यसका पर्याय, पृथक्पर्णी, वृषैरुवु, श्रेणी र आखुपर्णिका : यी मुसाकानेविशेषका नाम हुन् ।

(छ) **राजनिघण्टु :**

**स्यादाखुकर्णी कृषिका द्रवन्ती चित्रा सुकर्णोन्दुरुकर्णिका च ।**
**न्यग्रोधिका मूषिकनागकर्णी स्याद्वृश्चिकर्णी बहुकर्णिका च॥**
**माता भूमिचरी चण्डा शम्बरी बहुपादिका । प्रत्यक्श्रेणी वृषा चैव पुत्रश्रेण्यद्रिभूह्वया॥**


आखुपर्णी (तस्विर श्रोत : आयुर्वेद डटको डटइन)

**आखुकर्णी कटूष्णा च कफपित्तहरा सदा । आनाहज्वरशूलार्त्ति नाशिनी पाचनी परा॥**

(१) आखुकर्णी, (२) कृषिका, (३) द्रवन्ती, (४) चित्रा, (५) सुकर्णा, (६) उन्दुरुकर्णिका, (७) न्यग्रोधिका, (८) मूषिकनागकर्णी, (९) वृश्चिकर्णी, (१०) बहुकर्णिका, (११) माता, (१२) भूमिचरी, (१३) चण्डा, (१४) शम्बरी, (१५) बहुपादिका, (१६) प्रत्यक्श्रेणी, (१७) वृषा र (१८) पुत्रश्रेणी : यी सत्र (तर यथार्थमा अठार हुन्छ) मुसाकानेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्य भएको तथा कफविकार, पित्तविकार, आनाह, जरो र शूल रोग नाशक हुन्छ । यो अति पाचनी हुन्छ ।

**द्रवन्ती शाम्बरी चित्रा न्यग्रोधी शतमूलिका । प्रत्यक्श्रेणी वृषा चण्डा पत्रश्रेण्याखुकर्णिका॥**
**मूषकाह्वादिका कर्णी प्रतिपर्णी शिफा च सा । सहस्रमूली विक्रान्ता ज्ञेया स्याच्चतुरेकधा॥**
**द्रवन्ती मधुरा शीता रसबन्धकरी परा । ज्वरघ्नी कृमिहा शूलशमनी च रसायनी॥**

द्रवन्ती, शाम्बरी, चित्रा, न्यग्रोधी, शतमूलिका, प्रत्यक्श्रेणी, वृषा, चण्डा, पत्रश्रेणी, आखुकर्णिका, मूषककर्णी, प्रतिपर्णीशिफा, सहस्रमूली र विक्रान्ता : यी द्रवन्ती (मुसाकनेविशेष) का संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको, पारो प्रशोधनका लागि अति उपयोगी, जरो नाशक, कीरानाशक, शूल शान्त पार्ने र रसायनी हुन्छ ।

## (ज) शालिग्राम निघण्टु :

**मूषाकर्ण्याखुपर्णी च वृषपर्ण्याखुकर्णिका । भूमिचरी द्रवन्ती च शम्बरी भूधराश्रया ॥**

मूषाकर्णी, आखुपर्णी, वृषपर्णी, आखुकर्णिका, भूमिचरी, द्रवन्ती, शम्बरी र भूधराश्रया : यी मुसाकानेका पर्यायवाची नाम हुन् ।

**सा द्विविधा बृहती लघ्वी च ।**
**लघ्वाखुकर्णी कटुका तिक्ता चोष्णा च शीतला । रसायनी सरा लघ्वी कषाया कफपित्तनुत् ॥**
**शूलज्वरकृमिग्रन्थिमूत्रकृच्छ्रप्रमेहहृत् । आनाहोदरहृद्रोगविषपाण्डुभगन्दरान् ॥**
**कुष्ठानि नाशयेदेवं पूर्ववैद्यैर्निरूपितम् ।**


Cerastium glomeratum Thuill. का पातहरू, तस्बिर श्रोत : missouriplants.com

सानो जातको मुसाकाने पिरो, तितो, उष्णवीर्यको, शीतल गर्ने, रसायनी, मलमूत्रलाई तलतिर सार्ने, पचाउन सहज, टर्रो, कफविकार र पित्तविकारलाई नाशगर्ने, तथा शूल, जरो, कीरा, गाँठाका समस्या, मूत्रकृच्छ्र, प्रमेह, आनाह, पेटका रोग, मुटुका रोग, विषविकार, पाण्डु, भगन्दर र कुष्ठरोग नाशगर्ने गुणको हुन्छ भनी पहिलेका वैद्यजनले बताएका छन् ।

**आखुकर्णी बृहत्युक्ता शीतला मधुरा स्मृता । रसबन्धकरी नेत्र्या रसायन्यथ शूलनुत् ॥**
**ज्वरं कृमी व्रणं चाखुविषं चैव विनाशयेत् । (निघण्टु रत्नाकर) ।**

ठूलो जातको मुसाकाने शीतवीर्यको, गुलियो, पारोलाई बाँध्ने, आँखाका लागि हितकर, रसायनी, तथा शूल, जरो, कीरा, खटिरा र मुसाको विषविकार नाशगर्ने गुणको हुन्छ ।

**द्रवन्ती कृमिहृत्तीक्ष्णा योनिदोषहरा सरा ।(शो.नि.)**

मुसाकाने कीरा नाशगर्ने, तिक्खर, स्त्री जननेन्द्रियका विकार नाशगर्ने तथा मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

## (झ) सोढल निघण्टु :

**द्रवन्त्यां शम्बरी चित्रा न्यग्रोधा मूषिकाह्वया । प्रत्यक्श्रेणी विषा दण्डा पुत्रश्रेण्याखुकर्णिका ॥**
**माता भूमिचरा चैव बहुपर्णी तथालिका ।**

द्रवन्ती, शम्बरी, चित्रा, न्यग्रोधा, मूषिका र यसका पर्याय, प्रत्यक्श्रेणी, विषा, दण्डा, पुत्रश्रेणी, आखुकर्णिका, माता, भूमिचरा, बहुपर्णी र आलिका : यी मुसाकानेविशेषका नाम हुन् ।

# आग्नेय भूमि
# (Aagneyabhoomi)

(क) **सुश्रुत संहिता :**

**नानावर्णा लघ्वश्मवति प्रविरलाल्पपाण्डुवृक्षप्ररोहाऽग्निगुणभूयिष्ठा ...।**

अनेक वर्णको, ससाना पत्थरले युक्त, कतै कतै साना साना सेता वृक्ष देखिने र घाँस भएको जमिनलाई आग्नेग भूमि वा अग्नितत्त्वप्रधान भूमि भनिन्छ ।

# आढक (नापोविशेष)
# (Aadhaka)

**परिभाषा :**

(क) **के.यन. स्वामी (आढक)** : चौंती सय छपन्न मासा वा चार प्रस्थ अथजा चार सेर बराबरको तौल । अन्न नाप्ने चार सेरको भाँडोविशेष, पाथी । चार पाथीको परिमाण ।

(ख) **हिन्दी विश्वकोश (आढक)** : आठ शराव बराबरको अनाजको नापो । चार सेर । आठ मुष्टिकाको एक कुञ्चि, आठ कुञ्चिको एक पुष्कल र चार पुष्कलको एक आढक हुन्छ । १२ प्रसृतिको १ कुडव, ४ कुडवको १ प्रस्थ र ४ प्रस्थको १ आढक हुन्छ । २५६ पल ।

(ग) **WHO-APW PROJECT STANDARDIZATION OF NON-CLINICAL TERMINOLOGIES OF AYURVEDA, NATIONAL INSTITUTE OF AYURVEDA (Dept. of AYUSH, Govt. of India :** एक आढकमा ३.०७३ कि.ग्रा हुन्छ ।

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **अष्टाङ्ग हृदय :**

**शाणं पाणितलं मुष्टिं कुडवं प्रस्थमाढकम् । द्रोणं वहं च क्रमशो विजानीयाच्चर्तुगुणम्॥**

शाण, पाणितल (कर्ष), मुष्टि (पल), कुडव (४ पल), प्रस्थ, आढक, द्रोण तथा वह (वाह, गोणी) : यी क्रमशः चार गुना नापका हुन्छन् ।

(ख) **राज निघण्टु :**

**प्रस्थस्तु तच्चतुष्केण तच्चतुष्केण चाढकी ।**

चार कुडवको एक प्रस्थ (पाथी) हुन्छ । चार प्रस्थको एक आढकी हुन्छ ।

(ग) **शार्ङ्गधर संहिता :**

**...चतुःप्रस्थैस्तथाढकम्॥ भाजनं कंसपात्रञ्च चतुःषष्टिपलञ्च तत् ।**

चार प्रस्थको एक 'आढक' हुन्छ जसलाई 'भाजन' वा 'कंसपात्र' पनि भनिन्छ । यो चौसठ्ठी पलको हुन्छ ।

# आढकी (रहर)
# (Pigeon Pea)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : आढकी, तुवरिका आदि भनेको रहर हो ।

(ख) नेपाली बृहत् शब्दकोश (रहर) : शिरीषका जस्ता पात हुने, बढी चार मिटर लामो, एकै साल मात्र रहने बुटो हुने, पहेँला फूल फुल्ने र एकै भेट्नामा चारपाँचवटा कोसा लाग्ने, एक कोसामा दसबाह्रवटा दाना लाग्ने, दालजातको एक अन्न । यसै कोसाका फललाई दलेर दाल खान बनाइएको छाँटा ।

(ग) डा. चुनेकर : रहरलाई अंग्रेजीमा Pigeon pea वा Red Gram तथा ल्याटिन भाषामा *Cajanus indicus* Spreng. भनिन्छ ।

(घ) आचार्य बालकृष्ण : रहरको वानस्पतिक नाम *Cajanus cajan* (Linn.) Millsp. पनि हो । यसलाई अंग्रेजीमा Catjang pea, No eye pea वा Congo pea पनि भनिन्छ ।

(ङ) पेयर डी अमरकोश : यसलाई ल्याटिन भाषामा *Cajanus cajan* (Linn.) Huth भनिन्छ ।

(च) फर्माकोपिया : आढकी Fabaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Cajanus cajan* (Linn.) Millsp. हो । यसलाई अंग्रेजीमा Pigeon Pea, Red Gram भनिन्छ । यसको हिन्दी नाम अरहड वा अरहर हो । यसको जराको धूलो पनि २-६ ग्रामसम्म ओखतीमा प्रयोग हुन्छ ।




आढकी | Cajanus cajan (L.) Millsp. 1900 - Katjangstrauch - Pigeon Pea
[Bildquelle: Church, A. H. (Arthur Herbert) <1834-1915>: Food-grains of India. -- London, 1886.]

**प्राचीन ग्रन्थका वचन :**

**(क) अधिभान मञ्जरी :**

**आढकी तुवरी प्रोक्ता नृत्यत्कोण्डक उच्चिटः । रेभुजः करभी चेति दर्दुस्तु पठितो बुधैः ॥**

आढकी, तुवरी, नृत्यत्कोण्डक, उच्चिट, रेभुज, करभी र दर्दु : यी रहरका पर्यायवाची नाम हुन् ।



आढकी | Cajanus cajan (L.) Millsp. 1900 - Katjangstrauch / Taubenerbsenbaum - Catjang Pea [Bildquelle: Hortus malabaricus VI. Fig. 13. 1686]

**(ख) अभिधान रत्नमाला :**

**आढकी तुवरी मता ॥**

रहरलाई आढकी वा तुवरी भनिन्छ ।

**(ग) अमरकोश :**

**...आढकी । काक्षी मृत्स्ना तुवरिका मृतालकसुराष्ट्रजे ।**



आढकी, काक्षी, मृत्स्ना तु(तू)वरिका, मृतालक र सुराष्ट्रज : यी रहरका नाम हुन् ।




आढकी | Cajanus cajan (L.) Millsp. 1900 - Katjangstrauch - Pigeon Pea [Bildquelle: Church, A. H. (Arthur Herbert) <1834-1915>: Food-grains of India. --

**(घ) अर्कप्रकाशः**

**...तुवरी त्रेधा...।**

रहर तीन प्रकारको हुन्छ ।

**(ङ) अष्टाङ्ग निघण्टु :**

**आढकी तुवरी प्रोक्ता...।**

आढकी र तुवरी : यी रहरका नाम हुन् ।

**(च) आयुर्वेद महोदधि :**

**आढक्यः कफपित्तकोपशमना वीर्येण शीतास्तथा**
**हृत्पृष्ठोदरकण्ठजामयगदान् मन्दानलं कुर्वते ।**
**कासश्वासवमीतृषाज्वरहराः पथ्याश्च कण्डूरुजा-**

**पामाकुष्ठभगन्दरेषु मधुरा रूक्षाः कषाया भृशम् ॥**


Cajanus cajan (L.) Millsp. 1900 - Katjangstrauch / Taubenerbsenbaum - Catjang Pea
[Bildquelle: Flora de Filipinas. 1880 / Wikipedia. -- Public domain]

रहरले कफ र पित्तको प्रकोपलाई शान्त पार्दछ । यसले ठण्डी गर्दछ । यसले हृदय, ढाड, पेट र घाँटीमा अनेक थरी रोग उब्जाउँदछ र जठराग्निलाई समेत कमजोर पार्दछ । रहरले खोकी, दम, वाकवाकी, तिर्खा र जरो नाश गर्दछ । शरीर चिलाउने, एक प्रकारको भैंसे लुतो, कुष्ठ र भगन्दर रोगमा रहर लाभदायक हुन्छ । यो मिठो, रुखो र टर्रो हुन्छ ।

**आढकी कफपित्तघ्नी इषन्मारुतकोपनी ।**
**तस्या एव दलं पथ्यं त्रिदोषकृमिजित्तथा ॥**

रहरले कफ र पित्त नाश गरेपनि केही मात्रामा वायुविकार गर्दछ । यसको दाल खान योग्य, त्रिदोष नाशक र किरा मार्ने गुणको हुन्छ ।

**तस्याश्च द्विदलं भोज्यं स्वादु विष्टम्भनं गुरु । दीपनं कफपित्तघ्नं सर्वमेहस्यनाशनम् ॥**

रहरको दाल खान योग्य, स्वादिलो, विष्टम्भी र पचाउन कठिन हुन्छ । यसमा दीपन गुण हुन्छ । पाचकाग्निलाई बाल्दछ, कफ र पित्त नाश गर्दछ तथा सबै खालका प्रमेह नाश गर्दछ ।



**दीपनः कफपित्तघ्नः कृम्यसृग्ज्वरवातनुत् । हृद्यः स्वादुः कषायः स्यादाढकीसिद्धयूषकः ॥**

रहरको दालले पाचनशक्ति बढाउँदछ तथा कफ र पित्त विकार नाश गर्दछ । किरा, रक्तपित्त, जरो र वातविकार निको पार्दछ । यो हृदयका लागि हितकारी, स्वादिलो र टर्रो हुन्छ ।

**(छ) कैयदेव निघण्टु :**

**आढकी तुवरी वाथ कालवृन्ता तुलछका ॥**
**कुलत्थाश्चक्रका ज्ञेयास्ताम्रवर्णाश्चलापहाः ।**
**तुवरी तुवरा रूक्षा मधुरा शीतला लघुः ॥**
**ग्राहिणी वातला वर्ण्या कफपित्तविषापहाः ।**
**त्रिदोषशमनं पथ्यं कृमिघ्नं चाढकीदलम् ॥**



Cajanus cajan (L.) Millsp. 1900 - Katjangstrauch / Taubenerbsenbaum - Catjang Pea, [Bildquelle: Bernardo Navarrete. -- http://www.flickr.com/photos/jbnc1975/3980621628/. -- Zugriff am 2010-10-20. -- Creative Commons Lizenz (Namensnennung)]

आढकी, तुवरी, कालवृन्ता, तुलछका, कुलत्था, चक्रका, ताम्रवर्णा र चलापहा : यी ररहका पर्यावाची नाम हुन् । रहर टर्रो, रुखो, गुलियो, शीतवीर्यको, पचाउन सहज, कब्जियत गराउने, वातविकार गर्ने, शरीरको वर्णमा निखार लेराउने तथा कफविकार, पित्तविकार र विषविकार नाशगर्ने गुणको हुन्छ । यसको पातले त्रिदोशषलाई शान्त पार्दछ, पथ्य हुन्छ र कीरा नाश गर्दछ ।

(ज) **चरक संहिता :**

**आढकी कफपित्तघ्नी वातला,... ।**

रहर कफविकार र पित्तविकार नाश गर्ने तथा वायुविकार गर्ने गुणको हुन्छ ।

(झ) **द्रव्यगुणसङ्ग्रह :**

**तुवरी कफपित्तघ्नी ....।**

रहरले कफविकार र पित्तविकार नाश गर्दछ ।


Cajanus cajan (L.) Millsp. 1900 - Katjangstrauch / Taubenerbsenbaum - Catjang Pea, Tonga
[Bildquelle: Tau'olunga / Wikimedia. -- GNU FDLicense]

(ञ) **धन्वन्तरि निघण्टु :**

**आढकी तुवरी तुल्या करवीरभुजा तथा । वृत्तबीजा पीतपुष्पा श्वेता रक्ताऽसिता त्रिधा ॥**
**आढकी कफपित्तघ्नी किञ्चिन्मारुतकोपनी । कषाया स्वादुसङ्ग्राही कटुपाका हिमा लघुः ॥**
**मेदःश्लेष्मास्रपित्तेषु हिता लेपोपसेकयोः ।**

आढकी, तुवरी, तुल्या, करवीरभुजा, वृत्तबीजा र पीतपुष्पा : यी रहरका पर्यायवाची नाम हुन् । यो सेतो, रातो र कालो वा नीलो गरी तीन प्रकारको हुन्छ । रहरले कफविकार र पित्तविकार नाश गर्दछ तथा तथा थोरै वातविकारलाई उत्तेजित पार्दछ । यो टर्रो, गुलियो, कब्जियत गर्ने, पचेपछि पिरो, शीतवीर्यको, पचाउन सहज, तथा बोसोविकार, कफविकार र पित्तविकारमा लेप दल्न वा भिजाउनका लागि उपयोगी हुन्छ ।

(ट) **निघण्टुशेषः**

**आढक्यां तूवरी वर्णा ...।**

आढकी, तूवरी र वर्णा : यी रहरका नाम हुन् ।

(ठ) **पर्यायरत्नमाला :**

**आढकी तुवरी तद्वद् । वन्या सा महती भवेत् ।**

आढकी र तुवरी : यी रहरका नाम हुन् । यस्तै खालको जङ्गल रहर भने ठूलो हुन्छ ।

(ड) **भावप्रकाश निघण्टु :**

**आढकी तुवरी चापि सा प्रोक्ता शणपुष्पिका॥**
**आढकी तुवरा रूक्षा मधुरा शीतला लघुः । ग्राहिणी वातजननी वर्ण्या पित्तकफास्रजित्॥**

आढकी, तुवरी र शणपुष्पिका : यी रहरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, रुखो, गुलियो, शीतल गर्ने र पचाउन हलुका हुन्छ । रहर सङ्ग्राही, वातविकारकारी, वर्णमा निखार लेराउने तथा पित्तविकार, कफविकार र रक्तविकार नाशक हुन्छ ।

(ढ) **मदनपाल निघण्टु :**

**...स्यादाढकी तुवरी मता॥ तुवरी ग्राहिणी शीता लघुः कफविषास्रजित्॥**




आढकी र तुवरी : यी रहरका संस्कृत पर्यायवाची नामहरू हुन् । रहर ग्राहि, शीतल गर्ने, पचाउन सहज तथा कफविकार, विषविकार र रक्तविकारलाई जित्ने गुणको हुन्छ ।

(ण) **माधव द्रव्यगुण :**



**आढकी कफपित्तघ्नी ... । (आढकी कफपित्तघ्नी किञ्चिन्मारुतकोपनी । ता एव घृतसंयुक्तास्त्रिदोषशमना मताः) ।**

रहरले कफविकार र पित्तविकार नाश गर्दछ ।...(रहरले कफविकार र पित्तविकार नाश गर्दछ तर थोरै वातविकार बढाउँदछ । यसमा घिउ मिसाए यसले त्रिदोषलाई शान्त पार्दछ) ।

(त) **राज निघण्टु :**

**आढकी तुवरी वर्या करवीरभुजा तथा । वृत्तबीजा पीतपुष्पा श्वेता रक्ताऽसिता त्रिधा॥**
**आढकी तु कषाया च मधुरा कफपित्तजित् । ईषद्वातकरा रुच्या विदला गुरुग्राहिका॥**
**सा च श्वेता दोषदात्री तु रक्ता रुच्या बल्या पित्ततापादिहन्त्री ।**
**सा श्यामा चेद्दीपनी पित्तदाहध्वंसा बल्यश्चाढकीयूषमुक्तम्॥**

आढकी, तुवरी, वर्या, करवीरभुजा, वृत्तबीजा र पीतपुष्पा : यी रहरका संस्कृत पर्यायवाची नामहरू हुन् । रहर सेतो, रातो र कालो गरी तीन किसिमको हुन्छ । यो टर्रो, गुलियो तथा कफविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले थोरै वातविकार गर्दछ । यो रुचिप्रद हुन्छ । यसको दाल पचाउन कठिन र ग्राहि हुन्छ । सेतो रहर दोषयुक्त हुन्छ । रातो रहर रुचीप्रद, बलदायक तथा

पित्तविकार, जरो आदि नाशक हुन्छ । कालो रहर दीपनी, पित्तविकार र डाह नाशक एवं बलदायक हुन्छ । यी रहरका थोरै पानी हाली पकाइएका दालका लक्षणहरू हुन् ।

(थ) **राजवल्लभ निघण्टु :**


रहरका गेडा (तस्विर श्रोत : पेयर डी अमरकोश)

**तुवरी कफपित्तघ्नी कषाया नातिवातला॥**

रहर कफविकार पित्तविकार नाशगर्ने, टर्रो र धेरै वातविकार पनि नगर्ने गुणको हुन्छ ।

(द) **शालिग्राम निघण्टु :**

**आढकीतुवरीवर्य्यामृत्तालं च मृतालकम् । काक्षीकरवीरभुजावृत्तबीजासुराष्ट्रजम्॥**

आढकी, तुवरी, वर्या, मृत्ताल, मृतालक, काक्षी, करवीरभुजा, वृत्तबीजा र सुराष्ट्रज : यी रहरका पर्यायवाची नाम हुन् ।

**मृदुकषाया च सरक्तपित्तं वातं कफं हन्ति मुखव्रणञ्च ।**
**गुल्मज्वरारोचककर्छर्दिहृद्रोगदुर्नामहराढकी स्यात्॥ (हा.सं.)**



रहर कोमल, टर्रो तथा रक्तपित्त, वातविकार, कफविकार, मुखका खटिरा, गुल्म, जरो, अरुची, खोकी, वाकवाकी, मुटुका रोग र हर्सा नाशगर्ने गुणको हुन्छ ।

**तुवर्यतिकषाया च मेदःश्लेष्मास्रपित्तजित् । विबन्धाध्मानकृत्स्वादुःपाकाल्पवातला॥**
**शीतलाबद्धविण्मूत्रालघ्वीरूक्षाप्रकीर्त्तिता॥ (शो.नि.)**

रहर अत्यन्त टर्रो तथा बोसोविकार, कफविकार र रक्तपित्तलाई जित्ने गुणको हुन्छ । यसले कब्जियत र आध्मान गर्दछ । यो पचेपछि गुलियो हुन्छ । यसले थोरै वातविकार गर्दछ । यो शीतवीर्यको, दिसापिसाबलाई बाँध्ने, पचाउन सहज र रुखो हुन्छ ।

**आढकी मधुरा किञ्चिद्वातला च कषायका । गुर्वीरुच्याग्राहिणीरूक्षावर्ण्या च शीतला॥**
**कफपित्तज्वरविषरक्तरुग्गुल्मवातनुत् । अर्शोनाशकराप्रोक्ता घृतयुक्ता च वातहा॥**
**कफपित्तहरा लेपैः सेकैर्मेदकफापहा । तुवरीदालिका पथ्या किञ्चिद्वातकरा मता॥**
**कृमित्रिदोषशमनी घृतयुक्तात्रिदोषहा ।**

सामान्य खालको रहर गुलियो, केही वातविकार गर्ने, टर्रो, पचाउन कठिन, रुचिप्रद, कब्जियत गर्ने, रुखो, वर्णका लागि हितकर, शीतवीर्यको तथा कफविकार, पित्तविकार, जरो, विषविकार, रक्तविकार, गुल्म र वातविकार नाशगर्ने गुणको हुन्छ । यसले हर्सा पनि नाश गर्दछ । घिउ मिसाएर खाए यसले वातविकार नाश गर्दछ । यसको लेप दल्नाले कफविकार र पित्तविकार नाश हुन्छ । यसले सेक्नाले

बोसोसवकार र कफविकार नाश हुन्छ । यसको दाल पथ्य, केही वातविकार गर्ने तथा कीरा र त्रिदोषलाई शान्तपार्ने गुणको हुन्छ । घिउ मिसाएर खाए यो त्रिदोष नाशगर्ने हुन्छ ।

**श्वेता तु तुवरी गुर्वी वातपित्तप्रकोपदा । अम्लपित्तकरा ग्राहिण्यपथ्याध्मानकारिणी ॥**

सेतो रहर पचाउन कठिन, वातविकार र पित्तविकारलाई उत्तेजित पार्ने, अम्लपित्त गर्ने, दिसा रोक्ने, पथ्य र आध्मान रोग गर्ने गुणको हुन्छ ।

**रक्ता तु तुवरी रुच्या बल्या पथ्या ज्वरापहा । पित्तसन्तापादि नाना रोगनाशकरी मता ॥**

रातो रहर रुचिप्रद, बलदायक, पथ्य, जरो नाशक तथा पित्तविकार र डाह आदि अनेक थरी रोग नाशगर्ने गुणको हुन्छ ।

**कृष्णा तु तुवरी बल्या चाग्निदीप्तिकरा मता ।**
**पित्तदाहप्रशमनी ऋषिभिः परिकीर्त्तिताः ॥ (नि. रत्नाकर)**

कालो रहर बलदायक, पाचनशक्ति बढाउने तथा पित्तविकार र डाहलाई शान्त पार्ने गुणको हुन्छ ।


रहरको दाल (तस्बिर श्रोत : ठुलो डटकम)

**(ध) सुश्रुत संहिता :**



**आढकी कफपित्तघ्नी नातिवातप्रकोपणी ।**

रहर कफविकार र पित्तविकार नाश गर्ने तथा धेरै वातविकारलाई उत्तेजित नबनाउने गुणको हुन्छ ।

**(न) हारीत संहिता :**

**मृदुः कषाया च सरक्तपित्तं वातं कफं हन्ति मुखव्रणञ्च ।**
**गुल्मज्वरारोचककासछर्दिहृद्रोगदुर्नामहराढकी स्यात् ॥**

रहर टर्रो तथा रक्तपित्त, वातविकार, कफविकार, मुखका घाउ, गुल्म, जरो, अरुची, खोकी, वाकवाकी, मुटुका रोग र अल्काई नाशगर्ने गुणको हुन्छ ।

रहरको दाल मिठो र फाइदाजनक हुन्छ । तर कालोबजारमा खेसरीको दाललाई रहरको दाल भनेर बेचिरहेको पाइन्छ । दाना ठूला र चेप्टा छन् भने त्यो रहरको दाल होइन भनी थाहा पाउनू । खेसरीको दाल हानिकारक हुन्छ । रहरको दालमा रङ पनि मिसाइने गरिन्छ । यो पनि स्वास्थका लागि हानिकारक हुन्छ । तर किन्ने, बेच्ने र अनुगमन गर्ने निकायलाई समेत यसको कुनै मतलब हुने गरेको पाइँदैन । पालिश गरिएको र नगरिएको गरी दुई थरी रहरको दाल बजारमा पाइन्छ । स्वस्थ हुन चाहनेले पालिस नगरेको रहरको दाल चिनेर खाने गर्नू ।

## आणी (शरीरको मर्मस्थलविशेष)
## (The part of the leg just above the knee)

(क) **अष्टाङ्ग हृदय :**

**जानुनस्त्र्यङ्गुलादूर्ध्वमाण्यूरुस्तम्भशोफकृत्॥**

घुँडाभन्दा तीन अमल माथि आणी नामक मर्मस्थल हुन्छ । यहाँको नसा काटिए तिघ्रा नचल्ने र सुन्निने हुन्छ ।

(ख) **सुश्रुत संहिता :**

**जानुन ऊर्ध्वमुभयतस्त्र्यङ्गुलमाणी नाम, तत्र शोफाभिवृद्धिः स्तब्धसक्थिता च;**

घुँडाभन्दा तीन अमल माथि दुवैतिर आणी नामक मर्मस्थल हुन्छ । त्यहाँ चोट लाग्नाले सुजन बढ्दछ तथा गोडा लाटो वा नचल्ने हुन्छ ।

# आत्मा
# (Soul)

(क) **अमरकोश :**

**क्षेत्रज्ञ आत्मा पुरुषः...।**

क्षेत्रज्ञ, आत्मा र पुरुष : यी आत्माका नाम हुन् । (पुद्गल, भाव आदि शब्दको अर्थ आत्मा पनि हुन्छ) ।

(ख) **काश्यप संहिता :**

**क्षेत्रज्ञं तु शाश्वतमचिन्त्यमात्मानम् । अस्य लिङ्गानिचेतनाहङ्कारप्राणापानोन्मेषनिमेषसुखदुःखेच्छाद्वेषस्मृतिधृतिबुद्धयः; तदभावे मृताख्या । शरीरेन्द्रियात्मसत्त्व-समुदयं पुरुषमाचक्षते, आत्मानमेके ।**

स्थायी र चिन्तन वा अनुमान लगाउन नसकिने आत्मालाई क्षेत्रज्ञ भनिन्छ । यस (आत्मा) का लक्षण चेतना, अहङ्कार, प्राण (हावा तान्ने), अपान (हावा छाड्ने), उन्मेष (आँखा खोल्नु), निमेष (आँखा बन्द गर्नु), सुख, दुःख, इच्छा, द्वेष, स्मृति (सम्झनु), धृति (धैर्य गर्नु), बुद्धि आदि हुन् । यी लक्षण नहुँदाका अवस्थामा (शरीरलाई) मरेको मानिन्छ । शरीर, इन्द्रिय, आत्मा र मनको समूहलाई पुरुष भनिन्छ । कोही आत्मालाई पुरुष मान्दछन् ।



(ग) **चरक संहिता :**

**निर्विकारः परस्त्वात्मा सत्त्वभूतगुणेन्द्रियैः । चैतन्ये कारणं नित्यो द्रष्टा पश्यति हि क्रियाः ॥**

निर्विकार तथा सूक्ष्म आत्मा नै मन, शब्दादिगुण र इन्द्रियमा चेतना ल्याउने कारण हो । यो नित्य हुन्छ, यो साछी पनि हो किन कि यसले सबै क्रियाकलापलाई देख्दछ । अचेतन शरीर र चैतन्य मन हुनुमा आत्मा नै कारण हो । आत्मा अमर हुन्छ ।

**मानसो ज्ञानविज्ञानधैर्यस्मृतिसमाधिभिः ॥**

मानसिक दोष आत्मज्ञान, शास्त्रज्ञान, स्थिर चित्त, आनन्ददायी स्मरण एवं मनलाई विषयवासनाबाट हटाएर आत्मामा लगाउने शान्त हुन्छन् ।

(घ) **भावप्रकाश संहिता :**

**आत्मा ज्योतिश्चिदानन्दरूपो नित्यश्च निःस्पृहः । निर्गुणः प्रकृतेर्योगात्सगुणः कुरुते जगत् ॥**

आत्मा प्रकाश, चैतन्य, आनन्दरूप, कहिल्यै नाश नहुने, इच्छा र गुणरहित हुन्छ तर प्रकृतिको सहयोगमा सगुणी अर्थात् इच्छा आदिले युक्त भई संसारलाई रच्दछ ।

**आत्मानादिरनन्तश्चाव्यक्तो वक्तुं न शक्यते । चिदानन्दैकरूपोऽयं मनसापि न गम्यते ॥**

यो जीव (वा आत्मा) अनादि, अनन्त, अव्यक्त, अवर्णनीय, चिदानन्द र एकरुपी हुन्छ र यसलाई बुद्धिले जान्न सकिन्न ।

**एवंभूतोऽपि जगतो भाविनी बलवत्तया । अविद्यास्वीकृते कर्मवशो गर्भे विशत्यसौ ॥**

यस्तो हुँदाहुँदै पनि संसारमा प्रारब्ध बलले गर्दा कर्मको वशमा परी जीव अज्ञानतालाई स्वीकार्दै त्यो गर्भमा रहेको चौबीस तत्वयुक्त देहमा प्रवेश गर्दछ ।

**स एव वेत्ता रसनो द्रष्टा घ्राता स्पृशत्यसौ । श्रोता वक्ता च कर्त्ता च गन्ता रन्तोत्सृजत्यपि ॥**

त्यो आत्माले स्वाद थाहा पाउँदछ, देख्दछ, सुँघ्दछ, स्पर्श गर्दछ, सुन्दछ, बोल्दछ, (कार्य) गर्दछ, रमण गर्दछ र (मलमूत्र आदि) त्याग्दछ पनि । (अर्थात् उसले दश वटै इन्द्रियलाई भोग गर्दछ) ।

(ङ) **राज निघण्टु :**

**आत्मा शरीरी क्षेत्रज्ञः पुद्गलः प्राण ईश्वरः । जीवो विभुः पुमानीशः सर्वज्ञः शम्भुरव्ययः ॥**

आत्मा, शरीरी, क्षेत्रज्ञ, पुद्गल, प्राण, ईश्वर, जीव, विभु, पुमान्, ईश, सर्वज्ञ, शम्भु र अव्यय : यी आत्माका नाम हुन् ।

(च) **शार्ङ्गधर संहिता :**

**मर्माणि जीवाधाराणि प्रायेण मुनयो जगुः ।**



शरीरमा रहने मर्मस्थल आत्माको आधार हो भनी मुनिजन भन्दछन् ।

यी आयुर्वेदका प्राचीन ग्रन्थमा दिइएका आत्माका केही परिभाषा हुन् । स्मृतिग्रन्थमा, साङ्ख्यभाष्यमा, न्यायमतमा, वैशेषिक मतमा, जैन मतमा तथा अन्य मतमा बेग्लै र विस्तृत चर्चा गरिएको पाइन्छ । पुराणहरूमा यसको आफ्नै शैलीको व्याख्या पाइन्छ । समग्रमा सबै चल अचल वस्तुलाई सबै कुरा भोगाउने मूल सूत्रलाई आत्मा भनेर मानिएको पाइन्छ । आत्मालाई दुई भागमा व्याख्या गरिएको छ जीवात्मा र परमात्मा । जबसम्म मानिसले आफ्नो आत्मालाई चिन्दैन तबसम्म परमात्मालाई उसले प्राप्त गर्न सक्दैन । आफ्नो आत्मा चिनेका मानिस सांसारिक सबै खालका वासनाबाट माथि उठेको हुन्छ । उसलाई मिठो, नमिठो, गर्मी, जाडो, धन, गरिबी, मान, अपमान आदि केही कुराको परवाह हुँदैन । शरीर भित्र आत्माको प्रवेश भएपछि मात्र इन्द्रिय, मन र बुद्धि सक्रिय भएर काम गर्न थाल्दछन् । आत्मा निस्केपछि यी सबै जड हुन्छन् र त्यसबेला जीव आदिको मृत्यु भयो भन्ने गरिन्छ । जीवको शरीरलाई उसले पूर्व जन्ममा गरेका कर्मको भोग्न बाँकी फल र यो जन्ममा गर्ने कर्मको फल भोगाउने कार्य यही आत्माले आफैंले भोगे जसरी भोगाउने गर्दछ । अति संक्षेपमा आत्माका बारेमा मबाट भएको सङ्कलनको सार यही हो । विस्तृतमा बताउन मेरो क्षमताले भ्याउँदैन । जीवको उत्पत्ति कसरी हुन्छ भन्ने विषयमा गर्भाधान आदिको श्रृङ्खला आउँदा यी कुरा अझ केही स्पष्ट पार्न प्रयाश गर्नेछु । आयुर्वेदले पटकपटक अधिकांश मानसिक रोगको उपचार आत्मज्ञान मात्र हो भनेर लेखेको छ । त्यसैले पनि आत्माको कुरा स्पष्ट पार्न खोजिएको हो । आत्माको अस्तित्वलाई नै नमान्ने विभिन्न मतहरू पनि संसारमा छन् । आत्मालाई अंग्रेजीमा Soul नाम दिइएको छ ।

# आदित्यपत्र
# (Aadityapatra)

**परिभाषा :**

(क) के.यन.स्वामीः (१) आदित्यपत्र : आँकको पात । (२) अर्कदल, अर्क : आँकको रूख । सूर्यमुखी । (३) अर्कपत्रा, सूक्ष्मपत्र, कुष्ठारि, विटप, रश्मिपति : सूर्यमुखी फूल । (४) तपनच्छद : सेतो आँक । सूर्यमुखी । (५) रविप्रिय : रातो आँक, सूर्यमुखी फूल ।

(ख) डा.साङ्ग्चधर : यो एक यकीन गर्न नसकिएको ओखती हो । कसैले आँकको पात त कसैले सूर्यमूखी फूललाई यो नामको वनस्पति मानेका छन् । सूर्यमुखीलाई अंग्रेजीमा Sunflower तथा ल्याटिन भाषामा *Helianthus annuus* Linn. भनिन्छ । आँकको ल्याटिन नाम *Calotropis procera* R.Br. हो ।

(ग) हिन्दी विश्वकोश : (१) अर्क : आँक । (२) अर्कदल : आदित्यपत्र नामक बुटो । आँकको रूख । (३) अर्कपत्र : अर्कवत् प्रशस्तं पत्रं यस्य । आँकको रूख । आदित्यपत्र नामक बुटो । आँकको पात । (४) आदित्यपत्र : आदितस्य अर्कवृक्षस्य पत्रमिव पत्रमस्य । १. वनस्पति । २. आँकको पात । (५) कुष्ठारि : कुष्ठस्य अरिः तन्नाशक इत्यर्थः । १.आदित्यपत्र वृक्ष, मदार । (६) तपनच्छद : तपनः अतिरूक्षः छदो यस्य । आदित्यपत्र वृक्ष । (७) रविप्रिय : रविरेव प्रियमस्य । आदित्यपत्र वृक्ष । (८) रश्मिपति : रश्मिः पतिः पोषको यस्य । आदित्यपत्र । (९) विटप : विटान् पातीति पा-क । आदित्यपत्र । (१०) सुपत्र : आदित्यपत्र । हुरहुरको एक जात । (११) सूक्ष्मपत्र : अर्कपत्र ।

(घ) आयुर्वेदीक महाकोश : (१) आदित्यपत्र : आदित्यभक्ताभेदः (सूर्यमुखीको एक जात) । गुणाः-कटुः उष्णवीर्य कफघ्नः वातरोगघ्नः दीपनः जाठरगुल्मघ्नः अरोचकघ्श्च (रा.व.४) । अर्कवृक्षः ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**आदित्यपत्रोऽर्कदलार्कपत्रः स्यात्सूक्ष्मपत्रस्तपनच्छदश्च ।**
**कुष्ठारिरर्को विटपः सुपत्रो रविप्रियो रश्मिपतिश्च रुद्रः ॥**
**आदित्यपत्रः कटुरुष्णवीर्यः कफापहो वातरुजापहश्च ।**
**सन्दीपनो जाठरगुल्महारी ज्ञेयः स चारोचननाशकश्च ॥**

(१) आदित्यपत्र, (२) अर्कदल, (३) अर्कपत्र, (४) सूक्ष्मपत्र, (५) तपनच्छद, (६) कुष्ठारि, (७) अर्क, (८) विटप, (९) सुपत्र, (१०) रविप्रिय र (११) रश्मिपति : यी एघार वटा नाम आदित्यपत्रका नाम हुन् । यो पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यो सन्दीपनी तथा पेटको गुल्म र अरुची नाशक समेत हुने गर्दछ ।

**(ख) शालिग्राम निघण्टु :**

**आदित्यपत्रा वीर्योष्णा कट्वी सन्दीपनी मता । स्वर्या रसायनी तिक्ता तुवरा च सरा मता ॥**

**रूक्षा लघ्वी च सम्प्रोक्ता कफवातविनाशिनी । रक्तदोषं ज्वरं श्वासं कासं विस्फोटकं तथा ॥**
**कुष्ठं मेहं चारुचिञ्च योनिशूलं तथाऽश्मरीम् । मूत्रकृच्छ्रं पाण्डुरोगं गुल्मञ्चैव विनाशयेत् ॥ (नि.र.)**

आदित्यपत्रा उष्णवीर्यको, पिरो, दीपनी, स्वरका लागि हितकर, रसायनी, तीतो, टर्रो, मलमूत्रलाई तलतिर सार्ने, रुखो, पचाउन सहज तथा कफविकार, वातविकार, रक्तविकार, जरो, दम, खोकी, कुष्ठविशेष अथवा विफर, कुष्ठ, प्रमेह, अरुची, स्त्री जननेन्द्रियको शूल, पत्थरी, मूत्रकृच्छ्र, पाण्डु र गुल्म नाशगर्ने गुणको हुन्छ ।

(ग) **सुश्रुत संहितामा** भने आदित्यपर्णिनीका बारेमा लेखिएको छ । यो आदित्यपत्र हो वा बेग्लै वनस्पति हो ठम्याउन सकिएन । त्यहाँ यस्तो उल्लेख भएको पाइन्छ-

**आदित्यपर्णिनी ज्ञेया सदाऽदित्यानुवर्तिनी । कनकाभा जलान्तेषु सर्वतः परिसर्पति ॥**
**आदित्यपर्णिनी ज्ञेया तथैव हिमसंक्षये ।**

सधैं सूर्यतिर फर्कने, सुनजस्तै पहेँलो पानी भित्र सबैतिर फैलने वनस्पति विशेषलाई आदित्यपर्णिनी भनिन्छ । आदित्यपर्णिनी हेमन्त ऋतु सकिएपछि अथवा जाडो सकिएपछि हुने गर्दछ । यसको पहिचानमा विवाद रहेको पाइन्छ ।

## आद्यपुष्पक र वराधक
## (Aadyapushpaka & Varaardhaka)

(क) **राजनिघण्टु :**

**चन्दनं कुङ्कुमं वारि त्रयमेतद्वराधकम् । त्रिभागकुङ्कुमोपेतं तदुक्तं चाद्यपुष्पकम् ॥**

चन्दन, केसर र सुगन्धवालको मिश्रणलाई वराधक भनिन्छ । तीन गुना बढी केसर मिसाइएको यो मिश्रणलाई आद्यपुष्पक भनिन्छ ।

# आध्मान रोग
# (Tympanites)

**(क) सुश्रुत संहिता :**

**साटोपमत्युग्ररुजमाध्मातमुदरं भृशम् । आध्मानमिति जानीयाद्घोरं वातनिरोधजम्॥**

कराएको आवाज सहितको तिब्र पीडादायक अति फुलेको पेटको रोगलाई आध्मान भनिन्छ । यो डरलाग्दो रोग अधोवायु रोकिनाले हुने गर्दछ ।

## आनाह (पेट फुल्ने रोग)
## (Constipation)

**परिभाषा :**

(क) हिन्दी विश्वकोश (आनाह) : आनह्यते अपसरणप्रतिरोधन वध्यते विण्मूत्राद्यनेन, विण्मूत्ररोध व्याधि, कोष्ठवद्ध, दिसा र पिसाब रोक्ने खालको एक रोग ।

(ख) अंग्रेजीमा यसलाई एक प्रकारको Constipation भन्न सकिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अष्टाङ्ग हृदय :**

**साटोपत्युग्ररुजम् आध्मानमुदरे भृशम्॥ ऊर्ध्वाधो वातरोधेन तमानाहं प्रचक्षते ।**

पेट कुइँ कुइँ गरेर कराउने, अति दुख्ने, धेरै फुल्ने तथा डकार र अपानवायु रोकिने रोगलाई आनाह भनिन्छ ।

(ख) **माधव निदान :**



**आमं शकृद्वा निचितं क्रमेण भूयो विबद्धं विगुणानिलेन ।**
**पवर्तमानं न यथास्वमेनं विकारमानाहमुदाहरन्ति॥**

जुन अवस्थामा आम अथवा दिसा आमाशय वा पक्वाशयमा क्रमशः थुप्रिन थाल्दछ तथा गुणहीन वायुले अझ बढी रोकिन गई बाहिर निस्कनुपर्ने बाटो बाट ननिस्की बसिरहन्छ तब यसलाई आनाह भनिन्छ ।

(ग) **राज निघण्टु :**

**...आनाहो मलरोधनम् ।**

दिसा रोकिएर पेट फुल्ने रोगलाई आनाह वा मलरोधन भनिन्छ ।

# आनूप जल
# (Water of Coastal areas)

**परिभाषा :**

(क) के.यन.स्वामी : आनूप भनेको सिंस्यार स्थान हो ।

(ख) Water of the watery or marshy places. Water of Coastal areas or river beds.

**प्राचीन ग्रन्थका वचनहरू :**

**(क) आयुर्वेद महोदधि :**

**आनूपं श्लेष्मलं प्रोक्तं मेदोदोषविवर्धनम्॥**

"आनूप" पानीले कफविकार र बोसोविकार बढाउँदछ ।

**आनूपदेशजं वारि सान्द्रं च गुरु पिच्छिलम् । मधुरं श्लेष्मजननं स्निग्धं वातादिकोपनम्॥**

आनूप क्षेत्रको पानी बाक्लो हुन्छ । यो पचाउन कठिन र चिप्लो हुन्छ । आनूप जल मीठो, कफकारी र चिल्लो हुनाको साथै वात दोषलाई बढाउने खालको हुन्छ ।

**(ख) कैयदेव निघण्टु :**



**आनूपं वार्यभिष्यन्दि स्वादु स्निग्धं घनं गुरु॥ अनेकदोषश्लेष्माणमुत्पादयति गर्हितम् ।**

आनूप जल अभिष्यन्दि, स्वादिलो, चिल्लो, बाक्लो, पचाउन कठिन, अनेक थरी दोष निकाल्ने, कफविकार गर्ने र निन्दनीय गुणको हुन्छ ।

**(ग) द्रव्यगुणसङ्ग्रह :**

**आनूपं वार्यभिष्यन्दि मधुरं पिच्छिलं गुरु॥**

आनूप जल अभिष्यन्दि, गुलियो, लेस्याइलो र पचाउन कठिन हुने गुणको हुन्छ ।

**(घ) धन्वन्तरि निघण्टु :**

**आनूपदेशजं वारि तत्सान्द्रं गुरु पिच्छिलम् । प्रमेहःश्लीपदच्छर्दिगलगण्डास्यशोषकृत्॥**

आनूप जल चिल्लो, पचाउन कठिन, लेस्याइलो तथा प्रमेह, हात्तीपाइले रोग, वाकवाकी र गलगाँड निकाल्ने एवं मुख सुकाउने गुणको हुन्छ ।

**(ङ) भावप्रकाश निघण्टु :**

**वह्वम्बुर्बहुवृक्षश्च वातश्लेष्मामयान्वितः । देशोऽनूप इति ख्यात आनूपं तद्भवं जलम्॥**

जहाँ धेरै पानी र धेरै रूख हुन्छन् तथा वात र कफजन्य रोग बढी हुन्छ त्यस्तो स्थानलाई आनूप देश भनिन्छ । आनूप देशमा हुने पानीलाई आनूप जल भनिन्छ ।

**आनूपं वार्यभिष्यन्दि स्वादु स्निग्धं घनं गुरु । वह्निहृत्कफकृद्हृद्यं विकारान्कुरुते बहून्॥**

आनूप जल कब्जियत गराउने, स्वादिलो, चिल्लो, गह्रौं, पचाउन कठिन, वातविकार नाशक, कफविकार गर्ने, र अनेक थरी रोग निकाल्ने गुणको हुन्छ ।

(च) **मदनपाल निघण्टु :**

**आनूपं दोषकृद्वारि प्रायोऽभिष्यन्दि निन्दितम् ।**

आनूप क्षेत्रको पानीले दोष निकाल्दछ र अभिष्यन्दी हुन्छ । त्यसैले यसलाई निन्दनीय पानी भनिन्छ ।

(छ) **माधवद्रव्यगुण :**

**आनूपदेशे यद्वारि तत्सान्द्रं गुरु पिच्छिलम् । मधुरं श्लेष्मजननं स्निग्धं पावकसादनम्॥**
**जाड्यान्ध्यगदबाधिर्यसोत्क्लेशारोचकावहम् । प्रमेहश्लीपदच्छर्दिगलगण्डास्यरोगकृत्॥**

आनूप जल बाक्लो, पचाउन कठिन, लेस्याइलो, गुलियो, कफविकार गर्ने, चिल्लो, पाचनशक्ति नाशगर्ने तथा जडता, अन्धोपन, बहिरोपन, दुःख र अरुची नाशगर्ने गुणको हुन्छ । यसले प्रमेह, हात्तीपाइले रोग, वावाकी, गलगाँड र मुखका रोग निकाल्दछ ।

(ज) **राजनिघण्टु :**

**आनूपसलिलं स्वादु स्निग्धं पित्तहरं गुरु । तनोति पामाकण्डूतिकफवातज्वरामयान्॥**

आनूप-स्थानमा हुने पानी स्वादिलो, चिल्लो, पित्तविकार नाशक, पचाउन कठिन तथा पामा, चिलाउने रोग, कफविकार, वातविकार र ज्वर निकाल्न सक्ने गुणको हुन्छ ।

(झ) **राजवल्लभ निघण्टु :**

**अनूपदेशे यद्वारि तत्सान्द्रगुरुपिच्छिलम् । मधुरं श्लेष्मजननं स्निग्धपावकनाशनम्॥**
**प्रमेह श्लीपदच्छर्दिगलगण्डादिरोगकृत् ।**

आनूप क्षेत्रमा हुने जल बाक्लो, पचाउन कठिन, लेस्याइलो, गुलियो, कफविकार गर्ने, चिल्लो, पाचनशक्ति नाशगर्ने तथा प्रमेह, हात्तीपाइले रोग, वाकवाकी, गलगाँड र मुखका रोग निकाल्ने गुणको हुन्छ ।

भौमजल अन्तर्गतको एक जलका रूपमा आनूप जललाई लिइएको पाइन्छ ।

# आनूप वर्गका जीव
# (Wetland-animals)

## (क) हारीत संहिता :

**मत्स्यमंकुरकाद्या ये कच्छपा दुर्जरादयः । हंससारसचक्राद्याः कपिञ्जलकुमूदकाः ॥**
**आनूपास्ते च विज्ञेयाः श्लेष्मला वातकोपनाः ॥**

माछा, मंकुर (?) आदि; कछुवा, दुर्जर (?) आदि; हाँस, सारस, चखेवा आदि; चातक र कुमूदका (?) यी आनूप वर्गका जीव हुने भनी जान्नू । यिनको मासुले कफविकार बढाउँदछ र वायुविकारलाई थप विकृत बनाउँदछ ।

## आनूप देश
## (Wetland)

**(क) अमरकोश :**

**जलप्रायमनूपं स्यात्पुंसि कच्छस्तथाविधः ।**

पानी धेरै भएको स्थानलाई अनूप वा कच्छ भनिन्छ ।

**(ख) अष्टाङ्ग हृदय :**

**..आनूपं तु कफोल्बणम्॥**

कफको हालीमुहाली हुने जमिनलाई "आनूप" भनिन्छ ।

**(ग) चरक संहिता :**

**प्रचुरोदकवृक्षो यो निवातो दुर्लभातपः । अनूपो बहुदोषश्च...।**

जुन भूभागमा पानी र रूख अधिक हुन्छ, हावा चल्दैन, घाम पनि लाग्दैन त्यसलाई आनूप देश भनिन्छ ।

**(घ) भावप्रकाश निघण्टु :**



**वह्वम्बुर्बहुवृक्षश्च वातश्लेष्मामयान्वितः । देशोऽनूप इति ख्यात ...॥**

जहाँ धेरै पानी र धेरै रूख हुन्छन् तथा वात र कफजन्य रोग बढी हुन्छ त्यस्तो स्थानलाई आनूप देश भनिन्छ ।

**(ङ) भावप्रकाश संहिता :**

**नदीपल्वलशैलाढ्यः फुल्लोत्पलकुलैर्युतः । हंससारसकारण्डचक्रवाकादिसेवितः॥**
**शशवाराहमहिषरुरुरोहिकुलाकुलः । प्रभूतद्रुमपुष्पाढ्यो नीलशस्यफलान्वितः॥**
**अनेकशालिकेदारकदलीक्षुविभूषितः । अनूपदेशो ज्ञातव्यो वातश्लेष्मामयार्त्तिमान्॥**

नदीहरू, सानासाना ताल र पर्वत धेरै भएको; तालमा कमल फुलिरहेको; हाँस, सारस, कालो हाँस ( कारण्डव), चखेवा आदि कराएको आवाज गुञ्जिरहने; खरायो, बँदेल, (जङ्गली) भैँसी, रुरु मृग र रोहि मृगका बथानका बथान भएको; अनेक थरी वृक्ष फुलिरहेको; नीला अनाज र फलले शोभायमान; अनेक थरी मार्सी धानको खेतीले सुशोभित तथा केरा र उखुका बोटले सुन्दर देखिने खालको भूभागलाई आनूप देश भनिन्छ । यस्तो देशमा वात र कफसम्बन्धी रोग बढी हुने गर्दछ ।

**(च) राज निघण्टु :**

**नानाक्षौणीजनानाजलमृगसहितं निर्झरव्रातशीतं,**
**शैलाकीर्णं कनीयः कुररमुखखगालङ्कृतं ताम्रभूमि ।**

विभ्रद्व्रीह्याादिकं यत् स्थलमतिविपुलं नीरसं यत्त्वनुष्णं,
पित्तघ्नं श्लेष्मवातप्रदमुदररुजापामदं स्यादनूपम्॥

अनेक थरी मानिस, पानी र मृग भएको; झरनाहरूको समूहले गर्दा शीतल भएको; सानातिना पर्वतहरूले ढाकिएको; चखेवा आदि चराहरू भएको; तामा रङको माटो भएको; व्रिही आदि अनाजले भरिएको; अति विशाल; सुकेको; धेरै गर्मी नहुने; पित्तविकार नाशक; कफविकार र वातविकार गर्ने र पेटका रोगहरू निकाल्ने खालको ओसिलो स्थान वा (ध्मत बिलमण लाई 'आनूपदेश' भनिन्छ ।

तच्चोक्तकृत्स्ननिजलक्षणधारिभूरिच्छायावृतान्तरवहद्बहुवारिमुख्यम् ।
ईषत्प्रकाशसलिलं यदि मध्यमं तत् एतच्च नातिबहलाम्बु भवेत्कनीयः ॥

ओसिलो क्षेत्र (आनूपदेश) मुख्य, मध्यम र कनीय गरी तीन किसिमको हुन्छ । माथि उल्लेखित सबै विशेषताहरू सहित पानी बगिरहने खोला धेरै भएको, दलदल भूमि भएको र वनस्पतिहरूको बाक्लो छायाले ढाकिएको जमिनलाई 'मुख्य ओसिलो भूमि' भनिन्छ । जहाँ तुलनात्मक रूपमा पानी कम छ र वनस्पतिहरूको बाक्लो छायालाई कतैकतै थोरै प्रकाशले छेड्दछ त्यस्तो भूमिलाई 'मध्यम खालको ओसिलो भूमि' भनिन्छ । त्यस्तो जमिन जहाँ पानी प्रशस्त छैन त्यसलाई 'निम्न (कनीय) वा साधारण खालको ओसिलो जमिन' भनिन्छ ।

(छ) **राजवल्लभ निघण्टु :**

**आनूपः शीतलः स्निग्धो वातश्लेष्मकरो गुरुः ॥**



आनूप देश शीतल, चिल्लो तथा वातविकार कफविकार गर्ने तथा पचाउन कठिन हुने वा भारी गुणको हुन्छ ।

(ज) **हारीत संहिता :**

**बहुतरशुभनद्यश्चारुपानीयपुष्टाः सरसरउपेता शाद्वलासारभूमिः ।**
**हरितकुशजलानां शालिकेदाररम्या दिनकरकरदीप्तिं वाञ्छते यत्र लोकः ॥३॥**
**गुरुमधुररसाढ्या भाति चेक्षुः सदार्द्रा विविधजनितवर्णाः शालिगोधूमयूषाः ।**
**मधुररसविभुक्त्या मानवानां प्रकोपी भवति कफसमीरः स्यात्तदानूपदेशः ॥४॥**

सुन्दर र सफा पानी बहने अनेकौं सुन्दर नदीहरू, पानीले भरिएका ताल, हरियो दूबोका चौर, झरनाले भरिएको पृथ्वी, हरियो कुश, पानीले भरिभराउ, धानखेतीले रमणीय देखिने, सूर्यको किरण चाहने संसार, गहौं र गुलियो रस भएको सबै समयमा नसुक्ने उखु; अनेक रङ्गका धान, गहुँ र यूष (दलहन) तथा गुलियो खानाले मानिसलाई वात र कफ रोग हुने स्थानलाई "अनूप देश" भनिन्छ ।

(आनूप क्षेत्रमा हुने पशुपंक्षीको मासुलाई आनूप-मांस तथा जललाई आनूप-जल भनिन्छ) ।

# आम
# (Undigested food particle)

**परिभाषा :**

(क) के.यन. स्वामी (आम) : अजीर्ण । आउँको रोग ।
(ख) यसलाई अंग्रेजीमा undigested food particle भनी बुझ्न सकिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राजनिघण्टु :**

**आमो मलस्य वैषम्यातद्...॥**

दिसा नियमित नभएर हुने रोगलाई आम भनिन्छ ।

**(ख) शार्ङ्गधर संहिता :**

**रसो भवति सम्पक्वादपक्वादामसम्भवः॥**



पेटभित्र आहार राम्ररी पचे वा पाके त्यसबाट "रस" बन्दछ भने नपाकी काँचै भए त्यो "आम" बन्दछ । (सामान्यतः "आम" पनि रसै हो तर आहार राम्ररी नपाकी वा नपची बनेको रस हो भनेर बुझ्नु पर्दछ) ।

**मन्दवह्निविदग्धश्च कटुश्चाम्लो भवेद्रसः । विषभावं व्रजेद्वाऽपि कुर्याद्वा रोगसङ्करम्॥**

तर, मन्द अग्निका कारण रस पचेन भने त्यो विषसरह हुन पुग्दछ । यो पिरो र अमिलो हुन्छ र यसले ज्यानै लिन पनि सक्दछ । कथंकदाचित् यस्तो आम रस थोरै भएर आफैंले कुनै वित्तण्डा मचाउन नसक्ने अवस्थामा छ भने पनि यो त्रिदोषलाई दूषित पार्दै रगतमा विकार उत्पन्न गर्न, जरो फुटाउन तथा भगन्दर, कुष्ठ आदि जस्ता रोग उब्जाउन कारक तत्व बन्न पुग्दछ ।

नोटः यही आमका कारण हुने रोगलाई अतिसार भए आमातिसार, वातरोग भए आमवात, शूल भए आमशूल आदि नामले सम्बोधन गरिन्छ । खानपिन नपचेर आमको अवस्था (काँचो) मा रहने रोगलाई आमरोग भनिन्छ । आउँ आमातिसार भित्र पर्दछ । आमको अर्थ काँचो पनि हुन्छ त्यसैले प्रसङ्ग हेरी अर्थ लगाउनु पर्ने हुन्छ ।

# अमला
# (Emblic myrobalan)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : अमृता, आमलकी, तिष्यफला र वयस्था : यी अमलाका नाम हुन् ।


आमलकी | Phyllanthus emblica L., payer.de/amarakosa

(ख) नेपाली बृहत् शब्दकोश : (१) अमला : अमिलीका जस्ता मसिना पात हुने र गोलाकार फल फल्ने बोटविशेष । त्यसैको फल; आमलक । (२) धन्या, सुधा, आमलक, आमलकी, दिव्या : अमला । (३) धात्री : त्रिफलामध्ये एक; अमला ।

(ग)डा.चुनेकर : यसको ल्याटिन नाम *Phyllanthus emblica* Linn. र *Emblica officinalis* Gaertn. तथा अंग्रेजी नाम Emblic Myrobalan र Gooseberry हुन् ।

(च) कामतद्वय : यो Euphorbiaceae परिवारमा पर्दछ । यसको वानस्पतिक *Emblica officinalis* Gaertn.नाम हो । यसको अंग्रेजी नाम embellic myrobalan हो ।

(छ) शालिग्राम निघण्टु : यसलाई अंग्रेजीमा Emblic myrobalan तथा ल्याटिनभाषामा *Phylakus Amblica* भनिन्छ ।

(ज) पेयर डी अमरकोश : यसलाई अंग्रेजीमा Amblabaum-Emblic Myrobalan तथा ल्याटिन भाषामा *Phyllanthus emblica* L. भनिन्छ । यो Euphorbiaceae परिवारमा पर्दछ ।

(झ) आचार्य बालकृष्ण : यसलाई अंग्रेजीमा Indian gooseberry वा Emblic myrobalan tree तथा ल्याटिन भाषामा *Phyllanthus* emblica L. वा *Emblica officinalis Gaertn.* भनिन्छ । यो Euphorbiaceae परिवारमा पर्दछ ।

(ञ) फर्माकोपिया : अमला Euphorbiaceae परिवारमा पर्दछ । यसको वास्पतिक नाम *Emblica officinalis* Gaertn. *Syn. Phyllanthus emblica* Linn. हो । ओखतीका लागि १०-२० ग्रामसम्म र जुसका लागि ५-१० मि.लि. प्रयोग हुन्छ । ओखतीका लागि ३-६ ग्रामसम्म अमलाको सुकेको धुलो प्रयोग हुन्छ ।

(ट) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : अमला Angiosperm समूह अन्तर्गतको Phyllanthaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Phyllanthus emblica* L.हो ।

(ठ) Journal of Plant Resources, Vol. 17, No. 1, Government of Nepal, 2019 M यो Phyllanthaceae (विरुवा) वा Euphorbiaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Phyllanthus emblica* L.हो । यसलाई अंग्रेजीमा Myrobalan वा Indian gooseberry भनिन्छ ।

अमलाका ५-६ फीट अग्ला बुटादेखि लिएर ठूलठूला वृक्षसम्म हुन्छन् ।


Phyllanthus emblica L., payer.de/ayurveda

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **अभिधान मञ्जरी :**

**वयस्था स्याच्चामलके ... ॥**

अमलालाई वयस्था र आमलकी भनिन्छ ।

(ख) **अभिधान रत्नमाला :**



**धात्र्यामलकी कोरङ्गा वयःस्था चामृता शिवा । कुपाण्डकोऽमृतफला वृष्या तिष्यफला च सा ॥**

धात्री, आमलकी, कोरङ्गा, वयस्था, अमृता, शिवा, कुपाण्डका, अमृतफला, वृष्या र तिष्यफला : यी अमलाका नाम हुन् ।

(ग) **अमरकोश :**

**...तिष्यफला त्वामलकी त्रिषु । अमृता च वयस्था च... ।**

तिष्यफला, आमलकी, अमृता र वयस्था : यी अमलाका नाम हुन् । (अमलाको फललाई अमलक वा आमलकम् भनिन्छ । धात्री शब्दले अमलाको रूखलाई बुझाउँदछ ।) ।

(घ) **अर्क प्रकाश :**

**प्रभावस्तु यथा धात्री लकुचस्य रसादिभिः ॥ समापि कुरुते दोष त्रितयस्य विनाशनम् ।**

अमला र कटहरको रस समान गुणका हुन्छन् तर पनि अमलाले त्रिदोष नाश गर्दछ, यो अमलाको प्राकृतिक गुण हो ।

**आमलस्य त्रिदोषास्रपित्तमेहान्विनाशयेत्॥**

अमलाको अर्कले त्रिदोष, रक्तपित्त र प्रमेह नाश गर्दछ ।


आमलकी | Phyllanthus emblica L., payer.de/amarakosa

**(ङ) अष्टाङ्ग निघण्टु :**

**...धात्री चामलकी शिवा॥**

... धात्री, आमलकी र शिवा : यी अमलाका नाम हुन् ।

**(च) आयुर्वेद महोदधि :**

**धात्रीदारुश्रृतं तप्तं मलक्षालनयोदकम् (?) । वातपित्तहरं श्रेष्ठं रसायनकरं परम्॥**



अमलाको दाउराले तताइएको मल पखालिएको (?) पानीले वातदोष र पित्तदोष नाश गर्दछ तथा बुढचौली आउन दिँदैन ।

**अम्लेष्वामलकं पथ्यं ...॥**

अमिलोमा अमला दूधसँग खान हुन्छ ।

**हन्ति वातं तदम्लत्वात् पित्तं माधुर्यशैत्यतः । कफं रूक्षकषायत्वात् त्रिदोषशमनं मतम्॥**

अमला अमिलो हुनाले वातविकार नाश गर्दछ । गुलियो र शीतल हुनाले पित्तविकार नाश गर्दछ । रुखो र टर्रो हुनाले कफविकार नाश गर्दछ । यसरी यो दिव्य फलले त्रिदोषलाई नै नाश गर्दछ ।

**अम्लं पित्तकफापहं रुचिकरं शीतं कषायं तथा किञ्चित्स्वादुरसं कषायमधुरं दोषत्रयध्वंसनम् । मुत्रव्याधिहरं प्रमेहशमनं विष्टम्भविच्छेदनं भुक्ताभुक्तहितं सदामृतरसं पथ्यं च धात्रीफलम्॥**

अमला : अमिलो, पित्तविकार नाशक, कफविकार नाशक, रुचिकर, शीतल, टर्रो, केही स्वादिलो, केही गुलियो अर्थात् मिठो-टर्रो हुन्छ । यसले त्रिदोष नाश गर्दछ । मूत्ररोग र प्रमेह नाश गर्दछ । विष्टम्भलाई ठिक गर्दछ । खाना खानुभन्दा अघि वा पछि जतिखेर खाएपनि यो पथ्य अमृततुल्य हुन्छ ।

**तिक्तं स्वादुकषायमम्लकटुकं स्निग्धं रसे रोचनं चक्षुष्यं बलवर्णदं धृतिकरं वृष्यं च बुद्धिप्रदम् ।**
**कण्डूकुष्ठविनाशनं ज्वरहरं तृड्दाहतापापहं जातं किं बहुना त्रिदोषशमनं धात्रीफलं प्राणिनाम् ॥**

अमलामा तितो, गुलियो, टर्रो, अमिलो र पिरो रस हुन्छ । यो चिल्लो, रुचिकारक, आँखाका लागि लाभकारी, तागतिलो, वर्णमा निखार लेराउने, धैर्यवर्धक, वीर्यवर्धक र बुद्धिवर्धक हुन्छ । यसले शरीर चिलाउने, कुष्ठरोग, जरो, तिर्खा, डाह र पीर नाश गर्दछ । यसका गुणका बारेमा धेरै कुरा के गर्नु, यसले त्रिदोष नाश गर्दछ र मानिसका लागि सदा हितकर मानिन्छ ।

### (छ) कैयदेव निघण्टु :

**जातीफलरसा सीधुरसा सीधुफला तथा । वयःस्था चामृतफला तिष्या तिष्यफलाऽमृता ॥**
**धात्री वृष्या वृष्यफला दिव्या राधामृतोद्भवा ।**
**धात्रीफलं शीतफलं निष्कं(तिष्यं) रसफलं मतम् ॥**
**श्रीफलश्चामृतफलं कोलकामलकं शिवम् । शृङ्गी धात्री चामलकी शुक्तिः शुष्कामलक्यपि ॥**
**तद्वद् धात्री स्वेदमेदोहराम्ला शुक्रला हिमा । भग्न सन्धानकृत् केश्या पिपासाकफपित्तहृत् ॥**
**तन्मज्जा तुवरः स्वादुस्तृट्छर्द्यनिलपित्तहा । हन्ति वातं तदम्लत्वात् पित्तं माधुर्यशैत्यतः ॥**
**कफं रूक्षकषायत्वात् फलेभ्योऽभ्यधिकं मतम् । चक्षुष्यं सर्वदोषघ्नं वृष्यमामलकीफलम् ॥**


तिष्यफला | Phyllanthus emblica L., payer.de/amarakosa

जातीफरसा, सीधुरसा, सीधुफला, वयस्था, अमृतफला, तिष्या, तिष्यफला, अमृता, धात्री, वृष्या, वृष्यफला, दिव्या, राधा, अमृतोद्भवा, धात्रीफल, शीतफल, निष्क (तिष्य), रसफल, श्रीफल, अमृतफल, कोलक, अमलक र शिव तथा शृङ्गी, धात्री, आमलकी, शुक्ति र शुष्कामलकी : यी अमलाका नाम हुन् । अमलाले मसिना र बोसो नाश गर्दछ । यो अमिलो, शुक्रवर्धक र शीतवीर्यको हुन्छ । यसले भाँचिएका वा फुटेका भाग जोड्दछ । यो कपालका लागि हितकर तथा तिर्खा, कफविकार र पित्तविकार नाशक हुन्छ । यसको फलभित्रको गुदी टर्रो र गुलियो हुन्छ । यसले तिर्खा, वाकवाकी, वातविकार र पित्तविकार नाश गर्दछ । अमलामा रहेको अमिलोपनले वातविकार, गुलियोपन र शीतवीर्यले पित्तविकार, तथा रुखोपन र टर्रोपनले कफविकार नाश गर्दछ । यो फलमध्येमा अधिक गुनिलो हुन्छ भनी मानिन्छ । अमलाको फल आँखाका लागि हितकर, सबै दोष नाशक र वीर्यवर्धक हुन्छ ।

### (ज) द्रव्यगुण सङ्ग्रह :

**धात्री तद्वद्विशेषेण वृष्या शीतैव वीर्यतः ॥**

**हन्ति वातं तदम्लत्वात् पित्तं माधुर्यशैत्यतः । कफं कटुकषायत्वात् फलेभ्योऽप्यधिकं च तत्॥**

अमला विशेषतः वीर्यवर्धक हुन्छ । यो शीतवीर्यको हुन्छ । यसमा हुने अमिलोपनले वातविकार, गुलियो र शीतपनले पित्तविकार तथा पिरो र टर्रोपनले कफविकार नाश गर्दछ । यो फलहरूमा उत्तम फल हो ।

### (झ) धन्वन्तरि निघण्टु :

**वयःस्थाऽऽमलकं वृष्यं जातीफलरसं शिवम् । धात्रीफलं श्रीफलं च तथाऽमृतफलं स्मृतम्॥**
**कषायं कटुतिक्तोष्णं (क्ताम्लं) स्वादु चाऽऽमलकं हिमम् ।**
**सरं त्रिदोषहृद्वृष्यं ज्वरघ्नं च रसायनम्॥**
**हन्ति वातं तदम्लत्वात्पित्तं माधुर्यशैत्यतः । कफं रूक्षकषायत्वात्फलं धात्र्यास्त्रिदोषजित्॥**

वयस्था, आमलक, वृष्य, जातीफलरस, शिव, धात्रीफल, श्रीफल र अमृतफल : यी अमलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, पिरो, तीतो, अमिलो र गुलियो हुन्छ । यो शीतवीर्यको, मलमूत्रलाई तलतिर सार्ने, त्रिदोष नाशक, वीर्यवर्धक, जरो नाशक र रसायनी हुन्छ । यसमा रहेको अमिलोले वातविकार, गुलियो र शीतवीर्यले पित्तविकार, रुखोपन र टर्रोले कफविकार गरी अमलाले त्रिदोषलाई नाश गर्दछ ।


वयस्था | Phyllanthus emblica L., payer.de/amarakosa

### (ञ) निघण्टु रत्नाकर (शा.नि.) :

**आमलस्य फलं शुष्कं तिक्तमम्लं कटु स्मृतम् । मधुरं तुवरं केश्यं भग्नसन्धानकारकम्॥**
**धातुवृद्धिकरं नेत्र्यं लेपनात्कान्तिकारकम् ।**
**पित्तकफतृषाघर्मं मेदोरोगविषं तथा ।**
**त्रिदोष नाशयत्येव पूर्वाचार्यैर्निरूपितम्॥**

सुकेको अमलाको फल तीतो, अमिलो, पिरो, गुलियो र टर्रो हुन्छ । यो कपालका लागि हितकर, भाँचिएको हाड वा च्यातिएको मासु जोड्ने, धातुवर्धक, आँखाका लागि हितकर, लेप बनाएर दल्दा शरीरको कान्ति बढाउने तथा पित्तविकार, कफविकार, तिर्खा लागिरहने रोग, पसिना आउने रोग, बोसोविकार, विषविकार, र त्रिदोष नाश गर्दछ भनी पहिलेका आचार्यहरूले बताएका छन् ।

### (ञ) निघण्टुशेष :

**आमलक्यां शिवा धात्री वयःस्था षड्रसाऽमृता । पर्वकीटा तिष्यफला माकन्दी श्रीफला च सा॥**

आमलकी, शिवा, धात्री, षड्रसा, अमृता, पर्वकीटा, तिष्यफला, माकन्दी र श्रीफला : यी अमलाका नाम हुन् ।

**(ट) पर्याय रत्नमाला :**


अमला, 1mg.com, Acharya Balkrishna

**धात्री कर्षफला तिष्या**
**वयःस्थामलकी शिवा ॥**

धात्री, कर्षफला, तिष्या, वयस्था, आमलकी र शिवा : यी अमलाका नाम हुन् ।

**(ठ) भावप्रकाश निघण्टु :**

**वयस्थामलकी वृष्या जातीफलरसं शिवम् ॥**
**धात्रीफलं श्रीफलं च तथामृतफलं स्मृतम् । त्रिष्वामलकमाख्यातं धात्री तिष्यफलाऽमृता ॥**

वयस्था, आमलकी, वृष्या, जातीफल, रस, शिवम्, धात्रीफल, श्रीफल, अमृतफल, तिष्यफल र अमृता अमलाका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**हरीतकीसमं धात्रीफलं किन्तु विशेषतः । रक्तपित्तप्रमेहघ्नं परं वृष्यं रसायनम् ॥**
**हन्ति वातं तदम्लत्वात्पित्तं माधुर्यशैत्यतः । कफं रूक्षकषायत्वात्फलं धात्र्याः त्रिदोषजित् ॥**

बरोंमा हुने गुण अमलामा पनि हुन्छन् । विशेषतः यो रक्तपित्त (मुख, नाक, योनी आदिबाट रगत बग्ने एक किसिमको रोग) र प्रमेह (पिसाबबाट विभिन्न धातु एवं वीर्य वा रज मिसिएर निस्कने र गनाउने रोग) निको पार्ने गुणको हुन्छ । अमला अत्यधिक धातुवर्धक रसायन युक्त फल हो । अमलामा हुने अमिलोले वायुलाई, गुलियो एवं चिसोपनले पित्तलाई र रुखो एवं टर्रोले कफलाई नियन्त्रण गर्दछ । त्यसैले यो फललाई त्रिदोष हर्ने फल भनिन्छ ।

**(ड) मदनपाल निघण्टु :**

**धात्रीफलाऽमृतफलाऽऽमलकं श्रीफलं शिवम् । तद्वद्धात्रीफलं वृष्यं विशेषाद्रक्तपित्तजित् ॥**
**अम्लत्वात्पवनं हन्ति पित्तं माधुर्य्यशैत्यतः । कफं रूक्षकषायत्वात्तस्मात्किमधिकं फलम् ॥**

अमलाका धात्रीफल, अमृतफल, आमलकं, श्रीफलं र शिवम् पर्यायवाची नामहरू हुन् । अमलाले आयु बढाउँदछ र विशेषगरी रक्तपित्त रोगलाई नाश गर्दछ । यसमा भएको अमिलो रसले वायुदोषलाई नाश गर्दछ भने गुलियो रस र चिसोपनले पित्तदोषलाई नाश गर्दछ । यसैगरी यसमा हुने टर्रो रसले कफदोषलाई नाश गर्दछ, यसभन्दा उत्तम अरु कुन फल होला र ! ।

## (ढ) मदनादि निघण्टु :

**धात्रीफलं त्वामलकं जातीरसफलं शिवम् । कोलं लाक्षामृतफलं श्रीफलञ्चामृतोद्भवम् ॥**
**कफपित्तहरं वृष्यम्मम्लमामलकं मतम् । भेदनं मधुरं पाके रुच्यो वीर्यो हिमं मृदु ॥**

धात्रीफल, आमलक, जातीरसफल, शिव, कोल, लाक्षामृतफल, श्रीफल र अमृतोद्भव : यी अमलाका नाम हुन् । अमला कफविकार र पित्तविकार नाशक, वीर्यवर्धक, अमिलो, भेदनी, पचेपछि गुलियो, रुचिप्रद, शीतवीर्यको र कोमल फल हो ।

## (ण) राज निघण्टु :

**आमलकी वयस्था च श्रीफला धात्रिका तथा । अमृता च शिवा शान्ता शीताऽमृतफला तथा ॥**
**जातीफला च धात्रेयी ज्ञेया धात्रीफला तथा । वृष्या वृत्तफला चैव रोचनी च चतुर्दश ॥**
**आमलकं कषायाम्लं मधुरं शिशिरं लघु । दाहपित्तवमीमेहशोफघ्नं च रसायनम् ॥**
**कटु मधुरकषायं किञ्चिदम्लं कफघ्नं रुचिकरमतिशीतं हन्ति पित्तास्रतापम् ।**
**श्रमवमनविबन्धाध्मानविष्टम्भदोषप्रशमनममृताभं चामलक्याः फलं स्यात् ॥**

(१) आमलकी, (२) वयस्था, (३) श्रीफला, (४) धात्रिका, (५) अमृता, (६) शिवा, (७) शान्ता, (८)




अमलाको बिरुवा (तस्बिर श्रोत : "Iidigenous Plants At Biodiversity Park, Ranchi" नामक पुस्तक

शीता, (९) अमृतफला, (१०) जातीफला, (११) धात्रेयी, (१२) धात्रीफला, (१३) वृष्या, (१४) वृत्तफला र (१५) रोचनी : यी पन्ध्र (चौध भनिएको) नाम अमलाका संस्कृत पर्यायवाची नामहरू हुन् । अमला टर्रो, अमिलो, गुलियो, शीतवीर्यको र पचाउन सहज हुने गुणको हुन्छ । यसले डाह, पित्तविकार, वाकवाकी, प्रमेह र सुजन नाश गर्दछ । यो रसायनी हुन्छ । यो पिरो, गुलियो, टर्रो र केही अमिलो तथा कफविकार नाशक हुन्छ । अमला रुचिप्रद, अति नै शीतवीर्यको तथा पित्तविकार र रक्तविकारले गर्ने डाह नाशक हुन्छ । यसको फलले थकाई, वाकवाकी, कब्जियत, आध्मान र विष्टम्भलाई शान्त पार्दछ ।

## (त) राजवल्लभ निघण्टु :

**तद्वद्धात्री विशेषेण वृष्या शीतैव वीर्यतः । हन्ति वातं तदम्लत्वात् पित्तं माधुर्यशैत्यतः ॥**
**कफं रूक्षकषायत्वात् फलेभ्योप्याधिकं हि तत् । आदावन्ते च मध्ये च भोजनस्य प्रशस्यते ॥**
**निवत्ययं दोषहरं फले त्वामलकीफलम् ।**

अमला विशेषतः वीर्यवर्धक र शीतवीर्यको हुन्छ । यसको अमिलोपनले वातविकार, शीतता र गुलियोपनले पित्तविकार तथा रुखोपन र टर्रोपनले कफविकार नाश गर्दछ । फलमध्येमा यो श्रेष्ठ फल हो । खाना खाँदा अगाडि, बीचमा वा पछाडि अमला खानु फाइदाजनक हुन्छ । दोष नाश गर्नुपर्दा अमलाको फल लिनू , यो फल दोष नाशक हुन्छ ।

**...मज्जा तृट्छर्दिकफवातहरा लघुः । कषाया मेदकृच्चापि धात्रीमज्जापि तद्गुणा ॥**

अमलाका गेडा भित्रको गुदीले तिर्खा, वाकवाकी, कफविकार र वातविकार नाश गर्दछ । यो पचाउन सहज हुन्छ ।

**(थ) शालिग्राम निघण्टु :**

**आमलकी पचरसा श्रीफली धात्रिका शिवा । अकरामृता वयस्था च वृष्या तिष्यफला तथा ॥**

आमलकी, पचरसा, श्रीफली, धात्रिका, शिवा, अकरा, अमृता, वयस्था, वृष्या र तिष्यफला : यी अमलाका नाम हुन् ।

**आमलक्याः फल किञ्चित्कटुक स्वादु तिक्तकम् । अम्लं च तुवरं शीतं जराव्याधिविनाशनम् ॥**
**वृष्यं केश्यं सारकञ्च हितं चारुचिनाशकम् । रक्तपित्तं प्रमेहञ्च विष जूर्तिं वमिं तथा ॥**
**आध्मान वद्धविट्कत्वं शोथं शोषं तृषां तथा । रक्तस्य विकृतिं चैव त्रिदोषं चैव नाशयेत् ॥**
**अम्लत्वाद्वातहं प्रोक्त माधुर्याच्चैव शीततः । पित्तनाशकरं चोक्तं रूक्षत्वाच्च कषायतः ॥**
**कफनाशकर प्रोक्तं पूर्वैर्विद्याविशारदैः ।**


अमला (तस्बिर : दिपेश प्याकुरेल, NEHHPA)

अमलाको फल केही पिरो, गुलियो, तीतो, अमिलो र टर्रो हुन्छ । यो शीतवीर्यको, बुढ्यौली र रोग नाशक, वीर्यवर्धक, कपालका लागि हितकर, मलमूत्रलाई तलतिर सार्ने, हितकारी तथा अरुची, रक्तपित्त, प्रमेह, विषविकार, जरो, वाकवाकी, आध्मान, कब्जियत (गोटा परेको), सुजन, सुकेनाश, तिर्खा, रक्तविकार र त्रिदोष नाशक हुन्छ । अमलामा रहेको अमिलोपनले वातविकार, गुलियो र शीतवीर्यले पित्तविकार तथा टर्रोपन र रुखोपनले कफविकार नाश गर्दछ पनि पहिलेका विद्वानहरूले बताएका छन् ।

**तन्मज्जा प्रदरच्छर्दिवातपित्तज्वरापहा । कषाया मधुरा वृष्या श्वासकासनिवर्हणा ॥**

यसको काठको गुदी वा गेडाभित्रको गुदी (मज्जा) ले प्रदर, वाकवाकी, वातविकार, पित्तविकार र जरो नाश गर्दछ । यो टर्रो, गुलियो, वीर्यवर्धक, दम नाशक र खोकी नाशक हुन्छ ।

(द) **सरस्वती निघण्टु :**

**धात्री स्वादुफलाऽधीतफलाऽमृतफला शिवा । आमण्डकी पञ्चरसाऽमलकी चतुवर्धनी ॥**

धात्री, स्वादुफला, अधीतफला, अमृतफला, शिवा, आमण्डकी, पञ्चरसा, आमलकी र चतुवर्धनी : यी अमलाका नाम हुन् ।

(ध) **सोढल निघण्टु :**

**धात्रीफले श्रीफलं च तथामृतफलं शिवम् ॥**
**वयःस्थामलकं वृष्यं जातीफलरसं तथा । अमृतामण्डकं शीतफलं वर्षफलं स्मृतम् ॥**

धात्रीफल, श्रीफल, अमृतफल, शिव, वयस्था, आमलक, वृष्य, जातीफलरस, अमृता, मण्डक, शीतफल र वर्षफल : यी अमलाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

(न) **सौश्रुत निघण्टु :**



**आमलकी कर्षफला धात्री सीधुफलेति च । आमण्डकी तिष्यफला नामज्ञैः परिकीर्तिता ॥**

आमलकी, कर्षफला, धात्री, सीधुफल, आमण्डकी र तिष्यफला : यी अमलाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

(प) **हृदयदीपक निघण्टु :**

**शृङ्गी धात्री त्वामलकी शुक्तिः**
**शुष्कामलक्यपि ।**

शृङ्ग, धात्री र आमलकी : यी अमलकाका तथा शुक्ति र शुष्कामलकी : यी सुकेको अमलाका नाम हुन् ।


अमलाको सुकुटी (तस्विर : दिपेश प्याकुरेल, NEHHPA)

**धात्री त्वामलकी शिवा ॥**

...धात्री, आमलकी र शिवा : यी अमलाका नाम हुन् ।

## आमलक्यादि गण
## (Aamalakyaadi-Gana)

**(क) सुश्रुत संहिता :**

**आमलकीहरीतकीपिप्पल्यश्चित्रकश्चेति॥**
**आमलक्यादिरित्येष गणः सर्वज्वरापहः। चक्षुष्यो दीपनो वृष्यः कफारोचकनाशनः॥**

अमला, हर्रो, पिप्ला र चितू : यी ओखतीको समूहलाई आमलक्यादि गण भनिन्छ। यो गणको ओखतीले जरो नाश गर्दछ। यो आँखाका लागि हितकर तथा दीपनी र शरीर वर्धक हुन्छ। यसले कफविकार र अरुचि नाश गर्दछ।

# आमाशय
# (Stomach)

**परिभाषा :**

**(क) नेपाली बृहत् शब्दकोश (आमाशय) :**

पेटभित्र खाएको पदार्थ रहने थैली; पाकस्थली ।

**(ख) डा.सतिश चन्द्र साङ्ख्यधर :**

आमाशयलाई अंग्रेजीमा Stomach भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**नाभिस्तनान्तरं जन्तोरामाशयः इति स्मृतः ॥**

नाइटो र स्तनका बीचमा रहेको पेटको भित्री भागलाई आमाशय भनिन्छ ।

**(ख) शार्ङ्गधर संहिता :**

**श्लेष्माशयः स्यादुरसि तस्मादामाशयस्त्वधः ॥**



छाती कफको आशयस्थल हो । त्योभन्दा केही तल “आम”को आशयस्थल हुन्छ । (जहाँ नपचेको अन्न रहन्छ त्यसलाई आमाशय भनिन्छ) ।

# आम्र (आँप)
# (Mango)

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश : (१) अमोठ : पाकेका आँपको गुदी सुकाएर बनाइएको माडा; आँपको माडा; अम्मट; अमोट । (२) अम्चुर : काँचो आँपको सुकेका चाना कुटेर बनाइएको धूलो; काँचो आँपका टुक्राको सुकुटी; अमचुर । (३) आँप : वसन्त ऋतुमा मञ्जरी लाग्ने, फुल्ने र चिचिला फल फल्ने एक जातको बोट वा त्यसैको गुलियो ठूलठूलो फल । (४) आम्र : आँप, आँपको रूख । (५) कपुरी आँप : कपूरझैँ बास्ना आउने आँप; कपुरे आँप । (६) कामायुध : आँपको रूख । (७) काली आँप : मीठो स्वाद भएको असल जातको एक आँप; बोक्रामा कालो-कालो टीका बसेको, सानो कोयो हुने र भुत्रो नहुने महजस्तै स्वादिलो एक आँप; लङ्गडा आँप । (८) काली बम्बई : बम्बई आँपको एक प्रकार; असल जातको आँप । (९) कृष्णभोग : एक जातको असल आँप । (१०) खोयो : आँपको कोयो । (११) भुत्रे आँप : गुदीमा भुत्रा हुने एक प्रकारको आँप । (१२) थेपे : विभिन्न प्रकारका मरमसला हाली बनाइएको आँपको स्वादिष्ठ दबदबे अचार । (१३) बम्बई आँप : एक प्रकारको असल आँप । (१६) रसाल : आँप । (१७) राजआँप : ठूलोखाले फल फल्ने एक थरी आँप, राजाम्र । (१८) लहरे आँप : लहरामा फल्ने टमाटरका आकारका एक जातको आँप । (१९) लोहोरे आँप : लोहोरोजस्तो देखिने एक जातको आँप । (२०) सब्जाः असल जातको बम्बई आँपको एक प्रकार । (२१) सहकार : आँपको वृक्ष । (२२) सिँदुरे आँप : भेट्नापट्टिको बोक्रामा सिँदुरको जस्तो रङ हुने आँप ।


आम्रः | *Mangifera indica* J. König ex L. 1753 - Real Mango - Mango, payer.de/amarakosa

(ख) भावप्रकाश निघण्टु : (१) काँचो आँपलाई बोक्रो ताछेर घाममा धेरै सुकाई बनाइने धुलो वा चानालाई अम्चुर भनिन्छ । (२) पाकेका आँपलाई निचोरी निकालिएको रस सफा कपडामा राखेर घाममा सुकाउनू । जब सुक्दछ त्यसमाथि पुनः रस हालेर सुकाउनू । यसो गर्दा गर्दा जब त्यहाँ बाक्लो पत्र बन्दछ त्यो पत्रलाई "आम्रावर्त्त" (अमोठ) भनिन्छ ।

(ग) डा. चुनेकर : आँपलाई अंग्रेजीमा Mango र ल्याटिन भाषामा *Mangifera indica* Linn. भनिन्छ ।

(घ) द आयुर्वेदिक फर्माकोपिया अफ इण्डिया : यो Anacardiaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Mangifera indica* Linn. हो । यसको बीजको धुलो १-२ ग्राम, रूखका बोक्राको धुलो ३-६ ग्राम, बोक्राको काँढापानी २०-५० ग्राम, यसको डाँठको धुलो १-३ ग्राम र यसको जरा ५-१० ग्राम ओखतीको मात्रा हुन्छ ।

(ङ) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : यो Angiosperm समूह अन्तर्गतको Anacardiaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Mangifera indica* Linn. हो ।

(च) Nepal : Fruit Development Project Volume 1: Final Main Report, Government of Nepal, June, 2017 : नेपालमा मुख्यतः १५ जातका आँप हुन्छन् ।

विश्वभर स्थानीय र कलमी गरिएका गरी १ हजार भन्दा बढी आँपका जात पाइन्छन् ।



विभिन्न जातका आँपहरू, रैथाने नमक फेसबुक वाल

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**वातमोमायोनिः सहकारो राजपुत्रकश्चूतः । कामोद्भवनः श्रीमान् सुगन्धिकः पिण्डरीकश्च ॥**
**शिश्विष्टः कामाङ्गः परपुष्टमदोत्सवो रसालश्च । मधुराश्रयः स्मराङ्गः पर्यायैराम्रराजः स्यात् ॥**

वातमामोयांनं, सहकार, राजपूत्रक, चूत, कामोद्भवन, श्रीमान्, सुगांन्धक, पिण्डरांक, शिवांशष्ट, कामाङ्ग, परपुष्ट, मदोत्सव, रसाल, मधुराश्रय, स्मराङ्ग (कामदेव) र यसका पर्याय र आम्रराज : यी आँपका नाम हुन् ।

**आम्रश्चूतो वनजो वसन्तदूतस्तथा महावृक्षः ।**
**चुञ्चीवानस्थिफलः प्रियचुञ्चिक उच्यते निखण्डुज्ञैः ॥**

आम्रश्चूत, वनज, वसन्तदूत, महावृक्ष, चुञ्चीवान, अस्थिफल र प्रियचुञ्चिक : यी आँपविशेषका वा आँपको रूखका नाम हुन् ।

**प्रोक्ताभिषुका टङ्का सुगन्धिनी गन्धपत्रिकात्यम्ला ।**
**जटिलफला निम्नफला गन्धवती जाहिणी च राजाम्रा ॥**

अभिषुक्ता, टङ्का, सुगन्धिनी, गन्धपत्रिका, अत्यम्ला, जटिलफला, निम्नफला, गन्धवती, जाहिणी र राजाम्रा : यी कलमी आँपका नाम हुन् ।

**क्षुद्राम्रो जतुवृक्षो लाक्षावृक्षो घनस्कन्धः । कृमिवृक्षश्च सुकाशः सरक्तको रक्तकोशाम्रः ॥**

क्षुद्राम्र, जतुवृक्ष, लाक्षावृक्ष, घनस्कन्ध, कृमिवृक्ष, सुकाश, सरक्तक र रक्तकोशम्र : यी बिज्जु आँपका नाम हुन् ।

**(ख) अभिधान रत्नमाला :**



**आम्रश्चूतः श्यावतैलः कान्तपिण्डफलश्च सः । रसालः सहकारश्च फलपुष्पमहोत्सवः ॥**

आम्रश्चूत, श्यावतैल, कान्त, पिण्डफल तथा रसाल, सहकार र फलपुष्पमहोत्सव : यी आँप वा आँपको रूखका नाम हुन् ।

**(ग) अमरकोश :**

**आम्रश्चूतो रसालोऽसा सहकारोऽतिसौरभः ॥**

आम्र, चूत र रसाल : यी आँपका तथा सहकार र (अतिसौरभ ?) : यी अति बास्ना आउने आँपका नाम हुन् ।

**(ग) अष्टाङ्ग निघण्टु :**

**आम्रश्चूतश्चावतलः कान्तः पिण्डफलस्तथा । वसन्तदूती माकन्दा भृङ्गेष्टा कोकिलप्रिया ॥**
**रसालद्रुः सहकारः सौरभः कोकिलप्रियः ।**

आमश्चूत, अवतल, कान्त, पिण्डफल, वसन्तदूती, माकन्दा, भृङ्गेष्टा, कोकिलप्रिया, रसालद्रु, सहकार, सौरभ र कोकिलप्रिय : यी आँप वा आँपको रूखका नाम हुन् ।

**(घ) आयुर्वेद महोदधि :**

**...आम्रजैः काष्ठैः तप्तं वारिं तडागजम् । मेधाबलप्रदं वीर्यकृमिदोषविनाशनम्॥**

आँपको दाउराले तताइएको "तडाग" जलले सम्झना शक्ति र बल बढाउनुका साथै वीर्य र कीराको दोष नाश गर्दछ ।

**बालं पित्तकफास्रवातजननं बद्धास्थि तादृग्विधं पक्वं स्वादुतरं त्रिदोषशमनं क्षीणाङ्गपुष्टिप्रदम्॥**
**धातोर्वृद्धिकरं विपाकमधुरं सन्तर्पणं कान्तिदं तृष्णाशोषनिवारणं रुचिकरं त्वाम्रं फलेषूत्तमम्॥**

काँचो आँपले पित्त, कफ र रक्तपित्त बढाउँदछ । कोया लाग्ने बेलासम्मको आँपमा पनि यिनै गुण हुन्छ । तर जब पाक्दछ तब स्वादिलो, त्रिदोषनाशक र खिइएका अङ्गलाई पुष्ट पार्ने गुणको हुन पुग्दछ । यसले शरीरका धातु बढाउँदछ, पकेपछिको रस गुलियो हुन्छ, तृप्त पार्दछ र शरीरमा चमक दिन्छ । पाकेको आँपले तिर्खा र सुकेनास नाश गर्नुका साथै रुचिकारक हुन्छ । यसलाई फलहरूमा उत्तम फल मानिन्छ ।

**सन्तर्पणो यः सकलेन्द्रियाणां बलप्रदो वृष्यतमश्च हृद्यः ।**
**स्त्रीषु प्रहर्षं विपुलं ददाति फलाधिराजः सहकार एव॥**

पाकेको आँपले सबै इन्द्रियलाई तृप्त पार्दछ । यो तागतिलो, अति वीर्यवर्धक र हृदयका लागि लाभदायक हुन्छ । यसले अति नै कामशक्ति बढाउँदछ । आफ्ना उत्तम गुणले गर्दा आँपलाई फलफूलको राजा भन्ने गरिन्छ ।

**आम्रं काले विपक्वं मधुरहिमरसं त्वीषदम्लं च हृद्यं**
**रेतोवृद्धिं विधत्ते शमयति पवनं पाचनं दीपनं च ।**
**आनन्दं यद्ददाति प्रतिदिशति बलं वीर्यतः संस्तुतं यद्**
**विख्यातं सर्वलोके ह्यतिजनितकफं दुर्जरं कीर्तयन्ति॥**



पाक्नुपर्ने बेलामा पाकेको आँप गुलियो, केही अमिलो, हृदयलाई मन पर्ने, शुक्रवर्धक, वातविकार नाशक, पाचन र दीपन हुन्छ । यो खाँदा खुब आनन्द आउँदछ र विशेषतः बल एवं वीर्यलाई बढाउँदछ । यो फल संसारभर प्रख्यात छ । केही आचार्यले यो फल अति नै कफवर्धक र पचाउन कठिन हुन्छ पनि भनेका छन् ।

(ङ) **कैयदेव निघण्टु :**

**आम्रश्चूतश्चैत्रवृक्षो वनपुष्पोत्सवः स्मृतः । सहकारो मन्मथः स्यात् कामाङ्गः श्यामतैलकः॥**
**शिलीष्टः सुपथामदो शिष्टः पिकमहोत्सवः । मनोरथो मद्यसहो माकन्दः शौण्डिकप्रियः॥**
**पिण्डीफलो रसालः स्यात् परपुष्टोऽतिसौरभः । कान्तः कोकिलबन्धूश्च स्यात् समन्वितकार्यपि॥**

आम्र, चूत, चैत्रवृक्ष, वनपुष्पोत्सव, सहकार, मन्मथ, कामाङ्ग, श्यामतैलक, शिलीष्ट, सुपथामद, शिष्ट, पिकमहोत्सव, मनोरथ, मद्यसह, माकन्द, शौण्डिकप्रिय, पिण्डीफल, रसाल, परपुष्ट, अतिसौरभ, कान्त, कोकिलबन्धू र समन्वितकार्य : यी आँपका नाम हुन् ।

**रसालस्तुवरो रूक्षो रक्तपित्तकफव्रणान् । योनिदोषमतीसारं प्रमेहं सन्नियच्छति॥**

आँप टर्रो, रुखो तथा रक्तपित्त, कफविकार, खटिरा, स्त्री-जननेन्द्रियका रोग, अतिसार र प्रमेहलाई शान्त पार्ने गुणको हुन्छ ।

**कफपित्तप्रशमनं रुच्यमाम्रस्य पल्लवम् ।**

आँपको पालुवा कफविकार र पित्तविकारलाई शान्त पार्ने तथा रुचि बढाउने गुणको हुन्छ ।

**आम्रपुष्पमतीसारं प्रमेहं दुष्टशोणितम्॥ कफपित्तहरं शीतं रुचिकृद् ग्राहि वातलम् ।**

आँपको फूलले अतीसार, प्रमेह, बिग्रेको रगत, कफविकार र पित्तविकार नाश गर्दछ । यो शीतवीर्यको, रुचिप्रद, ग्राहि र वातविकार बढाउने गुणको हुन्छ ।

**बालं तस्य फलं रूक्षं कषायकटुकाम्लकम्॥ वातपित्तास्रकृद् यत्तु बद्धास्थि कफपित्तकृत् ।**

आँपको चिचिलो फल रुखो, टर्रो, पिरो र अमिलो हुन्छ । यसले वातविकार, पित्तविकार र रक्तविकार गर्दछ । कोया छिप्पिएको तर नपाकेको आँपले कफविकार र पित्तविकार गर्दछ ।

**पक्वं तु मधुरं साम्लं गुरु स्निग्धमपित्तलम्॥**
**वातघ्नं बृंहणं रुच्यं हृद्यं मांसबलप्रदम् । कषायानुरसं व्रण्यं कफशुक्रविवर्धनम्॥**

पाकेको आँप गुलियो, अमिलो, पचाउन कठिन, चिल्लो, पित्तविकार गर्ने, वातविकार नाश गर्ने, पौष्टिक, रुचिप्रद, मुटुका लागि हितकर तथा मासु र बल बढाउने गुणको हुन्छ । यसको पछिल्लो स्वाद टर्रो हुन्छ । यसले खटिरा निकाल्न सक्दछ । यस्तो आँपले कफ र शुक्र बढाउँदछ ।



**शुष्कं कषायमुष्णं च भेदनं कफजित् ।**

सुकेको आँप टर्रो, उष्णवीर्यको, भेदनी र कफविकारलाई जित्ने गुणको हुन्छ ।

**सहकाररसोहृद्यः सुरभिः स्निग्धरोचनः॥**

सहकार (आँप) को रस मुटुका लागि हितकर, मनमोहक, चिल्लो र रुचिप्रद हुन्छ ।

**त्वच्यः प्रलेपनेऽभ्यङ्गे केश्यो रौक्ष्यमलापहः ।**

आँपको बोक्रा (रूखको) लेप बनाएर लगाउनाले कपाललाई फाइदा गर्दछ । यसले रुखोपन र मल नाश गर्दछ ।

**रूक्षश्चूतस्य सङ्ग्राही कृमिवातप्रकोपणः॥**

रुखो (सुकेको) आँप ग्राही तथा कीरा र वातविकार बढाउने गुणको हुन्छ ।

**कषायमधुरो मज्जा, ग्राहिणी त्वक् च दाहनुत् ।**

आँपका रूखको चुरो वा आँपको कोया भित्रको गुदी ग्राहि हुन्छ । यसको खोल (कोया) ले डाह नाश गर्दछ ।

**सहकारभवं तैलं कषायं स्वादुतिक्तकम्॥ मुखरोगहरं रूक्षं सुगन्धि श्लेष्मवातजित्।**

सहकार (आँप) को तेल टर्रो, गुलियो र तीतो हुन्छ । यसले मुखका रोग नाश गर्दछ । यो रुखो र सुगन्धी हुन्छ । यसले कफविकार र पित्तविकारलाई जित्दछ ।

**मुखरुग्घ्नं चूततैलं सुगन्धि कफवातजित्। रूक्षं कषायमधुररसवन्नाति पित्तलम्॥**

आँपको तेलले मुखका रोग नाश गर्दछ । यो सुगन्धि, कफविकार र वातविकारलाई जित्ने, रुखो, टर्रो, गुलियो तथा कम पित्तविकार गर्ने गुणको हुन्छ ।

(च) **द्रव्यगुणसङ्ग्रह :**

**आम्रं बालं रक्तपित्तकरं मध्यं तु पित्तलम्। पक्वं वर्णकरं रुच्यं मासंशुक्रबलप्रदम्॥**
**पित्ताविरोधि वातघ्नं हृद्यं गुर्वनुलोमनम्। आम्रपेशीकषायाम्ला भेदिनी कफवातजित्॥**

आँपको चिचिलोले रक्तपित्त गर्दछ । छिप्पिएको तर नपाकेको आँपले पित्तविकार गर्दछ । पाकेको आँप शरीरको वर्णमा निखार लेराउने, रुचिप्रद तथा मासु, शुक्र र बल दिने गुणको हुन्छ । यो पित्तको अविरोधी, वातविकार नाशक, मुटुका लागि हितकर, पचाउन कटिन र अनुलोमनी हुन्छ । सुकेको आँप (आँपको सुकाइएको चाना, माड वा धुलो, आम्रपेशी) टर्रो, अमिलो, भेदनी तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ ।

(छ) **धन्वन्तरि निघण्टु :** 

**आम्रश्चूतो रसालश्च कीर(रे)ष्टो मदिरासखः। कामाङ्गः सहकारश्च परपुष्टो मदोद्भ(त्स)वः॥**

आम्र, चूत, रसाल, कीर(रे)ष्ट, मदिरासख, कामाङ्ग, सहकार, परपुष्ट र मदोद्भ(त्स)व : यी आँपका नाम हुन्।

**आम्रो रसालो माकन्दः कामाङ्गः पिकबान्धवः। वनपुष्पोत्सवश्चूतः परपुष्टो मदोद्भवः॥**
**मधुश्चू(चू)तो मधुफलः सुफलो मदिरासखः। वसन्तपादपोऽसौ तु सहकारोऽतिसौरभः॥**

आम्र, रसाल, माकन्द, कामाङ्ग, पिकबान्धव, वनपुष्पोत्सव, चूत, परपुष्ट, मदोद्भव, मधुश्चू(चू)त, मधुफल, सुफल, मदिरासख, वसन्तपादप, सहकार र अतिसौरभ : यी पनि आँपका नाम हुन्।

**बालं कषायं कट्वम्लं रूक्षं वातास्रपित्तकृत्। सम्पूर्णमाम्रमम्लं च रक्तपित्तकफप्रदम्॥**
**हृद्यं वर्णकरं रुच्यं रक्तमांसबलप्रदम्। कषायानुरसं स्वादु वातघ्नं बृंहणं गुरु॥**

आँपको चिचिलो टर्रो, पिरो, अमिलो, रुखो तथा वातविकार,रक्तविकार र पित्तविकार गर्ने गुणको हुन्छ । छिप्पिएको (तर नपाकेको) सबै खालको आँप अमिलो तथा रक्तपित्त र कफविकार गर्ने गुणको हुन्छ । यस्तो आँप मुटुका लागि हितकर, शरीरको वर्णमा निखार लेराउने, रुचिप्रद तथा रगत, मासु र बल बढाउने गुणको हुन्छ । यस्तो आँपको पछिल्लो स्वाद टर्रो र गुलियो हुन्छ । यसले वातविकार नाश गर्दछ । यो पौष्टिक र पचाउन कठिन हुन्छ ।

**पित्तावरोधि सम्पक्वमाम्रं शुक्रविवर्धनम् । मधुरं बृंहणं बल्यं गुरु विष्टम्भ्यजीर्णकृत् ॥**

राम्ररी पाकेको आँप पित्तविकार नाशक, शुक्रवर्धक, गुलियो, पौष्टिक, बलदायक, पचाउन कठिन तथा कब्जियत र अजीर्ण गराउने गुणको हुन्छ ।

**सहकाररसो हृद्यः सुरभिः स्निग्धरोचनः ।**

सहकार आँपको रस मुटुका लागि हितकर, मनमोहक, चिल्लो र रुचिप्रद हुन्छ ।

**त्वङ्मूलपल्लवं ग्राहि कषायं कफपित्तजित् ॥**

आँपको बोक्रा, जरा र पात वा पालुवा ग्राहि, टर्रो तथा कफविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ ।

**क्षुद्राम्रः स्यात्कृमितरुर्लाक्षावृक्षो जतुद्रुमः । सुकोशको घनस्कन्धः कोशाम्रश्च सुरक्तकः ॥**
**कोशाम्रोऽम्लः कटुः पाके वीर्योष्णोऽथानिलापहः । कफपित्तकरो रुच्यः कुष्ठघ्नो रक्तशोधनः ॥**

क्षुद्राम्र, कृमितरु, लाक्षावृक्ष, जतुद्रुम, सुकोशक, घनस्कन्ध, कोशाम्र र सुरक्तक : यी बिज्जु आँपका नाम हुन् । यो आँप अमिलो, पचेपछि पिरो, उष्णवीर्यको र वातविकार नाशक हुन्छ । यसले कफविकार र पित्तविकार गर्दछ । यो रुचिप्रद, कुष्ठनाशक र रगतलाई प्रशोधन गर्ने गुणको हुन्छ ।

**राजाम्र उक्त आम्रान्तो मन्मथोद्भवनस्तथा । टङ्को नीलकपित्थोऽन्यो राजपुत्रो नृपात्मजः ॥**
**राजाम्रयुगलं चाम्लमुष्णवीर्यं च पित्तलम् ॥** 

राजाम्र, आम्रान्त, मन्मथोद्भवन, टङ्क र नीलकपित्थ तथा अर्को राजपुत्र र नृपात्मज : यी कलमी आँपका नाम हुन् । यी दुवै थरी कलमी आँप अमिला, उष्णवीर्यका र पित्तविकार गराउने गुणका हुन्छन् ।

(ज) **निघण्टु रत्नाकर (शा.नि.) :**

**आम्रपुष्प शीतलं स्याद्वातल ग्राहक मतम् । अग्निदीप्तिकर रुच्य कफपित्तप्रमेहनुत् ॥**
**प्रदर चातिसार च नाशयेदिति मे मतम् ।**

आँपको फूल शीतवीर्यको, वातविकार गर्ने, ग्राहि, पाचनशक्ति बढाउने, रुचिप्रद तथा कफविकार, पित्तविकार, प्रमेह, प्रदर र अतिसार नाशक हुन्छ भन्ने मेरो (ग्रन्थकारको) मत छ ।

**बालाम्रस्तुवरश्चोष्णः सुगन्धिश्चाम्लकः स्मृतः । क्षारस्य योगाद्रुचिदो ग्राही रूक्षश्च कान्तिदः ॥**
**पित्तवातकफान्रक्तदोषांश्चैव करोति सः । कण्ठरुग्वातमेहं च योनिदोषव्रणं तथा ॥**
**अतिसारं प्रमेहं च नाशयेदिति कीर्त्तितः ।**

आँपको चिचिलो टर्रो, उष्णवीर्यको, सुगन्धी र अमिलो हुन्छ । कुनै क्षारमा मिसाएर खानाले यो रुचिप्रद, ग्राही, रुखो, शरीरको चमक बढाउने तथा पित्तविकार, वातविकार, कफविकार र रक्तविकार गर्ने गुणको हुन्छ । यस्तो कलिलो आँपले घाँटीका रोग, वातजन्य प्रमेह, स्त्री-जननेन्द्रियका रोग, खटिरा, अतिसार र प्रमेह नाश गर्दछ भनिएको छ ।

**पक्वाम्रो मधुरः शुक्रवर्धकः पौष्टिकः स्मृतः । गुरुः कान्तितृप्तिकरः किञ्चिदम्लो रुचिप्रदः ॥**
**हृद्यो मांसबलानां च वर्द्धकः कफकारकः । तुवरश्च तृषावातश्रमानां नाशकः स्मृतः ॥**

पाकेको आँप गुलियो, शुक्रवर्धक, पौष्टिक, पचाउन कठिन, कान्तिदायक, केही अमिलो, रुचिप्रद, मुटुका लागि हितकर, मासु र बल बढाउने, कफविकार गर्ने, टर्रो तथा तिर्खा, वातविकार र थकाई नाशक हुन्छ ।

**तद्रसो गालितो बल्यो गुरुर्वातहरः सरः । अहृद्यस्तर्पणोऽतीव बृंहण कफवर्द्धनः ॥**

पाकेको आँप निचोरेर निकालिएको रस बलदायक, पचाउन कठिन, वातविकार नाशक, मलमूत्रलाई तलतिर सार्ने, मुटुका लागि फाइदा नगर्ने, तृप्तिदायक, अति पौष्टिक र कफविकार बढाउने गुणको हुन्छ ।

**सैव दुग्धेन संयुक्तः कान्तिदः स्वाददः स्मृतः । वृष्यश्चान्ये गुणाश्चोक्ता रसेन सदृशाः स्मृताः ॥**

यही रस दूधसँग मिसाएर खाएमा यो कान्तिदायक, स्वाददायक र थप वीर्यवर्धक हुन्छ । यसको अन्य गुण शुद्ध रसको गुण जस्तै हुन्छ ।

**आम्रतैलं तु तुवरं स्वादु रूक्षं च तिक्तकम् । सुगन्धि मुखरोगस्य नाशनं कफवातनुत् ॥**

आँपको कोयाको तेल टर्रो, स्वादिलो, रुखो, तीतो, सुगन्धी तथा मुखका रोग, कफविकार र वातविकार नाशक हुन्छ ।



**आम्रत्वचा कषाया च मूलं सौगन्धि तादृशम् । रुच्यं संग्राहि शिशिर पुष्पं तु रुचिदीपनम् ॥**

आँपको बोक्रा टर्रो हुन्छ । आँपको जरा पनि यस्तै स्वादको र सुगन्धी हुन्छ । यो रुचिवर्धक, दिसा रोक्ने र शीतवीर्यको हुन्छ । आँपको फूल रोचनी र दीपनी हुन्छ ।

**आम्रान्तस्त्वग्ग्राहिणी तु तुवरा दाहकारिणी । पित्तमेहकफनां च नाशिनी योनिशुद्धिकृत् ॥**

आँपको भित्री बोक्रो ग्राहि, टर्रो, डाह गर्ने तथा पित्तविकार, प्रमेह र कफविकार नाशक हुन्छ । यसले स्त्री-जननेन्द्रियलाई प्रशोधन गर्दछ ।

**आम्रमूलं तु तुवरं ग्राहि शीतं रुचिप्रदम् । सुगन्धि कफवातानां नाशनं परिकीर्त्तितम् ॥**

आँपको जरा टर्रो, ग्राही, शीतवीर्यको, रुचिप्रद, सुगन्धी तथा कफविकार र वातविकार नाशक हुन्छ ।

**आम्रच्छदस्तु तुवरो ग्राहको रुचिकारकः । वातपित्तकफान्हन्तीत्येवं च परिकीर्त्तितम् ॥**

आँपका पालुवा टर्रो, ग्राही, रुचिप्रद तथा त्रिदोष नाशक हुन्छ ।

(झ) **पर्यायरत्नमाला :**

**आम्रो रसालश्चूतः स्यात् सहकारः सुगन्धवान् ॥**

आम्र, रसाल, चूत, सहकार र सुगन्धवान् : यी आँपका नाम हुन् ।

## (ञ) भावप्रकाश निघण्टु :

**आम्रश्चूतो रसालश्च सहकारोऽतिसौरभः । कामाङ्गो मधुदूतश्च माकन्दः पिकवल्लभः ॥**

आम्र, चूत, रसाल, सहकार, अतिसौरभ, कामाङ्ग, मधुदूत, माकन्द र पिकवल्लभ : यी आँपका नाम हुन् ।

**आम्रपुष्पमतीसारकफपित्तप्रमेहनुत् । असृग्दुष्टिहरं शीतं रुचिकृद् ग्राहि वातलम् ॥**

आँपको फूलले अतीसार, कफविकार, पित्तविकार र प्रमेह रोग नाश गर्दछ । यसले रक्तविकार नाश गर्दछ, शीतल गर्दछ र रुची जगाउँदछ तर यो सङ्ग्राही हुन्छ र यसले वातविकार पनि बढाउँदछ ।

**आमं बालं कषायाम्लं रुच्यं मारुतपित्तकृत् । तरुणं तु तदत्यम्लं रूक्षं दोषत्रयास्रकृत् ॥**

कलिलो काँचो आँप टर्रो र अमिलो हुन्छ । यो रुचिकारक भएपनि यसले वातविकार र पित्तविकार बढाउँदछ । छिप्पिएको काँचो आँप भने अति नै अमिलो हुन्छ । यो रुखो हुन्छ । यसले त्रिदोष र रक्तविकारलाई जन्माउँदछ ।

**आम्रमामं त्वचाहीनमातपेऽतिविशोषितम् । अम्लं स्वादु कषायं स्याद्भेदनं कफवातजित् ॥**

काँचो आँपलाई बोक्रो ताछेर घाममा धेरै सुकाई (पिँधेर बनाइने धुलो वा चाना) बनाइने अम्चुर अमिलो, गुलियो र टर्रो हुन्छ । यो भेदनी हुन्छ । यसले कफविकार र वातविकार नाश गर्दछ ।



**पक्वं तु मधुरं वृष्यं स्निग्धं बलसुखप्रदम् । गुरु वातहरं हृद्यं वर्ण्यं शीतमपित्तलम् ॥**
**कषायानुरसं वह्निश्लेश्मशुक्रविवर्द्धनम् ।**

पाकेको आँपको स्वाद शुरुमा गुलियो र अन्तिममा हल्का टर्रो हुन्छ । यसले वीर्य बढाउँदछ । यो चिल्लो हुन्छ । यसले बल र सुख दिन्छ । यो पचाउन कठिन हुन्छ । यसले वातविकार र मुटुका रोग नाश गर्दछ । वर्णमा निखार लेराउँदछ । शीतल गर्दछ र हल्का पित्तविकार बढाउँदछ । यसमा हुने टर्रो रसले पाचनशक्ति, कफ र शुक्र बढाउँदछ ।



लक्ष्मणभोग जातको आँप, माल्द, पश्चिम बङ्गाल

**तदेव वृक्षसम्पक्वं गुरु वातहरं परम्॥ मधुराम्लरसं किञ्चित्पित्तप्रकोपणम्।**

रूखमै पाकेको आँप गुलियो र अमिलो हुन्छ । यो पचाउन कठिन हुन्छ । यसले विशेषतः वातविकार नाश गर्दछ । तर, केही मात्रामा वित्तविकार बढाउँदछ ।

**आम्रं कृत्रिमपक्वञ्च तद्भवेत्पित्तनाशनम्॥ रसस्याम्लस्य हीनस्तु माधुर्याच्च विशेषतः ।**
**चूषितं तत्परं रुच्यं बलवीर्यकरं लघु॥ शीतलं शीघ्रपाकि स्याद्वातपित्तहरं सरम्।**

कृत्रिम तरिका (काँचैमा टिपेर हानि नगर्ने किसिम) ले पकाइएको आँपले पित्तविकार नाश गर्दछ किन कि यसमा प्रायः अमिलो रस हराएर गुलियो रस मात्र बाँकी हुने गर्दछ । यस्तो आँप चुस्नाले रुची, बल र वीर्य बढाउँदछ । यो पचाउन हलुका, शीतल गर्ने, चाँडै पच्ने, वातविकार र पित्तविकार नाश गर्ने तथा मललाई खुकुल्याउने गुणको हुन्छ ।

**तद्रसो गालितो बल्यो गुरुर्वातहरः सरः॥ अहृद्यस्तर्पणोऽतीव बृंहणः कफवर्द्धनः ।**

निचोरिएको आँपको रस (वा जुस) ले बल दिन्छ तर पचाउन कठिन हुन्छ । यसले वातविकार नाश गर्दछ र मललाई खुकुलो पार्दछ । तर यसले मुटुलाई फाइदा गर्दैन । यसले तिव्र तरिकाले शरीरमा शक्ति सञ्चार गर्दछ । यो पौष्टिक हुन्छ तर कफविकार बढाउँदछ ।

**तस्य खण्डं गुरु परं रोचनं चिरपाकि च॥ मधुरं बृंहणं बल्यं शीतलं वातनाशनम्।**

पाकेको आँपको चाना पचाउन कठिन, अति नै रुचिकारक, पच्न धेरै बेर लाग्ने, गुलियो, पौष्टिक, बलदायक, शीतल गर्ने र वातविकार नाशक हुन्छ ।



**वातपित्तहरं रुच्यं बृंहणं बलवर्द्धनम्॥ वृष्यं वर्णकरं स्वादु दुग्धाम्रं गुरु शीतलम्॥**

दूधसँग खाइएको पाकेको आँप वातविकार र पित्तविकार नाशक, रुचीकारक, पौष्टिक र बलवर्द्धक हुन्छ । यसले वीर्य बढाउँदछ र वर्णमा निखार लेराउँदछ । यो स्वादिलो भएपनि पचाउन भने कठिन हुन्छ । यसले शीतल गर्दछ ।

**मन्दानलत्वं विषमज्वरं च रक्तामयं बद्धगुदोदरं च ।**
**आम्रातियोगो नयनामयं वा करोति तस्मादति तानि नाद्यात्॥**
**एतदम्लाम्रविषयं मधुराम्लपरं न तु । मधुरस्य परं नेत्रहितत्वाद्या गुणा यतः॥**

धेरै आँप खानाले पाचनशक्ति कमजोर हुन्छ, विषज्वर आउन सक्दछ, रगतजन्य रोगहरु लाग्न सक्दछन्, कब्जियत हुन्छ र आँखासम्बन्धी रोग हुन सक्दछ । यसैले धेरै आँप नखानू । यो निषेध अमिलो आँपका हकमा लागु हुन्छ, गुलियो आँपका हकमा लागु हुँदैन । किन कि पाकेको र गुलियो आँपमा आँखाको लागि फाइदा गर्ने गुण हुन्छ ।

**शुण्ठ्यम्भसोऽनुपानं स्यादाम्राणामतिभक्षणे । जीरकं वा प्रयोक्तव्यं सह सौवर्चलेन च॥**

धेरै आँप खाएका कारण कुनै असर गरे सुठो र पानी पिउनू अथवा सौचर नुन र जीरा खानू ।

**पक्वस्य सहकारस्य पटे विस्तारितो रसः । घर्मशुष्को मुहुर्दत्त आम्रावर्त्त इति स्मृतः॥**

**आम्रावर्त्तस्तृषाच्छर्दि वातपित्तहरः सरः । रुच्यः सूर्यांशुभिः पाकाल्लघुश्च स हि कीर्त्तितः ॥**

पाकेका आँपलाई निचोरी निकालिएको रस सफा कपडामा राखेर घाममा सुकाउनू । जब सुक्दछ त्यसमाथि पुनः रस हालेर सुकाउनू । यसो गर्दा गर्दा जब त्यहाँ बाक्लो पत्र बन्दछ त्यो पत्रलाई "आम्रावर्त्त" (अमोठ) भनिन्छ । यसले तिर्खारोग, वाकवाकी, वातविकार र पित्तविकार नाश गर्दछ तथा मललाई खुकुलो पार्दछ । यो रुचिकारक हुन्छ । सूर्यका किरणमा सुकेर पाकेका कारण यो पचाउन पनि हलुका हुन्छ ।

**आम्रबीजं कषायं स्याच्छर्द्यतीसारनाशनम् । ईषदम्लश्च मधुरं तथा हृदयदाहनुत् ॥**
**आम्रस्य पल्लवो रुच्यः कफपित्तविनाशनः ॥**

आँपको कोया भित्रको गुदी टर्रो, गुलियो र अमिलो मिसिएको स्वादको हुन्छ । यसले वाकवाकी, अतीसार र मुटुको दुःखाईलाई नाश गर्दछ । आँपको मुना (कलिला पात) रुचीकारक तथा कफविकार र पित्तविकार नाशक हुन्छ ।

**राजाम्रष्टङ्क आम्रातः कामाह्वो राजपुत्रकः ॥**
**राजाम्रं तुवरं स्वादु विशदं शीतलं गुरु । ग्राहि रूक्षं विबन्धाध्मवातकृत्कफपित्तनुत् ॥**

राजाम्र, टङ्क, आम्रात, कामाह्व र राजपुत्रक : यी कलमी-आँपका नाम हुन् । यो टर्रो, गुलियो, विशद ( सफा, सुन्दर र सेतो) र पचाउन कठिन हुन्छ । यसका साथै यो सङ्ग्राही, रुखो, विबन्धकारी र आध्मानकारी हुन्छ । तर यसले कफविकार र पित्तविकार नाश गर्दछ ।



**कोशाम्र उक्तः क्षुद्राम्रः कृमिवृक्षः सुकोशकः । कोशाम्रः कुष्ठशोथास्रपित्तव्रणकफापहः ॥**
**तत्फलं ग्राहि वातघ्नमम्लोष्णं गुरु पित्तलम् । पक्वन्तु दीपनं रुच्यं लघूष्णं कफवातनुत् ॥**

कोशाम्र, क्षुद्राम्र, कृमिवृक्ष र सुकोशक : यी बिजु आँपका नाम हुन् । यसले कुष्ठ, सुजन, रक्तपित्त, घाउखटिरा र कफविकार नाश गर्दछ । यसको काँचो फल सङ्ग्राही, वातविकार नाशक, अमिलो, गर्मी गर्ने, पचाउन कठिन र पित्तविकार गर्ने गुणको हुन्छ । यसको पाकेको फल भने दीपनी, रुचिवर्द्धक, पचाउन हलुका, गर्मी गर्ने तथा कफविकार र पित्तविकार नाशक हुन्छ ।

**आम्रमामं जले स्विन्नं मर्दितं दृढपाणिना ॥ सिताशीताम्बुसंयुक्तं कर्पूरमरिचान्वितम् ।**
**प्रपाणकमिदं श्रेष्ठं भीमसेनेन निर्मितम् ॥ सद्यो रुचिकरं बल्यं शीघ्रमिन्द्रियतर्पणम् ।**

काँचो आँपलाई पानीमा उमाली निकालेर रस निचोर्नू । यो रसमा चिनी, चिसो पानी, कपूरको धूलो र मरिचको धूलो हाल्नू र घोल्नू । यसलाई आँपको सर्बत भनिन्छ । यो उत्तम पेय हो । यसलाई सबभन्दा पहिले भीमसेनले बनाएका थिए । यो सर्बत पिउनाले तुरुन्त रुचि बढ्दछ, बल दिन्छ र तुरुन्त इन्द्रियलाई तृप्ति दिन्छ ।

**आममाम्रफलं पिष्टं राजिकालवणान्वितम् ॥ भृष्टहिङ्गुयुतं पूतं घोलितं जालिरुच्यते ।**
**जालिर्हरति जिह्वायाः कुण्ठत्वं कण्ठशोधिनी ॥ मन्दं मन्दन्तु पीता सा रोचनी वह्निबोधिनी ॥**

काँचो आँपलाई पिसेर त्यसमा मात्राअनुसार रायो र सिंधेनुन हाली घोल्नू । अनि कपडाले छानी त्यसमा फुराएको हिङ्को धूलो मिसाउनू । यसलाई जालि भनिन्छ । जालिले जिभ्रोको लाटोपन नाश गर्दछ र घाँटी सफा गर्दछ । यसलाई बिस्तारै पिउनाले यो रुचिकर र पाचकाग्नि वर्धक हुन्छ ।

(ठ) **मदनपाल निघण्टु :**

**आम्रश्चूतो रसालोऽसौ सहकारोऽतिसौरभः । माकन्दः पिकबन्धुः स्याद्रसालः कामवल्लभः ॥**

आम्र, चूत, रसाल, सहकार, अतिसौरभ, माकन्द, पिकबन्ध र कामवल्लभ : यी पाकेका आँपका नाम हुन् ।

**आम्रो ग्राही प्रमेहास्रकफपित्तव्रणाञ्जयेत् । तत्फलं बालमत्यम्लं रूक्षं दोषत्रयास्रजित् ॥**

आँप ग्राही हुन्छ । यसले प्रमेह, रक्तविकार, कफविकार, पित्तविकार र घाउखटिरालाई जित्दछ । काँचो आँप अति अमिलो र रुखो हुन्छ । यसले पनि त्रिदोष र रक्तविकारलाई जित्दछ ।

**पक्वं तु मधुरं वृष्यं स्निग्धं हृद्यं बलप्रदम् । गुरु वातहरं रुच्यं वर्ण्यं शीतमपित्तलम् ॥**
**रसस्तस्य सरः स्निग्धो रोचनो बलवर्णकृत् ॥**

पाकेको आँप मिठो, वीर्यवर्धक, चिल्लो, मुटुका रोगमा हितकर, बलदायक, पचाउन कठिन, वातविकार नाशक, रुचिकर, शरीरको वर्णमा निखार लेराउने, शीतवीर्य भएको र पित्तविकार नगर्ने गुणको हुन्छ । यस्तो आँपको रसले मलमूत्रलाई तलतिर सार्दछ । यो रस चिल्लो, रुचिवर्धक, बलवर्धक र वर्णमा निखार लेराउने गुणको हुन्छ ।



**सहकारं च वातघ्नं पित्तश्लेष्मविनाशनम् । कषायं मधुरं वृष्यं गुरु स्निग्धं विशेषतः ॥**

आँप (सहकार जातको) ले वातविकार, पित्तविकार र कफविकार नाश गर्दछ । यो टर्रो, गुलियो, वीर्यवर्धक, पचाउन कठिन र बढी चिल्लोयुक्त हुन्छ ।

**पक्वाम्रं जनयेदायुर्मांसशुक्रबलप्रदम् । शुष्काम्रं तु कषायाम्लं भेदनं कफवातजित् ॥**

पाकेको आँपले आयु, मासु, वीर्य र बल बढाउँदछ । सुकेको आँप टर्रो, अमिलो तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ ।

**राजाम्राह्वं काम्रनामा कामाह्वो राजपुत्रकः । राजाम्रं मधुरं शीतं ग्राहि पित्तकफापहम् ॥**

राजाम्र, काम्रनाम, कामाह्व र राजपुत्रक : यी कलमी आँपका नाम हुन् । यो आँप गुलियो, शीतवीर्यको, ग्राहि तथा पित्तविकार र कफविकार नाशक हुन्छ ।

**कोशाम्रको घनस्कन्धो जन्तुवृक्षश्च कोशकः । कोशाम्रः कुष्ठशोथास्रपित्तव्रणकफापहः ॥**

कोशाम्रक, घनस्कन्ध, जन्तुवृक्ष र कोशक : यी बिजु आँपका नाम हुन् । यसले कुष्ठ, सुजन, रक्तपित्त र कफविकार नाश गर्दछ ।

**तत्फलं ग्राहि वातघ्नमम्लोष्णं गुरु पित्तलम् । पक्वं तद्दीपनं रुच्यं लघूष्णं कफवातजित् ॥**

**मज्जा पित्तसमीरघ्नी स्वादुबल्याऽग्निदीपनी ॥**

यसको फल ग्राहि, वातविकार नाशक, अमिलो, उष्णवीर्यको, पचाउन कठिन र पित्तविकार गर्ने गुणको हुन्छ । पाकेको बिज्जु आँप दीपनी, रुचिकर, पचाउन सहज, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसको काठभित्रको गुदी पित्तविकार र वातविकार नाशक, स्वादिलो, बलदायक र पाचनशक्ति बढाउने गुणको हुन्छ ।

**आम्रतैलं मनाक्तिक्तं मधुरं नातिपित्तकृत् । कफवातहरं रूक्षं सुगन्धि विशदं परम् ॥**

आँपको तेल केही तीतो, गुलियो र धेरै पित्तविकार नगर्ने गुणको हुन्छ । यसले कफविकार र वातविकार नाश गर्दछ । यो रुखो, बास्ना आउने र अत्यन्त सफा हुन्छ ।

**आम्रामलकलेहाद्या हृद्याबुद्धिबलप्रदाः । तर्पणा रोचनाः स्निग्धा मधुरा गुरवस्तथा ॥**

आँप र अमलाको चटनी आदि मुटुका लागि हितकर, बुद्धिप्रदायक, बलदायक, तृप्तिदायक, रुचिप्रद, चिल्लो, मिठो र पचाउन कठिन हुन्छ ।

**(ड) मदनादि निघण्टु :**

**आम्रः चूतो रसालश्च कान्तो मधुकरः प्रियः । सहकारो मन्मथश्च मनोज्ञं शौण्डिकः प्रियः ॥**
**कषायो व्रणघ्नश्च रूक्षो योनिविशोधनः । प्रमेहकासपित्तघ्नश्चाम्रः स्वादुफलस्मृतः ॥**



आम्र, चूत, कान्त, मधुकरप्रिय, सहकार, मन्मथ, मनोज्ञ र शौण्डिकप्रिय : यी आँपका नाम हुन् । पाकेको आँप टर्रो, खटिरा नाशक, रुखो, स्त्री-जननेन्द्रिय प्रशोधक तथा प्रमेश, खोकी र पित्तविकार नाशक तथा गुलियो हुन्छ ।

**(ढ) माधवद्रव्यगुण :**

**सतिक्तं सहकारस्य तैलं सुरभि रोचनम् ।**

सहकार (आँप) को तेल तीतो, रहरलाग्दो र रुचिप्रद हुन्छ ।

**(ण) राज निघण्टु :**

**आम्रः कामशरश्चूतो रसालः कामवल्लभः । कामाङ्गः सहकारश्च कीरेष्टो माधवद्रुमः ॥**
**भृङ्गाभीष्टः सीधुरसो मधूली कोकिलोत्सवः । वसन्तदूतोऽम्लफलो मदाढ्यो मन्मथालयः ॥**
**मध्वावासः सुमदनः पिकरागो नृपप्रियः । प्रियाम्बुः कोकिलावासः स प्रोक्तस्त्रिकराह्वयः ॥**
**आम्रः कषायाम्लरसः सुगन्धिः कण्ठामयघ्नोऽग्निकरश्च बालः ।**
**पित्तप्रकोपानिलरक्तदोषप्रदः पटुत्वादि रुचिप्रदश्च ॥**

(१) आम्र, (२) कामशर, (३) चूत, (४) रसाल, (५) कामवल्लभ, (६) कामाङ्ग, (७) सहकार, (८) कीरेष्ट, (९) माधवद्रुम, (१०) भृङ्गाभीष्ट, (११) सीधुरस, (१२) मधूली, (१३) कोकिलोत्सव, (१४) वसन्तदूत, (१५) अम्लफल, (१६) मदाढ्य, (१७) मन्मथालय, (१८) मध्वावास, (१९) सुमदन, (२०) पिकराग, (२१) नृपप्रिय, (२२) प्रियाम्बु र (२३) कोकिलावास : यी तेईस नाम आँपका नाम हुन् । आँप टर्रो,

आमिलो र सुगन्धी हुन्छ । यसले घाँटीका रोग नाश गर्दछ, काँचलो आँपले पाचनशक्ति बढाउँदछ तर सँगसँगै पित्तविकार, वातविकार र रक्तविकार पनि बढाउँदछ । यसमा हुने नुनिलोपनले रुची बढाउँदछ ।

**बालं पित्तानिलकफकरं तच्च बद्धास्थि तादृक् पक्वं दोषत्रितयशमनं स्वादु पुष्टिं गुरुञ्च ।**
**दत्ते धातुप्रचयमधिकं तर्पणं कान्तिकारि ख्यातं तृष्णाश्रमशमकृतौ चूतजातं फलं स्यात्॥**

कलिलो आँपले पित्तविकार, वातविकार र कफविकार गर्दछ । छिप्पिएको आँपमा पनि यिनै गुण हुन्छन् । पाकेको आँपले भने त्रिदोष नाश गर्दछ । पाकेको आँप गुलियो, पुष्टिदायक र पचाउन कठिन हुन्छ । यसले अत्यधिक मात्रामा शरीरका धातु बढाउँदछ, तृप्त पार्दछ र शरीरमा कान्ति ल्याउँदछ । यसले तिर्खा र थकाई पनि नाश गर्दछ ।

**कोशाम्रश्च घनस्कन्धो वनाम्रो जन्तुपादपः । क्षुद्राम्रश्चेति रक्ताम्रो लाक्षावृक्षः सुरक्तकः॥**
**कोशाम्रमम्लमनिलापहरं कफार्तिपित्तप्रदं गुरु विदाहविशोफकारि ।**
**पक्वं भवेन् मधुरमीषदपारमम्लं पट्वादियुक्तरुचिदीपनपुष्टिबल्यम्॥**

कोशाम्र, घनस्कन्ध, वनाम्र, जन्तुपादप, क्षुद्राम्र, रक्ताम्र, लाक्षावृक्ष र सुरक्तक : यी कोशाम्रका नाम हुन् । यो आँप अमिलो, वातविकार नाशक, कफविकार र पित्तविकार बढाउने, पचाउन कठिन, डाहकारी र सुजन गराउने गुणको हुन्छ । पाकेको कोशाम्र केही गुलियो भएपनि धेरै अमिलो हुन्छ । यसमा नुन आदि मिसाएमा (वा अचार बनाएमा) यो रुचिप्रद, दीपनी, पुष्टिदायक र बलदायक हुन्छ ।

**राजाम्रोऽन्यो राजफलः स्मराम्रः कोकिलोत्सवः । मधुरः कोकिलानन्दः कामेष्टो नृपवल्लभः॥**

राजाम्र, राजफल, स्मराम्र, कोकिलोत्सव, मधुर, कोकिलानन्द, कामेष्ट र नृपवल्लभ : यी कलमी आँपका नाम हुन् ।

**अन्यो महाराजचूतो महाराजाम्रकस्तथा । स्थूलाम्रो मन्मथावासः कङ्को नीलकपित्थकः॥**
**कामायुधः कामफलो राजपुत्रो नृपात्मजः । महाराजफलः कामो महाचूतस्त्रयोदश॥**

(१) महाराजचूत, (२) महाराजाम्रक, (३) स्थूलाम्र, (४) मन्मथावास, (५) कङ्क, (६) नीलकपित्थक, (७) कामायुध, (८) कामफल, (९) राजपुत्र, (१०) नृपात्मज, (११) महाराजफल, (१२) काम र (१३) महाचूत : यी तेह्र नाम मालदह आँपका नाम हुन् ।

**तस्यापि श्रेष्ठतोऽन्याम्रो रसालो बद्धपूर्वकः । ज्ञेयश्चक्रलताम्रश्च मध्वाम्रः सितजाम्रकः॥**
**वनेज्यो मन्मथानन्दो मदनेच्छाफलो मुनिः॥**

(१) बद्धरसाल, (२) चक्रलताम्र, (३) मध्वाम्र, (४) सितजाम्रक, (५) वनेज्य, (६) मन्मथानन्द र (७) मदनेच्छाफल : यी सात नाम मालदह आँपभन्दा पनि श्रेष्ठ आँपविशेषका नाम हुन् ।

**राजाम्राः कोमलाः सर्वे कट्वम्लाः पित्तदाहदाः । सुपक्वाः स्वादुमाधुर्याः पुष्टिवीर्यबलप्रदाः॥**
**राजाम्रेषु त्रिषु प्रोक्तं साम्यमेव रसाधिकम् । गुणाधिकं तु विज्ञेयं पर्यायादुत्तरोत्तरम्॥**
**बालं राजफलं कफास्रपवनश्वासार्तिपित्तप्रदं मध्यं तादृशमेव दोषबहुलं भूयः कषायाम्लकम् ।**
**पक्वञ्चेन्मधुरं त्रिदोषशमनं तृष्णाविदाहश्रमश्वासारोचकमोचकं गुरु हिमं वृष्यातिचूताह्वयम्॥**

सबै खालका कलमी आँप (कलमी, महाराजाम्र र मध्वाम्र) नरम, पिरो, आमिलो, पित्तविकार गर्ने र डाहकारी हुन्छन् । राम्ररी पाकेका यी आँप गुलिया, मिठा तथा पुष्टिदायक, वीर्यवर्धक र बलवर्धक हुन्छन् । माथि बताइएका तीन प्रकारका कलमी आँप रसमा तलमाथि भएपनि समान खालका हुन्छन् । राजाम्र, महाराजाम्र र बद्धरसाल क्रमशः बढी गुनिला हुन्छन् । कलिला कलमी आँपले कफविकार, रक्तविकार, वातविकार, दम र पित्तविकार बढाउँदछ । छिप्पिएका यी आँपमा पनि ककलिलोमा जस्तै दोष बढी हुन्छ । यी आँप टर्रा र अमिला हुन्छन् । यी आँप पाकेका छन् भने गुलिया, त्रिदोषनाशक तथा तिर्खारोग, डाह, थकाई, दम र अरुची नाशक हुन्छन् । यी पचाउन कठिन, शीतवीर्यका र अति वीर्यवर्धक हुन्छन् ।

**आम्रत्वचा कषाया च मूलं सौगन्धि तादृशम् । रुच्यं सङ्ग्राहि शिशिरं पुष्पं तु रुचिदीपनम् ॥**

आँपको बोक्रो टर्रो र जरा सुगन्धी हुन्छ । यी रुचिवर्धक, ग्राही र शीतवीर्यका हुन्छन् । आँपको फूल रुचीवर्धक र दीपनी हुन्छ ।

**सरं कोशाम्रजं तैलं क्रिमिकुष्ठव्रणापहम् । तिक्ताम्लमधुरं बल्यं पथ्यं रोचनपाचनम् ॥**

आँपको तेल मलमूत्रलाई तलतिर सार्ने; कीरा, कुष्ठ र घाउखटिरा नाशक, तीतो, अमिलो, गुलियो, बलदायक, पथ्य, रोचनी र पाचनी हुन्छ ।

(त) **राजवल्लभ निघण्टु :**

**आम्रबालं रक्तपित्तकरं मध्यन्तु पित्तलम् ॥**



आँपको चिचिलोले रक्तपित्त गर्दछ । छिप्पिएको तर नपाकेको आँपले पित्तविकार गर्दछ ।

**पक्वं वर्णकरं रुच्यं मांसशुक्रबलप्रदम् । पित्तविरोधि वातघ्नं हृद्यं गुर्वनुलोमनम् ॥**
**मधुना तत्क्षयप्लीहवातश्लेष्महरं परम् । सघृतं वातपित्तघ्नं दीपनं बलवर्णकृत् ॥**

पाकेको आँप शरीरको वर्णलाई निखार्ने, रुचिप्रद तथा मासु, शुक्र र बल बढाउने गुणको हुन्छ । यो पित्तविरोधी, वातविकार नाशक, मुटुका लागि हितकर, पचाउन कठिन र अनुलोमनी हुन्छ । पाकेको आँप महसँग खानाले क्षयरोग, फियोका रोग, वातविकार र कफविकार प्रभावकारी ढङ्गले नाश गर्दछ । घिउसँग खानाले वातविकार र पित्तविकार नाश गर्दछ । यसरी खाँदा यो दीपनी तथा बल र वर्ण बढाउने गुणको हुन्छ ।

**आम्रपेशी कषायाम्ला भेदिनी कफवातजित् ॥**

सुकेको आँप टर्रो, अमिलो, भेदनी तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ ।

**कोषाम्रं कफवातघ्नं दीपनं ग्राहि तत्परम् ॥**

बिज्जु आँप कफविकार र वातविकार नाशक, दीपनी र अति ग्राहि हुन्छ ।

## (थ) शार्ङ्गधर संहिता :

**सहकारत्वचः कल्को दध्ना सौवीरकेण वा । पिष्टो नाभिप्रलेपेन हन्त्यतीसारमुल्बणम्॥**

आँपको रुखको बोक्रा गाईको दहीमा अथवा काँजीमा पिसी लेप बनाएर दिसा रोक्नुपर्ने रोगीको नाइटोभन्दा माथितिर दल्नू, लागिरहेको दिसा बन्द हुन्छ ।

## (द) शालिग्राम निघण्टु :

**आम्रः प्रोक्तो रसालश्च सहकारोऽतिसौरभः । कामाङ्गो मधुदूतश्च माकन्दः पिकवल्लभः॥**

आम्र, रसाल, सहकार, अतिसौरभ, कामाङ्ग, मधुदूत, माकन्द र पिकवल्लभ : यी आँपका नाम हुन् ।

**पक्वं ताम्रफल सुगन्धि मधुर स्निग्धं परं बृंहण रुच्यं वातहरं च हृद्यमलघु ग्राहि प्रमेहप्रणुत् ।**
**शीतं वर्ण्यमपित्तलं व्रणहरं श्लेष्मास्ररोगापह यद्दृष्ट्वा मन उल्लसत्यपि मुनेः किं वर्णनं भूतले॥**

पाकेको आँप सुगन्धी, गुलियो, चिल्लो, अति पौष्टिक, रुचिप्रद, वातविकार नाशक, मुटुका लागि हितकर, पचाउन कठिन, ग्राहि, प्रमेह नाशक, शीतवीर्यको, वर्णमा निखार लेराउने, पित्तविकार नगर्ने, खटिरा नाशक, कफविकार नाशक र रक्तविकार नाशक हुन्छ । यस्तो गुण भएको पाकेको आँप देखेपछि मुनिजनको त मन लोभिन्छ भने पृथ्वीका अरु मानिका बारेमा के वर्णन गर्नू ?

**चोषिताम्रो बलरुचिर्वीर्यवृद्धिकरः परः । लघुता शीतता शीघ्रपाकता वातपित्तनुत्॥**
**मलबन्धकरश्चैव पूर्ववैद्यैरुदीरितः ।**

प्राचीन वैद्यका अनुसार चुसेर खाइएको पाकेको आँपले बल, रुची र वीर्य बढाउँदछ । यो पचाउन सहज, शीतवीर्यको र चाँडै पच्ने गुणको हुन्छ । यसले वातविकार र पित्तविकारलाई नाश गर्दछ ।

**पक्वस्य सहकारस्य पटे विस्तारितो रसः ।**
**घर्मशुष्को मुहुर्दत्त आम्रावर्त्त इति स्मृतः॥**

पाकेको आँपको रसलाई कपडामा फिँजाएर घाममा पटकपटक सुकाएर तयार पारिने परिकारलाई आम्रवर्त्त भनिन्छ ।



थालमा हालेर घाममा सुकाइएको अमोठ, लाहान नेपालको फेसबुक पेज

**तस्य खण्डं गुरुपरं रोचनं चिरपाकि च ।**
**मधुरं बृंहणं वल्यं शीतलं वातनाशनम्॥**

आँपका चाना पचाउन कठिन, रुचिप्रद, ढिलो पच्ने, गुलियो, पौष्टिक, बलदायक, शीतवीर्यको र वातविकार नाशक हुन्छ ।

**आम्रबीजं तु मुधरं किञ्चिदम्लं कषयकम् । वान्त्यतिसारहृद्दाहनाशं च बुधैर्मतम्॥**

आँपको कोया भित्रको गुदी केही अमिलो र टर्रो हुन्छ । यसले वाकवाकी, अतिसार, र मुटुको दुखाई नाश गर्दछ भनी विद्वानहरूले बताएका छन् ।

**राजाम्रोन्यो राजफलः स्मराम्रः कोकिलोत्सवः । मधुरः कोकिलानन्दः कामेष्टो नृपवल्लभः ॥**

राजाम्र, राजफल, स्मराम्र, कोकिलोत्सव, मधुर, कोकिलानन्द, कामेष्ट र नृपवल्लभ : यी अर्को कलमी गरिएको आँप वा राजाम्रका नाम हुन् ।

**बालं राजफलं कफास्रपवनं श्वासातिपित्तप्रदं मेध्यं तादृशमेव दोषबहुलं भूयः कषायाम्लकम् ।**
**पक्व चेन्मधुरं त्रिदोषशमन तृष्णाविदाहश्रमश्वासारोचकमोचकं गुरु हिमं वृष्यातिभूपाह्वयम् ॥**

कलमी गरिएको आँपको काँचो कलिलो दानाले कफविकार, रक्तविकार, वातविकार, दम र अति पित्तविकार बढाउँदछ । नपाकेको तर छिप्पिएको यस्तो आँपको गुण चिचिलोको जस्तै हुन्छ । यसले अनेक विकार गर्दछ । यो टर्रो र अमिलो हुन्छ । पाकेको यस्तो आँप गुलियो, त्रिदोष शान्त पार्ने तथा तिर्खा, डाह, थकाई, दम र अरुची नाशक हुन्छ । यो पचाउन कठिन, शीतवीर्यको र अत्यन्त वीर्यवर्धक हुन्छ ।

**(ध) सरस्वती निघण्टु :**

**आम्रः पिण्डीफलः पुष्पमञ्जरी काननाधिपः । वसन्तदूतश्चूतोऽतिसौरभः सहकारकः ॥**
**माकन्दश्चरसालश्च मन्मथोमधुपप्रियः ।**


आँपका सुकाइएका चाना र अम्चूर, हेल्थशट्सडटकम

आम्र, पिण्डीफल, पुष्पमञ्जरी, काननाधिप, वसन्तदूत, चूत, अतिसौरभ र सहकारक : यी आँपका नाम हुन् ।

**(न) सोढल निघण्टु :**

**आम्रश्चूतो रसालश्च कीरेष्टो मदिरासखः ।**
**कामाङ्गः सहकारश्च परपुष्टो मदोद्भवः ॥**

आम्र, चूत, रसाल, कीरेष्ट, मदिरासख, कामाङ्ग, सहकार, परपुष्ट र मदोद्भव : यी आँपका नाम हुन् ।

**राजाम्रके आताम्रस्तु मन्मथोद्भावनस्तथा ।**
राजाम्र, आताम्र र मन्मथोद्भावन : यी कलमी आँपका नाम हुन् ।
**क्षुद्राम्र उक्तः कोशाम्रो लाक्षावृक्षः सुरक्तकः ॥ जतुवृक्षो घनस्कन्धः कृमिवृक्षः सुकोशकः ।**

क्षुद्राम्र, कोशाम्र, लाक्षावृक्ष, सुरक्तक, जतुवृक्ष, घनस्कन्ध, कृमिवृक्ष र सुकोशक : यी बिज्जु आँपका नाम हुन् ।

**(प) सौश्रुत निघण्टु :**

**आम्रश्च सहकारश्च चूतो मधुकरप्रियः । वसन्तदूतश्च तथा मन्मथः पुष्पमञ्जरी ॥**

आम, सहकार, चूत, मधुकरप्रिय, वसन्तदूत, मन्मथ र पुष्पमञ्जरी : यी आँपका नाम हुन् ।

# आम्रातक (अमारो)
# (Wild mango)

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश (अमारो) : सलिफाका जस्ता पात लाग्ने, लप्सीका जस्ता अमिला फल फल्ने र ससाना सेता फूल फुल्ने एक बोट; त्यसैको फल; आम्रात ।

(ख) आचार्य बालकृष्ण : यसको वानस्पतिक नाम *Spondia pinnata* (L.f.) Kurz हो । यो Anacardiaceae (एनाकार्डिएसीई) परिवारमा पर्दछ । यसलाई अंग्रेजीमा Common hog plum, Indian hog plum, Wild mango भनिन्छ ।

(ग) डा. चुनेकर : यसलाई अंग्रेजीमा Indian Hog Plum र ल्याटिनमा *Spondias mangifera* Eild भनिन्छ ।

(घ) पेयर डी अमरकोशले यसको वानस्पतिक नाम *Spondia pinnata* (J.konig ex L.f.) र अंग्रेजी नाम Yellow Blsampflaume वा Yellow plum दिएको छ ।

(ङ) के.यन.स्वामी : (१) आम्रातक, फली : अमारो ।

(च) डा. साङ्गचधर : अमारोलाई ल्याटिन भाषामा *Spondias pinnata* (Linn.f.) Kurz., *Spondias mangifera* Willd. वा *Spondias* Roxb.non Gamble भनिन्छ । यसको अंग्रेजी नाम Wild mango वा Hog-plum हो ।

(छ) वैद्य डी.के. कामत र डा.यस.डी.कामत : अमारोलाई अंग्रेजीमा The Hog pulm तथा ल्याटिन भाषामा *Spondias mangifera* Willd. वा *Spondias pinnata* (Linn.f.) Kurz. भनिन्छ ।



(ज) शालिग्राम निघण्टु : अमारोलाई अंग्रेजीमा Spodias minutc तथा ल्याटिन भाषामा *Spondias mangifera* भनिन्छ ।



आम्रातकः | Spondias pinnata, payer.de/amarakosa

(झ) फर्माकोपिया : अमारो Anacardiaceae परिवारमा पर्दछ । यसको अंग्रेजी नाम Indian Hog Plum वा Wild Mango तथा वानस्पतिक नाम *Spondias pinnata Linn.* f. Kurz. Syn. *S. mangifera* Willd.; *S. acuminata* Roxb. non Gamble हो । यसको रूखको बोक्राको धुलो ५-१० ग्रामसम्म ओखतीका रूपमा काँढा बनाएर खान, बोक्राको धुलो १-३ ग्रामसम्म प्रयोग हुन्छ ।

(ञ) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : यो Angiosperm समूह अन्तर्गत Anacardiaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Spondias pinnata* (L.f.) Kurz हो ।


आम्रातकः | Spondias pinnata, payer.de/amarakosa

**प्राचीन ग्रन्थका वचन :**

**(क) अग्निपुराण :**

**...पीतनकपीतनौ । आम्रातके... ।**

पीतन, कपीतन र आम्रातक : यी अमारोका नाम हुन् ।

**(ख) अभिधान मञ्जरी :**

**आम्रातः कपिचूडः पीतनकश्चाम्लपाटकस्सङ्गी ।**
**अम्बष्ठस्तनुमांसः कपिप्रियः कथ्यते कपिरसाढ्यः ॥**

आम्रात, कपिचूड, पीतनक, अम्लपाटक, सङ्गी, अम्बष्ठ, तनुमांस, कपिप्रिय र कपिरसाढ्य : यी अमाराका नाम हुन् ।

**(ग) अभिधान रत्नमाला :**

**आम्रातकः पीतनकः कपिचूतोऽम्लपादकः । स्निग्धवृक्षस्तनुक्षीरः टङ्कस्स्याद् गूढबीजकः ॥**

आम्रातक, पीतनक, कपिचूत, अम्लपादक, स्निग्धवृक्ष, तनुक्षीर, टङ्क र गूढबीजक : यी अमारोका नाम हुन् ।


पीतनः | Spondias pinnata, payer.de/amarakosa

**(घ) अमरकोश :**

**...पीतनकापीतनौ । आम्रातके ...॥**

पीतनक, पीतन र आम्रातक : यी अमाराका नाम हुन् ।

(ङ) **अष्टाङ्ग निघण्टु :**

**... कपिचूतः कपीतनः ।**

कपिचूत र कपीतन : यी अमारोका नाम हुन् ।

(च) **कैयदेव निघण्टु :**

**आम्रातकस्तनुक्षीरो वर्षापाकी बलीशकः॥ कपिचूतश्चाम्रवटो दुषःफलोऽथ कपीतनः ।**
**आम्रातमम्लं वातघ्नं रुच्यं पित्तकफास्रकृत्॥ सरं गुरूष्णं पक्वं तु स्वादुपाकरसं हिमम् ।**
**तर्पणं श्लेष्मलं स्निग्धं वृष्यं विष्टम्भि बृंहणम्॥ गुरु बल्यं मरुत्पित्तदाहक्षतक्षयास्रजित् ।**
**आम्रातकप्रवालं तु ग्राहि दीपनरोचनम्॥**

आम्रातक, तनुक्षीर, वर्षापाकी, बलीशक, कपिचूत, आम्रवटी, दुषफल र कपीतन : यी अमारोका नाम हुन् । अमारो अमिलो, वातविकार नाशक, रुचिप्रद तथा पित्तविकार, कफविकार र रक्तविकार गर्ने गुणको हुन्छ । पाकेको अमारो मलमूत्रलाई तलतिर सार्ने, पचाउन कठिन, उष्णवीर्यको, पचेपछि गुलियो, शीतवीर्यको, तृप्तिदायक, कफ बढाउने, चिल्लो, वीर्यवर्धक, कब्जियत गराउने, पौष्टिक, पचाउन कठिन, बलदायक तथा वातविकार, पित्तविकार, डाह, चोटपटक, क्षयरोग र रक्तविकारलाई जित्ने गुणको हुन्छ । कलिलो अमारो कब्जियत गराउने, दीपनी र रोचनी हुन्छ ।

(च) **द्रव्यगुणसङ्ग्रह :**

**आम्रातकं तर्पणं च बल्यं मधुरबृंहणम् । स्नेहनं श्लेष्मलं शीतं वृष्यं विष्टभ्य जीर्यति॥**

अमारो (आम्रातक) तृप्तिदायक, बलदायक, गुलियो, पौष्टिक, चिल्लो, कफविकार गर्ने, शीतवीर्यको, वीर्यवर्धक र कब्जियत गराउँदै पच्ने गुणको हुन्छ ।

(छ) **धन्वन्तरि निघण्टु :**

**आम्रातकः पीतनकः कपिचूतोऽम्लवाटकः (अम्लपादपः) ।**
**शृङ्गी कपी रसाढ्यश्च तनुक्षीरः कपिप्रियः॥**
**आम्रातकफलं वृष्यं पित्तास्रकफवह्निकृत् । शीतं कषायं मधुरं किञ्चिन्मारुतकृद्गुरु॥**

आम्रातक, पीतनक, कपिचूत, अम्लवाटक (अम्लपादप), शृङ्गी, कपी, रसाढ्य, तनुक्षीर र कपिप्रिय : यी अमारोका नाम हुन् । अमारोको फल वीर्यवर्धक तथा पित्तविकार, रक्तविकार, कफविकार र पाचनशक्ति बढाउने खालको हुन्छ । यो शीतवीर्यको, टर्रो, गुलियो, केही मात्रामा वातविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

**(ञ) निघण्टु रत्नाकर (शा.नि.) :**

**आम्रातकोगुरुश्चोष्णस्तुवरोम्लोरुचिप्रदः । सरः कण्ठ्यपित्तकफरक्तकारी च संस्मृतः ॥**
**आमवातस्य वातस्य चामस्य च विनाशनः । सपक्वस्तुवरः शीतो गुरुर्वृष्योबलंकरः ॥**
**मधुरस्तृप्तिकफकृत्स्निग्धोधातुविवर्धकः । मलस्तम्भकरोवातकफपित्तविनाशनः ॥**
**रक्तरुग्दाहक्षतरुक्क्षयनाशकरो मतः । पर्णं तु कोमलंचास्य रुच्यं ग्राह्यग्निदीपनम् ॥**

अमारो (आम्रातक) पचाउन कठिन, उष्णवीर्यको, टर्रो, अमिलो, रुचिप्रद, मलमूत्रलाई तलतिर सार्ने, घाँटीका लागि हितकर, पित्तविकार गर्ने, कफविकार गर्ने, रक्तविकार गर्ने, आमवात नाश गर्ने, वातविकार नाशगर्ने, आमविकार नाशगर्ने गुणको हुन्छ । पाकेको अमारो शीतवीर्यको, पचाउन कठिन, वीर्यवर्धक र बलदायक हुन्छ । यो गुलियो, सन्तुष्टी दिने, कफविकार गर्ने, चिल्लो र धातुवर्धक हुन्छ । अमारोले दिसा रोक्दछ तथा वात-कफविकार र पित्तविकार नाश गर्दछ । यसले रक्तविकार, डाह, घाउ-चोटपटक र क्षयरोग नाश गर्दछ भनिन्छ । यसको कमलो पात रुचिकारक, ग्राही र दीपनी हुन्छ ।

**(झ) निघण्टुशेष :**

**आम्रातके वर्षपाकी कपिचूतः कपिप्रियः ॥**

**कपीतनः पीतनकस्तनुक्षीरोऽम्लपाटकः । शुङ्गी कपिरसाढ्यश्च दूष्यफलो विभीषणः ॥**

आम्रातक, वर्षपाकी, कपिचूत, कपिप्रिय, कपीतन, पितनक, तनुक्षीरी, अम्लपाटक, शुङ्गी, कपिरसाढ्य, दूष्यफल र विभीषण : यी अमारोका नाम हुन् ।

**(ञ) पर्यायरत्नमाला :**

**आम्रातको वर्षपाकी ।**

अमारोलाई आम्रातक र वर्षापाकी भनिन्छ ।

**(ट) भावप्रकाश निघण्टु :**

**आम्रातकः पीतनश्च मर्कटाम्रः कपीतनः । आम्रातमम्लं वातघ्नं गुरूष्णं रुचिकृत्सरम् ॥**
**पक्वन्तु तुवरं स्वादु रसे पाके हिमं स्मृतम् । तर्पणं श्लेष्मलं स्निग्धं वृष्यं विष्टम्भि बृंहणम् ॥**
**गुरु बल्यं मरुत्पित्तक्षतदाहक्षयास्रजित् ।**

आम्रातक, पांतन, मर्कटाम्र, कपांतन र आम्रात : यी अमारोका नाम हुन् । यो आंमलो, वातांवकार नाशक, पचाउन कठिन, गर्मी गर्ने, रुची बढाउने र मल खुकुलो पार्ने गुणको हुन्छ । पाकेको अमारोको फल टर्रो, पचेपछि स्वादिलो, शीतल गर्ने, सन्तुष्ट पार्ने, कफवर्द्धक, कब्जियत गर्ने, पौष्टिक, पचाउन कठिन, बलदायक तथा वातविकार, पित्तविकार, चोटपटक, डाह, क्षयरोग र रक्तविकार नाशक हुन्छ ।

(ठ) **मदनपाल निघण्टु :**

**आम्रातकश्चाम्रवटः फली मोदः फलः कपीः । आम्रातमामवातघ्नं गुरूष्णं रुचिकृत्सरम् ॥**
**पक्वं स्वादु हिमं वृष्यं मरुत्पित्तक्षयास्रजित् ॥**

आम्रातक, आम्रवट, फली, मोद, फल र कपी : यी अमारोका नाम हुन् । काँचो अमारोले वातविकार नाश गर्दछ । यो पचाउन कठिन र उष्णवीर्यको हुन्छ । यसले रुचि जगाउँदछ र मलमूत्रलाई तलतिर सार्दछ । पाकेको अमारो स्वादिलो, शीतवीर्यको, वीर्यवर्धक तथा वातविकार, पित्तविकार, क्षयरोग र रक्तविकारलाई जित्ने गुणको हुन्छ ।

(ड) **मदनादि निघण्टु :**

**कपीतनः कपेर्वासः फलीशसुप्रतिष्ठिता । वानीरः कपिचूडश्च कृमिलः क्षीरपादपः ॥**

**फलेऽम्लमधुरो मूले कषायः स्वादुमञ्ज(ज्ज)कः ।**
**स्निग्धः सुदुर्ज्जरः श्लेष्मकृमिशुक्ल(क्र?) विवर्धनः ॥**

कपीतन, कपेर्वास, फलीश, सुप्रतिष्ठिता, वानीर, कपिचूड, कृमिल र क्षीरपादप : यी अमारोका नाम हुन् । यसको फल अमिलो र गुलियो हुन्छ । जरा (?) टर्रो हुन्छ । काठको चुरो वा मञ्जरी गुलियो हुन्छ (?) । अमारो चिल्लो, ढिलो पच्ने तथा कफविकार, कीरा र शुक्रवर्धक (?) हुन्छ ।

(ढ) **राज निघण्टु :**

**आम्रातकः पीतनकः कपिचूतोऽम्लवाटकः । शृङ्गी कपी रसाढ्यश्च तनुक्षीरः कपिप्रियः ॥**
**आम्रातकं कषायाम्लमामहृत्कण्ठहर्षणम् । पक्वन्तु मधुराम्लाढ्यं स्निग्धं पित्तकफापहम् ॥**

आम्रातक, पीतनक, कपिचूत, अम्लवाटक, शृङ्गी, कपी, रसाढ्य, तनुक्षीर र कपिप्रिय : यी अमारोका नाम हुन् । अमारो टर्रो, अमिलो, आमविकार नाशक र घाँटीका लागि सुखदायक हुन्छ । पाकेको अमारो गुलियो र अमिलो हुन्छ । यो चिल्लो हुन्छ । यसले पित्तविकार र कफविकारलाई नियन्त्रण गर्दछ ।

**(ण) राजबल्लभ निघण्टु**

**आम्रातं तर्पणं बल्यं गुरु विष्टम्भ्यजीर्णकृत्॥**

अमारोको फल तृप्तिदायक, बलदायक, पचाउन कठिन, कब्जियत गराउने र अजीर्ण गराउने गुणको हुन्छ ।

**(त) शालिग्राम निघण्टु :**

**आम्रातकः पीतनकः कपिचूतोम्लवाटकः । वर्षपाकी कपिचूडा तनुक्षीरी कपिप्रियः॥**

आम्रातक, पीतनक, कपिचूत, अम्लवाटक, वर्षपाकी, कपिचूडा, तनुक्षीरी र कपिप्रिय : यी अमारोका नाम हुन् ।

**(थ) सोढल निघण्टु :**

**आम्रातके पीतनकः कपिचूतोऽम्लपादपः । तुङ्गी कपी रसाढ्यश्च तनुक्षीरः कपिप्रियः॥**



आम्रातक, पितनक, कपिचूत, अम्लपादप, तुङ्गी, कपी, रसाढ्य, तनुक्षीर र कपिप्रिय : यी अमारोका नाम हुन् ।

**(द) हृदयदीपक निघण्टु :**

**...आम्रातस्तु कपीतनः... ।**

अमारोलाई आम्रात र कपीतन भनिन्छ ।

# आंम्लिका कन्द्
# (Aamlika kanda)

(क) **हारीत संहिता :**

**आम्लिकायाः स्मृतः कन्दो ग्रहण्यर्शोहितो लघुः ॥**

अमिलीको कन्द ग्रहणी र अल्काईमा फाइदाजनक र पचाउन हलुका हुन्छ । (अमिलीको रूख हुन्छ, अर्को थरी अमिलीको पनि कन्दको कुरा अन्यत्र पाइँदैन । यो कुन अमिलीको कुरा गरिएको हो पत्ता लगाउन सकिएन) ।

# आयु
# (Age)

## (क) चरक संहिता :

**शरीरेन्द्रियसत्त्वात्मसंयोगो धारि जीवितम् । नित्यगश्चानुबन्धश्च पर्यायैरायुरुच्यते ॥**

पञ्चमहाभूत (पृथ्वी, जल, तेज, वायु र आकाश) ले बनेको आत्मा सहितको, भौतिक इन्द्रिय, मन, हेर्ने, भोग्ने, जीव र ईश्वर यी सबैको संयोगको नाम नै "आयु" हो । निरन्तर गतिमान् हुनाले नै यसलाई आयु भनिन्छ । (एति गच्छतीति आयुः) । आयुले शरीरलाई बोक्दछ, प्राणलाई बोक्दछ, निरन्तर चलिरहन्छ, प्राणसँग सम्बन्धित हुन्छ र "चेतनानुवृत्ति" यसको पर्यायवाची शब्द हुन्छ ।

## (ख) राजवल्लभ निघण्टु :

**सद्योमांसं नवान्नं च बाला स्त्री क्षीरभोजनम् । घृतमुष्णोदकं चैव सद्यः प्राणकराणि षट् ॥**

भर्खर मारिएको जीवको मासु खानाले, नयाँ अन्न खानाले, कम उमेरकी स्त्री-सेवन गर्नाले, दूध पिउनाले, घिउ खानाले र तातोपानीको प्रयोग (खान र नुहाउन) गर्नाले : यी छ कुरा गर्नाले मानिसको आयु शीघ्र बढ्दछ ।



**पूतिमांसं स्त्रियो वृद्धा बालार्कस्तरुणं दधि । प्रभाते मैथुनं निद्रा सद्यः प्राणहराणि षट् ॥**

(बालार्क : बिहानको वा असोजको घाम-के.यन.स्वामी) । गनाउने (सडेको) मासु खानाले, बूढी स्त्री-सेवन गर्नाले, बालार्क सेवन गर्नाले, नजमेको दही खानाले, बिहान मैथुन गर्नाले र बिहान सुत्नाले चाँडो आयु घट्दछ ।

# आयुर्वेद् अध्ययनका नियम
# (Rules of Ayurveda study)

## (क) शार्ङ्गधर संहिता :

**कथं चाध्येय इति, गुरोरनुमतेनेति॥ केन चाध्येय इति ब्राह्मणक्षत्रियवैश्यशूद्रैरायुर्वेदोऽध्येयः॥ तत्रार्थपरिज्ञानार्थं पुण्यार्थं चात्मनः प्रजानुग्रहार्थं ब्राह्मणैः, प्रजासंरक्षणार्थं क्षत्रियैः, वृत्त्यर्थं वैश्यैः, शुश्रूषार्थमितरैः धर्मार्थं च सर्वैः ।**

कसरी यसको अध्ययन गर्ने त भन्दा गुरुको आज्ञा लिएर गर्नु पर्दछ । कसले अध्ययन गर्ने त भन्दा ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रले आयुर्वेदको अध्ययन गर्नु पर्दछ । विषयवस्तुको ज्ञान लिन, पुण्य कमाउन र लोक कल्याणका लागि ब्राह्मणले यसको ज्ञान लिनु पर्दछ । क्षत्रियले लोकरक्षाका लागि, वैश्यले पेसाका लागि र शूद्रले सेवाकार्यका लागि यसको ज्ञान लिनु पर्दछ । सबै वर्णले धर्म कमाउन यसको अध्ययन गर्नु पर्दछ ।

## (ख) हारीत संहिता :

**अद्भुतं चाप्यशङ्कञ्च नात्युच्चं नीचमेव च । यः पठेच्छास्त्रमित्थञ्च शास्त्राप्तिस्तस्य दृश्यते॥**



जो विचार गरी गरी न अति उच्च न अति मन्द स्वरमा पढ्दछ, उसलाई (नै) शास्त्रज्ञान प्राप्त हुन्छ ।

**चर्वणं गिलनं चापि कम्पितं श्वसितं तथा । नीचोच्चं चैव गम्भीरं वर्जयेत्पाठकेन तु॥**

चपाउनु, निल्नु, काँप्नु, स्वाँ स्वाँ गर्नु, नीचता, उचता र गाम्भीर्यतालाई विद्यार्थीले छोडिदिनु पर्दछ ।

**अनध्याये न शास्त्रस्य नोत्सवे यज्ञकर्मसु । जातके सूतके चाथ पठनं न विधीयते॥**

अनध्याय (वेद आदि शास्त्र पढ्न नहुने भनी तोकिएको समय), उत्सव, यज्ञकर्म, सूतक र जुठोमा शास्त्र पढ्न हुन्न ।

**चतुर्दश्यष्टमीदर्शप्रतिपत्पूर्णिमास्तथा । वर्ज्याः पञ्च इमाः पाठे मुनिभिः परिकीर्तिताः॥**

चतुर्दशी, अष्टमी, औंसी, परेवा र पूर्णिमा-यी पाँच तिथिहरूलाई मुनिजनले पढ्न नहुने तिथि भनी बताएका छन् ।

**अकाले दुर्दिने गर्जे दिग्दाहे भूमिकम्पने । शास्त्रपाठस्तथा वर्ज्यो ग्रहणे चन्द्रसूर्य्ययोः॥**

अकाल, खराब दिन, बादल गर्जेका समयमा, दिग्दाहका बेलामा, भूकम्पमा र चन्द्रसूर्य ग्रहणमा शास्त्र पढ्न निषेध छ ।

**अनध्याया द्वादशैते प्रोक्ताः श्रृणु तु पुत्रक । गुरुपीडासमुत्पन्ने नृपे संपीडितेऽथवा ॥**
**आहवे जीवसम्पाते प्रदोषे वाऽथवा पुनः । राष्ट्रपीडासमुत्पन्ने न कुर्याच्छास्त्रपाठनम् ॥**

हे पुत्र ! अनध्याय बाह्र (हुन्छन्) भनी बताइएका छन्, तिमी सुन । गुरुलाई सञ्चो नहुँदा (पीडा हुँदा), राजालाई सञ्चो नहुँदा, युद्धमा, जीवको मृत्युमा, प्रदोषकालमा र देश दुःखी हुँदा शास्त्र नपढ्नू ।

**एतैस्तु पठितं शास्त्रं न स्वार्थे सिद्धिसाधकम् । न श्रेयसे न माङ्गल्ये नोपकारे सुखावहम् ॥**

यी अनध्यायमा पढिएको शास्त्रले आफ्नो प्रयोजन सिद्ध हुन दिँदैन, कल्याण गर्दैन, मङ्गल गर्दैन र उपकारमा सुख दिँदैन ।

**एवं ज्ञात्वा पठति निपुणो वैद्यविद्यानिधानं श्रेयस्तस्य प्रतिदिनमसौ वाञ्छितार्थं प्रपद्येत् ।**
**कीर्तिः सौख्यं भवति नितरां तस्य लोकप्रशंसा पूज्यो राज्ञां सततमपि वै जायते स्वार्थसिद्धिः ॥**

यी कुरा बुझी जो कुशल वैद्य शास्त्र पढ्दछ उसलाई कल्याण हुन्छ र हरदिन मनले चाहेको सफलता प्राप्त गर्दछ । उसलाई हरदिन सुख हुन्छ, संसारमा उसको कीर्ति फैलिएर प्रशंसा प्राप्ति हुन्छ । उसको प्रयोजन पनि पूरा हुन्छ र यसरी पढ्ने पण्डित राजाहरूबाट पनि सदैव पूजनीय हुन्छ ।



**आयुर्वेदमिदं सम्यङ् न देयं यस्य कस्यचित् ॥**
**नाभक्तायाप्यशान्ताय न मूर्खाय न चाधमे । शान्ते देयं न देयं स्यात् सर्वथा नाधमेऽधने ॥**

आयुर्वेदसम्बन्धी ज्ञान जो पायो त्यसैलाई राम्रोसँग दिनु हुँदैन । अभक्त, अशान्त, मूर्ख र नीचलाई कहिल्यै यसको ज्ञान नदिनू । शान्त पुरुषलाई दिनू । अधम र कङ्गाललाई नदिनू ।

# आयुर्वेदका आठ अङ्ग
# (Eight branches of Ayurveda)

(क) **शार्ङ्गधर संहिता :**

**कत्यङ्गश्चायुर्वेद इति अष्टाङ्गः, तस्य कौमारभृत्यं कायचिकित्सा शल्याहर्तृकं शालाक्यं विषतन्त्रं भूततन्त्रमगदतन्त्रं रसायनतन्त्रमिति ॥**

आयुर्वेदका कति अङ्ग छन् भन्दा आठ अङ्ग छन् । ती कौमारभृत्य, कायचिकित्सा, शल्यचिकित्सा, शालाक्य, विषतन्त्र, भूततन्त्र, अगदतन्त्र (वा वाजीकरण) र रसायन तन्त्र हुन् ।

**अत्राह-अङ्गान्येतानि शरीरमस्य कतमत्, यदाश्रयन्त्यङ्गानि, अङ्गानि हि शरीराश्रयाणि भवन्ति;**

यदि यी आठ अङ्ग हुन् भने जसको यी आठ अङ्ग आश्रय लिन्छन् किन कि यी आठ अङ्ग शरीरको आश्रय लिएर अडिएका हुन्छन् त्यो शरीर चाहीँ के हो त ?

**अत्राह तस्य शरीरं धर्मः, धर्माश्रयं ह्यस्मिन् कर्म सिध्यतीति ॥**

धर्म नै उसको शरीर हो । धर्मको आश्रय लिएर नै उसका सबै काम सफल हुने गर्दछन् ।



(ख) **अष्टाङ्ग हृदय :**

**कायवालग्रहोर्ध्वाङ्गशल्यदंष्ट्राजरावृषान्॥ अष्टावङ्गानि तस्याहुश्चिकित्सा येषु संश्रिता ।**

आयुर्वेदका आठ अङ्गहरु कायचिकित्सा, बालचिकित्सा, ग्रहचिकित्सा, ऊर्ध्वाङ्गचिकित्सा, शल्यचिकित्सा, दंष्ट्रचिकित्सा, जराचिकित्सा र वृषचिकित्सा हुन् । यिनै आठ अङ्गमा सबै चिकित्सा समेटिएको हुन्छ ।

(ग) **सुश्रुत संहिता :**

**ततोऽल्पायुष्ट्वमल्पमेधस्त्वं चालोक्य नराणां भूयोऽष्टधा प्रणीतवान्॥**

फेरी मानिसलाई अल्पायु र अल्पबुद्धिका देखेर यो आयुर्वेदलाई (धन्वन्तरिले) आठ अङ्गमा बनाउनु भयो (भाग लगाउनु भयो) ।

**यद्यथा-शल्यं, शालाक्यं, कायचिकित्सा, भूतविद्या, कौमारभृत्यम्, अगदतन्त्रं रसायनतन्त्रं, वाजीकरणतन्त्रमिति ॥७॥**

आयुर्वेदका आठ भाग यी हुन्-शल्य, शालाक्य, कायचिकित्सा, भूतविद्या, कौमारभृत्य, अगदतन्त्र, रसायनतन्त्र र वाजीकरणतन्त्र ।

## (घ) राज निघण्टु :

**द्रव्याभिधानगदनिश्चयकायसौख्यं शाल्यादिभूतविषग्रहबालवैद्यम् ।**
**विद्याद्रसायनवरं दृढदेहहेतुमाायुःश्रुतेर्द्विवचतुरङ्गमिहाह शम्भुः ॥**

भगवान् शिवले द्रव्याभिधान (द्रव्य, ओखती, जडीबुटी आदि कुराको वर्णन भएको खण्ड), गदनिश्चय (रोग पहिचान खण्ड), कायसौख्य (रोग र उपचारको निर्णय भएको खण्ड), शाल्यादि (चिकित्सा खण्ड), भूत (अदृश्य हानिकारक शक्तिका बारेमा वर्णन भएको खण्ड), विष (विषविकार खण्ड), बाल (बालकको चिकित्सा खण्ड) र रसायन (औषधीहरुको मिश्रण, कायाकल्प आदि बताइएको खण्ड) गरी  शरीरलाई बलियो र निरोगी बनाउने आठ वटा खण्ड (अष्टाङ्ग) का बारेमा बताउनु भएको छ ।

**अष्टाङ्गं शल्यशालाक्यकायभूतविषं तथा । बालो रसायनं वृष्यमिति कैश्चिदुदाहृतम् ॥**

केही विद्वानहरूले शल्य, शालाक्य, काय, भूत, विष, बाल, रसायन र वृष्य गरी आयुर्वेदका आठ-अङ्ग हुन्छन् भनी बताएका छन् ।

**अष्टाङ्गज्ञः सुवैद्यो हि कियद्धीनो यथाऽङ्गतः । अङ्गहीनः स विज्ञेयो न श्लाघ्यो राजमन्दिरे ॥**



आयुर्वेदका आठ वटै अङ्गका बारेमा ज्ञान हुने वैद्यलाई नै असल वैद्य भनिन्छ । यी आठ अङ्गमध्ये केही कम ज्ञान हुने वैद्य अपाङ्ग जस्तै हुन्छ र उ राजवैद्य हुन लायक हुँदैन ।

# आयुर्वेदको आधार
# (Base of Ayurveda)

## (क) काश्यप संहिता :

**किमाश्रय इति वातपित्तकफाश्रयः । ते च द्वे द्वे देवते श्रिताः; मारुतमाकाशं च वातः श्रितः; अग्निमादित्यं च पित्तं, सोमं वरुणं च कफः, तास्तेषां देवताः । धर्मार्थकामानित्येके, सत्त्वरजस्तमांसीत्येके, साध्ययाप्यासाध्यत्वमित्येके ॥**

आयुर्वेद् के मा आश्रित हुन्छ त भन्दा वात, कफ र पित्तमा आश्रित हुन्छ । यी वात, पित्त र कफ पनि दुई दुई देवतामा आश्रित हुन्छन् । वात वायु र आकाशको, पित्त अग्नि र सूर्यको तथा कफ चन्द्रमा र वरुण (जल) देवताको आश्रयमा हुन्छ । यी तिनका देवता हुन् । कसैले आयुर्वेद धर्म, अर्थ र काममा आश्रित हुन्छ भन्दछन् । कोही सत्व, रज र तम गुणमा आश्रित हुन्छ भन्दछन् । कोही ठिक पार्न सकिने, यथास्थितिमा राख्न सकिने र निको पार्न नसकिने गरी तीन कुराको आश्रयमा हुन्छ पनि भन्दछन् ।

## (ख) चरक संहिता :

**सत्त्वमात्मा शरीरं च त्रयमेतत्त्रिदण्डवत् । लोकस्तिष्ठति संयोगात्तत्र सर्वं प्रतिष्ठितम् ॥**
**स पुमाँश्चेतनं तच्च तच्चाधिकरणं स्मृतम् । वेदस्यास्य तदर्थं हि वेदोऽयं सम्प्रकाशितः ॥**

मन, चेतना र शरीरको बनोटलाई लोक भनिन्छ । यी तीन कुरा मिलेर त्रिखूटी वा मचाकथीले जसरी नै लोकलाई धारण गरेका हुन्छन् । यी कुराको संयोगबाट बनेको पुरुषमा जन्ममरण आदि सबै कुरा रहेका हुन्छन् । सत्व आदिको समूहलाई पुरुष भनिन्छ । चेतन भने द्रव्य हो । आयुर्वेदको क्षेत्र यही हो र यसैका लागि आयुर्वेद बनाइएको हो ।

व्याख्या : प्रायः छ महिनाभित्रका बालकलाई घाममा सुताउन, खेलाउन वा झिँगा, भुसुनाका दुःख हटाउन तीनवटा नर्कट वा लौरा ठड्याई वरिपरि कपडा अल्झाइने चुच्चे आकारको तीनखुट्टे साधनलाई मचाकथी भनिन्छ ।

# आयुर्वेदको इतिहास
# (History of Ayurveda)

(क) **ब्रह्मवैवर्त महापुराण, ब्रह्मखण्ड, अध्याय १६ :**

**ऋग्यजुःसामाथर्वाख्यान्दृष्ट्वा वेदान्प्रजापतिः । विचिन्त्य तेषामर्थं चैवायुर्वेदं चकार सः ॥**

ऋक्, यजु, साम र अर्थ वेदलाई अध्ययन गरी विचार गरेर प्रजापतिले आयुर्वेदलाई सङ्कलन गर्नुभयो ।

**कृत्वा तु पञ्चमं वेदं भास्कराय ददौ विभुः । स्वतन्त्रसंहितां तस्माद्भास्करश्च चकार सः ॥**

यसरी पाँचौं वेद लेखेर त्यसलाई भगवानले सूर्यलाई दिनु भयो । यसबाट भगवान् सूर्यले एउटा स्वतन्त्र संहिता (बेग्लै ग्रन्थ) बनाउनु भयो ।

**भास्करश्च स्वशिष्येभ्य आयुर्वेदं स्वसंहिताम् । प्रददौ पाठयामास ते चक्रुः संहितास्ततः ॥**

सूर्यले पनि आफूले लेखेको आयुर्वेदसंहिता आफ्ना शिष्यहरूलाई पढाउनु भयो । त्यसपछि ती शिष्यहरूले पनि अनेक संहिताहरू लेखे ।



**तेषां नामानि विदुषां तन्त्राणि तत्कृतानि च । व्याधिप्रणाशबीजानि साध्वि मत्तो निशामय ॥**

हे पतिव्रता मालावती ! ती विद्वानका तथा तिनले लेखेका रोगनाशक वीजरूपी तन्त्र (शास्त्र) हरूका नाम मसँग सुन ।

**धन्वन्तरिर्दिवोदासः काशीराजोऽश्विनीसुतौ । नकुलः सहदेवोऽर्किश्चच्यवनो जनको बुधः ॥**
**जाबालो जाजलिः पैलः करथोऽगस्त्य एव च । एते वेदाङ्गवेदज्ञाः षोडश व्याधिनाशकाः ॥**

धन्वन्तरि, दिवोदास, काशिराज, अश्विनीकुमार, नकुल, सहदेव, यमराज, च्यवन, जनक, बुध, जाबाल, जाजलि, पैल, करथ र अगस्त्य : यी सोह्र जना विद्वानहरू वेद एवं वेदाङ्गका ज्ञाता र रोग-नाशकर्ता (वैद्य) हुन् ।

**चिकित्सातत्त्वविज्ञानं नाम तन्त्रं मनोहरम् । धन्वन्तरिश्च भगवांश्चकार प्रथमं सति ॥**

भगवान् धन्नन्तरिले सर्वप्रथम "चिकित्सा-तत्त्वविज्ञान" नामगरेको एक सुन्दर तन्त्र लेखे ।

**चिकित्सादर्पणं नाम दिवोदासश्चकार सः । चिकित्साकौमुदीं दिव्यां काशीराजश्चकार सः ॥**

दिवोदासले "चिकित्सादर्पण" र काशिराजले "दिव्य चिकित्साकौमुदी" नामक ग्रन्थ लेखे ।

**चिकित्सासारतन्त्रं च भ्रमघ्नं चाश्विनीसुतौ । तन्त्रं वैद्यकसर्वस्वं नकुलश्च चकार सः ॥**

अश्विनीकुमारहरूले भ्रम नाश गर्ने "चिकित्सा सारतन्त्र" तथा नकुलले "वैद्यकसर्वस्व" ग्रन्थ लेखे ।

**चकार सहदेवश्च व्याधिसिन्धुविमर्दनम् । ज्ञानार्णवं महातन्त्रं यमराजश्चकार ह ॥**

सहदेवले "व्याधिसिन्धुविमर्दन" र यमराजले "ज्ञानार्णव" नामक महातन्त्र लेखे ।

**च्यवनो जीवदानं च चकार भगवानृषिः । चकार जनको योगी वैद्यसन्देहभञ्जनम् ॥**

भगवान् च्यवन ऋषिले "जीवदान" नामक ग्रन्थ तथा योगी जनकले "वैद्यसन्देहभञ्जन" नामक ग्रन्थ लेखे ।

**सर्वसारं चन्द्रसुतो जाबालस्तन्त्रसारकम् । वेदाङ्गसारं तन्त्रं च चकार जाजलिर्मुनिः ॥**

चन्द्रमाका पुत्र बुधले "सर्वसार", जाबालले "तन्त्रसार" र जाजल मुनिले "वेदाङ्गसार" नामक तन्त्र लेखे ।



**पैलो निदानं करथस्तन्त्रं सर्वधरं परम् । द्वैधनिर्णयतन्त्रं च चकार कुम्भसम्भवः ॥**

पैलले "निदान" नामक तथा करथले "सर्वधर" नामक तन्त्र लेखे । अगस्त्य ऋषिले "द्वैधनिर्णय" नामक तन्त्र लेखे ।

**चिकित्साशास्त्रबीजानि तन्त्राण्येतानि षोडश । व्याधिप्रणाशबीजानि बलाधानकराणि च ॥**

यी सोह्र वटा शास्त्र नै चिकित्साशास्त्र अर्थात् आयुर्वेदका वीउ, रोग नाशगर्ने कारण र शरीरमा बल सञ्चार गर्ने माध्यम हुन् ।

**मथित्वा ज्ञानमन्त्रेणैवायुर्वेदपयोनिधिम् । ततस्तस्मादुदाजह्रुर्नवनीतानि कोविदाः ॥**

आयुर्वेदरूपी समुद्रलाई ज्ञानरूपी मदानीले मथेर विद्वानहरूले नौनी स्वरूपका  यी ग्रन्थहरू लेखेका थिए ।

**एतानि क्रमशो दृष्ट्वा दिव्यां भास्करसंहिताम् । आयुर्वेदं सर्वबीजं सर्वं जानासि सुन्दरि ॥**

हे सुन्दरि ! यो ग्रन्थ क्रमैले अध्ययन गरेपछि तिमीले दिव्य भास्कर-संहिता लगायत सबैको बीजरूपी आयुर्वेदको पूरापूर ज्ञान पाउनेछ्यौ ।

**(ख) श्रीमद्भागवत् महापुराण, स्कन्ध ३, अध्याय १२ :**

**आयुर्वेदं धनुर्वेदं गान्धर्वं वेदमात्मनः । स्थापत्यं चासृजद् वेदं क्रमात्पूर्वादिभिर्मुखैः ॥**

यसैगरी आयुर्वेद (चिकित्साशास्त्र), धनुर्वेद (शस्त्रशास्त्र), गान्धर्ववेद (सङ्गीतशास्त्र) र स्थापत्यवेद (शिल्पशास्त्र) : यी चार उपवेदलाई पनि क्रमैले (भगवान् ब्रह्माले) तिनै पूर्व आदि मुखबाटै उत्पन्न गर्नुभयो ।

**(ग) श्रीमद्भागवत् महापुराण, स्कन्ध ८, अध्याय ८ :**

**पीतवासा महोरस्कः सुमृष्टमणिकुण्डलः । स्निग्धकुञ्चितकेशान्त सुभगः सिंहविक्रमः ॥**
**अमृतापूर्णकलशं बिभ्रद् वलयभूषितः । स वै भगवतः साक्षाद्विष्णोरंशांशसम्भवः ॥**
**धन्वन्तरिरिति ख्यात आयुर्वेददृगिज्यभाक् ।**

शरीरमा पिताम्बर, कानमा चम्किला मणिका कुण्डल, फराकिलो छाती, तरुण अवस्था, सिंहजस्ता पराक्रमी, अनुपम सौन्दर्य, चिल्ला र घुँगुर्किएका कपाल लहराइएका ती पुरुषको रूप अती अनौठो थियो । उनका हातमा बाला र अमृतले भरिएको कलश थियो । उनी साक्षात् विष्णु भगवान्का अंश अवतार थिए । उनी नै आयुर्वेदका प्रवर्तक तथा यज्ञका भोक्ता धन्वन्तरिका नामले सुप्रसिद्ध भए ।



**(घ) श्रीमद्भागवत् महापुराण, स्कन्ध ९, अध्याय १७ :**

**यः पुरूरवसः पुत्र आयुस्तस्याभवन् सुताः । नहुषः क्षत्रवृद्धश्च रजी रम्भश्च वीर्यवान्॥**
**अनेना इति राजेन्द्र शृणु क्षत्रवृधोऽन्वयम् । क्षत्रवृद्धसुतस्यासन् सुहोत्रस्यात्मजास्त्रयः ॥**
**काश्यः कुशो गृत्समद इति गृत्समदादभूत् । शुनकः शौनको यस्य बह्वृचप्रवरो मुनिः ॥**
**काश्यस्य काशिस्तत्पुत्रो राष्ट्रो दीर्घतमःपिता । धन्वन्तरिर्दैर्घतम आयुर्वेदप्रवर्तकः ॥**

राजा पुरूरवाका आयु नामका एक पुत्र भए । आयुका नहुष, क्षत्रवृद्ध, रजि, शक्तिशाली र रम्भ नामका पाँच पुत्रहरू भए । क्षत्रवृद्धका पुत्र सुहोत्र भए । सुहोत्रका काश्य, कुश र गृत्समद नामका तीन पुत्रहरू भए । गृत्समदको शुनक नामक पुत्र भए । यिनै शुनकका ऋग्वेदीमा श्रेष्ठ शौनक मुनि पुत्र भए । काश्यका पुत्र काशि, काशिका पुत्र राष्ट्र, राष्ट्रका पुत्र दीर्घतमा र दीर्घतमाका पुत्र धन्वन्तरि भए । यिनै नै आयुर्वेदका प्रवर्तक हुन् । यी यज्ञभाग पाउने भगवान् वासुदेवका अंश अवतार हुन् । यिनलाई सम्झनाले मात्र पनि सबै किसिमका रोग नाश हुन्छन् ।

(ङ) **ब्रह्मपुराण, अध्याय ९ :**

**धनुस्तु दीर्घतपसो विद्वान्धन्वन्तरिस्ततः॥**
**तपसोऽन्ते सुमहतो जातो वृद्धस्य धीमतः । पुनर्धन्वन्तरिर्देवो मानुषेष्विह जन्मनि॥**
**तस्य गेहे समुत्पन्नो देवो धन्वन्तरिस्तदा । काशिराजो महाराजः सर्वरोगप्रणाशनः॥**
**आयुर्वेदं भरद्वाजात्प्राप्येह स भिषक्क्रियः । तमष्टधा पुनर्व्यस्य शिष्येभ्यः प्रत्यपादयत्॥**

दीर्घतपसाका पुत्र धनु भए । धनुका पुत्र अति विद्वान् धन्वन्तरि भए । वृद्ध बुद्धिमान्ले (पूर्वजन्ममा) गरेको ठूलो तपस्याको अन्तमा पुनः यस जन्ममा मनुष्यका रूपमा धन्वन्तरि भएर जन्मिएका थिए । उनका घरमा त्यसबेलामा देवता धन्वन्तरिले जन्म लिएका थिए । महर्षि भारद्वाज सबै रोग नाशगर्ने क्षमताका थिए । त्यहाँ वैद्यकर्म जानेका ती भारद्वाजसँग आयुर्वेदसम्बन्धी ज्ञान हासिल गर्नेहरू भएका थिए । उनले आयुर्वेदलाई आठ भागमा विभाजन गरी आफ्ना शिष्यहरूलाई ज्ञान दिएका थिए ।

(च) **शार्ङ्गधर संहिता :**

**कथं चोत्पन्न इति; आहअथर्ववेदोपनिषत्सु प्रागुत्पन्नः; स्वयंभूर्ब्रह्मा प्रजाः सिसृक्षुः प्रजानां परिपालनार्थमायुर्वेदमेवाग्रेऽसृजत् सर्ववित्, ततो विश्वानि भूतानि ।**

आयुर्वेद कसरी उत्पन्न भयो त भन्ने प्रश्नमा भन्नू कि-पहिले यो अथर्ववेदोपनिषदमा उत्पन्न भयो । सबै कुराको ज्ञान भएका भगवान् ब्रह्माले जीव (मानव) सृष्टि गर्नुपूर्व तिनको रक्षार्थ पहिले आयुर्वेदको रचना गर्नु भयो । यसपछि सबै जीवको सृष्टि गर्नु भयो ।

**ततस्तं पुण्यमायुर्वेदमनन्तमायुषो वर्धनमाधारमाप्यायनममृतमश्विभ्यां कः प्रददौ, ताविन्द्राय इन्द्र ऋषिभ्यश्चतुर्भ्यः कश्यपवशिष्ठात्रिभृगुभ्यः; ते पुत्रेभ्यः शिष्येभ्यश्च प्रददुर्हितार्थं धर्मार्थकाममोक्षशक्तिपरिपालनार्थं चेति, एवमुत्पन्नः॥**

यसपछि ब्रह्माले त्यो पुण्यदायी, अनन्त, आयुवर्धक, आयुको आधार र आयुलाई सन्तुष्ट पार्ने आयुर्वेद अश्विनीकुमारहरूलाई सिकाउनु भयो । अश्विनीकुमारले इन्द्रलाई तथा इन्द्रले कश्यप (म), वसिष्ठ, अत्रि र भृगु गरी चार ऋषिहरूलाई सिकाए । यिनले सबैको भलो चिताउँदै तथा धर्म, अर्थ, काम र मोक्ष एवं शक्तिको रक्षाका लागि आआफ्ना छोरा र शिष्यहरुलाई सिकाए (सिकाऔं) । यसरी आयुर्वेद उत्पन्न भएको हो ।

**कं च वेदं श्रयति ? अथर्ववेदमित्याह; तत्र हि रक्षाबलिहोमशान्ति.....प्रतिकर्मविधानमुद्दिष्टं विशेषेण, तद्वदायुर्वेदे तस्मादथर्ववेदं श्रयति । सर्वान् वेदानित्येके, पद्यगद्यकथ्यगेयविद्याश्रयादिति; न चैतदेवम्, आयुर्वेदमेवाश्रयन्ते वेदाः । तद्यथा-दक्षिणे पाणौ चतसृणामङ्गुलीनामङ्गुष्ठ आधिपत्यं कुरुते, न च नाम ताभिः सह समतां गच्छति, एकस्मिंश्च पाणौ भवति, एवमेवायमृग्वेदयजुर्वेदसामवेदाथर्ववेदेभ्यः पञ्चमो भवत्यायुर्वेद इति । किं कारणं ? यथाहि वेदेषु सततं ब्रह्मज्ञैस्त्रिवर्गसंयुक्तं पुरुषनिश्रेयसं चिन्त्यते, एवमेवास्मिन्नपि वेदे निदानोत्पत्तिलिङ्गारिष्टचिकित्सितैः सततमेव हितसुखकरं त्रिवर्गसारभूतं पुरुषनिश्रेयसं चिन्त्यते;**

**तद्यथा च विविधविज्ञानज्ञानोपपन्ना भाष्यवचनविदोऽष्टाङ्गया बुद्ध्योपपन्ना लङ्घनप्लवनस्थानासनगमनागमनसमर्था अपि च नाम मनुष्या अदेशज्ञानवन्तो नित्यमेव देशज्ञं दैशिकमन्वयुरेवमेव खलु वेदनासु शिक्षाकल्पसूत्रनिरुक्तवृत्तच्छन्दोयज्ञसंस्तरज्ञानसमुच्चयविशेषज्ञा आयुर्वेदमेवानुधावन्ति, तस्माद्ब्रूमः ऋग्वेदयजुर्वेदसामवेदाथर्ववेदेभ्यः पञ्चमोऽयमायुर्वेदः । यतश्च व्याधितस्यारोग्यमरोगस्य च शेषाः क्रिया धर्मार्थकाममोक्षेषु निर्वर्तन्ते॥**

आयुर्वेद कुन वेदमा आश्रित छ त भन्दा अथर्ववेदमा आश्रित छ भन्नू । अथर्ववेदमा रक्षा, बलि, होम, शान्ति...आदि मार्फत उपचारको विधि बताइएको छ । आयुर्वेदमा पनि यी कुरा छन् । यसैले यो अथर्ववेदमा आश्रित छ । केही आचार्य भन्दछन् कि आयुर्वेदमा पद्य, गद्य, कथा, गान, विद्या आदि हुनाले यो चारैवेदमा आश्रित छ । तर यो सही होइन । बरु अरु वेदहरू चाहीँ आयुर्वेदमा आश्रित छन् । किन कि-जसरी दाहिने हातमा चार औंलाको मालिक बूढी औंला हुने गर्दछ, यो औंलो अरु औंला जस्तो पनि हुँदैन, यसमा बेग्लै विशेषता हुन्छ, त्यसरी नै यो आयुर्वेदलाई पनि ऋक्, यजु, साम र अथर्व वेदभन्दा बेग्लै पाँचौं वेद भन्ने गरिन्छ । यसको कारण यो हो कि जसरी वेदमा ब्रह्मज्ञानी ऋषिहरूले धर्म, अर्थ र काम सहितको पुरुषको मोक्षका बारेमा वर्णन गरिएको छ, त्यसैगरी आयुर्वेदमा पनि निदान, रोगको उत्पत्ति, लक्षण, हानी र उपचार मार्फत हितकारी र सुखदायक एवं धर्म, अर्थ र कामको साररूपी त्यही पुरुषकै बारेमा वर्णन गरिएको छ । जसरी अनेक प्रकारका ज्ञान, विज्ञान मार्फत बोल्न जान्ने, अष्टाङ्ग बुद्धि भएको, नाघ्न सक्ने, पौडन जान्ने, स्थानका बारेमा जान्ने, बस्न जान्ने, हिँडडुल गर्न जान्ने र फर्केर आउन सक्षम, स्थानका बारेमा जानकार भए पनि सधैं त्यो स्थानका बारेमा जान्ने व्यक्ति समक्ष वा त्यो स्थानमा बस्नेहरू भएकै ठाउँमा मानिस सोधखोज गर्न पुग्ने गर्दछ, त्यसरी नै शिक्षा, कल्प, सूत्र, निरुक्त, वृत्त, छन्द, यज्ञसंस्तर तथा अन्य ज्ञानमा पोख्त व्यक्ति पनि आफूलाई वेदना (रोग) हुँदा आयुर्वेदकै शरणमा आउने गर्दछ । यसैले ऋग्, यजु, साम र अथर्ववेदभन्दा फरक यो आयुर्वेदलाई पाँचौं वेद भन्ने गरिन्छ । किन कि रोगी मानिसका वा स्वस्थ मानिसका सबै कर्म : धर्म, अर्थ, काम र मोक्षप्रति समर्पित हुने गर्दछन् । अर्थात् स्वस्थ र रोगी हरेक व्यक्तिका लागि धर्म, अर्थ, काम र मोक्ष नै उसले गर्ने कर्मको प्रमुख लक्ष्य हुने गर्दछ ।



**किं नित्योऽनित्य इति, कुतः ? आर्षवचनप्रामाण्यादविनाशित्वात् साध्यासिद्धेर्देशकालसामान्यादिति॥**

आयुर्वेद नित्य हो कि अनित्य त ? यसको उत्तर मामान्यजनको वचनका आधारमा, अविनाशी हुनाले, साध्या (तर्क)-सिद्धि (प्रमाण) वादीका विचारमा हुने अनित्यता रूपी सिद्धि (निर्णय) हुनाले तथा देश र समय समान हुनाले आयुर्वेद पनि नित्य हुन्छ ।

**(छ) अष्टाङ्ग हृदय :**

**ब्रह्मा स्मृत्वाऽऽयुषो वेदं प्रजापतिमजिग्रहत् । सोऽश्विनौ तौ सहस्राक्षं सोऽत्रिपुत्रादिकान्मुनीन्॥**
**तेऽग्निवेशादिकांस्ते तु पृथक् तन्त्राणि तेनिरे ।**

ब्रह्माले आयुर्वेदलाई स्मरण गरी प्रजापतिलाई पढाए । प्रजापतिले अश्विनीकुमार- हरुलाई र तिनले इन्द्रलाई दिए । इन्द्रले आत्रेय आदि मुनिहरुलाई दिए । यी मुनिहरुमा पनि अग्निवेश आदिले यसको बेग्लाबेग्लै तन्त्र (ग्रन्थ) बनाए ।

व्याख्याः- जब आयुर्वेदको जन्म भयो तब कसैले पनि यसलाई आयुर्वेदशास्त्र भन्दैनथ्यो । यसलाई नित्य मानिन्छ । अभिव्यक्ति काल (शब्द उत्पत्ति काल) लाई नै यसको जन्मकाल मानिन्छ । चरकसंहितामा भनिएको छः- "सोऽयमायुर्वेदः शाश्वतो निर्दिश्यते, अनादित्वात्, स्वभावसंसिद्धलक्षण-त्वात्, भावस्वभावनित्यत्वाच्च । न हि नाभूत् कदाचिदायुषः सन्तानो, बुद्धिसन्तानो वा, शाश्वतश्चायुषो वेदिता ।" यसैले ब्रह्माले पनि आयुर्वेदको सृष्टि गरेका होइनन्, सम्भेका मात्र हुन् । त्यसपछि गुरुशिष्य परम्परा चल्यो । कुनै पनि ग्रन्थ वा विद्या पढाउनाले मात्र परिष्कृत हुने गर्दछ । साथै, गुरुऋणबाट मुक्ति विद्यादादानले मात्र हुन्छ । यसैले त चक्रपाणिले भनेका छन्:- "यो हि गुरुभ्यः सम्यगादाय विद्यां न प्रयच्छत्यन्तेवासिभ्यः स खल्वृणी, गुरुजनस्य महदेनो भवति" । यही कारणले गर्दा गुरुपरम्परा सँगसँगै शिष्य परम्परा पनि चलि रह्यो । कुनै कालखण्डमा योग्य शिष्य नपाउँदा अग्निवेश आदि मुनिले बल्ल आआफ्ना ढङ्गले तन्त्र बनाएका थिए । जस्तो किः-अथ भेलादयश्चक्रुः स्वं स्वं तन्त्रं कृतानि च । श्रावयामासुरात्रेयं सर्पिसङ्घं सुमेधसः । यो शास्त्रको उद्देश्य नै सबै प्राणीमाथि दया गर्नु रहेको छ । यो आयुर्वेद, अथर्ववेदको उप अङ्ग हो । भनिएकै छ-"आयुषः पालनं वेदमुपवेदानामात्म-नोऽथर्ववेदे भक्तिरादेश्याः वेदो ह्याथर्वणो दानस्वस्त्ययनबलिमङ्गलहोमनियमप्रायश्चित्तोपवास-मन्त्रादिपरिग्रहाच्चिकित्सां प्राहः चिकित्सा चायुषो हितायोपदिश्यते" ।

(ज) **भावप्रकाश संहिता :**



**तत्रादौ ब्रह्मणः प्रादुर्भावः ।**

सर्वप्रथम भगवान् ब्रह्माको उत्पत्ति भयो ।

**विधाताऽथर्वसर्वस्वमायुर्वेदं प्रकाशयन् । स्वनाम्ना संहितां चक्रे लक्षश्लोकमयीमृजुम् ॥**

सर्वप्रथम सृष्टिकर्ता ब्रह्माले अथर्ववेदको अर्थसाररूपी आयुर्वेदको सृष्टि गर्नु भयो र आफ्नै नामको एक लाख श्लोकको एक सरल संहिता (ब्रह्म-संहिता) बनाउनु भयो ।

**ततः प्रजापतिं दक्षं दक्षं सकलकर्मसु । विधिर्धीनीरधिः साङ्गमायुर्वेदमुपादिशत् ॥**

यसपछि बुद्धिका सागर ब्रह्माले आठ वटै अङ्ग सहितको त्यो आयुर्वेदलाई सबै कुरामा चलाख भएका दक्षप्रजापतिलाई पढाउनु भयो ।

**अथ दक्षः क्रियादक्षः स्ववैद्यौ वेदमायुषः । वेदयामास विद्वांसौ सूर्य्यांशौ सुरसत्तमौ ॥**

कर्ममा चतुर दक्षप्रजापतिले (ब्रह्माबाट सिकेपछि) सूर्यका पुत्र, देवतामा श्रेष्ठ, विद्वान अश्विनीकुमारलाई आयुर्वेद पढाए ।

**दक्षाद्धीत्य दस्रौ वितनुतः संहितां स्वीयाम् । सकलचिकित्सकलोकप्रतिपत्तिविवृद्धये धन्याम्॥**

अश्विनीकुमारले दक्षप्रजापतिबाट (आयुर्वेद) पढी सारा वैद्यहरूको क्षमता बढाउने उद्देश्यले आफ्नै नामको उत्तम संहिता (ग्रन्थ) बनाए ।

**स्वयम्भुवः शिरश्छिन्नं भैरवेण रुषाऽथ तत् । अश्विभ्यां संहितं तस्मात्तौ जातौ यज्ञभागिनौ॥**

यिनै अश्विनीकुमारले रिसाएका भैरवद्वारा काटिएको ब्रह्माको शिरलाई जोडी दिए । त्यही बेलादेखि अश्विनीकुमारले यज्ञमा भाग पाउन लागे ।

**देवासुररणे देवा दैत्यैर्ये सक्षताः कृताः । अक्षतास्ते कृताः सद्यो दस्राभ्यामद्भुतं महत्॥**

देवता र राक्षसका बीच भएको युद्धमा राक्षसबाट घायल बनाइएका देवतालाई (पनि यिनले) ठिक पारि दिए, यो अझ बढी आश्चर्यजनक काम गरे ।

**वज्रिणोऽभूद्भुजस्तम्भः स दस्राभ्यां चिकित्सितः । सोमान्निपतितश्चन्द्रस्ताभ्यामेव सुखीकृतः॥**

इन्द्रका नचल्ने भएका (प्यारालाइसिस भएका) हातलाई यिनैले ठिक पारि दिएका थिए । अनि अमृतरहित भएका चन्द्रमालाई पनि अमृतयुक्त गरी उनलाई सुखी पारि दिएका थिए ।

**विशीर्णा दशनाः पूष्णो नेत्रे नष्टे भगस्य च । शशिनो राजयक्ष्माऽभूदश्विभ्यां ते चिकित्सिताः॥**

पूषा ऋषिका दाँत फुक्लेका (झगडामा भाँचिएका) थिए, भग देवताका आँखा (झगडामा) नष्ट (दृष्टि ?) भएका थिए, चन्द्रमालाई क्षयरोग लागेको थियो-यी सबैको उपचार अश्विनीकुमारहरूले नै गरेका थिए । (जसले गर्दा यी सबै स्वस्थ भएका थिए) ।

**भार्गवश्च्यवन कामी वृद्धः सन्विकृतिं गतः । वीर्यवर्णस्वरोपेतः कृतोऽश्विभ्यां पुनर्युवा॥**

भृगु गोत्रमा उत्पन्न कामी (सेक्सी) च्यवन ऋषि वृद्ध र कुरूप भएका बेलामा यिनै अश्विनीकुमारहरूले उनलाई फेरी वीर्य, रङ्ग र स्वरले युक्त पारी जवान बनाई दिएका थिए ।

**एतैश्चान्यैश्च बहुभिः कर्मभिर्भिषजां वरौ । बभूवतुर्भृशं पूज्याविन्द्रादीनां दिवौकसाम्॥**

अश्विनीकुमारहरूले अन्य धेरैलाई औषधोपचार गरी स्वर्गमा इन्द्र आदि देवताबाट पूजनीय भए । प्रसङ्ग १-इन्द्रले दधिचि ऋषिलाई ब्रह्मविद्या सिकाएपछि "तिमीले अरु कसैलाई यो विद्या सिकाए तिम्रो टाउको काटिने छ" भने । अश्विनीकुमारले इन्द्रबाट रक्षा गर्ने वचन दिँदै यो विद्या उनको टाउका काटी घोडाको टाउको जोडि दिएर दधिचि ऋषिबाट सिके । इन्द्रले यो कुरा चाल पाएर ऋषिको त्यो घोडाको टाउको पनि काटी दिए । अनि अश्विनीकुमारले फेरी उनको वास्तविक टाउको फेरी जोडि दिए । देवताले गुरु मारेका कारण अश्विनीकुमारलाई यज्ञभाग पाउनबाट बञ्चित गरी जातिच्यूत गरि दिए । च्यवन ऋषिले बूढो भएपछि राजा शयातिकी युवती छोरीसँग विहे गरेका थिए । यिनै अश्विनीकुमारले

बूढा च्यवनलाइ जवान बनाइ दिए। फेरी इन्द्र रिसाएर अश्विनीकुमारलाइ माने बज्र उठाए। च्यवनले उनको हात हलचल नै नगर्ने गरी अड्काइ दिए। त्यो इन्द्रको जकडिएको हात पनि अश्विनीकुमारले नै ठिक पारि दिएका थिए। यसपछि पुनः अश्विनीकुमारलाई यज्ञभाग पाउने बनाइयो।
प्रसङ्ग २-दक्षयज्ञ विध्वंस गर्दा शिवगणबाट पूषाका दाँत फुक्लेका र भगका आँखा फुटेका थिए। यसलाई पनि अश्विनीकुमारले नै ठिक पारि दिए। प्रसङ्ग ३-अति कामाशक्त भएका कारण चन्द्रमालाई क्षयरोग भयो, उनलाई पनि यिनैले ठिक बनाइ दिएका थिए।

**संदृश्य दस्रयोरिन्द्रः कर्माण्येतानि यत्नवान्। आयुर्वेदं निरुद्वेगं तौ ययाचे शचीपतिः॥**

अश्विनीकुमारको यस्तो अद्भूत उपचार पद्धतिका विषयमा थाहा पाएर इन्द्रले उनीहरूबाट त्यो रोग निवारक आयुर्वेद सिक्न मन गरे।

**नासत्यौ सत्यसन्धेन शक्रेण किल याचितौ। आयुर्वेदं यथाऽधीतं ददतु शतमन्यवे॥**

इन्द्रले आयुर्वेद पढ्न चाहेपछि अश्विनीकुमारले आफूहरूले जेजती जे जस्तो पढेजानेका थिए त्यो त्यति नै इन्द्रलाई पनि पढाए।

**नासत्याभ्यामधीत्यैव आयुर्वेदं शतक्रतुः। अध्यापयामास बहूनात्रेयप्रमुखान्मुनीन्॥**

इन्द्रले अश्विनीकुमारबाट आयुर्वेद पढी त्यसलाई आत्रेय आदि गरिएका अनेक मुनिहरूलाई पढाए। (यसको प्रसङ्ग यस्तो छ-)



**एकदा जगदालोक्य गदाकुलमितस्ततः। चिन्तयामास भगवानात्रेयो मुनिपुङ्गवः॥**
**किं करोमि क्व गच्छामि कथं लोका निरामयाः। भवन्ति सामयानेतान्न शक्नोमि निरीक्षितुम्॥**

एकताका मुनिश्रेष्ठ भगवान् आत्रेय रोगले आकुलव्याकुल संसारलाई देखेर चिन्ता गर्न लाग्नु भयो कि-के गरौं, कता जाउँ, कसरी संसारका जीव रोगरहित होलान्? किन कि म यिनलाई रोगी भएको हेर्न सक्दिन।

**दयालुरहमत्यर्थं स्वभावो दुरतिक्रमः। एतेषां दुःखतो दुखं ममापि हृदयोऽधिकम्॥**

म अति दयालु छु र म मेरो यो स्वभाव केही गरेर बदल्न पनि सक्दिन। त्यसैले यि रोगीको दुःख देखेर मेरो मन पनि अति दुःखी भएको छ।

**आयुर्वेदं पठिष्यामि नैरुज्याय शरीरिणाम्। इति निश्चित्य गतवानात्रेयस्त्रिदशालयम्॥**

म अब यी प्राणीलाई निरोगी र स्वस्थ बनाउन आयुर्वेद पढ्नेछु। यस्तो निश्चय गरी आत्रेय स्वर्ग जानु भयो।

**तत्र मन्दिरमिन्द्रस्य गत्वा शक्रं ददर्श सः। सिंहासनसमासीनं स्तूयमानं सुरर्षिभिः॥**

त्यहाँ इन्द्रका भवनमा पुग्दा उहाँले सुरर्षि (देवलोका ऋषि) हरूबाट पूजित दिव्य सिंहासनमा बसिरहेका इन्द्रलाई देख्नु भयो ।

**भासयन्तं दिशो भासा भास्करप्रतिमं त्विषा । आयुर्वेदमहाचार्य्यं शिरोधार्य्यं दिवौकसाम् ॥**

(त्यहाँ सूर्यलेझैं) आफ्नो प्रकाशले दशवटै दिशा प्रकाशित गर्दै आयुर्वेदका ठूला आचार्य एवं देवताका शिरोमणि (इन्द्र बसिरहेका थिए) ।

**शक्रस्तु तं निरीक्ष्यै व त्यक्तसिंहासनः स्थितः । तमग्रे पूजयामास भृशं भूरितपःकृशम् ॥**

कठोर तपस्याका कारण दुब्लाएका (आत्रेय) मुनिलाई देखी इन्द्रले सिंहासनबाट उठी उहाँलाई पूजा गर्न लाग्नु भयो ।

**कुशलं परिपप्रच्छ तथागमन कारणम् । स मुनिर्वक्तुमारेभे निजागमनकारणम् ॥**
**देवराज न जानासि दिव एव यतो भवान् । विधात्रा विहितो यत्नात्त्रिलोकीलोकपालकः ॥**
**व्याधिभिर्व्यथिता लोकाः शोकाकुलितचेतसः । भूतले सन्ति सन्तापं तेषां हन्तुं कृपां कुरु ॥**
**आयुर्वेदोपदेशं मे कुरु कारुण्यतो नृणाम् । तथेत्युक्त्वा सहस्राक्षोऽध्यापयामास तं मुनिम् ॥**

(त्यसपछि) सञ्चोबिसञ्चो र आउनुको कारण सोध्नु भयो । ती मुनिले पनि आफू आउनुको कारण ( यसरी) बताउन लाग्नु भयो । हे देवराज ! हजुर स्वर्गका मात्र राजा हुनु हुन्न, विधाताले हजुरलाई प्रयत्नपूर्वक तीनै लोकको परिपालक बनाउनु भएको हो । पृथ्वीमा रोगले गर्दा मानिस ठूलो शोक र सन्तापमा छन्, त्यसैले हजुरले त्यसलाई नास गर्ने कृपा गर्नु होस् । (यस्ता) मानिसमाथि दया गरी मलाई आयुर्वेदको उपदेश दिनुहोस् । यसपछि इन्द्रले ती मुनिलाई हुन्छ नि त भनी (आयुर्वेद) पढाउनु भयो ।



**मुनीन्द्र इन्द्रतः सांगमायुर्वेदमधीत्य सः । अभिनन्द्य तमाशीर्भिराजगाम पुनर्महीम् ॥**
**अथात्रेयो मुनिश्रेष्ठो भगवान्करुणाकरः । स्वनाम्ना संहितां चक्रे नरवर्गानुकम्पया ॥**
**ततोऽग्निवेशं भेडञ्च जातूकर्णं पराशरम् । क्षीरपाणिञ्च हारीतमायुर्वेदमपाठयत् ॥**

मुनिले इन्द्रबाट पूरा आयुर्वेद पढी उहाँलाई नमस्कार गर्दै उहाँबाट आशिर्वाद लिई फेरी पृथ्वीमा (फर्केर) आइपुग्नु भयो । यसपछि दयाका सागर मुनिश्रेष्ठ (आत्रेय) ले मानिसमात्रको कल्याणका लागि आफ्नो नाउँबाट एउटा संहिता ग्रन्थ (आत्रेय संहिता) लेखे । (अनि आफ्ना शिष्य) अग्निवेश, भेड, जातूकर्ण, पराशर, क्षीरपाणि र हारितलाई त्यो आयुर्वेद संहिता पढाए ।

**तन्त्रस्य कर्त्ता प्रथममग्निवेशोऽभवत्पुरा । ततो भेडादयश्चक्रुः स्वं स्वं तन्त्रं कृतानि च ॥**
**श्रावयामासुरात्रेयं मुनिवृन्देन वन्दितम् । श्रुत्वा च तानि तन्त्राणि हृष्टोऽभूदत्रिनन्दनः ॥**
**यथावत्सूत्रितं दृष्ट्वा प्रहृष्टा मुनयोऽभवन् । दिवि देवर्षयो देवाः श्रुत्वा साध्विति चाब्रुवन् ॥**

(जजसले आत्रेयबाट आयुर्वेद पढे तिनले फेरी आआफ्नै नामबाट आयुर्वेथ ग्रन्थ लेखे) । यिमध्ये आयुर्वेद तन्त्रका पहिलो कर्ता अग्निवेश थिए। त्यसपछि भेड आदिले आआफ्ना तन्त्र लेखे। त्यसपछि ती सबै मुनिले आफूले लेखेको तन्त्र मुनिगणले वन्दन गरिएका अत्रिपुत्रलाई सुनाए। ती तन्त्र सुनेर उनी अति (आत्रेय) प्रसन्न भए। जस्ताको तस्तै सूत्रवद्ध तन्त्र बनाउन सकेकोमा मुनिहरू पनि प्रसन्न भए। स्वर्गका देवर्षि र देवताले पनि यो कुरा सुनेर "(सबैको भलो होस्) कल्याण होस्" भने।

**एकदा हिमवत्पार्श्वे दैवादागत्य सङ्गताः । मुनयो बहवस्तेषां नामभिः कथयाम्यहम्॥**
**भरद्वाजो मुनिवरः प्रथमं समुपागतः । ततोऽङ्गिरास्ततो गर्गो मरीचिर्भृगुभार्गवौ॥**
**पुलस्त्योऽगस्तिरसितो वसिष्ठः सपराशरः । हारीतो गौतमः सांख्यो मैत्रेयश्चयवनोऽपि च॥**
**जमदग्निश्च गार्ग्यश्च कश्यपः काश्यपोऽपि च । नारदो वामदेवश्च मार्कण्डेयः कपिञ्जलः॥**
**शाण्डिल्यः सहकौण्डिन्यः शाकुनेयश्चशौनकः । आश्वलायनसांकृत्यौ विश्वामित्रः परीक्षकः॥**
**देवलो गालवो धौम्यः काप्यकात्यायनावुभौ । काङ्कायनो वैजपेयः कुशिको बादरायणः॥**
**हिरण्याक्षश्च लौगाक्षिः शरलोमा च गोभिलः । वैखानसा वालखिल्यास्तथैवान्ये महर्षयः॥**
**ब्रह्मज्ञानस्य निधयो यमस्य नियमस्य च । तपसस्तेजसा दीप्ता हूयमाना इवाग्नयः॥**
**सुखोपविष्टास्ते तत्र सर्वे चक्रुः कथामिमाम् । धर्मार्थकाममोक्षाणां मूलमुक्तं कलेवरम्॥**
**तच्च सर्वार्थसंसिद्ध्यै भवेद्यदि निरामयम्॥**

एकताका दैववश (अकस्मात्) हिमालय पर्वतको एक भागमा अनेकौं महर्षि आएर जम्मा भए, म ती मुनिहरूको नाम बताउँदछु। मुनिश्रेष्ठ भरद्वाज सबभन्दा पहिले आए। त्यसपछि अङ्गिरा र त्यसपछि गर्ग, मरीचि, भृगु, भार्गव, पुलस्त्य, अगस्त्य, असित, वसिष्ठ, पराशर, हारीत, गौतम, सांख्य, मैत्रेय, च्यवन, पनि आए। (अनि) जमदग्नि, गार्ग्य, कश्यप, काश्यप, नारद, वामदेव, मार्कण्डेय र कपिञ्जल पनि आए। (अनि) शाण्डिल्य, कौण्डिन्य, शाकुनेय, शौनक, आश्वलायन, सांकृत्य, विश्वामित्र र परीक्षक (आए)। (अनि) देवल, गालव, धौम्य, काम्य, कात्यायन, काङ्कायन, वैजपायन, कुशिक र वादरायण (आए)। (त्यसपछि) हिरण्याक्ष, लौगाक्षि, शरलोमा, गोभिल, वैखानस र वालखिल्य तथा अन्य (थुप्रै) महिर्षगण, । ब्रह्मज्ञान तथा यम नियमका समूह, तपतेजले होमिएको बलिरहेको अग्नि समान तेजिला (ती)। महर्षिहरू त्यहाँ सुखपूर्वक बसेर यस्तो छलफल गर्न लागे-धर्म, अर्थ, काम र मोक्षको मुख्य कारण शरीर नै हो। त्यो स्वस्थ भए मात्र यि सबै कुरा गर्न सकिन्छ।

**तपः स्वाध्यायधर्माणां ब्रह्मचर्य्यव्रतायुषाम् । हर्त्तारः प्रसृता रोगा यत्र तत्र च सर्वशः॥**
**रोगाः कार्श्यकरा बलक्षयकरा देहस्य चेष्टाहरा ।**
**दृष्टा इन्द्रियशक्तिसङ्क्षयकराः सर्वाङ्गपीडाकराः॥**
**धर्मार्थाखिलकाममुक्तिषु महाविघ्नस्वरूपा बलात् ।**
**प्राणानाशु हरन्ति सन्ति यदि ते क्षेमं कुतः प्राणिनाम्॥**
**तत्तेषां प्रशमाय कश्चन विधिश्चिन्त्यो भवद्भिर्बुधै-**
**र्योग्यैरित्यभिधाय संसदि भरद्वाजं मुनिं तेऽब्रुवन् ।**
**त्वं योग्यो भगवन् सहस्रनयनं याचस्व लब्धं क्रमा-**
**दायुर्वेदमधीत्य यं गदभयान्मुक्ता भवामो वयम्॥**

(तर) तपस्या, वेदको अध्ययन, धर्म, ब्रह्मचर्य आदि व्रत र आयुलाइ हरण गर्ने यत्रतत्र सर्वत्र फैलिएका छ । यी रोग प्राणीको शरीरलाई कमजोर गराउने, बललाई नाश गर्ने, शरीरको चेष्टा हर्ने, इन्द्रियको शक्तिलाई क्षय गर्ने, सबै अङ्गमा पीडा दिने एवं धर्म, अर्थ, काम र मोक्षका मार्गमा ठूलो बाधा बनिरहेका देखिएका छन् । रोगले तत्काल ज्यान नै लिइरहेको यस्तो अवस्थामा प्राणिहरूको कुशलमङ्गल कसरी हुन्छ ? । अतः ती पापी आत्मा भएका रोग नाश गर्ने कुनै उपायका बारेमा विद्वान हजुरहरूले विचार गर्नु पर्‍यो । जब ऋषिहरूले यसो भन्दै भरद्वाजसँग " हे भगवान् ! यो कामका लागि हजुर योग्य हुनु हुन्छ त्यसैले हजुर नै गएर इन्द्रसँगबाट आयुर्वेद लेराउनु होस् अर्थात् पढेर आउनु होस् । त्यसपछि हजुरसँग हामी सबैले आयुर्वेद सिकी रोगको डरबाट मुक्त होउँ ।

**इत्थं स मुनिभिर्योग्यैः प्रार्थितो विनयान्वितैः । भरद्वाजो मुनिश्रेष्ठो जगाम त्रिदशालयम् ॥**
**तत्रेन्द्रभवनं गत्वा सुरर्षिगणमध्यगम् । दृष्टवान् वृत्रहन्तारं दीप्यमानमिवानलम् ॥**
**दृष्ट्वैव स मुनिं प्राह भगवान् मघवा मुदा । धर्मज्ञ स्वागतं तेऽथ मुनिं तं समपूजयत् ॥**
**सोऽभिगम्य जयाशीर्भिरभिनन्द्य सुरेश्वरम् । ऋषीणां वचनं सम्यक् श्रावयामास तत्त्वतः ॥**
**व्याधयो हि समुत्पन्नाः सर्वप्राणिभयङ्कराः । तेषां प्रशमनोपायं यथावद्वक्तुमर्हसि ॥**

यसरी श्रेष्ठ मुनिहरूको विनम्र अनुरोधमा मुनिश्रेष्ठ (आयुर्वेद अध्ययनका लागि) भनी भरद्वाज स्वर्ग गए । त्यहाँ स्वर्गमा बलिरहेको आगो समान तेजिला देवर्षिका बीचमा वृत्रासुरलाई मार्ने भएका इन्द्र बसिरहेका देखे । मुनिश्रेष्ठ भरद्वाजलाई देखी भगवान् इन्द्रले प्रसन्न हुँदै " हे धर्मज्ञ ! हजुरलाई यहाँ स्वागत छ" भनी विधिपूर्वक पूजा गरे । त्यसपछि मुनिले इन्द्र समीप गई आशिर्वाद दिए अनि आफू आउनुको कारण र ऋषिहरूको कुरा सबै बेलिविस्तार सुनाए । (हे इन्द्र ! पृथ्वीमा) सबै प्राणीलाई भयङ्कर रोग लागेको छ । त्यसको निराकरणको उपाय मलाई बताउने कृपा गर्नु होस् (अर्थात् मलाई आयुर्वेदको उपदेश दिनु होस्) ।



**अपाठयन्मुनिं साङ्गमायुर्वेदं शतक्रतुः । जीवेद्वर्षसहस्राणि देही नीरुङ् निशम्य यम् ॥**
**सोऽनन्तपारं त्रिस्कन्धमायुर्वेदं महामुनिः । यथावदचिरात्सर्वं बुबुधे तन्मना मुनिः ॥**

जब इन्द्रले भरद्वाजको कुरा सुने तब उनले भरद्वाजलाई सम्पूर्ण आयुर्वेद पढाउन लागे । जसलाई सुन्नाले प्राणी निरोगी भई हजार वर्षसम्म बाँच्न सकोस् । महामुनि भरद्वाजले अनन्त एवं अपार तीन स्कन्ध (खण्ड : हेतु, लिंग र औषधी) भएको यस्तो आयुर्वेद सम्पूर्णरूपमा केही दिनमै जस्ताको तस्तै ध्यानपूर्वक पढे ।

**तेनायुः सुचिरं लेभे भरद्वाजो निरामयम् । अन्यानपि मुनीश्चक्रे नीरुजः सुचिरायुषः ॥**

यो आयुर्वेद पढेका कारण भरद्वाज निरोगी भई दीर्घायुका भए । अनि अरु अरु मुनिहरूलाई पनि रोगबाट मुक्त पारी चिरायुका बनाए ।

**तत्तन्त्रजनितज्ञानचक्षुषा ऋषयोऽखिलाः । गुणान्द्रव्याणि कर्माणि दृष्ट्वा तद्विधिमाश्रिताः ॥**
**आरोग्यं लेभिरे दीर्घमायुश्च सुखसंयुतम् । आयुर्वेदोक्तविधिनाऽन्येऽपि स्युर्मुनयो यथा ॥**

त्यसपछि भरद्वाजले आफ्नो नाउँको संहिता लेखे । यो संहिताबाट उत्पन्न ज्ञानरूपी आँखाका माध्यमबाट सबै मुनिगणले गुण, द्रव्य र कर्म बिचार गर्दै त्यसमा लेखिएको विधि पालना गरी । सुखपूर्वकको आरोग्यता र दीर्घ आयु प्राप्त गरे ।

**यदा मत्स्यावतारेण हरिणा वेद उद्धृतः । तदा शेषश्च तत्रैव वेदं साङ्गमवाप्तवान्॥**
**अथर्वान्तर्गतं सम्यगायुर्वेदं च लब्धवान् । एकदा स महीवृत्तं द्रष्टुं चर इवागतः॥**
**तत्र लोकान् गदैर्ग्रस्तान् व्यथया परिपीडितान् । स्थलेषु बहुषु व्यग्रान् म्रियमाणांश्च दृष्टवान्॥**
**तान्दृष्ट्वातिदयायुक्तस्तेषां दुःखेन दुःखितः । अनन्तश्चिन्तयामास रोगोपशमकारणम्॥**
**सञ्चिन्त्य स स्वयं तत्र मुनेः पुत्रो बभूव ह । प्रसिद्धस्य विशुद्धस्य वेदवेदाङ्गवेदिनः॥**

जब मत्स्य अवतार लिएर विष्णु भगवानले वेदको उद्धार गर्नु भयो तब शेष भगवानले त्यही ठाउँमा उहाँसँग अङ्ग, उपअङ्ग सहित वेदहरू पढ्नु भयो । (तीमध्ये) अथर्ववेद अन्तर्गत जुन आयुर्वेद मिसिएको थियो त्यसलाई पनि बेग्लै पढ्नु भयो । एकपटक पृथ्वीको हालखबर थाहा पाउनका लागि शेष भगवान् दूतको रूप लिई यहाँ (मृत्युलोकमा) आउनु भयो । त्यहाँ (यहाँ) मानिसहरू दुःखले पीडित, रोगग्रस्त र भएका र धेरैतिर दिक्कलाग्दो गरी मरिरहेका देख्नु भयो । तिनलाई देखी दयालु हुँदै तिनको दुःखमा (उहाँ) दुःखी भई अनन्तले रोग शान्त पार्ने उपायका बारेमा सोच्नु भयो । यस्तो सोचविचार उहाँ स्वयं शुद्ध, प्रसिद्ध एवं वेदवेदाङ्गमा विज्ञ एक जना मुनि (अज्ञात) को पुत्रकारूपमा जन्मनु भयो ।

**यतश्चर इवायातो न ज्ञातः केनचिद्यतः । तस्माच्चरकनाम्नासौ ख्यातश्च क्षितिमण्डले॥**

**स भाति चरकाचार्य्यो देवाचार्य्यो यथा दिवि । सहस्रवदनस्यांशो येन ध्वंशो रुजां कृतः॥**

ती शेष भगवान् (यसरी) चर (दूत) जसरी यस धर्तीमा आउनु भयो र कसैले चाल पाएनन्, त्यसैले उहाँ चरक नामले संसारमा प्रसिद्ध हुनु भयो । जसरी स्वर्गमा देवताका गुरु बृहस्पति प्रसिद्ध छन् त्यसरी नै उहाँ यहाँ प्रसिद्ध हुनु भयो । हजार मुख भएका शेषनागका अंश भएका उहाँले अनेकौं रोगलाई नष्ट पार्नु भयो ।

**आत्रेयस्य मुनेः शिष्या अग्निवेशादयोऽभवन् । मुनयो बहवस्तैश्च कृतं तन्त्रं स्वकं स्वकम्॥**
**तेषां तन्त्राणि संस्कृत्य समाहृत्य विपश्चिता । चरकेणात्मनो नाम्ना ग्रन्थोऽयं चरकः कृतः॥**

पहिले बताइएका आत्रेय मुनिका अग्निवेश आदि नामका अनेक शिष्य भए र तिनले आआफ्ना नाममा फरक फरक संहिता लेखे । ती संहिताहरू संस्करण गरी (सार खिची) चरकले आफ्नो नामको यो चरकसंहिता ग्रन्थ लेख्नु भयो ।

**एकदा देवराजस्य दृष्टिर्निपतिता भुवि । तत्र तेन नरा दृष्टा व्याधिभिर्भृशपीडिताः॥**
**तान्दृष्ट्वा हृदयं तस्य दयया परिपीडितम् । दयार्द्र हृदयः शक्रो धन्वन्तरिमुवाच ह॥**
**धन्वन्तरे सुरश्रेष्ठ भगवन् किञ्चिदुच्यते । योग्यो भवसि भूतानामुपकारपरो भव॥**

एकपटक इन्द्रको दृष्टि पृथ्वीमाथि पर्न गयो, त्यहाँ देखे कि अनेकौं मानिस रोगले पीडित भइरहेका छन् । तिनलाई देखेर तिनको मन दयाले छिया छिया भयो । अनि दयालु मनका इन्द्रले धन्वन्तरिलाई

भन्नु भयो । हे धन्वन्तरि ! श्रेष्ठ देवता ! हजुरलाइ म केही अनुरोध गर्दछु । हजुर योग्य हुनु हुन्छ त्यसैले प्राणीको उपकारका लागि तयार हुनु होस् ।

**उपकाराय लोकानां केन किं न कृतं पुरा । त्रैलोक्याधिपतिर्विष्णुरभून्मत्स्यादिरूपवान् ॥**
**तस्मात्त्वं पृथिवीं याहि काशीमध्ये नृपो भव । प्रतीकाराय रोगाणामायुर्वेदं प्रकाशय ॥**
**इत्युक्त्वा सुरशार्दूलः सर्वभूतहितेप्सया । समस्तमायुषो वेदं धन्वन्तरिमुपादिशत् ॥**

लोककल्याणका पहिले कस्ले के के मात्र गरेनन्, तीनै लोकका मालिक विष्णुले मत्स्य अवतार लिनु भयो । त्यसैले हजुर पनि पृथ्वीमा गई काशीका राजा बनी मानिसका रोगलाई नाश गर्न आयुर्वेदलाई प्रचारप्रसार गर्नु होस् । यती भनी इन्द्रले सबै प्राणीको भलोका खातिर धन्वन्तरिलाई पूरै आयुर्वेद पढाउनु भयो ।

**अधीत्य चायुषो वेदमिन्द्राद्धन्वन्तरिः पुरा । आगत्य पृथिवीं काश्यां जातो बाहुजवेश्मनि ॥**
**नाम्ना तु सोऽभवत्ख्यातो दिवोदास इति क्षितौ । बाल एव विरक्तोऽभूच्चचार सुमहत्तपः ॥**
**यत्नेन महता ब्रह्मा तं काश्यामकरोन्नृपम् । ततो धन्वन्तरिर्लोकैः काशीराजोऽभिधीयते ॥**
**हिताय देहिनां स्वीया संहिता विहिताऽमुना । अथ विद्यार्थिनो लोकान्संहितां तामपाठयत् ॥**
**अथ ज्ञानदृशा विश्वामित्रप्रभृतयोऽविदन् । अयं धन्वन्तरिः काश्यां काशिराजोऽयमुच्यते ॥**

यसरी परापूर्वकालमा इन्द्रसँग आयुर्वेद पढी धन्वन्तरि पृथ्वीमा आए र काशीका उक्त क्षत्रीय राजाका घरमा जन्म लिए । (उनी) पृथ्वीमा दिवोदास नामले प्रसिद्ध भए । उनी बाल्यकाल देखि नै वैरागिए र कठिन तपस्या गर्न लागे । तब ठूलो प्रयत्न गरी ब्रह्माले उनलाई काशीका राजा बनाए, त्यस दिनदेखि धन्वन्तरि लोकमा काशीराज नामले प्रख्यात भए । (अनि) सबै जीवको कल्याणका लागि काशीराज धन्वन्तरिले आफ्नै नामको एक संहिता (धन्वन्तरि संहिता) लेखी शिष्यहरूलाई त्यो संहिता पढाउन लागे । समय बित्दै जाँदा विश्वामित्र आदि गरिएका ऋषिले ध्यानदृष्टिले हेर्दै विचार गरे कि यि तिनै धन्वन्तरी हुने जो काशीमा काशीराजका नामले प्रसिद्ध छन् ।



**विश्वामित्रो मुनिस्तेषु पुत्रं सुश्रुतमुक्तवान् । वत्स वाराणसीं गच्छ त्वं विश्वेश्वरवल्लभाम् ॥**
**तत्र नाम्ना दिवोदासः काशिराजोऽस्ति बाहुजः । स हि धन्वन्तरिः साक्षादायुर्वेदविदां वरः ॥**
**आयुर्वेदं पठस्व त्वं लोकोपकृतिहेतवे । सर्वप्राणिदया तीर्थमुपकारो महामखः ॥**

ती मुनिहरूमध्ये विश्वामित्रले आफ्नै छोरा सुश्रुतलाई भने कि हे छोरा तिमी श्रीविश्वनाथलाई अति मन पर्ने काशी (वाराणसी) मा जाउ । त्यहाँ जो दिवोदास काशीराज नामले प्रख्यात जो क्षत्रीय राजा छन् ती आयुर्वेदका अति उत्तम ज्ञाता साक्षात् धन्वन्तरि हुन् । अतः लोककल्याणका लागि उनीसँग गएर आयुर्वेद पढ, किन कि सबै जीव माथि दया गर्नु नै तीर्थयात्रा हो, तिनको उपकार गर्नु नै महायज्ञ गर्नु हो ।

**पितुर्वचनमाकर्ण्य सुश्रुतः काशिकां गतः । तेन सार्द्धं समध्येतुं मुनिसूनुशतं ययौ ॥**
**अथ धन्वन्तरिं सर्वे वानप्रस्थाश्रमे स्थितम् । भगवन्तं सुरश्रेष्ठं मुनिभिर्बहुभिः स्तुतम् ॥**
**काशिराजं दिवोदासं तेऽपश्यन्विनयान्विताः । स्वागतं च तदा चाह दिवोदासो यशोधनः ॥**

**कुशलं पारंप्रपच्छ तथागमनकारणम् । ततस्ते सुश्रुतद्वारा कथयामासुरुत्तरम् ॥**
**भगवन्मानवान्दृष्ट्वा व्याधिभिः परिपीडितान् । क्रन्दतो म्रियमाणांश्च जातास्माकं हृदि व्यथा ॥**
**आमयानां शमोपायं विज्ञातुं वयमागताः । आयुर्वेदं भवानस्मानध्यापयतु यत्नतः ॥**

पिताको आज्ञा मान्दै सुश्रुत मुनि काशी गए र उनीसँगै पढ्न भनी अरु सय पुत्र पनि गए । त्यहाँ पुगेर ती सबैले बानप्रस्थ आश्रममा रहेका र सबै मुनिले पूजित भइरहेका एवं विनयशील भगवान् धन्वन्तरि अर्थात् काशिराज दिवोदासलाई देखे । मुनिपुत्रहरूलाई देखी यशस्वी दिवोदासले पनि तिनको स्वागत गरे । त्यसपछि कुशलमङ्गल र आउनाको कारण सोधे । तब सबै मुनिका तर्फबाट सुश्रुत मार्फत यो उत्तर दिए कि हे भगवान् ! अनेकौं रोगले पीडित भई दर्दनाक किसिमले कराउँदै प्राणी (मानिस)हरू मरिरहेका छन् । तिनको कुगति देखेर हाम्रा मनमा अत्यन्त पीडा हुन्छ । यसैले तिनको रोग शान्त पार्ने उपाय सिक्ने उद्देश्यले हामी हजुरका समिपमा आएका छौं, हजुर प्रयत्नपूर्वक हामी सबैलाई आयुर्वेद पढाउने कृपा गर्नुहोस् ।

**अङ्गीकृत्य वचस्तेषां नृपतिस्तानुपादिशत् । व्याख्यातं ते ते यत्नाज्जगृहुर्मुनयो मुदा ॥**
**काशिराजं जयाशीर्भिरभिनन्द्य मुदान्विताः । सुश्रुताद्याः सुसिद्धार्था जग्मुर्गेहं स्वकं स्वकम् ॥**

ती मुनिका कुरा मानी राजा दिवोदासले ती ऋषिपुत्रहरूलाई आयुर्वेद पढाउन लागे । ती सबै पनि पढेको पाठलाई प्रसन्न हुँदै ग्रहण गर्न लागे । फेरी केही दिनपछि काशिराजको जय होस् काशिराजको जय होस् यस्तो पटकपटक आशिर्वचन भन्दै आफ्नो कार्यमा सिद्ध भई आआफ्ना आश्रममा फर्किए ।



**प्रथमं सुश्रुतस्तेषु स्वतन्त्रं कृतवान्स्फुटम् । सुश्रुतस्य सखायोऽपि पृथक्तन्त्राणि तेनिरे ॥**
**सुश्रुतेन कृतं तन्त्रं सुश्रुतं बहुभिर्यतः । तस्मात्तत्सुश्रुतं नाम्ना विख्यातं क्षितिमण्डले ॥**

ती मुनिपुत्रमध्येमा पहिला सुश्रुतले आफ्नो नामको तन्त्र "सुश्रुतसंहिता" लेखे । त्यसपछि उनका साथीहरूले पनि आआफ्ना नामका बेग्लाबेग्लै संहिता बनाए । ती सबै तन्त्रमा सुश्रुतले लेखेको तन्त्रलाई धेरै मानिसले सुने । यसैले यिनको संहिता संसारमा सुश्रुतसंहिताका नामले प्रसिद्ध भयो ।

(झ) **चरक संहिता :**

**दीर्घं जीवितमन्विच्छन् भरद्वाज उपागमत् । इन्द्रमुग्रतपा बुद्ध्वा शरण्यममरेश्वरम् ॥**

लामो आयु कसरी पाइन्छ भन्ने ज्ञान चाहने भएका उग्रतपस्वी भरद्वाज मुनि, ज्ञान दिन योग्य (पात्र) सम्झेर देवराज इन्द्र समक्ष (ज्ञान लिन) जानु भयो ।

**ब्रह्मणा हि यथा प्रोक्तमायुर्वेदं प्रजापतिः । जग्राह निखिलेनाऽऽदावश्विनौ तु पुनस्ततः ॥**
**अश्विभ्यां भगवाञ्छक्रः प्रतिपेदे ह केवलम् । ऋषिप्रोक्तो भरद्वाजस्तस्माच्छक्रमुपागमत् ॥**

शुरुमा ब्रह्माले आयुर्वेदको उपदेश गर्नु भएको थियो र त्यसलाइ प्रजापति दक्षले ग्रहण गरेका थिए । दक्षबाट अश्विनीकुमारले र अश्विनीकुमारबाट इन्द्रले ग्रहण गरेका थिए । त्यही भएर नै ऋषिहरुको प्रेरणाले भरद्वाज मुनि आयुर्वेदको ज्ञान लिन इन्द्र समक्ष गएका हुन् (थिए) ।

**विघ्नभूता यदा रोगाः प्रादुर्भूताः शरीरिणाम् । तपोवासाध्ययनब्रह्मचर्य्यव्रतायुषाम्॥**
**तदा भूतेष्वनुक्रोशं पुरस्कृत्य महर्षयः । समेताः पुण्यकर्माणः पार्श्वे हिमवतः शुभे॥**

जब तपस्या, उपवास, ब्रह्मचर्य, अध्ययन, व्रत र आयुलाई बाधा दिने रोगहरु उत्पन्न भए तब प्राणीमाथि दया गर्न पुण्यात्मा महर्षिहरु पवित्र हिमालयको एक भागमा जम्मा भए ।

**अङ्गिरा जमदग्निश्च वसिष्ठः कश्यपो भृगुः । आत्रेयो गौतमः सांख्यः पुलस्त्यो नारदोऽसितः॥**
**अगस्त्यो वामदेवश्च मार्कण्डेयाश्वलायनौ । पारीक्षिर्भिक्षुरात्रेयो भरद्वाजः कपिञ्जलः॥**
**विश्वामित्राश्वरथ्यौ च भार्गवश्च्यवनोऽभिजित् ।**
**गार्ग्यः शाण्डिल्यकौण्डिन्यौ वार्क्षिर्देवलगालवौ॥**
**सांकृत्यो वैजवापिश्च कुशिको वादरायणः । बडिशः शरलोमा च काप्यकात्यायनावुभौ॥**
**काङ्कायनः कैकशेयो धौम्यो मारीचिकाश्यपौ । शर्कराक्षो हिरण्याक्षो लोकाक्षः पैङ्गिरेव च॥**
**शौनकः शाकुनेयश्च मैत्रेयो मैमतायनिः । वैखानसा बालखिल्यास्तथा चान्ये हर्षयः॥**
**ब्रह्मज्ञानस्य निधयो यमस्य नियमस्य च । तपसस्तेजसा दीप्ता हूयमाना इवाग्नयः॥**
**सुखोपविष्टास्ते तत्र पुण्यां चक्रुः कथामिमाम् ।**



अङ्गिरा, जमदग्नि, वसिष्ठ, कश्यप, भृगु, आत्रेय, गौतम, सांख्य, पुलस्त्य, नारद, असित, अगस्त्य, वामदेव, मार्कण्डेय, आश्वलायन, पारीक्षि, भिक्षु, आत्रेय, भरद्वाज, कपिञ्जल, विश्वामित्र, आश्वरथ्य, भार्गव, च्यवन, अभिजित्, गार्ग्य, शाण्डिल्य, कौण्डिन्य, वार्क्षि, देवल, गालव, साङ्कृत्य, वैजवापि, कुशिक, बादरायण, बडिश, शरलोमा, काप्य, कात्यायन, काङ्कायन, कैकशेय, धौम्य, मारीचि, काश्यप, शर्कराक्ष, हिरण्याक्ष, लोकाक्ष, पैङ्गि, शौनक, शाकुनेय, मैत्रेय, मैमतायनि, वैखानस, वालखिल्य तथा अन्य ब्रह्मज्ञान, यम, नियम र तपस्याका तेजले तेजिला भएका, आहुतिले बलिरहेको आगोसमान देखिने महर्षिहरु त्यहाँ सुखपूर्वक बसी यो पुण्यदायक कथालाई यसरी भन्न लागे ।

**धमार्थकाममोक्षाणामारोग्यं मूलमुत्तमम्॥ रोगास्तस्यापहर्तारः श्रेयसो जीवितस्य च ।**
**प्रादुर्भूतो मनुष्याणामन्तरायो महानयम्॥ कः स्यात्तेषां शमोपाय इत्युक्त्वा ध्यानमास्थिताः ।**
**अथ ते शरणं शक्रं ददृशुर्ध्यानचक्षुषा॥ स वक्ष्यति शमोपायं यथावदमरप्रभुः ।**

धर्म, अर्थ, काम र मोक्ष यी चार पुरुषार्थको मूल कारण भनेको निरोगिता नै हो । रोगले मानिसको आरोग्य, उत्थान र आयुलाई नाश गर्दछ । मानवका लागि यी रोगहरु ठूलो बाधा बनेर देखा परिरहेका छन् । यसैले यी रोगहरुको शान्तिको के उपाय गर्ने होला भन्ने सोची ती सबै ऋषिहरु ध्यान मग्न भए । उनीहरुको भित्री आँखाले (ध्यानले) देवराज इन्द्रलाई शरणदाताकोरूपमा देखे र उनले नै शान्तिको उपाय बताउन सक्ने छन् भनी थाहा पाए ।

**कः सहस्राक्षभवनं गच्छेत्प्रष्टुं शचीपतिम्॥**

**अहमर्थे नियुज्येयमत्रेति प्रथमं वचः । भरद्वाजोऽब्रवीत्तस्मादृषिभिः स नियोजितः ॥**

त्यसपछि इन्द्रको दरबारमा सोध्न अब को जाने त भनेर प्रश्न उठ्यो । भरद्वाज ऋषिले पहिला बोले-"यो काम मलाई जिम्मा दिइयोस्" । यसपछि अङ्गिरा आदि गरिएका ऋषिहरुले उनैलाई त्यो काम गर्ने जिम्मा दिए ।

**स शक्रभवनं गत्वा सुरर्षिगणमध्यगम् । ददर्श बलहन्तारं दीप्यमानमिवानलम् ॥**

इन्द्रको दरबारमा गएर उनले देवर्षिहरूका बीचमा अग्नि समान तेजिला, बल नामक असुरलाई मार्ने भएका इन्द्रलाई देखे ।

**सोऽभिगम्य जयाशीर्भिरभिवन्द्य सुरेश्वरम् । प्रोवाच भगवान्धीमानृषीणां वाक्यमुत्तमम् ॥**
**व्याधयो हि समुत्पन्नाः सर्वप्राणिभयङ्कराः । तद् ब्रूहि मे शमोपायं यथावदमरप्रभो ॥**

बुद्धिमान् भरद्वाजले इन्द्र अगाडि पुगी उनको जयजकार गर्दै ऋषिहरुको सन्देश यसरी सुनाए :- "हे इन्द्र ! (पृथ्वीमा) सबै प्राणीलाई डर पैदा गराउने खालका रोगहरु निस्केका छन्, यसैले हजुरले त्यो शान्त पार्ने उपाय बताइ दिनु पर्‍यो" ।

**तस्मै प्रोवाच भगवानायुर्वेदं शतक्रतुः । पदैरल्पैर्मतिं बुद्ध्वा विपुलां परमर्षये ॥**



भगवान् इन्द्रले महर्षि भरद्वाज विद्वान हुन् भन्ने बुझी उनलाई थोरै शब्दमा नै आयुर्वेदको सङ्क्षेपमा उपदेश दिनु भयो ।

**हेतुलिङ्गौषधज्ञानं स्वस्थातुरपरायणम् । त्रिसूत्रं शाश्वतं पुण्यं बुबुधे यं पितामहः ॥**
**सोऽनन्तपारं त्रिस्कन्धमायुर्वेदं महामतिः । यथापदच्चिरात् सर्वं बुबुधे तन्मना मुनिः ॥**
**तेनाऽऽयुरमितं लेभे भरद्वाजः सुखान्वितम् । ऋषिभ्योऽनधिकं तच्च शशंसानवशेषयन् ॥**
**ऋषयश्च भरद्वाजाज्जगृहुस्तं प्रजाहितम् । दीर्घमायुश्चिकीर्षन्तो वेदं वर्धनमायुषः ॥**

(इन्द्रले) रोगको कारण, लक्षण र औषधीउपचार तथा रोगी एवं निरोगी दुवैका लागि उपयुक्त हुने पहिला ब्रह्माले बताएकै ज्ञान भरद्वाजलाई सिकाउनु भयो । विद्वान भरद्वाजले मन लगाएर तीन भाग भएको त्यो आयुर्वेदलाई चाँडै पूरै सिक्नु भयो । उहाँले यसैका आधारमा सुखी दीर्घायु समेत पाउनु भयो । त्यसपछि उहाँले फर्केर आई ऋषिहरूलाई आफूले इन्द्रसँग जस्तो र जति पढेको हो त्यस्तै र त्यती नै सबै थोक सुनाउनु भयो । दीर्घायु चाहने ऋषिहरूले पनि लोककल्याणलाई सोचेर त्यो आयुवर्द्धक आयुर्वेद भरद्वाजबाट सिके ।

व्याख्याः-"त्रिसूत्र" शब्दले वात, पित्त र कफ भनी जान्नु पर्दछ किन कि सारा आयुर्वेद यसैले भरिएको छ ।

**महर्षयस्ते ददृशुर्यथावज्ज्ञानचक्षुषा । सामान्यं च विशेषं च गुणान् द्रव्याणि कर्म च ॥**

**समवायं च तज्ज्ञात्वा तन्त्रोक्तं विधिमास्थिताः । लेभिरे परमं शर्म जीवितं चाप्यनश्वरम्॥**

(त्यसपछि) ज्ञानका आँखाले ऋषिहरुले सामान्य, विशेष, गुण, द्रव्य, कर्म र समभावलाई पूर्णरुपमा जस्ताको तस्तै देखे । यसलाई जानी आयुर्वेदका विधिले फाइदा गर्ने कुरा सेवन र बेफाइदा गर्ने कुरा त्याग गरी उनीहरुले परम सुख र आरोग्य सहितको दीर्घ जीवन पाए ।

**अथ मैत्रीपरः पुण्यमायुर्वेदं पुनर्वसुः । शिष्येभ्यो दत्तवान् षड्भ्यः सर्वभूतानुकम्पया॥**
**अग्निवेशश्च भेडश्च जतूकर्णः पराशरः । हारीतः क्षारपाणिश्च जगृहुस्तन्मुनेर्वचः॥**

त्यसपछि प्राणीमात्रलाई मित्र समान ठान्ने बुद्धि भएका आत्रेयले सबै प्राणीलाई दयाभाव राखी यो पवित्र आयुर्वेद आफ्ना छ जना शिष्यलाई सिकाउनु भयो । अग्निवेश, भेड, जातूकर्ण, पराशर, हारीत र क्षारपाणि नाम गरिएका छ शिष्यले मुनिले दिएको उक्त आयुर्वेदसम्बन्धी उपदेश राम्ररी सिके ।

**बुद्धेर्विशेषस्तत्रासीन्नोपदेशान्तरं मुनेः । तन्त्रस्य कर्ता प्रथममग्निवेशो यतोऽभवत्॥**
**अथ भेडादयश्चक्रुः स्वं स्वं तन्त्रं कृतानि च । श्रावयामासुरात्रेयं सर्षिसङ्घं सुमेधसः॥**
**श्रुत्वा सूत्रणमर्थानामृषयः पुण्यकर्मणाम् । यथावत् सूत्रितमिति प्रहृष्टास्तेऽनुमेनिरे॥**
**सर्व एवास्तुवँस्ताँश्च सर्वभूतहितैषिणः । साधु भूतेष्वनुक्रोश इत्युच्चैरब्रुवन् समम्॥**
**तं पुण्यं शुश्रुवुः शब्दं दिवि देवर्षयः स्थिताः । सामराः परमर्षीणां श्रुत्वा मुमुदिरे परम्॥**
**अहो साध्विति घोषश्च लोकाँस्त्रीनन्वनादयत् । नभसि स्निग्धगम्भीरो हर्षाद् भूतैरुदीरितः॥**
**शिवो वायुर्ववौ सर्वा भाभिरुन्मीलिता दिशः । निपेतुः सजलाश्चैव दिव्याः कुसुमवृष्टयः॥**
**अथाग्निवेशप्रमुखान् विविशुर्ज्ञानदेवताः । बुद्धिः सिद्धिः स्मृतिर्मेधा धृतिः कीर्तिः क्षमा दया॥**
**तानि चानुमतान्येतां तन्त्राणि परमर्षिभिः । भवाय भूतसङ्घानां प्रतिष्ठां भुवि लेभिरे॥**

यी छ जना मुनिहरूमध्येमा पनि अग्निवेश प्रखर थिए । आत्रेयले छ जना मुनिहरूलाई दिएको उपदेशमा कुनै भिन्नता थिएन ता पनि अग्निवेश नै पहिलो आयुर्वेद तन्त्रका कर्ता बने । यसपछि भेड आदि विद्वान शिष्यले पनि आआफ्ना तन्त्र बनाएर ऋषिहरुका बीचमा आत्रेयलाई सुनाए । पुण्यात्मा अग्निवेश आदि ऋषिहरुबाट मेहनत गरी सूत्रवद्ध बनाइएको आयुर्वेद शास्त्र सुनेर आत्रेय धेरै खुशी भए । उनीहरुले यो ग्रन्थको अनुमोदन पनि गरे । प्राणी मात्रलाई माया गर्ने ती ऋषिहरुको सबैले प्रशंसा गरे । सबैले एकैपटक कराएर भने कि तपाइँहरुले प्राणीहरुलाई उत्तम तरिकाले दया गर्नु भएको छ । स्वर्गमा रहेका देवता एवं नारद आदि देवर्षिले पनि ऋषिहरुले गरेको प्रशंसा सुने । सुनेर ती पनि प्रसन्न भए । सबै प्राणीले आयुर्वेद तन्त्र बनाएकोमा स्नेहयुक्त गम्भीर वचनले धन्यवाद दिए । यो धन्यवादको आवाज आकाशमा फैलिई तीनैलोकमा गुञ्जियो । मन्द हावा बहन लाग्यो । सबै दिशाहरु प्रकाशले चम्किए । पानीबाट अलौकिक फूलहरु वर्षन (उम्रन) लागे । बुद्धि, उपलब्धि, साध्य र साधन, स्मृति, धारण गर्ने शक्ति, मनको सन्तुष्टि, यश, क्षमा, दया, दयार्द्रता जस्ता ज्ञानमय देवताहरु अग्निवेश आदि ऋषिका शरीरमा प्रवेश गरे (यी गुण तिनमा देखियो) । त्यही महर्षिहरुबाट अनुमोदन भएको शास्त्र नै लोकहीतका लागि पृथिवीमा प्रतिस्थापित भयो ।

(ञ) हारांत सांहेता :

**आयुर्वेदमपारन्तु श्लोकानां लक्षसंख्यया । कथं तस्य परिज्ञानं कालेनाल्पेन पुत्रक ॥**

हे पुत्र ! एक लाख श्लोकको आयुर्वेद जानी नसक्नु छ । थोरै समयमा त्यसको ज्ञान कसरी हुन सक्ला र ? ।

**अल्पायुषोऽल्पवक्तारः स्वल्पशास्त्रविशारदाः । अल्पावधारणे शक्ताः कलौ जाता इमे नराः ॥**

थोरै आयु भएका, थोरै बोल्ने र थोरै शास्त्र जान्ने र थोरै ग्रहण गर्न सक्ने (अल्पबुद्धि) मानिस कलिमा जन्मन्छन् ।

**अल्पः कलियुगश्चायं नरोपद्रवकारणम् । कथं पुत्र प्रवक्ष्यामि विस्तरेढा तवागमम् ॥**

यो कलियुग पनि अल्परूपको छ तर मानिस नै उपद्रवका कारण हुन् । यसैले हे पुत्र ! विस्तारसँग आयुर्वेद कसरी भनौ ? ।

**यस्य श्रवणकालो यो याति चान्तञ्च पुकत्र ! । तस्माच्चाल्पतरेणाऽपि वक्ष्यामि श्रृणु साम्प्रतम् ॥**



वैद्यको सुन्ने समय पनि चाँडै वित्दछ अर्थात् दिन जान बेरै लाग्दैन । यसैले यतिखेर म संक्षेपमा बताउँदछु, सुन ।

**चतुर्विंशसहस्रैस्तु मयोक्ता चाद्यसंहिता । तथा द्वादशसाहस्री द्वितीया संहिता मता ॥**
**तृतीया षट्सहस्रैस्तु चतुर्थी त्रिभिरेव च ॥**
**पञ्चमी दिक्पञ्चशतैः प्रोक्ताः पञ्चात्र संहिताः । तस्माच्चाल्पतरेणापि वक्ष्यामि श्रृणु पुत्रक ॥**

(मेरै कुरा गर्दा पनि) मैले चौबीस हजार श्लोकको पहिलो संहिता बताएँ (लेखेँ) । बाह्र हजार श्लोकको दोश्रो संहिता बताएँ । त्यसै गरी छ हजार श्लोकको तेश्रो संहिता बताएँ र तीन हजार श्लोक भएको चौथो संहिता बताएको छु । अनि पन्ध्र सय श्लोकको पाँचौं संहिता बताएको छु । यसरी पाँच संहिता मैले बताएको छु । यसैले हे पुत्र ! म संक्षेपमा बताउँदछु, तिमी सुन ।

(ट) सुश्रुत संहिता :

**अथ खलु भगवन्तममरवरमृषिगणपरिवृतमाश्रमस्थं काशिराजं दिवोदासं**
**धन्वन्तरिमौपधेनववैतरणौरभ्रपौष्कलावतकरवीर्य (र)**
**गोपुररक्षितसुश्रुतप्रभृतय ऊचुः ॥**

देवतामा श्रेष्ठ, ऋषीगणले घेरिएका, वानप्रस्थाश्रममा रहेका काशीराज, भगवान् दिवोदास धन्वन्तरिलाई औपधेनव, वैतरण, औरभ्र, पौष्कलावत, करवीर्य, गोपुररक्षित र सुश्रुत आदि ऋषिहरुले सोधे ।

**भगवन् ! शारीरमानसागन्तुभिर्व्याधिभिर्विविधवेदनाभिघातोपद्रुतान्**
**सनाथानप्यनाथवद्विचेष्टमानान् विक्रोशतश्च मानवानभिसमीक्ष्य मनसिनः पीडा भवति, तेषां सुखैषिणां रोगोपशमनार्थमात्मनश्च प्राणयात्रार्थं प्रजाहितहेतोरायुर्वेदं श्रोतुमिच्छाम इहोपदिश्यमानम्, अत्रायत्तमैहिकमामुष्मिकं च श्रेयः**
**तद्भगवन्तमुपपन्नाः स्मः शिष्यत्वेनेति ॥**

हे भगवान् ! शारीरिक, मानसिक तथा सरुवा (आगन्तुक) रोगले एवं अनेक किसिमका वेदनाका पीडाले कष्ट भोग्दै  मित्र-मालिक-नोकर आदिका साथमा हुँदाहुँदै पनि अनाथको जसरी व्यवहार देखाउँदै चिच्याइरहेका मानिसलाई देखेर हाम्रो मनमा पीडा हुन्छ । आरोग्यको इच्छा गर्ने भएका यी मानिसका रोग शान्त पार्न तथा हाम्रो आफ्नू आजीविकाका लागि अनि लोककल्याणका खातिर हजुरद्वारा उपदेशित आयुर्वेद सुन्न चाहन्छौं । यो आयुर्वेदबाट नै यसलोकमा कल्याण र परलोकमा श्रेय प्राप्ति हुन्छ । यसैले हे भगवान् ! हामी हजुरकोमा शिष्य भएर आएका छौं ।

**तानुवाच भगवान्-स्वागतं वः, सर्व एवामीमांस्या अध्याप्याश्च भवन्तो वत्साः ॥**

भगवान् धन्वन्तरिले भन्नुभयो-हे पुत्रहरु ! तिमीहरु सबै आएको वेश भो, तिमीहरु सबैका बारेमा केही पनि सोच्न आवश्यकता नै छैन, तिमीहरु सब पढाउन योग्य छौ ।



**इह खल्वायुर्वेदं  नामोपाङ्गमथर्ववेदस्यानुत्पाद्यैव प्रजाः**
**श्लोकशतसहस्रमध्यायसहस्रं च कृतवान् स्वयम्भूः,**

यो आयुर्वेद अथर्ववेदको उप-अङ्ग हो । जुन आयुर्वेदलाई प्रजाको सृष्टि गर्नुभन्दा पहिले ब्रह्माले एक लाख श्लोक र एक हजार अध्यायमा बताउनु भएको थियो ।

**ब्रह्मा प्रोवाच ततः प्रजापतिरधिजगे, तस्मादश्विनौ, अश्विभ्यामिन्द्रः, इन्द्रादहं, मया त्विह प्रदेयमर्थिभ्यः प्रजाहितहेतोः ॥**

यो आयुर्वेदलाई सर्वप्रथम ब्रह्माले भन्दै गए, दक्षप्रजापतिले पढ्दै गए । दक्षप्रजापतिबाट अश्विनीकुमारले, अश्विनीकुमारबाट इन्द्रले र इन्द्रबाट मैले पढ्दै आएँ । अब मैले प्रजाको कल्याणका लागि पृथ्वीका शिष्यलाई यो पढाउनु छ ।

**भवति चात्र-अहं हि धन्वन्तरिरादिदेवो जरारुजामृत्युहरोऽमराणाम् । शल्याङ्गमङ्गैरपरैरुपेतं प्राप्तोऽस्मि गां भूय इहोपदेष्टुम् ॥**

(वास्तविक) कुरा यो हो की-देवताका बुढ्यौली, रोग र मृत्यु नाशक आदिदेव म धन्वन्तरि आयुर्वेदका अरु अङ्ग सहित शल्यतन्त्र पढाउन फेरी यो पृथ्वीमा आएको छु ।

# आयुर्वेदको परिभाषा
# (Definition of Syurved)

**(क) भावप्रकाश संहिता :**

**आयुर्हिताहितं व्याधेर्निदानं शमनं तथा । विद्यते यत्र विद्वद्भिः स आयुर्वेद उच्यते ॥**

जुन शास्त्रमा आयु (जीवन वा बाँच्न) का लागि लाभदायक वा हानिकारक कुरा, रोगको उत्पत्ति हुनुको कारण, रोगका लक्षण र उपचारका विषयमा वर्णन गरिएको हुन्छ, त्यो शास्त्रलाई विद्वानहरू आयुर्वेद भन्दछन् ।

**अनेन पुरुषो यस्मादायुर्विन्दति वेत्ति च । तस्मान्मुनिवरैरेष आयुर्वेद इति स्मृतः ॥**

जुन शास्त्र मार्फत पुरुष पूर्ण आयु प्राप्त गर्दछ र त्यसको रहस्यलाई पनि जान्दछ, त्यो शास्त्रलाई मुनिहरूले आयुर्वेद भनेका छन् ।

**(ख) चरक संहिता :**

**हिताहितं सुखं दुःखमायुस्तस्य हिताहितम् । मानं च यत्रोक्तमायुर्वेदः स उच्यते ॥**



हितकारी, अहितकारी, सुखी र दुःखी गरी आयु चार प्रकारको हुन्छ । आयुका हित वा अहित, पथ्य र अपथ्य खाना, आयुको मापन यी सब कुरा जुन शास्त्रमा बताइएको हुन्छ अनि आयुको लक्षण जसमा हुन्छ, त्यसलाई "आयुर्वेद" भनिन्छ ।

**(ग) सुश्रुत संहिता :**

**आयुरस्मिन् विद्यते अनेन वा आयुर्विन्दन्तीत्यायुर्वेदः ॥**

जुन शास्त्रमा आयुका बारेमा विचार हुन्छ वा जुन शास्त्र मार्फत दीर्घायूको प्राप्ति हुन्छ, त्यसलाई आयुर्वेद भनिन्छ ।

**(घ) शार्ङ्गधर संहिता :**

**भोः तत्रायुर्जीवितमित्युच्यते ॥ 'विद' ज्ञाने धातुः 'विलृ' लाभे च, आयुरनेन ज्ञानेन विद्यते ज्ञायते, विन्दते लभ्यते न रिष्यतीत्यायुर्वेदः ।**

हे वैद्य ! जीवनलाई नै आयु भनिन्छ । आयुर्वेद "आयु" शब्दबाट तथा "वेद" शब्द ज्ञान बुझाउने "विद्" अथवा लाभ बुझाउने "विलृ" धातुबाट बनेको हो । यसको अर्थ हुन्छ "जुन ज्ञानले आयुका बारेमा ज्ञान पाइन्छ वा आयु पाइन्छ र त्यसको नाश हुँदैन" त्यसलाई आयुर्वेद भनिन्छ ।

# आयुर्वैदको महत्व एवं उद्देश्य
# (Importance of Ayurveda)

(क) **काश्यप संहिता :**

**सुखजीवितदानं हि सर्वधर्मस्याधिकं ब्रुवते; ततश्च पुण्य एवमायुर्वेदः । सुखजीवितदानतुष्टाश्च देहिनः कृतज्ञाय संविभजन्ति पुरःस्तुवन्ति च; तदस्य धर्मार्थकामनिर्वर्तकं भवतीति किमर्थं चाध्येय इत्यत्रोक्तम्॥**

सुख र स्वस्थ्य जीवन दान दिनुलाई सबै धर्ममा श्रेष्ठ धर्म मानिएको छ । यसैले यो आयुर्वेद पुण्यदायक हुन्छ । स्वस्थता र जीवनदानले सन्तुष्ट भएका मानिस यसप्रति कृतज्ञ हुन्छन् । यसरी यसबाट धर्म, अर्थ र कामको साधना हुने गर्दछ ।

(ख) **भावप्रकाश संहिता :**

**शरीरजीवयोर्योगो जीवनं तेनावच्छिन्नः काल आयुः ।**

शरीर र जीव : यी दुईको संयोग वा सम्बन्ध नै जीवन हो । जीवनयुक्त समयको नाम नै आयु हो ।

**आयुर्वेदद्वारा आयुष्याणि अनायुष्याणि च द्रव्यगुणकर्माणि ज्ञात्वा तेषां सेवनत्यागाभ्यामारोग्येण आयुर्विन्दति ।**

आयुका लागि फाइदा गर्ने र  हानी गर्ने द्रव्य, गुण र कर्मका बारेमा आयुर्वेदबाट सिकी फाइदा गर्ने कुराको सेवन र हानी गर्ने कुराको परित्याग गर्नाले नै मानिस निरोगी भएर पूर्ण आयुलाई भोग्दछ ।

**तेनैव हेतुना परस्यापि आयुर्वेत्ति च क्रममाह ।**

यही आयुर्वेद मार्फत नै अरुको आयुका सम्बन्धमा पनि मानिसले जानकारी पाउँदछ ।

(ग) **अष्टाङ्ग हृदय :**

**आयुः कामयमानेन धर्मार्थसुखसाधनम् । आयुर्वेदोपदेशेषु विधेयः परमादरः॥**

धर्म, अर्थ र सुख प्राप्त गर्ने साधन आयु हो । जसलाई आयुको चाहना छ उसले आयुर्वेदले दिएको उपदेशलाई अति आदर गरोस् ।

व्याख्याः-जसबाट लोकलाई धारण गरिन्छ, त्यो धर्म हो । गीतामा बताइएको छः- उत्सन्नकुलधर्माणां मनुष्याणां जनार्दन । नरके नियतं वासो भवतीत्यनुशुश्रुमः ॥  महाभारतमा बताइएको छः- ऊर्ध्वबाहुर्विरौम्येष न च कश्चिच्छृणोति मे ।  धर्मादर्थश्च कामश्च स धर्मः किं न सेव्यते ॥  यसरी नै

"धर्मो धारयति प्रजाः" अर्थात् धर्मले नै प्रजालाई धारण गर्दछ भनिएको छ । धर्मले नै अर्थ र काम हुन्छन् । जसको धर्म नष्ट हुन्छ, तिनको वास नरकमा हुन्छ । यसैले धर्मको रक्षा र पालन गर्नु हरेक व्यक्तिका लागि अत्यावश्यक छ । कौटिल्य अर्थशास्त्रमा भनिएको छ- "सुखस्य मूलं धर्मः" अर्थात् सुखको जड नै धर्म हो । यस्तो धर्म गर्ने साधन नै यो शरीर हो । त्यसैले त भगवान् गोविन्द पादले भन्नु भएको छः- आयतनं विद्यानां मूलं धर्मार्थकाममोक्षाणाम् । श्रेयः परं किमन्यद् शरीरमजरामरं विहायैकम् ॥ "अर्थ" को अर्थ माग्नु हो । जोसँग धन हुन्छ, उसँग अरुहरु माग्दछन् । अनि जोसँग हुँदैन, उ अरुसँग माग्दछ । यही माग्ने कार्यको नाम नै अर्थ हो । संसारमा अनेक थरी सुख हुन्छ । कसैका लागि छोरानाती पाउनु सुख हुन्छ । कसैका लागि धनदौलत पाउनु सुख हुन्छ । कसैलाई स्त्री पाउनु सुख हुन्छ । अनि कसैका लागि घोडा दौडाउनु सुख हुन्छ । तर, आयुर्वेदका दृष्टिमा आरोग्यता नै सुख हो । यसैले चरकले भनेका छन्:- सुखसंज्ञकमारोग्यं विकारो दुःखमेव च" । सुख पनि दुई किसिमका हुन्छन् । क्षणिक र मोक्ष । चरकसंहितामा पनि भनिएको छ कि-तदात्वसुखसंज्ञेषु भावेष्वज्ञोऽनुरज्यते । रम्यते न तु विज्ञाता विज्ञाने ह्यमलीकृते ॥ यि दुबै सुख आयु वा जीवनसँग जोडिएको हुन्छ । यसैले आयुका बारेमा बताइने कुरालाई अति आदर गर्नु पर्दछ । धर्मले पारलौकिक सुख हुन्छ भने अर्थ र कामले यो लोकमा सुख पाइन्छ तर आयुर्वेदले इहलोक र परलोक दुबै लोकमा सुख हुन्छ । चरकसंहितामा भनिएको छः- तस्यायुषः पुण्यतमो वेदो वेदविदां मतः । वक्ष्यते यन्मनुष्याणां लोकयोरु- भयोर्हितम् ॥

(घ) **चरक संहिता :**

**तस्याऽऽयुषः पुण्यतमो वेदो वेदविदां मतः । वक्ष्यते यन्मनुष्याणां लोकयोरुभयोर्हितम् ॥**



यो आयुर्वेद सबभन्दा बढी श्रेष्ठ र पुण्यदायक छ किन कि अरु ज्ञानले परलोकको हित बताउँदछ, यसले यो लोक र परलोक दुवैको हित बताउँदछ । ज्ञानीहरु यही भन्दछन् ।

(ङ) **हारीत संहिता :**

**एकं शास्त्रं वैद्यमध्यात्मकं वा सौख्यं चैकं यत्सुखं वा तपो वा ।**
**वन्द्यश्चैको भूपतिर्वा यतिर्वा एकं कर्म श्रेयसं वा यशो वा ॥**

एउटै शास्त्र ठीक छ वैद्यशास्त्र अथवा वेदान्त, सुख पनि एउटै ठीक छ भोगसुख अथवा तपस्या, वन्दनीय व्यक्ति पनि एउटै ठीक राजा अथवा सन्यासी, कर्म पनि एउटै ठीक (स्व) कल्याणकारी अथवा यशस्वी ।

**बहुतरमुपचारात् सारमाधारलोके जननमतिसुखानां वर्द्धनं श्रेयसां वा ।**
**विगतकलुषभावा चोज्वला कीर्तिमूर्तिर्न खलु कुटिलतास्याः श्रुयते लोकवृन्दैः ॥**

यो संसारमा उपचार गरी आफू र अरुलाई सुख दिने खालका कल्याण अभिवृद्धि गर्नाले धेरै लाभ हुन्छ । अकलुषितताले उज्वल कीर्ति प्राप्त हुन्छ । मानिसले (उपचारमा) कुटिलता गरेको लोकमा कतै सुन्न पाइँदैन ।

**(च) सुश्रुत संहिता :**

**वत्स सुश्रुत ! इह खल्वायुर्वेदप्रयोजनं-व्याध्युपसृष्टानां व्याधिपरिमोक्षः, स्वस्थस्य रक्षणं च॥**

हे पुत्र सुश्रुत ! रोगी मानिसको रोग निको पार्नु र स्वस्थ मानिसको स्वास्थ्यको रक्षा गर्नु नै आयुर्वेदको उद्देश्य (प्रयोजन) हो ।

## आरनाल (गहुँको अर्क विशेष)
## (Aaranaala)

(क) **अर्कप्रकाश :**

**आरनालं तु गोधूमैरामैः स्यान्निस्तुषीकृतैः ।**

बोक्रा नभएको काँचो गहुँको अर्कलाई “आरनाल” भनिन्छ ।

(ख) **भावप्रकाश निघण्टु :**

**आरनालं तु गोधूमैरामैः स्यान्निस्तुषीकृतैः । पक्वैर्वा सन्धितैस्तत्तु सौवीरसदृशं गुणैः ॥**

काँचो वा पाकेको केलाएको काँचो गहुँको धुलोबाट बनाइने अर्कलाई ‘आरनाल’ भनिन्छ । आरनालको गुण सौवीर सरह हुन्छ ।

राजनिघण्टु आदि ग्रन्थमा आरनाललाई काँजीको पर्यायवाची शब्दमा गणना गरिएको छ ।

# आरामशीतला (सिलाम)
# (Perilla)

**परिभाषा :**

(क) **के.यन.स्वामी :** (१) आरामशीतला : सिलामको बोट । (२) नन्दा, शीतला, रामा, महानन्दा, गन्धाढ्या : सिलाम । (३) सुनन्दिनी : सिलामको बोट । सिलाम ।

(ख) **नेपाली बृहत् शब्दकोश :** (१) बनसिलाम : जङ्गलमा पाइने एक जातको सिलाम; जङ्गली सिलाम । (२) सिलाम : केही ठूला, तुलसीका जस्ता बास्ना आउने पात, मञ्जरीका रूपमा फुल्ने सेता फूल र साबुदानाजस्ता सेता दाना हुने एक जातको बोट । त्यसैको अचार बनाएर खाइने फल वा दाना ।

(ग) **फ्लावर्शअफइण्डियाडटनेट :** यसलाई अंग्रेजीमा Beefsteak plant वा Perilla भनिन्छ । यसको वानस्पतिक नाम *Perilla frutescens* var. frutescens वा *Perilla frutescens* var. purpurascens, *Perilla albiflora* हो ।

(घ) **Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 :** वन सिलाम Angiosperm समूह अन्तर्गत Lamiaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Elsholtzia flava* (Benth.) Benth. हो ।



सिलामको बोट (दैनिकअनलाइनडटकम)

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान रत्नमाला :**

**आरामशीतला देवगन्धा कुक्कुटमर्दकः ।**

आरामशीतला, देवगन्धा र कुक्कुटमर्दक : यी सिलामका पर्यायवाची नाम हुन् ।

**(ख) अष्टाङ्ग निघण्टु :**

**आरामशीतलो देवो गन्धाढ्यः कुरुमर्दकः ।**

आरामशीतला, देवा, गन्धाढ्य र कुरुमर्दक : यी सिलामका पर्यायवाची नाम हुन् ।

**(ग) कैयदेव निघण्टु :**

**आरामशीतला देवगन्ध्या कुर्कुटमर्दकः । चिटिका लक्षिका भूरिनवनीता प्रकीर्तिता ॥**
**देवगन्धा कटुस्तिक्ता हिमा पित्तकफास्रजित्॥**



आरामशीतला, देवगन्ध्या(धा), कुर्कुटमर्दक, चिटिका, लक्षिका र भूरिनवनीता : यी सिलामका पर्यायवाची नाम हुन् । यो पिरो, तितो, शीतवीर्यको तथा पित्तविकार, कफविकार र रक्तविकारलाई जित्ने गुणको हुन्छ ।

**(घ) मदनपाल निघण्टु :**

**आरामशीतला देवी गन्धा कुक्कुरमर्दनः । आरामशीतला शीता कटु पित्तकफास्रजित्॥**

आरामशीतला, देवी, गन्धा र कुक्कुरमर्दन : यी सिलामका संस्कृत पर्यायवाची नामहरू हुन् । सिलाम शीतल गर्ने, पिरो तथा पित्तविकार, कफविकार र रक्तविकार नाशक हुन्छ ।

**(ङ) राज निघण्टु :**

**आरामशीतला नन्दा शीतला सा सुनन्दिनी । रामा चैव महानन्दा गन्धाढ्यारामशीतला॥**
**आरामशीतला तिक्ता शीतला पित्तहारिणी । दाहशोषप्रशमनी विस्फोटव्रणरोपणी॥**

आरामशीतला, नन्दा, शीतला, सुनन्दिनी, रामा, महानन्दा, गन्धाढ्या र रामशीतला : यी सिलामका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, शीतवीर्यको, पित्तविकार नाशक, डाह र सुजनलाई शान्त पार्ने तथा विस्फोट नाशक एवं घाउ भर्ने गुणको हुन्छ ।

**(च)** **शाबरमन्त्र सागर, उत्तर भाग :** मुसली र सिलाम खानाले पुरुषको जननेन्द्रिय लामो हुन्छ ।



सिलामका दाना (तस्बिर श्रोत : झारपातडटकम)

# आरुक (आरु)
# (Peach)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) आरुकम् : आरु । वीरसेन : आलुबखडा ।

(ख) नेपाली बृहत् शब्दकोश : (१) आरु : लाम्चा पात हुने, कलेजी रङका सेता ससाना फूल फुल्ने एक जातको बोट वा त्यही बोटको भित्र हाडे बियाँ हुने फुस्रो रङको फल । (२) आलुचा : एक प्रकारको पहेँलो र सानो खालको फल फल्ने आलुबखडाको बोट वा सोही बोटको फल । (३) आलुबखडा : लाम्चा हरिया पात र झीनो पातलो बोटमा सेतो फूल हुने अनि बोटैमा गुलियो-अमिलो स्वादको गोल-गोल फल लाग्ने बोट; त्यसैको फल ।

(ग) आचार्य बालकृष्ण : यसलाई अंग्रेजीमा Peach tree (पीच ट्री) वा Nectarine (नेक्टरिन) तथा ल्याटिन भाषामा *Prunus persica* (LI) Batsch (प्रुनस पर्सिका एल आई बाच) वा *Amygdalus persica* Linn. (अमिग्डलश पर्सका लिन) भनिन्छ । यो Rosaceae (रोजेसी) परिवारमा पर्दछ । यसलाई संस्कृतमा आरुकम् र पिचुकम् तथा हिन्दीमा आडु भनिन्छ ।

(घ) नेपाल सरकारबाट सन् २०२२ मा प्रकाशित Catalogue of Plants of National Botanical Garden, Nepal नामक पुस्तिका : यो *Angiosperm* (याञ्जियोस्पर्म) समूह अन्तर्गतको Rosaceae (रोजेसी) परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Prunus persica* (LI) Batsch (प्रुनस पर्सिका एल आई बाच) हो ।

(ङ) नेपालको चुरे जङ्गल, जुलाई २०१४, नेपाल सरकार : यसलाई आडु, खाले पनि भनिन्छ ।



आरुको फूल (तस्बिर श्रोत : खबरपोष्ट)

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**आरुकं स्याद्रोचिफलं रोचिष्कं चाम्लपाकी च । वीरासनं वीरसेनं वीरं वीराम्लमित्यपि ॥**

आरुक, रोचिफल, रोचिष्क, अम्लपाकी, वीरासन, वीरसेन, वीर र वीराम्ल : यी आरुका नाम हुन् ।



सिमिकोट हुम्लामा फुलेको आरुको फूल (तस्विर : दाने बोहरा, रा.स.स.)

**(ख) धन्वन्तरि निघण्टु :**

**आरुकं वीरसेनं तु वीरं वीरारुकं तथा । विद्याज्जातिविशेषेण तच्चतुर्विधमारुकम् ॥**
**आरुकाणि च हृद्यानि मेहार्शोनाशनानि च ॥**



काठमाडौं उपत्यकाको भैंसेपाटी क्षेत्रमा फुलेको आरुको फूल (तस्विर श्रोत : खबरपोष्ट)

आरुक, वीरसेन, वीर र वीरारुक : यी आरुका नाम (वा जात) हुन् । जात अनुसार आरु चार प्रकारका हुन्छन् । आरु मुटुका लागि हितकर तथा प्रमेह र अल्काई नाशक हुन्छन् ।

## (ग) कैयदेव निघण्टु :

**अरुकं वीरसेनं च वीरा विरारुकं तथा ॥ विद्याज्जातिविशेषेण तच्चतुर्विधमारुकम् ।**
**आरुकं तुवरं भेदि गुरूष्णं कफपित्तकृत् ॥ पक्वं तु मधुरं नाति गुरूष्णं कफपित्तलम् ।**
**बृंहणं रोचनं शीघ्रं जरा मारुतनाशनम् ॥**

अरुक, वीरसेन, वीरा र विरारुक : यी आरुका नाम (वा जात) हुन् । जात अनुसार त्यो चार किसिमको हुन्छ । यो टर्रो, भेदि, पचाउन कठिन, उष्णवीर्यको तथा कफविकार र पित्तविकार गर्ने गुणको हुन्छ । पाकेको आरु गुलियो, पचाउन धेरै कठिन नहुने, कम उष्णवीर्यको तथा कफविकार पित्तविकार बढाउने गुणको हुन्छ । यो पौष्टिक, रुचिकर तथा चाँडै बुढ्यौली र वातविकार नाशगर्ने गुणको हुन्छ ।


पाकेका आरु, लमजुङ, नेपाल (तस्विर श्रोत : रा.स.स.)

## (घ) सोढल निघण्टु :

**आरुके वीरसेनं च वीरं वीरातकं तथा ॥ विद्याज्जातिविशेषेण तच्चतुर्विधमारुकम् ॥**

आरुक, वीरसेन, वीर र वीरातक : यी आरुका नाम (वा जात) हुन् । जातका आधारमा यो चार प्रकारको हुन्छ ।

## (ङ) राजनिघण्टु :

**आरुकं वीरसेनं च वीरं वीरारुकं तथा । तत्र विद्याच्चतुर्जाती पत्रपुष्पादिभेदतः ॥**

**आरुकाणि च सर्वाणि मधुराणि हिमानि च । अर्शःप्रमेहगुल्मास्रदोषविध्वंसनानि च ॥**


आरु (तस्विर श्रोत : वनएमजीडटकममा रहेको आचार्य बालकृष्णको लेख)

आरुक, वीरसेन, वीर र वीरारुक : यी आरुका नाम  हुन् । पात र फूल आदिमा हुने विभिन्नताका आधारमा यो चार प्रकारको हुन्छ । सबै खालका आरु गुलिया, शीतवीर्यका तथा अल्काई, प्रमेह, गुल्म र रक्तविकार नाशक हुन्छन् ।

## (च) निघण्टु रत्नाकर (शा.नि.):-

**आरुकोग्राहीतुवरोहृद्यः शीतोगुरुः स्मृतः । मलावष्टम्भकोग्राहीभेदीचोष्णः कफापहः ॥**
**पित्तहृत्पाचकश्चाम्लोमधुरश्च मुखप्रियः । मुखस्वच्छकरश्चैव मेहगुल्मार्शनुत्परः ॥**
**रक्तवातरुजां हन्ता सपक्वोमधुरो गुरुः । कफपित्तकरश्चोष्णोरुच्यो धातुविवर्धकः ॥**
**प्रियश्चैव तथा प्रोक्तो मेहार्शज्वरवातहा ।**



आरु ग्राही, टर्रो, मुटुका लागि हितकर, शीतल गर्ने, पचाउन कठिन, दिसा रोक्ने, ग्राही, भेदनी, उष्णवीर्यको र कफविकार नाशक हुन्छ । यो पित्तविकार नाशक, पाचनी, अमिलो, गुलियो, स्वादिलो, मुखलाई सफा पार्ने तथा प्रमेह, गुल्म, अल्काई र रक्तवात नाशक हुन्छ । पाकेको आरु गुलियो, पचाउन कठिन, कफविकार गर्ने, पित्तविकार गर्ने, उष्णवीर्यको, रुचिकर, धातुवर्धक, प्रिय तथा प्रमेह, अल्काई, जरो र वातविकार नाशक हुन्छ ।


आरु (तस्विर श्रोत : ruastnp.blogspot.com)

## (छ) मदनपाल निघण्टु :

**आरुकं वीरसेनं तज्जातिभेदाच्चतुर्विधम् । आरुकं जारकं वातमेहार्शः कफनाशनम् ॥**

आरुक र वीरसेन : यी आरुका नाम हुन् । यसका चार जात हुन्छन् । पाकेको (जारकं) आरुले वातविकार, प्रमेह, अल्काई र कफविकार नाश गर्दछ ।

# आरोग्योदक
# (Aarogyodaka)

## (क) हारीत संहिता :

**पादशेषन्तु क्वथितं तच्चारोग्यजलं विदुः । कासश्वासहरं पथ्यं मारुतं चापकर्षति ॥**
**सद्यो ज्वरं हरत्याशु समेदं कफनाशनम् । प्रतिश्यामं पाचयति शूलगुल्मार्शनाशनम् ॥**
**दीपनञ्च हुताशस्य पाण्डुशोफोदरापहम् । अजीर्णञ्च जरत्याशु पीतमुष्णेदकं निशि ॥**

उमालेर एक चौथाई बाँकी रहेको पानीलाई आरोग्योदक भनिन्छ । यसले खोकी र श्वासप्रश्वाससम्बन्धी समस्या ठिक गर्दछ । पचाउन सहज हुन्छ र वायुदोषलाई नाश गर्दछ । साथै, जरोलाई द्रूतगतिमा निको पार्दछ, बोसो र कफलाई नाश गर्दछ, रुघालाई पकाउँदछ तथा शूल, गुल्म र अल्काई ठिक गर्दछ । यस्तो पानी पिउनाले जठराग्निलाई बाल्दछ, पाण्डु, सुन्निने रोग र पेटका रोगलाई नाश गर्दछ । यस्तो पानी राती (सुत्नुभन्दा केही समय अघि) पिउने गरे त्यसले अजीर्णको समस्या ठिक हुन्छ ।

# आर्द्रक र नागर (अदुवा र सुठो)
# (Ginger root & Dry zingiber)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा गौतम : आर्द्रक र शृङ्गवेर भनेको अदुवा हो । नागर आदि शब्दले सुठोलाई बुझाउँदछ ।

(ख) अनलाइन संस्कृत-नेपाली बृहत् शब्दकोश, के.यन.स्वामी : आर्द्रक आदि शब्दले अदुवालाई बुझाउँदछ ।

(ग) नेपाली बृहत् शब्दकोश : (१) अदुवा : झण्डै हलेदो जस्तो बोट र पात भई भुइँमनि पिरा गाना फल्ने एक वनस्पति; मसला वा औषधिमा प्रयोग हुने यसैको गानु । (२) आर्द्रक : अदुवा । (३) मालनेटा : नेपालमा अदुवाका लागि प्रसिद्ध सल्यान जिल्लाको एक प्रसिद्ध बजार । (४) बुढी : अदुवाको बीउ वा पुरानो गानु । (५) सुठो : खार, चून आदि खनिज पदार्थ मिसाई तयार गरी सुकाइएको अदुवा । सुकेको अदुवा । (६) सुठौरो : सुठो हालेर प्रायः सुत्केरीका लागि बनाइएको खानेकुरो; सुठोको झोल वा रस; सुठाउरो

(घ) डा.चुनेकर : यसलाई अंग्रेजीमा Ginger (जिञ्जर) र ल्याटिन भाषामा *Zingiber officinale* (जिञ्जिबर अफिसिनाली) भनिन्छ । सुठोलाई अंग्रेजीमा Dry Zingiber र ल्याटिन भाषामा *Zingiber officinale* Roscoe भनिन्छ । यसलाई राम्ररी सफा गरेर धोईपखाली गरी दूधमा उमालेर सुकाइन्छ । उमाल्दा चुन मिसाएर उमाल्दा यो टिकाउ हुन्छ ।

(ङ) पेयर डी अमरकोश : यसलाई ल्याटिन भाषामा *Zingiber officinale* Roscoe (जिञ्जिबर अफिसिनाली रस्को) भनिन्छ । 



अदुवा , आर्द्रकम् | *Zingiber officinale Roscoe, payer.de/amarakosa*

(च) द आयुर्वेद इन्साइक्लोपेडिया, स्वामी सदाशिव तिर्थ : यसलाई अंग्रेजीमा Fresh Ginger/dry Ginger (फ्रेस जिञ्जर, ड्राइ जिञ्जर) तथा ल्याटिन भाषामा *Zingiberis officinale* roscoe (जिञ्जिबर अफिसिनाली रस्को) भनिन्छ ।

(छ) आचार्य बालकृष्ण : यसलाई ल्याटिन भाषामा *Zingiber officinale* Rosc. (जिञ्जिबर अफिसिनाली रस्को) वा *Amomum zingiber* Linn. (अमोमम जिञ्जिबर लिन)तथा अंग्रेजीमा Wet ginger root (वेट जिञ्जर रुट) Ginger (जिञ्जर), Zingibil (जिञ्जिविल) वा Common ginger (कमन जिञ्जर) भनिन्छ ।

(ज) यस.डी.कामत : यसलाई अंग्रेजीमा Ginger (जिञ्जर) तथा ल्याटिन भाषामा *Zingiber officinale* Rosc. (जिञ्जिबर अफिसिनाली रस्को) भनिन्छ । यो Zingiberaceae (जिञ्जिविरेसी) परिवारमा पर्दछ ।

(झ) शालिग्राम निघण्टु : यसलाई अंग्रेजीमा Ginger root (जिञ्जर रुट) तथा ल्याटिनभाषामा *Gingiber officinale* (जिञ्जिबर अफिसिनाली) भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**नागरमूषणमार्यं कटुकं कटुकायनं महीच्छत्रम् ।**
**शुण्ठी कोलं विश्वं विश्वौषधमौषधं महास्कन्धम्॥**
**महौषधं महावीर्यं सिंहलं विश्वभेषजम् । तीक्ष्णं कटु च कासघ्नं शृङ्गिवेरमिति स्मृतम्॥**



नागर, ऊषण, आर्य, कटुक, कटुकायन, महीच्छत्र, शुण्ठी, कोल, विश्व, विश्वौषध,, औषध, महास्कन्ध, महौषध, महावीर्य, सिंहल, विश्वभेषज : यी सुठोका नाम हुन् । सुठो तिक्खर, पिरो र खोकी नाशक हुन्छ ।

**आर्द्रकमाविर्भाविकं कटुभेदं शृङ्गिकं च कटुतोयम् ।**
**कटुशृङ्गिकं च कटुकं पर्यायैः कथ्यते जटिलशृङ्गि ॥**

आर्द्रक, आविर्भाविक, कटुभेद, शृङ्गिक, कटुतोय, कटुशृङ्गिक, कटुक र जटिलशृङ्गि : यी अदुवाका नाम हुन् ।

**(ख) अभिधान रत्नमाला :**

**शुण्ठी महौषधं विश्वं नागरं विश्वभेषजम् । कटुभद्रं शृङ्गबेरं भेषजं चार्द्रमार्द्रकम्॥**

शुण्ठी, महौषध, विश्व, नागर र विश्वभेषज : यी सुठोका तथा कटुभद्र, शृङ्गबेर, भेषज र आर्द्रमार्द्रक : यी ताजा अदुवाका नाम हुन् ।

**(ग) अमरकोश :**

**आर्द्रकं शृङ्गवेरं स्यात्...॥ ...शुण्ठी महौषधम् । स्त्रीनपुंसकयोर्विश्वं नागरं विश्वभेषजम्॥**

आर्द्रक र शृङ्गवेर : यी अदुवाका नाम हुन् । शुण्ठ, शुण्ठी, महौषध, विश्व, नागर र विश्वभेषज : यी सुठोका नाम हुन् ।

(घ) **अर्कप्रकाश :**

**शुण्ठ्या विबन्धाऽऽमवातशूलश्वासबलासहृत् । आर्द्रकस्य ज्वरं दाहं हरेद्रुच्योऽग्निदीप्तिकृत् ॥**

सुठोको अर्कले दिसा-अवरोध, आमवात, शूल, दम र कफ नाश गर्दछ भने अदुवाको अर्कले जरो र डाह नाश गर्दछ । अदुवाको अर्कले रुचि र पाचकाग्नि समेत बढाउँदछ ।

(ङ) **अष्टाङ्ग निघण्टु :**

**शुण्ठी महौषधं विश्वं नागरं विश्वभेषजम् ।**

शुण्ठी, महौषध, विश्व, नागर र विश्वभेषज : यी सुठोका नाम हुन् ।

(च) **आयुर्वेद महोदधि :**

**आर्द्रं पाचनदीपकं रुचिकरं वृष्यं कटुष्णं वरं स्वर्यं मेध्यकरं कफानिलहरं शोफापहं शूलजित् ।**
**जिह्वाकण्ठविशोधनं सलवणं पथ्यं सदा भोजने निम्बूतोयविमर्दितं रुचिकरं सन्दीपनं सारणम् ॥**

अदुवा पाचन, दीपन, रुचिकर, वीर्यवर्धक, पिरो, गर्मी गर्ने, घाँटी एवं स्वरका लागि फाइदाजनक, पवित्र, कफ एवं वातविकार नाशक, सुन्निएको बसाउने र शूल नाशक हुन्छ । खाना खानुअघि सिधे नुनसँग अदुवा खाने गर्नाले यसले जिभ्रो र घाँटीलाई प्रशोधन गर्दछ र भोक बढाउँदछ । कागतीपानीमा घोलिएको अदुवाले जठराग्निलाई बाल्दछ, रुचिकर हुन्छ र दिसापिसाब खुलाउँदछ ।



**बालं ह्यनार्तवं जीर्णं व्याधितं कृमिभक्षितम् । कण्ठं विसर्जयेत्सर्वं यो वा सम्यङ् न रोहति ॥**

राम्ररी नछिप्पिएको (कलिलो), बेमौसमको, धेरै सुकेको वा पुरानो वा मक्किएका, किरा परेको र राम्ररी नउम्रेको अदुवाले घाँटीलाई खराब गर्दछ । (कुनै प्रतिमा यी गुणलाई पिँडालूका लागि प्रयोग गरिएको छ) ।

(छ) **कैयदेव निघण्टु :**

**शुण्ठी महौषधं विश्वमौषधं विश्वभेषजम् । नागरं कटुभद्रञ्च राहुच्छत्रं कटूत्कटम् ॥**
**(आर्द्रकेति आर्द्र शुण्ठी नामः )**
**नागरं मधुरं पाके स्निग्धोष्णं कटुकं लघु । रुच्यं मलानां सङ्ग्राहि हृद्यं वायोर्विबन्धनुत् ॥**
**दीपनं पाचनं वृष्यं स्वर्यं वातकफापहम् । निहन्ति शूलहृद्रोगशोफार्शःश्लीपदोदरम् ॥**
**आनाहश्वासकासामवमीहिध्मामपितलम् । कटूष्णं दीपनं वृष्यं रुच्यमार्द्रकनागरम् ॥**
**श्वासकासवमिहिक्कावातश्लेष्मविबन्धनुत् ।**

शुण्ठी, महौषध, विश्व, औषध, विश्वभेषज, नागर, कटुभद्र, राहुच्छत्र र कटूत्कट : यी सुठोका नाम हुन् । सुठो पचेपछि गुलियो हुन्छ । यो चिल्लो, उष्णवीर्यको, पिरो, पचाउन सहज, रुचिप्रद, दिसा (मल) कस्ने, मुटुका लागि हितकर, बायुको बाटो खुलाउने तथा शूल, मुटुका रोग, सुजन, अल्काई,

हात्तीपाइले रोग, पेटका रोग, आनाह, दम, खोकी, वाकवाकी र बाडुली नाशगर्ने गुणको हुन्छ । यसले पित्तविकारपनि गर्दैन । सुकेको अदुवा पिरो, उष्णवीर्यको, दीपनी, वीर्यवर्धक, रुचिप्रद तथा दम, खोकी, वाकवाकी, बाडुली, वातविकार, कफविकार र कब्जियत नाशगर्ने गुणको हुन्छ ।

**कटुभद्रं शृङ्गवेरमार्द्रकं कटुकन्दकम्॥ तत्तुल्यमार्द्रकं विद्यात् सुतीक्ष्णं भेदनं गुरु ।**
**पाचनं रोचनं वृष्यं कटूष्णं वह्निदीपनम्॥ कफानिलहरं स्वर्यं विबन्धानाहशूलजित् ।**

कटुभद्र, शृङ्गवेर, आर्द्रक र कटुककन्द : यी अदुवाका नाम हुन् । अदुवा सुठो जमान हुन्छ । यो अति तिक्खर, भेदनी, पचाउन कठिन, पाचनी, रुचिप्रद, वीर्यवर्धक, पिरो, उष्णवीर्यको, पाचनशक्ति बढाउने, कफविकार र वातविकार नाशगर्ने, स्वरका लागि हितकर तथा कब्जियत, आनाह र शूललाई जित्ने गुणको हुन्छ ।

**अङ्कुरं शृङ्गवेरस्य रक्तजित् श्लेष्मवातहा॥ अव्यक्तरसवीर्यत्वात् परमं तु कफापहम् ।**

अदुवाको अङ्कुरले रक्तविकारलाई जित्दछ तथा कफविकार र वातविकारलाई नाश गर्दछ । लुकेको रस र वीर्यका कारण यसले बढी कफविकार नाश गर्दछ ।

**काञ्जिकार्द्रं सलवणं दीपनं पाचनं परम्॥**
**वातश्लेष्मविबन्धघ्नं विशेषादामवातनुत् । रोचनं दीपनं चापि शोफदोषहरं परम्॥**

काँजी र सिँधेनुनसँग खाइएको अदुवा दीपनी, अत्यन्त पाचनी तथा वातविकार, कफविकार, कब्जियत, र विशेष गरी आमजन्य वातविकार नाशगर्ने गुणको हुन्छ । यो रुचिप्रद, दीपनी तथा विशेष गरी सुजनका दोष नाश गर्ने गुणको हुन्छ ।



**वातप्रकोपशमनं हर्षणं लवणार्द्रकम् । भक्षणं लवणार्द्रस्य हृद्यं वह्निप्रदीपनम्॥**
**भोजनाग्रे सदा पथ्यं जिह्वाकण्ठविशोधनम् । वातश्लेष्महरं रुच्यं दीपनं पाचनं परम्॥**
**निम्बुकस्य रसे क्षिप्तमार्द्रकं मुखशोधनम् ।**

नुनसँग खाइएको अदुवाले वातविकार शान्त पार्दछ र आनन्द दिन्छ । नुन र अदुवा खानु मुटुका लागि हितकर र पाचनशक्ति वर्धक हुन्छ । खाना खानु अघि अदुवा सधैं पथ्य हुन्छ । यसले जिभ्रो र घाँटी प्रशोधन गर्दछ । यसका साथै यसले वातविकार र कफविकार नाश गर्दछ । यो रुचिप्रद, दीपनी र अत्यन्त पाचनी हुन्छ । कागतीको रसमा घोलिएको अदुवाले मुख सफा गर्दछ ।

(ज) **चरक संहिता :**

**रोचनं दीपनं वृष्यम् आर्द्रकं विश्वभेषजम् । वातश्वेष्मविबन्धेषु रसस्तस्योपदिश्यते॥**

अदुवा वा सुठो (आर्द्रक वा विश्वभेषज) रुचिप्रद, दीपनी र वीर्यवर्धक हुन्छ । यसको रस वातजन्य र कफजन्य कब्जियतमा हितकर हुन्छ ।

(ज) **धन्वन्तरि निघण्टु :**

**शुण्ठी महौषधं विश्वं नागरं विश्वभेषजम्॥ विश्वौषधं शृङ्गबेरं कटुभद्रं तथाऽऽर्द्रकम् ।**

**स्निग्धोष्णा कटुका शुण्ठी वृष्या शोफकफारुचीन्॥ हन्ति वातोदरश्वासपाण्डुश्लीपदनाशिनी । कफानिलहरं स्वर्यं विबन्धानाहशूलजित्॥ कटूष्णं रोचनं वृष्यं हृद्यं चैवाऽऽर्द्रकं स्मृतम् ।**

शुण्ठी, महौषध, विश्व, नागर, विश्वभेषज, विश्वौषध, शृङ्गबेर, कटुभद्र र आर्द्रक : यी अदुवा वा सुठोका संस्कृत पर्यायवाची नामहरू हुन् । सुठो चिल्लो, उष्णवीर्यको, पिरो र वीर्यवर्धक हुन्छ । यसले सुजन, कफविकार, अरुची, वातोदर, दम, पाण्डु र हात्तीपाइले रोग नाश गर्दछ । अदुवाले कफविकार, वातविकार नाश गर्दछ । यो स्वरका लागि लाभदायक हुन्छ । यसले विबन्ध, आनाह र शूललाई जित्दछ । अदुवा पिरो, उष्णवीर्यको, रोचनी, वीर्यवर्धक र मुटुका लागि हितकर हुन्छ ।

(झ) **निघण्टुशेष :**

**आर्द्रके तु शृङ्गबेरं कटुभङ्गं कटूत्कटम् । शुण्ठी महौषधं विश्वा नागरं विश्वभेषजम्॥**

आर्द्रक, शृङ्गबेर, कटुभङ्ग, कटूत्कट, शुण्ठी, महौषध, विश्वा, नागर र विश्वभेषज : यी सुठोका नाम हुन् ।

(ञ) **पर्याय रत्नमाला :**

**विश्वं महौषधं शुण्ठी नागरं विश्वभेषजम्॥**

विश्व, महौषध, शुण्ठी, नागर र विश्वभेषज : यी सुठोका नाम हुन् ।

(ट) **भावप्रकाश निघण्टु :** 

**शुण्ठी विश्वा च विश्वञ्च नागरं विश्वभेषजम् । ऊषणं कटुभद्रञ्च शृङ्गवेरं महौषधम्॥**

सुठोका शुण्ठी, विश्वा, विश्व, नागर, विश्वभेषज, उषण, कटुभद्र, शृङ्गवेर र महौषधी पर्यायवाची नाम हुन् ।

**शुण्ठी रुच्यामवातघ्नी पाचनी कटुका लघुः । स्निग्धोष्णा मधुरा पाके कफवातविबन्धनुत्॥**
**वृष्या स्वर्य्यावमिश्वासशूलकासहृदामयान् । हन्ति श्लीपदशोफार्श आनाहोदरमारुतान्॥**
**आग्नेयगुणभूयिष्ठं तोयांशं परिशोषि यत् । संगृह्णाति मलं तत्तु ग्राहि शुण्ठ्यादयो यथा॥**
**विबन्धभेदिनी या तु सा कथं ग्राहिणी भवेत् । शक्तिर्विबन्धभेदे स्याद्यतो न मलपातनो॥**

सुठोमा रुचिवर्द्धक, आमवातनाशक, पाचक, पिरोपिरो, हलुका, हल्का चिल्लो, गर्मी गर्ने, पच्दा स्वादिलो, कफविकार नाशक, वातविकार नाशक, कब्जियत हटाउने, वीर्यवर्द्धक, स्वरमा निखार लेराउने, वान्ता रोक्ने तथा दमको रोग, शूलरोग (टाउको, हात, गोडा आदि कुनै पनि अङ्गमा हुने ज्यादा दुखाइ ।वायुप्रकोपले हुने पेटको ज्यादा दुखाइ । वातरोग । गानु, गानो, गानुगोला, गोला), खोकी, मुटुकारोग, हात्तीपाइले रोग (श्लीपद), शरीरको कुनै अङ्ग सुन्निने रोग (शोफ), अल्काई, पचेर अथवा नपची दूषित भएको मलमूत्र पेटमा रोकिएर हुने रोग (आनाह), पेटसम्बन्धी अन्य रोग र वातजन्य रोगहरू निको पार्ने गुण हुन्छ । अग्नि गुण प्रधान हुने कुराले जललाई सोस्ने गर्दछ र दिसालाई रोक्दछ । जस्तैः सुठो । सुठोमा यी सबै गुण हुँदाहुँदै अर्थात् दिसा खुकुल्याउने गुण हुँदाहुँदै पनि यसले कसरी दिसालाई रोक्दछ त ? यसमा दिसा खुकुल्याउने शक्ति त हुन्छ तर त्यसलाई बाहिर निकाल्ने शक्ति हुँदैन ।

**आर्द्रकं शृङ्गवेरं स्यात्कटुभद्रं तथाऽऽर्द्रिका । आर्द्रिका भेदनी गुर्वी तीक्ष्णोष्णा दीपनी मता ॥**
**कटुका मधुरा पाके रूक्षा वातकफापहा । ये गुणाः कथिताः शुण्ठ्यां तेऽपि सन्त्यार्द्रकेऽखिलाः ॥**
**भोजनाग्रे सदा पथ्यं लवणार्द्रकभक्षणम् । अग्निसन्दीपनं रुच्यं जिह्वाकण्ठविशोधनम् ॥**
**कुष्ठे पाण्ड्वामये कृच्छ्रे रक्तपित्ते व्रणे ज्वरे । दाहे निदाघशरदोर्नैव पूजितमार्द्रकम् ॥**

आर्द्रक, शृङ्गवेर, कटुभद्र र आर्द्रिका : यी अदुवाका नाम हुन् । अदुवाले दिसा खुकुलो पार्दछ । यसको तिक्खर स्वाद हुन्छ । यो पचाउन कठिन हुन्छ । यसले गर्मी गर्दछ, पेटको अग्निलाई बढाउँदछ र पीरो स्वाद दिन्छ । अदुवा पचेपछि गुलियो हुन्छ । अदुवाले वात र कफले हुने रोगलाई नष्ट गर्दछ । सुठोमा हुने गुण अदुवामा पनि हुन्छन् । खाना खानु अघि दिनहुँ अलिकति नुन र अदुवा खाने गरे यसले पेटको अग्निलाई बाली खाएको कुरा पचाउन मद्दत गर्दछ । यसले रुचि जगाउँदछ । जिभ्रो र घाँटीलाई सफा र शुद्ध बनाउँदछ । कुष्ठरोग, कमलपित्त, पिसाब नखुल्ने रोग (कृच्छ्र), मुख-नाक-योनी आदिबाट अनायाश रगत बहने रोग (रक्तपित्त) भएका तथा खटिरा र जरो आएकाले अदुवा खान हुन्न । ग्रीष्म (जेठ र असार) र शरद (असौज र कात्तिक) ऋतुमा पनि अदुवा खान हुन्न । सुठोको काँचो अवस्था नै अदुवा हो । अदुवा र सुठोको वर्णन समान हो । (अदुवालाई बालुवामा पुरेर राख्ने र माथिबाट दिनहुँ थोरै पानी छम्कने गरे लामो समयसम्म सुक्दैन सधैं ताजा भइरहन्छ । गर्मी जीउ हुनेले अदुवा नखानू, खाएर कुनै बेफाइदा गरे मह खानू । नेपाली उखान-अदुवा खाई सभा पस्नू, मूला खाई बन पस्नू) ।

(ठ) **मदनपाल निघण्टु :**

**शुण्ठी विश्वौषधं विश्वं कटुभद्रं कटूत्कटम् । महौषधं शृङ्गवेरं नागरं विश्वभेषजम् ॥**



शुण्ठी, विश्वौषध, विश्व, कटुभद्र, कटूत्कट, महौषध, शृङ्गवेर, नागर र विश्वभेषज : यी सुठोका नाम हुन् ।

**शुण्ठी रुच्याऽऽमवातघ्नी पाचनी कटुका लघुः । स्निग्धोष्णा कटुका पाके कफवातविबन्धनुत् ॥**

सुठोले रुचि जगाउँदछ र आमजन्य वातविकार नाश गर्दछ । यो पाचनी, पिरो, पचाउन सहज, चिल्लो, गर्मी गर्ने, पचेपछि पिरो तथा कफविकार, वातविकार र कब्जियत नाशक हुन्छ ।

**वृष्या स्वर्या वमिश्वासकासशूलहृदामयान् । हन्ति श्लीपदशोफार्शानाहोदरमारुतान् ॥**

सुठो वीर्यवर्धक, स्वर खुलाउने तथा वाकवाकी, दम, खोकी, शूल, मुटुका रोग, हात्तीपाइले रोग, सुजन, अल्काई, आनाह र पेटका वातविकार नाशक हुन्छ ।

**आर्द्रकं शृङ्गवेरं तन्महौषधमुदाहृतम् । आर्द्रकं नागरगुणं भेदनं दीपनं गुरु ॥**

आर्द्रक, शृङ्गवेर र महौषध : यी अदुवाका नाम हुन् । अदुवाका सुठोका गुण हुन्छन् । यो भेदनी, दीपनी र पचाउन कठिन हुने गुणको हुन्छ ।

**कटूष्णं दीपनं वृष्यं रुच्यमार्दकनागरम् । श्वासकासवमीहिक्कवातश्लेष्मविबन्धनुत् ॥**

अदुवा पिरो, गर्मी गर्ने, वीर्यवर्धक, रुचिकर तथा दम, खोकी, वाकवाकी, बाडुली, वातविकार, कफविकार र कब्जियत नाशक हुन्छ ।

**पाचनं रोचनं वृष्यं कटूष्णं वह्निदीपनम् । वातप्रकोपशमनं पाचनं शोथहृत्परम्॥**

पकाएको अदुवा रुचिकर, वीर्यवर्धक, पिरो, गर्मी गर्ने, जठराग्नि बाल्ने, वातविकार शान्त पार्ने, खाएको पचाउने र अति नै सुजन नाश गर्ने गुणको हुन्छ ।

**भोजनादौ सदा पथ्यं जिह्वाकण्ठविशोधनम् । अव्यक्तरसवीर्यत्वात्तत्परं तु कफापहम् ॥**

खाना खानु अघि अदुवा खानु सधैँ पथ्य हुन्छ । यसले जिब्रो र घाँटीलाई प्रशोधन गर्दछ । यसको लुकेको रस वीर्यवर्धक हुने हुनाले यसले अति नै कफविकार नाश गर्दछ ।

**काञ्जिकार्द्रं सलवणं दीपनं पाचनं परम् । वातप्रकोपशमनं हर्षणं लवणार्द्रकम्॥**

काँजी र नुनसँग अदुवा खानाले यो अति नै दीपनी र पाचनी हुन्छ । नुनसँग अदुवा खानाले वातविकार शान्त पार्दछ र जिभ्रोलाई हर्षित (सक्रिय, स्वाद थाहा पाउने) बनाउँदछ ।



अदुवा , शृङ्गवेरम् । *Zingiber officinale* Roscoe, payer.de/amarakosa

(ड) **मदनादि निघण्टु :**

**शुण्ठीमहौषधं विश्वं नागरं विश्वभेषजम् । विश्वौषधं शृङ्गवेरं राहुच्छत्रङ्कटूषणम्॥**
**नागरं दीपनं वृष्यं ग्राहि हृद्यं विबन्धनुत् । रुच्यं लघु स्वादुपाकं स्निग्धोष्णं कफवातजित्॥**
**तद्वदार्द्रकमेतच्च कणाया गुण ईरितः ।**

शुण्ठी, महौषध, विश्व, नागर, विश्वभेषज, विश्वौषध, शृङ्गवेर, राहुच्छत्र र कटुषण : यी सुठोका नाम हुन् । सुठो दीपनी, वीर्यवर्धक, ग्राहि, मुटुका लागि हितकर, कब्जियत नाश गर्ने, रुचिप्रद, पचाउन सहज, पचेपछि गुलियो, चिल्लो, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । अदुवा र पिप्लामा पनि यिनै गुण हुन्छन् ।

(ढ) **माधव द्रव्यगुण :**

**कफानिलहरं स्वर्यं विबन्धानाहशूलजित् । कटूष्णं रोचनं वृष्यं हृद्यं चैवार्द्रकं स्मृतम्॥**

अदुवा कफविकार र वातविकार नाशक, स्वरका लागि हितकर; कब्जियत आनाह र शूललाई जित्ने; पिरो, उष्णवीर्यको, रुचिप्रद, वीर्यवर्धक र मुटुका लागि हितकर हुन्छ ।

**वातश्लेष्मविबन्धेषु रसस्तस्योपदिश्यते । गुडार्द्रकं वातहरं चक्षुष्यं पित्तनाशनम्॥**

वातविकार, कफविकार र कब्जियत हुँदा अदुवाको रस खान सल्लाह दिइन्छ । सखर र अदुवा खानाले वातविकार नाश गर्दछ, आँखाका लागि हितकर हुन्छ तथा पित्तविकार नाश गर्दछ ।

**क्षतघ्नं चैव वृष्यं च वर्चोभेदि कफापहम् । चक्षुष्यं रोचनं स्वर्यं विकासि विषदूषणम्॥**

यसले चोटपटक नाश गर्दछ । यो वीर्यभेदक, दिसा खुकुलो पार्ने, कफविकार नाशक, आँखाका लागि फाइदाजनक, स्वरका लागि हितकर, विकाशि र विषविकार नाशक (?) हुन्छ ।

**स्तम्भाटोपानिलघ्नं च कर्शनं लवणार्द्रकम् ।**

नुन र अदुवाले लाटोपन, आटोप (पेट कराउने समस्या) र वातविकारलाई कोतरेर बाहिर निकाल्दछ ।

**कुष्ठे पाण्ड्वामये कृच्छ्रे रक्तपित्ते ज्वरे व्रणे॥ दाहे शरन्निदाघे च नैव पूजितमार्द्रकम् ।**

कुष्ठरोग, पाण्डु, आमरोग, कृच्छ्र, रक्तपित्त, जरो, खटिरा र डाहमा तथा शरद ऋतुमा र गर्मी महिनामा अदुवा हितकर मानिँदैन ।



**गण्डीरजलपिप्पल्यौ तुबुरुः शृङ्गवेरिका॥ तीक्ष्णोष्णकटुरूक्षाणि कफवातहराणि च ।**
**आर्द्रिका तिक्तमधुरा मूत्रला रक्तपित्तकृत्॥**

मजिठो, जलपिप्ला, बाबरी र अदुवा : यी तिक्खर, उष्णवीर्यका, पीरा, रुखा तथा कफविकार र वातविकार नाशक हुन्छन् । सानो जातको अदुवा तीतो, गुलियो, पिसाब बढाउने तथा रक्तपित्त गराउने गुणको हुन्छ । (गण्डिरी शब्दले मजिठोलाई तथा गण्डीर शब्दले उखु वा सिउँडीलाई बुझाउँदछ । आर्द्रिका भनेको क्षुद्रार्दक अर्थात् सानो जातको अदुवा हो । तुबरी भनेको बाबरी हो । तुबुरुको अर्थ पाइएन ।)

**(ण) राज निघण्टु :**

**शुण्ठी महौषधं विश्वं नागरं विश्वभेषजम् । विश्वौषधं कटुग्रन्थि कटुभद्रं कटूषणम्॥**
**सौपर्णं शृङ्गवेरञ्च कफारिश्चार्द्रकं स्मृतम् । शोषणं नागराह्वञ्च विज्ञेयं षोडशाह्वयम्॥**

(१) शुण्ठी, (२) महौषध, (३) विश्व, (४) नागर, (५) विश्वभेषज, (६) विश्वौषध, (७) कटुग्रन्थि, (८) कटुभद्र, (९) कटु, (१०) उषण, (११) सौपर्ण, (१२) शृङ्गवेर, (१३) कफारि, (१४) आर्द्रक, (१५) शोषण र (१६) नागरवाचक शब्द : यी सोह्र नाम सुठोका नाम हुन् ।

**शुण्ठी कटूष्णा स्निग्धा च कफशोफानिलापहा । शूलबद्धोदराध्मानश्वासश्लीपदहारिणी॥**

सुठो पिरो, उष्णवीर्यको र चिल्लो हुन्छ । यसले कफविकार, सुजन र वातविकार नाश गर्दछ । यसले शूल, वद्धोदर, आध्मान, दम र हात्तीपाइले रोग समेत नाश गर्दछ ।

**आर्द्रकं गुल्ममूलं च मूलजं कन्दलं वरम् । शृङ्गवेरं महीजं च सैकतेष्टमनूपजम्॥**
**अपाकशाकञ्चार्द्राख्यं राहुच्छत्रं सुशाककम् । शार्ङ्गं स्यादार्द्रशाकञ्च सच्शाकमृतुभूह्वयम्॥**

(१) आर्द्रक, (२) गुल्ममूल, (३) मूलज, (४) कन्दलं, (५) वर, (६) शृङ्गवेर, (७) महीज, (८) सैकतेष्ट, (९) अनूपज, (१०) अपाकशाक, (११) आर्द्राख्य, (१२) राहुच्छत्र, (१३) सुशाकक, (१४) शार्ङ्ग, (१५) आर्द्रशाक र (१६) सच्शाक : यी अदुवाका सोह्र (ऋतुभू) नाम हुन् ।

**कटूष्णमार्द्रकं हृद्यं विपाके शीतलं लघु । दीपनं रुचिदं शोफकफकण्ठामयापहम्॥**

अदुवा पिरो, उष्णवीर्यको, मुटुका लागि हितकर, पचाउन हलुका, दीपनी र रुचिकर हुन्छ । यसले सुजन, कफविकार र घाँटीका रोग नाश गर्दछ ।


(सुकेको अदुवा वा सुठो, विश्वम् । *Zingiber officinale* Roscoe, payer.de/amarakosa

(त) **राजबल्लभ निघण्टु :**

**शुण्ठी तु कफवातघ्नी सस्नेहा लघुदीपनी । विपाके मधुरा वृष्या हृद्योष्णा कटुरोचनी॥**

सुठो कफविकार र वातविकार नाश गर्ने, चिल्लो, पचाउन सहज, दीपनी, पचेपछि गुलियो, वीर्यवर्धक, मुटुका लागि हितकर, उष्णवीर्यको, पिरो र रुचिप्रद गुणको हुन्छ ।

**आर्द्रकं कफवातघ्नं विबन्धानाहशूलनुत्॥**

अदुवा कफविकार, वातविकार, कब्जियत, आनाह र शूल नाश गर्ने गुणको हुन्छ ।

**शृङ्गवेरोऽनिलश्वासकासहिक्काज्वरापहः॥**

अदुवाले वातविकार, दम, खोकी, बाडुली र जरो नाश गर्दछ ।

(थ) **शालिग्राम निघण्टु :**

**श्रृङ्गबेरं रसे पाके शीतलं मधुरं लघु । कटुकोष्णञ्च हृद्यञ्च भेदकं चाग्निदीपकम्॥**
**रूक्षं रुचिप्रदं वृष्यं पाचकं सारसं मतम् । कण्ठ्यमग्नेर्मान्द्यहरं शोथारुचिकफापहम्॥**
**वातं कण्ठरुजं कासं श्वासमानाहवातकम् । मलबन्धं वमिं शूलं नाशयेदिति कीर्तितम्॥**
**तस्याङ्कुरा रसाभावात् कफवातकरा मताः । रक्तदोषस्य शमनास्तेवृद्धाः कफनाशकाः॥**
**काञ्जिका सैन्धवं चार्द्रं पाचकं चाग्निदीपनम् । मलबाधामवातानां कफवातविनाशकम्॥**
**केवलं लवणेनाथ मिश्रितं चाग्निदीपनम् । रुच्यं प्रियं सरं प्रोक्तं शोथवातकफापहम्॥**
**भोजनात्पूर्वपश्चात्तुकण्ठजिह्वा विशोधकम् । जम्बीर सैन्धवयुतं रुचिदं मुखशुद्धिकृत्॥**
**मूत्रकृच्छ्रं पाण्डुरोगं रक्तपित्तं व्रणं तथा । मूत्राश्मरीं ज्वरं दाहं पित्तं ग्रीष्मेशरद्यपि॥**
**नाशयेदिति च प्रोक्तं शेषा विश्वासमागुणाः ।**

अदुवा शुरुमा र पचेपछि पनि शीतल गर्ने, मिठो र पचाउन सहज हुन्छ । यो पिरो, उष्णवीर्यको, मुटुका लागि लाभदायक, मलमूत्रलाई खुकुल्याउने, पाचनशक्ति बढाउने, रुखो, खानमा रुचि जगाउने, वीर्यवर्धक, खाएको कुरा पचाउने, मलमूत्रलाई तलतिर सार्ने, घाँटीका लागि फाइदा गर्ने, पाचक पित्तलाई बढाउने, सुजन-अरुची-कफविकार र वातविकार नाशगर्ने, घाँटीका रोग ठिकगर्ने, दम-पेट फुल्ने रोग नाश गर्ने, कब्जियत-वाकवाकी र शूल नाशगर्ने गुणको हुन्छ ।



काँचो अदुवाले वा अङ्कुरले कफविकार र वातविकार गर्दछ तर रक्तविकार शान्त पार्दछ । छिप्पिएपछिको अदुवाले कफविकार नाश गर्दछ । काँजी र सिँधेनुन मिसाइएको अदुवाले पाचकको काम गर्दछ, पाचन शक्ति बढाउँदछ, दिसा खुलाउँदछ र खाना पचेपछिको रस नपचेर हुने वातरोगलाई नाश गर्दछ । सिँधेनुन मात्र मिसाएर मात्र अदुवा खानाले पनि यो पाचनशक्ति बढाउने वा भोक जगाउने, खानमा रुची बढाउने, प्रिय गराउने, मलमूत्रलाई तलतिर सार्ने तथा सुजन, वातविकार र कफविकार नाशगर्ने गुणको हुन्छ । खाना खानु अघि र पछि खाइने अदुवाले घाँटी र जिभ्रोलाई प्रशोधन गर्दछ । ग्रीष्म र शरद ऋतुमा पनि कागती र सिँधेनुनमा मिसाएर अदुवा खाने गर्नाले मुखलाई शुद्ध बनाउँदछ तथा पिसाब बन्द हुने रोग, पाण्डुरोग, रक्तपित्त, घाउखटिरा, पिसाबका रोग, पत्थरी, जरो, डाह र पित्तविकार नाश गर्दछ ।यसका अन्य गुण सुठोका जस्तै हुन्छन् ।

**वातपित्तकफेभानां शरीरवनचारिणम् । एक एव निहन्त्यत्र लवणार्द्रककेसरी॥**

वनरूपी शरीरमा विचरण गर्ने हात्तीरूपी वात, पित्त र कफ विकारलाई नाश गर्न एउटै सिंहरूपी सिँधेनुन र अदुवा काफी हुन्छ ।

**भोजनाग्रे सदा पथ्यं लवणार्द्रक भक्षणम् ।**

खाना खानुअघि खाइने सिँधेनुन मिसाइएको अदुवा सदा पथ्य हुन्छ ।

(द) **सरस्वती निघण्टु :**

**शुण्ठी च चित्रकं कोलं शृङ्गवेरं महौषधम् । भेषजं नागरं विश्वमु(मू)षणं विश्वभेषजम्॥**

**आर्द्रकं शृङ्गवेरं च विज्ञेयं चार्द्रनागरम् ।**

शुण्ठी, चित्रक, कोल, शृङ्गवेर, महौषध, भेषज, नागर, विश्व, उ(ऊ)षण र विश्वभेषज : यी सुठोका नाम हुन् । आर्द्रक, शृङ्गवेर र आर्द्रनागर : यी ताजा अदुवाका नाम हुन् ।

**(ध) सुश्रुत संहिता :**

**कफानिलहरं स्वर्यं विबन्धानाहशूलनुत् । कटूष्णं रोचनं हृद्यं वृष्यं चैवार्द्रकं स्मृतम्॥**



(सुकेको अदुवाको धूलो वा सुठो, विश्वभेषजम् । *Zingiber officinale* Roscoe, payer.de/amarakosa

अदुवा कफविकार नाशक, वातविकार नाशक, स्वरका लागि लाभदायक, तथा कब्जियत, पेट ढुस्स फुल्ने रोग र शूल नाशगर्ने गुणको हुन्छ । यो पिरो हुन्छ । अदुवा उष्णवीर्यको, रुचि जगाउने, मुटुका लागि हितकर र वीर्यवर्धक हुन्छ ।

**(न) सोढल निघण्टु :**

**शुण्ठ्यां महौषधं विश्वं नागरं विश्वभेषजम् । कटुभङ्गमवाक्छत्रं शृङ्गवेरं तथार्द्रकम्॥**

शुण्ठी, महौषध, विश्व, नागर, विश्वभेषज, कटुभङ्ग, अवाक्छत्र, शृङ्गवेर र आर्द्रक : यी सुठोका नाम हुन् ।

**(प) सौश्रुत निघण्टु :**

**शृङ्गवेरन्तथा कोलं नागरं विश्वभेषजम् । कटुः शुण्ठ्यूषणा प्रोक्ता महिच्छत्रमथापि च॥**

शृङ्गवेर, कोल, नागर, विश्वभेषज, कटु, शुण्ठी, ऊषणा र महिच्छत्र : यी सुठोका नाम हुन् ।

**(फ) हृदयदीपक निघण्टु :**

**शुण्ठी नागरमुहुषधमहौषधं विश्वभेषजं विश्वम् ।**

शुण्ठी, नागर, मुहुषध, महौषध, विश्वभेषज र विश्व : यी सुठोका नाम हुन् ।

# आर्षसत्व
# (Aarshasatwa)

(क) **काश्यप संहिता :**

**शौचव्रतेज्याध्ययनब्रह्मचर्यदयापरम्। जितमानमदक्रोधं वक्तारं चाषमादिशेत्॥**

शौच, व्रत, यज्ञ, अध्ययन, ब्रह्मचर्य, दया, मद-अभिमान र क्रोधलाई जितेको र बोलिरहन पर्ने गुण भएको व्यक्तिलाई आर्षसत्व भएको मानिस भनिन्छ।

# आलस्य
# (Laziness)

**परिभाषा :**

(क) के.यन.स्वामी (आलस्य) : आलसीपन ।
(ख) नेपाली बृहत् शब्दकोश (आलस्य) : काममा मन नलाग्ने भाव; जाँगर नभएको स्थिति; अल्सीपन; सुस्ती; अल्छी ।
(ग) आलस्यलाई अंग्रेजीमा Laziness भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**आलस्यं मन्दता मान्द्यं कार्यप्रद्वेष इत्यपि॥**

आलस्य, मन्दता, मान्द्य र कार्यप्रद्वेष : यी आलस्यका पर्यायवाची नामहरू हुन् ।

# आल्लूक (आलुबखडा)
# (Garden plum)

**परिभाषा :**

(क) मदनपाल निघण्टुका टिकाकार पं.राम प्रसाद वैद्य : आल्लूक आदि भनेको आलुबखडा हो ।

(ख) नेपाली बृहत् शब्दकोश : आलुबखडा : लाम्चा हरिया पात र झीनो पातलो बोटमा सेतो फूल हुने अनि बोटैमा गुलियो-अमिलो स्वादको गोल-गोल फल लाग्ने बोट; त्यसैको फल ।

(ग) आचार्य बालकृष्ण : आलुबखडालाई संस्कृतमा आल्लूक, अल्लू, रक्तफल, भल्लूक आदि भनिन्छ । यसलाई अंग्रेजीमा Garden plum (गार्डेन प्लम), Prune plum (प्रुनी प्लम), Plum tree (प्लम ट्री) वा European plum (यूरोपीयन प्लम) तथा ल्याटिन भाषामा *Prunus domestica* L.(प्रुनस डोमेष्टिका लिन) वा *Prunus communis* Huds (प्रुनस कम्युनिज हड्स) भनिन्छ । यो Rosaceae (रोजेसी) परिवारमा पर्दछ ।



आलुबखडा (तस्विर श्रोत : पब्लिकआवाजडटकम)

**प्रचीन ग्रन्थका वचन :**

**(क) मदनपाल निघण्टुः-**

**आल्लूकमल्लूर्भल्लूकं भल्लू रक्तफलं तथा । आलूकं रसतः शीतं स्वाद्वम्लं वातपित्तकृत्॥**

आल्लूक, अल्लू, भल्लूक, भल्लू र रक्तफल : यी आलुबखडाका नाम हुन् । आलुबखडाको रस शीतवीर्यको र स्वाद अमिलो हुन्छ । यसले वातविकार र पित्तविकार गर्दछ ।

# आश्विन (असोज)
# (Ashwina)

(क) **नेपाली बृहत् शब्दकोश :**

असोज : विक्रम संवत्को छैटौं महिना; कात्तिकभन्दा पहिले र भदौपछि आउने महिना; आश्विन । असौजे : असोजको; असोजसम्बन्धी; असोज महिनासित सम्बन्ध राख्ने । असौज : असोज; आश्विन ।

(ख) **अमरकोश :**

**स्यादाश्विन इषोऽप्याश्वयुजोऽपि...।**

आश्विन, इष, आश्वयुज : यी असोजका नाम हुन् । (अश्विनी नक्षत्रले युक्त भएको पूर्णिमालाई आश्विनी भनिन्छ । यसैले यो महिनाको नाम आश्विन रहन गएको हो ।) ।

(ग) **राज निघण्टु :** आश्वयुज, आश्विन, इषस् र शारद : यी असोजका नाम हुन् ।

(घ) **ज्यौतिष शब्दकोष :** अश्वयुक्, अश्वयुज्, अश्वियुक्, अश्वियुज्, आश्वयुजः, आश्विनः, इषः, कार्तिकपूर्वजः, भाद्रपदानुजः, भाद्रपदावरजः : यी असोजका पर्यायवाची नाम हुन् ।

# आषाढ (असार)
# (AashaaDha)

**(क) नेपाली बृहत् शब्दकोश :**

असार : विक्रम संवत्अनुसार वैशाख महिनादेखि गन्दै जाँदा आउने तेस्रो महिना; जेठपछि र साउनभन्दा पहिले आउने महिना; आषाढ । असारपन्ध्र : असार महिनाको पन्ध्र गते, मध्य असार । असारे : असार महिनाको; असार महिनासँग सम्बन्धित ।

**(ख) अमरकोश :**

...शुचिस्त्वयम् । आषाढे...।

शुचि र आषाढ : यी असारका नाम हुन् । (आषाढा अर्थात् पूर्वाषाढा र उत्तरषाढा नक्षत्रले युक्त भएकी पूर्णिमा आषाढी, आषाढीले युक्त भएको महिना आषाढ कहिन्छ ।) ।

**(ग) ज्यौतिष शब्दकोष :**

अशाडः, आशाढः, आषाडः, आषाढः, ज्येष्ठानुजः, शुचिः, श्रावणपूर्वजः यी असारका पर्यायवाची नाम हुन् ।

**(घ) राज निघण्टु :**



आषाढ र शुचि : यी असारका नाम हुन् ।

## आसन (बसाइ)
## (Sitting)

(क) **राजवल्लभ निघण्टु :**

**आस्या मेदोद्युतिश्लेष्मसौकुमार्य्यकरी सुखा ॥**

आसन (बसाइ) ले बोसो, चमक, कफ, कोमलता र सुख प्रदान गर्दछ ।

# आसव (अर्कविशेष)
# (Aasawa)

**(क) भावप्रकाश निघण्टु :**

**यदपक्वौषधाम्बुभ्यां सिद्धं मद्यं स आसवः॥ आसवस्य गुणा ज्ञेया बीजद्रव्यगुणैः समाः ।**

काँचो औषधी र पानीबाट बनाइने अर्कलाई 'आसव' भनिन्छ । जुन द्रव्य (ओखती) को आसव बनाइन्छ त्यही द्रव्यको गुण त्यो आसवमा हुन्छ ।

**(ख) भावप्रकाश संहिता :**

**यदपक्वौषधाम्बुभ्यां सिद्धं मद्यं स आसवः । अरिष्टः क्वाथसाध्यः स्यात्तयोर्मानं पलोन्मितम्॥**

काँचा ओखती र चिसो पानी हालेर जुन् मद्य बनाइन्छ त्यसलाई आसव भनिन्छ । काँढा पकाएर जुन् मद्य बनाइन्छ त्यसलाई अरिष्ट भनिन्छ । दुवैको मात्रा १ पल हो ।

**(ग) मदनपाल निघण्टु :**

**आसवश्च सुरायाश्च द्वयोरप्येकभाजनम् । साधनं तद्विजानीयान्मैरेयमुभयात्मकम्॥**

आसव र सुरा बनाउने भाँडा र विधि एउटै हुन्छ । यी दुवैलाई पनि मैरेय भनिन्छ ।

**(घ) शार्ङ्गधर संहिता :**

**द्रवेषु चिरकालस्थं द्रव्यं यत् सन्धितं भवेत् । आसावारिष्टभेदैस्तु प्रोच्यते भेषजोचितम्॥**

कुनै भाँडामा हालिएको जल आदि तरल पदार्थमा ओखतीलाई भिजाएर त्यो भाँडाको मुख बन्द गरी एक महिना वा पन्ध्र दिनसम्म रहन दिनाले उत्तम ओखती तयार हुन्छ । यस्तो ओखती आसव, अरिष्ट आदि विभिन्न प्रकारको हुन्छ । यसका बारेमा बताइन्छ ।

**यदपक्वौषधाम्बुभ्यां सिद्धं मद्यं स आसवः ।**
**अरिष्टः क्वाथसाध्यः स्यात्तयोर्मानं प(ज)लोन्मितम्॥**

नपकाई वा नतताई पूर्वोक्त विधिले तयार पारिने ओखती (मद्य) लाई "आसव" भनिन्छ । काँढापानी पकाएर त्यसमा पूर्वोक्त विधिले तयार पारिने ओखतीलाई "अरिष्ट" भनिन्छ । मात्रा नतोकिएको अवस्थामा यसको सेवन गर्ने मात्रा एक पल (चालीस ग्राम) हुन्छ ।

(ङ) **चरक सांहेता :**

**सुरासवस्तीव्रमदो वातघ्नो वदनप्रियः । छेदी मध्वासवस्तीक्ष्णो मैरेयो मधुरो गुरुः ॥**
**धातक्याभिषुतो हृद्यो रूक्षो रोचनदीपनः । माध्वीकवन्न चात्युष्णो मृद्वीकेक्षुरसासवः ॥**
**रोचनं दीपनं हृद्यं बल्यं पित्ताविरोधि च । विबन्धघ्नं कफघ्नं च मधु लघ्वल्पमारुतम् ॥**

सुरासव (सुरा नै पानीको साटो हाली बनाइने) कडा नसा लगाउने, वायुविकार नाशक, मुख र शरीरका लागि प्रिय हुन्छ । महुवाको आसव छेदक र तिक्खर हुन्छ । मैरेय गुलिय र पचाउन कठिन हुन्छ । धयैँराको आसव मुटुका लागि हितकर, रुखो, रोचनी र दीपनी हुन्छ । अंगूर र उखुको रस मिसाएर बनाएको आसव माध्वीक जस्तो धेरै उष्णवीर्यको हुँदैन । यो रोचनी, दीपनी, मुटुका लागि हितकर, बलदायक र पित्तको अविरोधी हुन्छ । मह धेरै हालेर बनाइएको आसव कब्जियत नाशगर्ने, कफविकार नाशक, पचाउन सहज र थोरै वातविकार गराउने गुणको हुन्छ ।

नोट : आयुर्वेदीय शब्दकोश (सुरासव) : तीव्रमदो वदनप्रियो वातघ्नश्च । यस्मिन्नासवे जलस्थाने सुरा एवोपयुज्यते, स सुरासवः (च.सू.२७.१८७) । सुरया सूयते तोयकार्यं क्रियते यस्मिन् सः (सुसू. ४५.१८७, डल्हणः) ।

(च) **अभिधान मञ्जरी :**

**सन्धानं चेति योऽरिष्टः पुष्पाण्यासुत्य संस्कृतः । आसवः स तु विज्ञेयो गृह्यसन्धानमित्यपि ॥**



फूल (वा यसको रस) लाई अमिल्च्याएर विधिपूर्वक तयार पारिने मदिराविशेषलाई आसव वा गृह्यसन्धान भनिन्छ ।

(छ) **शालिग्राम निघण्टु :**

**सुरासवः स्नेहनः स्याद्गुरुर्बल्यश्च दीपनः । ग्राहकः पुष्टिकृद्दुग्धरक्तमांकफप्रदः ॥**
**मेदः कृद्ग्रहणीगुल्ममूत्राघातार्शशोफहृत् । (नि.र.)**

सुरासव चिल्लो, पचाउन कठिन, बलदायक, दीपनी, ग्राही, पुष्टिकारक तथा दूध, रगत, मासु, कफ र बोसो प्रदायक हुन्छ । यसले ग्रहणी, गुल्म, मूत्राघात, अल्काई र सुजन नाश गर्दछ ।

**गुडासवः कटुस्तिक्तो बल्यश्चाग्निप्रदीपनः । सुस्वादुर्मूत्रलो वर्ण्यो बृंहणस्तर्पणो मृदुः ॥**
**सृष्टविट्कश्च वै प्रोक्तो मुनिभिः सूक्ष्मदर्शिभिः ।**

गुडासव पिरो, तीतो, बलदायक, पाचनशक्ति बढाउने, स्वादिलो, पिसाब बढाउने, वर्णमा निखार लेराउने, पौष्टिक, तृप्तिदायक, कोमल र दिसा उत्पन्न गराउने गुणको हुन्छ भनी सूक्ष्मदर्शी मुनिजनले बताएका छन् ।

**मध्वासवो लघुस्तीक्ष्णो मधुरस्तुवरो मतः । छेदी रूक्षः प्रतिश्यायकुष्ठमेहविनाशनः ।**

मध्वासव पचाउन सहज, तिक्खर, गुलियो, टर्रो, छेदनी, रुखो तथा पिनास, कुष्ठ र प्रमेह नाशगर्ने गुणको हुन्छ ।

**द्राक्षासवः कफकारी रक्तपित्तार्शकुष्ठहा ।**

द्राक्षासव कफविकार बढाउने तथा रक्तपित्त, अल्काई र कुष्ठ नाशगर्ने गुणको हुन्छ ।

**शर्करायाश्चासवस्तु पाचकोऽग्निप्रदीपनः । रोचनश्च लघुः स्वादुर्वृष्यो वस्तिविकारहा ॥**
**वातं शोषं नाशयतित्येवमाचार्यभाषितम् ।**

शर्करासव पाचनी, पाचनशक्ति बढाउने, रुचिप्रद, पचाउन सहज, स्वादिलो, वीर्यवर्धक तथा तल्लोपेट वा मूत्राशयका विकार, वातविकार र सुकेनाश नाशगर्ने गुणको हुन्छ भनी तिनै आचार्यहरूले बताएका छन् ।

**जाम्बवस्यासवश्चापि तुवरो ग्राहको मत : । वातकोपनकारी च मुनिभिः समुदाहृतः ॥**

जाम्बवासव पनि टर्रो, ग्राहि र वातलाई उत्तेजित पार्ने गुणको हुन्छ भनी मुनिजनले बताएका छन् ।

(ज) **कैयदेव निघण्टु :**

**मध्वासवो माधवः स्यात् धातकीजलमाक्षिकैः । मध्वासवो लघुस्तीक्ष्णो मधुरः सकषायकः ॥**
**छेदी रूक्षः प्रतिश्यायकुष्ठमेहविषापह ।**

मध्वासवलाई माधवी पनि भनिन्छ । धयैंराको फूल वा यसको रस, पानी र मह हाली बनाइने मदिरा (आसव) लाई मध्वासव भनिन्छ । यो मदिरा पचाउन सहज, तिक्खर, गुलियो, केही टर्रो, छेदनी, रुखो, तथा पिनास, कुष्ठ, प्रमेह र विषविकार नाशगर्ने गुणको हुन्छ । (के.यन.स्वामी : मध्वासव : महुवाको रक्सी)

**धातक्यम्बुगुडैर्गौडो गुडासव इति स्मृतः ॥**
**गौडोऽग्निदीपनो बल्यः सस्वादुः कटुतिक्तकः । सृष्टमूत्रशकृद्वातो मृदुस्तर्पणबृंहणः ॥**

धयैंरो फूल वा यसको रस, पानी र सखर हाली तयार पारिने आसवलाई गौड वा गुडासव भनिन्छ । यो पाचकाग्नि बाल्ने, बलदायक, स्वादिलो, पिरो, तीतो, पिसाब निकाल्ने वा बढाउने, वातविकार गर्ने, कोमल, तृप्तिदायक र पौष्टिक गुणको हुन्छ ।

**जम्बूरसमदाक्षौद्रगुडोत्थो जाम्बवासवः । जाम्बवो बद्धनिस्यन्दस्तुवरो वातकोपनः ॥**

फणिरको रस, मह र सखर हालेर बनाइने आसवलाई जाम्बवासव भनिन्छ । यो आसव कब्जियत गराउने, बगाउने, टर्रो र वातविकारलाई उत्तेजित पार्ने गुणको हुन्छ ।

**हृद्यः सुरासवः स्वादुर्वीर्योष्णो मूत्रलो लघुः । शीघ्रं तीव्रमदस्तीक्ष्णो वातघ्नो वदनप्रियः ॥**

सुरासव मुटुका लागि हितकर, स्वादिलो, उष्णवीर्यको , पिसाब लगाउने, पचाउन सहज, चाँडै कडा नसा दिने, तिक्खर, वातविकार नाशक र मुख वा शरीरलाई प्रिय लाग्ने गुणको हुन्छ ।

**(झ) सुश्रुत संहिता :**

**तीक्ष्णः सुरासवो हृद्यो मूत्रलः कफवातनुत् । मुखप्रियः स्थिरमदो विज्ञेयोऽनिलनाशनः ॥**

सुरासव तीक्ष्ण, मुटुका लागि हितकर, पिसाब बढाउने वा गराउने, कफविकार र वातविकार नाशक, मुखलाई मनमर्ने, लामो समयसम्म नसा दिने र वातविकार नाशगर्ने गुणको हुन्छ ।

**लघुर्मध्वासवश्छेदी मेहकुष्ठविषापहः । तिक्तः कषायः शोफघ्नस्तीक्ष्णः स्वादुरवातकृत् ॥**

मध्वासव छेदी तथा प्रमेह, कुष्ठ र विषविकार नाशगर्ने गुणको हुन्छ । यो तीतो, टर्रो, सुजन नाशक, तिक्खर, स्वादिलो र वातविकार नगर्ने गुणको हुन्छ ।

# आसुरसत्व
# (Aasurasatwa)

**(क) काश्यप संहिता :**

**ईश्वरोऽसूयकश्चण्ड आत्मपूजोपधिप्रियः । सानुक्रोशभयो रौद्रो हन्ता शूरस्तथाऽऽसुरः ॥**

ऐश्वर्यशाली, अरुका गुणमा दोष देख्ने वा देखाउने, अति रिसाउने, आफ्नै प्रशंसा गर्ने वा आत्मरतिमा रमाउने, रागद्वेष वा छलकपटप्रिय, दया र डर पनि हुने, उग्र स्वभावको, हत्या गर्ने र शूर व्यक्तिलाई राजस सत्व अन्तर्गतको आसुर सत्व भएको व्यक्ति (आसुरी स्वभावको व्यक्ति) भनिन्छ ।

# इक्षु (उखु)
# (Sugar Cane)

**परिभाषा :**

(क) अमरकोश : (१) इक्षु र रसाल भनेको उखु हो । (२) कान्तार (क) र पुण्ड्र : यी उखुविशेषका नाम हुन् । (३) मोटो सेतो उखु (गेवँरा) लाई पुण्ड्रक वा पौण्ड्रक भनिन्छ । (४) कालो उखुलाई कान्तार(क) भनिन्छ । (५) उखुको जरालाई मोरट भनिन्छ ।

(ख) नेपाली बृहत् शब्दकोश : (१) उखु : सुलुत्त परेको तथा आँख्लादार डाँठ हुने, चपाउँदा वा पेल्दा गुलियो रस निस्कने र चिनी-सखर आदि बनाइने गेमरा, ढोडे, कोसेर, सिटे आदि नामले प्रसिद्ध बोट; इक्षु; किर्की; रसाल ।

(ग) डा.चुनेकर : यसलाई अंग्रेजीमा Sugar Cane र ल्याटिन भाषामा *Saccharum officinarium* Linn. भनिन्छ ।

**उखुका जातहरू :**

(क) नेपाली बृहत् शब्दकोश : (१) काठे उखु : काठझैँ साह्रो हुने एक प्रकारको उखु; ढोडे उखु । (२) कान्तार : किराँती उखु । (३) कालो उखु : गाढा कलेजी वा कालो रङको, औषधीका लागि पनि काम लाग्ने राम्रो खालको उखु । (४) कालो गैँवरा : कालो र मोटो खालको; थुप्रै रस हुने एक प्रकारको असल जातको उखु । (५) किराँती उखु : पहेँलो रङको एक जातको उखु; कान्तार । (६) कोसियार : उखुका गेवँरा, चिनियाँ, ढोडे, बेरेजस्तै एक भेद; एक जातको उखु; कोसेर-उखु । (७) कोसेर-उखु : पहेँलो र मोटो डाँठ हुने एक जातको उखु; कोसियार । (८) गेवँरा : सेतो, मोटो, कमलो र स्वादिलो असल जातको उखु; गेमरा । (९) गेवँरा उखु : सेतो कमलो उखु । (१०) चुनी उखु : हरियो डाँठ हुने विशेष प्रकारको रसदार उखु । (११) ढोडे उखु : आँख्ला मोटो, रस कम्ती र ढोड साह्रो हुने एक जातको उखु । (१२) धुस्रे उखु : खरानी दलेजस्तो फुस्रो डाँठ हुने उखुको एक जात । (१३) निगाले उखु : एक प्रकारको झीनो उखु । (१४) पुणे उखु : फुस्रो रङको डाँठ हुने एक जातको माटो, गुलियो उखु; पुणे । (१५) रातो उखु : गाढा रातो रङको डाँठ हुने एक जातको उखु । (१६) रातो गेवँरा : रातो डाँठ हुने गेवँरा उखुको एक जात । (१७) लस्करी उखु : एक जातको ठूलो र मोटो उखु । (१८) लिखु : सानो खालको वा डाँठ झीनो भएको उखु । (१९) सिटे उखु : सिटाजस्तै डाँठ हुने उखुको एक जात ।

**उखुसम्बन्धी केही शब्दहरू :**

(क) नेपाली बृहत् शब्दकोश : (१) आँक : उखुका आँख्लाको टुसो उम्रने भाग; आँखो; आँख्लो । (२) उखार्ता : उखुको टुप्पो; उखुको बीउ । (३) उखेतो : उखु काटिसकेपछि छोडिएको भागबाट पलाउने उखु; उखु काटिसकेपछि खँगारेको पात, टुप्पो आदि वस्तु । उखौतो । (४) किर्को : उखुको गिँड; उखुको डाँठ; गिँड; डाँख्लो । (५) कोथो : उखुको टुसो । (६) कोल : गोरु वा मानिसले घुमाई उखु पेलेर रस निकाल्ने काठले बनेको यन्त्र; साल । (७) गाँठो : उखुको आँख्लो; ग्रन्थि; नेत्र । (८) गाडा : उखु रोप्नका लागि बाटुलो खाडल पारेर खनिने डयाङ; डाँफा । (९) गिँडी : उखुको टुक्रा; गिँड । पेल्न ठिक्क पारेका उखुका ठाँठ । (१०) गिँडुल्को : उखुको छोटोमोटो टुक्रो; ठुन्को; गिँड ।

(११) छुवा : उखुको चिनो बाँनसकेर बाँकी रहेको काम नलाग्ने रस । (१२) टुखल : उखु पेलेर रस निकालेपछि बाँकी रहेको छोक्रा; खोइलो । (१३) ढाँक : उखुको गिँड्न हुने बोट; लाँक्रो । (१४) तरी : उखुको दुई आँखाला बीचको भाग । (१५) तुखल : रस निचोरिएको उखुको खोस्टा; टुखल; खोइलो । (१६) पगार : उखु पेल्दा निस्कने छोक्रा । उखुको सुकेको पात । (१७) परक्क : उखु भाँचिने वा भाँच्ने किसिमले । (१८) पाछिनु : उखुका सुक्खा पातले शरीरका अङ्ग घोटिनु वा कोरिनु । (१९) मुढन : उखुको पहिलो सालको बाली । (२०) यर्सी : उखु पेल्ने लामो काठको खम्बा । (२१) रसेटो : उखुको रस पकाउने चुलो । (२२) सिट्ठी : उखुको रस चुसिसकिएको छोक्रा ।

**प्राचीन ग्रन्थका वचनहरू :**

**(क) अभिधान मञ्जरी :**

**बहुरस इक्षुः प्रोक्तो महारसो मृत्युपुष्पश्च । तृणराजो गुडकेतुः सपत्रकाख्यो मधुतृणश्च ॥**
**सुकुमारको रसालः पौण्ड्रः शीतश्च पौण्ड्रकेक्षुः स्यात् ।**
**शतपर्वकस्तृणेक्षुर्बहुपर्वा चेति चान्यः स्यात् ॥**
**इक्षुः कान्तारोऽन्यः कर्कटको वेणुनिस्सृतो वंशः । नैपालोऽन्यः प्रोक्तो मधुरेक्षुश्चेक्षुराजश्च ॥**

बहुरस, इक्षु, महारस, मृत्युपुष्प, तृणराज, गुडकेतु, सपत्राख्य र मधुतृण : यी उखुका पर्यायवाची नाम हुन् । सुकुमारक, रसाल, पौण्ड्र, शीत र पौण्ड्रकेक्षु; शतपर्वक, तृणेक्षु र बहुपर्वा; इक्षु र कान्तार; कर्कटक, वेणुनिस्सृत र वंश तथा नैपाल, मधुरेक्षु र इक्षुराज : यी नउखुका जात हुन् ।



**इक्षुगन्धं चेक्षुयोनिः कालिकश्चेक्षुकालिकः । कान्तः करकसातिः स्यात् कान्तारोऽसित इक्षुकः ॥**

इक्षुगन्ध, इक्षुयोनि, कालिक र इक्षुकालिक : यी कालो उखुका पर्यायवाची नाम हुन् । कान्त, करकसाति, कान्तार र असित इक्षुक : यी अर्को जातका उखुका नाम हुन् ।

**(ख) अमरकोश :**

**रसाल इक्षुस्तद्भेदाः पुण्ड्रकान्तारकादयः ।**

रसाल र इक्षु : यी उखुका नाम हुन् । पुण्ड्र, कान्तार आदि उखुका जात हुन् ।

**(ग) अर्कप्रकाश :**

**पौण्ड्रको भीरुकश्चापि वंशकः शतपोरकः । कान्तारस्तापसेक्षुश्च काष्ठेक्षुः शुचिपत्रकः ॥**
**नैपालोदीर्घपत्रश्च नीलपोरोऽथ कोशकृत् । एताद्वादश सङ्ख्याता इक्षूणां जातयः स्मृताः ॥**

पौण्ड्रक, भीरुक, वंशक, शतपोरक, कान्तार, तापस, काष्ठ, शुचिपत्रक, नेपाल ,दीर्घपत्र, नीलपोर र कोशकृत् गरी बाह्र प्रकार उखु हुन्छन् ।

**फाणितं चैव मत्स्यण्डी गुडखण्डकमेव च । सिता सितापला चैते षड्भेदा इक्षुजामताः ॥**

पातलो खुँदो, बाक्लो खुँदो, कालो सक्खर, रातो सक्खर, मिस्री र चिनी गरी उखुका सात किसिमका खाद्य (विकार) बन्दछन् ।

(घ) **आयुर्वेद महोदधि :**

**अतीव मधुरो मूले मध्ये मधुर एव च । अग्रेषु त्रिषु विज्ञेय इक्षूणां लवणो रसः ॥**

उखुको फेदतिर अति गुलियो, बीचमा गुलियो र अन्तिम तीन तरी नुनिलो हुन्छ ।

**मधुरो मूलभागे स्यान्मध्ये मधुर एव च । अग्रभागे पुरस्तो यस्तस्य स्याल्लवणो रसः ॥**

उखुको फेदतिर धेरै गुलियो, बीचमा ठिकै गुलियो र टुप्पोतिरको भाग नुनिलो हुने गर्दछ ।

**स्निग्धश्च सन्तर्पणबृंहणश्च सञ्जीवनः स्वादुरसः श्रमघ्नः ।
वृष्यश्च पित्तास्रशमं नयेच्च ह्यन्तर्विदाही कफकृत्सितेक्षुः ॥**

सेतो उखु चिल्लोपन भएको, राम्रोसँग तृप्त पार्ने, पौष्टिक, जीवनदायी, स्वादिलो, थकाई मेट्ने, बलवीर्य वर्धक, रक्तपित्त नाशक, भित्र पोल्ने र कफविकार बढाउने गुणको हुन्छ ।

**तद्वत्सुकृष्णो हि भवेद्गुणैश्च वृष्यो भवेत्तर्पणदाहहन्ता ।
सक्षारकिञ्चिन्मधुरो रसेन शोषापहर्ता व्रणशोफहर्ता ॥**

कालो उखुमा पनि प्रायः सेतो उखुकै जस्ता गुण हुन्छन् । यो बलवीर्य वर्धक, राम्रोसँग तृप्त पार्ने, डाह हटाउने, केही नुनिलो र गुलियो, सुकेनाश हटाउने, घाउ ठिक पार्ने र सुन्निएको बसाउने गुणको हुन्छ ।

**पौण्ड्रको भीरुकश्चैव वंशकः श्वेतपोरकः । कान्तारस्तापसेक्षुः स्यात्काष्ठेक्षुः सूचिपत्रकः ॥
नेपालो दीर्घपत्रश्च नीलपोरोऽथ कोशकृत् । इत्येता जातयः स्थौल्याद्गुणान्वक्षाम्यतः परम् ॥**

पौण्ड्रक, भीरुक, वंशक, श्वेतपोरक, कान्तार, तापस, काष्ठ, सूचिपत्रक, नेपाल, दीर्घपत्र, नीलपोर र कोशकृत् : यी उखुका आकार अनुसारका जात हुन् । अब यिनका गुणका बारेमा बताइन्छ ।

**सुशीतो मधुरः स्निग्धो बृंहणः श्लेष्मलः सरः । अविदाही गुरुर्वृष्यः पौण्ड्रको भीरुकस्तथा ॥**

पौण्ड्रक र भीरुक जातका उखु अति शीतल, मिठा, चिल्लोपन भएका, पौष्टिक, कफकारक, दिसापिसाब खुलाउने, अविदाही, पचाउन कठिन र बलवीर्य वर्धक हुन्छन् ।

**आभ्यां तुल्यगुणः किञ्चित्सक्षारो वंशको मतः । वंशवच्छ्वेतपोरस्तु किञ्चिदुष्णः स वातहा॥**

वंशक जातको उखुमा पनि प्रायः यिनै गुण हुन्छ । श्वेतपोर उखुमा वंशककै जस्ता गुण हुन्छन् तर यो केही गर्मी गर्ने र बढी वातविकार नाशक हुन्छ ।

**कान्तारस्तापसेक्षुश्च वंशकानुगतौ मतौ । एवंगुणस्तु काष्ठेक्षुः स तु वातप्रकोपनः॥**

कान्तार र तापसेक्षु जातका उखु पहिले बताइएको वंशककै जस्ता गुणका हुन्छन् । काष्ठ जातको उखुमा पनि यिनै गुण भएपनि यसले केही बढी वातविकार गर्दछ ।

**सूचीपत्रो नीलपोरो नेपालो दीर्घपत्रकः । वातलाः कफपित्तघ्नाः सकषाया विदाहिनः॥**
**कोशकारो गुरुः शीतो रक्तपित्तक्षयापहः॥**

सूचिपत्रक, नीलपोर र नेपाल जातका उखु वातविकार बढाउने, कफविकार र पित्तविकार नाश गर्ने, केही टर्रो स्वादका र विदाही हुन्छन् । कोशकार जातको उखु पचाउन कठिन, शीतल तथा रक्तपित्त र क्षयरोग नाश गर्ने गुणको हुन्छ ।

**कान्तारो रक्तवर्णः स्यात्कोशकारस्तथैव च । श्वेतः सुपौण्ड्रको ज्ञेयस्त्रयः श्रेष्ठास्तथेक्षवः॥**

कान्तार र कोशकार जातको उखु रातो र पौण्ड्रक जातको उखु सेतो हुन्छ । उखुको जातमा यी तीन जातलाई श्रेष्ठ जात मानिन्छ ।

**वृष्यः शीतोऽस्रपित्तं शमयति मधुरो बृंहणः श्लेष्मकारी,**
**स्निग्धो हृद्यः सरश्च श्रमशमनपटुर्मूत्रशुद्धिं करोति ।**
**मेदोवृद्धिं विधत्ते शमयति पवनं तर्पणं चेन्द्रियाणां,**
**दन्तैर्निष्पीड्य साक्षादमृतमयरसो भक्षितादिक्षुदण्डात्॥**

दाँतले चबाएर खाइएको उखुको लाँक्रो वा तरीको अमृतरूपी रस बलवीर्य वर्धक, शीतल, रक्तपित्त शान्त पार्ने, गुलियो, पौष्टिक, कफकारी, चिल्लोपन युक्त, मनोहर, मलमूत्र खुलाउने, थकाई मेटाउने, चलाख बनाउने, मूत्र शुद्ध पार्ने, बोसो वर्धक, वातविकारलाई शान्त पार्ने र इन्द्रियलाई पोषण गर्ने गर्दछ ।

**भक्षयेदिक्षुकं काले भोजनस्याग्रतो नरः । स्वभावान्मधुरोऽप्येष भुक्ते वातप्रकोपनः॥**

उखुलाई खाना खानुभन्दा अगाडि चुस्नु पर्दछ । खाना खाइसकेपछि उखु खाँदा गुलियो भएपनि वातविकार बढाउँदछ ।

**कफकृच्च विदाही च रक्तपित्तनिबर्हणः । शर्करासमवीर्यस्तु दन्तनिष्पीडितो रसः॥**

दाँतले टोकेर खाएको उखुको रसले कफ बढाउँदछ, भित्र पोल्दछ, रक्तपित्त नाश गर्दछ र सक्खर जस्तै ठण्डी गर्ने गुणको हुन्छ ।

**विदाही विष्टम्भी गुरुरतितरां शोषशमनः कफोत्क्लेशं कुर्यात्पवनजननश्छर्दिकरणः ।**
**धृतः कश्चित्कालं समलसहमूलाग्रदलनाद् विकारी तेनायं न भवति हितो यान्त्रिकरसः ॥**

कोलमा पेलेर निकालिएको उखुको रस विदाही, विष्टम्भी, पचाउन अति नै कठिन, सुकेनाश नाशक, कफकारी, वातकारक र वाकवाकी लगाउने गुणको हुन्छ । राम्ररी नकेलाई र काटेको केही समयसम्म त्यत्तिकै राखेर कोलमा पेलिएको वा पेलेर केही समय राखिएको उखुको रस विकारयुक्त हुन्छ लाभदायक हुँदैन ।

**मूलमध्यदलनाच्च तत्क्षणात्पीयते यदि तु यान्त्रिको रसः ।**
**वातपित्तशमनस्तथा भवेत्तर्पणश्च मलमूत्रशोधनः ॥**

राम्ररी सफा गरी कोलमा पेलिएको उखुको फेद र बीच भागको रसले वातविकार र पित्तविकार शान्त पार्दछ, तृप्ति दिन्छ र मलमूत्र प्रशोधन गर्दछ ।

**गुरुर्विदाही विष्टम्भी यान्त्रिकस्तु प्रकीर्तितः ।**

कोल आदिमा पेलिएको उखुको रस विदाही र विष्टम्भी हुन्छ ।



(ङ) **द्रव्यगुणसङ्ग्रह :**

**इक्षो रसो हिमो वृष्यस्तर्पणो जीवनः सरः । वातासृक्पित्तजित् स्वादुः स्निग्धः प्रीणनबृंहणः ॥**
**रसो दन्तकृतः श्लेष्मकारणं न विदाहवान् ।**

उखुको रस शीतवीर्यको, वीर्यवर्धक, तृप्तिदायक, जीवनदायक, मलमूत्रलाई तलतिर सार्ने; वातविकार, रक्तविकार र पित्तविकारलाई जित्ने, गुलियो, चिल्लो, प्रिय र पौष्टिक गुणको हुन्छ । दाँतले टोकेर खाइएको उखुको रसले कफविकार गर्दछ तर डाह गर्दैन ।

**यान्त्रिकस्तु विदाही स्याद्गुरुस्त्वग्ग्रन्थियोगतः ॥ अतीव मधुरो मूले मध्ये मधुर एव च ।**
**अग्रे चाक्षिषु विज्ञेय इक्षूणां लवणो रसः ॥**

कोलमा पिसिएको उखु आँख्ला र बोक्रा पनि पेलिने हुनाले डाहकारक र पचाउन कठिन हुन्छ । उखुको फेद अति गुलियो हुन्छ । यसको बीच भाग गुलियो हुन्छ । टुप्पो र आँख्ला नुनिलो हुन्छ भनी थाहा पाउनू ।

(च) **धन्वन्तरि निघण्टु :**

**इक्षुः कर्कोटको वंशः कान्तारो वेणुनिस्वनः । इक्षुरन्यः पौण्ड्रकस्तु रसालः सुकुमारकः ॥**

**इक्षुः सरो गुरुः स्निग्धो बृंहणः कफमूत्रकृत् । वृष्यः शीतः पवनजिद्भुक्ते वातप्रकोपनः ॥**
**अन्यः खरकशाली स्यादिक्षुयोनीक्षुबालिका । तथाऽन्यश्चेक्षुगन्धः स्यादिक्षुरः कोकिलाक्षकः ॥**
**अतीव मधुरो मूले मध्ये मधुर एव च । अग्रे त्वचि च विज्ञेय इक्षूणां लवणो रसः ॥**
**इक्षुयुग्मं रसे स्वादु पित्तघ्नं वृष्यशीतलम् ।**

इक्षु, कर्कोटक, वंश, कान्तार र वेणुनिस्वन यी उखुका पर्यायवाची नाम हुन् । पौण्ड्रक, रसाल र सुकुमारक : यी अर्को थरी उखुका पर्यायवाची नाम हुन् । उखु मलमूत्रलाई तलतिर सार्ने, पचाउन कठिन, चिल्लो, पौष्टिक तथा कफविकार मूत्र गराउने गुणको हुन्छ । यो वीर्यवर्धक, शीतवीर्यको, वातविकारलाई जित्ने तथा खाना खानासाथ खाए वातविकार गर्ने गुणको हुन्छ । खरकशाली, इक्षुयोनी र इक्षुबालिका : यी अर्को जातको उखुका पर्यायवाची नाम हुन् । इक्षुगन्ध, इक्षुर र कोकिलाक्षक : यी अर्को थरी उखुका पर्यायवाची नाम हुन् । उखुको फेदमा अति गुलियो, बीचको भागमा गुलियो तथा टुप्पो र बोक्रा नुनिलो हुन्छ । दुवै थरी उखु गुलिया, पित्तविकार नाशक, वीर्यवर्धक र शीतवीर्यका हुन्छन् ।

(छ) **निघण्टुशेष :**

**इक्षौ रसालो गण्डीरी गण्डकी खड्गपत्रकः ।**

इक्षु, रसाल, गण्डीरी, गण्डकी र खड्गपत्रक : यी उखुका पर्यायवाची नाम हुन् ।



**तस्यैकादश भेदाः स्युः पुण्ड्र-कान्तारकादयः ।**

उखुका पुण्ड्र, कान्तार आदि एघार जात हुन्छन् ।

(ज) **पर्याय रत्नमाला :**

**महोरसोऽसिपत्रः स्यान्मृत्युपुष्पो मधूतृणः । इक्षुर्वंशक कान्तार भीरु पौण्ड्रादिभेदवान् ॥**

महोरस, असिपत्र, मृत्युपुष्प र मधुतृण : यी उखुका पर्यायवाची नाम हुन् । वंशक, कान्तार, भीरु, पौण्ड्र आदि यसका जात हुन् ।

(झ) **भावप्रकाश निघण्टु :**

**इक्षुर्दीर्घच्छदः प्रोक्तस्तथा भूरिरसोऽपि च । गुडमूलोऽसिपत्रश्च तथा मधुतृणः स्मृतः ॥**
**इक्षवो रक्तपित्तघ्ना बल्या वृष्याः कफप्रदाः । स्वादुपाकरसाः स्निग्धाः गुरवो मूत्रला हिमाः ॥**

इक्षु, दीर्घच्छद, भूरिरस, गुडमूल, असिपत्र र मधुतृण : यी उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । उखुले रक्तपित्त नाश गर्दछ । यो बलदायक, वीर्यवर्धक र कफविकार गर्ने गुणको हुन्छ । यो शुरुमा र पचेपछि पनि गुलियो हुन्छ । उखु चिल्लो, पचाउन कठिन, धेरै पिसाब लगाउने र शीतल गर्ने गुणको हुन्छ ।

**पौण्ड्रको भीरुकश्चापि वंशकः शतपोरकः । कान्तारतापसेक्षुश्च काण्डेक्षुः सूचिपत्रकः ॥**
**नैपालो दीर्घपत्रश्च नीलपोरोऽथ कोशकृत् । मनोगुप्ता च इत्येता जातयस्तत्र कीर्त्तिताः ॥**

पौण्ड्रक, भीरुक, वंशक, शतपोरक, कान्तार, तापसेक्षु, काण्डेक्षु, सूचिपत्रक, नैपाल, दीर्घपत्र, नीलपोर, कोशकृत् र मनोगुप्ता : यिनलाई उखुका जात भनी बताइएको छ ।

**वातपित्तप्रशमनो मधुरो रसपाकयोः । सुशीतो वृंहणो बल्यः पौण्ड्रको भीरुकस्तथा ॥**

'पौण्ड्रक' र 'भीरुक' जातका उखुले वातविकार र पित्तविकार शान्त पार्दछ । यी उखु शुरुमा र पचेपछि पनि गुलिया हुन्छन् । यिनले शीतल गर्दछन् । यी पौष्टिक र बलदायक हुन्छन् ।

**कोशकारो गुरुः शीतो रक्तपित्तक्षयापहः ।**

'कोशकार' जातको उखु पचाउन कठिन, शीतल गर्ने तथा रक्तपित्त र क्षयरोग नाशक हुन्छ ।



**कान्तारेक्षुर्गुरुर्वृष्यः श्लेष्मलो वृंहणः सरः ॥**

'कान्तार' जातको उखु पचाउन कठिन, वीर्यवर्धक, कफविकार गर्ने, पौष्टिक र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

**दीर्घपोरः सुकठिनः सक्षारो वंशकः स्मृतः ।**

'वंशक' जातको उखु लामालामा आँख्ला भएको, अति साह्रो र नुनिलो हुन्छ ।

**शतपर्वा भवेत्किञ्चित्कोशकारगुणान्वितः ॥**
**विशेषात्किञ्चिदुष्णश्च सक्षारः पवनापहः ।**

'शतपोरक' जातको उखुमा अन्य जातकोभन्दा बढी आँख्ला हुन्छ । यसका केही गुण कोशकार जातको उखुकै जस्ता हुन्छन् । यो विशेष गरी केही गर्मी गर्ने, नुनिलो र वातविकार नाशक हुन्छ ।

**तापसेक्षुर्भवेन्मृद्वी मधुरा श्लेष्मकोपनी ॥ तर्पणी रुचिकृच्चापि वृष्या च बलकारिणी ।**

'तापसेक्षु' जातको उखु कमलो, गुलियो, कफविकार बढाउने, तृप्तिदायक, रुचिकर, वीर्यवर्धक र बलदायक हुन्छ ।

**एवं गुणस्तु काण्डेक्षुः स तु वातप्रकोपणः ॥**

'काण्डेक्षु' जातको उखुमा तापसेक्षुकै गुण हुन्छ । विशेष गरी यसले धेरै वातविकार बढाउँदछ ।

**सूचीपत्रो नीलपोरो नैपालो दीर्घपत्रकः । वातलाः कफपित्तघ्नाः सकषाया विदाहिनः ॥**

'सूचीपत्र', 'नीलपोर', 'नैपाल' र 'दीर्घपत्रक' जातका उखु वातविकार गर्ने, कफविकार तथा पित्तविकार नाश गर्ने, टर्रा र विदाही (पित्तप्रकोपले हात, गोडा, छाती आदि पोल्ने बनाउने) गुणका हुन्छन् ।

**मनोगुप्ता वातहरी तृष्णाऽऽमयविनाशिनी । सुशीता मधुराऽतीव रक्तपित्तप्रणाशिनी ॥**

'मनोगुप्ता' जातको उखु वातविकार र तिर्खा रोग नाशक, शीतल गर्ने, गुलियो तथा धेरै मात्रामा रक्तपित्त नाशक हुन्छ ।

**बालइक्षुः कफं कुर्य्यान्मेदोमेहकरश्च सः । युवा तु वातहृत् स्वादुरीषत्तीक्ष्णश्च पित्तनुत् ॥**
**रक्तपित्तहरो वृद्धः क्षतहृद् बलवीर्यकृत् ।**

कलिलो उखु कफविकार गर्ने, बोसोविकार गर्ने र प्रमेह रोग निकाल्ने गुणको हुन्छ । हुर्केको उखु वातविकार नाशक, स्वादिलो, केही तिक्खर र पित्तविकार नाशक हुन्छ ।छिप्पिएको उखुले रक्तपित्त र घाउ ठिक गर्नुका साथै बल र वीर्य बढाउँदछ ।



**मूले तु मधुरोऽत्यर्थं मध्येऽपि मधुरः स्मृतः ॥ अग्रे ग्रन्थिषु विज्ञेय इक्षुः पटुरसोजनैः ।**

उखुको फेदतिरको भाग अति गुलियो, बीचको भाग गुलियो र टुप्पोतिरको भाग नुनिलो हुन्छ भनी जान्नू ।

**दन्तनिष्पीडितस्येक्षो रसः पित्तास्रनाशनः ॥ शर्करासमवीर्यः स्यादविदाही कफप्रदः ।**

दाँतले टोकेर चुसिएको उखुको रसले पित्तविकार र रक्तविकार नाश गर्दछ । यो सक्खर सरह वीर्यवर्धक, थोरै विदाही (पित्तप्रकोपले हात, गोडा, छाती आदि पोल्ने बनाउने) र कफविकार गर्ने गुणको हुन्छ ।

**मूलाग्रजन्तुग्रन्थ्यादिपीडनान्मलसङ्करात् ॥**
**किञ्चित्कालविधृत्या च विकृतिं याति यान्त्रिकः ।**
**तस्माद्विदाही विष्टम्भी गुरुः स्याद्यान्त्रिको रसः ॥**

उखुको फेद, बीचको भाग, आँख्ला आदि कोलमा पिसिँदा त्यसमा मल पनि मिसिने हुनाले कोलमा पेलिएको उखुको रस केही समय पछि बिग्रन्छ । यसैले यो रस विदाही (पित्तप्रकोपले हात, गोडा,

छाती आदि पोल्ने बनाउने), विष्टम्भी (दिसा रोक्ने वा कब्जियत गर्ने) र पचाउन कठिन हुने गुणको हुन्छ ।

**रसः पर्युषितो नेष्टो ह्यम्लो वातापहो गुरुः । कफपित्तकरः शोषी भेदनश्चातिमूत्रलः ॥**

उखुको बासी रस हितकर हुँदैन । यो अमिलो, वातविकार नाशक, पचाउन कठिन, कफविकार पित्तविकार गर्ने, शरीर सुकाउने, दिसा खुकुल्याउने र धेरै पिसाब लगाउने गुणको हुन्छ ।

(ञ) **मदनपाल निघण्टु :**

**इक्षुर्महारसो वेणुर्निःसृतो गुडपत्रकः । तृणराजो मधुतृणो गण्डीरोऽमृतपुष्पकः ॥**
**ह्रस्वमूलो लोहितेक्षुः पौण्ड्रिकः पौण्ड्रकोऽपरः । रसालः सुकुमारोऽपि कृष्णेक्षुर्भीरुको मतः ॥**

इक्षु, महारस, वेणु, निसृत, गुडपत्रक, तृणराज, मधुतृण, गण्डीर, अमृतपुष्पक, ह्रस्वमूल, लोहितेक्षु र पौण्ड्रिक : यी उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । पौण्ड्रक, रसाल, सुकुमार, कृष्णेक्षु र भीरुक : यी उखुका जातहरू हुन् ।

**इक्षुः स्वादुर्गुरुः शीतो वृष्यः स्निग्धो बलप्रदः । जीवनो वातपित्तघ्नः कुर्यान्मूत्रकफक्रिमीन् ॥**

उखु गुलियो, पचाउन कठिन, शीतवीर्यको, वीर्यवर्धक, चिल्लो, बलप्रदायक, जीवनी, वातविकार नाशक, पित्तविकार नाशक, मूत्रवर्धक, कफवर्धक र कीरावर्धक हुन्छ ।



**स मूले मधुरोऽत्यर्थं मध्ये मधुर एव च । अग्रग्रन्थिषु विज्ञेयो लवणो मूत्रलस्तथा ॥**

उखु फेदतिर अति गुलियो, बीचमा गुलियो, आँख्ला र टुप्पातिर नुनिलो र पिसाब वर्धक हुन्छ ।

**लोहितेक्षुर्गुरुः शीतो दाहपित्तास्रकृच्छ्रनुत् । पौण्ड्रकः शीतलः स्निग्धो बृंहणः कफकृत्सरः ॥**

रातो उखु पचाउन कठिन, शीतवीर्यको तथा डाह, रक्तपित्त र कृच्छ्र नाशक हुन्छ । पौण्ड्रक उखु शीतवीर्यको, चिल्लो, पौष्टिक, कफविकार गर्ने र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

**कृष्णेक्षुस्तद्गुणो वंशः क्षारः किञ्चित्तु तत्समः । वंशवच्छतपोरोऽपि किञ्चिदुष्णः समीरजित् ॥**

कालो उखुमा पनि रातो उखुकै गुण हुन्छ । वंश जातको उखु केही नुनिलो भएपनि उस्तै गुणको हुन्छ । शतपोर उखुमा पनि वंश उखुकै जस्ता गुण हुन्छन् । यो थोरै उष्णवीर्यको र वातविकारलाई जित्ने गुणको हुन्छ ।

**कान्तारतापसौ तद्वत्काष्ठेक्षुर्वातलो हिमः । कासकारो गुरुः शीतो रक्तपित्तक्षयापहः ॥**

कान्तार र तापस उखुमा पनि यिनै (शतपोरका जस्तै) गुण हुन्छन् । काष्ठेक्षुले वातविकार गर्दछ र शीतवीर्यको हुन्छ । कासकार उखु पचाउन कठिन, शीतवीर्यको तथा रक्तपित्त र क्षयरोग नाशक हुन्छ ।

**सूचीपत्रो नीलपरो नैपालो दीर्घपत्रकः । वातलः कफपित्तघ्नः सकषायोऽतिदाहकृत् ॥**

सूचीपत्र, नीलपर, नैपाल र दीर्घपत्रक : यी नेपाली उखुका जात हुन् । यी वातविकार गर्ने, कफविकार र पित्तविकार नाशक, टर्रा र धेरै डाह गराउने गुणका हुन्छन् ।

**दन्तनिष्पीडितस्तेषां रसः पित्तास्रनाशनः । शर्करासमवीर्यः स्यादविदाही कफप्रद ॥**
**गुरुर्विदाही विष्टम्भी यान्त्रिकस्तु प्रकीर्तितः ॥**

दाँतले टोकेर चुसिएको उखुको रसले रक्तपित्तलाई नाश गर्दछ । यो सखरसमान वीर्यशाली, डाह नगर्ने, कफविकार बढाउने गुणको हुन्छ । कोलमा पेलिएको उखुको रस पचाउन कठिन, डाह गराउने र कब्जियत गराउने गुणको हुन्छ ।

**(ट) मदनादि निघण्टु :**

**इक्षुर्मधुलिहो भूरिरसस्थूलोऽसिपत्रकः । मृत्युपुष्पो गुडतृषा तृणराजो महारसः ॥**
**मधुराश्शीतवीर्यश्च बृंहणो वातपित्तहा । वृष्यः सारातिपित्तघ्नः इक्षुः सर्वत्र कीर्तितः ॥**

इक्षु, मधुलिह, भूरिरस, स्थूल, असिपत्रक, मृत्युपुष्प, गुडतृषा, तृणराज र महारस : यी उखुका पर्यायवाची नाम हुन् । उखु गुलियो, शीतवीर्यको, पौष्टिक, वातविकार र पित्तविकार नाशक, वीर्यवर्धक र रसले अति पित्त नाशगर्ने हुन्छ भनी सबैतिर बताइएको छ ।

**(ठ) माधवद्रव्यगुण :**

**(ऐक्षवा मधुरा बल्या विपाके गुरुशीतलाः) । स्निग्धा बल्या मूत्रलाश्चवृष्याः प्रीणनबृंहणाः ॥**
**कृमिश्लेष्मकराश्चेति ते चानेकविधाः स्मृताः । पुण्ड्रको भीरुकश्चेति वंशकः शतपोनकः ॥**
**कान्तारेक्षुस्तापसेक्षुः काण्डेक्षुः सूचिपत्रकः । नेपालो दीर्घपत्रश्च नलपोरोऽथ कोशकृत् ॥**
**इत्येते ज्ञातयः स्थौल्याद् गुणत्वक्सारतो मताः ।**

उखु गुलियो, पचेपछि बलदायक, पचाउन कठिन, शीतवीर्यको, चिल्लो, (बलदायक), पिसाब बढाउने, वीर्यवर्धक, आनन्ददायक, पौष्टिक तथा कीरा कफविकार गराउने गुणका हुन्छन् । यी अनेक प्रकारका हुन्छन् । पुण्ड्रक, भीरुक, वंशक, शतपोनक, कान्तार, तापस, काण्डेक्षु, सूचिपत्रक, नेपाल, दीर्घपत्र, नलपोर र कोशकृत् : यी उखुका जात हुन् ।

**सुशीतो मधुरः स्निग्धो बृंहणः श्लेष्मलः सरः ॥**

**आविदाही गुरुर्वृष्यः पौण्ड्रको भीरुकस्तथा । आभ्यां तुल्यगुणः किञ्चित् सक्षारो वंशकः स्मृतः ॥**

पौण्ड्रक र भीरुक जातका उखु अति शीतवीर्यको, गुलियो, चिल्लो, पौष्टिक, कफविकार गर्ने, मलमूत्रलाई तलतिर सार्ने, डाह नगर्ने, पचाउन कठिन र वीर्यवर्धक हुन्छन् । वंशक जातको उखु यी दुईको जस्तै गुण भएको तर केही क्षारयुक्त हुन्छ ।

**वंशवत् शतपोनस्तु किञ्चिदुष्णः स वातहा । कान्तारतापसाविक्षू वंशकानुगतौ मतौ ॥**
**एवङ्गुणस्तु कान्तेक्षुः स च वातप्रकोपणः ।**

शतपोन जातको उखु वंशक जातको उखजस्तै तर के ही उष्णवीर्यको र वातविकार नाशगर्ने गुणको हुन्छ । कान्तार र तापस जातको उखु पनि वंशक जस्तै गुणको हुन्छ । यस्तै गुण कान्तेक्षुमा पनि हुन्छ तर यसले वातविकारलाई उत्तेजित पार्दछ ।

**सूचीपत्रो नीलपोरो नेपालो दीर्घपत्रकः ॥**
**वातलाः कफपित्तघ्नाः सकषाया विदाहिनः । कोशकारो गुरुः शीतो रक्तपित्तक्षयापहः ॥**

सूचीपत्र, नीलपोर, नेपाल र दीर्घपत्रक जातका उखु वातविकार गर्ने, कफविकार र पित्तविकार नाशगर्ने, केही टर्रा र डाह गर्ने गुणका हुन्छन् । कोशकार जातो उखु पचाउन कठिन, शीतवीर्यको तथा रक्तपित्त र क्ष्यारोग नाशक हुन्छ ।



**अतीव मधुरो मूले मध्ये मधुर एव च । अग्रे ग्रन्थित्वचोर्ज्ञेये लवणो रस एव च ॥**

उखुको फेद अति गुलियो, बीचभाग गुलियो तथा टुप्पो, आँख्ला र बोक्रा नुनिलो हुन्छ ।

**वातासृक्पित्तजित् स्वादुः स्निग्धः प्रीणनबृंहणः । जीवनस्तर्पणो वृष्यः शीतश्चेक्षुरसः सरः ॥**

उखुको रस वातविकार, रक्तविकार र पित्तविकालाई जित्ने; गुलियो, चिल्लो, प्रिय, पौष्टिक, जीवनी, तृप्तिदायक, वीर्यवर्धक, शीतवीर्यको र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

**अविदाही कफकरो वातपित्तनिबर्हणः । वक्त्रप्रसादनो वृष्यो दन्तनिष्पीडितो रसः ॥**

दाँतले टोकेर खाइएको उखुको रस डाह नगर्ने, कफविकार गर्ने, वातविकार र पित्तविकार नाशगर्ने, मुखलाई प्रशोधन गर्ने र वीर्यवर्धक हुन्छ ।

**गुरुर्विदाही विष्टम्भी यान्त्रिकस्तु प्रकीर्तितः ।**

कोलमा पिसिएको उखुको रस पचाउन कठिन, डाह गर्ने र कब्जियत गर्ने गुणको हुन्छ ।

**(ङ) राज निघण्टु :**

**इक्षवः पञ्चधा प्रोक्ता नानावर्णगुणान्विताः । सितः पुण्ड्रः करङ्केक्षुः कृष्णो रक्तश्च ते क्रमात्॥**
**इक्षुः कर्कटको वंशः कान्तारः सुकुमारकः । असिपत्रो मधुतृणो वृष्यो गुडतृणो नव॥**

सेतो, पुण्ड्र, करङ्क, कालो र रातो गरी अनेक रङ र गुण भएका पाँच प्रकारका उखु हुन्छन् । (१) इक्षु, (२) कर्कटक, (३) वंश, (४) कान्तार, (५) सुकुमारक, (६) असिपत्र, (७) मधुतृण, (८) वृष्य र (९) गुडतृण : यी नौ वटा नाम उखुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**श्वेतेक्षुस्तु सितेक्षुः स्यात् काष्ठेक्षुर्वंशपत्रकः । सुवंशः पाण्डुरेक्षुश्च काण्डेक्षुर्धवलेक्षुकः॥**
**सितेक्षुः कठिनो रुच्यो गुरुश्च कफमूत्रकृत् । दीपनः पित्तदाहघ्नो विपाके कोष्णदः स्मृतः॥**

श्वेतेक्षु, सितेक्षु, काष्ठेक्षु, वंशपत्रक, सुवंश, पाण्डुरेक्षु, काण्डेक्षु र धवलेक्षुक : यी सेतो उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उखु कडा, रुचिप्रद, पचाउन कठिन तथा कफविकार गर्ने र धेरै पिसाब लगाउने गुणको हुन्छ । यो दीपनी, पित्तविकार नाशक, डाह नाशक र पचेपछि उष्णवीर्यको हुन्छ ।

**पुण्ड्रकस्तु रसालः स्याद्रसेक्षुः सुकुमारकः । कर्बुरो मिश्रवर्णश्च नेपालेक्षुश्च सप्तधा॥**

**पुण्ड्रोऽतिमधुरः शीतः कफकृत् पित्तनाशनः । दाहश्रमहरो रुच्यो रसे सन्तर्पणः परः॥**

(१) पुण्ड्रक, (२) रसाल, (३) रसेक्षु, (४) सुकुमारक, (५) कर्बुर, (६) मिश्रवर्ण र (७) नेपालेक्षु : यी सात नाम पुण्ड्र-उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उखु अति गुलियो, शीतवीर्यको, कफविकार गर्ने, पित्तविकार नाशक, डाह र थकाई नाशक, रुचिप्रद र अति नै तृप्तिदायक रस भएको हुन्छ ।

**अन्यः करङ्कशालिः स्यादिक्षुवाटीक्षुवाटिका । यावनी चेक्षुयोनिश्च रसाली रसदालिका॥**
**करङ्कशालिर्मधुरः शीतलो रुचिकृन्मृदुः । पित्तदाहहरो वृष्यस्तेजोबलविवर्धनः॥**

करङ्कशालि, इक्षुवाटी, इक्षुवाटिका, यावनी, इक्षुयोनि, रसाली र रसदालिका : यी करङ्क-उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उखु गुलियो, शीतवीर्यको, रुचिवर्धक, नरम, पित्तविकार र डाह नाशक तथा वीर्य, तेज र बल बढाउने गुणको हुन्छ ।

**कृष्णेक्षुरिक्षुरः प्रोक्तः श्यामेक्षुः कोकिलाक्षकः । श्यामवंशः श्यामलेक्षुः कोकिलेक्षुश्च कथ्यते॥**
**कृष्णेक्षुरुक्तो मधुरश्च पाके स्वादुः सुहृद्यः कटुको रसाढ्यः ।**
**त्रिदोषहारी शमवीर्यदश्च सुबल्यदायी बहुवीर्यदायी॥**

कृष्णेक्षु, इक्षुर, श्यामेक्षु, कोकिलाक्षक, श्यामवश, श्यामलेक्षु र कोकिलेक्षु : यी कालो उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उखु गुलियो र पचेपछि गुलियो, मुटुका लागि लाभदायक, पिरो र धेरै रस भएको हुन्छ । यसले त्रिदोष नाश गर्दछ । यो बराबर वीर्य (उष्ण र शीत) भएको, राम्रोसँग बल दिने र धेरै वीर्यवर्धक हुन्छ ।

**रक्तेक्षुः सूक्ष्मपत्रश्च शोणो लोहित उत्कटः । मधुरो ह्रस्वमूलश्च लोहितेक्षुश्च कीर्तितः ॥**
**लोहितेक्षुश्च मधुरः पाके स्याच्छीतलो मृदुः । पित्तदाहहरो वृष्यस्तेजोबलविवर्धनः ॥**

रक्तेक्षु, सूक्ष्मपत्र, शोण, लोहित, उत्कट, मधुर, ह्रस्वमूल र लोहितेक्षु : यी रातो उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उखु पनि गुलियो र पचेपछि शीतवीर्यको र नरम हुन्छ । यसले पित्तविकार र डाह नाश गर्दछ तथा वीर्य, तेज र बल बढाउँदछ ।

**इक्षुमूलं त्विक्षुनेत्रं तच्च मोरटकं तथा । वंशनेत्रं वंशमूलं मोरटं वंशपूरकम् ॥**

इक्षुमूल, इक्षुनेत्र, मोरटक, वंशनेत्र, वंशमूल, मोरट र वंशपूरक : यी उखुको जराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मूलादूर्ध्वन्तु मधुरा मध्येऽतिमधुरास्तथा । इक्षवस्तेऽग्रभागेषु क्रमाल्लवणनीरसाः ॥**

उखुको जराभन्दा माथि गुलियो, बीचको भाग धेरै गुलियो तथा टुप्पो क्रमशः नुनिलो र रसहीन हुन्छ ।



**अभुक्ते पित्तघ्नाश्चैते भुक्ते वातप्रकोपणाः । भुक्तमध्ये गुरुतरा इतीक्षूणां गुणास्त्रयः ॥**

खाना खानु अघि खाइएको उखुको रस पित्तविकार नाशक, खाना खाएपछि खाइएको उखुको रस वातविकार गर्ने र खाना खाँदा बीचमा खाइएको उखुको रस पचाउन कठिन हुन्छ । यी उखुका तीन गुण हुन् ।

**वृष्यो रक्तास्रपित्तश्रमशमनपटुः शीतलः श्लेष्मदोऽल्पः**
**स्निग्धो हृद्यश्च रुच्यो रचयति च मुदं मूत्रशुद्धिं विधत्ते ।**
**कान्तिं देहस्य दत्ते बलमति कुरुते बृंहणं तृप्तिदायी**
**दन्तैर्निष्पीड्य काण्डं मृदुयति रसितो मोहनश्चेक्षुदण्डः ॥**
**पीयूषोपमितं त्रिदोषशमनं स्याद्दन्तनिष्पीडितं**
**तद्वच्चेद्गृहयन्त्रजं तदपरं श्लेष्मानिलघ्नं कियत् ।**
**एतद्वातहरं तु वातजननं जाड्यप्रतिश्यायदं**
**प्रोक्तं पर्युषितं कफानिलकरं पानीयमिक्षूद्भवम् ॥**

दाँतले चपाएर चुसी खाएको उखु वीर्यवर्धक तथा रक्तविकार, रक्तपित्त र थकाई शान्त पार्ने जस्ता राम्रा गुणको हुन्छ । यो शीतवीर्यको हुन्छ र यसले थोरै कफविकार पनि गर्दछ । यस्तो उखुको रस

चिल्लो, मुटुका लागि हितकर, रुचिप्रद, सन्तोषजनक र पिसाबलाइ शुद्ध बनाउने गुणको हुन्छ । यो रसले शरीरको चमक बढाउँदछ र अति नै बल दिन्छ । यो पौष्टिक र तृप्तिदायक हुन्छ । उखुको गिँडोलाई दाँतले चपाएर रस चुस्दा सन्तोष र आनन्द प्राप्त हुन्छ । दाँतले चपाएर चुसिएको उखु अमृत समान त्रिदोष नाशक हुन्छ । त्यसैगरी घरेलु यन्त्रमा पेलिएको उखुको रसमा पनि यिनै गुण हुन्छन् । अन्य तरिकाबाट निकालिएको उखुको रसले थोरै मात्रामा कफविकार र वातविकार नाश गर्दछ । वातनाशक भएपनि यस्तो रसले वातविकार गर्न र पिनास लगाउन सक्दछ । बासी उखुको रसले कफविकार र वातविकार गर्दछ भनिएको छ ।

(ढ) **राजवल्लभ निघण्टु :**

**इक्षवो रक्तपित्तघ्ना बल्या वृष्याः कफप्रदाः । विपाके मधुराः स्निग्धा गुरवो मूत्रला हिमाः ॥**

उखुहरू रक्तपित्त नाशगर्ने, बलदायक, वीर्यवर्धक, कफविकार गर्ने, पचेपछि गुलिया, चिल्ला, पचाउन कठिन, पिसाब बढाउने र शीतवीर्यका हुन्छन् ।

**कोषकारो गुरुः शीतो रक्तपित्तक्षयापहः ।**

कोषकार जातको उखु पचाउन कठिन, शीतवीर्यको तथा रक्तपित्त र क्षयरोग नाशगर्ने गुणको हुन्छ ।

**पौण्ड्रकः शीतलो वृष्यः स्निग्धो मधुरबृंहणः ॥**



पौण्ड्रक जातको उखु शीतवीर्यको, वीर्यवर्धक, चिल्लो, गुलियो र पौष्टिक हुन्छ ।

**भीरुः श्लेष्मकरः स्वादुरविदाही गुरुः परम् ।**

भीरु जातको उखु कफविकार गर्ने, स्वादिलो,डाह नगर्ने र अति नै पचाउन कठिन हुने गुणको हुन्छ ।

**वंशकस्त्वनभिष्यन्दी लघुर्दोषत्रयापहः ॥**

वंशक जातको उखु अभिष्यन्दी नहुने, पचाउन सहज र त्रिदोष नाशगर्ने गुणको हुन्छ ।

**कान्तारी मधुरा लघ्वी सक्षारा कफवातला ।**

कान्तार जातको उखु गुलियो, पचाउन सहज, केही क्षारयुक्त तथा कफविकार र वातविकार गर्ने गुणको हुन्छ ।

**इक्षुमूलोतिमधुरो मध्ये मधुर एव च । ग्रन्थौ त्वच्यग्रभागे च विज्ञेयो लवणो रसः ॥**

उखुको फेद अति गुलियो, बीचभाग गुलियो तथा अँख्ला, बोक्रा र टुप्पो नुनिलो हुन्छ ।

**वृष्यः शीतः सरः स्निग्धो यन्त्रकस्तु विदह्यते । मूलाग्रजन्तु जग्धादिपीडनां मलसंस्करात्॥**
**किञ्चित्कालं निवृत्त्या च विकृतिं याति यान्त्रिकः ।**

कोलमा पिसिएको उखुको रस जरा, टुप्पो, कीरा, (आख्ला) आदि समेत पेलिने हुनाले मलनिकाल्ने गुणको हुन्छ । यो वीर्यवर्ध, शीतवीर्यको, मलमूत्रलाई तलतिर सार्ने, चिल्लो र डाहगर्ने गुणको हुन्छ । यस्तो रस केही समय बितेपछि विकृत हुने गर्दछ ।

**इक्षुरसो हिमो वृष्यस्तर्पणो जीवनः परः । वातासृक्पित्तजित्स्वादुः स्निग्धः प्रीणनबृंहणः ॥**

उखुको रस सामान्यतया शीतवीर्यको, वीर्यवर्धक, तृप्तिदायक, आयुवर्धक तथा वातविकार, रक्तविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यो स्वादिलो, चिल्लो, प्रसन्न पार्ने र पौष्टिक हुन्छ ।

**रक्तप्रसादनो वृष्यो दन्तनिष्पीडितो रसः ॥**

दाँतले चपाइएको उखुको रस रगतलाई प्रसन्न पार्ने र वीर्यवर्धक हुन्छ ।

**लसीका फाणितगुडं खण्डं मत्स्यण्डिका सिता । निर्मला लघवो ज्ञेयाः शीतवीर्या यथोत्तरम्॥**
**यथा यथैषां नैर्मल्यं गुणवत्स्यात्तथा तथा ॥**



उखुको रस, खुँदो, सखर, खाँड, मत्यण्डिका, चिनी : यी क्रमशः निर्मल, पचाउन सहज र शीतवीर्यका हुन्छन् । उखुका विकारलाई जतिजति निर्मल पारिन्छ उतिउति बढी गुनिला हुन्छन् ।

(ण) **शालिग्राम निघण्टु :**

**इक्षुदीर्घच्छदः प्रोक्तस्तथा भूरिरसोऽपि च । गुडमूलोऽसिपत्रश्च तथा मधुतृणः स्मृतः ॥**

इक्षु, दीर्घच्छद, भूरिरस, गुडमूल, असिपत्र र मधुतृण : यी उखुका पर्यायवाची नाम हुन् ।

**स्निग्धश्च सन्तर्पणबृंहणश्च सञ्जीवनः स्वादुरसः श्रमघ्नः ।**
**वृष्यश्च पित्तास्रशमंनयेच्च ह्यन्तर्विदाही कफकृत्सितेक्षुः ॥**

सेतो उखु चिल्लो, तृप्तिदायक, पौष्टिक, जीवनी, गुलियो, थकाई नाशक, वीर्यवर्धक, रक्तपित्तलाई शान्त पार्ने, भित्री डाह नाशगर्ने र कफविकार बढाउने गुणको हुन्छ ।

**रक्तेक्षुः शीतलः पाके मधुरोमृदुवृष्यकः । बलकान्तिप्रदश्चैव धातुवृद्धिकरो गुरुः ॥**
**तुवरः पित्तदाहघ्नो वातविस्फोटनाशकः ।**
**मूत्राघातं मूत्रकृच्छ्रं रक्तदोषञ्च नाशयेत् ॥ (निघण्टु रत्नाकर) ।**

रातो उखु शीतवीर्यको, पचेपछि गुलियो हुने, कोमल, वीर्यवर्धक, बलवर्धक, कान्तिदायक, धातुवर्धक, पचाउन कठिन, टर्रो तथा पित्तविकार, डाह, वातविकार, विस्फोट, मूत्राघात, मूत्रकृच्छ्र र रक्तविकार नाशगर्ने गुणको हुन्छ ।

**पौण्ड्रक भीरुकश्चापि वंशकः शतपोरकः । कान्तारस्तापसेक्षुश्च काण्डेक्षुः सूचिपत्रकः ॥**
**नैपालो दीर्घपत्रश्च नीलपोरोऽथ कोशकृत् । इत्येता जातयस्तेषां कथयामि गुणानपि ॥**

पौण्ड्रक, भीरुक, वंशक, शतपोरक, कान्तार, तापसेक्षु, काण्डेक्षु, सूचिपत्रक, नैपाल, दीर्घपत्र, नीलपोर र कोशकृत् : यी उखुका जात हुन् । यिनका गुणका बारेमा पनि बताउँदछु ।

**वातपित्तप्रशमनो मधुरो रसपाकयो । शीतो बृंहणो बल्यः पौण्ड्रको भीरुकस्तथा ॥**

पौण्ड्रक र भीरुक जातका उखु वातविका र वित्तविकार शान्त पार्ने, शुरुमा र पचेपछि गुलिया, शीतवीर्यका, पौष्टिक र बलदायक हुन्छन् ।

**कोशकारो गुरुः शीतो रक्तपित्तक्षयापहः ।**

कोशकार जातको उखु पचाउन कठिन, शीतवीर्यको तथा रक्तपित्त र क्षयरोग नाशकगर्ने गुणको हुन्छ ।



**कान्तारेक्षुर्गुरुर्वृष्यः श्लेष्मलो बृंहणः सरः ।**

कान्तार जातको उखु पचाउन कठिन, वीर्यवर्धक, कफविकार गर्ने, पौष्टिक र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

**दीर्घपोरः सुकठिनः सक्षारो वंशः स्मृतः ।**

दीर्घपोर जातको उखु साह्रो हुन्छ । वंशक जातको उखु क्षारिलो हुन्छ ।

**शतपर्वा भवेत् किञ्चित् कोशकारगुणान्वितः । विशेषात् किञ्चिदुष्णश्च सक्षारः पवनापहः ॥**

शतपोरक जातको उखु केही हदसम्म कोशकार जातको उखुकै गुणको हुन्छ । विशेषतः यो उखु केही उष्णवीर्यको, क्षारिलो र वातविकार नाशगर्ने गुणको हुन्छ ।

**मनोगुप्ता वातहारी तृष्णामयविनाशिनी । सुशीता मधुरातीवरक्तपित्तविनाशिनी ॥**

मनोगुप्ता जातको उखु वातविकार, तिर्खा र आमविकार (वा तिर्खारोग) नाशगर्ने, शीतवीर्यको, अति गुलियो र रक्तपित्त नाशगर्ने गुणको हुन्छ ।

**तापसेक्षुर्भवेन्मृद्वी मधुरा श्लेष्मकोपना । तर्पणी रुचिकृच्चापि वृष्या च बलकारिणी ॥**

तापसेक्षु जातको उखु कमलो, गुलियो, कफविकारलाई उत्तेजित पार्ने, तृप्तिदायक, रुचिप्रद, वीर्यवर्धक र बलदायक हुन्छ ।

**एवं गुणैस्य काण्डेक्षुः स तु वातप्रकोपनः ।**

तापसेक्षुकै गुण काण्डेक्षुमा हुन्छन् तर यो वातविकारलाई उत्तेजित पार्ने गुणको हुन्छ ।

**सूचीपत्रोनीलपोरोनैपालोदीर्घपत्रकः । वातलाः कफपित्तघ्नाः सकषाया विदाहिनः ॥**

सूचिपत्र, नीलपोर, नैपाल र दीर्घपत्र जातका उखु वातविकार गर्ने, कफविकार र पित्तविकार नाशगर्ने, केही टर्रो र डागर्ने गुणका हुन्छन् ।

**इक्षुमूलोति मधुरो मध्ये मधुर एव च । ग्रन्थात्वच्यग्रभागे च विज्ञेयो लवणो रसः ॥**

उखुको फेद अति गुलियो, बीच भाग गुलियो तथा आँख्ला, बोक्रा र टुप्पो नुनिलो हुन्छ ।

**बालइक्षुः कफं कुर्यान्मेदोमेहकरश्च सः । युवा तु वातहृत्स्वादुरीषत्तीक्ष्णश्च पित्तनुत् ॥**
**रक्तपित्त हरो वृद्धः क्षतहृद्बलवीर्यकृत् ।**

कलियो उखु कफविकार गर्ने, बोसो बढाउने र प्रमेह गराउने गुणको हुन्छ । छिप्पिएको उखु वातविकार नाशक, गुलियो, केही तिक्खर र पित्तविकार नाशगर्ने गुणको हुन्छ । पूरै छिप्पिएको उखु रक्तपित्त नाशक, चोटपटक नाशक तथा बल र वीर्य प्रदान गर्ने गुणको हुन्छ ।

**दन्तनिष्पीतस्येक्षोरसः पित्तास्रनाशनः । शर्करासमवीर्यः स्यादविदाही कफप्रदः ॥**

दाँतले चपाएर खाइएको उखुको रस रक्तपित्त नाशगर्ने, चिनी सहरक वीर्यशाली, डाह नगर्ने र कफविकार गर्ने गुणको हुन्छ ।

**वृष्यः शीतोस्रपित्तं शमयति मधुरो बृंहणः श्लेष्मकारी**
**स्निग्धो हृदः सरश्च श्रमशमनपटुर्मूत्रवृद्धिं करोति ।**
**मेदो वृद्धिं विहन्याच्छमयति च मलं तर्पणश्चेन्द्रियाणां**
**दन्तैर्निष्पीड्य साक्षालमृतमयरसो भक्षयेदिक्षुदण्डः ॥**

दाँतले चपाएर चुसिएको उखुको रस शीतवीर्यको, रक्तपित्तलाई शान्त पार्ने, गुलियो, पौष्टिक, कफविकार गर्ने, चिल्लो, मुटुका लागि हितकर, मलमूत्रलाई तलतिर सार्ने, थकाई नाशक, नुनिलो, पिसाब बढाउने, बोसोको वृद्धिलाई नाश पार्ने, मल नाशक र इन्द्रियलाई तृप्तिदायक, हुनाले यस्तो अमृतसमान उखुका गिँडलाई दाँतले चपाएर खानू ।

**मूलाग्रजन्तुवग्धादि पीडनान्मलसंकरात् ।**

किञ्चित्कालं विधृत्वाच्च विकृतिं याति यान्त्रिकः ।
तस्माद्विदाही विष्टम्भी गुरुः स्याद्यान्त्रिकोरसः॥

कीराले खाएका जरा र टुप्पो अनि आँख्ला समेत पिसिने हुनाले कोलमा पिसिएको उखुको रस मैलो मिलेका कारण केही समय राखेपछि बिग्रने गर्दछ । यस्तो दूषित रस डाहकारी, कब्जियत गराउने र पचाउन कठिन हुने गुणको हुन्छ ।

रसः पर्युषितो दुष्टो ह्यम्लो वातापहो गुरुः । कफपित्तकरः शोषी भेदनश्चातिमूत्रलः॥

उखुको बासी रस गुनिलो हुँदैन । यो अमिलो, वातविकार नाशगर्ने, पचाउन कठिन, कफविकार गर्ने, पित्तविकार गर्ने, शरीर सुकाउने, भेदनी र पिसाब बढाउने गुणको हुन्छ ।

भक्षितो भोजनात्पूर्वं चेक्षुः पित्तस्यशामकः । भोजनोत्तर काले च भक्षितो वातकोपनः ।
भोजने भक्षितश्चासावतिजाड्यकरो मतः॥ (निघण्टु रत्नाकर)

खाना खानुअघि खाइएको उखुको रसले पित्तविकार शान्त पार्दछ । खाना खाईसकेपछि खाइएको उखुको रसले वातविकारलाई उत्तेजित पार्दछ । खाना खाँदा बीचबीचमा खाइएको उखुको रसले शरीरमा अति नै लाटोपन लेराउँदछ ।

(त) सरस्वती निघण्टु :



रसालेक्षुर्भूरिरसो गुडमूलोऽसिपत्रकः । तृणराजो मधुतृणो गुडदारुः महारसः॥

रसाल, इक्षु, भूरिरस, गुडमूल, असिपत्रक, तृणराज, मधुतृण, गुडदारु र महारस : यी उखुका पर्यायवाची नाम हुन् ।

(थ) सुश्रुत संहिता :

इक्षवो मधुरा मधुरविपाका गुरवः शीताः स्निग्धा बल्या वृष्या
मूत्रला रक्तपित्तप्रशमनाः कृमिकफकराश्चेति॥

सबै किसिमका उखुको रस र पचेपछिको रस गुलियो, पचाउन कठिन, शीतवीर्यको, चिल्लो, बलदायक, वीर्यवर्धक, पिसाब बढाउने, रक्तपित्तलाई शान्त पार्ने, कीरा पार्ने र कफविकार गर्ने गुणको हुन्छ ।

ते चानेकविधाः । तद्यथा-
पौण्ड्रको भीरुकश्चैव वंशकः श्वेतपोरकः । कान्तारस्तापसेक्षुश्च काष्ठेक्षुः सूचिपत्रकः॥
नैपालो दीर्घपत्रश्च नीलपोरोऽथ कोशकृत् । इत्येता जातयः स्थौल्याद्गुणान् वक्ष्याम्यतः परम्॥

तो अनेक जातका हुन्छन् । जस्तै :- पौण्ड्रक, भीरुक, वंशक, श्वेतपोरक, कान्तार, तापसेक्षु, काष्ठेक्षु, सूचिपत्रक, नैपाल, दीर्घपत्रक, नीलपोर र कोशकृत् । उखुका मुख्यतया यिनै जात हुन्छन् । अब यिनको गुण बताइन्छ ।

**सुशीतो मधुरः स्निग्धो बृंहणः श्लेष्मलः सरः । अविदाही गुरुर्वृष्यः पौण्ड्रको भीरुकस्तथा॥**
**आभ्यां तुल्यगुणः किञ्चित्सक्षारो वंशको मतः । वंशवच्छ्वेतपोरस्तु किञ्चिदुष्णः स वातहा॥**
**कान्तारतापसाविक्षू वंशकानुगतौ मतौ । एवंगुणस्तु काष्ठेक्षुः स तु वातप्रकोपणः॥**
**सूचीपत्रो नीलपोरो नैपालो दीर्घपत्रकः । वातलाः कफपित्तघ्नाः सकषाया विदाहिनः॥**
**कोशकारो गुरुः शीतो रक्तपित्तक्षयापहः ।**

पौण्ड्रक तथा भीरुक यी दुवै जातका उखु शीतवीर्यका, गुलिया, चिल्ला, पौष्टिक, कफ बढाउने, मलमूत्रलाई तलतिर सार्ने, डाह नगर्ने, पचाउन कठिन र वीर्यवर्धक हुन्छन् । वंशक जातको उखु यी दुई जातका उखु जस्तै गुणको हुन्छ । तर यो केही क्षरिलो वा नुनिलो हुन्छ । श्वेतपोरक जातको उखु वंशक जातको उखु जस्तै गुणको हुन्छ तर यो केही उष्णवीर्यको र वातविकार नाशगर्ने गुणको हुन्छ । कान्तार र तापसेक्षु जातका उखु वंशक जातको उखु जस्तै गुणका हुन्छन् । काष्ठेक्षु पनि यस्तै गुणको हुन्छ तर वाविकारलाई उत्तेजित बनाउँदछ । सूचीपत्र, नीलपोर, नेपाल, र दीर्घपत्रक जातका उखु वातविकार गर्ने, कफविकार पित्तविकार नाश गर्ने, टर्रा र डा गराउने खालका हुन्छन् । कोशकृत् जातको उखु पचाउन कठिन, शीतवीर्यको तथा रक्तपित्त र क्षयरोग नाशगर्ने गुणको हुन्छ ।

**अतीव मधुरो मूले मध्ये मधुर एव तु॥ अग्रेष्वक्षिषु विज्ञेय इक्षूणां लवणो रसः ।**



उखु फेदतिर अति गुलियो, बीचमा गुलियो तथा टुप्पोतिर र आँख्लामा (केही) नुनिलो हुन्छ ।

**अविदाही कफकरो वातपित्तनिवारणः॥ वक्त्रप्रह्लादनो वृष्यो दन्तनिष्पीडितो रसः ।**

दाँतले टोकेर खाइएको उखुको रस डा नगर्ने कफविकार गर्ने, वातविकार पित्तविकार नाश गर्ने, मुखलाई प्रसन्न पार्ने र वीर्यवर्धक हुन्छ ।

**गुरुर्विदाही विष्टम्भी यान्त्रिकस्तु प्रकीर्तितः॥**

कोलमा पिसेको उखुको रस पचाउन कठिन, डाह गर्ने, र कब्जियत वा पेट कराउने बनाउने गुणको हुन्छ ।

(द) **सोढल निघण्टु :**

**इक्षौ कर्कटको वंशः कान्तारो वेणुनिःस्वनः । सुरसोऽथो बहुरसो रसालुः पुण्ड्रकस्तथा॥**
**शीतमूलो मधुतृणो गुडदश्चान्त्यपुष्पकः॥**

इक्षु, कर्कटक, वंश, कान्तार, वेणुनिस्वन, सुरस, बहुरस, रसाल, पुण्ड्रक, शीतमूल, मधुतृण, गुडद र अन्त्यपुष्पक : यी उखुका नाम हुन् ।

(ध) हारीत संहिता :

**रसायनोत्तमं बल्यं रोगवारणमुत्तमम्॥**

अब यसपछि गुण अधिक भएको उखु-वर्गका बारेमा बताउँदछु । यसमा उत्तम रसायन हुन्छ, यसले बल दिन्छ र रोगलाई उत्तम तरिकाले निको पार्दछ ।

**स्निग्धं च तर्पणं वापि बृंहणं च सजीवनम्॥**

गुलियो खालको उखु चिल्लो हुन्छ, तृप्त पार्दछ, धातुहरूलाई पुष्ट गर्नुका साथै आयु बढाउँदछ ।

**तद्वातपित्तशमनश्च तथैव वृष्य अन्तर्विदाहकफकृत्प्रथितः सितेक्षुः॥**

सेतो उखुले वात र पित्त दोषलाई शान्त पार्दछ । वीर्य बढाउँदछ तर शरीरभित्र डाह र कफ समेत बढाउँदछ भनी प्रख्यात छ ।

**तद्वत् सुकृष्णो भवते गुणानां वृष्यो भवेत्तर्पणदाहहन्ता ।**
**क्षारः स किञ्चिन्मधुरो रसेन शोपापहर्त्ता व्रणशोफकारी॥**

कालो उखुमा पनि सेतो उखुका गुण हुन्छन् । यसले वीर्य बढाउँदछ, डाह नाश गर्दछ, केही नुनिलो हुन्छ, पचेको रस गुलियो हुन्छ, सुक्खापन हराउँदछ तर घाउ र सुन्निने रोग यसले बढाउँदछ ।

**यन्त्रेण पीडितरसः कथितो गुरुश्च वृष्यः कफं च कुरुतेऽथ सुशीतलश्च ।**
**पाके विदाहबलकृच्च सुशोभनश्च संसेवितो रुधिरपित्तरुजं निहन्ति॥**

यन्त्र (कोल) मा पेलेर निकालिएको उखुको रस पचाउन कठिन हुन्छ । वीर्यका साथै कफ पनि बढाउँदछ । देख्नमा सुन्दर र शीतल गर्ने गुणको हुन्छ । पच्ने समयमा डाह हुन्छ । बल दिन्छ, सुन्दर र शोभायमान देखिन्छ तथा रक्तपित्त रोगलाई नाश गर्दछ ।

**दन्तैर्विपीडितरसो रुचिकृद्गुरुश्च सन्तर्पणो बलकरः कफकृच्छ्रमघ्नः ।**
**विष्टम्भकश्च रुधिरस्य तथैव पित्तदोषं निहन्ति सकलं वमनं च शोषम्॥**

उखुलाई दाँतले टोकेर खाइएको रसले रुची जगाउँदछ । यो पनि पचाउन कठिन नै हुन्छ तर तृप्तिदायक हुन्छ । बल दिन्छ, कफ बढाउँदछ र थकाई मेट्दछ । मललाई कस्दछ तर रक्तविकार र पित्त विकारलाई नाश गर्दछ । वाकवाकी र सुकेनास जस्ता रोग नाश गर्दछ ।

**रसपर्य्युषितो नेष्टस्तापहैकमते गुरुः । कफपित्तकरः शोषी भेदनो वाऽथ मूत्रलः ॥**

उखुको बासी रस राम्रो हुँदैन तर कसै कसैले यसले ताप हटाउँदछ पनि भनेका छन् । यो पचाउन कठिन हुनुका साथै कफ र पित्त बढाउने गुणको हुन्छ । यसले शरीरलाई सुकाउँदछ, मल आदिलाई फुकाउँदछ अनि वायु र मूत्र बढाउँदछ ।



उखु, Source : Karthika Murugesan

# इक्षुदर्भा (बन्सो)
# (Henry's crabgrass)

**परिभाषा :**

(क) **के.यन.स्वामी :** (१) इक्षुदर्भा, पत्रालु, तृणपत्रिका : बन्सो । (२) सुदर्भा : एक झारविशेष, जुन झार सूर्यको तेजलाई त्वष्टाले सान लगाएर खियाउँदा निस्केको तेजबाट त्वष्टाद्वारा बनाइएको (उत्पादन गरिएको) थियो ।

(ख) **नेपाली बृहत् शब्दकोश :** (१) बन्सो : दुबाका जस्ता तर केही लामा पात हुने, केस्रैकेस्रा परेका झुप्पादार फूल हुने, आँख्लैपिच्छे हाँगा हाल्ने र भुइँमा लत्रँदा आँख्लाबाट जरा हाल्ने एक भुइँझार वा घाँस; मन्थानक । (२) हात्तीबुटे : मसिना हरिया फूल फुल्ने खालको बन्सो घाँस । (३) कुकुरबन्सो : बन्सो घाँसको एक प्रकार । (४) कुत्तेबन्सो : ज्वानुका जस्ता गेडा हुने र टुप्पामा कोसाजस्तो देखिने लामो खालको बन्सो । (५) गोमूत्रिका : सुगन्धित बीज हुने एक प्रकारको घाँस; कुकुरबन्सो । (६) घोडे बन्सो : लामालामा पात हुने, टुप्पामा एक प्रकारको फूल फुल्ने र मसिना गेडा पनि लाग्ने बन्सो घाँस । (७) चित्रे बन्सो : गाईबस्तुलाई खुवाइने, चित्रोझैँ फैलिने घाँसविशेष । (८) ढोडे बन्सो : ठूलठूला लामा डाँठ हुने एक जातको बन्सो; घोडेदूबो । (९) फुर्के बन्सो : टुप्पामा देखिने फुर्कामा प्याजी रङ हुने एक जातको बन्से घाँस ।

(ग) **Journal of Plant Resources, Vol. 17, No. 1, Government of Nepal, 2019 :** बन्सो वा चित्रेबन्सो Poaceae परिवारमा पर्दछ । यसको अंग्रेजी नाम Henry's crabgrass तथा वानस्पतिक नाम *Digitaria ciliaris* (Retz.) Koeler हो ।

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **राज निघण्टु :**

**इक्षुदर्भा सुदर्भा च पत्रालुस्तृणपत्रिका॥**
**इक्षुदर्भा सुमधुरा स्निग्धा चेषत्कषायका । कफपित्तहरा रुच्या लघुः सन्तर्पणी स्मृता॥**

इक्षुदर्भा, सुदर्भा, पत्रालु र तृणपत्रिका : यी नाम बन्सोका संस्कृत पर्यायवाची नामहरू हुन् । बन्सो गुलियो, चिल्लो र थोरै टर्रो हुन्छ । यसले कफविकार र पित्तविकार नाश गर्दछ । यो रुचिप्रद, पचाउन हलुका र तृप्तिदायक हुन्छ ।

# इङ्गुदी (चिउरी वा चिउली ?)
# (Ingudee ?)

**परिभाषा :**

(क) **कुलचन्द्र शर्मा :** इङ्गुदी, तापसतरु भनेको चिउरी हो ।

(ख) **के.यन.स्वामी :** इङ्गुदी, तापसतरु आदि संस्कृत नाम चिउरीका हुन् ।

(ग) **नेपाली बृहत् शब्दकोश :** (१) चिउरी : चिउली (फल वा बोट) । (२) चिउली : सेता साना फूल फुल्ने, दूध निस्कने, अमारोका आकारको फल फल्ने, सो फल चुस्दा गुलियो रस निस्कने रूख वा त्यसको फल; हिङ्गुदल ।

(घ) **डा. चुनेकर :** यसको ल्याटिन नाम *Balanites roxburghii* Planch. हो ।

(ङ) **डा.सतिश चन्द्र साङ्ख्यधर :** चिउरीको ल्याटिन नाम *Balanites aegyptica* (Linn.) Delile वा *Balanites Roxburghii* planch. हो ।

(च) **पेयर डी अमरकोश :** यसको वानस्पतिक *Balanites aegyptiaca* (L.) Delile नाम हो । यसलाई अंग्रेजीमा Desert Date भनिन्छ । वानस्पतिक नाम *Terminalia catappa* L. भएको बोटलाई पनि तापसतरु मानिएको छ । तर आचार्य बालकृष्णले यो वानस्पतिक नामको हिन्दी अर्थ  जङ्गली बादाम र नेपाली अर्थ काठे बदाम भनेर लेख्नु भएको छ । उहाँले यसका संस्कृत नाम क्षुद्रवाताम र ग्रहदुमा बताउनु भएको छ ।

(छ) **Journal of Plant Resources, Vol. 17, No. 1, Government of Nepal, 2019 :** यो Sapotaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Diploknema butyracea* (Roxb.) H. J. Lam  हो । गुरुङ भाषामा यसलाई पैंजे भनिन्छ ।

(ज) **Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 :** यो Angiosperm समूह अन्तर्गत Sapotaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Diploknema butyracea* (Roxb.) H. J. Lam  हो । गुरुङ भाषामा यसलाई पैंजे भनिन्छ ।

(झ) **शालिग्राम वैद्य :** यसका ठूलठूला रूख जङ्गलमा हुन्छ । यसमा काँडा पनि हुन्छन् । फल कागती जस्तै तर केही लामा र गोला हुन्छन् । फलको माथिल्लो भागमा पोको जस्तो परेर रस थुप्रिने गर्दछ यसले गर्दा फल रसमाथि तैरिरहेको जस्तो देखिन्छ । यसलाई अंग्रेजीमा Delil तथा ल्याटिन भाषामा *Balanites Roxburghi* भनिन्छ । हिन्दीमा हिंगोट वा गोंदी भनिन्छ ।

(ञ) **हिन्दी विश्वकोश (इङ्गुद) :** तापसवृक्ष, हिंगोटको रूख ।

यो वनस्पतिका बारेमा पनि मतभेद रहेका छन् । थप अनुसन्धान गरी निर्णयमा पुग्नुपर्ने देखिन्छ । काँडा हुने बोट भनिएकोले सम्भवतः यो चिउरी नहुन पनि सक्दछ ।

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **अमरकोश :**

**इङ्गुदी तापसतरुः...।**

इङ्गुदी र तापसतरु चिउरीका नाम हुन् ।

**(ख) अष्टाङ्ग निघण्टु :**

**इङ्गुदस्तिक्तमज्जा च पीलुकस्तापसद्रुमः ।**
इङ्गुद, तिक्तमज्जा, पीलुक र तापसद्रुम : यी चिउरीका पर्यायवाची नाम हुन् ।

**(ग) कैयदेव निघण्टु :**

**इङ्गुदो भल्लकस्तिक्तोमज्ज स्यात् पूतिकर्णिकः । कण्टकीराङ्गारवृक्षो बिन्दुको व्यावहारिकः ॥**
**तिक्तकः कोरत्रोवृक्षः कण्टकस्तापसद्रुमः । इङ्गुदस्तिक्तकः सोष्णः कटुपाको नियच्छति ॥**
**कृमिकुष्ठविषश्वित्रशूलभूतग्रहव्रणान् । तत्फलं मधुरं तिक्तं स्निग्धोष्णं कफवातनुत् ॥**

इङ्गुद, भल्लक, तिक्तमज्ज, पूतिकर्णिक, कण्टकी, अङ्गारवृक्ष, कण्टक र तापसद्रुम : यी चिउरीका पर्यायवाची नाम हुन् । यो तितो, उष्णवीर्यको, पचेपछि पिरो तथा कीरा, कुष्ठ, विषविकार, सेतोकुष्ठ, शूल, भूतबाधा, ग्रहबाधा र खटिरा नाशगर्ने गुणको हुन्छ । त्यसको फल गुलियो, तितो, चिल्लो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशगर्ने गुणको हुन्छ ।

**इङ्गुदीतैलमेतेषु दृष्टिशुक्रबलापहम् ।**



चिउरीको तेलले दृष्टिक्षमता, वीर्य र बल नाश गर्दछ ।

**(घ) निघण्टुशेष :**

**इङ्गुद्यां तापसतरुर्मार्जारः कटकीलकः । बिन्दुकस्तिक्तमज्जा च पूतिपुष्प-फलोऽपि च ॥**

इङ्गुदी, तापसतरु, मार्जार, कटकीलक, बिन्दुक, तिक्तमज्जा, पूतिपुष्प र पूतिफल : यी चिउरीका पर्यायवाची नाम हुन् ।

**"इगु गतौ" इङ्गति इङ्गुदी । तापसानां तरुस्तापसतरुः, तापसा हि अरण्येऽस्यास्तैलमुपयुञ्जते । मार्ष्टि मार्जारः । कटमत्यर्थं कीलयति कटकीलकः । बिन्दुप्रतिकृतिर्बिन्दुकः । तिक्ता मज्जाऽस्याः तिक्तमज्ज । पूतिपुष्प-फलः इति पूतिशब्दात् पुष्प-फलशब्दौ योज्येते, पूतीनि पुष्पाणि फलानि चास्य पूतिपुष्पः पूतिफलः । एतस्य लोके हिङ्गोटु इति प्रसिद्धिः ।**

**(ङ) पर्यायरत्नमाला :**

**पूतिपुष्पोऽङ्गारवृक्ष इङ्गुदी तापसप्रियः ।**

पूतिपुष्प, अङ्गारवृक्ष, इङ्गुदी र तापसप्रिय : यी चिउरीका नाम हुन् ।

(च) **भावप्रकाश निघण्टु :**

**इङ्गुदोऽङ्गारवृक्षश्च तिक्तकस्तापसद्रुमः । इङ्गुदः कुष्ठभूतादिग्रहव्रणविषक्रिमीन्॥**
**हन्त्युष्णः श्वित्रशूलघ्नस्तिक्तकः कटुपाकवान् ।**

इङ्गुद, अङ्गारवृक्ष, तिक्तक र तापसद्रुम : यी चिउरीका संस्कृत पर्यायवाची नाशहरू हुन् । यसले कुष्ठ, भूत आदि ग्रह बाधा, घाउखटिरा, विषविकार र कीरा नाश गर्दछ । यसले गर्मी गर्दछ तथा श्वेतकुष्ठ र शूल नाश गर्दछ । यो तीतो र पचेपछि पिरो हुन्छ ।

(छ) **मदनपाल निघण्टु :**

**इङ्गुदो भल्लकी वृक्षकण्टकस्तापसद्रुमः । इङ्गुदः कुष्ठभूतादिग्रहव्रणविषक्रिमीन्॥**
**हन्त्युष्णः श्वित्रशूलघ्नस्तत्फलं कफवातजित्॥**

इङ्गुद, भल्लकी, वृक्षकण्टक र तापसद्रुम : यी चिउरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कुष्ठ, भूतबाधा, ग्रहबाधा, घाउखटिरा, विषविकार, कीरा, सेतोकुष्ठ र शूल नाश गर्दछ । यो उष्णवीर्यको हुन्छ । यसको फलले कफविकार र वातविकार माथि जित हासिल गर्दछ । (चिउलीको तेल पचेपछि पिरो, तिक्खर, उर्ष्णवीर्यको, तीतो, मलमूत्रलाई तलतिर सार्ने गुणको, पचाउन सहज तथा कुष्ठ, कफविकार, प्रमेह, बेहोसीपन र कीरा नाशक हुन्छ ।) ।

(ज) **राज निघण्टु :**

**इङ्गुदी हिङ्गुपत्रश्च विषकण्टोऽनिलान्तकः । गौरस्तूक्तः सुपत्रश्च शूलारिस्तापसद्रुमः॥**
**तीक्ष्णकण्टस्तैलफलः पूतिगन्धो विगन्धकः । ज्ञेयः क्रोष्टुफलश्चैव वह्नीन्दुगणिताह्वयः॥**
**इङ्गुदी मदगन्धिः स्यात् कटूष्ण फेनिलालघुः । रसायनी हन्ति जन्तुवातामयकफव्रणान्॥**

(१) इङ्गुदी, (२) हिङ्गुपत्र, (३) विषकण्ट, (४) अनिलान्तक, (५) गौर, (६) सुपत्र, (७) शूलारि, (८) तापसद्रुम, (९) तीक्ष्णकण्ट, (१०) तैलफल, (११) पूतिगन्ध, (१२) विगन्धक र (१३) क्रोष्टुफल : यी तेह्र नाम चिउरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मदिरा गनाए जसरी गनाउँदछ । चिउरी पिरो, उष्णवीर्यको, फिँज आउने र पचाउन हलुका हुने गुणको हुन्छ । यो रसायनी हुनुका साथै यसले कीरा, वातविकार, आमविकार, कफविकार र घाउखटिरा ठिक गर्दछ ।

**स्निग्धं स्यादिङ्गुदीतैलं मधुरं पित्तनाशनम् । शीतलं कान्तिदं बल्यं श्लेष्मलं केशवर्धनम्॥**

चिउरीको तेल चिल्लो, गुलियो, पित्तविकार नाशक, शीतवीर्यको, कान्तिदायक, बलप्रदायक, कफविकार गर्ने र कपाल बढाउने गुणको हुन्छ ।

**(झ) शालिग्राम निघण्टु :**

**इंगुदोङ्गारवृक्षश्च तिक्तकस्तापसद्रुमः ।**

इंगुद, अङ्गारवृक्ष, तिक्तक र तापसद्रुम : यी चिउरीका नाम हुन् ।

**इंगुदी कफरक्तामग्रन्थिघ्नी स्याद् व्रणेहिता ।**
**ऐंगुदं स्वादु तिक्तं च स्निग्धोष्णं श्लेष्मवातजित्॥ (शो.नि.)**

चिउरी कफविकार, रक्तविकार, आमविकार र गाँठाका रोग नाशगर्ने तथा खटिरामा फाइदा गर्ने गुणको हुन्छ ।

**इंगुदी नामको वृक्षो मदगन्धिः कटुर्लघुः । तिक्तश्चोष्णः फेनिलश्च प्रोक्तश्चैव रसायनः ॥**
**कृमीन्वातं विषं शूलं श्वित्रं कुष्ठं व्रणं कफम् । ग्रहपीडां भूतबाधां नाशयदिति कीर्तितम्॥**
**अस्य पुष्पन्तु मधुरं स्निग्धं चोष्णं च तिक्तकम् ।**
**वातं कफं नाशयतीत्येवमाचार्य्यभाषितम्॥ (निघण्टु रत्नाकर)**

चिउरी मद्य जस्तो गनाउने, पिरो, पचाउन सहज, तितो, उष्णवीर्यको, फिँज निस्कने, रसायनी तथा कीरा, वातविकार, विषविकार, शूल, सेतोकुष्ठ, कुष्ठ, खटिरा, ग्रहबाधा र भूतबाधा नाशगर्ने गुणको हुन्छ । यसको फूल गुलियो, चिल्लो, उष्णवीर्यको र तीतो हुन्छ । यसले वातविकार र कफविकार नाश गर्दछ भनी आचार्यले बताएका छन् ।

**इंगुद्याः फलमज्जकोजलयुतो लेपे मुखे कान्तिदः । (वैद्यक निघण्टु)**

चिउरीको बीजको गुदी जलमा पिसेर अनुहारमा दल्नाले तेज बढ्दछ ।

**(ञ) सोढल निघण्टु :**

**इङ्गुद्यां पूतिपत्रा च तापसद्रुम उच्यते । तिक्तमज्जा कृशरको जलजन्तुविनाशकः॥**

इङ्गुदी, पूतिपत्रा, तापसद्रुम, तिक्तमज्जा, कृशरक र जलजन्तुविशनाक : यी चिउरीका पर्यायवाची नाम हुन्।

**(ट) सौश्रुत निघण्टु :**

**तापसवृक्षः कण्टकश्च प्रतिवर्णश्च शब्दितः । इङ्गुदोऽङ्गारकश्चैव तिक्तमज्जा च कीर्तिता॥**

तापसवृक्ष, कण्टक, प्रतिवर्ण, इङ्गुदी, अङ्गारक र तिक्तमज्जा : यी चिउरीका पर्यायवाची नाम हुन् ।



चिउरी (तस्बिर श्रोत : जडीबुटीसुखैंतडटव्लग्स्पटडटकम)

# इण्डारिका
# (Indaarikaa)

(क) **आयुर्वेद महोदधि :**

**वृष्या रोचकदीपिनी बलकरा गुर्वामभिष्यन्दिनी प्राणांस्तर्पणकारिणी रसवती श्लेष्माणमाबिभ्रती । घोरानाहविबन्धगुल्मशमनी पित्तास्रविच्छेदिनी स्नेहेनापि सुपूरिता च सततं भक्ष्येयमिण्डारिका ॥**

इण्डारिका नामक खानेकुरा रोचक, पाचकाग्नि बाल्ने, बलदायक, पचाउन कठिन, आम उत्पादन गर्ने, र श्रोत बहने नसा आदि थुनेर शरीर भारी बनाउने गुणको हुन्छ । यो रसिलो, जीवनदायी र कफवर्धक हुन्छ । यसले पेट ढुस्स फुलेको ठिक गर्दछ तथा वायु र मललाई आआफ्ना बाटामा हिँडाउँदछ । यसले पित्तरक्त नाश गर्दछ । यस्तो चिल्लो इण्डारिका पक्वान्न खान योग्य हुन्छ ।

## इन्दीवरा (बिचकाने लहरो)
## (Trellis-vine)

**परिभाषा :**

(क) **के.यन.स्वामी :** (१) इन्दीवरा : किचकन्नी दूधे लहरो । बोके लहरो । (२) युग्मफला : किचकन्नी दूधे लहरो । उटकटेरी । (३) दीर्घवृत्ता, उत्तमारणी, द्रोणि : किचकन्नी दूधे लहरो । (४) करम्भा : बिचकनी दूधे लहरो । (५) नलिका : किचकनी दूधे लहरो ।

(ख) **नेपाली बृहत् शब्दकोश :** (१) इन्दीवरा : औषधीमा प्रयोग हुने एक जडीबुटी; बोकेलहरो; अजशृङ्गी । (२) बोकेलहरो : एक जातको लहरोविशेष; बोके । (३) बोके : लाम्चा पात तथा पाँचवटा लामा र घुमेका केस्रा हुने, खैरा फूल फुल्ने, लाम्चा फल फल्ने र गनाउने लहरो वा त्यसैको फल ।

(ग) **डा.साङ्ग्रधर :** यो निश्चित गर्न नसकिएको विवादास्पद वनस्पति हो ।

(घ) **हिन्दी विश्वकोश :** (१) इन्दीवरा : इन्दीवरी । कुरिलो (नीलकमलका जस्ता फूल फुल्ने हुनाले) । भेडासिङ्गी । इन्द्रचिर्भटी । केरा । (२) उत्तमारणी : इन्दीवरा । इन्द्रचिर्भटी । जूही । इन्द्रवारुणी । (३) करम्भा : कुरिलो । दयाँलो । इन्दीवरा । (४) द्रोणी : नीर । इन्द्रचिर्भटी । नुनविशेष । केरा । (५) नलिका : करेमु । पुदिना । (६) पुष्पमञ्जरिका : इन्दीवर । नीलकमल । (इन्द्रवारुणी वा ऐरेलुका विषयमा बेग्लै जानकारी दिइएकोले यो उक्त वनस्पति होइन) ।

(ङ) **flowersofindia.net :** यो वेबसाइडमा Apocynaceae परिवारमा पर्ने *Pergularia daemia* वानस्पतिक नाम भएको विरुवालाई नलिका, उत्तमारणी आदि संस्कृत तथा बिच्कानी लहरो नेपाली नाम दिइएको छ ।



(च) **वैदिक वनस्पति कोश (भोलम १) :** उत्तमारणी भनेको *Pergularia daemia* (Forskal) Chiov. हो ।

(छ) **PLANT RESOURCES OF KAILALI, WEST NEPAL, Government of Nepal, 2016 :** *Pergularia daemia* (Forssk.) Chiov. वा *Asclepias daemia* Forssk. को नेपाली नाम बिचकानी लहरो हो ।

(ज) **TERAI FORESTS OF NEPAL, GOVERNMENT OF NEPAL, April 2014 :** यो Asclepiadaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Pergularia daemia* (Forssk) Chiov. हो । नेपालीमा यसलाई डुरे भनिन्छ ।

(झ) यसको अंग्रेजी नाम Trellis-vine हो ।

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **कैयदेव निघण्टु :**

**करम्भा कर्कशा द्रोणी दीर्घवृन्तोत्तमारणी । इन्दीवरा युग्मफला सुसोली नालिका मता ॥**
**उत्तमारणिका शीता कषाया व्रणशोधनी । जयेद् दद्रुमूत्रकृच्छ्रगर्भयोनिरुजानिलान् ॥**
**शाकमुत्तमवारुण्या उष्णवीर्यं सतिक्तकम् । अर्शःकुष्ठकृमिहरं कफवातविनाशनम् ॥**
**फलमुत्तमवारुण्याः सक्षारं दीपनं लघु । कटूष्णं तिक्तविशदं कफघ्नं पित्तकोपनम् ॥**

करम्भा, कर्कशा, द्रोणी, दीर्घवृन्ता, उत्तमारणी, इन्दीवरा, युग्मफला, सुसोली र नालिका : यी इन्दीवराका पर्यायवाची नाम हुन् । यो शीतवीर्यको, टर्रो, खटिरा सफा गर्ने तथा दाद, मूत्रकृच्छ्र, पाठेघरका रोग, स्त्री जननेन्द्रियका रोग र वातविकार नाश गर्ने गुणको हुन्छ । यसको साग उत्तम, उष्णवीर्यको, केही तितो तथा हर्सा, कुष्ठ, कीरा, कफविकार र वातविकार नाश गर्ने गुणको हुन्छ । यसको उत्तम फल केही क्षारयुक्त, दीपनी, पचाउन सहज, पिरो, उष्णवीर्यको, तितो, सुन्दर, कफविकार नाश गर्ने तथा पित्तविकारलाई उत्तेजित पार्ने गुणको हुन्छ ।

## (ख) मदनादि निघण्टु :

**इन्दीवरा युग्मफला दीर्घवृन्तेन्द्रवारुणी । पुष्पमञ्जरिका द्रोणी तथा कर्कशतानिकाः ॥**
**ज्वरघ्नी मूत्रकृच्छ्रघ्नी कषायव्रणरोपनी । गर्भघ्नी योनिदोषघ्नी वातघ्नी चात्रवारुणी ॥**

इन्दीवरा, युग्मफला, दीर्घवृन्ता, इन्द्रवारुणी, पुष्पमञ्जरिका, द्रोणी र कर्कशतानिका : यी इन्दीवराका पर्यायवाची नाम हुन् । यो जरो र मूत्रकृच्छ्र नाश गर्ने, टर्रो, खटिराको घाउ भर्ने, गर्भ नाश गर्ने तथा स्त्री-जननेन्द्रियका रोग र वातविकार नाश गर्ने गुणको हुन्छ ।

## (ग) राज निघण्टु :

**इन्दीवरा युग्मफला दीर्घवृत्तोत्तमारणी । पुष्पमञ्जरिका द्रोणी करम्भा नलिका च सा ॥**
**इन्दीवरा कटुः शीता पित्तश्लेष्मापहारिका । चक्षुष्या कासदोषघ्नी व्रणक्रिमिहरा परा ॥**



इन्दीवरा, युग्मफला, दीर्घवृत्ता, उत्तमारणी, पुष्पमञ्जरिका, द्रोणी, करम्भा र नलिका : यी इन्दीवराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, शीतवीर्यको, पित्तविकार र कफविकार नाशक, आँखाका लागि हितकर, खोकीजन्य असर नाशक तथा विशेषतः घाउखटिरा ठिक गर्ने र कीरा नाश गर्ने गुणको हुन्छ ।

## (घ) सौश्रुत निघण्टु :

**इन्दीवरश्च श्रेणी च पुष्पमञ्जरिकेति च । दीर्घवृन्तफला चैव तथा कर्कशशालिका ॥**

इन्दीवरा, श्रेणी, पुष्पमञ्जरी, दीर्घवृन्तफला र कर्कशशालिका : यी इन्दीवराका पर्यायवाची नाम हुन् ।

## इन्द्रगोप (खपटे कीरा, थोप्ले खपटे कीरा, वीरबहुटी)
## (Lady Beetles)

**(क) के.यन.स्वामी :**

(१) शक्रगोप : वीरबहुटी वा ओरिगँठि कीरो । (२) वर्षाभू, इन्द्रगोप : वीरबहुटी किरा वा अरिगँठि । (३) रक्तवर्ण : बीर बहुटी ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राजनिघण्टु :**

**शक्रगोपस्तु वर्षाभू रक्तवर्णेन्द्रगोपकौ ॥**

शक्रगोप, वर्षाभू, रक्तवर्ण र इन्द्रगोप : यी खपटे कीराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

यसका ४५० भन्दा बढी प्रजाति हुन्छन् । यसलाई अंग्रेजीमा Lady Beetles तथा ल्याटिन भाषामा *Coleoptera: Coccinellidae* भनिन्छ । यसलाई नेपालीमा थोप्ले खपटे कीरा नाम दिइएको पाइन्छ । मकै पाक्ने बेलामा देखिने एक खालको खपटे कीरालाई मकै कीरो वा लाटा भनिन्छ । आयुर्वेद लगायतका प्राचीन ग्रन्थमा यसको रङ्गीचङ्गी रूपलाई लिएर अनेक ठाउँमा उपमा दिइएको पाइन्छ । कतै कतै यसको ओखतीका कुरा पनि गरिएका छन् । यसका विभिन्न अंग्रेजी र ल्याटिन नाम हुन्छन् ।

## इन्द्रलुप्त (कपाल खुइलने रोग)
## (Alopecia, Morbid baldness of the head)

(क) **अष्टाङ्ग हृदय :**

**रोमकूपानुगं पित्तं वातेन सह मूर्च्छितम्॥ प्रच्यावयति रोमाणि ततः श्लेष्मा सशोणितः ।**
**रोमकूपान् रुणद्ध्यस्य तेनान्येषामसम्भवः॥ तदिन्द्रलुप्तं रुज्यां च प्राहुश्चाचेति चापरे ।**

रोमकूप वा कपालको जरामा गएको पित्त वायुसँगसँगै विकृत भई कपाललाई झार्दछ वा जरैदेखि उखेलिदिन्छ । यसपछि रगत मिसिएको कफ विकृत भई रोमकूपलाई अवरुद्ध बनाउँदछ । यसले गर्दा पुनः अरु कपाल उम्रन पाउँदैन । यस्तो विकार वा रोगलाई इन्द्रलुप्त, रुज्या वा चाच भनिन्छ ।

(ख) **राज निघण्टु :**

**...केशघ्नस्त्विन्द्रलुप्तकः॥**

कपाल खुइलने रोगलाई केशघ्न वा इन्द्रलुप्तक भनिन्छ ।

(ग) **सुश्रुत संहिता :**

**रोमकूपानुगं पित्तं वातेन सह मूर्च्छितम् । प्रच्यावयति रोमाणि ततः श्लेष्मा सशोणितः॥**
**रुणद्धि रोमकूपांस्तु ततोऽन्येषामसंभवः । तदिन्द्रलुप्तं खालित्यं रुज्येति च विभाव्यते॥**



रौंका जरा (रोमकूप) मा पुगेको पित्तविकारले वायुसँग मिलेर कपाललाई झार्दछ । त्यसपछि रगतसँग मिलेको कफविकारले रौं उम्रने प्वाल बन्द गरिदिन्छ । यसपछि पुनः कपाल उम्रदैन । यसैलाई इन्द्रलुप्त, खालित्य वा रुज्या रोग भनिन्छ ।

## इन्द्रवस्ति (शरीरको मर्मस्थलविशेष)
## (The calf of the leg)

(क) **अष्टाङ्ग हृदय :**

**जङ्घान्तरे त्विन्द्रवस्तिर्मारयत्यसृजः क्षयात्॥**

पिँडुल्लाको बीच भागमा (गोलिगाँठाभन्दा बाह्र अमल माथि) इन्द्रवस्ति नामक मर्मस्थल हुन्छ। यहाँ काटिए रगत बहेर मानिसको मृत्यु हुन्छ।

(ख) **सुश्रुत संहिता :**

**पार्ष्णिं प्रति जङ्घामध्ये इन्द्रबस्तिर्नाम, तत्र शोणितक्षयेण मरणं;**

पिडौँलामा गोलिगाँठातिर इन्द्रबस्ति नामक मर्मस्थल हुन्छ। त्यहाँ चोट लाग्नाले रगत बगी मृत्यु हुन्छ।

# इन्द्रवारुणां (ऐरेलु)
# (Colocynth)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : (१) गवाक्षी, चित्रा र गोडुम्बा तीतो बाटुलो काँक्रो विशेषका नाम हुन् । (२) इन्द्रवारुणी र विशाला ऐरेलुका नाम हुन् ।

(ख) के.यन.स्वामी : (१) गवाक्षी, गोडुम्बा, मृगादनी : ऐरेलु । (२) चित्रा, मृगाक्षी : मृगआँखे गोठाले काँक्रो । (३) आत्मरक्षा, इन्द्रवारुणी, महाफला : ठूलो जातको ऐरेलु । (४) विशाला, चित्रदेवी : इन्द्रायण । इन्द्रेनी लहरो । (५) ऐन्द्री : सानो जातको ऐरेलु । (६) गवादनी, त्रपुसी, वारुणी, वृषभाक्षी, वृषादनी, : ऐरेलु । (७) क्षुद्रफला : ऐरेलु, अतिसानो गोठाले काँक्रो ।

(ग) नेपाली बृहत् शब्दकोश (ऐरेलु) : जङ्गलमा पाइने एक प्रकारको तीतो काँक्रो ।

(घ) डा.चुनेकर : ऐरेलुलाई अंग्रेजीमा Colocynth (कलोसिन्थ्) तथा ल्याटिन भाषामा *Citrullus colocynthis* Schrad (सिट्रिलस कलसिन्थिस शार्ड) भनिन्छ । वानस्पतिक नाम *Cucumis trigonus,* Roxb.(कुकुमिस ट्रिगोनस रक्स्ब) भएको बोटलाई पनि ऐरेलु मान्ने गरिएको पाइन्छ । ठूलो ऐरेलुलाई ल्याटिन भाषामा *Trichosanthes palmata,* Roxb. ( ट्राइकोस्यान्थस पाल्माटा रक्स्ब) भनिन्छ ।

(ङ) विश्वनाथ द्विवेदी शास्त्री : सानो खालको ऐरेलुलाई ल्याटिन भाषामा *Cucumis Trigonus* ( कुकुमिस ट्रिगोनस) वा *Bryonia Scabrella* (ब्रायोनिया स्काब्रेला) भनिन्छ । पहेँलो फूल फुल्ने ठूलो ऐरेलुलाई भने ल्याटिन भाषामा *Citrullus Colocynthis* (सिट्रिलस कलसिन्थिस) वा *Cucumis Colocynthis* (कुकुमिज कलसिन्थिस) भनिन्छ । यसको लहरा तरबूजाको जस्तै हुन्छ । फल पनि लामा र गोला दुई थरीका हुन्छन् । पहेँलो फूल फुल्दछ । सेतो फूल फुल्ने ठूलो ऐरेलु पनि हुन्छ । यसका फल कागतीका जत्रा हुन्छन् । ऐरेलुको धुलोको नसले धेरै हाच्छिउँ आउँदछ ।

(च) आचार्य बालकृष्ण : यसको वानस्पतिक नाम *Citrullus colocynthis* (Linn.) Schrad. ( सिट्रिलस कलसिन्थिस लिन शार्ड)वा *Cucumis colocynthis* Linn (कुकुमिज कलसिन्थिस लिन) हो । यसलाई अंग्रेजीमा Colocynth (कलोसिन्थ्) वा Bitter apple (बिटर यापल) भनिन्छ । सानो, ठूलो र जङ्गली गरी यसका तीन जात हुन्छन् ।

(छ) डा.साङ्खचधर : सानो जातको ऐरेलुको *Citrullus colocynthis* Schrad. (सिट्रिलस कलसिन्थिस शार्ड) तथा ठूलो जातको ऐरेलुको वानस्पतिक नाम *Cucumis trigonus* Roxb. (कुकुमिस ट्रिगोनस रक्स्ब) हो । यस बाहेक ठूलो जातको ऐरेलु भनी *Cucumis prophetarum* Linn. (कुकुमिस प्रफिटेरम लिन) र *Trichosanthes palmata* Roxb. (ट्राइकोस्यान्थस पाल्माटा रक्स्ब) लाई पनि प्रयोग गरिरहेको पाइन्छ । यसलाई हिन्दीमा इनारुन र नेपालीमा इन्द्राणी भनिन्छ ।

(ज) द आयुर्वेदिक फर्माकोपिया अफ इण्डिया, भोलम २ र ३ : इन्द्रवारुणीको वानस्पतिक नाम *Citrullus colocynthis* Schrad. (सिट्रिलस कलसिन्थिस शार्ड) यो Cucurbitaceae (कुकरबिटेइसी) परिवारमा पर्दछ । यसको जराको धुलो १-३ ग्रामसम्म ओखतीका लागि प्रयोग हुन्छ । यसको पात बाहिरि रोगका लागि मात्र प्रयोग हुन्छ । यसको फलको धुलो ०.१२५-०.५ ग्राम वा ०.२५-०.५ ग्रामसम्म ओखतीमा प्रयोग हुन्छ ।

(झ) पेयर डां अमरकोश : सानो जातको ऐरेलुको वानस्पांतक नाम *Cucumis maderaspatanus* L. (कुकुमिस मेडरसप्याडनस लिन) तथा ठूलो जातको ऐरेलुको वानस्पतिक नाम *Citrullus colocynthis* (L.) Schrad. (सिट्रिलस कलसिन्थिस लिन शार्ड) हो । ठूलो जातको ऐरेलुलाई अंग्रेजीमा Bitter-Melone (बिटर मेलन) वा Bitter Apple (बिटर यापल) भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अभिधान मञ्जरी :**

**विशाला वारुणी चेन्द्रवारुणी सुरवारुणी । गवादिनी गवाक्ष्यैन्द्री वृक्षाक्षी च वृषादनी ॥**

विशाला, वारुणी, इन्द्रवारुणी, सुरवारुणी, गवादिनी, गवाक्षी, ऐन्द्री, वृक्षाक्षी र वृषादनी : यी ऐरेलुका नाम हुन् ।

**महाफलाऽन्या गजचिद्भिटा स्यान्मृगादिनी चित्रफलाऽत्मरक्षा ।**
**वसा मृगाक्षी त्रपुषा विशाला गजाह्वदन्ती सितपुष्पिकेति ॥**

महाफला, गजचिद्भिटा, मृगादिनी, चित्रफला, आत्मरक्षा, वसा, मृगाक्षी, त्रपुषा, विशाला, गजाह्वदन्ती र सितपुष्पिका : यी ठूलो जातको ऐरेलुका नाम हुन् ।

(ख) **अभिधान रत्नमाला :**

**गवादनी मृगोर्वारुर्गवाक्षी गजचिर्भिटा । विशाला च विशल्या च वारुणी शक्रवारुणी ॥**

गवादनी, मृगोर्वारु, गवाक्षी, गजचिर्भिटा, विशाला, विशल्या, वारुणी र शक्रवारुणी : यी ऐरेलुका नाम हुन् ।

(ग) **अमरकोश :**

**चित्रा गवाक्षी गोडुम्बा विशाला त्विन्द्रवारुणी ॥**

(१) तीतो बाटुलो काँक्रो विशेष : गवाक्षी, गोडुम्बा र चित्रा । (२) ऐरेलु : इन्द्रवारुणी र विशाला ।

(घ) **अष्टाङ्ग निघण्टु :**

**इन्द्रवारुणिका चैन्द्री गवाक्षी गजचिर्भिटी ॥ विशाला च विशल्या च सैव प्रोक्ता गवादनी ।**

इन्द्रवारुणिका, ऐन्द्री, गवाक्षी, गजचिर्भिटी, विशाला, विशल्या र गवादनी : यी ऐरेलुका नाम हुन् ।

(ङ) **कैयदेव निघण्टु :**

**ऐन्द्री त्विन्द्रसुरेन्द्राह्वा गवाक्षी सुरवारिणी ॥ ऐन्द्रिर्वारु क्षुद्रफला वृषभाक्षी वृषादनी ।**
**मृगभक्षा मृगैर्वारुः विशाला चेन्द्रवारुणी ॥ आत्मरक्षा चित्रफला चित्रदेवी महाफला ।**
**स्थाणुकर्णी धनुःश्रेणी त्रपुसी गजचिर्भटी ॥ गवादनी हस्तिदन्ती सूर्पाह्वा मरुसम्भवा ।**
**ऐन्द्री तिक्ता कटुर्लघ्वी कटुपाका विरेचनी ॥ उष्णवीर्या हरेत् पित्तं कफमेहव्रणकृमीन् ।**

**श्वासकासापचांकुष्ठप्लीहानाहगरोदरम्॥ कामलामूढगर्भाश्मग्रान्थिगण्डामयं विषम्।**

ऐन्द्रि, इन्द्र, सुरेन्द्राह्वा, गवाक्षी, सुरवारिणी, ऐन्द्रिर्वारु, क्षुद्रफला, वृषभाक्षी, वृषादनी, मृगभक्षा, मृगैर्वारु, विशाला, इन्द्रवारुणी, आत्मरक्षा, चित्रफला, चित्रदेवी, महाफला, स्थाणुकर्णी, धनुश्रेणी, त्रपुसी, गजचिर्भटी, गवादनी, हस्तिदन्ती, सूर्पा(?)ह्वा र मरुसम्भवा : यी ऐरेलुका नाम हुन्। यो तीतो, पिरो, पचाउन सहज, पचेपछि पिरो, रेचनी, उष्णवीर्यको तथा पित्तविकार, कफविकार, प्रमेह, घाउखटिरा, कीरा, दम, खोकी, अपची, कुष्ठ, फियोका रोग, आनाह, विषविकार, कमलपित्त, मूढगर्भ, पत्थरी, ग्रन्थिगाँड र विषविकार नाशगर्ने गुणको हुन्छ।

## (च) धन्वन्तरि निघण्टु :

**ऐन्द्रीन्द्रवारुणीन्द्राह्वाऽथेन्द्रवारुर्मृगादनी। गवादनी क्षुद्रफला वृषभाक्षी गवाक्ष्यपि॥**
**इन्द्रवारुणिकाऽत्युष्णा रेचनी कटुका तथा। कृमिश्लेष्मव्रणान् हन्ति हन्ति सर्वोदराण्यपि॥**

ऐन्द्री, इन्द्रवारुणी, इन्द्र र यसका पर्याय, इन्द्रवारु, मृगादनी, गवादनी, क्षुद्रफला, वृषभाक्षी र गवाक्षी : यी ऐरेलुका नाम हुन्। यो अति उष्णवीर्यको, रेचनी, पिरो तथा कीरा, कफविकार, घाउखटिरा र सबैखालका पेटका रोग नाशक हुन्छ।

**अन्येन्द्रवारुणी प्रोक्ता विशाला च महाफला। आत्मरक्षा चित्रफला त्रपुसी त्रपुसा च सा॥**
**इन्द्रवारुद्वयं तिक्तं कटु पाके रसे लघु। वीर्योष्णं कामलापित्तकफश्लीपदनाशनम्॥**

इन्द्रवारुणी, विशाला, महाफला, आत्मरक्षा, चित्रफला, त्रपुसी र त्रपुसा : यी ठूलो खालको ऐरेलुका नाम हुन्। दुवै खालका ऐरेलु तीता, पचेपछि पिरा, पचाउन सहज, उष्णवीर्यका, तथा कमलपित्त, पित्तविकार, कफविकार र हात्तीपाइले रोग नाशगर्ने गुणका हुन्छन्।



**श्वेतपुष्पी मृगाक्षी च मृगैर्वारुर्मृगादनी। हस्तिदन्ती नागदन्ती वारुणी गजचिर्भटा॥**
**कण्ठरोगापचीश्वासकासप्लीहकफोदरान्। मूढगर्भं च हरति कुष्ठदुष्टव्रणाञ्जेत्॥**

श्वेतपुष्पी, मृगाक्षी, मृगेर्वारु, मृगादनी, हस्तिदन्ती, नागदन्ती, वारुणी र गजचिर्भटा : यी ऐरेलुविशेषका नाम हुन्। यो घाँटीका रोग, अपची, दम, खोकी, फियोका रोग, कफविकार, पेटका रोग, मूढगर्भ, कुष्ठ र खराब घाउखटिरा नाशक हुन्छ।

## (छ) निघण्टु रत्नाकर (शा.नि.)

**लघ्वीन्द्रवारुणी प्रोक्ता पाके कट्वी च तिक्तका। शीतासरोष्णवीर्या च लघ्वी चैव प्रकीर्तिता॥**
**गुल्मपित्तोदरकफकृमिकुष्ठज्वरव्रणान्। श्वासकासग्रन्थिमेहमूढगर्भककामलाः॥**
**प्लीहानंशुष्कगर्भञ्च गलगण्डं विषं तथा। आनाहं वातमपि च चामं दुष्टोदरं तथा॥**
**सर्वोदराणि पाण्डुञ्च नाशयेदिति कीर्त्तिता।**

ऐरेलु पचाउन सहज, पचेपछि पिरो र तीतो, शीतवीर्यको, मलमूत्रलाई तलतिर सार्ने, उष्णवीर्यको (?) र पचाउन सहज हुन्छ। यसले गुल्म, पित्तविकार, पेटका रोग, कफविकार, कीरा, कुष्ठ, जरो, घाउखटिरा, दम, खोकी, गाँठा, प्रमेह, मूढगर्भ, कामला, फियोका रोग, शुष्कगर्भ, गलगण्ड,

विषविकार, आनाह, वातविकार, आमविकार, पेटका खराबी, पेटका सबै रोग र पाण्डु नाशगर्ने गुण बोक्दछ भनिएको छ ।

(ज) **निघण्टुशेष :**

**स्यादिन्द्रवारुण्यां चैन्द्री विषादनी गवादनी ॥ इन्द्रैर्वारुः क्षुद्रफला गोडुम्बा च गवाक्ष्यपि ।**

इन्द्रवारुणी, ऐन्द्री, विषादनी, गवादनी, इन्द्रैर्वारु, क्षुद्रफला, गोडूम्बा र गवाक्षी : यी ऐरेलुका नाम हुन् ।

**द्वितीयेन्द्रवारुण्यां तु चित्रफला महाफला ॥ आत्मरक्षा विशाला च त्रपुसी तुम्बसीत्यपि ।**

इन्द्रवारुणी, चित्रफला, महाफला, आत्मरक्षा, शिला, त्रपुसी र तुम्बसी : यी अर्को थरी ऐरेलुका नाम हुन् ।

(झ) **पर्यायरत्नमाला :**

**ऐन्द्रीन्द्रवारुणी चित्रा गवाक्षी गजचिर्भटा । मृगेर्वारुः पिटङ्कोटी विशाला च मृगादनी ॥**

ऐन्द्री, इन्द्रवारुणी, चित्रा, गवाक्षी, गजचिर्भटा, मृगेर्वारु, पिटङ्कोटी, विशाला र मृगादनी : यी ऐरेलुका नाम हुन् ।

(ञ) **भावप्रकाश निघण्टु :** 

**ऐन्द्रीन्द्रवारुणी चित्रा गवाक्षी च गवादनी । वारुणी च पराऽप्युक्ता सा विशाला महाफला ॥**
**श्वेतपुष्पा मृगाक्षी च मृगैर्वारुर्मृगादनी । गवादनीद्वयं तिक्तं पाके कटु सरं लघु ॥**
**वीर्योष्णं कामलापित्तकफप्लीहोदरापहम् । श्वासकासापहं कुष्ठगुल्मग्रन्थिव्रणप्रणुत् ॥**
**प्रमेहमूढगर्भामगण्डामयविषापहम् ।**

ऐन्द्री, इन्द्रावारुणी, चित्रा, गवाक्षी, गवादनी र वारुणी : यी ऐरेलुका नाम हुन् । विशाला, महाफला, श्वेतपुष्पा, मृगाक्षी, मृगैर्वारु र मृगादनी : यी ठूलो जातको ऐरेलुका नाम हुन् । दुवै शुरुमा तीता र पचेपछि पिरा हुन्छन् । यी मलमूत्र खुलाउने, पचाउन सहज र गर्मी गर्ने गुणका हुन्छन् । यिनले कमलपित्त, पित्तविकार, कफविकार, फियोका रोग, पेटका रोग, दम, खोकी, कुष्ठ, गुल्म, गाँठे रोग, खटिरा, प्रमेह, मूढगर्भ, आमविकार, गण्डरोग र विषविकार नाश गर्दछन् ।

(ट) **मदनपाल निघण्टु :**

**इन्द्रवारुण्यथेन्द्राह्वं वृषभाक्षी गवादिनी । ऐन्द्रवारु क्षुद्रफला विशालेन्द्री वृषादनी ॥**

इन्द्रवारुणी, इन्द्राह्व, वृषभाक्षी, गवादिनी, ऐन्द्रवारु, क्षुद्रफला, विशाला, ऐन्द्री र वृषादनी ठूलो जातको ऐरेलुका नाम हुन् ।

**अन्येन्द्रवारुणी चित्राफला चित्रामहाफला । आत्मरक्षा नागदन्ती त्रपुषी गजचिर्भटी ॥**
**श्वेतपुष्पी मृगाक्षी च तथा पक्षसुरा मता । मरुद्भवा कृमिगुहा चित्रदेवी च कीर्तिता ॥**

**ऐन्द्रवारुद्वयं तिक्तं कटु पाके सरं लघु । वीर्योष्णं कामलापित्तकफप्लीहोदरापहम् ॥**

अन्येन्द्रवारुणी, चित्राफला, चित्रामहाफला, आत्मरक्षा, नागदन्ती, त्रपुषी गजचिर्भटी, श्वेतपुष्पी, मृगाक्षी, पक्षसुरा, मरुद्भवा, कृमिगुहा र चित्रदेवी : यी इन्द्रवारुणी विशषका नाम हुन् । यी दुवै इन्द्रवारुणीमा तितो, पिरो, पचपछि दिसापिसाब खुलाउने, पचाउन हलुका, गर्मी गर्ने, कमलपित्त-पित्तविकार-कफविकार-फियोका रोग र पेटका रोग नाश गर्ने गुण हुन्छन् ।

**यवतिक्तोद्भवं तैलमीषत्तिक्तं रसायनम् । दीपनं लेखनं मेध्यं पथ्यं दोषत्रयापहम् ॥**

ऐरेलुविशेषको तेल केही तीतो, रसायनी, दीपनी, लेखनी, बुद्धिवर्धक, पथ्य र त्रिदोष नाशक हुन्छ ।

(ठ) **मदनादि निघण्टु :**

**विशाला च मृगेर्वारुर्गवाक्षी गजचिर्भिटी । गवादनी स्थूलफला मृगभक्षेन्द्रवारुणी ॥**

विशाला, मृगेर्वारु, गवाक्षी, गजचिर्भिटी, गवादनी, स्थूलफला, मृगभक्ष र इन्द्रवारुणी : यी ऐरेलुका नाम हुन् ।

**विशालाऽन्याचित्रफला त्रपुसी मरुसम्भवा । इन्द्रवारुर्हस्तिदन्ताचित्रा देवी महाफला ॥**
**कफपित्तहरा लघ्वी तिक्ता कट्वी विपाकतः । कामला पाण्डुशमनी विज्ञेया सुरवारिणी ॥**

विशाला, चित्रफला, त्रपुसी, मरुसम्भवा, इन्द्रवारु, हस्तिदन्ता, चित्रा, देवी र महाफला : यी अर्को थरी ऐरेलुका नाम हुन् । ऐरेलु (सुरवारिणी) कफविकार र पित्तविकार नाशक, पचाउन सहज, तीतो, पचेपछि पिरो तथा कमलपित्त, पाण्डु शान्त पार्ने गुणको हुन्छ ।

(ड) **राजनिघण्टु :**

**ऐन्द्रीन्द्रवारुण्यरुणा मृगादनी गवादनी क्षुद्रसहेन्द्रचिर्भिटा ।**
**सूर्य्या विषघ्नी गुणकर्णिकाऽमरा माता सुवर्णा सुफला च तारका ॥**
**वृषभाक्षी गवाक्षी च पीतपुष्पीन्द्रवल्लरी । हेमपुष्पी क्षुद्रफला वारुणी बालकप्रिया ॥**
**रक्तेर्वारुविषलता शक्रवल्ली विषापहा । अमृता विषवल्ली च ज्ञेयोनत्रिंशदाह्वया ॥**
**इन्द्रवारुणिका तिक्ता कटुः शीता च रेचनी । गुल्मपित्तोदरश्लेष्मक्रिमिकुष्ठज्वरापहा ॥**

(१) ऐन्द्री, (२) इन्द्रवारुणी, (३) अरुणा, (४) मृगादनी, (५) गवादनी, (६) क्षुद्रसहा, (७) इन्द्रचिर्भिटा, (८) सूर्या, (९) विषघ्नी, (१०) गुणकर्णिका, (११) अमरा, (१२) माता, (१३) सुवर्णा, (१४) सुफला, (१५) तारका, (१६) वृषभाक्षी, (१७) गवाक्षी, (१८) पीतपुष्पी, (१९) इन्द्रवल्लरी, (२०) हेमपुष्पी, (२१) क्षुद्रफला, (२२) वारुणी, (२३) बालकप्रिया, (२४) रक्तेर्वारु, (२५) विषलता, (२६) शक्रवल्ली, (२७) विषापहा, (२८) अमृता र (२९) विषवल्ली : यी उनन्तीस नाम ऐरेलुका नाम हुन् । यो तीतो, पिरो, शीतवीर्य भएको र रेचनी हुन्छ । यसले गुल्म, पित्तविकार, पेटका रोग, कफविकार, कीरा, कुष्ठ र जरो नाश गर्दछ ।

**महेन्द्रवारुणी रम्या चित्रवल्ली महाफला । सा माहेन्द्री चित्रफला त्रपुसी त्रपुसा च सा ॥**
**आत्मरक्षा विशाला च दीर्घवल्ली बृहत्फला । स्याद्बृहद्वारुणी सौम्या नामान्यस्याश्चतुर्दश ॥**

**महेन्द्रवारुणी ज्ञेया पूर्वोक्तगुणभागिनी । रसे वीर्ये विपाके च किञ्चिदेषा गुणाधिका॥**

(१) महेन्द्रवारुणी, (२) रम्या, (३) चित्रवल्ली, (४) महाफला, (५) माहेन्द्री, (६) चित्रफला, (७) त्रपुसी, (८) त्रपुसा, (९) आत्मरक्षा, (१०) विशाला, (११) दीर्घवल्ली, (१२) बृहत्फला, (१३) बृहद्वारुणी र (१४) सौम्या : यी चौध नाम ठूलो जातको ऐरेलुका नाम हुन् । यसका गुण पहिले बताइएको ऐरेलुका जस्तै हुन्छन् तर रस, वीर्य र पचेपछिको रसको गुण यसमा केही बढी हुन्छ ।

**(ढ) राजवल्लभ निघण्टु :**

**विशाला कफवातघ्नी चक्षुष्या मूत्रकृच्छ्रजित्॥**

इन्द्रवारुणी कफविकार र वातविकार नाशगर्ने, आँखाका लागि हितकर तथा मूत्रकृच्छ्र रोगलाई जित्ने गुणको हुन्छ ।

**(ण) शालिग्राम निघण्टु :**

**इन्द्रवारुणिका चित्रा विशाला गजचिर्भिटा । मृगेर्वारुः क्षुद्रसहा चित्रफलेन्द्रवारुणी॥**

इन्द्रवारुणिका, चित्रा, विशाला, गजचिर्भिटा, मृगेर्वारु, क्षुद्रसहा, पचत्रफला र इन्द्रवारुणी : यी ऐरेलुका नाम हुन् ।

**महेन्द्रवारुणीका या विशाला च महाफला । आत्मरक्षा चित्रफला तुंवसी त्रपुसी तथा॥**

महेन्द्रवारुणीका, विशाला, महाफला, आत्मरक्षा, चित्रफला, तुंवसी र त्रपुसी : यी अर्को थरी ऐरेलुका नाम हुन् ।

**(त) सरस्वती निघण्टु :**

**चित्रा विशाला गोडुम्बा मृगेर्वारुकिणी तथा । इन्द्रवारुणिका चित्रफला चोक्ता वृषादनी॥**

चित्रा, विशाला, गोडुम्बा, मृगेर्वारुकिणी, इन्द्रवारुणिका, चित्रफला र वृषादनी : यी ऐरेलुका नाम हुन् ।

**त्रपुषं मूलकं तिक्ता तिक्तत्रपुषा गजचिर्भटी । चित्रा विशाला त्रपुषी विशल्या चेन्द्रवारुणी॥**

त्रपुष, मूलक, तिक्ता, तिक्तत्रपुषा, गजचिर्भटी, त्रिचा, विशाला, त्रपुषी र इन्द्रवारुणी : यी अर्को थरी ऐरेलुका नाम हुन् ।

**(थ) सोढल निघण्टु :**

**इन्द्रवारुण्यामिन्द्राह्वा मृगैर्वारुर्मृगादनी॥ काकादनी कटुफला वृषभाक्षी गवाक्ष्यपि ।
यक्षसुरा विषघ्नी च कृमिहृद् बालकप्रिया॥ शूर्पा चित्रा बहुश्रेणी कण्टकोटी नृपा स्मृता ।**

इन्द्रवारुणी, इन्द्राह्वा, मृगेर्वारु, मृगादनी, काकादनी, कटुफला, वृषभाक्षी, गवाक्षी, यक्षसुरा, विषघ्नी, कृमिहृद्, बालकप्रिया, शूर्पा, चित्रा, बहुश्रेणी, कण्टकोटी र नृपा : यी ऐरेलुका नाम हुन् ।

**महेन्द्रवारुणिकायां विशाला च महाफला॥**
**आत्मरक्षा चित्रफला तुम्बसी त्रपुषी तथा । श्वेतपुष्पा मृगाक्षी च मृगैर्वारुर्मृगादनी॥**
**हस्तिदन्ती कटुरसा कपिला क्षीरकप्रिया । कुम्भसी चित्रवेदी च वारणी गजचिर्भटा॥**

महेन्द्रवारुणि, विशाला, महाफला, आत्मरक्षा, चित्रफला, तुम्बसी, त्रपुषी, श्वेतपुष्पा, मृगाक्षी, मृगैर्वारु, मृगादनी, हस्तिदन्ती, कटुरसा, कपिला, क्षीरकप्रिया, कुम्भसी, चित्रवेदी, वारणी र गजचिर्भटा : यी अर्को थरी ऐरेलुका नाम हुन् ।

(द) **सौश्रुत निघण्टु :**

**मृगादनी विशाला च मृगेर्वारुकिनीति च । इन्द्रवारुण्यमरिका तथा चित्रफलेति च॥**

मृगादनी, विशाला, मृगेर्वारुकिनी, इन्द्रवारुणी, अमरिका र चित्रफला : यी ऐरेलुका नाम हुन् ।

(ध) **हृदयदीपक निघण्टु :**

**ऐन्द्री त्विन्द्रसुरा चित्रा गवाक्षी सुरवारुणी । स्यादिन्द्रवारुणी चान्या विशाला गजचिर्भटी॥**

ऐन्द्री, इन्द्रसुरा, चित्रा, गवाक्षी, सुरवारुणी र इन्द्रवारुणी : यी ऐरेलुका तथा विशाला र गजचिर्भटी : यी अर्को थरी ऐरेलुका नाम हुन् ।



Cucumis maderaspatanus L., payer.de/amarakosa, Dinesh Walke.



*Cucumis prophetarum* Linn., powo.science.kew.org.



गवाक्षी । चित्रा । Cucumis maderaspatanus L., payer.de/amarakosa, Dinesh Walke.



ကျီးအာ

Trichosanthes palmata Roxb.



Cucumis trigonus Roxb., indiabiodiversity.org, Muthu Karthick.



इन्द्रवारुणी । *Citrullus colocynthis* (L.) Schrad., payer.de/amarakosa




विशाला । *Citrullus colocynthis* (L.) Schrad., payer.de/amarakosa




*Citrullus colocynthis* (L.) Schrad., payer.de/amarakosa




*Citrullus colocynthis* (L.) Schrad., payer.de/amarakosa

# इन्द्रवृद्धा रोग
# (A kind of abscess)

(क) **सुश्रुत संहिता :**

**पद्मपुष्करवन्मध्ये पिडकाभिः समाचिताम् । इन्द्रवृद्धां तु तां विद्याद्वातपित्तोत्थितां भिषक् ॥**

कमलको बीजकोष जस्तो ससाना फोकाले व्यापक भएर ढाक्ने वातविकार पित्तविकारका कारण हुने पिलोलाई इन्द्रवृद्धा भनिन्छ ।

# इन्द्रिय
# (Senses or Organs)

**परिभाषा :**

**(क) नेपाली बृहत् शब्दकोश :**

इन्द्रिय : ज्ञानशक्ति र कर्मशक्तिका मानवीय अङ्ग वा साधन; पाँच ज्ञानेन्द्रिय (आँखा, कान, नाक, जिब्रो र छाला) र पाँच कर्मेन्द्रिय (वाक्, पाणि, पाद, वायु र उपस्थ)-का सामूहिक वा अलग-अलग नाम । इन्द्रियगोचर : इन्द्रियको विषय; इन्द्रियद्वारा संवेदन गर्न सकिने; इन्द्रियग्राह्य । इन्द्रियग्राम : पाँच ज्ञानेन्द्रिय र पाँच कर्मेन्द्रियको समूह । इन्द्रियजित् : इन्द्रियको दमन गर्न सक्ने; जितेन्द्रिय । इन्द्रियनिग्रह : इन्द्रियलाई वशमा राख्ने काम । इन्द्रिसंवेद्य : इन्द्रियद्वारा छिटै ग्रहण गरिने । इन्द्रियातीत : इन्द्रियद्वारा ज्ञान गर्न नसकिने; अगोचर । इन्द्रियार्थवाद : इन्द्रियहरूको अनुभूतिद्वारा नै सबै किसिमको ज्ञान प्राप्त हुन्छ भन्ने दार्शनिक सिद्धान्त; इन्द्रियद्वारा सुखभोग गर्ने काम ।

**(ख)** इन्द्रियलाई अंग्रेजीमा Organs of motor action and sensory perception भन्दा उपयुक्त हुन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अमरकोश :**



**...विषयाः ।**
**गोचरा इन्द्रियार्थाश्च हृषीकं विषयीन्द्रियम् । कर्मेन्द्रियं तु पाय्वादि मनोनेत्रादि धीन्द्रियम्॥**

विषय, गोचर र इन्द्रियार्थ : यी रूपप्रभृति इन्द्रियग्राह्य वस्तुका नाम हुन् । हृषीक, विषयिन्, इन्द्रिय : यी आँखा आदि इन्द्रियका नाम हुन् । पायु आदि पाँच (पायु, उपस्थ, वाक्, पाणि र पाद) लाई कर्मेन्द्रिय भनिन्छ । मन, आँखा, कान, नाक, जिभ्रो र छाला : यी पाँच कर्मेन्द्रिय कहिन्छन् । मन कर्मेन्द्रिय पनि हो । आँखा आदि पाँच ज्ञानेन्द्रिय र मनलाई समेत भन्नुपर्दा धीन्द्रिय भनिन्छ । करण, धातु, अक्ष र स्रोतस् शब्दले इन्द्रियलाई पनि बुझाउँदछ । इन्द्रियले ग्रहण गरिएको वस्तुलाई प्रत्यक्ष वा ऐन्द्रियक तथा इन्द्रियले ग्रहण गर्न नसक्ने वस्तुलाई अप्रत्यक्ष वा अतीन्द्रिय भनिन्छ । इन्द्रियलाई स्थिर गर्ने ध्यान आदि उपायलाई विवध वा वीवध भनिन्छ ।

**(ख) राज निघण्टु :**

**श्रोत्रं त्वग्रसना नेत्रं नासा चेत्यक्षपञ्चकम्॥**

कान, छाला, जिभ्रो, आँखा र नाक : यी पाँच ज्ञानेन्द्रियका नाम हुन् ।

**अक्षं हृषीकं करणं बर्हणं विषयीन्द्रियम्॥**

अक्ष, हृषीक, करण, बर्हण, विषयी र इन्द्रिय : यी ज्ञानेन्द्रिय र कर्मेन्द्रिय दुवैलाई बुझाउने संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शब्दः स्पर्शो रसो रूपं गन्धश्च विषया अमी । इन्द्रियार्था गोचरास्ते पञ्चभूतगुणाः खलु ॥**

शब्द, स्पर्श, रस, रूप र गन्ध : यी इन्द्रियका विषयहरू हुन् । इन्द्रियार्थ, गोचर र पञ्चभूतगुणा : यी इन्द्रियका विषयहरूको सामूहिक नाम हुन् ।

(ग) **शार्ङ्गधर संहिता :**

**तस्मात्सत्त्वरजोयुक्तादिन्द्रियाणि दशाभवन् । मनश्च जातन्तान्याहुः श्रोत्रत्वङ्नयनन्तथा ॥**
**जिह्वाघ्राणवचोहस्तपादोपस्थगुदानि च । पञ्च बुद्धीन्द्रियाण्याहुः प्राक्तनानीतराणि च ॥**
**कर्मेन्द्रियाणि पञ्चैव कथ्यन्ते सूक्ष्मबुद्धिभिः ।**

राजसी अहङ्कारको सहयोगमा तामसी अहङ्कारसँग मिसिएर सात्विक अहङ्कारबाट कान, छाला, आँखा, जिभ्रो, नाक, बोली, हात, गोडा, मलद्वार, मूत्रद्वार र मन गरी एघार इन्द्रियहरू जन्मिए । यसमा शुरुका छाला आदि ज्ञानेन्द्रिय हुन् किन भने यी बुद्धिको आश्रयमा हुने गर्दछन् । बाँकी पाँचलाई कर्मेन्द्रिय भनिन्छ किन कि यी कर्मको आश्रयमा रहन्छन् । यी दुवै तथा बुद्धि र कर्म समाहित भएको मन हुन्छ ।

**बुद्धीन्द्रियाणां पञ्चैव शब्दाद्या विषया मताः ॥**
**कर्मेन्द्रियाणां विषया भाषादानविहारिताः । आनन्दोत्सर्गकौ चैव कथितास्तत्त्वदर्शिभिः ॥**

कान, छाला, आँखा, जिभ्रो र नाक यी पाँच बुद्धीन्द्रिय हुन् र यिनका शब्द, स्पर्श, रूप, रस र गन्ध यी क्रमैले विषय हुन् । यसैगरी मुख, हात, गोडा, जननेन्द्रिय र मलद्वार यी पाँच कर्मेन्द्रिय हुन् र यिनका बोली, लेनदेन, घुमफिर, आनन्द ग्रहण, मल उत्सर्जन यी पाँच क्रमैले विषय हुन् ।



**महानहङ्कृतिः पञ्चतन्मात्राणि पृथक्पृथक् ।**

महतत्व, अहङ्कार र पञ्च तन्मात्रा यी सात इन्द्रिय आदिका कारण हुन् ।

(घ) **काश्यप संहिता :**

**समुदयकारणं तु ब्रूमः- अव्यक्तान् महान्, महतोऽहङ्कारः; अहङ्कारात् खादीनि, ता अष्टौ भूतप्रकृतयः । चक्षुः श्रोत्रं घ्राणं रसनं स्पर्शनमिति पञ्चेन्द्रियाणि, तान्येव बुद्धीन्द्रियाणि; हस्तौ पादौ जिह्वा गुद उपस्थ इति पञ्च कर्मेन्द्रियाणि; शब्दस्पर्शरसरूपगन्धाः पञ्चेन्द्रियार्थाः; अतीन्द्रियं तु मनः; इत्येते षोडश विकाराः महदादि सर्वं क्षेत्रमव्यक्तमाचक्षते, क्षेत्रज्ञं तु शाश्वतमचिन्त्यमात्मानम् । अस्य लिङ्गानिचेतनाहङ्कारप्राणापानोन्मेषनिमेषसुखदुःखेच्छाद्वेषस्मृतिधृतिबुद्धयः; तदभावे मृताख्या । शरीरेन्द्रियात्मसत्त्वसमुदयं पुरुषमाचक्षते, आत्मानमेके । ज्ञानस्याभावो भावश्च मनसो लक्षणं, तस्यैकत्वमणुत्वं च द्वौ गुणौ, प्रयत्नज्ञानायौगपद्यादेकं, पृथक् । समनस्कमिन्द्रियमर्थग्रहणसमर्थं भवति ।**

अम म सृष्टिक्रमका बारेमा बताउँदछु । मूलप्रकृतिबाट बुद्धितत्व उत्पन्न हुन्छ । बुद्धितत्वबाट अहङ्कार उत्पन्न हुन्छ । अहङ्कारबाट आकाश आदि गरिएका पाँच तन्मात्रा उत्पन्न हुन्छ । ती भूतप्रकृति आठ प्रकारका हुन्छन् । आँखा, कान, नाक, जिभ्रो र छाला : यी पाँच इन्द्रियहरू हुन् । यिनैलाई

बुद्धीन्द्रियहरू (ज्ञानेन्द्रियहरू) भनिन्छ । दुई हात, दुई गोडा, जिब्रो, मलद्वार र जननेन्द्रिय : यी पाँच कर्मेन्द्रिय हुन् । शब्द, स्पर्श, रस, रूप र गन्ध : यी पाँच इन्द्रियका विषय हुन् । इन्द्रियको विषयभन्दा पर मन हुन्छ । यी (ज्ञानेन्द्रिय, कर्मेन्द्रिय, तिनको विषय र मन) सोह्र विकारहरू हुन् । बुद्धितत्व आदि सबै अव्यक्त कुरालाई क्षेत्र भनिन्छ । स्थायी र चिन्तन वा अनुमान लगाउन नसकिने आत्मालाई क्षेत्रज्ञ भनिन्छ । यस (आत्मा) का लक्षण चेतना, अहङ्कार, प्राण (हावा तान्ने), अपान (हावा छाड्ने), उन्मेष (आँखा खोल्नु), निमेष (आँखा बन्द गर्नु), सुख, दुःख, इच्छा, द्वेष, स्मृति (सम्झनु), धृति ( धैर्य गर्नु), बुद्धि आदि हुन् । यी लक्षण नहुँदाका अवस्थामा (शरीरलाई) मरेको मानिन्छ । शरीर, इन्द्रिय, आत्मा र मनको समूहलाई पुरुष भनिन्छ । कोही आत्मालाई पुरुष मान्दछन् । ज्ञानको अभाव र भाव मनका लक्षण हुन् । एक्लोपन र सूक्ष्मता यी दुई मनका गुणहरू हुन् । प्रयत्न र ज्ञान सँगसँगै नहुने कारणले मन एउटै हुन्छ, धेरै हुँदैन । मनसँग मिलेर नै इन्द्रियहरू आआफ्ना विषय ग्रहण गर्न समर्थ हुन्छन् । (अर्थात् कुनै कुरामा मन नलाग्दा त्यो कुरा इन्द्रियले कुनै हालतमा पनि ग्रहण गर्न सक्दैन) ।

**मनःषष्ठानामिन्द्रियाणां त्रीणि त्रीणि विप्रकृष्टसन्निकृष्टवृत्तीनि । मनश्चक्षुः श्रोत्रमिति विप्रकृष्टवृत्तीनि, घ्राणं रसनं त्वगिति सन्निकृष्टवृत्तीनि । तत् सर्वं स्पर्शनलक्षणमाहुः; तद्यथा-पुरुषः सर्वतोगवाक्षं प्रासादमभिरूढस्तांस्तानर्थान्**
**गवाक्षैरालोचयत्येवमयमात्मा शरीरस्थ इन्द्रियैरनुपहतैर्मनः ........।**

मन सहितका छ वटा इन्द्रियहरूमध्ये तीनवटा टाढाका काम गर्न र तीन वटा नजिकका काम गर्ने हुन्छन् । मन, आँखा र कानले टाढाको काम गर्दछन् भने नाक, जिब्रो र छालाले नजिकको काम गर्दछन् । ती सबैलाई स्पर्श-लक्षण भनिन्छ । जस्तै : जसरी कोही मानिस महलमा बसी झ्यालबाट चारैतिरका फरक फरक विषयलाई ग्रहण गर्दछ (वा देख्दछ) त्यसरी नै यो आत्मा पनि शरीरमा बसेर इन्द्रियद्वारा ...(मनको सहयोगमा फरक फरक विषय ग्रहण गर्दछ) ।

व्याख्याः अर्थात् जसरी घरमा बसेको मानिस केबल तमासे मात्र हुन्छ । उ आँखा मार्फत रूप देख्दछ, कान मार्फत शब्द सुन्दछ, नाक मार्फत सुँघ्दछ आदि । मन अचेतन भएपनि क्रियाशील हुन्छ । आत्मा भने चेतनशील हुन्छ । जब मन र आत्मा मिल्दछ तब मात्र कर्म हुने गर्दछ । यसैले आत्मालाई नाममात्रको कर्ता भनिन्छ । आत्मालाई मन र इन्द्रियको मिलन भएपछि मात्र ज्ञान हुन्छ । यदि आत्मा र मन मिलेनन् भने र इन्द्रियले गर्ने कर्म स्वच्छ छैनन् भने विषयको ज्ञान हुँदैन । अझ स्पष्टरूपमा भन्नु पर्दा मन र आत्मा अन्तै गएको छ भने आँखा सामुन्ने भएका कुरा पनि देखिन्न, गनाएको वा बास्ना आएको पनि थाहा हुँदैन आदि । आत्मा र मनको सहयोग नभए शरीरका सबै इन्द्रिय निकम्मा हुन्छन् ।

# खर (उखल)
# (Thatch)

**परिभाषा :**

(क) **के.यन.स्वामी :** (१) भूरिपत्र, तृणोत्तम : खर । (२) सुतृण : सिरु । खर । बाबियो ।

(ख) **नेपाली बृहत् शब्दकोश :** (१) खर : बाबियोका जस्ता लामा-लामा सिन्के पात हुने, घर, गोठ आदि छाउने काममा प्रयोग गरिने एक प्रकारको झार; सालिम्मो । (२) खरक : खर्क । (३) खरकट्टी : खर पालेको जग्गा; खरघारी । (४) सालिम्बो : खरजस्तै एक किसिमको घाँस ।

(ग) A kind of grass, a sort of Andropogon, thatch.

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **राज निघण्टु :**

**उखलो भूरिपत्रश्च सुतृणश्च तृणोत्तमः । उखलो बलदो रुच्यः पशूनां सर्वदा हितः ॥**

उखल, भूरिपत्र, सुतृण र तृणोत्तम : यी खरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बलदायक, रुचिप्रद र पशुका लागि सधैँ हितकर हुन्छ ।



खर (तस्बिर श्रोत : यनईडटविकिपेडियाडटओआरजी)

## उत्क्लिष्ट रोग
## (A kind of eye disease)

(क) **अष्टाङ्ग हृदय :**

**...तथोत्क्लिष्टं राजिमत्स्पर्शनाक्षमम्॥१२॥**

उत्सङ्ग जस्तै तर रेखा जस्तो हुने अनि दुखेर हात नलगाइने खालको आँखाको पलकमा हुने रोगलाई उत्क्लिष्ट भनिन्छ ।

## उत्क्लिष्ट वर्त्म रोग
## (A kind of eye disease)

**(क) अष्टाङ्ग हृदय :**

**यद्ववर्त्मौत्क्लिष्टमुत्क्लिष्टमकस्मान्म्लानतामियात् ।**
**रक्तदोषत्रयोत्क्लेशाद् वदन्त्युत्क्लिष्टवर्त्म तत् ॥**

रक्तविकार तथा त्रिदोषका विकारले गर्दा बेचैन भएको आँखाको पलक रसिलो भई अचानक नचल्ने र मलिनो बन्न पुग्दछ । यस्तो रोगलाई उत्क्लिष्ट वर्त्म भनिन्छ ।

## उत्क्षेप र स्थपनी (शरीरका दुई मर्मस्थलविशेष)
## (The region above the temples and The space between the eye-brows)

(क) **अष्टाङ्ग हृदय :**

**केशान्ते शङ्खयोरूर्ध्वमुत्क्षेपौ, स्थपनि पुनः॥**
**भ्रुवोर्मध्ये, त्रयेऽप्यत्र शल्ये जीवेदनुद्धृते । स्वयं वा पतिते पाकात्सद्यो नश्यति तूद्धृते॥**

कपालको अन्तिम भागमा कञ्चटभन्दा माथि उत्क्षेप नामका दुई तथा दुई आँखीभौंको बीचमा स्थापनी नामक एक मर्मस्थल हुन्छ । यी तीन मर्मस्थलमा कुनै कीला आदि बिझेमा आफैं पाकेर त्यो निक्ले मानिस बाँच्दछ तर शल्यक्रिया गरेर निकाले मानिसको मृत्यु हुन्छ ।

(ख) **सुश्रुत संहिता :**

**शङ्खयोरुपरि केशान्त उत्क्षेपौ नाम, तत्र सशल्यो जीवति पाकात् पतितशल्यो वा नोद्धृतशल्यः;**
**भ्रुवोर्मध्ये स्थपनी नाम, तत्रोत्क्षेपवत्;**

कञ्चटभन्दा माथि कपाल सकिने ठाउँमा उत्क्षेप नामक मर्मस्थल हुन्छ । यहाँ कुनै किला काँडा बिझेमा त्यो हुँदा बाँच्दछ अथवा केही समयपछि पाकेर आफैं खसे मानिस बाँच्दछ, बिझ्नासाथ झिके बाँच्दैन । दुवै आँखीभौंका बीचमा स्थपनी नामक मर्मस्थल हुन्छ । यहाँ पनि उत्क्षेप जस्तै अवस्था हुन्छ ।

## श्रेष्ठ अनाज
## (Best cereal)

**(क) मदनपाल निघण्टु :**

**षष्टिका यवगोधूमा लोहितायाश्च शालयः । मुद्गाढकीमसूराश्च धान्येषु प्रवराः स्मृताः॥**
**स जराव्याधिनिर्मुक्तो जीवेद्वर्षशतं सुखी ।**

सठिया धान, जौ, गहुँ, रातोमार्सी, मुगी, रहर र मुसुरो : यी अनाजमध्येका उत्तम अनाज हुन् । यी अनाज खाने मानिस (अकालको) बुढ्यौली र रोगबाट जोगिँदै सुखपूर्वक सय वर्षसम्म बाँच्दछ ।

**(ख) राज निघण्टु :**

**धान्यं श्रेष्ठं षष्टिकं राजभोग्यं ...॥**

धानमा राजाले खाने खालको सठिया धान उत्तम हुन्छ ।

**(ग) आयुर्वेद महोदधि :**

**यद्यदागच्छति क्षिप्रं तत्तल्लघुतरं स्मृतम् ।**



चाँडो फल्ने खालका अनाज पचाउन सहज हुन्छ ।

**(घ) अष्टाङ्ग हृदय :**

**शीघ्रजन्म तथा सूप्यं निस्तुषं युक्तिभर्जितम् ।**

जुन अनाज चाँडै पसाउँदछ वा पाक्दछ त्यो अनाज र भुस नभएको तथा बिचार गरेर भुटिएको मुगी आदि अनाज पचाउन सहज हुन्छ ।

# उत्पलादि गण
# (Utpalaadi-Gana)

## (क) सुश्रुत संहिता :

**उत्पलरक्तोत्पलकुमुदसौगन्धिककुवलयपुण्डरीकाणि मधुकं चेति ॥**
**उत्पलादिरयं दाहपित्तरक्तविनाशनः । पिपासाविषहृद्रोगच्छर्दिमूर्च्छाहरो गणः ॥**

नीलकमल, रक्तकमल, सेतो कमल, नीलकमल विशेष, सेतो-नीलो कमल, अति सेतो कमल र जेठीमधु : यी ओखतीको समूहलाई उत्पलादि गण भनिन्छ । यो गणको ओखतीले डाह, पित्तविकार र रक्तविकार नाश गर्दछ तथा तिर्खा, विषविकार, मुटुका रोग, वाकवाकी र बेहोसी हरण गर्दछ ।

## उत्पलिनी (कमलविशेष, Water lily)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) उत्पलिनी : कमलको थुप्रो । फुलेको कमलको बोट । फुलेका कमलले भरिएको तलाउ । (२) कैरविणी : सेतो चन्द्रकमलको समूह । सेतो चन्द्रकमल धेरै भएको तलाउ, वापी, पोखरी आदि । सेतो चन्द्रकमलको बोट वा जून लागेपछि रातीमा फुल्ने फूल । (३) कुमुद्वती : जरा, पात, फूल र फलसमेतको कोया वा कमलविशेष । (४) कुमुदिनी : फुलेको सेतो कमलको बोट । कमल धेरै भएको ठाउँ । कमलहरूको सङ्ग्रह । रात्रिकमल । (५) कुवलयिनी : नीलकमल वा रक्तकमलको समूह । कमल धेरै भएको ठाउँ । (६) इन्दीवरिणी : नीलकमलको थुप्रो ।

(ख) डा. साङ्ख्यधर : सम्भवतः यो रातो चन्द्रकमल हो र यसको ल्याटिन नाम *Nymphaea rubra* Roxb. हो । यसलाई अंग्रेजीमा Red water lily भनिन्छ ।

(ग) हिन्द विश्वकोश : इन्दीवरिणी-पद्मलता । कमलको लहरो । उत्पलिनी-पानीमा हुने फूलविशेष । सानो कमल । उत्पल फूलको समूह । कुमुदिनी- कुमुद भएको तलाउ आदि । कुमुदको समूह । कुमुदको फूल । कुमुद्वती-कमलले भरिएको तलाउ । कुमुदिनी । कुवलयिनी-उत्पलिनी, कुमुदको समूह । कैरविणी-उत्पलिनी, कुमुदिनी । चन्द्रेष्टा-उत्पलिनी, सानो कमल ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :** 

**उत्पलिनी कैरविणी कुमुद्वती कुमुदिनी च चन्द्रेष्टा ।**
**कुवलयिनीन्दीवरिणी नीलोत्पलिनी च विज्ञेया॥**
**उत्पलिनी हिमतिक्ता रक्तामयहारिणी च पित्तघ्नी ।**
**तापकफकासतृष्णाश्रमवमिशमनी च विज्ञेया॥**

उत्पलिनी, कैरविणी, कुमुद्वती, कुमुदिनी, चन्द्रेष्टा, कुवलयिनी, इन्दीवरिणी र नीलोत्पलिनी : यी उत्पलिनीका नाम हुन् । यो शीतवीर्यको, तीतो तथा रक्तविकार र पित्तविकार नाशक हुन्छ । यसले डाह, कफविकार, खोकी, तिर्खा, थकाई र वाकवाकीलाई शान्त पार्दछ ।

## उत्पात रोग
## (A disease of the external ear)

**(क) अष्टाङ्ग हृदयः**

**...उत्पातः पित्तशोणितात् ।**
**गुर्वाभरणभाराद्यैः श्यावो रुग्दाहपाकवान्॥ श्वयथुः स्फोटपिटिकारागोषाक्लेदसंयुतः ।**

कानमा गह्रौं गहना लगाउनाले पित्तविकार तथा रक्तविकार भई कालोकालो, दुख्ने, डाह गराउने, पाक्ने र चिरिने खालको सुजन हुन्छ । यसबेला त्यस भागमा पिलो वा खटिरा पनि आउन सक्दछ । यो भाग सधैं रातो हुन्छ, डाह हुन्छ र सड्ने गर्दछ । यो रोगलाई उत्पात भनिन्छ ।

**(ख) भावप्रकाश संहिता :**

**गुर्वाभरण संयोगात्ताडनाद्घर्षणादपि । शोथः पाल्यां भवेच्छ्यावो दाहपाकरुजाऽन्वितः॥**
**रक्तो वा रक्तपित्ताभ्यामुत्पातः सगदः स्मृतः॥**

गह्रौं खालका गहना लगाउनाले, चोटपटक लाग्नाले वा कुनै कारणले घिस्रिनाले कानको लोतीमा कालोपन सहितको रातो, डाह गर्ने र पाक्ने खालको सुजन हुन पुग्दछ । यो रोगलाई उत्पात भनिन्छ । यो रोग रगत र पित्तमा विकार आउने कारणले हुने गर्दछ ।

# उत्सङ्ग रोग
# (A disorder of eye)

**(क) अष्टाङ्ग हृदय :**

**रक्ता रक्तेन पिटिकास्तत्तुल्यपिटिकाचिताः । उत्सङ्गाख्याः...।**

रक्तविकारका कारण आँखाको पलकमा राता रङका मसिना खटिरा उत्पन्न हुन्छन् । यी खटिराको चारैतिर त्यस्तै खालका अरू खटिरा पनि आउँदछन् । यस्तो रोगलाई उत्सङ्ग भनिन्छ ।

**(ख) भावप्रकाश संहिता :**

**अभ्यन्तरमुखी ताम्रा बाह्यतो वर्त्मसंश्रया । सोत्सङ्गोत्सङ्गपिडिका रक्तजा स्थूलकण्डुरा॥**

**अभ्यन्तरमुखी-वर्त्मनोऽभ्यन्तरे मुखं यस्याः सा । वर्त्मनो बाह्यतस्ताम्रा । सोत्सङ्गा अन्तः पूया । उत्सङ्गपिडिका-उत्सङ्गे क्रोडे बह्व्यः पिडिका यस्याः सा । स्थूलकण्डुरा स्थूला कण्डुरा चेति कर्मधारयः । एषा अधरवर्त्मजा बोद्धव्या । वर्त्मोत्सङ्गेऽधरे जन्तोः । इति विदेह वचनात्॥**



नेत्रकोषको भित्रतिर मुख फर्केको, बाहिरी भाग रातो हुने, भित्र पीप हुने, सँगसँगै अनेक बिमिरा भएको र चिलाउने खालको आँखाको पलकमा रक्तविकारका कारण आउने खटिरालाई उत्सङ्गिनी भनिन्छ ।

# उदर (पेट)
# (Belly)

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश (पेट) : छातीदेखि मनि र काखदेखि माथिको शरीरको भाग; भुँडी । खाएको वस्तु जम्मा हुने, शरीरभित्रको थैली ।

(ख) डा. साङ्ग्यधर : पेटलई अंग्रेजीमा Belly, Womb भनिन्छ । (यसलाई Abdomen पनि भनिन्छ) ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अभिधान मञ्जरी :**

**उदरं जठरं कुक्षिः स्यात् ।**

उदर, जठर र कुक्षि : यी पेटका नाम हुन् ।

(ख) **अमरकोश :**



**पिचण्डकुक्षी जठरोदरं तुन्दं...।**

पिचण्ड (पिचिण्ड), कुक्षि, जठर, उदर र तुण्ड : यी पेटका नाम हुन् । पेटको भित्री भागलाई कोष्ठ भनिन्छ । कट भनेको पनि भुँडी हो ।

(ग) **अष्टाङ्ग हृदय :**

**कोष्ठः क्रूरो मृदुर्मध्या मध्यः स्यात्तैः समैरपि ।**

वायुले गर्दा मानिसको पेटको भित्री भाग कडा (क्रूर) हुन्छ, पित्तले कोमल बनाउँछ र कफले मध्यम अवस्थामा राख्दछ । वात, पित्त र कफ समान मात्रामा हुँदा भित्री पेट सामान्य अवस्थामा रहन्छ ।

(घ) **भावप्रकाश संहिता :**

**मेदो हि सर्वभूतानामुदरेष्वस्थि संस्थितम् । अत एवोदरे वृद्धिः प्रायो मेदस्विनो भवेत्॥**

सबै जीवको पेटमा बोसो हाडसँग सम्पर्कमा रही (मिली) रहने गर्दछ । यसैले बोसो बढेपछि मानिसको पेट बढ्ने गर्दछ । अर्थात् भुँडी ठूलो हुने मानिसमा बोसो बढी हुने गर्दछ ।

**(ङ) राज निघण्टु :**

**कुक्षिः पिचिण्डो जठरं तुन्दं स्यादुदरञ्च तत्॥**

कुक्षि, पिचिण्ड, जठर, तुन्द र उदर : यी पेटका संस्कृत पर्यायवाची नामहरू हुन्।

# उदश्वित् (मोहीविशेष)
# (Udashwit)

**(क) अभिधानमञ्जरी :**

**तुल्योदकं तु यत्तक्रं तन्नाम्नोदश्विदुच्यते॥**

दही बराबर पानी हालेर मथिएको तक्रलाई उदश्वित भनिन्छ ।

**(ख) आयुर्वेद महोदधि :**

**पादसलिलमुदश्वित्...माहु ।**

दहीमा एक चौथाई पानी मिसाएर घोलेपछि त्यो “उदश्वित्” हुन्छ ।

**(ग) द्रव्यगुणसङ्ग्रह :**

**अर्धोदकमुदश्वित् स्यात्...। उदश्विच्छ्लेष्मलं ... ।**

आधा पानी मिसाएर घोलिएको दहीलाई उदश्वित् भनिन्छ । उदश्वित्ले कफविकार गर्दछ ।

**(घ) पर्यारत्नमाला :**

**जलार्धकमुदश्विच्च ।**

दहीमा आधा पानी मिसाए त्यो उदश्वित् हुन्छ ।

**(ङ) भावप्रकाश निघण्टु, शालिग्राम निघण्टु :**

**...उदश्वित्त्वर्द्धवारिकम् । उदश्वित् कफकृद् बल्यमामघ्नं परमं मतम् ।**

आधा पानी हालेर मथिएको दहीलाई ‘उदश्वित्’ भनिन्छ । उदश्वित्ले कफविकार र बल बढाउँदछ तर धेरै नै आमविकार नाश गर्दछ ।

**(च) मदनपाल निघण्टु :**

**...तमुदश्वित्त्वर्धवारिकम्॥**

दहीको आधा पानी हाली मथिएको पेयलाई उदश्वित् भनिन्छ ।

**(छ) राजनिघण्टु :**

**दध्यम्भसी यदि समे तदुदश्विदाहुः...। रुच्यं प्राहुरुदश्विदाख्यमधिकं तक्रं त्रिदोषापहम्।**
**बल्यप्रदं पवननाशमुदश्विदाख्यं ...॥**

पानी र दही बराबर मिसाइएको पेयलाई उदश्वित् भनिन्छ । उदश्वित् तक्रले रुचि बढाउँदछ र त्रिदोष नाश गर्दछ । उदश्वित् बलदायक र वातविकार नाशक हुन्छ ।

**(ज) शालिग्राम निघण्टु :**

**पित्तश्लेष्मविनाश्युदश्वित्...।**

उदश्वित्ले पित्तविकार र कफविकार नाश गर्दछ ।

**(झ) हारीत संहिता :**

**आर्द्धोदकमुदश्वित्स्यात्...उदश्विच्छ्लेष्मलं भवेत्॥**



आधा पानी हालिएको (दही) लाई "उदश्वित्" भनिन्छ । उदश्वित्ले कफ बढाउँदछ ।

# उदान वायु
# (Udaana vaayu)

(क) **सुश्रुत संहिता :**

**उदानो नाम यस्तूर्ध्वमुपैति पवनोत्तमः ॥**
**तेन भाषितगीतादिविशेषोऽभिप्रवर्तते । ऊर्ध्वजत्रुगतान् रोगान् करोति च विशेषतः ॥**

जुन् वायु शरीरको माथ्लो भागतिर जाने गर्दछ त्यसलाई उदान भनिन्छ । यही वायुले गर्दा मानिस बोल्ने, गाउने आदिजस्ता विशेष कर्ममा लाग्ने गर्दछ । जब यो वायु विकृत हुन्छ तब मानिसलाई घाँटीभन्दा माथिका अङ्गमा रोगहरू हुने गर्दछ ।

# उदुम्बर (डुम्री)
# (Cluster fig)

**परिभाषा :**

(क) **कुलचन्द्र शर्मा :** उदुम्बरले डुम्रीलाई बुझाउँदछ ।

(ख) **के.यन.स्वामी :** उदुम्बर, जन्तुफल, यज्ञाङ्ग र हेमदुग्धक भनेको डुम्रीको रूख हो ।

(ग) **नेपाली बृहत् शब्दकोश (डुम्री) :** लाम्चा पात हुने, फूल नफुलीकनै अञ्जीरका जस्ता फल फल्ने, वरका जातको रूख वा त्यसैको फल ।

(घ) **आचार्य बालकृष्ण :** यसलाई नेपालीमा डुम्री भनिन्छ । यसको अंग्रेजी नाम Cluster fig, Gular fig वा Country fig हो ।

(ङ) **डा. चुनेकर :** यसको ल्याटिन नाम *Ficus glomerata* Roxb. हो । यसको रूख ६० फीटसम्म अग्लो हुन्छ । पात ५-७ इञ्च लामा हुन्छन् । १-२ इञ्च व्यास भएका फल झुप्पा भएर फल्दछ । फलका भित्र प्रायः मसिना कीरा हुन्छन् । फल काँचोमा हरियो र पाकेपछि रातो हुन्छ ।

(च) **Indian Medicinal Plants : A Compendium of 500 Species, Volume 3 :** यो Moraceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Ficus racemosa* Linn. हो । संस्कृतमा यसलाई उदुम्बर, सदाफल भनिन्छ ।

(छ) **फर्माकोपिया :** यो Moraceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Ficus racemosa* Linn. *Syn. Ficus glomerata* हो । यसको बोक्राको धुलो ३-६ ग्राम र काँडापानी २०-३० ग्राम ओखतीमा एक मात्रा हुन्छ ।



(ज) **TERAI FORESTS OF NEPAL, GOVERNMENT OF NEPAL, April 2014 :** यो Moraceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम Ficus racemosa L. हो । यसलाई स्थानीय भाषामा पाकर, डुम्री, गुल्लर वा डुमरी भनिन्छ ।

(यसको सेतो दूध वा चोप हावाको स्पर्शमा आएपछि पहेँलो हुन्छ, त्यसैले यसलाई हेमदुग्धक भनिएको हो । बच्चालाई छेरपटी लाग्दा यो दूध, दूधमा मिसाएर खुवाउन सल्लाह दिइएको पनि पाइन्छ) ।

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **अभिधान मञ्जरी :**

**सदाफलः पुष्पफलः केलूटः शीतवल्कलः । यज्ञाङ्गो हेमदुग्धः स्यात् क्षीरवृक्ष उदुम्बरः ॥**

सदाफल, पुष्पफल, केलूट, शीतवल्कल, यज्ञाङ्ग, हेमदुग्ध, क्षीरवृक्ष र उदुम्बर : यी डुम्रीका पर्यायवाची नाम हुन् ।

(ख) **अभिधान रत्नमाला :**

**औदुम्बरो जन्तुफलो यज्ञयोग्यः सदाफलः । सुप्रतिष्ठो हेमदुग्धो पुष्पस्कन्धफलश्च सः ॥**

उदुम्बर, जन्तुफल, यज्ञयोग्य, सदाफल, सुप्रांतष्ठ, हेमदुग्ध, पुष्पस्कन्ध र पुष्पफल : यां डुम्रांका पर्यायवाची नाम हुन् ।

(ग) **अमरकोश :**

**उदुम्बरो जन्तुफलो यज्ञाङ्गो हेमदुग्धकः ।**

उदुम्बर, जन्तुफल, यज्ञाङ्ग र हेमदुग्धकः यी डुम्रीका पर्यायवाची नाम हुन् ।

(घ) **अष्टाङ्ग निघण्टु :**

**उदुम्बरः क्रिमिफलः सुप्रतिष्ठः सदाफलः ।**

उदुम्बर, क्रिमिफल, सुप्रतिष्ठ र सदाफल : यी डुम्रीका पर्यायवाची नाम हुन् ।

(ङ) **आयुर्वेद महोदधि :**

**...उदुम्बरोद्भूतकाष्ठतप्तं शुभं जलम् । व्रणकण्डूहरं चासृक्बलवीर्यविवर्धनम् ॥**
**...उम्बरपात्रेण तापितं चोदकोत्तमम् ।**
**वपुः कान्तिप्रदं पित्ते (प्रोक्तं) वह्निमान्द्यकरं सकृत् (च तत्) ॥**



डुम्रीको दाउराले तताइऐ शुभ पानीले खटिरा, चिलाउने रोग निको पार्नुका साथै रगत, बल र वीर्य बढाउँदछ । डुम्रीका दाउराले तताइएको पानी उत्तम हुन्छ । यसले शरीरलाई कान्ति दिन्छ तथा पित्त र पाचकाग्निलाई बढाउँदछ ।

**औदुम्बरं फलमतीव सुशीतलं च सद्यो निवारयति शोणितपित्तमुग्रम् ।**
**पथ्यं विषे विषमपित्तशिरोविकारे नासाप्रवृत्तरुधिरे च विशेषतस्तु ॥**
**अपक्वं श्लेष्मजननं मलविष्टम्भकारकम् ॥**

डुम्रीको फलले अति शीतल गर्दछ । यसले बढेको रक्तपित्त रोगलाई पनि तुरुन्त ठिक गर्दछ । यो विषविकार, गढेको पित्तरोग, टाउकाका रोग र नाकबाट रगत आउने रोगमा विशेष लाभदायक हुन्छ र पथ्य हुन्छ । काँचो डुम्रीले कफ बढाउँदछ र यो कब्जियत गराउने गुणको पनि हुन्छ ।

(च) **कैयदेव निघण्टु :**

**उदुम्बरो हेमदुग्धो हरिताक्षो वसुद्रुमः ॥ सचक्षुर्मशकी क्षीरी क्षीरद्रुः शीतवल्कलः ।**
**यज्ञाङ्गको जन्तुवृक्षः सुप्रतिष्ठः सदाफलः ॥ अपुष्पफलसम्बन्धः काञ्चनो जन्तुमत्फलः ।**
**उदुम्बरो हिमो रूक्षः कषायो मधुरो गुरुः ॥ भग्नसन्धानकृद् वर्ण्यो व्रणशोधनरोपणः ।**

**स्तम्भनानि कषायाणि श्लेष्मघ्नानि हितानि च॥ उदुम्बरशलाटूनि तृट्पित्तास्रहराणि च ।
उदुम्बरफलं बालं कषायं स्वादु शीतलम्॥ तृण्मेहपित्तच्छर्दिप्रदरास्रश्रुतिं जयेत् ।
प्रौढं बहुमलं तस्य फलं गुरुतरं मतम्॥ फलमौदुम्बरं पक्वं शीतलं मधुरं गुरु ।
क्षुत्तृष्णामेहहृद्रुच्यं श्लेष्मकृत् रक्तनाशनम्॥**

उदुम्बर, हेमदुग्ध, हरिताक्ष, वसुद्रुम, सचक्षु, मशकी, क्षीरी, क्षीरद्रु, शीतवल्कल, यज्ञाङ्क, जन्तुवृक्ष, सुप्रतिष्ठ, सदाफल, अपुष्पफल, काञ्चन र जन्तुमत्फल : यी डुम्रीका पर्यायवाची नाम हुन् । डुम्री शीतवीर्यको, रुखो, टर्रो, गुलियो, पचाउन कठिन, भाँचिएका स्थान जोड्ने, वर्णका लागि हितकर, घाउखटिरा प्रशोधन गर्ने र भर्ने तथा टर्रो रसले गर्दा शरीरको लाटोपन र कफविकार नाशगर्ने गुणको हुन्छ । डुम्रीको काँचो फलले तिर्खा, पित्तविकार र रक्तविकार नाश गर्दछ । डुम्रीको चिचिलो टर्रो, गुलियो र शीतवीर्यको हुन्छ । यसले तिर्खा, प्रमेह, पित्तविकार, वाकवाकी र रक्तप्रदर रोगलाई जित्दछ । छिप्पिएको डुम्रीको फल दिसा बढाउने खालको र अति नै पचाउन कठिन हुन्छ । पाकेको डुम्रीको फल शीतवीर्यको, गुलियो, पचाउन कठिन; भोक, तिर्खा र प्रमेह नाशक; रुचिप्रद, कफविकार गर्ने र रक्तविकार नाशगर्ने गुणको हुन्छ ।

(छ) **द्रव्यगुणसङ्ग्रह :**

**...उदुम्बर...पल्लवाः । कषायास्तम्भनाः शीता हिताः पित्तातिसारिणाम्॥**

डुम्रीको पालुवा टर्रो, अङ्ग लाटो पार्ने, शीतवीर्यको तथा पित्तविकार र अतिसारमा हितकर हुन्छ ।



(ज) **धन्वन्तरि निघण्टु :**

**उदुम्बरः क्षीरवृक्षो हेमदुग्धः सदाफलः॥ अपुष्पफलसम्बन्धो यज्ञाङ्गः शीतवल्कलः ।
उदुम्बरं कषायं स्यात् पक्वं तु मधुरं हिमम्॥ कृमिकृत्पित्तरक्तघ्नं मूर्च्छादाहतृषापहम् ।**

उदुम्बर, क्षीरवृक्ष, हेमदुग्ध, सदाफल, अपुष्पफलसम्बन्ध, यज्ञाङ्ग र शीतवल्कल : यी डुम्रीका पर्यायवाची नाम हुन् । यो टर्रो र पाकेपछि गुलियो हुन्छ । डुम्री शीतवीर्यको, पेटमा कीरा पार्ने, तथा पित्तविकार, रक्तविकार, बेहोसी, डाह र तिर्खा नाशगर्ने गुणको हुन्छ ।

(झ) **निघण्टुशेष :**

**उदुम्बरे जन्तुफलो यज्ञाङ्गो हेमदुग्धकः । सदाफलो वसुवृक्षः श्वेतवल्को मशक्यपि॥**

उदुम्बर, जन्तुफल, यज्ञाङ्ग, हेमदुग्धक, सदाफल, वसुवृक्ष, श्वेतवल्क र मशकी : यी डुम्रीका पर्यायवाची नाम हुन् ।

(ञ) **पर्यायरत्नमाला :**

**यज्ञाङ्गो वसुवृक्षश्च हेमदुग्धोऽप्युडुम्बरः ।**

यज्ञाङ्ग, वसुवृक्ष, हेमदुग्ध र उडुम्बर : यी डुम्रीका पर्यायवाची नाम हुन् ।

(ट) **भावप्रकाश निघण्टु :**

**उदुम्बरो जन्तुफलो यज्ञाङ्गो हेमदुग्धकः ॥**
**उदुम्बरो हिमो रूक्षो गुरुः पित्तकफास्रजित् । मधुरस्तुवरो वर्ण्यो व्रणशोधनरोपणः ॥**

उदुम्बर, जन्तुफल, यज्ञाङ्ग र हेमदुग्धक : यी डुम्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो रुखो र पचाउन कठिन हुन्छ । यसले पित्तविकार, कफविकार र रक्तविकार नाश गर्दछ । यो गुलियो र टर्रो हुन्छ । यसले वर्णमा निखार लेराउँदछ तथा घाउखटिरा सफागर्ने र भर्ने काम गर्दछ ।

(ठ) **मदनपाल निघण्टु :**

**उदुम्बरः क्षीरवृक्षो जन्तुवृक्षः सदाफलः । हेमदुग्धः कृमिफलो यज्ञाङ्गः शीतवल्कलः ॥**

**उदुम्बरो हिमो व्रण्यः कफपित्तास्रजिद् गुरुः ॥**

उदुम्बर, क्षीरवृक्ष, जन्तुवृक्ष, सदाफल, हेमदुग्ध, कृमिफल, यज्ञाङ्ग र शीतवल्कल : यी डुम्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्य भएको, घाउखटिराका लागि हितकर तथा कफविकार, पित्तविकार र रक्तविकार माथि जित हासिल गर्ने गुणको हुन्छ । यो पचाउन कठिन हुन्छ ।

(ड) **मदनादि निघण्टु :**

**उदुम्बरः कृमिफलः सुप्रतिष्ठः सदाफलः । हेमदुग्धः काञ्चनको यज्ञाङ्गः क्षीरपादपः ॥**
**भग्नसन्धानकृच्छ्रीतो व्रणशोधनरोपणः । फलेम्लो मधुरो मूले कषायः स्वादु मज्जकः ॥**
**सुस्निग्धो दुर्जरः श्लेष्मकृमिशुक्रविवर्धनः ।**

उदुम्बर, कृमिफल, सुप्रतिष्ठ, सदाफल, हेमदुग्ध, काञ्चनक, यज्ञाङ्ग र क्षीरपादप : यी डुम्रीका पर्यायवाची नाम हुन् । यसमा भाँचिएको अङ्ग जोड्ने, शीतवीर्यको तथा घाउखटिरा प्रशोधन गर्ने र भर्ने गुण हुन्छ । यसको फल अमिलो, गुलियो हुन्छ । जरा टर्रो तथा चुरो गुलियो हुन्छ । डुम्री चिल्लो, ढिलो पच्ने तथा पेटका कीरा र वीर्य बढाउने गुणको हुन्छ ।

**(ढ) माधवद्रव्यगुण :**

**...उदुम्बर... फलानि च । कषायमधुराम्लानि वातलानि गुरूणि च॥**
**औदुम्बरं फलं ग्राहि वातपित्तनिबर्हणम् ।**

डुम्रीको फल टर्रो, गुलियो र अमिलो तथा वातविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ । डुम्रीको फल ग्राहि तथा वातविकार र पित्तविकार नाशगर्ने (?) गुणको हुन्छ ।

**(ण) राज निघण्टु :**

**उदुम्बरः क्षीरवृक्षो हेमदुग्धः सदाफलः । कालस्कन्धो यज्ञयोग्यो यज्ञीयः सुप्रतिष्ठितः॥**
**शीतवल्को जन्तुफलः पुष्पशून्यः पवित्रकः । सौम्यः शीतफलश्चेति मनुसञ्ज्ञः समीरितः॥**
**उदुम्बरं कषायं स्यात् पक्वं तु मधुरं हिमम् । कृमिकृत्पित्तरक्तघ्नं मूर्छादाहतृषापहम्॥**
**औदुम्बरं फलमतीव हिमं सुपक्वं पित्तापहं च मधुरं श्रमशोफहारि ।**
**आमं कषायमतिदीपनरोचनं च मांसस्य वृद्धिकरमस्रविकारहारि॥**

(१) उदुम्बर, (२) क्षीरवृक्ष, (३) हेमदुग्ध, (४) सदाफल, (५) कालस्कन्ध, (६) यज्ञयोग्य, (७) यज्ञीय, (८) सुप्रतिष्ठित, (९) शीतवल्क, (१०) जन्तुफल, (११) पुष्पशून्य, (१२) पवित्रक, (१३) सौम्य र (१४) शीतफल : यी चौध नाम डुम्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । डुम्री टर्रो तर पाकेपछि गुलियो हुन्छ । यो शीतवीर्यको, पेटमा कीरा पार्ने तथा पित्तविकार, रक्तविकार, बेहोसी, डाह र तिर्खा नाशक हुन्छ । डुम्रीको फल अत्यन्त शीतवीर्यको हुन्छ । राम्ररी पाकेको यो फलले पित्तविकार नाश गर्दछ । यो गुलियो हुन्छ र यसले थकाई र सुजन नाश गर्दछ । काँचो फल टर्रो, अति नै दीपनी र रोचनी हुन्छ । यसले मासु बढाउनुका साथै रक्तविकारलाई नाश पनि गर्दछ ।

**(त) सरस्वती निघण्टु :**

**उदुम्बरो जन्तुफलो यज्ञाङ्गो हेमदुग्धकः । चक्षुरो रङ्गिणी क्षीरी स्निग्धपत्रो गजाशनः॥**

उदुम्बर, जन्तुफल, यज्ञाङ्ग, हेमदुग्धक, चक्षुर, रङ्गिणी, क्षीरी, स्निग्धपत्र र गजाशन : यी डुम्रीका पर्यायवाची नाम हुन् ।

**(थ) सौश्रुत निघण्टु :**

**उदुम्बरः स्कन्धफलो हेमदुग्धः सदाफलः । यज्ञयोग्यो जन्तुफलो मतश्चापि वनस्पतिः॥**

उदुम्बर, स्कन्धफल, हेमदुग्ध, सदाफल, यज्ञयोग्य, जन्तुफल र वनस्पति : यी डुम्रीका पर्यायवाची नाम हुन् ।

## (द) हृदयदीपक निघण्टु :

**... सदाफल उदुम्बरः ।**
**सदाफल र उदुम्बर : यी डुम्रीका पर्यायवाची नाम हुन् ।**



**उदुम्बरः** | Ficus racemosa L. 1753 - Cluster fig [Image source: Hortus malabaricus I. Fig. 25, 1678]



उदुम्बरः - Ficus racemosa L. - Cluster fig
[Image source: Roxburgh. -- Vol II. -- 1795. -- Image courtesy Missouri Botanical Garden.



Cluster fig (Source : 1mg.com, Acharyaa Balkrishna)



जन्तुफलः । [Image source: Pratheepps / Wikipedia.]

## उन्मन्थक रोग
## (A disease of the outer ear)

**(क) भावप्रकाश संहिता :**

**कर्णं बलाद्वर्द्धयतः पाल्यां वायुः प्रकुप्यति । कफं संगृह्य कुरुते शोथं स्तब्धमवेदन॥**
**उन्मन्थकः सकण्डूको विकारः कफवातजः॥ अवेदनम्-ईषद्वेदनम् ।**

बलपूर्वक कान बढाउन खोज्दा कानको लोतीमा वातविकार हुन जान्छ । अनि यो विकृत वायुले कफको सहायता लिई कानमा लाटोपन हुने, कम दुखाउने र चिलाउने खालको सुजन उत्पन्न गर्दछ । यसलाई उन्मन्थक भनिन्छ । यो रोग कफ र वायु विकृत एवं उत्तेजित भएकाकारण हुने गर्दछ ।

# उन्माद (पागलपन)
(Insanity)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) उन्माद : पागलपन । नशा । मानसिक रोगविशेष । (२) मतिविभ्रम : पागलपन ।

(ख) नेपाली बृहत् शब्दकोश : (१) उन्माद : मन ठेगानमा नरहने र जे पायो त्यही बोल्ने वा काम गर्न थाल्ने मस्तिष्कको रोग; छँाटा; पागलपन; बहुलट्टी । शोक, वियोग आदिले चित्त (बुद्धि) विभ्रम हुने सञ्चारी भावको एक भेद । (२) उन्मादक : उन्माद चढाउने । (३) उन्मादग्रस्त : उन्मादको रोग लागेको; बहुलाएको । बहुलाहा । (४) उन्मादी : उन्माद चढेको । बहुलाएको; पागल । (५) चित्त विप्लव : मन छँटाउने काम; बहुलट्टीपन; उन्माद । (६) चित्त विभ्रम : चित्तभ्रंश; बुद्धिभ्रंश; उन्मत्तता; पागलपन । (७) प्रमाद : बेहोसी हुने स्थिति । उन्माद; नशा; बहुलट्टीपना । (८) प्रमादवान् : प्रमाद गर्ने; प्रमत्त । (९) प्रमादी : प्रमादवान् ।

(ग) उन्मादलाई अंग्रेजीमा Mania वा Insanity भन्न सकिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अष्टाङ्ग हृदयः :**



**उन्मादो नाम मनसो दोषैरुन्मार्गगैर्मदः ॥**

वात आदि दोष खराब बाटो हिँड्नाले मनमा जुन नसा लाग्दछ त्यसलाई उन्माद भनिन्छ ।

**(ख) चरक संहिता :**

**उन्मादं पुनर्मनोबुद्धिसञ्ज्ञाज्ञानस्मृतिभक्तिशीलचेष्टाचारविभ्रमं विद्यात् ॥** मन, बुद्धि, संज्ञा, ज्ञान, स्मृति, भक्ति, शील, आहार चेष्टामा भ्रम भ्रा वा विक्षिप्तता हुनुलाई उन्माद भनिन्छ । यस्तो विकारले उन्माद रोग हुन्छ । (व्याख्या : मनले चिन्तन गर्दछ जब त्यो भ्रममा पर्दछ तब मानिस चिन्तन गर्नुपर्ने कुरा सोच्दैन तर चिन्तन गर्ननपर्ने कुरा चिन्तन गर्न थाल्दछ । बुद्धिमा भ्रम हुन थालेपछि नित्यलाई अनित्य र प्रियलाई अप्रिय देख्न थाल्दछ । संज्ञा र ज्ञानमा भ्रम भएपछि आगोले पोल्दछ आदि कुराको ज्ञान हराउँदछ । स्मृतिमा भ्रम भएपछि केही कुरा पनि सम्झना हुँदैन । उल्टो उल्टो कुरो सम्झन थाल्दछ । भक्ति अर्थात् इच्छामा भ्रम हुँदा पहिले जे कुराको चाह हुन्थ्यो अब त्यो मन पर्न छाड्दछ । शीलमा भ्रम भएपछि मानिस अति रिसाइरहने गर्दछ । आचारमा भ्रम भएपछि मानिस अपवित्र आचरण गर्न थाल्दछ ।) ।

**(ग) सुश्रुत संहिता, भावप्रकाश संहिता र माधव निदान :**

**मदयन्त्युद्ध(द्ध)ता दोषा यस्मादुन्मार्गमाश्रिताः । मानसोऽयमतो व्याधिरुन्माद इति कीर्त्तितः ॥**

**स चाप्रवृद्धस्तरुणो मदसंज्ञां बिभांत्त च॥**

बढेका वात, पित्त र कफविकारले आआफ्नो बाटो छाडी अन्य बाटो हिँडेर मनलाई विक्षिप्त पार्ने रोगलाई उन्माद भनिन्छ । (यसले मनलाई विकृत पार्दछ, त्यसैले यो एक मानसिक रोग हो) । यस्तो उन्माद धेरै छैन वा बढेको छैन भने त्यसलाई मद (नसा) भनिन्छ ।

**(घ) राज निघण्टु :**

**उन्मादो मतिविभ्रान्तिरुन्मनायितमित्यपि ।**

उन्माद, मतिविभ्रान्ति वा उन्मनायित : यी उन्मादका पर्याय हुन् ।

# उन्मार्गी-भगन्दर रोग
# (A kind of anal fistula)

(क) **सुश्रुत संहिता :**

**मूढेन मांसलुब्धेन यदस्थिशल्यमन्नेन सहाभ्यवहृतं**
**यदाऽवगाढपुरीषोन्मिश्रमपानेनाधःप्रेरितमसम्यगागतं गुदं**
**क्षिणोति तदा (तत्र, ततः) क्षतनिमित्तः कोथ**
**उपजायते, तस्मिंश्च क्षते पूयरुधिरावकीर्णमांसकोथे**
**भूमाविव जलप्रक्लिन्नायां क्रिमयः संजायन्ते,**
**ते भक्षायन्तो गुदमनेकधा पार्श्वतो दारयन्ति,**
**तस्य तैर्मार्गैः कृमिकृतैर्वातमूत्रपुरीषरेतांस्यभिनिः सरन्ति;**
**तं भगन्दरमुन्मार्गिणमित्याचक्षते॥**

मासुमा अति लोभगर्ने मूर्ख मानिसबाट खानासँगै खाइएका हाडका टुक्रा जब बाक्लो दिसासँगै मिसिएर अपानवायुबाट धकेलिँदै मलद्वारमा पुगी तेर्सो परेर बस्दछ तब यसले मलद्वारमा घाउ बनाउँदछ । घाउ भएपछि त्यो सड्न थाल्दछ र त्यसमा पीप र रगत थुप्रिन थाल्दछ । यस्तो मासुको सडेको घाउमा जसरी हिलोमा कीरा पर्दछन् त्यसैगरी कीरा पर्न थाल्दछ, मलद्वारको मासु खाने ती कीराले मलद्वारको भित्रको भागलाई फराकिलो बनाउन थाल्दछन् र त्यसपछि त्यही बाटो भएर हावा, पिसाब, दिसा र वीर्य पनि बाहिर निस्कन थाल्दछ । यस्तो भगन्दरलाई उन्मार्गी भगन्दर भनिन्छ ।

## उपकुश (गिंजाको एक रोग)
## (Gum-boil, a disease of the mouth)

(क) **अष्टाङ्ग हृदय :**

**उपकुशः पाकः पित्तासृगुद्भवः ॥ दन्तमांसानि दह्यन्ते रक्तान्युत्सेधवन्त्यतः ।**
**कण्डूमन्ति स्रवन्त्यस्रमाध्मायन्तेऽसृजि स्थिते ॥ चला मन्दरुजो दन्ताः पूति वक्त्रं च जायते ।**

पित्तविकार र रक्तविकारका कारण गिजा पाक्दछ, डाह हुन्छ, गिजा रातो भएर सुन्निछ र चिलाउँदछ । यस्तो अवस्था रहिरहन्छ र त्यसबाट रगत बहन थाल्दछ । रगत रोकिएपछि सुन्निन थाल्दछ, दाँत हल्लिन थाल्दछ हल्का पीडा हुन्छ र मुख गनाइरहन्छ । शीताद नामक रोगपछि हुने यो रोगलाई उपकुश भनिन्छ ।

(ख) **सुश्रुत संहिता, भावप्रकाश संहिता :**

**वेष्टेषु दाहः पाकश्च ताभ्यां दन्ताश्चलन्ति च । आघट्टिताः प्रस्रवन्ति शोणितं मन्दवेदनम् ॥**
**आध्मायन्ते स्रुते रक्ते मुखं पूति च जायते । यस्मिन्नुपकुशः स स्यात्पित्तरक्तसमुद्भवः ॥**

गिजामा डाह हुने पाक्ने, दाँत हल्लिन थाल्ने, अलिअलि दुखाउँदै रगत बग्न थाल्ने, रगत बगेपछि सुन्निने र मुख गनाउने यस्तो पित्तविकार र रक्तविकारका कारण हुने रोगलाई उपकुश भनिन्छ ।

# उपचार
# (Treatment)

**(क) शार्ङ्गधर संहिता :**

**न जन्तुः कश्चिदमरः पृथिव्याञ्जायते क्वचित्॥ अतो मृत्युरवार्यः स्यात् किन्तु रोगान्निवारयेत्।**

संसारका कुनै पनि प्राणी अमर छैनन्। त्यसैले मृत्युलाई हटाउन वा टाल्न कोही पनि समर्थ छैन। तर पनि वैद्यले रोगको उपचार गर्नु पर्दछ।

**याप्यत्वं याति साध्यश्च याप्यो गच्छत्यसाध्यताम्॥**
**जीवितं हन्त्यसाध्यस्तु नरस्याऽप्रतिकारिणः।**

सजिलै निको हुने खालका रोगको बेलैमा उपचार गरिएन भने त्यो लुकाउने वा रोक्ने स्थितिमा पुग्दछ। फेरी पनि उपचार गरिएन भने रोग निको नहुने स्थितिमा पुग्दछ, रोग निको नहुने स्थितिमा पुगेपछि त्यसले मानिसलाई मार्दछ।

**(ख) हारीत संहिता :**



**उपचारकृता दोषाः कृच्छ्रास्त यान्ति याप्यताम्।**
**याप्याः साध्यत्वमायान्ति कष्टसाध्यं भवेद्ध्रुवम्॥**
**सुखसाध्यः सुखी शीघ्रं स्यात् सुधीभिरुपक्रमैः।**
**साध्यासाध्यपरिज्ञाने ज्ञात्वोपक्रमणं तथा॥**

उपचार गर्नाले मुस्किलले ठिक हुने रोग पनि लुकाउन मिल्ने (यथास्थितिमा राख्ने) अवस्थामा पुग्दछ भने लुकाइएका रोग ठिक हुन्छ, यस्तो मुस्किलले ठिक हुने रोग (कष्टसाध्य) का बारेमा व्यवस्था छ। विज्ञ वैद्यले सामान्य रोग सजिलै निको पार्दछ। यसैले ठिक हुने नहुने विचार गरी त्यसपछि उपचार गर्नू।

**साध्य गतो यदा रोगो दोषशेषं न धारयेत्। दोषशेषोऽपि कष्टं स्यात्तस्माद्यत्नान्निकृन्तयेत्॥**
**यथा हि कालो दुष्टः स्यात् सूक्ष्मोऽग्नश्च यथा कणः।**
**स्वल्पस्तद्वत् क्रियाप्राप्तो गदो घोरतरो भवेत्॥**
**तथा दोषस्य शेषे तु शमनं याति चाल्पशः। दैवाद्यदुष्टतां याति यथाग्निः कुपितो भृशम्॥**

ठिक हुने खालका रोगमा पनि रोगको कुनै जरो बाँकी नराखी उपचार गर्नु पर्दछ, जरो राखे भोली दुःख हुन्छ। जसरी समय बलियो (दुष्ट) हुन्छ र आगोको सानो झिल्काले पनि सखाप बनाउँदछ त्यसैगरी

सानो रोग पनि भयङ्कर रोग हुन पुग्दछ । दोष बच्दा सानातिना रोग शान्त हुन्छ तर दैववश फेरि बल्भिएर त्यो आगो समान खतरनाक हुन पुग्दछ ।

**यथा काष्ठचय दूरात् प्राप्य घोरतरोऽग्निकः । तथा पथ्यस्य संयोगाद्भवेद्घोरतरो गदः ॥**
**कषायैश्च फलैश्चूर्णैः पिण्डलेहानुवासनैः । सर्वा क्रियाः भृशं व्यर्था न शमं याति चामयः ॥**

जसरी (सुकेका) काठमा परबाट आएको आगो पनि भयङ्कर खतरनाक हुन पुग्दछ त्यसैगरी अपथ्य हुँदा रोगपनि भयङ्कर हुन पुग्दछ । (यसबेला) काँढा, फल, धुलो, गोली, लेदो, अनुवासन, वस्तिकर्म (उपचार विधि): यी सबै व्यर्थ हुन जान्छन् र रोग निको हुँदैन ।

**तपस्वी च ब्राह्मणश्च स्त्रियो वा बालकस्तथा । दीनो वा दुर्बलो वापि प्राज्ञो वा पण्डितस्तथा ॥**
**महात्मा श्रोत्रियः साधुरनाथो वन्धुवर्जितः । एतान्व्याधिविनिग्रस्तान्प्रतिकुर्य्याद्विशेषतः ॥**

वैद्यले तपस्वी, ब्राह्मण, स्त्री, बालक, दीन, दुर्बल, बुद्धिमान, पण्डित, महात्मा, वेदपाठी, साधु, अनाथ र बन्धुबान्धवहीनको उपचारलाई प्राथमिकता दिनू ।

**राजा च सुधनी चैव मण्डलीको बलाधिपः । उपचार्य्योऽर्थसिद्धिः स्याद्वित्तं ग्राह्यं भयं न च ॥**

राजा, धनी, साहू, रजौटा, ठाकुर, सेनापति आदिको पनि उपचार गर्नू । जब ती स्वस्थ हुन्छन् तब तिसँग नडराईकन धन लिनु पर्दछ ।



**मध्यमा बणिजां पत्तिः पुरोधा ब्राह्मणादयः । भट्टो वा गणकाग्रण्यश्चिकित्स्यास्तु विशेषतः ॥**
**रोगग्रस्तैस्तु चैतेषु चिकित्सा कीर्तिकारिणी ॥**

यिभन्दा तल्ला स्तरका ब्यापारी, पुरोहित्याइँ गर्ने ब्राह्मणादि, वेदज्ञ वा भाट र ज्योतिषको उपचार पनि ध्यान लगाएर गर्नू किन कि यिनलाई उपचार गर्दा कीर्ति पाइन्छ ।

**व्याधश्चोरस्तथा म्लेच्छो वह्निदो मत्स्यबन्धकः ॥**
**बहुद्वेषो ग्रामकूटो बन्धकी मांसविक्रयी । एतेषां व्याधिग्रस्तानां नैव कुर्यात्प्रतिक्रियाम् ॥**
**एतेभ्यः स्वार्थसिद्धिर्नोपकारो हितमङ्गलम् । तेषां जीवाप्तसंजातो वैद्यो भवति दोषभाक् ॥**

कसाई, चोर, म्लेच्छ, आगो लगाउने, बल्छीमा माछा उन्ने, धेरैको शत्रु, चुगलीखोर,, व्यभिचारिणी र मासु बेच्ने-यिनलाई रोग लागे वैद्यले उपचार नगर्नू । किन कि यी कुराबाट स्वार्थ सिद्ध हुँदैन, न उपकार हुन्छ न त कल्याण नै । न मङ्गल नै हुन्छ, यिनलाई जीवनदान दिँदा वैद्य दोषी हुन पुग्दछ ।

## उपांजांह्वेका रोग
## (Ranula)

(क) **सुश्रुत संहिता :**

**जिह्वाग्ररूपः श्वयथुर्हि जिह्वामुन्नम्य जातः कफरक्तयोनिः ।**
**प्रसेककण्डूपरिदाहयुक्ता प्रकथ्यतेऽसावुपजिह्विकेति ॥**

जिभ्रोको टुप्पोको आकारको तथा जिभ्रोलाई माथितिर उचालेर उत्पन्न हुने, कफविकार र रक्तविकारका हुने, राल निकाल्ने, चिलाउने र डाह गराउने जुन् जिभ्रो मुनिको सुजन हुन्छ त्यसलाई उपजिह्विका भनिन्छ ।

# उपद्रव
# (Upadrava)

(क) **काश्यप संहिता :**

**पूर्वोद्भवनिमित्तेन योऽपरो जायते गदः॥ तमुपद्रवमित्याहुरतीसारो यथा ज्वरे ।**

अतिसार हुँदा जरो आएजस्तै पहिले उत्पन्न भएको रोगका कारण पछि उत्पन्न हुने रोगलाई "उपद्रव" भनिन्छ ।

(ख) **हारीत संहिता :**

**व्याधेरुपरि यो व्याधिः सोपद्रव उदाहृतः ।**

कुनै एउटा रोगले निकाल्ने अन्य सहायक रोगलाई उपद्रव भनिन्छ ।

(ग) **Upadrava :** A symptom, a supervenient disease (one brought on whilst a person is suffering from another).

# उपधातु
# (Metalloid)

**प्राचीन ग्रन्थका वचन :**

**(क) अर्कप्रकाश :**

**स्वर्णजं स्वर्णमाक्षिकं तारजं तारमाक्षिकम् । तुत्यं ताम्रभवं ज्ञेयं कसकं वंगसम्भवम्॥**
**रीतिश्चायसदोद्भूता सिन्दूरो नागसम्भवः । शिलाजत्वद्रि सम्भूतमेतं सप्तोपधातवः ॥**

सुनबाट सुनामखी, चाँदीबाट रुपामखी, तामाबाट तुथो, राङबाट काँस, जस्ताबाट पारो, सिसाबाट सिन्दूर र पहाडबाट शिलाजित गरी सात उपधातु निस्कने गर्दछन् ।

**पादांशं सैन्धव दत्वा उपधातून्विमर्दयेत् । दशधा चाम्लवर्गेण कटाहे लोहसम्भवे ॥**
**घर्षयेल्लोहदण्डेन प्रत्येकं च मुहूर्तकम् । यथा सिन्दूरवर्णत्वं धातूनां सम्प्रजायते ॥**
**अथवा दोषशान्त्यर्थ त्रिकट्वर्कबलार्कके । विभावयेद् द्वादशधा ततस्तान्पुटतः पचेत्॥**
**कपोतोत्वोर्विष्ठया वा लिप्त्वा तांस्तु विनिक्षिपेत् ।**
**अजामूत्रेऽथ तप्तांस्तान्क्वाथे कौलत्थजे तथा ॥**
**मधुनाऽभ्यज्य तैलेन मर्दसयत्वा पृथक् पृथक् । दशांशं टङ्कणं दत्वा पचेल्लघुपुटे ततः ॥**

जति धातु छ त्यसको एक चौथाई सिधेनुन मिसाई प्रत्येकलाई फलामको कराहीमा हालेर दश पटकसम्म अमिलो मिसाउँदै फलामकै पन्यूले एक एक घडीसम्म घोट्नू । अनि चुलोमा बसाली धातुको रङ सिन्दूर जस्तो नहुँदासम्म घोटी रहनू । तब यसलाई उत्तम भस्म ठानी चुलोबाट निकाल्नू । अथवा दोष हटाउन त्रिकटु र बलुको अर्कमा बाह्र बाह्र पटक भिजाउनू र पुटपाकका विधिले भस्म बनाउनू । अथवा धातुलाई परेबा र बिरालोको विष्ठामा लिपेर तातो पारी बाख्रीको मूत्र र गहतको काँढापानीमा डुबाउनू । अनि मह र तेलमा मोली दशौं भाग सुहागा मिसाएर लघुपुटमा भस्म बनाउनू ।

**दत्वा वह्निं दृढतरमुपधातून्सुधीः पचेत् । अभावे मुख्यधातूनां प्रयोज्या उपधातवः ॥**

बुद्धिमान् वैद्यले धातुको अभावमा अत्यन्त कडा आगोमा यी उपधातुलाई पकाई भस्म निकाल्नु पर्दछ ।

**(ख) धन्वन्तरि निघण्टु :**

**सप्तोपधातवः स्वर्णमाक्षिकं तारमाक्षिकम् । तुत्थं कांस्यं च रीतिश्च सिन्दूरश्च शिलाजतु ॥**

स्वर्णमाक्षिक (सुनामखी), तारमाक्षिक (रूपामखी), तुत्थ (नीलोतुथो), काँस, रीति (सिसा), सिन्दूर र शिलाजतु (शिलाजित) : यी सात उपधातु हुन् ।

**(ग) भावप्रकाश निघण्टु :**

**सप्तोपधातवः स्वर्णमाक्षिकं तारमाक्षिकम् । तुत्थं कांस्यं च रीतिश्च सिन्दूरश्च शिलाजतु ॥**
**उपधातुषु सर्वेषु तत्तद्धातुगुणा अपि । सन्ति किन्त्वेषु ते गौणास्तत्तदंशाल्पभावतः ॥**

सुनामक्खी, रुपामक्खी, तुथो, काँस, पित्तल, सिन्दूर र शिलाजित : यी सात उपधातु हुन् । सबै उपधातुमा त्यही त्यही धातुका गुण हुन्छन् । तर धातुको भाग कम हुने हुनाले यिनमा कम गुण हुन्छ ।

**(घ) शार्ङ्गधर संहिता :**

**माक्षिकन्तुत्थकाभ्रौ च नीलाञ्जनशिलालकाः ॥ रसकश्चेति विज्ञेया एते सप्तोपधातवः ।**

सुनामक्खी, निलोतुथो, अभ्रक, नीलाञ्जन (सुर्मा ?), मनशिला, हरिताल (अल वा आल) र रसक (फिटकिरी वा खपरिया?) यी सात उपधातु हुन् ।

## उपनाह (आँखाको एक रोग)
## (An eye disease)

(क) **अष्टाङ्ग हृदय :**

**कफेन शोफस्तीक्ष्णाग्रः क्षारबुद्बुदकोपमः । पृथुमूलबलः स्निग्धः सवर्णो मृदुपिच्छिलः ॥**
**महानपाकः कण्डूमान् उपनाहः स नीरुजः ।**

आँखामा कफविकारका कारण तिखो टुप्पो हुने, पाक्दै जाँदा क्षार तरल वस्तुको थलथले फोको जस्तो हुने, जरा फराकिलो, बलियो र कठोर, चिल्लो, समान वर्णको, कोमल, लेस्याइलो, अति ठूलो, नपाक्ने, चिलाउने र नदुख्ने खालको जुन् सुजन हुन्छ त्यसलाई उपनाह भनिन्छ ।

(ख) **भावप्रकाश संहिता :**

**ग्रन्थिर्नाल्पो दृष्टिसन्धावपाकी कण्डूप्रायो नीरुजश्चोपनाहः ॥**

आँखाको जोर्नी (कुना) मा ठूलो, कम पाक्ने, अति चिलाउने, साह्रो, रातो, कम दुख्ने जुन गाँठो पलाउँदछ त्यसलाई उपनाह भनिन्छ ।

# उपरत्न
# (Semi-precious stones)

**प्राचीन ग्रन्थका वचन :**

(क) **अर्कप्रकाश :**

**उपरत्नानि काचश्च कर्पूरश्मा तथैव च । मुक्तशुक्तिस्तथा शङ्खइत्यादीनि बहून्यपि॥**

काँच, कपूर, पत्थर, मोतिको सिपी, शङ्ख आदि धेरै उपरत्न हुन्छन् ।

**वैक्रान्तो मौक्तिकी शुक्तिः रक्षोमरकतं लक्ष्युः । लाजागरुडजन्मा च स्फटिकारत्न जातयः॥**

विक्रान्त, मोतिको सिपी, रक्ष, मरकतमणि, लहसुन, लाहा, गारुडमणि र स्फटिक पनि उपरत्न हुन् ।

(ख) **धन्वन्तरि निघण्टु :**

**उपरत्नानि काचश्च कर्पूराश्मा तथैव च । मुक्ताशुक्तिस्तथा शङ्ख इत्यादीनि बहून्यपि॥**

काँच, कर्पूराश्म, मुक्ताशुक्ति, शङ्ख आदि अनेक थरी उपरत्न हुन्छन् ।

(ग) **भावप्रकाश निघण्टु :** 

**उपरत्नानि काचश्च कर्पूराश्मा तथैव च । मुक्ताशुक्तिस्तथा शङ्ख इत्यादीनि बहून्यपि॥**
**गुणा यथैव रत्नानामुपरत्नेषु ते तथा । किन्तु किञ्चित्ततो हीना विशेषोऽयमुदाहृतः॥**

काँच, कर्पूराश्म, मोतीको सीपि, शङ्ख आदि धेरै उपरत्नहरू छन् । जे गुण रत्नका हुन्छन् उपरत्नका पनि तिनै गुण हुन्छन् । तर गुणको मात्रा कम हुन्छ, फरक यत्ति हो ।

(घ) **राज निघण्टु :**

**स्फटिकश्च सूर्यकान्तो वैक्रान्तश्चन्द्रकान्तकः॥ राजावर्तः पेरोजं स्यादुभौ बाणाश्च सङ्ख्यया॥**

स्फटिक, सूर्यकान्त, वैक्रान्त, चन्द्रकान्त, राजावर्त र पेरोज : यी उपरत्नहरू हुन् । राजावर्त र पेरोज नामका धातु पाँच-पाँच किसिमका हुन्छन् ।

**वैदूर्यपुष्परागप्रवालगोमेदकादयोऽर्वाञ्चः॥**
**गोमेदप्रवालवायव्यं देवेज्यमणीन्दुतरणिकान्ताद्याः ।**
**नानावर्णगुणाढ्या विज्ञेया स्फटिकजातयः प्राज्ञैः॥**

वैदुर्य, पुष्पराज, मुगा, गोमेद आदिलाई उपरत्न भनिन्छ । गोमेद र मुगालाई वायुजन्य भनिन्छ । पुष्पराज , मोति, माणिक आदि अनेक रङ र गुणका हुन्छन् । विज्ञहरूले यी स्फटिक जातिका रत्न हुन् भनी बताएका छन् ।

# उपरस
# (Secondary Mineral)

## (क) के.यन.स्वामी (उपरस) :

१.आयुर्वेदमा पारोबाहेकको तर पारोको समान गुण भएको (गन्धक, सिम्रिक, अभ्रख, मैनसिल, सुर्मा, तुथो, लाजावर्द, चुम्बक, फिटि्करी, शङ्ख, गेरु, कौडी, हीराकसी, बालुवा, चिनियाँ माटो आदि) रस ।
२.फिका स्वाद ।

## (ख) धन्वन्तरि निघण्टु :

**गन्धो हिङ्गुलमभ्रतालकशिलाः स्रोतोञ्जनं टङ्कणम् ।**
**राजावर्तकचुम्बकौ स्फटिकया शङ्खः खटी गैरिकम्॥**
**कासीसं रसकं कपर्दसिकताबोलाश्च कङ्कुष्ठकम् ।**
**सौराष्ट्री च मता अमी उपरसा सृतस्य किञ्चिद्गुणैः॥**

गन्धक, हिङ, अभ्रख, ताल, स्रोतोञ्जन, टङ्कण, राजावर्त, चुम्बक, स्फटिक, शङ्ख, खटी, गैरिक, कासीस, रसक, कपर्द, सिकता, बोल, कङ्कुष्ठ, सौराष्ट्री : यी उपरस हुन् । यिनमा केही कम गुण हुन्छ ।

## (ग) नेपाली बृहत् शब्दकोश (उपरस) :



पारोजस्तै गुणकारी मानिएको रस वा खनिज पदार्थ ।

## (घ) भावप्रकाश निघण्टु :

**गन्धो हिङ्गुलमभ्रतालकशिलाः स्रोतोऽञ्जनं टङ्कणम्**
**राजावर्तकचुम्बकौ स्फटिकया शङ्खः खटी गैरिकम् ।**
**कासीसं रसकं कपर्दसिकताबोलाश्च कङ्कुष्ठकम्**
**सौराष्ट्री च मता अमी उपरसाः सूतस्य किञ्चिद्गुणैः॥**

गन्धक, हिङ्गुल, अभ्रक, हरिताल, मनशिला, गाजल विशेष, स्वाग, राजावर्त नामक पत्थर (यूँ ?), चुम्बक, स्फटिक, शङ्ख, खरी, गेरु, हीराकसी, फिटकिरी, कौडी, बालुवा, खोटो विशेष (बोला), कङ्कुष्ठ र सौराष्ट्रको माटो विशेष : यी सबै उपरस हुन् ।

## (ङ) राजनिघण्टु :

**खेचराञ्जनकङ्कुष्ठगन्धालगैरिकक्षितीः । शैलेयाञ्जनसम्मिश्राः शंसन्त्युपरसान् बुधाः॥**

खेचर (लौह-नुन विशेष), अञ्जन (सुर्मा बनाइने खनिज पदार्थ विशेष), कङ्कुष्ठ (पहाडी माटो विशेष), गन्धाल (?), गैरिक (गेरु), क्षिती (मातृका ?) र शैलेयाञ्जन : यिनलाई उपरस भनिन्छ ।

## उपशीर्षक (टाउकाको रोगविशेष)
## (A kind of disease of the head)

**(क) अष्टाङ्ग हृदय :**

**कपाले पवने दुष्टे गर्भस्थस्यापि जायते । सवर्णो नीरुजः शोफस्तं विद्याद् उपशीर्षकम् ॥**

गर्भावस्थामै यदि कपाल भित्र वायुको विकृति हुन्छ भने त्यसले (चाँडै) कपाल फुल्ने गर्दछ यसबेला न रङमा कुनै विकृति हुन्छ न त कुनै किसिमको पीडा नै । यस्तो रोगलाई उपशीर्षक भनिन्छ ।

## उपाङ्ग चिकित्सा
## (Upaanga Chikitsha)

(क) **हारीत संहिता :**

**छिन्नं भिन्नं तथा भग्नं क्षत पिच्चितमेव च । तेषां दग्धप्रतीकारः प्रोक्तश्चोपाङ्गसंज्ञकः ॥**

छेडिएका, च्यातिएका, भाँचिएका, क्षय भएका, पिसिएका र जलेकाको उपचारलाई उपाङ्गचिकित्सा भनिन्छ ।

# उपोदकां (पवैं)
# (Indian Spinach)

**परिभाषा :**

(क) **कुलचन्द्र शर्मा :** उपोदका (उपोदिका, उपोदीका) भनेको पवै हो ।

(ख) **नेपाली बृहत् शब्दकोश :** (१) पवै : पानका जस्ता नरम र कोमल पात हुने, कलेजी रङका फूल फुल्ने, ऋषिपञ्चमीमा बर्त बस्नेहरूले तरकारीका रूपमा खाने एक लहरो । (२) बन पवै : एक जातको जङ्गली पवै; वनउपोदकी । (३) वनउपोदकी : वनमा हुने एक जातको पवै; बनपवै । (३) सानो पवै : सानो जातको पवै ।

(ग) **डा. चुनेकर :** पवैलाई अंग्रेजीमा Indian Spinach तथा ल्याटिन भाषामा *Basella rubra* Linn. भनिन्छ । सेतो र डाँठ हुने गरी यो दुई प्रकारको हुन्छ ।

(घ) **विश्वनाथ द्विवेदी शास्त्री :** पवैलाई अंग्रेजीमा Red Malabar Night Shods तथा ल्याटिन भाषामा *Bassela Rubra* वा *Bassela Alba* भनिन्छ । यसको रातो वर्णको लहरा हुन्छ । मोटा, हरिया र छिप्पिएपछि राता टीका हुने पात हुन्छन् । केराउका जस्ता गोला फल लाग्दछन् । यी फल पाकेपछि काला र रसिला हुन्छन् । यसलाई फुटाउँदा रातो रस निस्कन्छ ।

(ङ) **आचार्य बालकृष्ण :** यसको वानस्पतिक नाम *Basella alba* Linn. वा *Basella rubra* Linn. हो । पवैलाई अंग्रेजीमा Red vine spinach, Indian Spinach वा Vine spinach भनिन्छ ।

(च) **के.यन.स्वामी :** (१) मूलपोतिका : मूला । (२) क्षुद्रवल्ली, क्षुत्रपोतिका : सानो जातको पवै । (३) पोतिका : पवैको लहरो । (४) पूतिका : पवै ।



**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **कैयदेव निघण्टु :**

**पोतक्युपोदका मत्स्यकाली सुतार्गसङ्कटी । फलम्बिका तु वृन्ताका तुरङ्गी कण्टकी तथा॥**
**मदघ्नी पिच्छिला ज्ञेया वृन्ता मदलिका मता । उपोदका हिमा स्निग्धा स्वादुपाकरसा सरा॥**
**सक्षारा श्लेष्मला बल्या निद्राशुक्रातिपुष्टिदा । अकण्ठ्या पिच्छिला हन्ति रक्तपित्तमदानिलान्॥**

पोतकी, उपोदकी, मत्स्यकाली, सुतार्गसङ्कटी, फलम्बिका, वृन्ताका, तुरङ्गी, कण्टकी, मदघ्नी, पिच्छिला, वृन्ता र मदलिका : यी पवैका पर्यायवाची नाम हुन् । यो शीतवीर्यको, चिल्लो, शुरुमा र पचेपछि गुलियो, मलमूत्रलाई तलतिर सार्ने, केही क्षारयुक्त, कफविकार गर्ने, बलदायक, निद्रा दायक, वीर्यवर्धक , अति पुष्टिदायक, घाँटीका लागि फाइदा नगर्ने, लेस्याइलो तथा रक्तपित्त, नसा (मद) र वातविकार नाश गर्ने गुणको हुन्छ ।

**भूम्युपोदकिति भमरी नाम ।**
**मधुरा रसपाकाभ्यां वातश्लेष्मकृमिप्रदा । वृष्या पित्तप्रशमनी शीतला भूम्युपोदका॥**

भुईं पवैलाइ भूम्युपदोका वा भमरा भानेन्छ । यो शुरुमा र पचपाछ गुलियो; वातविकार, कफविकार र कीरा बढाउने; वीर्यवर्धक, पित्तविकारलाई शान्त पार्ने र शीतवीर्यको हुन्छ ।

(ख) **धन्वन्तरि निघण्टु :**

**पोतकी पोतका प्रोक्ता मत्स्या काली सुरङ्गिका ।**
**पोतकी शीतला स्निग्धा श्लेष्मला वातपित्तजित्॥**

पोतकी, पोतका, मत्स्या, काली र सुरङ्गिका यी पोतकीका पर्यायवाची नाम हुन् । यो शीतवीर्यको, चिल्लो, कफविकार गर्ने तथा वातविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ ।

(ग) **भावप्रकाश निघण्टु :**

**पोतक्युपोदिका सा तु मालवाऽमृतवल्लरी । पोतकी शीतला स्निग्धा श्लेष्मला वातपित्तनुत्॥**
**अकण्ठ्या पिच्छिला निद्रा शुक्रदा रक्तपित्तजित् । बलदा रुचिकृत्पथ्या बृंहणी तृप्तिकारिणी॥**

पोतकी, उपोदिका, मालवा र अमृतवल्लरी : यी पवैका संस्कृत पर्यायवाची नामहरू हुन् । पवैले शीतल गर्दछ । यो चिल्लो, कफकारक तथा वातविकार र पित्तविकार नाशक हुन्छ । यो घाँटीका लागि त्यति हितकर मानिन्न । पवै लेस्याइलो हुन्छ । यसले निद्रा र शुक्र बढाउँदछ । पवैले रक्तपित्त नाश गर्दछ । यसले बल दिन्छ र रुची जगाउँदछ । यो पथ्य, पौष्टिक र तृप्तिदायक हुन्छ ।

(घ) **मदनपाल निघण्टु :**

**पोतकी पोतका प्रोक्ता मत्स्या काली सुरङ्गिका ।**
**पोतकी शीतला स्निग्धा श्लेष्मला वातपित्तजित्॥**

पोतकी, पोतका, मत्स्या, काली र सुरङ्गिका : यी पवैका संस्कृत पर्यायवाची नामहरू हुन् । पवै शीतवीर्यको, चिल्लो, कफविकार गर्ने तथा वातविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ ।

**अकण्ठ्या पिच्छिला निद्राशुक्रदा रक्तपित्तनुत् ।**
**पोतक्या पोदिका दिव्या शुक्रदा रक्तपित्तजित्॥**

पवै घाँटीका लागि हितकर हुँदैन । यो लेस्याइलो हुन्छ । यसले निद्रा लगाउँदछ र वीर्य उत्पन्न गर्दछ । यसले रक्तपित्त नाश गर्दछ । पोतक्या, पोदिका र दिव्या : यी अर्को थरी पवैका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले वीर्य बढाउँदछ र रक्तपित्तलाई जित्दछ ।

(ङ) **राज निघण्टु :**

**उपोदकी कलम्बी च पिच्छिला पिच्छिलच्छदा । मोहिनी मदशाकश्च विशालाद्या ह्युपोदकी॥**

**उपोदकी कषायोष्णा कटुका मधुरा च सा । निद्राऽऽलस्यकरी रुच्या विष्टम्भश्लेष्मकारिणी ॥**

उपोदकी, कलम्बी, पिच्छिला, पिच्छिलच्छदा, मोहिनी, मदशाक र विशाल-उपोदकी (वल्ल्युपोदकी) : यी पवैका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, उष्णवीर्यको, पिरो र गुलियो हुन्छ । यसले निद्रा लगाउँदछ र आलस्य बनाउँदछ । यो रुचिकर, विष्टम्भी र कफविकार गर्ने गुणको हुन्छ ।

**उपोदक्यपरा क्षुद्रा सूक्ष्मपत्रा तु मण्डपी । रसवीर्यविपाकेषु सदृशी पूर्वया स्वयम् ॥**

क्षुद्रोपोदकी, सूक्ष्मपत्रा र मण्डपी : यी सानो पवैका संस्कृत पर्यायवाची नामहरू हुन् । रस, वीर्य र विपाकमा यो पवै सरह हुन्छ ।

**उपोदकी तृतीया च वन्यजा वनजाह्वया । वनजोपोदकी तिक्ता कटूष्णा रोचनी च सा ॥**

अर्को वनमा हुने वन्यजा र वनजाह्वया नामको पवै तीतो, पिरो, उष्णवीर्यको र रोचनी हुन्छ ।

**मूलपोती क्षुद्रवल्ली पोतिका क्षुद्रपोतिका । क्षुपोपोदकनाम्नी च वल्लिः शकटपोतिका ॥**
**मूलपोती त्रिदोषघ्नी वृष्या बल्या लघुश्च सा । बलपुष्टिकरी रुच्या जठरानलदीपनी ॥**

मूलपोती, क्षुद्रवल्ली, पोतिका, क्षुद्रपोतिका, क्षुपावल्लि, उपोदकवल्लि र शकटपोतिका : यी नाम पवै विशेष वा पवैका लहराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो त्रिदोष नाशक, वीर्यशाली, बलदायक र पचाउन हलुका हुन्छ । यसले बल र पुष्टि दिन्छ । यो रुचिकर र जठराग्निलाई बाल्ने गुणको हुन्छ ।

**(च) राजवल्लभ निघण्टु :**

**कलम्बी स्तन्यदा प्रोक्ता मधुरा शुक्रकारिणी ॥५०॥**

पवैको साग दूध बढाउने, गुलियो र शुक्र बढाउने गुणको हुन्छ ।

**उपोदिका सरा स्निग्धा बल्या श्लेष्मकरी हिमा । स्वादुपाका रसा वृष्या वातपित्तमदापहा ॥**

पवैको साग मलमूत्रलाई तलतिर सार्ने, चिल्लो, बलदायक, कफविकार गर्ने, शीतवीर्यको, पचेपछि गुलियो, वीर्यवर्धक तथा वातविकार, पित्तविकार र नसा नाशगर्ने गुणको हुन्छ ।

**(छ) शालिग्राम निघण्टु :**

**उपोदकी कलम्बी च पिच्छिला पिच्छिलच्छदा । मोहिनी मदशाकश्च विशाला वल्लिपोदकी ॥**

उपोदकी, कलम्बी, पिच्छिला, पिच्छिलच्छदा, मोहिनी, मदशाक, विशाला र वलिपोदकी : यी पवैका पर्यायवाची नाम हुन् ।

**उपोदकी कषायोष्णा कटुका मधुरा च सा । निद्रालस्यकरी रुच्या विष्टम्भश्लेष्मकारिणी ॥**

पवै टर्रो, उष्णवीर्यको, पिरो, गुलियो, निद्रा अल्छीपन निकाल्ने, रुचिप्रद तथा कब्जियत र कफविकार गर्ने गुणको हुन्छ ।

**उपोदिका सरा स्निग्धा बल्या श्लेष्मकरी हिमा । स्वादु पाकरसा वृष्या वातपित्तमदापहा ॥**

पवै मलमूत्रलाई तलतिर सार्ने, चिल्लो, बलदायक, कफविकार गर्ने, शीतवीर्यको, शुरुमा र पचेपछि गुलियो, वीर्यवर्धक तथा वातविकार, पित्तविकार र नसा नाश गर्ने गुणको हुन्छ ।

**उपोदकी द्वितीया च क्षुद्रान्या वनजा तथा । चतुर्थी मूलपोती च गुणैः सर्वाः समाः स्मृताः ॥**

दोश्रो सानो जातको, तेश्रो वन उपोदकी र चौथो मूलपोती भन्ने पनि हुन्छ । यी सबै समान गुणका हुन्छन् ।



उपोदिका | Basella alba L. 1753 - Indischer Spinat - Indian Spinach
[Bildquelle: Hortus malabaricus VII. Fig. 24, 1686]



उपोदिका | Basella alba L. 1753 - Indischer Spinat - Indian Spinach, Maharashtra [Bildquelle: dinesh_valke.]



Basella alba L. 'Rubra' - Indischer Spinat, [Bildquelle: Wikipedia]



उपोदिका | Basella alba L. 1753 - Indischer Spinat - Indian Spinach
[Bildquelle: Shizhao / Wikimedia. -- GNU FDLicense]



उपोदिका | Basella alba L. 1753 - Indischer Spinat - Indian Spinach [Bildquelle: Shizhao / Wikimedia. -- GNU FDLicense]

## उब्जनी अनुसार अनाजमा हुने गुण
## (Quality of cereals)

**(क) राज निघण्टु :**

**धान्यं वापितमुत्तमं तदखिलं छिन्नोद्भवं मध्यमं**
**ज्ञेयं यद्यदवापितं तदधमं निःसारदोषप्रदम् ।**
**दग्धायां भुवि यत्नतोऽपि विपिने ये वापिताः शालयो**
**ये च छिन्नभवा भवन्ति खलु ते विण्मूत्रबन्धप्रदाः ॥**

रोपिएका सबै अनाज उत्तम हुन्छन् । काटेर पुनः नाभो उम्रेका अनाज मध्यम हुन्छन् । त्यसै उम्रेका अनाज निम्न गुणका, सारहीन र दोषदायक हुन्छन् । सुक्खा माटोमा वा वन आदिमा प्रयत्नपूर्वक रोपिएका शालि आदि र काटेको ठाउँमा पुनः उम्रेका वा पलाएका शालि आदि निश्चय नै मलमूत्रलाई रोक्ने गुणका हुन्छन् ।

**क्षारोदकसमुत्पन्नं धान्यं श्लेष्मरुजापहम् ॥ सुस्निग्धमृत्तिकोद्भूतं धान्यमोजोबलावहम् ॥**
**बलपुष्टिप्रभावघ्नं वालुकामृत्तिकोद्भवम् ॥**

नुनिलो पानीमा उत्पन्न हुने अनाजले कफविकार नाश गर्दछ । चिल्लो माटोमा उब्जने अनाजले ओज र बल बढाउँदछ । बलौटे माटोमा उब्जा हुने अनाजले बल र पुष्टि नाश गर्दछ ।

**(ख) चरक संहिता :**

**यद्यदागच्छति क्षिप्रं तत्तल्लघुतरं स्मृतम् ।**

जति चाँडो फल्ने अन्न हुन्छ त्यो त्यति नै बढी पचाउन सहज हुन्छ ।

## ऊर्वी (शरीरको मर्मस्थलविशेष)
## (The middle of the thigh)

(क) **अष्टाङ्ग हृदय :**

**उर्व्यूरुमध्ये तद्वेधात्सक्थिशोषोऽस्रसङ्क्षयात् ।**

तिघ्राको बीच भागमा उर्वी नामक मर्मस्थल हुन्छ । त्यहाँ काटिए रगत बहेर तिघ्रा सुक्दछ ।

(ख) **सुश्रुत संहिता :**

**ऊरुमध्ये ऊर्वी नाम, तत्र शोणितक्षयात् सक्थिशोषः;**

तिघ्राको बीच भागमा ऊर्वी नामक मर्मस्थल हुन्छ । त्यहाँ चोट लाग्नाले रगत बगेर गोडा सुक्दछ ।

# उशीर (खसखस, लामज्जक)
# (Vetiver grass)

खसखस, खसखसका जरा र लामज्जकका विषयमा मत-मतान्तर देखिएकाले यी सबै कुरा यहाँ राखिएको छ ।

**परिभाषा :**

(क) **कुलचन्द्र शर्मा :** वीरतर र वीरण भनेको उशीर (खश) हो । लामज्जक, अमृणाल, अभय, नलद आदि भनेको उशीरका जराका नाम हुन् ।

(ख) **के.यन.स्वामी :** (१) अभय : उशीर वा खसखसको जरा । (२) अमृणाल : सेतो उशीर । (३) अवदाह, सेव्यम् : उशीर । (४) उशीरम् : खसको जरा वा पहेँलो उशीर । (५) कुतृण : जलकुम्भी । नेपाले उशीर वा कुशजस्तो पिर्रे । हरकट्टा । (६) कत्तृण : नेपाले उशीर वा कुशजस्तो पिर्रे । हरकट्टा । (७) रोहिष : नेपाले उशीर । अदुवाको जस्तो बास्ना आउने पिर्रे झार । (८) ध्यामक : कतारा । नेपालको उशीर । (९) मुद्गल : घाँसविशेष । (१०) दवदग्धक, दृढकाण्डा, दृढच्छद : नेपाले उशीर । (११) दीर्घरोहिष, तिक्तसार, कुत्सित : नेपाले ठुलो उशीर । (१२) दीर्घनाल : ठुलो जातको उशीर । (१३) नलद, लघु, लघुलय : पहेँलो उशीर ।

(ग) **नेपाली बृहत् शब्दकोश :** (१) उशीर : जरो सुगन्धित हुने कुशका जातको घाँस; खसखसको बोट । खसखस नामक झारको जरालाई उशीर भनिन्छ । (१) खस : उशीरका जरा । (२) खसखस :- एउटै डाँठमा बग्रेल्ती लामा लामा पात हुने, कुशका जस्ता पहेँला फूल फुल्ने, बास्ना आउने र जरा हुने एक जातको घाँस; उशीर । त्यसैका जरा । नीरज (३) पोस्त : खसखसको दाना । (४) खस : उशीरको जरा । (५) हरकट्टा : फेदैबाट लामालामा उत्तिसका जस्ता पात निस्कने र बीचका डाँठका टुप्पामा सेतो भुवा भएका पहेँला फूल फुल्ने सुगन्धी जरा हुने, आयुर्वेदअनुसार घाउखटिरा आदिलाई शमन गर्ने एक झार ।



(घ) **डा. चुनेकर :** यसलाई अंग्रेजीमा Cuscus grass तथा ल्याटिन भाषामा *Andropogon muricatus* Retz. वा *Vetiveria zizanioides* (Linn.) Nash भनिन्छ । लामज्जक पनि एक शङ्कास्पद वनस्पति हो । भावप्रकाशले यसलाई पहेँलो उशीरजस्तै घाँसविशेष भनेका छन् । कसैले लामज्जकको ल्याटिन नाम *Cymbopogon jwarankusa* भनेका छन् । श्रीयुत् यादव यसलाई भूतृण मान्दछन् ।

(ङ) **विश्वनाथ द्विवेदी शास्त्री :** यसलाई ल्याटिन भाषामा *Andropogan muricatum* भनिन्छ । लामज्जकको वास्पतिक नाम *Andropogan Nardus* हो । यसका बारेमा मतभेद भएपनि जलीय प्रदेशमा हुने, घाँसजस्तो, पहेँलो रङको तथा लामा र सुन्दर काण्ड हुने झारलाई लामज्जक मान्नु उपयुक्त हुन्छ ।

(च) **अष्टाङ्गहृदयकोश :** (उश्यते काम्यते इत्युशीरम्) । उशीरलाई अंग्रेजीमा Sweet rush वा Cuscus grass भनिन्छ ।

(छ) **मदनपाल निघण्टुका टीकाकार पं.रामप्रसाद वैद्य :** कसैले यसलाई खसखसको एक जात भनेका छन् । खसको जरा साना हुन्छन् तर यसका जरा ठूला हुन्छन् पनि भनिएको छ ।

(ज) **आचार्य बालकृष्ण :** उशीरलाई अंग्रेजीमा Vetiver grass, Khus-khus grass, Khus-khus भनिन्छ । यो Poaceae परिवारमा पर्दछ । यसका वानस्पतिक नाम *Vetiveria*

*zizanioides (Linn.), Nash, Syn-Andropogon muricatus Retz. Chrysopogon zizanioides* (Linn.) Robert) हुन् । नेपालीमा यसलाई खस भनिन्छ । वीरण, वीर, बहुमूलक, उशीर, नलद, सेव्य, अमृणाल, समगन्धक, जलवास : यी यसका संस्कृत नाम हुन् । भूतृण वा लेमन ग्रासको वानस्पतिक नाम *Cymbopogon citratus* DC. हो । यस बाहेक अनेकौं प्रजातिकामध्ये तीन जातका अन्य भूतृणलाई पनि ओखतीमा प्रयोग गरिन्छ । ती तीन जात लामज्जक *(Cymbopogon jwarancusa* (Jones.)Schult.), सुगन्धक *(Cymbopogon pendulus* (Nees ex Steud.) W.Watson) र रोहिष झार (*Cymbopogon schoenanthus* (Linn.) Spreng.) हुन्

(झ) **डा. साङ्ख्यधर :** नेपाले उशीर र ठूलो नेपाले उशीरको पहिचानमा समान मत छैन । उशीरको अंग्रेजी नाम Khas-Khas grass वा cus-cus grass हो । लामज्जक भूतृणकै एक जाति हो । यसको वानस्पतिक नाम *Cymbopogon jwarancusa* (Jones.) Schult.हो ।

(ञ) **कामत द्वय :** (१) नेपाले उशीर Gramineae वा Poaceae परिवारमा पर्दछ । नेपाले उशीरका *Cymbopogon Schoenanthus (L). Spreng., Andropogon schoenanthus* Linn., *Andropogon martini* Roxb. वा *Cymbopogon martini* Stapf. (Roxburgh, Agharkar). वानस्पतिक नाम हुन् । यसलाई अंग्रेजीमा Geraninum grass वा Rusa oil grass. भनिन्छ । (२) कपट एक किसिमको पहिचान हुन नसकेको घाँस हो । कसैले यसलाई मराठी भाषामा रामबाण भनिने *Typha elephantina* Roxb. वानस्पतिक नाम भएको बोट हो पनि भनेका छन् ।

(ट) **फर्माकोपिया :** कत्तृणका सबै भाग औषधीमा प्रयोग हुन्छ । यो Poaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम Cymbopogon citratus (DC.) Stapf syn: Andropogon citratus DC. हो । यसलाई अंग्रेजीमा Lemon grass भनिन्छ । यो एक मात्रामा ३-६ ग्रामसम्म ओखतीमा प्रयोग हुन्छ । यसका संस्कृत नाम भूतृण, गुह्यबीज, भूतिक आदि हो ।

(ठ) **Journal of Plant Resources, Vol. 17, No. 1, Government of Nepal, 2019 :** यसलाई अंग्रजीमा Lemongrass भनिन्छ । यो Poaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Cymbopogon citratus* (DC.) Stapf हो ।

(ड) **Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 :** यसलाई अंग्रेजीमा Lemongrass भनिन्छ । यो Angiosperm समूह अन्तर्गतको Poaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Cymbopogon flexuosus* (Nees. ex Steud.) W.Watson हो ।

(ढ) **हिन्दी विश्वकोश :** लामज नामक झार । खस, उशीर । लामज झार प्रायः बाह्रै महिना पाइन्छ । यो केही पहैँलो जातको पनि हुनाले पहैँले (पीलावाला) पनि भनिन्छ । यसको जरातिरको भाग मोटो हुन्छ र यसमा झुस लागेको हुन्छ । यसको डाँठ सिधा हुन्छ र यसमा चिल्ला, पातला र लामा पात लागेका हुन्छन् ।

(ण) **धन्वन्तरि वनौषधि विशेषाङ्क, भाग ६ :** लामज्जक कपूरादिवर्गभित्रको धान्यादि कुलको एक वर्ष बाँच्ने खस जातिको सुगन्धित झार हो । हेर्दा यो खस जस्तै देखिन्छ । यसको पातलो डाँठ हुन्छ । जरैबाट निस्केका पतका मसिना झ्याम्टा र सेता फूलका झुसयुक्त रेसाले यसको पहिचान हुने गर्दछ । यसको जरा लामो र पातलो हुन्छ । गुलाफको अत्तर जस्तै बास्ना आउँदछ। स्वाद पनि गुलियो, तितो र तिक्खर हुन्छ । सुकाइएको विरुवा सेतो हुन्छ ।

यसको फेद सामान्य मोटो तलतिर भुस भएको, मासिना पात, पातको टुप्पातिर तिखो भएको, फूलका डाली पनि सिधा र तिखा, आयताकार हुन्छ । काण्ड पातले ढाकेको हुन्छ । पातको फेदतिरको भाग पहेँलो हुन्छ । यसको फूल हल्का जामुनुको रङ जस्तो वा खरानी रङको हुन्छ । जाडोयाममा फूल र फल लाग्दछ ।

यो ८ देखि १० हजार फिटको उचाईमा नदीका किनारतिर तथा सुक्खा मरुभूमितिर पनि हुन्छ । यसको वानस्पतिक नाम *Cymbopogon jwarancusa* Jones हो । अर्को वानस्पतिक नाम *Andropogon Jwarancusa* Roxb. हो । यसको जरा र फूलमा एक किसिमको हल्का तर कडा सुगन्ध हुन्छ । यसैबाट तेल निकालिने गर्दछ । जुन अति नै सुगन्धित हुन्छ । यसको मात्रा ५-७ माशा हो । यसले गर्दा टाउको दुखेमा सेतो चन्दन दलेमा ठिक हुन्छ ।

**प्राचीन ग्रन्थका वचनहरू :**

**(क) अभिधान मञ्जरी :**

**प्राहुरुशीरं वीरणमभयं भद्रश्रियं च वालाख्यम् ।**
**बहुमूलं लामज्जं सेव्यं समगन्धकं मृणालमिति ॥**

उशीर, वीरण, अभय, भद्रश्रिय, वालाख्य, बहुमूल, लामज्ज, सेव्य, समगन्धक र मृणाल : यी उशीरका पर्यायवाची नाम हुन् ।



**(ख) अभिधान रत्नमाला :**

**वीरणाभयलामज्जसेव्योशीरमृणालकम् । वीरं वीरणमूलञ्च बहुमूलं रणप्रियम् ॥**

वीरण, अभय, लामज्ज, सेव्य, उशीर, मृणालक, वीर, वीरणमूल, बहुमूल र रणप्रीय : यी उशीरका पर्यायवाची नाम हुन् ।

**(ग) अमरकोश :**

**स्याद्वीरणं वीरतरं मूलेऽस्योशीरमस्त्रियाम् । अभयं नलदं सेव्यममृणालं जलाशयम् ॥**
**लामज्जकं लघुलयमवदाहेष्टकापथे ।**

वीरण र वीरतर : यी उशीर वा खसका पर्यायवाची नाम हुन् । उशीर, अभय, नलद, सेव्य, अमृणाल, जलाशय, लामज्जक, लघुलय, (अथवा लघु र लय), अवदाह, इष्टकापथ (अवदाहेष्ट र कापथ) : यी उशीरका जराका नाम हुन् ।

**(घ) अष्टाङ्ग निघण्टु :**

**वीरण्यामव(भय)लामज्जकोशीरममृणालकम् । वीरं वीरणमूलं च बहुमूलं रणप्रिया ॥**

वीरण, अव(भ)य, लामज्जक, उशीर, अमृणालक, वीर, वीरणमूल, बहुमूल र रणप्रिय : यी उशीरका पर्यायवाची नाम हुन् ।

(ङ) **कैयदेव निघण्टु :**

**उशीरं वीरणं सेव्यमभयं समगन्धिकम् । बहुमूलं वीरतरं विरणी वीरणमूलिका ॥**
**रणप्रियं शीतमूलममृणालं मृणालकम् । उशीरं शीतलं रूक्षं स्वादु तिक्तं हिमं लघु ॥**
**पाचनं स्तम्भनं हन्ति दोषदाहमदज्वरान् । तृष्णास्रविषदौर्गन्ध्यकृच्छ्रकुष्ठवमिव्रणान् ॥**

उशीर, वीरण, सेव्य, अभय, समगन्धिक, बहुमूल, वीरतर, विरणी, वीरणमूलिका, रणप्रिय, शीतमूल, अमृणाल र मृणालक : यी उशीरका पर्यायवाची नाम हुन् । यो शीतवीर्यको, रुखो, गुलियो, तितो, शीतल गर्ने, पचाउन सहज, पाचनी, जकडद्याउने तथा त्रिदोष, डाह, जरो, तिर्खा, रक्तविकार, विषविकार, दुर्गन्ध, कृच्छ्र, कुष्ठ, वाकवाकी र खटिरा नाश गर्ने गुणको हुन्छ ।

**लामज्जकं दीर्घमूलममृणालं जलाशयम् । दृष्टप्रथमकंशीघ्रं तोयजं क्षतजं लघु ॥**
**जलप्रदं जलाधारं सुनालं शीतलोदयम् । लामज्जकं हिमं तिक्तं लघु दोषत्रयापहम् ॥**
**निहन्ति दाहपित्तास्रस्वेदकृच्छ्रत्वगामयान् ।**



लामज्जक, दीर्घमूल, अमृणाल, जलाशय, दृष्टप्रथमक, शीघ्र, तोयज, क्षतज, लघु, जलप्रद, जलाधार, सुनाल र शीतलोदय : यी लामज्जकका पर्यायवाची नाम हुन् । यो शीतवीर्यको तीतो, पचाउन सहज, त्रिदोष नाश गर्ने तथा डाह, रक्तपित्त, पसिना, कृच्छ्र र छालाका रोग नाश गर्ने गुणको हुन्छ ।

(च) **धन्वन्तरि निघण्टु :**

**उशीरं चा मृणालं स्यादभयं समगन्धिकम् ॥ रणप्रियं वीरतरं वीरं वीरणमूलकम् ।**
**अन्यच्च-**
**उशीरं वीरणीमूलं वालकं तृणवालुकम् ॥ उशीरं शीतलं तिक्तं दाहक्लान्तिहरं च तत् ।**
**वातघ्नं ज्वरतृण्मेहनुदक्तं हन्ति योगतः ॥ उशीरं स्वेददौर्गन्ध्यपित्तघ्नं स्निग्धतिक्तकम् ।**

उशीर, मृणाल, अभय, समगन्धिक, रणप्रिय, वीरतर, वीर र वीरणमूलक : यी खसखसका पर्यायवाची नाम हुन् । अन्य श्रोतमा उशीर, वीरणीमूल, वालक र तृणवालुकलाई खसखसका पर्यायवाची नाम भनी दिइएको छ । यो शीतवीर्यको, तितो, डाह र थकाई नाशगर्ने; वातविकार, जरो, तिर्खा र प्रमेह नाशगर्ने; अरु ओखतीसँग मिसाएर प्रयोग गर्दा रक्तविकार नाशगर्ने; पसिना, दुर्गन्ध र पित्तविकार नाशगर्ने तथा चिल्लो र तितो स्वादको हुन्छ ।

**कत्तृणं सकलं भूति भूतिदं रोहिषं तृणम् । ध्यामकं श्यामकं पौरं पाटलं देवदंशकम् ॥**
**कत्तृणं श्वासकासघ्नं हृद्रोगशमनं परम् । विषूच्यजीर्णशूलघ्नं कफपित्तास्रनाशनम् ॥**

कत्तृण, सकल, भूति, भूतिद, रोहिष, तृण, ध्यामक, श्यामक, पौर, पाटल र देवदंशक : यी नेपाले उशीरका संस्कृत पर्यायवाची नामहरू हुन् । नेपाले उशीरले दम र खोकी नाश गर्दछ । यसले विशेषगरी मुटुका रोगलाई शान्त पार्दछ । यो उशीरले विषूचि, अजीर्ण, शूल, कफविकार, पित्तविकार र रक्तविकार नाश गर्दछ ।

**कपटं च सुमङ्गल्यं चिडा गन्धवधूस्तथा । तरुणं तरुणी तारा वातभूतविनाशनी ॥**
**कफवातहरा चोष्णा दीपनी रक्तपित्तजित् ।**

कपट, सुमङ्गल्य, चिडा, गन्धवधू, तरुण, तरुणी, तारा र वातभूतविनाशनी : यी कपट (कत्तृण) का संस्कृत पर्यायवाची नामहरू हुन् । कपटले कफविकार र वातविकार नाश गर्दछ । यो उष्णवीर्यको र दीपनी हुन्छ । यसले रक्तपित्तलाई जित्दछ ।

**लामज्जकं सुनालं स्यादमृणालं लवं लघु । इष्टकापथकं शीघ्रं दीर्घमूलं जलाश्रयम् ॥**
**लामज्जकं भवेत्तिक्तं हिमं चात्यन्तमिष्यते । पित्तप्रशान्तिजननं विषरक्तविनाशनम् ॥**

लामज्जक, सुनाल, अमृणाल, लव, लघु, इष्टकापथक, शीघ्र, दीर्घमूल र जलाश्रय : यी लामज्जकका पर्यायवाची नाम हुन् । यो तितो, अत्यन्त शीतवीर्यको, पित्तविकार शान्त पार्ने तथा विषविकार र रक्तविकारलाई नाश गर्ने गुणको हुन्छ ।



(छ) **निघण्टुशेष :**

**वीरणे तु वीरतरं वीरभद्रं सुमूलकम् । (वीरयते वीरणम् । अतिशयेन वीरं वीरतरम् । वीरं च तद् भद्रं च वीरभद्रम् । शोभनं मूलमस्य सुमूलम् के सुमूलकम् ।)**

वीरण, वीरतर, वीरभद्र र सुमूलक : यी उशीरका नाम हुन् ।

**मूलेऽस्योशीरमभयं समगन्धि रणप्रियम् । (वीरणस्य मूले उश्यते-काम्यते इति उशीरम् । नास्ति भयमस्मादभयम् रोगहृत्त्वात् । समो गन्धोऽस्त्यस्य समगन्धि । रणस्य प्रियं रणप्रियम्, रणः प्रियोऽस्येति वा आह ।)**

उशीर, अभय, समगन्धि र रणप्रिय : यी उशीरका जराका पर्यायवाची नाम हुन् ।

**लामज्जके तु नलदममृणालं लयं लघु । इष्टकापथकं शीघ्रं दीर्घमूलं जलाशयम् ॥**
**(लाति दोषान् ला, मज्जा-सारोऽस्य लामज्जकम् । तत्र नलं द्यति नलदम् । अपारुष्यात् नलति वा अत एव अमृणालम् । अहिंस्रम् लीयते लयम् । "लघु गुणेन" इति क्षीरस्वामी, "लङ्घते लघु"**

**इत्यपरे । इष्टं कापथमस्य, अधोवातकृत्त्वादिति इष्टकापथम् । शीघ्रं लघुत्वात् । दीर्घं मूलमस्य दीर्घमूलम् । जले आशेते जलाशयम्, शीतवीर्यत्वाद्वा आह च ।) ।**

लामज्जक, नलद, अमृणाल, लय, लघु, इष्टकापथक, शीघ्र, दीर्घमूल र जलाशय : यी लामज्जकका पर्यायवाची नाम हुन् ।

**(ज) पर्यायरत्नमाला :**

**मृणालमभयं सेव्यं लामज्जकमुशीरकम् ।**

मृणाल, अभय, सेव्य, लामज्जक र उशीर : यी उशीरका पर्यायवाची नाम हुन् ।

**(झ) भावप्रकाश निघण्टु :**

**स्याद्वीरणं वीरतरुर्वीरञ्च बहुमूलकम् । वीरणं पाचनं शीतं वान्तिहृल्लघु तिक्तकम्॥**
**स्तम्भनं ज्वरनुद् भ्रान्तिमदजित्कफपित्तहृत् । तृष्णाऽस्रविषवीसर्पकृच्छ्रदाहव्रणापहम्॥**

वीरण, वीरतरु, वीर, बहुमूलक : यी खसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पाचक, शीतल गर्ने, वाकवाकी नाश गर्ने, पचाउन सहज, तीतो र स्तम्भन गर्ने गुणको हुन्छ । यसले जरो, भ्रम, नसा, कफविकार, पित्तविकार, तिर्खा, रक्तविकार, विषविकार, वीसर्प, कृच्छ्र, डाह र घाउखटिरा नाश गर्दछ ।



**वीरणस्य तु मूलं स्यादुशीरं नलदञ्च तत् । अमृणालञ्च सेव्यञ्च समगन्धिकमित्यपि॥**
**उशीरं पाचनं शीतं स्तम्भनं लघु तिक्तकम् । मधुरं ज्वरहृद्वान्तिमदनुत्कफपित्तहृत्॥**
**तृष्णाऽस्रविषवीसर्पदाहकृच्छ्रवणापहम् ।**

वीरण नामक झारको जरालाई उशीर (खस) भनिन्छ । उशीर, नलद, अमृणाल, सेव्य र समगन्धिक : खसको जराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पाचक, शीतल गर्ने, स्तम्भन गर्ने, पचाउन हलुका र तीतो हुन्छ । यसले जरो, वाकवाकी, नसा, कफविकार, पित्तविकार, तिर्खारोग, रक्तविकार, विषविकार, वीसर्प, डाह, कृच्छ्र र घाउखटिरा नाश गर्दछ ।

**(ञ) मदनपाल निघण्टु :**

**उशीरमभयं सेव्यं वीरं वीरणमूलिका । उशीरं पाचनं शीतं स्तम्भनं कफपित्तजित्॥**
**तृष्णास्रविषवीसर्पदाहकृच्छ्रव्रणापहम्॥**

उशीर, अभय, सेव्य, वीर र वीरणमूलिका : यी खसखसका संस्कृत पर्यायवाची नामहरू हुन् । खसखस पाचनी, शीतल गर्ने, स्तम्भनी तथा कफविकार पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले तिर्खारोग, रक्तविकार, विषविकार, वीसर्प, डाह, कृच्छ्र र घाउखटिरा नाश गर्दछ ।

**लामज्जकं जलाधारं दीर्घमूलं जलाशयम् । इष्टकापथकं शीघ्रममृणालं सुनालकम्॥**
**लामज्जकं हिमं कृच्छ्रदाहदोषत्रयास्रजित्॥**

लामज्जक, जलाधार, दीर्घमूल, जलाशय, इष्टकापथक, शीघ्र, अमृणाल र सुनालक : यी खसखसका जराको संस्कृत पर्यायवाची नामहरू हुन् । (कसैले खसको एक जातको नाम भनि भनेका छन् । खसको जरा साना हुन्छन् तर यसका जरा ठूला हुन्छन् पनि भनिएको छ) । यो शीतल गर्ने तथा कृच्छ्र, डाह, त्रिदोष र रक्तविकारलाई जित्ने गुणको हुन्छ ।

(ट) **मदनादि निघण्टु :**

**उशीरं वीरणं सेव्यं अभयञ्च मृणालकम् । बहुमूलं शीतमूलं वीरं वीरणनायकम्॥**
**ज्वरघ्नं पाचनं दाहतृष्णा मदविनाशनम् । रक्तपित्तहरं शीतमुशीरं मूत्रकृच्छ्रजित्॥**

उशीर, वीरण, सेव्य, अभय, मृणालक, बहुमूल, शीतमूल, वीर र वीरणनायक : यी उशीरका पर्यायवाची नाम हुन् । यो जरो नाश गर्ने, पाचनी तथा डाह, तिर्खा, नसा (मद) र रक्तपित्त नाश गर्ने गुणको हुन्छ । उशीर शीतवीर्यको तथा मूत्रकृच्छ्रलाई जित्ने गुणको पनि हुन्छ ।

**लामज्जकं दीर्घमूलं मृणालं जलाशयम् । इष्टिकापथिकं शीतं तोयजं च काङ्क्षितं लघु॥**
**सुगन्धशीतलं वृष्यं मूत्रकृच्छ्रहरं लघु । वातपित्तहरं तिक्तं तैलयोनि मृणालकम्॥**

लामज्जक, दीर्घमूल, मृणाल, जलाशय, इष्टिकापथिक, शीत, तोयज, काङ्क्षित र लघु : यी लामज्जकका पर्यायवाची नाम हुन् । यो सुगन्धी, शीतवीर्यको, वीर्यवर्धक, मुत्रकृच्छ्र नाश गर्ने, पचाउन सहज, वातविकार र पित्तविकार नाश गर्ने, तितो र तेल आउने गुणको हुन्छ ।

(ठ) **राज निघण्टु :**

**कुतृणं कत्तृणं भूतिर्भूतिकं रोहिषं तृणम् । श्यामकं ध्यामकं पूतिर्मुद्गलं वददग्धकम्॥**
**कुतृणं दशनामाढ्यं कटुतिक्तकफापहम् । शस्त्रशल्यादिदोषघ्नं बालग्रहविनाशनम्॥**

(१) कुतृण, (२) कत्तृण, (३) भूति, (४) भूतिक, (५) रोहिषतृण, (६) श्यामक, (७) ध्यामक, (८) पूति, (९) मुद्गल र (१०) दवदग्धक : यी दश नाम नेपाले उशीरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उशीर पिरो, तीतो र कफविकार नाशक हुन्छ । यसले हातहतियार र किला आदिको विकार तथा बालकको ग्रहबाधा पनि विनाश गर्दछ ।

**अन्यद्रोहिषकं दीर्घं दृढकाण्डो दृढच्छदम् । द्राघिष्ठं दीर्घनालश्च तिक्तसारश्च कुत्सितम्॥**
**दीर्घरोहिषकं तिक्तं कटूष्णं कफवातजित् । भूतग्रहविषघ्नं च व्रणक्षतविरोपणम्॥**

दीर्घरोहिषक, दीर्घ, दृढकाण्ड, दृढच्छद, द्राघिष्ठ, दीर्घनाल, तिक्तसार र कुत्सित : यी ठुलो जातको नेपाले उशीरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उशीर तीतो, पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले भूतबाधा, ग्रहबाधा र विषविकार नाश गर्दछ तथा घाउखटिरा भर्दछ ।

**उशीरममृणालं स्याज्जलवासं हरिप्रियम् । मृणालमभयं वीरं वीरणं समगन्धिकम्॥**
**रणप्रियं वारितरं शिशिरं शितिमूलकम् । वेणीगमूलकं चैव जलामोदं सुगन्धिकम्॥**
**सुगन्धिमूलकं शुभ्रं बालकं वसुभूह्वयम्॥ उशीरं शीतलं तिक्तं दाहश्रमहरं परम् ।**
**पित्तज्वरार्तिशमनं जलसौगन्ध्यदायकम्॥**

(१) उशीर, (२) अमृणाल, (३) जलवास, (४) हरिप्रिय, (५) मृणाल, (६) अभय, (७) वीर, (८) वीरण, (९) समगन्धिक, (१०) रणप्रिय, (११) वारितर, (१२) शिशिर, (१३) शितिमूलक, (१४) वेणीगमूलक, (१५) जलामोद, (१६) सुगन्धिक, (१७) सुगन्धिमूलक, (१८) शुभ्र र (१९) बालक : यी उन्नाईस (अठार भनिएको) नाम खसखसका संस्कृत पर्यायवाची नामहरू हुन् । खसखस शीतवीर्यको, तीतो तथा उत्कृष्ट तरिकाले डाह र थकाई नाश गर्ने गुणको हुन्छ । यसले पित्तविकार र ज्वरलाई शान्त पार्दछ तथा पानीलाई सुगन्धित बनाउँदछ ।

**लामज्जकं सुनालं स्यादमृणालं लवं लघु । इष्टकापथकं शीघ्रं दीर्घमूलं जलाश्रयम्॥**
**लामज्जकं हिमं तिक्तं मधुरं वातपित्तजित् । तृड्दाहश्रममूर्छार्तिरक्तपित्तज्वरापहम्॥**



लामज्जक, सुनाल, अमृणाल, लव, लघु, इष्टकापथक, शीघ्र, दीर्घमूल र जलाश्रय : यी लामज्जकका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो, गुलियो तथा वातविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले तिर्खारोग, डाह, थकाई, बेहोसीपन, रक्तपित्त र ज्वर नाश गर्दछ ।

**(ड) राजवल्लभ निघण्टु :**

**उशीरं स्वेददौर्गन्ध्यदाहपित्तास्ररोगजित्॥**

खसखसको लेप दल्नाले पसिना, दुर्गन्ध, डाह र रक्तपित्त नाश हुन्छ ।

**(ढ) शालिग्राम निघण्टु :**

**वीरणस्य तु मूलं स्यादुशीरं नलदं च तत् । अमृणालं च सेव्यञ्च समगन्धिकामत्यपि॥**

वीरणको जरालाई उशीर, नलद, अमृणाल, सेव्य र समगन्धिका पनि भनिन्छ ।

**उशीरं स्वेदपित्तास्रदाहदौर्गन्ध्यनाशनम् । क्लमतृष्णाविषध्वंसि सतिक्तं मधुरं हिमम्॥**

उशीरमा पसिना, पित्तविकार, रक्तविकार, डाह, दुर्गन्ध, परिश्रम बिनाको थकाई, तिर्खा र विषविकार नाश गर्ने गुण हुन्छ । यो केही तितो, गुलियो र शीतवीर्यको हुन्छ ।

**लामज्जकं सुनालं स्यादमृणालं लयं लघु । इष्टकापथिकं सेव्यं नलदं चावदात(ह)कम्॥**

लामज्जक, सुनाल, अमृणाल, लय, लघु, इष्टकापथिक, सेव्य, नलद र अवदात(ह)क : यी लामज्जकका पर्यायवाची नाम हुन् ।

**दीर्घमूलं दृढं सूक्ष्ममुत्तमंगन्धसंगुतम् ।**
**देशे साधारणे जातं लामज्जं भद्रकं भवेत्॥ (भै०चि०, भैषज्यचिन्तामणि)**

जसको लामो जरा हुन्छ, बलियो हुन्छ, सुगन्धयुक्त हुन्छ, सामान्य भूभाग (साधारण देश) मा पाइन्छ, त्यस्तो लामज्जक श्रेष्ठ हुन्छ ।

**लामज्जकन्तु मधुरं तिक्तं शीतञ्च पाचकम् । स्तम्भनं लघु पित्तघ्नं वाततृड्दाहनाशनम्॥**
**त्रिदोषश्रममूर्च्छास्रशूलवान्तिविनाशनम् । ज्वरञ्च रक्तदोषञ्च स्वेदकृच्छ्रं मदं कफम्॥**
**व्रणं विषं विसर्पञ्च नाशयेदितिकीर्त्तितम् । (निघण्टु रत्नाकर)**

लामज्जक गुलियो, तितो, शीतवीर्यको, पाचनी, जकड्याउने, पचाउन सहज तथा पित्तविकार, वातविकार, तिर्खा, डाह, त्रिदोष, थकाई, बेहोसी, रक्तविकार, शूल, वाकवाकी, जरो, रक्तदोष, पसिना, कृच्छ्र, नसा, कफविकार, खटिरा, विषविकार र विसर्प नाश गर्ने गुणको हुन्छ ।



(ण) **सरस्वती निघण्टु :**

**उशीरमभयं सेव्यं बहुमूलं जलाशयम् । लामज्जकं लघुलयं नलदं समगन्धिकम्॥**

उशीर, अभय, सेव्य, बहुमूल, जलाशय, लामज्जक, लघुलय, नलद र समगन्धिक : यी उशीरका पर्यायवाची नाम हुन् ।

(त) **सोढल निघण्टु :**

**उशीरे च मृणालं स्यादभयं समराङ्गिकम् । रणप्रियं वीरतरं वीरं वीरणमूलकम्॥**
**सुगन्धमूलं गन्धाढ्यं सेव्यं च शीतमूलकम् ।**

उशीर, मृणाल, अभय, समराङ्गिक, रणप्रिय, वीरतर, वीरणमूलक, सुगन्धमूल, गन्धाढ्य, सेव्य र शीतमूलक : यी उशीरका पर्यायवाची नाम हुन् ।

**लामज्जके मृणालं स्यादमृणालं लवं लघु । इष्टकापथकं शीघ्रं दीर्घमूलं जलाश्रयम्॥**
**शीतं च तोयदं चैव तदेव जलवासि च । सेव्यं जलधराधारमुशीरं क्षितिजं हिमम्॥**

लामज्जक, मृणाल, अमृणाल, लव, लघु, इष्टकापथक, शीघ्र, दीर्घमूल, जलाश्रय, शीत, तोयद, जलवासि, सेव्य, जलधराधार, उशीर, क्षितिज र हिम : यी लामज्जकका पर्यायवाची नाम हुन् ।

## (थ) सौश्रुत निघण्टु :

**उशीरं वीरणश्चैव वाणं लामज्जकं तथा । अवदातं च सेव्यञ्च बहुमूलमथापि च॥**

उशीर, वीरण, वाण, लामज्जक, अवदात, सेव्य र बहुमूल : यी उशीरको जराका पर्यायवाची नाम हुन् ।

## (न) हृदयदीपक निघण्टु :

**उशीरमभयं सेव्यममृणालो लाजवीरणे ।**

उशीर, अभय, सेव्य, अमृणाल र लाजवीरण : यी उशीरका पर्यायवाची नाम हुन् ।



# उष्ट्र (उँट)
# (Camel)

**परिभाषा :**

(क) नेपाली बृहत् शब्दकोश : (१) उँट- लामो तानिएको घाँटी र लामा-लामा खुट्टा हुने, खैरो रङको, स्तनपायी तथा शाकाहारी, प्रायः मरुभूमिमा भारी बोक्ने र सवारीको काम लिइने चौपाया । (२) उष्ट्र-उँट । (३) बोता-उँटको बच्चो ।

(ख) डा.साङ्ग्रचधर : उँटको वैज्ञानिक नाम *Camelus dromedarius* तथा अंग्रेजी नाम Camel हो ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अभिधान मञ्जरी :**

**उष्ट्रो घूम्रः करभो दीर्घाङ्गो दीर्घमार्गगो दीर्घः । लवणप्रियश्च दीर्घग्रीवाख्यो वक्रनासः स्यात्॥**

उष्ट्र, घूम्र, करभ, दीर्घाङ्ग, दीर्घमार्गग, दीर्घ, लवणप्रिय, दीर्घग्रीवाख्य र वक्रनास : यी उँटका नाम हुन् ।

(ख) **अमरकोश :**

**उष्ट्रे क्रमेलकमयमहाङ्गाः करभः शिशुः । ... स्युः शृङ्खलका दारवैः पादबन्धनैः ॥**

उष्ट्र, क्रमेलक, मय र महाङ्ग : यी उँटका नाम हुन् । उँटको बच्चालाई करभ भनिन्छ । खुट्टामा काठको बन्धन (ठिँगुराले) बाँधिएको उँटलाई शृङ्खलका भनिन्छ ।

(ग) **अष्टाङ्ग निघण्टु :**

**करभो दीर्घगश्चोष्ट्रः ... ॥**

करभ, दीर्घग र उष्ट्र : यी उँटका नाम हुन् ।

(घ) **अष्टाङ्ग हृदय, अष्टाङ्ग सङ्ग्रह :**

**ईषद्रूक्षोष्णलवणमौष्ट्रकं दीपनं लघु । शस्तं वातकफानाहकृमिशोफोदरार्शसाम्॥**

उँटको दूध अलि कडा खालको हुन्छ । तातो हुन्छ । केही नुनिलो हुन्छ । यसले पाचकाग्नी बढाउँछ । वातविकार र कफविकार नाश गर्दछ । कब्जियत (आनाह), पेटमा कीरा पर्ने रोग (कृमिरोग), जोर्नी दुख्ने रोग वा सुजन (शोफ), पेटसम्बन्धी रोग र अल्काइमा फाइदा गर्दछ ।

(ङ) **आयुर्वेद महोदधि :**

**उष्ट्रीक्षीरं सुप्तिशोफापहं तद्वातश्लेष्मार्शोविषेषु प्रशस्तम् ।**
**आनाहघ्नं चोदराणां च शस्तं जन्तुघ्नं वै शस्यते सर्वकालम्॥**

उँटको दूधले गोडा आदि निदाउने वा सुन्निने रोग ठिक गर्दछ । यो वात एवं कफ नाशक हुनाका साथै अल्काई र विषजन्य विकारमा उत्तम हुन्छ । यसले आनाह वा पेटका अन्य विकारमा फाइदा दिन्छ । यसले (पेटका) कीरा मार्नुका साथै यो दूध जुनसुकै समयमा पनि पिउन योग्य हुन्छ ।

**वातार्शकुष्ठकृमिनाशनं च उष्ट्री विपाके कटुकं सतिक्तम् ।**
**सक्षारमम्लं कृमिकोष्ठकोपि बल्यं च सन्तर्पणमाशुकारि ॥**

उँटको दही वात, अल्काई, कुष्ठ र पेटका कीरा नाशक हुन्छ । यो विपाकमा तितो हुन्छ । यो हल्का नुनिलो र अमिलो हुन्छ । यो पेटका कीरा नाशक, बलदायक र चाँडै तृप्त पार्ने गुणको हुन्छ ।

**औष्ट्रं कटु घृतं पाके श्लेष्मकृमिविषपहम् । दीपनं कफवातघ्नं कुष्ठगुल्मोदरापहम् ॥**

उँटको घिउ पचेपछि पिरो हुन्छ । यसले कफविकार नाश गर्दछ, पेटका किरा मार्दछ र विषको असर नाश गर्दछ । यसले दीपन हुनुका साथै कफविकार, वातविकार, कुष्ठ, गुल्म र पेटका रोगलाई भगाउँदछ ।

**कुष्ठकफहरं रूक्षं कृमिदद्रुविनाशनम् । श्रेष्ठं कुष्ठोदरोन्मादे शोफार्शः कृमिवातनुत् ॥**
**कारभं ...मूत्रं .. तैले नस्ये विधीयते ॥**

उँटको मूत्रले कुष्ठरोग र कफविकार नाश गर्दछ र रुखो हुन्छ । यसले किरा मार्दछ र दाद निको हुन्छ । कुष्ठ, पेटका रोग र पागलपनमा यो उत्तम औषधी हुन्छ । सुन्निने रोग, अलकाई, किरा र वातविकार यसले नाश गर्दछ । उँटको मूत्र तैलीय औषधी बनाउन वा नस लिन प्रयोग गरिन्छ ।

**(च) काश्यप संहिता :**

**महाशयतया श्याममधुरप्रायसेवनात् ॥ बहुत्वाच्च घनत्वाच्च बल्यं पुष्टिकरं पयः ।**
**गुरु वृष्यं च निर्दिष्टं मधुरं च विशेषतः ॥ अल्पाहारतयोष्ट्रीणां प्रियं चाऽऽलवणं ...।**

धेरै ठूलो र कालो रङको शरीर हुनाले, प्रायः गुलिया औषधी (घाँसपात) खाने हुनाले र धेरै हुनाले उँटको दूध बलदायक, पुष्टिकारक, पचाउन कठिन, वीर्यवर्धक र गुलियो हुन्छ । कम खानपिन गर्ने हुनाले यो दूध केही नुनिलो हुन्छ ।

**(छ) कैयदेव निघण्टु :**

**उष्ट्रः शाखाशनो वाहो मयो धूम्रः क्रमेलकः । द्विककुच्छं कुनाशश्च वक्रगुल्फः सविक्रमः ॥**
**मरुत्प्रियो दूरगामी दीर्घग्रीवो महाङ्गकः । वक्रग्रीवो दीर्घजङ्घः करभो दीर्घमार्गगः ॥**

उष्ट्र, शाखाशन, वाह, मय, धूम्र, क्रमेलक, द्विककुच्छ, कुनाश, वक्रगुल्फ, सविक्रम, मरुत्प्रिय, दूरगामी, दीर्घग्रीव, महाङ्गक, वक्रग्रीव, दीर्घजङ्घ, करभ र दीर्घमार्गग : यी उँटका नाम हुन् ।

**उष्ट्रीक्षीरं...सर्वथाः लवणान्वितम् ॥ औष्ट्रमीषत् कटु क्षारं लवणं मधुरं गुरु ॥**

**विकाशि विशदं तीक्ष्णं दीपनं च विशोधनम् । रूक्षोष्णं भेदनं वातश्लेष्मघ्नं मेहशूलजित् ॥**
**कुष्ठपाण्ड्वामयानाहकृमिशोफोदरापहम् । आढ्यवातं विषं गुल्मर्शांसि विनियच्छति ॥**

उँटको दूध सधैं नुनिलो हुन्छ । उँटको दूध पिरो, क्षारयुक्त, नुनिलो, गुलियो र पचाउन कठिन हुन्छ । यो विकाशि, मनमोहक, तिक्खर, दीपनी, प्रशोधक, रुखो, उष्णवीर्यको, भेदनी, वातविकार र कफविकार नाशक, प्रमेह र शूललाई जित्ने तथा कुष्ठ, पाण्डु, आमविकार, आनाह, कीरा, सुजन र पेटका रोग नाशगर्ने गुणको हुन्छ । यसले आढ्यवात (ऊरुस्तम्भ रोग), विषविकार, गुल्म र अल्काई पनि नाश गर्दछ ।

**कारभं कटुकं पाके भेदि सक्षारमम्लकम् । निहन्ति वातमर्शांसि कुष्ठशूलोदरकृमीन् ॥**

उँटको दही पचेपछि पिरो, भेदनी, क्षारयुक्त र अमिलो हुन्छ । यसले वातविकार, अल्काई, कुष्ठ, शूल, पेटका रोग र पेटका कीरा नाश गर्दछ ।

**करभाज्यं सकटुकं विषार्शःकृमिशोषजित् । दीपनं कफवातघ्नं कुष्ठगुल्मोदरापहम् ॥**

उँटको घिउ केही पिरो तथा विषविकार, अल्काई, कीरा र सुकेनासलाई जित्ने गुणको हुन्छ । यो दीपनी तथा कफविकार, वातविकार, कुष्ठ, गुल्म र पेटका रोग नाशगर्ने गुणको हुन्छ ।

**कारभं मूत्रमुष्णञ्च दीपनं कटु तिक्तकम् ॥ वातकुष्ठोदरोन्मादशोषार्शःकृमिकुष्ठनुत् ।**



उँटको मूत्र उष्णवीर्यका, दीपनी, पिरो, तीतो तथा वातविकारजन्य कुष्ठ, पेटका रोग, पागलपन, सुजन, अल्काई, कीरा र कुष्ठ नाशक हुन्छ ।

**औष्ट्रकं पिशितं स्वादु किञ्चित् सलवणं लघु । मेदोवृद्धिकरं चैतदर्शोघ्नं चक्षुषो हितम् ॥**

यसको मासु स्वादिलो, केही नुनिलो, पचाउन सहज, बोसो बढाउने, अल्काई नाशक र आँखाका लागि हीतकर हुन्छ ।

**(ज) चरक संहिता :**

**रूक्षोष्णं क्षीरमुष्ट्रीणामीषत्सलवणं लघु । शस्तं वात-कफानाह-कृमिशोफोदरार्शसाम् ॥**

उँटको दूध रुखो, उष्णवीर्यको, थोरै नुनिलो, पचाउन सहज, कल्याणदायक तथा वातविकार, कफविकार, आनाह, कीरा, सुजन, पेटका रोग र अल्काई नाशगर्ने गुणको हुन्छ ।

**(झ) द्रव्यगुण सङ्ग्रह :**

**ईषद्रूक्षोष्णलवणमौष्ट्रकं दीपनं लघु । शस्तं वातकफानाहक्रिमिशोफोदरार्शसाम् ॥**

उँटको दूध केही रुखो, उष्णवीर्यको, नुनिलो, दीपनी, पचाउन सहज तथा वातविकार, कफविकार, आनाह, (पेटका) कीरा, सुजन, पेटका रोग र अल्काईमा हितकर हुन्छ ।

**अर्शोघ्नं कारभं मूत्रं ...॥**

उँटको मूत्र अल्काई नाशक हुन्छ ।

(ञ) **धन्वन्तरि निघण्टु :**

**उष्ट्रः क्रमेलको धूम्रः करभो दीर्घमार्गगः । ग्रीवाङ्कुशः कुनासश्च दीर्घग्रीवोऽथ धूसरः ॥**
**वक्रग्रीवो दीर्घजङ्घो धूम्रो दासेरको मयः ।**

उष्ट्र, क्रमेलक, धूम्र, करभ, दीर्घमार्गग, ग्रीवाङ्कुश, कुनास, दीर्घग्रीव, धूसर, वक्रग्रीव, दीर्घजङ्घ, धूम्र, दासेरक र मय : यी उँटका पर्यायवाची नाम हुन् ।

**रूक्षोष्णं क्षीरमुष्ट्रीणामीषत्सलवणं लघु । शस्तं वातकफानाहकृमिशोफोदरार्शसाम् ॥**

उँटको दूध रुखो, उष्णवीर्यको, केही नुनिलो, पचाउन सहज, मङ्गल वा प्रसन्न दायक तथा वातविकार, कफविकार, आनाह, कीरा, सुजन, पेटका रोग र अल्काई नाशगर्ने गुणको हुन्छ ।

**विपाके कटु सक्षारमम्लं स्यादौष्ट्रकं दधि । वातमर्शांसि कुष्ठानि कृमिन्हन्त्युदराणि च ॥**



उँटको दही पिरो, केही क्षारिलो, अमिलो तथा वातविकार, अल्काई, कुष्ठ, (पेटका) कीरा र पेटका रोग नाशगर्ने गुणको हुन्छ ।

**औष्ट्रं कटुरसं पाके शोफकृमिविषापहम् । दीपनं कफवातघ्नं कुष्ठगुल्मोदरापहम् ॥**
**मूर्च्छामेहोन्मादगरज्वरापस्मारनाशनम् ।**

उँटको घिउ पचेपछि पिरो तथा सुजन, कीरा र विषविकार नाशगर्ने गुणको हुन्छ । यो दीपनी तथा कफविकार, वातविकार, कुष्ठ, गुल्म, पेटका रोग, बेहोसी, प्रमेह, पागलपन, विषविकार, जरो र छारेरोग नाशगर्ने गुणको हुन्छ ।

**शोफकुष्ठोदरोन्मादमारुतकृमिनाशनम् । अर्शोघ्नं कारभं मूत्रं विजानीयाच्चिकित्सकः ॥**

उँटको मूत्रले सुजन, कुष्ठ, पेटका रोग, पागलपन, वातविकार, (पेटका) कीरा र अल्काई नाश गर्दछ भनी चिकित्सकले थाहा पाउनू ।

**उष्ट्रमांसं लघु स्वादु चक्षुष्यमनिलापहम् ॥ उष्णमर्शःप्रशमनं मेदःपित्तकफावहम् ।**

उँटको मासु पचाउन सहज, स्वादिलो, आँखाका लागि हितकर, वातविकार नाशक, उष्णवीर्यको, अल्काईलाई शान्त पार्ने तथा बोसो, पित्तविकार कफविकार नाशगर्ने गुणको हुन्छ ।

(ट) पर्याय रत्नमाला :

**वासन्तको द्विककुदः करभोष्ट्रक्रमेलकाः ।**

वासन्तक, द्विककुद, करभ, उष्ट्र र क्रमेलक : यी उँटका नाम हुन् ।

(ठ) भावप्रकाश निघण्टु :

**औष्ट्रं दुग्धं लघु स्वादु लवणं दीपनं तथा॥ कृमिकुष्ठकफानाहशोथोदरहरं सरम् ।**

ऊँटको दूध पचाउन सहज, स्वादिलो, नुनिलो, दीपन, मलमूत्र तलतिर सार्ने तथा कीरा, कुष्ठ, कफविकार, आनाह, सुजन र पेटका विकार नाशगर्ने गुणको हुन्छ ।

**औष्ट्रं कटु घृतं पाके शोषकृमिविषापहम्॥ दीपनं कफवातघ्नं कुष्ठगुल्मोदरापहम् ।**

उँटको घिउ पचेपछि पिरो हुन्छ । यसले शरीर सुकाउने छ किसिमका क्षयरोग, पेटका कीरा र विषविकार नाश गर्दछ । यो दीपन तथा कफविकार, वातविकार, कुष्ठ, गुल्म र पेटका रोग नाशक हुन्छ ।

(ड) मदनपाल निघण्टु :

**उष्ट्रः क्रमेलको वक्रग्रीवः शाखाशनो मयः । शृङ्खलः करभो दीर्घजङ्घो धूम्रो मरुत्प्रियः॥**



उष्ट्र, क्रमेलक, वक्रग्रीव, शाखाशन, मय, शृङ्खल, करभ, दीर्घजङ्घ, धूम्र र मरुत्प्रिय : यी उँटका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**औष्ट्रं स्वादुरसं रूक्षं लवणं लघु दीपनम् । कृमिकुष्ठकफानाहशोथोदरहरं सरम्॥**

उँटको दूध रसमा स्वादिलो, रुखो, नुनिलो, पचाउन सहज र दीपनी हुन्छ । यसले कीरा, कुष्ठ, कफविकार, आनाह, सुजन र पेटका रोग नाश गर्दछ । यो मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

**औष्ट्रं विपाके कटुकं भेदि क्षाराम्लकं दधि । निहन्त्युदरकुष्ठार्शःशूलबन्धानिलक्रिमीन्॥**

उँटको दही पचेपछि पिरो, भेदी, क्षार (नुन) युक्त, अमिलो तथा पेटका रोग, कुष्ठ, अल्काई, शूल, विबन्ध, वातविकार र कीरा नाशक हुन्छ ।

**औष्ट्रमुन्मादशोफार्शःकृमिशूलोदरापहम्॥**

उँटको मूत्रले पागलपन, सुजन, अल्काई, कीरा, शूल र पेटका रोग नाश गर्दछ ।

**उष्ट्रमांसं लघु स्वादु चक्षुष्यमनिलापहम् । उष्ट्रमांसं प्रशमनं मेदसः कफपित्तदम्॥**

उँटको मासु पचाउन हलुका, स्वादिलो, आँखाका लागि फाइदाजनक, वातविकार नाशक, भित्री बोसोविकार शान्त पार्ने तथा कफविकार र पित्तविकार बढाउने गुणको हुन्छ ।

(ढ) **माधवद्रव्यगुण :**

**औष्ट्रं कटु घृतं पाके शोथकृमिविषापहम् । दीपनं कफवातघ्नं कुष्ठगुल्मोदरापहम् ॥**

उँटको घिउ पचेपछि पिरो तथा सुजन, कीरा र विषविकार नाशक हुन्छ । यो दीपनी तथा कफविकार, वातविकार, कुष्ठ, गुल्म र पेटका रोग नाशगर्ने गुणको हुन्छ ।

(ण) **राज निघण्टु :**

**उष्ट्रो दीर्घगतिर्बली च करभो दासेरको धूसरो**
**लम्बोष्ठो लवणः क्रमेलक महाजङ्घौ च बीजाङ्किकः ।**
**दीर्घः शृङ्खलको महानथ महाग्रीवो महाङ्गो महा-**
**नादः सोऽपि महाध्वगः स च महापृष्ठो बलिष्ठश्च सः ॥**

उष्ट्र, दीर्घगति, बली, करभ, दासेरक, धूसर, लम्बोष्ठ, लवण, क्रमेलक, महाजङ्घा, बीजाङ्किक, दीर्घ, शृङ्खलक, महानथ, महाग्रीव, महाङ्ग, महानाद, महाध्वग, महापृष्ठ र बलिष्ठ : यी उँटका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**उष्ट्रीक्षीरं कुष्ठशोफापहं तत् पित्तार्शोघ्नं तत् कफाटोपहारि ।**
**आनाहार्तिजन्तुगुल्मोदराख्यं श्वासोल्लासं नाशयत्याशु पीतम् ॥**



पोथी उँटको दूध कुष्ठ, सुजन, पित्तविकार, अल्काई, कफविकार, आनाह, कीरा, गुल्म, पेटका रोग र दम नाशक हुन्छ ।

**औष्ट्रमर्शांसि कुष्ठानि क्रिमिशूलोदराणि च । निहन्ति कटुकं स्वादु किञ्चिदम्लरसं दधि ॥**

उँटको दहीले अल्काई, कुष्ठ, पेटका कीरा, शूल र पेटका रोग नाश गर्दछ । यो दही पिरो, गुलियो र थोरै अमिलो हुन्छ ।

**औष्ट्रन्तु नवनीतं स्याद्विपाके लघु शीतलम् । व्रणक्रिमिकफास्रघ्नं वातघ्नं विषनाशनम् ॥**

पोथी उँटको नौनी पचेपछि हलुका हुन्छ । यो शीतवीर्यको तथा घाउखटिरा, कीरा, कफविकार, रक्तविकार, वातविकार र विषविकार नाशक हुन्छ ।

**घृतमौष्ट्रतु मधुरं विपाके कटुशीतलम् । कुष्ठक्रिमिहरं वातकफगुल्मोदरापहम् ॥**

उँटको घिउ गुलियो, पचेपछि पिरो, शीतवीर्यको तथा कुष्ठ, पेटका कीरा, वातविकार, कफविकार, गुल्म र पेटका रोग नाशक हुन्छ ।

**औष्ट्रकं कटु तिक्तोष्णं लवणं पित्तकोपनम् । बल्यं जठररोगघ्नं वातदोषविनाशनम् ॥**

उँटको मूत्र पिरो, तीतो, उष्णवीर्यको, नुनिलो र पित्तविकार गराउने गुणको हुन्छ । यो बलदायक, पेटका रोग नाशक र वातविकार नाशक हुन्छ ।

**उष्ट्रमांसन्तु शिशिरं त्रिदोषशमनं लघु । बलपुष्टिप्रदं रुच्यं मधुरं वीर्यवर्धनम्॥**

उँटको मासु शीतवीर्यको, त्रिदोष शान्त पार्ने, पचाउन सहज, बलदायक, पौष्टिक, रुचिप्रद, गुलियो र वीर्यवर्धक हुन्छ ।

(त) **राजवल्लभ निघण्टु :**

**उष्ट्रीक्षीरं तु रूक्षोष्णं शोथवातकफापहम् ।**

उँटको दूध रुखो, उष्णवीर्यको तथा सुजन, वातविकार र कफविकार नाशगर्ने गुणको हुन्छ ।

**औष्ट्रकं दधि सक्षारमत्यम्लं पाकतः कटु ।**

उँटको दही केही क्षारयुक्त, अति अमिलो र पचेपछि पिरो हुन्छ ।

**औष्ट्रिकं कफवातघ्नं शोथकृम्युदरापहम् ।**

उँटको घिउ कफविकार, वातविकार, सुजन, कीरा र पेटका रोग नाशक हुन्छ ।

(थ) **शालिग्राम निघण्टु :** 

**वातार्शकुष्ठक्रिमिनाशनं च औष्ट्रंविपाके कटुतिक्तकं च ।**
**सक्षारमम्लं कृमिकोष्ठनाशनं बल्यञ्च सन्तर्पणमाशुकारि॥**

उँटको दही वातविकार, कुष्ठ र कीरा नाशगर्ने; पचेपछि पिरो र तितो हुने; केही नुनिलो, अमिलो, पेटका कीरा नाश गर्ने, बलदायक तथा चाँडै तृप्तिदायक गुणको हुन्छ ।

**औष्ट्रं तक्रं तु विरसं गुरु हृद्यं च दोषलम् ।**
**पीनसश्वासकासेषुशस्तमुक्तं मनीषिभिः॥**

उँटको तक्र स्वादहीन, पचाउन कठिन, मुटुका लागि हितकर, दोषकारी तथा पिनास, दम र खोकीमा हितकर हुन्छ भनी विद्वानहरूले बताएका छन् ।

**उष्ट्रीजं नवनीतन्तु पाके शीतं लघु स्मृतम् ।**
**अग्निदीप्तिकरं च व्रणघ्नं कृमिनाशनम्॥** (नि.र.)

उँटको नौनी पचेपछि शतिवीर्यको, पचाउन सहज, पाचनशक्ति बढाउने, खटिरा नाशक र कीरा नाशक हुन्छ ।

**औष्ट्रं घृतं चाग्निदीप्तिकारकं च पटुस्मृतम् ।**
**पाककाले च कटुकं विषार्शःकृमिनाशनम्॥**
**शोथं वातं कफश्चैव क्रोष्टुशीर्षं तथोदरम् ।**
**कुष्ठगुल्मोन्मादमोहमूर्च्छापस्मारजूर्तिहम्॥ (र०नि०)**

उँटको घिउ पाचकाग्नि बाल्ने, नुनिलो, पच्ने बेलामा पिरो तथा विषविकार, हर्सा, कीरा, सुजन, वातविकार, कफविकार, क्रोष्टुशीर्ष, पेटका रोग, कुष्ठ, गुल्म, पागलपन, मोह, बेहोसी, छारेरोग र जरो नाश गर्ने गुणको हुन्छ ।

**औष्ट्रं कफहरं रूक्षं कृमिदद्रुविनाशनम् ।**
**श्रेष्ठं कुष्ठोदरोन्मादशोषार्शःकृमिवातनुत्॥**

उँटको मूत्र कफविकार नाशक, रुखो; कीरा र दाद् नाशक, श्रेष्ठ तथा कुष्ठ, पेटका रोग, पागलपन, सुकेनाश, हर्सा, कीरा र वातविकार नाशगर्ने गुणको हुन्छ ।

(थ) **सुश्रुत संहिता :**

**रूक्षोष्णं लवणं किंचिदौष्ट्रं स्वादुरसं लघु । शोफगुल्मोदरार्शोघ्नं कृमिकुष्ठविषापहम्॥**

उँटको दूध रुखो, उष्णवीर्यको, केही नुनिलो, गुलियो, पचाउन सहज तथा सुजन, गुल्म, पेटका रोग, अल्काई, कीरा, कुष्ठ र विषविकार नाशगर्ने गुणको हुन्छ ।

**विपाके कटु सक्षारं गुरु भेद्यौष्ट्रिकं दधि । वातमर्शांसि कुष्ठानि कृमीन् हन्त्युदराणि च॥**

उँटको दही पचेपछि पिरो, केही क्षारयुक्त, पचाउन कठिन, भेदनी तथा वातविकार, अल्काई, कुष्ठ, कीरा र पेटका रोग नाशगर्ने गुणको हुन्छ ।

**औष्ट्रं कटु घृतं पाके शोफक्रिमिविषापहम् । दीपनं कफवातघ्नं कुष्ठगुल्मोदरापहम्॥**

उँटको घिउ पचेपछि पिरो तथा सुजन, कीरा र विषविकार नाशक हुन्छ । यो दीपनी तथा कफविकार, वातविकार, कुष्ठ, गुल्म र पेटका रोग नाशगर्ने गुणको हुन्छ ।

**शोफकुष्ठोदरोन्मादमारुत क्रिमिनाशनम् । अर्शोघ्नं कारभं मूत्रं ...।**

पोथी उँटको मूत्रले सुजन, कुष्ठ, पेटका रोग, पागलपन, कीरा र अल्काई नाश गर्दछ ।

(द) **हारीत संहिता :**

**रूक्षं तथोष्णं लवणं कफस्य निवारण वातविकारहारि ।**
**लघु प्रशस्तं कटुकं कृमीणां शोफार्शसामौष्ट्रपयोऽनुकूलम्॥**

उँटको दूध रुखो हुन्छ, गर्मी गर्दछ, केही नुनिलो हुन्छ, कफ नाश गर्दछ, वातविकार ठिक गर्दछ, पचाउन सहज हुन्छ, राम्रो हुन्छ, केही पिरो हुन्छ, किरापरेको- सुन्निएको र अल्काईलाई शान्त पार्दछ ।

**विपाके कटु सक्षारं गुरु भेद्यौष्ट्रिकं दधि । वातमर्शांसि कुष्ठानि क्रिमीन्हन्त्युदरं परम् ॥**

उँटको दही  राम्ररी जमेपछि पिरोपिरो र केही नुनिलो स्वादको हुन्छ । यो पचाउन कठिन हुन्छ । यसले दिसा आदि (शरीरका मल) खुलाउँदछ । वातदोष, अल्काई, कुष्ठ आदि रोग र पेटका किरा नाश गर्दछ ।

**औष्ट्रं कटु घृतं पाके शोषकृमिविषापहम् । दीपनं कफवातघ्नं कुष्ठगुल्मोदरापहम् ॥**

उँटको घिउ पचेपछि पिरो हुन्छ । यसले जिउ सुन्निएको, पेटमा किरा परेको र विषको असरलाई नाश गर्दछ । पेटको अग्निलाई बाल्दछ, कफ र वातलाई तथा कुष्ठ, गानुगोला र पेटका रोगलाई पनि नाश गर्दछ ।

**औष्ट्रं कफहरं रूक्षं क्रिमिदद्रूविनाशनम् । श्रेष्ठं कुष्ठोदरोन्मादशोषार्श क्रिमिवातनुत् ॥**

उँटको मूत्रले कफ नाश गर्दछ, रुखो हुन्छ, पेटका वा घाउखटिराका कीरा तथा दाद नाश गर्दछ र श्रेष्ठ हुन्छ । कुष्ठ, पेटका रोग, उन्माद, शरीर सुन्निने रोग, अल्काई, शरीरका कीरा र वातविकार नाश गर्दछ ।

**...उष्ट्र... । विबन्धिगुरवः स्निग्धा वातालस्ये प्रकीर्त्तिताः ॥**
**...उष्ट्र...भक्ष्या न शुभावहा ननु नृणां वर्ज्या भिषग्भिर्बुधैः ॥**

उँट आदिको मासुले कब्जियत गर्नै, पचाउन कठिन, चिल्लो, तथा वातविकार र आलस्यमा हितकर हुन्छ । उँट आदिको मासु मानिसका लागि हितकर नहुने हुनाले विद्वान वैद्यले यसलाई नखानू, नखुवाउनू ।



करभः । Rajasthan, Image source: rajkumar 1220.



करभाः । Road to Jaipur - **जयपुर**, Rajasthan, Image source: snikrap.



उँटको दूध दुहुने कार्य (तस्बिर श्रोत : फोब्सइण्डिया डटकम)



महाङ्गः | Dromedary, Rajasthan, Image source: Ed Yourdon.



क्रमेलकः । Dromedary, Rajasthan, Image source: Ray Witlin / World Bank.



उष्ट्रः । Dromedary, Rajasthan, Image source: World Bank / Curt Carnemark.

# उष्ट्रकाण्डो
# (Globe thistle)

**परिभाषा :**

(क) डा.साङ्ग्चधर : यसको ल्याटिन नाम *Echinops echinatus* (Linn.) Roxb. (इकाइनप्स इकाइनेटस लिन रक्स्ब) हो ।

(ख) आचार्य बालकृष्ण : यसलाई हिन्दीमा उँटकटेरा (उटन्कटेला) भन्दछन् । यसको वानस्पतिक नाम *Echinops echinatus* Roxb. (इकाइनप्स इकाइनेटस रक्स्ब) तथा अंग्रेजी नाम Camel's thistle (केमल्स थिसल) वा Globe thistle (ग्लोब थिसल) हो । संस्कृतमा यसलाई उत्कण्टक, उत्तुण्डक, कण्टफल, रक्तफूला, कण्टालु, उटाटि आदि भनिन्छ । यो Asteraceae (एष्टरेसी) परिवारमा पर्दछ ।

(ग) यसको नेपाली जातको स्थानीय नाममा थाकल, सुँगुरे काँडा, सत्यानाशी, पलाँती काँडा आदि उल्लेख भएको पाइन्छ । तर यी वनस्पतिका लागि दिइएको वानस्पतिक नाम भने फरक छ । यो झारलाई मुण्डी वा गोरखमुण्डी मानेर पनि कतै कतै व्याख्या गरिएको पाइन्छ । यी सबै मान्यता सही देखिएनन् ।

(घ) नेपाली बृहत् शब्दकोश (सुँगुरे) : रूखो माटामा उब्जने एक किसिमको काँडे झार ।

(ङ) हिन्दी विश्वकोश : (१) उष्ट्रकाण्डी : उष्ट्र इव काण्डोऽस्य । उँटजस्तो डाँठ हुने । (२) करभकाण्डिका : करभस्य प्रियं काण्डं यस्याः । उँटलाई मनपर्ने डाँठ हुने । (३) रक्तपुष्पी : रक्तपुष्पमस्याः । रातो फूल फुल्ने । (४) वर्णपुष्पा : वर्णयन्ति पुष्पाणि यस्याः । फूलहरूका बारेमा वर्णन गरिने ।

(च) राजनिघण्टुका टीकाकार टीकाकार डा.इन्द्रदेव त्रिपाठी, ई.सं.१९८२ : यसलाई हिन्दीमा उँटकटीरा भन्दछन् । यसको वानस्पतिक नाम *Echinops echinatus* (इकाइनप्स इकाइनेटस) तथा अंग्रेजी नाम Thistle (थिसल) हो ।

(छ) राजनिघण्टु, सन् १८८३ मार्च : यसलाई महाराष्ट्रमा (मराठी भाषा) उटाण्टी र कर्णाटकतिर (कन्नाड भाषा) काबण भनिन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टुः-**

**उष्ट्रकाण्डी रक्तपुष्पी ज्ञेया करभकाण्डिका । रक्ता लोहितपुष्पी च वर्णपुष्पी षडाह्वया॥**
**उष्ट्रकाण्डी तु तिक्तोष्णा रुच्या हृद्रोगहारिणी । तद्बीजं मधुरं शीतं वृष्यं सन्तर्पणं स्मृतम्॥**

(१) उष्ट्रकाण्डी, (२) रक्तपुष्पी, (३) करभकाण्डिका, (४) रक्ता, (५) लोहितपुष्पी र (६) वर्णपुष्पी : यी छ नाम उँटकटेरी (?) का संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, उष्णवीर्यको, रुचिप्रद र मुटुका रोग नाशक हुन्छ । यसको बीज गुलियो, शीतवीर्यको, वीर्यवर्धक र तृप्तिदायक हुन्छ ।

यो वनस्पतिका लागि राजनिघण्टुमा दिइएका पर्यायवाची शब्दको अर्थसँग मेल खानेगरी वनस्पतिको पहिचान हुन सकेको देखिएन । यो वनस्पतिको वानस्पतिक नामका सम्बन्धमा आचार्य वालकृष्ण र राजनिघण्टुका टीकाकारहरूको भनाइमा समानता छ तर संस्कृत नाम पूरै फरक छन् । सम्भवतः यो मरुभूमितिर पाइने थाकलविशेष हुन सक्दछ । कुनै पनि वनस्पतिका अनेक जात हुन्छन् प्राचीन

ग्रन्थले तोकेको जातका बारेमा भने ती ग्रन्थमा उल्लेखित सबैपक्षको अनुसन्धान गरी निर्णयमा पुग्नुपर्ने हुन्छ ।



उत्कण्टक (तस्बिर श्रोत : वनएमजीडटकममा रहेको आचार्य बालकृष्णको लेख

## उष्ट्रग्रीव भगन्दर रोग
## (A kind of anal fistula)

(क) सुश्रुत संहिता :

पित्तं तु प्रकुपितमनिलेनाधः प्रेरितं पूर्ववदवस्थितं
रक्तां तन्वीमुच्छ्रितामुष्ट्रग्रीवाकारां पिडकां जनयति;
साऽस्य चोषादीन् वेदनाविशेषाञ्जनयति;
अप्रतिक्रियमाणा च पाकमुपैति;
व्रणश्चाग्निक्षाराभ्यामिव दह्यते दुर्गन्धमुष्णमास्रावं स्रवति,
उपेक्षितश्च वातमूत्रपुरीषरेतांसि विसृजति;
तं भगन्दरमुष्ट्रग्रीवमित्याचक्षते॥

वायुले तलतिर जान अभिप्रेरित गरेको उत्तेजित पित्त पहिलेको जसरी नै (मलद्वारको चारैतिर एक अमल वा दुई अमल) रहेर राता रङका साना, उठेका, ऊँटको घाँटी जस्ता आकारका फोकाहरू उत्पन्न गराउँदछ । यस्ता फोकाले डाह लगायतका अन्य पित्तजनित पीडा गराउने खालको हुन्छ । बेलैमा यसको प्रतिकार वा उपचार गरिएन भने यो पाक्दछ । पाकेर फुटेपछि बनेको घाउमा आगो वा क्षारले पोलेजस्तो जलन हुन्छ । यसबाट गनाउने र तातो रस बहने गर्दछ । यसलाई वास्ता नगरिए यसैबाट हावा, पिसाब, दिसा र वीर्य समेत बहन थाल्दछ । यस्तो खालको भगन्दर रोगलाई उष्ट्रग्रीव भगन्दर भनिन्छ ।

# उष्ण विदग्ध दृष्टि
# (An eye disease)

**(क) अष्टाङ्ग हृदय :**

**उष्णतप्तस्य सहसा शीतवारिनिमज्जनात्॥ त्रिदोषरक्तसम्पृक्तो यात्यूष्मोर्ध्वं ततोऽक्षिणि ।**
**दाहोषे मलिनं शुक्लमहन्याविलदर्शनम्॥ रात्रावान्ध्यं च जायेत विदग्धोष्णेन सा स्मृता ।**

घाम वा आगोको गर्मीले पीडित भएको मानिस तुरुन्त चिसो पानीमा डुबुल्की लगाउँदछ भने उसको शरीर भित्रको तातोपन वात आदि त्रिदोष तथा रगतसँग मिलेर माथि आँखामा पुग्दछ । यसले गर्दा आँखामा डाह र पीडा हुन्छ । आँखाको सेतो भाग मलिन हुन्छ , दिउसो धमिलो देखिन थाल्दछ । रातमा केही देखिँदैन र अन्धोपन हुन जान्छ । यो रोगलाई उष्ण विदग्ध दृष्टि भनिन्छ ।

## ऊचा (पारकाराविशेष)
## (A kind of dry food)

**(क) भावप्रकाश निघण्टु :**

**मञ्जरी त्वर्द्धपक्वा वा यवगोधूमयोर्भवेत् । तृणानलेन संभृष्टा बुधैरूचीति सा स्मृता ॥**
**ऊची कफप्रदा बल्या लघ्वी पित्तानिलापहा ।**

जौ वा गहुँको आधा पाकेको बालालाई झासभुस बालेर भुटेपछि हुने खाने कुरालाई विद्वानहरूले ऊची नाम दिएका छन् । यो कफविकार गर्ने, बलदायक, पचाउन सहज तथा पित्तविकार र वातविकार नाशक हुन्छ ।

# ऊरु (तिघ्रा)
# (Thigh)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) ऊरु : जाँघ, तिघ्रा । (२) सक्थि : तिघ्रा, ऊरु ।
(ख) डा.सतिश चन्द्र साङ्ख्यधर : तिघ्रालाई अंग्रेजीमा Thigh भनिन्छ ।
(ग) नेपाली बृहत् शब्दकोश (तिघ्रो) : घुँडादेखि माथिको गोडाको डोलो भाग; उरु ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अमरकोश :**

**सक्थि क्लीबे पुमानूरुः ... ।**

सक्थि र ऊरु : यी तिघ्राका नाम हुन् ।

**(ख) राज निघण्टु :**

**ऊरू तु सक्थिनी ... ।**

ऊरू र सक्थिनी : यी तिघ्राका नाम हुन् ।

# ऊर्ध्वगुद रोग
# (A particular disease in the mouth)

(क) **अष्टाङ्ग हृदय :**

**अधः प्रतिहतो वायुरर्शोगुल्मकफादिभिः । यात्यूर्ध्वं वक्त्रदौर्गन्ध्यं कुर्वन्नूर्ध्वगुदस्तु सः ॥**

अल्काई, गुल्म जस्ता रोग तथा कफ आदि विकारका कारण अपानवायु तलबाट भगाइएर शरीरको माथितिर जान्छ । यसले गर्दा मुखलाई दुर्गन्धित बनाउँदछ । यो रोगलाई ऊर्ध्वगुद भनिन्छ ।

## ऊषकादि गण
## (Ooshakaadi-Gana)

**(क) सुश्रुत संहिता :**

**ऊषकसैन्धवशिलाजतुकासीसद्वयहिङ्गूनि तुत्थकं चेति ॥**
**ऊषकादिः कफं हन्ति गणो मेदोविशोषणः । अश्मरीशर्करामूत्रकृच्छ्रगुल्मप्रणाशनः ॥**

ऊषक (क्षारमृत्तिका, नुनिलो माटो), सिँधेनुन, शिलाजित, पुष्पकासीस (पहेँलो रङ्को हीराकसी), हीराकसी, हिङ र नीलोतुथो : यी ऊषकादि गणका ओखती हुन् । यो गणको ओखतीले कफविकारलाई शान्त पार्दछ, बोसोलाई सोस्दछ तथा पत्थरी, मधुमेह, मूत्रकृच्छ्र र गुल्म रोग नाश गर्दछ ।

# ऋतु
# (Season)

ऋतु शब्दको एउटा समय मापन गर्ने काल्पनिक इकाई र अर्को रजस्वला भएकी स्त्रीको चारदेखि सोह्र रातसम्मको समय भन्ने अर्थ लाग्दछ । यहाँ चर्चा गर्न लागिएको पहिलो अर्थको हो ।
वैदिक कालको प्रारम्भिक चरणमा अर्थात् कल्पको पहिलो सत्ययुगमा ऋतुसम्बन्धि व्यवस्था नै नभएको कुरा शास्त्रमा उल्लेख भएको पाइन्छ । सम्भवतः त्यसबेलासम्म ग्रह-नक्षत्र आदि नै स्थिर नभएका वा नियमित भइनसकेका हुन सक्दछन् ।

(क) **वायुपुराण, अध्याय ८ :**

**...न मूलफलपुष्पञ्च नार्त्तवं ह्युतवो न च ॥**

ऋतु र ऋतुजन्य परिवर्तन आदि पनि हुँदैनथे ।

उपरोक्त कुराको पुष्टि हुने गरी अन्य विवरण पनि लेखिएको पाइन्छ । जस्तै :

(क) **वायुपुराण, अध्याय ८ :**

**तदा नात्यम्बुशीतोष्णा युगे तस्मिन् चरन्ति वै ॥**

त्यसबेला धेरै पानी पर्ने वा अती चिसो हुने वा प्रचण्ड गर्मी हुने अवस्था हुँदैनथ्यो ।

(ख) **ब्रह्माण्डमहापुराण, पूर्वविभाग, द्वितीय अनुषङ्गपाद, अध्याय ७ :**

**न मूलफलपुष्पञ्च नार्त्तवं ह्युतवो न च ॥५४॥ सर्वकामसुखः कालो नात्यर्थं ह्युष्णशीतता ।**

त्यतिखेर कन्दमूल, फलफूल र फूल थिएन । ऋतुजन्य प्रभाव र ऋतुहरू थिएनन् । गर्मी र जाडो नहुने हुनाले सबै कार्य सुखपूर्वक हुने समय थियो ।

(ग) **मार्कण्डेयपुराण, पूर्वविभाग, अध्याय ४९ :**



**न मूलफलपुष्पाणि नर्त्तवा वत्सराणि च ॥१७॥ सर्व्वकालसुखः कालो नात्यर्थं घर्म्मशीतता ।**

त्यसबेला न कन्दमूल, फलफूल र फूल थिए न ऋतुहरू थिए न त वर्ष नै थिए । गर्मी र जाडो नहुने हुनाले सबै समय सुखी समय हुन्थ्यो ।
परन्तु पृथ्वीको अद्भुत वातावरण पहिलो त्रेतायुग शुरु भएको केही समय पछि समाप्त भएको देखिन्छ । यही अवधिमा वेदको पुनरुत्थान गरिएको थियो र बदलिँदो मौसम अनुसार कालगणनाका विधि प्रचलनमा लेराइएका थिए । त्यतिखेर पाँच वटा ऋतुहरूको वर्णन गरिएको र ऋतुलाई पञ्चतत्वका प्रतीककारूपमा स्थापित गरिएको पाइन्छ । जस्तै :

(घ) **ऋक्संहिता, प्रथम मण्डल, सूक्त १६५, मन्त्र १३ :**

**पञ्चारे चक्रे परिवर्तमाने तस्मिन्ना तस्थुर्भुवनानि विश्वा ।**
**तस्य नाक्षस्तप्यते भूरिभारः सनादेव न शीर्यते सनाभिः ॥**

हे विद्वान हो ! जसमा पञ्चतत्त्व पाँच वटा आरा (ऋतु) का रूपमा रहेका हुन्छन् तथा जो सबैतिरबाट रहेको त्यो ऋतुचक्ररूपी पाङ्ग्रा जसरी घुम्दै पञ्चतत्त्वको पञ्जामा यो सारा लोक राम्ररी अडिने गर्दछ । त्यसको अगिल्तिरको भाग अर्थात् जो प्रथम ईश्वर छन्, तीनलाई यसरी चक्र घुमेजसरी घुमाउँदा पनि कुनै कष्ट हुँदैन । अर्थात् तिनलाई सांसारिक दुःखकष्टको अनुभव नै हुँदैन । अनि जसको बन्धन समान छ अर्थात् क्रिया गर्नमा लागिरहेका छन् तथा जसमा अत्यधिक बोझ छ, धेरै कार्य-कारण उनी आरोपित छन् । यस्तो काल (समय चक्र) सनातनपनबाट नष्ट हुँदैन ।

**(ङ) ऋक्संहिता, द्वितीय मण्डल, सूक्त ३८, मन्त्र ४ :**

**उत्संहायास्थाद्व्यृ१तूँरदर्थसमतिः सविता देव आगात् ।**

कहिल्यै नरोकिने तथा ऋतुलाई विभाजन गर्ने तेजिला सूर्य जब पुनः उदाउँदछन् तब मानिस ओछ्यान छोड्ने गर्दछन् ।

पहिलो द्वापरयुग लागेपछि पुनः मौसम र वातावरण परिवर्तन भएको देखिन्छ । त्यसबेला वेदहरू अनेक खण्डमा विभाजित भएका थिए । यसैले ऋतुहरू पनि छ वटा बनाइएका थिए । यही बेलादेखि छ ऋतुको प्रचलन चलेको देखिन्छ । संहिता ग्रन्थ र पुराण आदि प्रायः सबैले छ ऋतुको बारेमा नै चर्चा गरेको पाइन्छ ।

**(क) नारदसंहिता :**

**क्रमाच्छिशिरवासन्तग्रीष्माः स्युश्चोत्तरायणे । वर्षा शरच्च हेमन्त ऋतवो दक्षिणायने ॥**

उत्तरायणमा क्रमैले शिशिर, वसन्त र ग्रीष्म तथा दक्षिणायणमा वर्षा, शरद र हेमन्त ऋतुहरु हुन्छन् ।

**माघादिमासौ द्वौद्वौ च ऋतवः शिशिरादयः ।**

माघबाट शुरु गरी दुई-दुई महिनाको शिशिरादि ऋतु हुन्छ ।



यहाँ वसन्तबाट नभई शिशिर ऋतुबाट ऋतुको गणना गरिएको पाइन्छ । सम्भवतः त्यसबेला जुन वर्षप्रणाली प्रचलनमा थियो त्यो माघबाट शुरु हुन्थ्यो होला ।

**(ख) वशिष्ठसंहिता :**

**राशिद्वयार्कभोगात् षड्तवः शिशिरादयः क्रमशः ॥**

दुई राशिसम्मको सूर्यको भोगलाई क्रमैले शिशिर आदि गरिएका छ ऋतु भनिन्छ ।

**(ग) विष्णुपुराण, दोश्रो अंश, अध्याय ८ :**

**...द्वौ मासौ चार्कजावृतुः ।**

दुई सौर्य महिनाको एक ऋतु हुन्छ ।

**(घ) श्रीमद्भागवतमहापुराण, तेश्रो स्कन्ध, अध्याय ११ :**

**द्वौ ता वृतुः**

दुई महिनाका एक ऋतु हुन्छ ।

(ङ) **श्रीमद्भागवतमहापुराण, पाँचौं स्कन्ध, अध्याय २२ :**

**स एष भगवानादिपुरुष एव साक्षान्नारायणो लोकानां स्वस्तय आत्मानं त्रयीमयं कर्मविशुद्धिनिमित्तं कविभिरपि च वेदेन विजिज्ञास्यमानो द्वादशधा विभज्य षट्सु वसन्तादिष्वृतुषु यथोपजोषमृतुगुणान् विदधाति ॥३॥ ...यावता षष्ठमंशं भुञ्जीत स वै ऋतुरित्युपदिश्यते संवत्सरावयवः ॥**

वेद र विद्वान जन पनि जसको गतिलाई थाहा पाउन उत्सुक हुने गर्दछन्, ती साक्षात् आदिपुरुष भगवान् नारायण नै लोकको कल्याण तथा कर्मको शुद्धिका लागि आफ्नो वेदमय विग्रह काललाई बाह्र महिनामा विभाजित गरी वसन्त आदि छ ऋतुमा तिनका यथायोग्य गुणको विधान गर्नुहुन्छ । जति समयमा भगवान् सूर्य संवत्सर अर्थात् वर्षको छैटौं भाग भोग गर्नुहुन्छ, उहाँको त्यो अवयवलाई ऋतु भन्ने गरिन्छ ।

(च) **श्रीमद्भागवत्महापुराण, दशम स्कन्ध, अध्याय २० :**

**ततः प्रावर्तत प्रावृट् सर्वसत्त्वसमुद्भवा । विद्योतमानपरिधिर्विस्फूर्जितनभस्तला ॥**

यसपछि वर्षा ऋतु आगमन भयो । यो ऋतुमा सबै किसिमका प्राणीको वृद्धि हुन्छ । त्यसबेला सूर्य र चन्द्रमामा पटक-पटक प्रकाशमय घेरा बस्न थाल्यो । बादल, हावा, बिजुली चम्कने आदिले गर्दा आकाश रिसाएको जस्तो देखिन थाल्यो ।

**सान्द्रनीलाम्बुदैर्व्योम सविद्युत्स्तनयित्नुभिः । अस्पष्टज्योतिराच्छन्नं ब्रह्मेव सगुणं बभौ ॥**



आकाशमा नीला र घना बादल घेरिएर आउँदथे, बिजुली चम्कन थाल्दथ्यो, पटकपटक बादल गर्जेको आवाज आउँदथ्यो अनि सूर्य-चन्द्रमा र तारा छोपिइरहेका हुन्थे । यसले गर्दा आकाशको शोभा यस्तो हुन्थ्यो जस्तो शोभा ब्रह्मस्वरूप भएर पनि गुणहरूले ढाकिँदा जीवको हुने गर्दछ ।

**अष्टौ मासान् निपीतं यद् भूम्याश्चोदमयं वसु । स्वगोभिर्मोक्तुमारेभे पर्जन्यः काल आगते ॥**

सूर्यले पृथ्वीरूपी प्रजाबाट राजाले प्रजाबाट कर लिए जसरी आठ महिनासम्म जललाई करका रूपमा लिएका थिए । अब समय आएपछि उनले आफ्ना किरणरूपी हातले पुनः त्यो करलाई बाँड्न थाले ।

**तडिद्वन्तो महामेघाश्चण्डश्वसन वेपिताः । प्रीणनं जीवनं ह्यस्य मुमुचुः करुणा इव ॥**

जसरी दयालु पुरुष प्रजा धेरै दुखित भइरहेको देखेर दयावश आफ्नो ज्यान समेत अर्पण गर्दछन् त्यसरी नै बिजुलीका चमकले शोभायमान घनघोर बादल तेज हावाको प्रेरणाले प्राणीको कल्याणका लागि आफ्नो जीवनरूपी जललाई बर्साउन लागे ।

**तपःकृशा देवमीढा आसीद् वर्षीयसी मही । यथैव काम्यतपसस्तनुः सम्प्राप्य तत्फलम् ॥**

जेठ असारको गर्मीले पृथ्वी सुकेकी थिइन् अब वर्षात्को जलले सिञ्चित भई उनी त्यसरी नै हराभरा हुन पुगिन् जसरी समभावले तपस्या गरिरहने समयमा पहिले शरीर दुब्लो भई तपस्याको फल प्राप्त भएपछि मोटोघाटो हुन्छ ।

**निशामुखेषु खद्योताः तमसा भान्ति न ग्रहाः । यथा पापेन पाखण्डा न हि वेदाः कलौ युगे॥**

वर्षा ऋतुको साँझमा बालदले गर्दा अँध्यारो हुँदा ग्रह र ताराको प्रकाश त देखिँदैन तर जूनकीरी भने त्यसरी नै चम्किन थाल्दछन् जसरी कलियुगमा पाप प्रबल हुँदा पाखण्ड मतको प्रचार भई वैदिक सम्प्रदाय लुप्त हुने गर्दछ ।

**श्रुत्वा पर्जन्यनिनदं मण्डुकाः व्यसृजन् गिरः । तूष्णीं शयानाः प्राग् यद्वद् ब्राह्मणा नियमात्यये॥**

जुन् भ्यागुताहरू पहिले चूपचाप सुतिरहेका थिए ती अब बादल गर्जेको सुनेर त्यसरी नै टर्रटर्र गर्न लागे जसरी नित्य-नियम सकेका ब्रह्मचारीहरू गुरुको आज्ञा पाएपछि वेद-पाठ गर्न थाल्दछन् ।

**आसन्नुत्पथवाहिन्यः क्षुद्रनद्योऽनुशुष्यतीः । पुंसो यथास्वतंत्रस्य देहद्रविणसम्पदः॥**

जसरी अजितेन्द्रिय पुरुषको धन-सम्पत्ति कुमार्गमा उपयोग हुन थाल्दछ त्यसरी नै अरु बेलामा सुक्ने सानातिना खोला पनि उथपपुथल गर्दै उर्लिएर आफ्नो सीमा नाघ्न थाल्दछन् ।

**हरिता हरिभिः शष्पैरिन्द्रगोपैश्च लोहिताः । उच्छिलीन्ध्रकृतच्छाया नृणां श्रीरिव भूरभूत्॥**

पृथ्वी कतै हरियाली, कतै थोप्ले खपटे कीराको कारणले लालिमायुक्त त कतै कतै बर्खे च्याउले गर्दा सेतोपनाले युक्त देखिन्थ्यो । यसरी पृथ्वी कुनै राजाका रङ्गीबिरङ्गी सेना सजिए जसरी नै सजिएकी जस्ती देखिन्थिन् ।

**क्षेत्राणि शष्यसम्पद्भिः कर्षकाणां मुदं ददुः । मानिनामुपतापं वै दैवाधीनमजानताम्॥**



सबै खेतमा भरपूर अनाज लहराइरहेका थिए । ती अनाज देखेर किसानको आनन्दको सीमा थिएन । तर सबैथोक प्रारब्धको अधीनमा हुन्छ भन्ने कुरा नजान्ने धनीका मनमा भने ती किसानलाई कसरी आफ्नो फन्दामा पार्ने भनेर ठूलो जलन भइरहेको थियो ।

**जलस्थलौकसः सर्वे नववारिनिषेवया । अबिभ्रद् रुचिरं रूपं यथा हरिनिषेवया॥**

नयाँ बर्षात्को जल सेवन गर्नाले जलचर र थलचर प्राणीको सुन्दरता त्यसरी नै बढेको थियो जसरी भगवान्को सेवा गर्नाले बाहिर र भित्र दुवैतिरको रूप सुध्रने गर्दछ ।

**सरिद्भी सङ्गतः सिन्धुश्चुक्षोभ श्वसनोर्मिमान् । अपक्वयोगिनश्चित्तं कामाक्तं गुणयुग् यथा॥**

वर्षा ऋतुमा हावाको झोक्काले यसैउसै उत्ताउलो भएर तरङ्गित हुने समुद्र अब नदीको संयोगले गर्दा वासनामा फसेको योगीको चित्त विषयको सम्पर्कमा आएपछि कामनाले गर्दा उत्ताउलो भएजसरी नै अझ बढी उत्ताउलो भइरहेको थियो ।

**गिरयो वर्षधाराभिर्हन्यमाना न विव्यथुः । अभिभूयमाना व्यसनैः यथा अधोक्षजचेतसः॥**

जसरी दुःख माथि दुःख हुँदा पनि आफ्नो चित्त भगवान्मा लगाउने पुरुषलाई कुनै प्रकारको पीडा हुँदैन त्यसरी नै मुसलधारे वर्षाको मार परेर पनि पर्वतलाई कुनै पीडा हुँदैन ।

**मार्गा बभूवुः सन्दिग्धास्तृणैश्छन्ना ह्यसंस्कृताः । नाभ्यस्यमानाः श्रुतयो द्विजैः कालहता इव॥**

जसरी अभ्यास नगर्नाले द्विजातिले वेद भुल्दछन् त्यसरी नै कांहल्यै सफा नहुनाले घाँसपातले ढाकिई बाटाघाटाहरू पहिल्याउनै मुस्किल भएका थिए ।

**लोकबन्धुषु मेघेषु विद्युतश्चलसौहृदाः । स्थैर्यं न चक्रुः कामिन्यः पुरुषेषु गुणिष्विव ॥**

चञ्चल चित्त भएका स्त्रीहरू गुणवान् पुरुषसँग पनि स्थिर भावले रहन नसकेजस्तै लोकोपकारी बादलसँग बिजुली पनि स्थिर भएर टिक्न सकिरहेको थिएन ।

**धनुर्वियति माहेन्द्रं निर्गुणं च गुणिन्यभात् । व्यक्ते गुणव्यतिकरेऽगुणवान् पुरुषो यथा ॥**

आकाश बादलको गर्जनले भरिएको थियो । त्यसमा निर्गुण डोरी बिनाको इन्द्रेनी त्यसरी नै शोभायमान देखिन्थ्यो जसरी सत्व, रज आदि गुणका पीडाले हुने विश्व झण्झटमा परेको निर्गुण ब्रह्म शोभायमान हुने गर्दछ ।

**न रराजोडुपश्छन्नः स्वज्योत्स्नाराजितैर्घनैः । अहंमत्या भासितया स्वभासा पुरुषो यथा ॥**

पुरुषको आभासबाट आभासित हुने अहङ्कारले पुरुषलाई नै ढाकी उसलाई प्रकाशित हुन नदिए जस्तै चन्द्रमाको किरणले गर्दा नै प्रकाशित हुने बादलले चन्द्रमालाई नै छेकी शोभाहीन पारिरहेका थिए ।

**मेघागमोत्सवा हृष्टाः प्रत्यनन्दञ्छिखण्डिनः । गृहेषु तप्ता निर्विण्णा यथाच्युतजनागमे ॥**

जसरी गृहस्थ-जालमा फसेका मानिस प्रायः तीन वटै तापबाट जल्दै, हडबडाउँदै गर्दा भगवान्का भक्तको आगमन हुँदा आनन्दमग्न हुन्छन् त्यसरी नै बादलको आगमनले गर्दा मयुरका रौंरौं प्रफुल्ल भइरहेका थिए र ती सुरिलो स्वर र नृत्य मार्फत आनन्दोत्सव मनाइहेका थिए ।



**पीत्वापः पादपाः पद्भिरासन्नानात्ममूर्तयः । प्राक् क्षामास्तपसा श्रान्ता यथा कामानुसेवया ॥**

जसरी सकाम भावले तपस्या गर्ने तपस्वी पहिले दुर्बल हुन्छन् र पछि कामना पूरा भएपछि मोटा र बलिया हुन्छन् त्यसरी नै जुन् वृक्ष जेठ-असारको सुकेका थिए ती वृक्ष वर्षाकालमा जराले जल पिएर पात, फूल र पालुवाले खूब सजिसजाउ भएका थिए ।

**सरस्स्वशान्तरोधस्तु न्यूषुरङ्गापि सारसाः । गृहेष्वशान्तकृत्येषु ग्राम्या इव दुराशयाः ॥**

जसरी अशुद्ध मनका विषयी पुरुष कामधन्दाबाट कहिल्यै फुर्सद नपाउँदा पनि घरमै बसिरहने गर्दछन् त्यसरी नै हे परीक्षित् ! तलाउमा काँडाका जरा भरिएर तथा जल बहेर अशान्त हुँदा पनि सारस एक छिन पनि उक्त तलाउ नछाडी बस्ने गर्दथ्यो ।

**जलौघैर्निरभिद्यन्त सेतवो वर्षतीश्वरे । पाषण्डिनामसद्वादैर्वेदमार्गाः कलौ यथा ॥**

जसरी झूटो मत वा वादका कारण वैदिक मार्गको मर्यादा खुकुलो हुने गर्दछ त्यसरी वर्षा ऋतुमा इन्द्रका प्रेरणाले गर्दा परेको मुसलधारे पानीले गर्दा नदीका बाँध तथा खेतका आली भत्कने र नासिने गर्दथे ।

**व्यमुञ्चन् वारिभिर्नुन्ना भूतेभ्योऽथामृतं घनाः । यथाऽऽशिषो विश्पतयः काले काले द्विजेरिताः ॥**

जसरी ब्राह्मणका प्रेरणाले गर्दा धनी मानिस समय-समयमा दान दिंएर प्रजाको चाहना पूरा गर्दछन् त्यसरी नै वायुका प्रेरणाले बादल जीवका लागि अमृतरूपी जल वर्साउने गर्दछन् ।

**एवं वनं तद् वर्षिष्ठं पक्वखर्जुरजम्बुमत् । गोगोपालैर्वृतो रन्तुं सबलः प्राविशद्धरिः ॥**

वर्षा ऋतुमा वृन्दावन यसरी नै शोभा पाइरहेको थियो । पाकेका खजुर तथा फणिरले भरिएको थियो । त्यही वनमा घुम्नका लागि श्रीकृष्ण र बलराम गोठाला र गाईबस्तु सहित प्रवेश गरे ।

**धेनवो मन्दगामिन्य ऊधोभारेण भूयसा । ययुर्भगवताऽऽहूता द्रुतं प्रीत्या स्नुतस्तनीः ॥**

गाईबस्तु आआफ्ना कल्चौंडाका भारले गर्दा बिस्तारै बिस्तारै हिँडिरहेका थिए । जब भगवान् श्रीकृष्ण ती गाईबस्तुलाई नाम लिएर बोलाउनु हुन्थ्यो तब प्रेमका वशमा परी ती चाँडचाँडै दौडन थाल्दथे । त्यसबेला तिनका थुनबाट दूध झरिरहेका हुन्थे ।

**वनौकसः प्रमुदिता वनराजीर्मधुच्युतः । जलधारा गिरेर्नादादासन्ना ददृशे गुहाः ॥**

भगवान्ले वनवासी भिल्ल र भिल्लनीहरू आनन्दमा मग्न भएको देख्नु भयो । वृक्षका पातबाट महका धारा खसिरहेका थिए । पहाडबाट झरझर गर्दै झर्नाहरू झरिरहेका छन् । तिनको आवाज सुरिलो जस्तो लाग्दथ्यो । पानी पर्दा ओत लाग्नका लागि अनेकौं गुफाहरू पनि देखिएका थिए ।

**क्वचिद् वनस्पतिक्रोडे गुहायां चाभिवर्षति । निर्विश्य भगवान् रेमे कन्दमूलफलाशनः ॥**

जब पानी पर्न थाल्दछ तब श्रीकृष्ण कहिले कुनै रूखका फेदमा उभिएर छेलिन खोज्नु हुन्थ्यो त कहिले कुनै गुफामा गएर बस्नुहुन्थ्यो । अनि कहिले कन्दमूल खाई गोठालाहरूसँग खेल्नु हुन्थ्यो ।



**दध्योदनमुपानीतं शिलायां सलिलान्तिके । सम्भोजनीयैर्बुभुजे गोपैः सङ्कर्षणान्वितः ॥**

कहिले पानीका नजिकै रहेको कुनै ढुङ्गामाथि बसी बलराम तथा अन्य गोठालासँग मिलेर घरबाट लेराएको दही-भात आदि सँगै खानु हुन्थ्यो ।

**शाद्वलोपरि संविश्य चर्वतो मीलितेक्षणान् । तृप्तान् वृषान् वत्सतरान् गाश्च स्वोधोभरश्रमाः ॥**
**प्रावृट्श्रियं च तां वीक्ष्य सर्वभूतसुखावहाम् । भगवान् पूजयाञ्चक्र आत्मशक्त्युपबृंहिताम् ॥**

वर्षा ऋतुमा साँढे, बाच्छाबाच्छी तथा थुनका भारले गर्दा थाकेका गाई थोरै समयमा नै चरेर अघाउँदथे अनि हरिया हरिया घाँस छानेर खान थाल्दथे । वर्षा ऋतुको सुन्दरता अपार थियो । यसले सबै प्राणीलाई सुख पुऱ्याइरहेको थियो । त्यो ऋतु, गाई, साँढे र बाच्छाबाच्छी सबैका सबै उनै भगवान्को लीलामा आनन्दित भइरहेका थिए । तरपनि तिनलाई देखेर भगवान् अति खुशी हुने गर्नुहुन्थ्यो र पटकपटक तिनको प्रशंसा गर्नुहुन्थ्यो ।

**एवं निवसतोस्तस्मिन् रामकेशवयोर्व्रजे । शरत् समभवद् व्यभ्रा स्वच्छाम्ब्वपरुषानिला ॥**

यसरी श्रीकृष्ण र बलराम ठूलो आनन्द सहित वृन्दावनमा बसिरहनु भयो । त्यही बेला बर्षा ऋतु सकिएर शरद् ऋतु शुरु भयो । अब आकाशमा बादल थिएन । पानी सफा भयो अनि हावाको गति पनि मन्द भयो ।

**शरदा नीरजोत्पत्त्या नीराणि प्रकृतिं ययुः । भ्रष्टानामिव चेतांसि पुनर्योगनिषेवया ॥**

जसरी योगभ्रष्ट पुरुषको चित्त पुनः योगाभ्यासमा संलग्न भएपछि निर्मल हुने गर्दछ त्यसरी नै शरद् ऋतुमा कमल उम्रनाले जलाशयको जलले पनि आफ्नो स्वाभाविक स्वच्छता पाएको थियो ।

**व्योम्नोऽब्दं भूतशाबल्यं भुवः पङ्कमपां मलम् । शरज्जहाराश्रमिणां कृष्णेभक्तिर्यथाशुभम् ॥**

जसरी भगवान्‌को भक्तिले गर्दा चारै आश्रममा रहेका मानिसको सबै प्रकारको कष्ट र अशुभ तत्काल नाश हुने गर्दछ त्यसरी नै शरद् ऋतुमा हुने आकाशको बादलले वर्षाकालमा बढेहुर्केका जीव तथा पृथ्वीको हिलोमैलो, जलको मटचाइलोपन आदि जस्ता कुरा नाश पारि दिए ।

**सर्वस्वं जलदा हित्वा विरेजुः शुभ्रवर्चसः । यथा त्यक्तैषणाः शान्ता मुनयो मुक्तकिल्बषाः ॥**

बादल आफूसँग भएको सर्वस्व अर्थात् जल दान गरेर चम्किलो तेजले त्यसरी नै सुशोभित हुन थाले जसरी लोक-परलोक, स्त्री-पुत्र, धन-सम्पत्ति, नातागोता, चिन्ता र चाहना त्यागी सांसारिक बन्धनबाट छुटेका परमशान्त सन्यासीहरू शोभायमान हुने गर्दछन् ।

**गिरयो मुमुचुस्तोयं क्वचिन्न मुमुचुः शिवम् । यथा ज्ञानामृतं काले ज्ञानिनो ददते न वा ॥**

जसरी ज्ञानी पुरुष समय आउँदा आफ्नो अमृतमय ज्ञानको दान कसैलाई दिने र कसैलाई नदिने गर्दछन् त्यसरी नै अब पहाडमा कतै कतै मात्र झर्ना झरिरहेका हुन्थे भने कतै आफ्नो कल्याणकारी जल बहाउँदैन थिए ।



**नैवाविदन् क्षीयमाणं जलं गाधजलेचराः । यथाऽऽयुरन्वहं क्षय्यं नरा मूढाः कुटुम्बिनः ॥**

आफन्तको पालनपोषण (मोहमाया) भुलिरहेको मूर्ख मानिसलाई आफ्नो आयु घटिरहेको थाहा नभए जस्तै सानातिना खाल्डाखुल्डीमा भएका जलचर जीवलाई आफू बसेका खाल्डोको पानी हरेक दिन सुकिरहेको छ भन्नेकुराको ज्ञान हुँदैन ।

**गाधवारिचरास्तापमविन्दञ्छरदर्कजम् । यथा दरिद्रः कृपणः कुटुम्ब्यविजितेन्द्रियः ॥**

जसरी आफ्ना इन्द्रियको वशमा परेको दरिद्र र कञ्जुस मानिसले गर्दा आफन्तलाई किसिम किसिमको पीडाले सताइरहने गर्दछ त्यसरी नै थोरै पानीमा बसेका जीवलाई शरत्कालीन सूर्यको तीखा किरणले ठूलो पीडा हुन थाल्दछ ।

**शनैः शनैर्जहुः पङ्कं स्थलान्यामं च वीरुधः । यथाहंममतां धीराः शरीरादिष्वनात्मसु ॥**

घाँसपात आदिले विस्तारै विस्तारै शरीर आदि अनात्म पदार्थबाट “यो म हुँ र यो मेरो हो” भन्ने घमण्ड र ममता छोडे जसरी नै बिस्तारै विस्तारै जमिनले पनि हिलो छाड्न थाल्यो ।

**निश्चलाम्बुरभूत्तूष्णीं समुद्रः शरदागमे । आत्मन्युपरते सम्यङ्मुनिर्व्युपरतागमः ॥**

जसरी मन सङ्कल्पहीन हुँदा आत्माराम पुरुषले कर्मकाण्डको झमेलालाई छाड्ने गर्दछ त्यसरी नै शरद् ऋतुमा समुद्रको जल पनि चञ्चल स्वभाव छाडी स्थिर, गम्भीर र शान्त हुन पुग्यो ।

**केदारेभ्यस्त्वपोऽगृह्णन् कर्षुका दृढसेतुभिः । यथा प्राणैः स्रवज्ज्ञानं तन्निरोधेन योगिनः ॥**

योगीजनले आफ्ना इन्द्रियलाई विषयतिर जानबाट रोकी त्यसबाट आफ्नो ज्ञान नाश हुनबाट जोगाएझैं किसानहरू खेतका आली बलियो आली आदि बनाउँदै पानी खेर जानबाट रोक्न लागे ।

**शरदर्कांशुजांस्तापान् भूतानामुडुपोऽहरत् । देहाभिमानजं दुःखं मुकुन्दो व्रजयोषिताम् ॥**

जसरी शरीरको घमण्डका कारण हुने दुःखलाई ज्ञानले तथा भगवानको वियोगबाट हुने गोपिनीको दुःखलाई भगवान् श्रीकृष्णले नष्ट पार्नुहुन्छ त्यसरी नै दिउसको प्रचण्ड घामले ठूलो कष्ट पाएका मानिसको कष्टलाई रातका चन्द्रमाको किरणले नष्ट पारिरहेको थियो ।

**खमशोभत निर्मेघं शरद्विमलतारकम् । सत्त्वयुक्तं यथा चित्तं शब्दब्रह्मार्थदर्शनम् ॥**

जसरी वेदज्ञ व्यक्तिको चित्त अत्यन्त शोभायमान हुन्छ त्यसरी नै शरद् ऋतुका रातमा बादल नभएको निर्मल आकाश ताराको प्रकाशले जगमगाउन थाल्यो ।

**अखण्डमण्डलो व्योम्नि रराजोडुगणैः शशी । यथा यदुपतिः कृष्णो वृष्णिचक्रावृतो भुवि ॥**

हे परीक्षित् ! जसरी पृथ्वीमा यदुवंशीका बीचमा यदुपति भगवान् श्रीकृष्णको शोभा हुन्छ त्यसरी नै शरद्कालीन आकाशमा ताराका बीचमा पूर्ण चन्द्रमाको शोभा भइरहेको थियो ।

**आश्लिष्य समशीतोष्णं प्रसूनवनमारुतम् । जनास्तापं जहुर्गोप्यो न कृष्णहृतचेतसः ॥**



फूलले भरिभराउ रूख र लहरा हुँदै अती सुन्दर वायु वहन्थ्यो । यो वायु न धेरै चिसो थियो न त धेरै तातो नै । यस्तो वायुको स्पर्शले सबै मानिसको डाह त मेटिन्थ्यो तर गोपिनीहरूको डाह भने झन् बढ्दथ्यो किनकि तिनको चित्त तिनका हातमा थिएन भगवान् श्रीकृष्णले चोर्नु भएको थियो ।

**गावो मृगाः खगा नार्यः पुष्पिण्यः शरदाभवन् । अन्वीयमानाः स्ववृषैः फलैरीशक्रिया इव ॥**

समर्थवान् पुरुषले गरेका कर्मलाई ती कर्मका फलले अनुसरण गरेजस्तै शरद् ऋतुमा गाईहरू, मृगीहरू, पोथी चराहरू र रजस्वला भएका स्त्रीहरू सन्तानोत्पादनको कामनाले युक्त हुन थाल्दछन् तथा साँढे, मृग, चरा र पुरुष तिनको अनुसरण गर्न थाल्दछन् ।

**उदहृष्यन् वारिजानि सूर्योत्थाने कुमुद् विना । राज्ञा तु निर्भया लोका यथा दस्यून् विना नृप ॥**

हे परीक्षित् ! जसरी राजा आउँदा चोरडाँकु बाहेक अरु सबै निडर हुने गर्दछन् त्यसरी नै रातमा फुल्ने कमल बाहेक अरु सबै प्रकारका कमल सूर्योदयका कारण निर्भय भई फुल्न थाले ।

**पुरग्रामेष्वाग्रयणैरैन्द्रियैश्च महोत्सवैः । बभौ भूः पक्वसस्याढ्या कलाभ्यां नितरां हरेः ॥**

त्यसबेला ठूलठूला शहर तथा गाउँहरूमा नयाँ अन्न खुवाउने तथा इन्द्रसम्बन्धी उत्सव मनाउने कार्य हुन थाले । खेतका अन्न पाक्न थाले । पृथ्वी बलराम र श्रीकृष्णको उपस्थितिले अत्यन्त शोभायमान हुन थालिन् ।

**वणिङ्मुनिनृपस्नाता निर्गम्यार्थान् प्रपेदिरे । वर्षरुद्धा यथा सिद्धाः स्वपिण्डान् काल आगते ॥**

साधना गरी सिद्धि प्राप्त गरेका पुरुषले समय आएपछि देव आदि शरीर पाएजस्तै वर्षा ऋतुका कारण कतै एउटै स्थानमा रोकिएका वैश्य, सन्यासी, राजा र स्नातक अब त्यहाँबाट यताउता हिँडी आआफ्ना अभीष्ट कामकाजमा संलग्न हुन थाले ।

(छ) **श्रीमद्भागवत्महापुराण, दशम स्कन्ध, अध्याय २० :**

**इत्थं शरत्स्वच्छजलं पद्माकरसुगन्धिना । न्यविशद् वायुना वातं सगोगोपालकोऽच्युतः ॥**
**कुसुमितवनराजिशुष्मिभृङ्गद्विजकुलघुष्टसरःसरिन्महीध्रम् ।**
**मधुपतिरवगाह्य चारयन् गाः सहपशुपालबलश्चुकूज वेणुम् ॥**

हे परीक्षित् ! शरद् ऋतुका कारण त्यो वन अति सुन्दर देखिन्थ्यो, पानी निर्मल थियो अनि जलाशयमा फुलेका कमलको सुगन्ध बोकेर मन्द चालले हावा बहिरहेको थियो । भगवान् श्रीकृष्णले गाईबस्तु र गोठालासँगै त्यो वनमा प्रवेश गर्नुभयो ।

(ज) **ब्रह्मवैवर्तपुराण, प्रकृतिखण्ड, अध्याय ३४ :**

**...द्वाभ्यां ताभ्यामृतुः स्मृतः ॥**

ती दुई (महिना) को एक ऋतु हुन्छ ।

(झ) **ब्रह्मवैवर्तपुराण, प्रकृतिखण्ड, अध्याय ३६ :**



**ऋतुर्द्वाभ्यां च मासाभ्यां संख्याविद्भि प्रकीर्त्तितः ॥**

दुई महिनाको एक ऋतु हुन्छ भनी सङ्ख्याका विद्वानहरूले बताएका छन् ।

(ञ) **ब्रह्मवैवर्तपुराण, श्रीकृष्णजन्मखण्ड, अध्याय ९६ :**

**ऋतुर्मासद्वयेनैव तत्षट्केनैव वत्सरः । वसन्तग्रीष्मवर्षाश्च शरद्धेमन्तशीतकाः ॥**
**वसन्तश्चैत्रवैशाखमासयुग्मेन कीर्तितः । ज्येष्ठाषाढद्वयेनैव ग्रीष्मस्तु परिकीर्तितः ॥**
**वर्षा श्रावणभद्रे च ह्याश्विने कार्तिके शरत् । मार्गे पौषे च हेमन्तः शिशिरो माघफाल्गुने ॥**

दुई महिनाको एक ऋतु हुन्छ र ती छ वटाको एक वर्ष हुन्छ । वसन्त, ग्रीष्म, वर्षा, शरद्, हेमन्त र शीत : यी छ ऋतुका नामहरू हुन् । चैत र वैशाख यी एक जोडी महिनालाई वसन्त, जेठ र असार दुई महिनालाई ग्रीष्म, साउन र भदौलाई वर्षा, असोज र कार्तिकलाई शरद्, मंसिर र पुसलाई हेमन्त तथा माघ र फगुनलाई शिशिर ऋतु भनिन्छ ।

(ट) **ब्रह्मवैवर्तपुराण, ब्रह्मखण्ड, अध्याय १६ :**

**वसन्ते भ्रमणं वह्निसेवां स्वल्पां करोति यः । बालां च सेवते काले जरा तं नोपगच्छति ॥**

वसन्त ऋतुमा भ्रमण, थोरै आगो ताप्ने काम र कम उमेरको पत्नीसँग सबै नियम मानेर ग्राम्यधर्ममा संलग्न हुने मानिसलाई बुढ्यौली आउँदैन ।

**खातशीतोदकस्नायी सेवते चन्दनद्रवम् । नोपयाति जरा तं च निदाघेऽनिलसेवकम् ॥**

ग्रीष्म ऋतुमा तलाउ वा पोखरीको चिसो पानीमा नुहाउने, चन्दन घोटेर लगाउने र चिसो हावा खाने मानिसलाई बुढ्यौली आउँदैन ।

**प्रावृष्युष्णोदकस्नायी घनतोयं न सेवते । समये च समाहारी जरा तं नोपगच्छति ॥**

वर्षाऋतुमा तातोपानीले नुहाउने, परेको पानीबाट जोगिने र ठिक समयमा ठिक्क खाना खाने व्यक्तिलाई बुढ्यौली लाग्दैन ।

**शरद्रौद्रं न गृह्णाति भ्रमणं तत्र वर्जयेत् । खातस्नायी समाहारी जरा तं नोपगच्छति ॥**

शरद् ऋतुमा चर्को घाम नताप्ने, घाममा हिँडडुल नगर्ने, पोखरी, कुवा, तलाउ आदिको पानीमा नुहाउने र ठिक्क खानपिन गर्ने व्यक्तिलाई बुढ्यौलीले समाउँदैन ।

**खातस्नायी च हेमन्ते काले वह्निं च सेवते । भुङ्क्ते नवान्नमुष्णं च जरा तं नोपगच्छति ॥**

हेमन्त ऋतुमा ठिक्कका पोखरी वा तलाउमा नुहाउने, ठिक समयमा आगो ताप्ने, नयाँ र तातो खाना खाने व्यक्तिलाई बुढ्यौलीले समाउँदैन ।



**शिशिरेंऽशुकवह्निं च न (क) वोष्णान्नं च सेवते । यश्च वोष्णोदकस्नायी जरा तं नोपगच्छति ॥**

शिशिर ऋतुमा न्याना लुगा लगाउने, बालेको आगो ताप्ने, तातातातो खाने र मनतातो पानीले नुहाउने व्यक्तिलाई बुढ्यौलीले समाउँदैन ।

(ठ) **देवीभागवत्, तेश्रो स्कन्ध, अध्याय २६ :**

**वसन्ते च प्रकर्तव्यं तथैव प्रेमपूर्वकम् । द्वावृतू यमदंष्ट्राख्यौ नूनं सर्वजनेषु वै ॥**

त्यसै गरी वसन्त ऋतुमा पनि प्रेमपूर्वक नवरात्रको व्रत गर्नू । यी दुवै ऋतु सबै प्राणीका लायि "यमदंष्ट्रा" नामक ऋतु हुन् भनी बताइएको छ ।

**शरद्वसन्तनामानौ दुर्गमौ प्राणिनामिह । तस्माद्यत्नादिदं कार्यं सर्वत्र शुभमिच्छता ॥**

शरद् र वसन्त नामका दुई ऋतुहरू संसारमा प्राणीका लागि दुर्गम ऋतु हुन् । यसैले आत्मकल्याण चाहनेले प्रयत्नपूर्वक यी नवरात्रमा व्रत बस्नु पर्दछ ।

**द्वावेव सुमहाघोरावृतू रोगकरौ नृणाम् । वसन्तशरदावेव सर्वनाशकरावुभौ ॥**
**तस्मात्तत्र प्रकर्तव्यं चण्डिकापूजनं बुधैः । चैत्राश्विने शुभे मासे भक्तिपूर्वं नराधिप ॥**

वसन्त र शरद् : यी दुवै ऋतु अत्यन्त डरलाग्दा र मानिसका लागि रोग उत्पन्न गराउने खालका हुन्छन् । यी सबैको विनाश गर्ने खालका पनि हुन्छन् । यसैले हे राजन् ! बुद्धिमान् मानिसले चैत्र र असोज : यी दुई शुभ महिनामा भक्तिपूर्वक चण्डिकादेवीलाई पूजा गर्नुपर्दछ ।

(ड) **देवीभागवत्, आठौँ स्कन्ध, अध्याय १६ :**

**यावता षष्ठमंशं स भुञ्जीत ऋतुरुच्यते ॥**

जति समयमा सूर्यले छैटौँ भाग भोग गर्दछन् त्यसलाई एक ऋतु भनिन्छ ।

(ढ) **देवीभागवत्, नवौँ स्कन्ध, अध्याय ८ :**

**...ऋतवश्च षडेव च ॥**

छ वटा ऋतु हुन्छन् ।

(ण) **बृहन्नारदीयपुराण, पूर्वभाग, प्रथमपाद, अध्याय ५ :**

**ऋतुर्मासद्वयेनस्यात्...।**

दुई महिनाको एक ऋतु हुन्छ ।



(त) **बृहन्नारदीयपुराण, पूर्वभाग, द्वितीयपाद, अध्याय ५६ :**

**अकाले पुष्पिता वृक्षा दृश्यन्ते फलिता यदि ॥ कार्यं तच्छेदनं तत्र ततः शान्तिर्मनीषिभिः ।**

रूखहरूमा ऋतु प्रतिकूल हुनेगरी फूल वा फल लागे त्यो वृक्षलाई काटिदिनु पर्दछ र शान्ति गर्नुपर्दछ ।

(थ) **ब्रह्माण्ड महापुराण, पूर्वभाग, द्वितीयेऽनुषङ्गपाद, अध्याय १३ :**

**...द्वौ मासावृतुरुच्यते ।**

दुई महिनालाई एक ऋतु भनिन्छ ।

**सैकः षट्को विजज्ञेऽथ मध्वादिऋतुसंज्ञकः ॥**

संवत्सर अर्थात् वर्षको छ भागको एक भागलाई वसन्त आदि ऋतु भनिन्छ ।

(द) **ब्रह्माण्ड महापुराण, पूर्वभाग, द्वितीयेऽनुषङ्गपाद, अध्याय २१ :**

**...द्वौमासावर्कजावृतुः ॥**

सूर्यको दुई महिनाको गतिलाई ऋतु भनिन्छ ।

**(ध) वायुपुराण, अध्याय ५० :**

**द्वौ मासावन्तरावृतुः॥**

दुई-दुई महिनाको अन्तरमा एक ऋतु हुन्छ ।

**संवत्सरास्ततो ज्ञेयाः पञ्चाब्दा ब्रह्मणः सुताः । तस्मात्तु ऋतवो ज्ञेया ऋतवो ह्यन्तराः स्मृताः॥**

पाँच वटा संवत्सर (वर्ष) लाई ब्रह्माका पुत्र मानिन्छ । तिनै संवत्सरबाट ऋतुहरूको जन्म भएको हो । यसैले ऋतुलाई संवत्सरको अंश मानिन्छ ।

**(न) भविष्यमहापुराण, ब्रह्मपर्व, अध्याय २ :**

**...द्वौ द्वौ मासावृतुः स्मृतः॥**

दुई-दुई महिनाको एक ऋतु हुन्छ ।

**(प) स्कन्द महापुराण, अवन्तिका खण्ड, अध्याय ४८ :**

**...मासौ द्वावृतुरुच्यते ।**

दुई महिनालाई ऋतु भनिन्छ ।



**(फ) स्कन्द महापुराण, नागरखण्ड, अध्याय १९४ :**

**...द्वौ मासावृतुसंज्ञितः ।**

दुई महिनालाई ऋतु भनिन्छ ।

**(ब) विष्णुधर्मोत्तरपुराण, प्रथमखण्ड, अध्याय ७३ :**

**सौरमासद्वयं राम ऋतुरित्यभिधीयते॥**

हे राम ! दुई सौर्यमासको एक ऋतु हुन्छ ।

**(भ) विष्णुधर्मोत्तरपुराण, प्रथमखण्ड, अध्याय ७३ :**

**ऋतुस्वभावेन विनाद्भुतस्य जातस्य दृष्टस्य तु शीघ्रमेव।**
**कृत्वा शमं शान्तिरनन्तरं तु कार्या यथोक्ता वसुधाधिपेन॥**

बोटविरुवा वा जीव वा मानव यदि ऋतुका गुण विपरित उत्पन्न हुन्छ भने राजाले वा घरमूलीले त्यसको तुरुन्त शान्ति गर्नू । अर्थात् अन्य कुरा भए काटि दिनु जीव भए शान्तिस्वस्ति गर्नू ।

अब कोशग्रन्थका कुरा केही राख्दछु ।

**(क) अमरकोश, प्रथम काण्ड :**

**द्वौ द्वौ मार्गादिमासौ स्यादृतु...।**
**...हेमन्तः शिशिरोऽस्त्रियाम् । वसन्ते पुष्पसमयः सुरभिर्ग्रीष्म ऊष्मकः ॥**
**निदाघ उष्णोपगम उष्ण ऊष्मागमस्तपः ।**
**स्त्रियां प्रावृट्, स्त्रियां भूम्नि वर्षा अथ शरत् स्त्रियाम् ॥**
**षडमी ऋतवः पुंसि मार्गादीनां युगैः क्रमात् ।**

मंसिरदेखि शुरु गरेर हरेक दुई- दुई महिनाको हेमन्त आदि ऋतु हुन्छन् । हेमन्त : यो हेमन्त ऋतु अर्थात् मङ्सिर-पुसको नाम हो । शिशिर : यो शिशिर ऋतु अर्थात् माघ-फागुनको नाम हो । वसन्त, पुष्पसमय र सुरभि : यी वसन्त ऋतु अर्थात् चैत-वैशाखका नाम हुन् । गीष्म, ऊष्मक, निदाघ, उष्णोपगम, उष्ण, ऊष्मागम र तप : यी ग्रीष्म ऋतु अर्थात् जेठ-असारका नाम हुन् । प्रावृष् र वर्षा : यी दुई वर्षा ऋतु अर्थात् साउन-भदौका नाम हुन् । शरद् : यो शरद् ऋतु अर्थात् असोज-कात्तिकको नाम हो । यी पहिले बताइएका छ वटा ऋतुहरूका नाम हुन् । यी छ ऋतु मंसिर आदि गरेका महिनामा दुई-दुईका क्रमले जान्नुपर्दछ । नेपाली टीकाकार शर्माले ऋतुगणना र ऋतुका नाम वैदिक र आयुर्वेदिक गरी दुई थरी बताउनु भएको छ । उहाँका मतमा वैदिक ऋतु-चक्र हेमन्तदेखि र आयुर्वेदीय ऋतु चक्र वर्षा ऋतुबाट शुरु हुन्छ ।

**(ख) के.यन.स्वामी (ऋतु) :**

वर्ष वर्षमा हुने काल वा समयको विभाग जुन सौरऋतु र चान्द्रऋतु गरी दुई छन् । (उहाँले धर्मसिन्धुलाई आधार बनाएर यससम्बन्धी विवरण राख्नु भएको छ) ।

**(ग) नेपाली बृहत् शब्दकोश (ऋतु) :**

(१) प्राचीन कालमा वैदिक कृत्य गर्नलाई उपर्युक्त र शुभ मानिएको समय । (२) प्राकृतिक अवस्था अनुसार वर्षभरिको दुई-दुई महिनाका दरले फेरिने वातावरणिक स्थिति वा त्यसअनुसार हुने समय विभाजन; ग्रीष्म, वर्षा, शरद्, हेमन्त, शिशिर र वसन्त ।

अब आयुर्वेदका कुरा राख्दछु ।

**(क) अर्क प्रकाश, चौथो शतक :**

**निम्ब्वाम्रांकुरसम्भूतो वसन्ते ग्रीष्मके पुनः ॥**
**सेवतीशतपत्रीजो वर्षायां त्रिफलाभवः । पारिजातककाश्मीरी जातोऽर्कः शरदिस्मृतः ॥**
**यवानी गलदावद्योर्हेमन्ते शिशिरे पुनः । यवानी जन्तुयः सेवेत्तस्य रोगभयं कुतः ॥**

वसन्त ऋतुमा नीम र आँपका मुनाको अर्क पिउनु राम्रो हुन्छ । यसैगरी ग्रीष्म ऋतुमा सेतो गुलाफ र सयपत्रीको अर्क पिउनु उत्तम हुन्छ । वर्षा ऋतुमा त्रिफलाको तथा शरद् ऋतुमा पारिजात र केसरको अर्क पिउनु राम्रो हुन्छ । हेमन्तमा ज्वानु र गोदावरीको अर्क तथा शिशिर ऋतुमा ज्वानुकै अर्क पिउनू, उसलाई रोग लाग्ने डर हुँदैन ।

(ख) अष्टाङ्ग हृदय :

**मासैर्द्विसंख्यैर्माघाद्यैः क्रमात् षडृतवः स्मृताः । शिशिरोऽथ वसन्तश्च ग्रीष्मो वर्षाशरद्धिमाः॥**

महिनाहरूमा दुई-दुई महिनाका क्रमले क्रमशः शिशिर, वसन्त, ग्रीष्म, वर्षा, शरद् र हेमन्त गरी छ वटा ऋतुहरू हुन्छन् भनिएको छ ।

**शीतेऽग्र्यं वृष्टिघर्मेऽल्पं बल मध्यं तु शेषयोः । बलिनः शीतसंरोधाद्धेमन्ते प्रबलोऽनलः॥**
**भवत्यल्पेन्धनो भातून् स पचेद्वायुनेरितः । अतो हिमेऽस्मिन्सेवेत स्वाद्वम्ललवणान् रसान्॥**

जाडो मौसम (हेमन्त र शिशिर ऋतु) मा मानिसमा बल बढी हुन्छ । वर्षा र ग्रीष्ममा उसको बल कम हुन्छ भने अन्य (शरद र वसन्त) मा समान हुन्छ । बलिया मानिसमा चिसोका कारण शरीरको गर्मी बाहिर निस्कन नसक्नाले गर्दा जठराग्नि बलियो हुन पुग्दछ । त्यही जठराग्नि अलिअलि इन्धन जस्तो हुँदा वायुका कारण सक्रिय भई शरीरका धातुहरूलाई पचाउन थाल्दछ । यसैले हेमन्त ऋतुमा गुलियो, अमिलो र नुनिलो रस खाने गर्नु पर्दछ ।

**कफश्चितो हि शिशिरे वसन्तेऽर्कांशुतापितः । हत्वाऽग्निं कुरुते रोगानस्तं त्वरया जयेत्॥**

शिशिर ऋतुमा शरीर भित्र जम्मा भएको कफ बसन्त ऋतुको गर्मीले ताती शरीरको अग्निलाई नष्ट पार्दै अनेक थरी रोगहरु जन्माउँछ । त्यसैले बसन्त ऋतुमा जतिसक्दो चाँडो त्यो कफलाई रोगहरु जन्माउनु भन्दा अघि नै शरीरबाट बाहिर निकाल्नू ।



**तीक्ष्णैर्वमननस्याद्यैर्लघुरूक्षैश्च भोजनैः । व्यायामोद्वर्तनाघातैर्जित्वा श्लेष्माणामुल्बणम्॥**

तीक्ष्ण वमन, तीक्ष्ण नस्य, पचाउन सहज र रुखो भोजन, व्यायाम, उद्वर्तन र आघात मार्फत प्रकुपित कफलाई नाश गर्नू (जित्नू) ।

**स्नातोऽनुलिप्तः कर्पूरचन्दनागुरुकुङ्कुमः । पुराणयवगोधूमक्षौद्रजाङ्गल-शूल्यभुक्॥**

नुहाई शरीरमा कपूर, चन्दन, अगर वा केशरको लेप दल्नू । खानमा पुरानो जौ, पुरानो गहुँ, (पुरानो भन्नाले यो वर्ष होइन पोहोर साल उत्पादन भएको) मह र जङ्गली मृगको तारेर सुक्खा बनाइएको मासु खानू ।

**सहकाररसोन्मिश्रानास्वाद्य प्रिययाऽर्पितान् । प्रियाऽऽस्यसङ्गसुरभीन् प्रियानेत्रोत्पलाङ्कितान्॥**
**सौमनस्यकृतो हृद्यान्वयस्यैः सहितः पिबेत् । निर्गदानासवारिष्टसीधुमार्द्वीकमाधवान्॥**

प्रेयशीले अर्पण गरेको, सुगन्धित रसले गर्दा स्वादिलो भएको, प्रियाले चाखेर दिएको हुँदा उनको जुठोका कारण सुगन्धित भएको, अनि प्रियाका कमलरुपी नेत्रहरुले प्रतिबिम्बित (हेरि रहिएको), मनलाई प्रसन्न पार्ने, हृदयका लागि उत्तम, दोषरहित (समय वा भूगोलका कारण नबिग्रिएको) आसव, अरिष्ट, सीधु, मार्द्वीक र माधव नामका मदिरालाई समान उमेरकाहरुसँग बसेर पिउनू ।

**शृङ्गवेराम्बु साराम्बु मध्वम्बु जलदाम्बु च । दक्षिणानिलशीतेषु परितो जलवाहिषु॥**

सुठो र कत्थाको कोँडापानी पकाएर खाने गर्नू । महको सवंत र नागरमोथको कोँडा पानी पकाएर खाने गर्नू । (यी सबैले कफ नाश गर्दछन्) ।

**अदृष्टनष्टसूर्येषु मणिकुट्टिमकान्तिषु । परपुष्टविघुष्टेषु कामकर्मान्तभूमिषु ॥**
**विचित्रपुष्पवृक्षेषु काननेषु सुगन्धिषु । गोष्ठीकथाभिश्चित्राभिर्मध्याह्नं गमयेत्सुखी ॥**

जुन जङ्गलमा दक्षिणतिरबाट बहने हावाले गर्दा शीतल भइरहन्छ, जसको चारैतिर पानी बहिरहेको हुन्छ, जहाँ कतै कतै मात्र सूर्य अलिअलि देखिन्छन् (घना, जहाँको जमिन मणि ओछ्याइएको भुइँजस्तै सफा र सुग्घर हुन्छ (त्यस्तो जङ्गल जहाँ घुम्न जाँदा जता लगेर शरीर फालि दिएपनि आनन्द आउँदछ), जहाँ कोइली (आदि पंक्षी) कराएको आवाज सुन्न पाइरहिन्छ, जहाँ मदन-लिला शोभायमान हुन्छ अनि जहाँ फुलेका अनेक थरी फूलले गर्दा बन नै सुवासित भइरहेको हुन्छ हो त्यस्तो जङ्गलमा तालतालका रमाइला गफ गर्दै, कथाहरु सुन्दै-भन्दै मानिसले मध्याह्नको समय बिताउनू ।

**गुरुशीतदिवास्वप्नस्निग्धाम्लमधुरांस्त्यजेत् ।**

वसन्त ऋतु (चैत र वैशाख) मा गरिष्ठ भोजन (पचाउन कठिन हुने), शीतल पदार्थ (जसले कफ बढाउँछ त्यस्ता पदार्थ) खान वा पिउन, दिनमा सुत्न तथा गुलियो-अमिलो र नुनिलो रसको सेवन गर्न छोड्नु पर्दछ ।

**तीक्ष्णांशुरतितीक्ष्णांशुर्ग्रीष्मे संक्षिपतीव यत् ॥**
**प्रत्यहं क्षीयते श्लेष्मा तेन वायुश्च वर्धते । अतोऽस्मिन्पटुकट्वम्लव्यायामार्ककरांस्त्यजेत् ॥**

ग्रीष्म ऋतुमा (जेठ र असारमा) तेजिलो किरणको सूर्यले संसारकै चीसोपनलाई शोषिरहेको हुन्छ । यसले मानिसको पनि कफ (श्लेष्मा) लाई घटाइ रहेको हुन्छ । तर सँगसँगै मानिसको शरीरमा वायु भने बढिरहेको हुन्छ । यसैले यो ऋतुमा नुनिलो, पिरो र अमिलो रस धेरै नखानू । व्यायाम नगर्नू । घाम नताप्नू ।

**भजेन्मधुरमेवान्नं लघु स्निग्धं हिमं द्रवम् । सुशीततोयसिक्ताङ्गो लिह्यात्सक्तून् सशर्करान् ॥**

विशेष गरी मीठा अन्न खानू । हलुका, रसिला, शीतलता दिने र झोल पदार्थ बढी खानू । अती चिसो पानीले नुहाई सखर मिसाइएको जौको सातु खाने गर्नू । चिसो पानीको स्नान र जौको सातुले थकाई मेटाउँदछ ।

**मद्यं न पेयं, पेयं वा स्वल्पं, सुबहुवारि वा । अन्यथा शोषशैथिल्यदाहमोहान् करोति तत् ॥**

अधिपछि मदिरा पिउनेहरुले पनि यो (ग्रीष्म) ऋतुमा मदिरा नपिउनू । पिउनै परे वा पिउने लत बसेको भए थोरै पिउनू वा पानी धेरै हालेर पिउनू । यसो गरिएन भने शरीर अझ त्यसमा पनि पेटका आन्द्रा बढी सुन्निन्छ । शरीर शिथिल हुन्छ । शरीर भतभती पोल्न थाल्दछ । मद्य-मोहले पीडित हुन्छ ।

**कुन्देन्दुधवलं शालिमश्नीयाज्जाङ्गलः पलैः । पिबेद्रसं नातिघनं रसालां रागषाडवौ ॥**

कुन्द पुष्प वा चन्द्रमा समान सेतो मांसिधानको चामल पकाएर जङ्गली मृग (वा जनावर) को मासुलाई पल (आठ तोला, एक तोलामा ११.६६ ग्राम हुन्छ, पानीको नापमा एक मिलिलिटरमा १.०३ ग्राम हुन्छ यस आधारमा ८ तोला भन्नाले ९०.५६ मिलिलिटर ) पानी मिसाएर पकाई खानू वा यस्तो मासुको धेरै मसला नहालिएको पातलो रस पिउनू ।

**पानकं पञ्चसारं वा नवमृद्भाजने स्थितम् । मोचचोचदलैर्युक्तं साम्यं मृण्मयशुक्तिभिः ॥**

(माथि बताइएका रसाला, राग र षाडव) सँगै पानक (शर्बत) र पञ्चसार (मह, खयर, दाख, खमारी र पानी मिसाई बनाइने पेय) बनाएर माटोको नयाँ भाँडामा राख्ने गर्नू । यसमा केरा र नरिवलका टुक्रा पनि मिसाउनू । अनारका दाना हालेर स्वाद अलिअलि अमिलो बनाउनू । पिउने बेलामा माटाको प्याला आदिले खाने गर्नू ताकि यो हमेशा चिसो भइरहोस् ।

**पाटलावासितं चाम्भः सकर्पूरं सुशीतलम् । शशाङ्ककिरणान् भक्ष्यान् रजन्यां भक्षयन् पिबेत् ॥**
**ससितं माहिषं क्षीरं चन्द्रनक्षत्रशीतलम् ।**

उपरोक्त शीतल पेय पदार्थहरु लामो समय सुभाषित भइरहून् र नगनाओस् भन्नका लागि पाडरीको फूल र कपुर हालेर राख्ने गर्नू । रातमा कपूरका टुक्रा मिसाइएका खानेकुरा खाँदै चन्द्रमाको किरणलाई सेवन गर्नू । भैंसीको दूधमा सखर मिसाएर पिउनू ।
(नोटः-भैंसीको दूध गाईको दूधभन्दा शीतल हुन्छ र यसमा बढी चिल्लो पनि हुन्छ, कपुरका टुक्रा हाल्दा यो अझ चिसो भइरहन्छ । कपूर भन्नाले खाने कपूर लाई बुझाउँदछ ।)



**अभ्रङ्कषमहाशालतालरुद्धोष्णरश्मिषु ॥**
**वनेषु माधवीश्लिष्टद्राक्षास्तबकशालिषु । सुगन्धिहिमपानीयसिच्यमानपटालिके ॥**
**कायमाने चिते चूतप्रवालफललुम्बिभिः । कदलीदलकह्लारमृणालकमलोत्पलैः ॥**
**कोमलैः कल्पिते तल्पे हसत्कुसुमपल्लवे । मध्यंदिनेऽर्कापार्तः स्वप्याद्धारागृहेऽथवा ॥**
**पुस्तस्त्रीस्तनहस्तास्यप्रवृत्तोशीरवारिणि ।**

अति अग्ला साल-ताडी आदि रुखका कारण जहाँ सूर्यको तातो किरण जमिनमा पुग्न सक्दैन, जहाँ वासन्ती फूलका लहरामा अङ्गूरका लहरा मिसिई अङ्गूरका झुप्पाहरु शोभा पाइरहेका हुन्, जहाँको जमिनको सतह सुगन्धित एवं हिउँ पग्लेर आएको चिसो पानीले हरहमेशा सिञ्चित भइरहेको हुन्छ, जहाँ आँपका पात वा फलका झुप्पाहरु एवं अनेक थरी फूलका डालीहरु मधुर मुस्कान दिएजसरी झुलिरहेका हुन्छन्, त्यस्तो वनमा वा उपवनमा वा काठ-माटोले बनाइएका पुतलीका स्तन-हात-मुखबाट पानी खसिरहने गरी गर्मीबाट जोगिन बनाइएको शीतगृहमा, केराका पात-साँझमा फुल्ने सेतो कमल-जलकमलका डाँठ वा जरा-कमल-चन्द्रकमल ओछ्याएर बनाइएको ओछ्यानमा, सूर्यको रापबाट जोगिन मानिसहरुले दिउसो मध्याह्नमा गएर सुत्ने गर्नू ।

**निशाकरकराकीर्णे सौधपृष्ठे निशासु च ॥**

राती जुन लागेको (आफ्नू) घरको छतमा सुत्नु र त्यहीँ रात बिताउनू ।

**आसना स्वस्थचित्तस्य चन्दनार्द्रस्य मालिनः । निवृत्तकामतन्त्रस्य सुसूक्ष्मतनुवाससः ॥**

**जलार्द्रास्तालवृन्तानि विस्तृताः पद्मिनीपुटाः । उत्क्षेपाश्च मृदूत्क्षेपा जलवर्षिहिमानिलाः ॥**
**कर्पूरमल्लिकामाला हाराः सहरिचन्दनाः । मनोहरकलालापाः शिशवः सारिकाः शुकाः ॥**
**मृणालवलयाः कान्ताः प्रोत्फुल्लकमलोज्वलाः । जङ्गमा इव पद्मिन्यो हरन्ति दयिताः क्लमम् ॥**

सफा मनका पुरुषले थकाई मेट्न चन्दन दल्नू, माला लगाउनू । सम्भोग नगर्नू । अत्यन्त पातलो लुगा लगाउनू । थकाई मेट्न पानीले भिजाइएको पङ्खा, कमलका ठूलठूला पात वा हावामा बिस्तारै माथितिर उडिरहेका पानीका फोकाको प्रयोग गर्नू । कपूर, चमेली, मोती वा हरिचन्दनले बनेका माला लगाउनू । सुन्दर आकृति र मीठो बोल्ने बालबालिकाहरुसँग खेल्ने गर्नू । सुँगा वा मैनासँग बसेर समय काट्नू । अती चीसा बाला लगाएकी, फुलेको कमल जस्तै चम्किली र हात्ती लस्के जस्तै लस्किने (आफ्नी) प्रेयसीसँग बसी दिनहरु कटाउनू । (ग्रिष्म ऋतुमा मैथुन नगर्न अरु ऋषिहरुले पनि सल्लाह दिएका छन् । स्त्रीको सामिप्यताले ठण्डी दिन्छ तर स्पर्शले गर्मी बढाउँछ भनेका छन्) ।

**आदानग्लानवपुषामग्निः सन्नोऽपि सीदति । वर्षासु दोषैर्दुष्यन्ति तेऽम्बुलम्बाम्बुदेऽम्बरे ॥**
**सतुषारेण मरुता सहसा शीतलेन च । भूबाष्पेणाम्लपाकेन मलिनेन च वारिणा ॥**
**वह्निनैव च मन्देन तेष्वित्यन्योन्यदूषिषु । भजेत्साधारणं सर्वमूष्मणस्तेजनं च यत् ॥**

मौसम बदलिने कारणले गर्दा ग्रीष्म ऋतुमा धातु नपचेका शरीरमा वर्षा ऋतुमा अग्नि कमजोर भई नष्ट हुन थाल्दछ । वर्षाकालमा जब आकाशमा पानी बोकेका बादल मडारिइ रहन्छन्, तब शरीरभित्रको अग्नि पनि वायु आदि दोषले गर्दा मडारिँदै दूषित हुन पुग्दछ । तुषारो मिसिएको शीतल हावा बहने कारणले र तातेको पृथ्वीबाट पानी पर्दा उठेको बाफले गर्दा शरीरमा वायुको मात्रा अकस्मात् बढ्न जान्छ । अम्लीय पदार्थ मिसिएको र हलुका पानीले गर्दा पित्त बढ्दछ । समयसँगै बदलिएको हावाका कारण कफ पनि दूषित हुन थाल्दछ । अतः जे खाँदा पेट भित्रको अग्नि प्रबल हुन्छ सबैले वर्षा ऋतुमा त्यही खाने गर्नु पर्दछ ।

**आस्थापनं शुद्धतनुर्जीर्णं धान्यं रसान् कृतान् । जाङ्गलं पिशितं यूषान् मध्वरिष्टं चिरन्तनम् ॥**
**मस्तु सौवर्चलाढ्यं वा पञ्चकोलावचूर्णितम् । दिव्यं कौपं शृतं चाम्भो भोजनं त्वतिदुर्दिने ॥**
**व्यक्ताम्ललवणस्नेहं संशुष्कं क्षौद्रवल्लघु ।**

वाग्भट वर्षा ऋतुमा पनि शरीरका विकृतीलाई शरीरबाट बाहिर निकाल्नका लागि नियमपूर्वक बमन गर्न वा विरेचन (शरीरको पित्त-दोषलाई तरल औषधीहरुको सेवन गरी मलद्वार वा मूत्रद्वारबाट बाहिर निकालिने विधि हो ।) गर्न र त्यसपछि आस्थापन वस्ति (जडीबूटी पकाएर बनाइएको काँडापानीलाई मलद्वार, मूत्रद्वार, घाउको मुख आदिबाट शरीरभित्र पठाई शरीरका विकारलाई बाहिर निकाल्ने कार्यलाई आस्थापन वस्ति भनिन्छ) गर्न सल्लाह दिन्छन् । वर्षा ऋतुमा खानुपर्ने कुराहरुको विषयमा उनको भनाइ छ-पुराना धान, गहुँ आदि अन्नको प्रयोग गर्नू । तेलमा सुठो हालेर पकाइएको मासु वा जंगली जनावरको मासु खानू । दालको झोल वा फलफूलको प्राकृतिक रस (यूष) पिउनू । पुरानो मह खानू । पुरानो पौष्टिक मद्य (अरिष्ट) खानू । सौँचर वा बिरेनुन (सौवर्चल) वा पञ्चकोल (पिप्ला, पिप्लाको जरा, चाँभा, चितू र सुठो पिसेर बनाइएको धूलो) दहीको पानीमा मिसाई प्रशस्त प्रयोग गर्नू ।

**अपादचारी सुरभिः सततं धूपिताम्बरः ॥४७॥ हर्म्यपृष्ठे वसेद्बाष्पशीतशीकरवर्जिते ।**

वर्षाऋतुमा मािनसले सम्भव भएसम्म लामो दूरी पैदल यात्रा नगर्नू (वाहन वा साधनको प्रयोग गर्नू) । नित्य नुहाउने गर्नू । शरीर सुवासित (अत्तर, चन्दन आदिको प्रयोग गरेर) बनाइ राख्नू । कपडाहरुमा पनि सुगन्धित धूपहरु बालेर धूपधुवाँर गरि रहनू । घरको छतमा वा अन्य कुनै त्यस्तो ठाउँमा बस्नू जहाँ जमिनबाट निस्केको बाफ र शीत-कणबाट आफूलाई जोगाउन सकियोस् ।

**नदीजलोदमन्थाहः स्वप्नाया- सातपांस्त्यजेत् ॥**

वर्षा ऋतुमा नदीको जलको प्रयोग गर्न, पानीमा घोलेर सातु खान, दिउसो सुत्न र घाम ताप्न बन्द गर्नू ।

**वर्षाशीतोचिताङ्गानां सहसैवार्करश्मिभिः । तप्तानां संचितं वृष्टौ पित्तं शरदि कुप्यति ॥**
**तज्जयाय घृतं तिक्तं विरेको रक्तमोक्षणम् ।**

वर्षाकालीन शीत खाएर सूर्यको तापले तातेको मानव शरीरमा रहेको पित्त शरद् ऋतु लागेपछि विकृत हुन थाल्दछ । यसबाट जोगिन शरीरमा चिल्लोको मात्रा बढाउनु पर्दछ । जसका लागि तितो खानेकुरा बढी खाने, विरेचन गर्ने, घीउ खाने र बगाएर वा चुसाएर वा अरु विधि अपनाएर शरीरको रगतलाई बाहिर निकाल्ने (रक्तमोक्षण) कार्य गर्नुपर्दछ ।

**तिक्तं स्वादु कषायं च क्षुधिताऽन्नभजेल्लघु ॥ शालिमुद्गसिताधात्रीपटोलमधुजाङ्गलम् ।**

भोक लाग्दा तीतो, गुलियो र टर्रो रसको प्रयोग गर्नू । अल्पाहार गर्नू । शालिधानको चामल, मुगीको दाल, चिनी, अमला, परबर, मह र जंगली पशुपंक्षीको मासु खाने गर्नू ।



**चन्दनोशीरकर्पूरमुक्तास्रग्वसनोज्वलः ॥ सौधेषु सौधधवलां चन्द्रिकां रजनीमुखे ।**

रातको पहिलो प्रहरमा (मात्र रातभर होइन) चन्दन, खस (वनस्पति विशेषको लेप), कपूर, मोतिको माला र सेता वस्त्र लगाई उज्वल बनी दरबार (घर) को छतमा बस्नू र चूनजस्तै सेता चन्द्रमाको शीतल कीरणको पान गर्नू ।

**तुषारक्षारसौहित्यदधितैलवसाऽऽतपान् ॥ तीक्ष्णमद्यदिवास्वप्नपुरोवातान् परित्यजेत् ।**

शरद ऋतुमा पनि ओस वा तुषारोबाट जोगिनू । बिहान हिँड्नु पर्दा टाउको र गोडा पूरै छोपेर हिँड्नू । कुनै जौ आदिको अंकुर उमालेर अथवा डढाइएको धूलो पानीमा उमालेर तयार पारिएको पेय औषधी (क्षार) नखानू । टन्न पेटभरी खाने नगर्नू । दही नखानू । तेल र बोसोको अती प्रयोग नगर्नू । घाम नताप्नू । तीक्खर स्वादका कुनै पनि मदिरा नपिउनू । दिउसो नसुत्नू । अनि हावा जताबाट चलिरहेको त्यतातिर फर्केर बस्ने वा हिँड्ने नगर्नू ।

**शीते वर्षासु चाद्यांस्त्रीन् वसन्तेऽन्त्यान् रसान् भजेत् ॥**
**स्वादुं निदाघे शरदि स्वादुतिक्तकषायकान् । शरद्वसन्तयो रूक्षं शीतं घर्मघनान्तयोः ॥**
**अन्नपानं समासेन विपरीतमतोऽन्यदा ।**

समग्रमा ऋतुहरुको कुरा गर्दा हेमन्त, शिशिर र वर्षा ऋतुमा गुलियो, अमिलो र नुनिलो : यी तीनवटा रसको सेवन गर्नू । वसन्त ऋतुमा तितो, टर्रो र पिरो रसको सेवन गर्नू । ग्रीष्म ऋतुमा गुलियो रसको तथा शरद् ऋतुमा गुलियो, तितो र टर्रो रसको सेवन गर्नू । शरद् र वसन्त ऋतुमा सम्भव भएसम्म रुखा खानेकुराहरु खाू । बाँकी ऋतुहरुमा चिल्लोयुक्त खानेकुराहरु खानू । शरद् र ग्रीष्म ऋतुमा शीतलता दिने खानपिनमा तथा वर्षा, वसन्त, हेमन्त र शिशिर ऋतुमा गर्मी बढाउने खानपिनमा जोड गर्नू ।

**नित्यं सर्व रसाभ्यासः स्वस्वाधिक्यमृतावृतौ ॥**

गुलियो, तीतो, अमिलो, नुनिलो, पिरो र टर्रो गरी छ वटै रसहरु छ वटै ऋतुमा खानु पर्दछ । तर, जुन ऋतुमा जुन रस खानु भनेर बताइयो त्यो रसलाई त्यो ऋतुमा बढी खानू ।

**ऋत्वोरन्त्यादिसप्ताहावृतुसन्धिरिति स्मृतः । तत्र पूर्वो विधिस्त्याज्यः सेवनीयोऽपरः क्रमात् ॥**
**असात्म्यजा हि रोगाः स्युः सहसा त्यागशीलनात् ।**

चलिरहेको ऋतुको अन्तिम हप्ता र आउने ऋतुको पहिलो हप्ता गरी जम्मा चौध दिनलाई ऋतुसन्धि भनिन्छ । यी चौध दिनमा पहिलो ऋतुको विधि क्रमशः छोडी दोश्रो ऋतुको विधि क्रमशः शुरु गर्नु पर्दछ । एकैचोटी विधिहरु छोडेर नयाँ विधि अपनाउँदा पनि रोग लाग्दछ । (सामान्य बोलीचालीको भाषामा यसलाई पानी लाग्नु वा पानी जुध्नु भनिन्छ ।) ।

(ग) **आयुर्वेद महोदधि वा सुषेण निघण्टु :**



**तार्तीये निपुणा वदन्ति जलदं तस्मान्निशीथे शरत्,**
**पूर्वं शैशिरिकस्ततो हिमऋतुः सूर्योदयादग्रतः ।**
**मध्याह्ने च तथा वदन्ति निपुणा ग्रैष्मी ऋतुः स्यात्ततो,**
**वासन्ती कथिता ऋतुस्तुमुनिभिः पूर्वाह्णमेवं सदा ॥**

जानिफकारहरूले दिनको तेश्रो भागलाई वर्षा ऋतु भनी बताएका छन् । यसैले आधा रात (निशीथ) लाई शरद् ऋतु मान्ने गरिन्छ । त्यसपछिको समयलाई शिशिर ऋतुको समय र सूर्योदयभन्दा पहिलेसम्मको समयलाई हेमन्त ऋतु मानिन्छ । दिनको पूर्व भागलाई वसन्त र मध्याह्नलाई ग्रीष्म ऋतु मान्ने गरिन्छ । यसरी एक दिनरातको समयलाई (पनि) छ ऋतुमा विभाजन गर्ने गरिन्छ ।

**अव्यायामरता वसन्तसमये ग्रीष्मे व्यवायप्रियाः,**
**सक्ताः प्रावृषि पल्वलाम्भसि नवे कूपोदके द्वेषिणः ।**
**कट्वम्लोष्णरताः शरद्दधिभुजो हेमन्तनिद्रालसाः,**
**शीताम्भः परिगाहिनस्तु शिशिरे नश्यन्तु ते शत्रवः ॥**

हे राजन् ! वसन्त ऋतुमा व्यायाम नगर्ने (परिश्रम नगरी आराम गर्न चाहने), ग्रीष्म ऋतुमा ग्राम्यधर्मलाई रुचाउने, वर्षा ऋतुमा कुवाको (स्वस्थ) पानी मन नपराउने र ताल आदिको पानी पिउने वा त्यसको पानीले नुहाउने, शरद ऋतुमा पिरो-अमिलो-गर्मी गर्ने (वा तातो) पदार्थ र दही खान रुचाउने, हेमन्त ऋतुमा निद्रालसी (लामा रातमा रातभर सुतेर पनि निद्रा नपुगे जसरी अल्छी गरी

दिउस सुत्ने) हुन, तथा शिशिर ऋतुमा चिसो पानी भएका तलाउ, नदी आदिमा नुहाउने (यस्ता) तिम्रा शत्रु चाँडै रोगी भई नष्ट होउन् ।

(घ) **कालिका पुराण, अध्याय ४ :**

जब सृष्टिलाई अघि बढाउन तपस्यामा लीन हुनुभएका भगवान् शिवलाई कामवासना जगाउने जिम्मा कामदेवलाई लगाइयो तब कामदेवले ब्रह्मासँग सहयोगीका रूपमा आफूलाई एउटी सुन्दरी स्त्री चाहिने कुरा बताए । कामदेवको कुरा सुनेपछि ब्रह्माले कामदेवका लागि कस्ति सम्मोहिनी स्त्रीलाई सृष्टी गर्नुपर्ला भनी चिन्ता गर्न लागे । चिन्ता गर्दागर्दै ब्रह्माले लामो सास फेर्नुभयो । त्यो सासबाट फूलहरूको समूहले सुशोभित वसन्त उत्पत्ति भए । उ भमराका झुण्डले सुशोभित फुलेको आँपका मञ्जरी एवं रससहित फुलेको पलाँशको रूख जस्तै शोभायमान भइरहेको थियो । उसका आँखाहरू फुलेका रक्तकमल जस्ता रसिला थिए । उसको नाक साँझमा उदाइरहेका चन्द्रमाको टुक्राजस्तै सुन्दर थियो । उसका कान शङ्ख जस्ता थिए । उसको कपाल घुँगुर्किएको थियो । उसका कानमा साँझपखको सूर्य जस्तै चम्किरहेका दुई कुण्डल सुशोभित थिए । उसको हिँडाइको चाल मत्ताहात्तीको जस्तो थियो । उसको छाती विशाल थियो । उसका पाखुरा मोटा, कसिला र फैलिएका थिए । उसका दुवै हात कठोर थिए । उसका काछ, तिघ्रा र कम्मर गोला थिए । घाँटी शङ्खजस्तै सुन्दर थियो र काँध उठेका थिए । उसका खँगाल्नुका हाड मासुले छोपिएका थिए । छाती मोटो थियो । उ सबै लक्षणले भरिपूर्ण थियो । यस्ता गुणको वसन्तको उत्पत्ति भएपछि सुगन्धित हावा चल्न थाल्यो, रूखहरू फुल्न थाले । सैयौं कोइलीहरू मधुर पञ्चम स्वर (अ, आ, इ ई पछिको पाँचौं स्वर उ) ले कुहु कुहु गर्न लागे । तलाउहरू फुलेका कमलले भरिन थाले । यसपछि वसन्तलाई कामदेवको सहयोगी बनाएर महादेवको तपस्या भङ्ग गर्न पठाइयो ।



वसन्त ऋतुमा जस्तोसुकै सृष्टि पनि चञ्चल स्वभावको बन्न पुग्दछ । हामीले पनि त्यो भोगिरहेका हुन्छौं तर वास्ता गर्दैनौ । यो अवधिमा बढ्ने सामाजिक विकृतिका बारेमा कार्यपत्र प्रस्तूत गर्दछौं तर प्रकृतिको गुणलाई त्यसमा स्थान दिँदैनौ । यसैले यो प्रसङ्ग यहाँ राखिएको हो ।

(ङ) **चरक संहिता :**

**तस्याशिताद्यादाहाराद्बलं वर्णश्च वर्धते । यस्यर्तुसात्म्यं विदितं चेष्टाऽऽहारव्यपाश्रयम्॥**

सीमित मात्रामा भोजन गर्ने पुरुषले मात्रा मिलाएर खानपिन गर्नाले बल, वर्ण, चमक, सुख र आयु बढ्दछ । मात्रा मिलाएर खानपिन गर्ने पुरुषको शरीरको सहने नसहने स्थिति ऋतुका गुणभन्दा विपरीतका चेष्टा, व्यायाम, मालिस आदि, आहार, चटनीका आधारमा नै ऋतुहरूको पनि सहने नसहने कुराको ज्ञान हुने गर्दछ ।

**इह खलु संवत्सरं षडङ्गमृतुविभागेन विद्यात् ।**
**तत्राऽऽदित्यस्योदगयनमादानं च त्रीनृतून् शिशिरादीन् ग्रीष्मान्तान् व्यवस्येत्,**
**वर्षादीन् पुनर्हेमन्तान्तान् दक्षिणायनं विसर्गं च॥**

यो संसारमा संवत्सर अर्थात् वर्षरूपी समयलाई छ ऋतुहरूमा बाँडेर थाहा पाउनु पर्दछ । जब भगवान् सूर्य उत्तरायण हुन्छन् तव त्यसलाई "आदानकाल" वा ग्रहण गर्ने समय भनिन्छ । यसमा शिशिर,

वसन्त र ग्रीष्म ऋतुहरू बन्दछन् । जब सूर्य दक्षिणायन हुन्छन् तब त्यसलाइ "विसर्गकाल" वा त्याग्ने समय भनिन्छ । यसमा वर्षा, शरद् र हेमन्त ऋतुहरू पर्दछन् ।

**विसर्गे पुनर्वायवो नातिरूक्षाः प्रवान्तीतरे पुनरादाने,**
**सोमश्चाव्याहतबलः शिशिराभिर्भाभिरापूरयञ्जगदाप्याययति शश्वत्,**
**अतो विसर्गः सौम्यः ।**
**आदानं पुनराग्नेयं, तावेतावर्कवायू सोमश्च कालस्वभावमार्गपरिगृहीताः ।**
**कालर्तु-रस-दोष-देह-बल-निर्वृत्ति-प्रत्ययभूताः समुपदिश्यन्ते ॥**

विसर्गकालमा हावा त्यति धेरै रुखो बहँदैन तर आदानकालमा धेरै रुखो र सुक्खा हावा चल्दछ । किन कि विसर्गकालमा चन्द्रमा पूर्ण बलशालि हुन्छन् । यसबेला चन्द्रमा शीतल किरण मार्फत् संसारलाई पोषण गर्दछन् र संसारलाई नियमित तरिकाले बलियो बनाउँदछन् । यसकारण विसर्गकाललाई सौम्य वा चान्द्र-प्रधान वा राम्रो समय भनिन्छ । आदानकालमा अग्नितत्वको अथवा सूर्यको बाहुल्यता रहने गर्दछ । यसरी सूर्य, वायु र चन्द्रमा समय अनुसार स्वाभाविक बाटोबाट हिँड्दै काल, ऋतु, रस, दोष र शारीरिक बल बढाउने (वा घटाउने) कारण बन्ने गर्दछन् ।

**तत्र रविर्भाभिराददानो जगतः स्नेहं वायवस्तीव्ररूक्षाश्चोपशोषयन्तः**
**शिशिरवसन्तग्रीष्मेष्वृतुषु यथाक्रमं रौक्ष्यमुत्पादयन्तो रूक्षान् रसान्**
**तिक्तकषायकटुकांश्चाभिवर्धयन्तो नृणां दौर्बल्यमावहन्ति ॥**



आदानकालमा सूर्यले संसारको चिल्लोपनलाई सोस्ने गर्दछन् । यही कारणले गर्दा त्यसबेला प्रचण्ड, तिक्खर र रुखो हावा हरेक कुरालाई सुकाउँदै बहने गर्दछ । यसबाट शिशिरमा भन्दा वसन्तमा तथा वसन्तमा भन्दा ग्रीष्ममा बढी रुखोपन आउने गर्दछ । यो रुखोपनका कारण त्यसबेला रुखो प्रकृतिका तीता, टर्रा, र पिरा रस बढ्ने गर्दछ । यी रस बढेपछि मानिसको शरीरमा दुर्बलता आउने गर्दछ ।

**वर्षाशरद्धेमन्तेषु तु दक्षिणाभिमुखेऽर्के कालमार्गमेघवातवर्षाभिहतप्रतापे,**
**शशिनि चाव्याहतबले, माहेन्द्रसलिलप्रशान्तसन्तापे जगति, अरूक्षा रसाः**
**प्रवर्धन्तेऽम्ललवणमधुराः, यथाक्रमं तत्र बलमुपचीयते नृणामिति ॥**

वर्षा, शरद् र हेमन्त ऋतुमा जब सूर्य दक्षिणायन हुन्छन् तब कालको स्वाभाविक मार्ग भ्रमणका कारण तथा बादल, वायु र वर्षाका कारण सूर्यको तेज घट्दछ तर चन्द्रमाको तेज कम हुँदैन । यसले गर्दा तथा वर्षाको जलले गर्दा एवं गर्मी शान्त हुनाले गर्दा संसारमा रुखो नहुने अवस्थाको सृजना भई चिल्ला रस बढ्न पुग्दछन् । यसैले अमिलो, नुनिलो र गुलियो : यी रस क्रमशः वर्षा, शरद् र हेमन्त ऋतुमा बढ्ने गर्दछ । यसरी हुने रसको वृद्धिसँगै मानिसको पनि बलमा वृद्धि हुने गर्दछ ।

**आदावन्ते च दौर्बल्यं विसर्गादानयोर्नृणाम् । मध्ये मध्यबलं, त्वन्ते श्रेष्ठमग्रे च निर्दिशेत् ॥**
**शीते शीतानिलस्पर्शसंरुद्धो बलिनां बली ।**

विसर्ग र आदान दुवै कालको शुरु र अन्तमा पुरुषको शरीरमा दुर्बलता आउने गर्दछ । अर्थात् विसर्गकाल शुरु हुने वर्षा ऋतुमा तथा आदानकाल अन्त हुने ग्रीष्म ऋतुमा मानिस निर्बल हुने

गर्दछ । दुवै कालको बीच अवाध अर्थात् शरद् र वसन्त ऋतुमा मानिसको बल मध्यम हुन्छ । विसर्गको अन्तकाल (हेमन्त) मा र आदानको शुरु समय (शिशिर) मा मानिसको बल बढ्ने गर्दछ ।

**पक्ता भवति हेमन्ते मात्राद्रव्यगुरुक्षमः ॥**
**स यदा नेन्धनं युक्तं लभते देहजं तदा । रसं हिनस्त्यतो वायुः शीतः शीते प्रकुप्यति ॥**
**तस्मात्तुषारसमये स्निग्धाम्ललवणान् रसान् । औदकानूपमांसानां मेद्यानामुपयोजयेत् ॥**
**बिलेशयानां मांसानि प्रसहानां भृतानि च । भक्षयेन्मदिरां शीधुं मधु चानुपिबेन्नरः ॥**
**गोरसानिक्षुविकृतीर्वसां तैलं नवौदनम् । हेमन्तेऽभ्यस्यतस्तोयमुष्णं चाऽऽयुर्न हीयते ॥**
**अभ्यङ्गोत्सादनं मूर्ध्नि तैलं जेन्ताकमातम् । भजेद् भूमिगृहं चोष्णमुष्णं गर्भगृहं तथा ॥**
**शीतेषु संवृतं सेव्यं यानं शयनमासनम् ।**

हेमन्त नामक जाडो ऋतुमा चिसो हावाको स्पर्शले जठराग्नि, शरीरबाट बाहिर ननिस्की भित्र नै रोकिएर (ईँटा भट्टामा बालिने आगोजस्तै) बलियो हुन पुग्दछ । यसैले स्वाभाविकरूपमा हेमन्त ऋतुमा मानिसको पाचनशक्तिले धेरै र रुखा कुरा पनि पचाउन सक्ने हुन्छ । यो समयमा यदि जठराग्निले उसको क्षमता अनुसारको पचाउने (खानपिन) पाएन भने यसले शरीर भित्र रहेका अन्य तरल कुरा पचाउन वा खान थाल्दछ । शीतकालमा शीतगुण बढ्ने हुनाले शरीर भित्र वायु पनि बढ्ने गर्दछ । यसरी हुने वायुको वृद्धिलाई रोक्नका लागि चिल्लो वा गुलियो, अमिलो र नुनिलो पदार्थ खानु पर्दछ । बोसो बढी हुने पशुपंक्षीको मासुको रस, दुलामा बस्ने जीवको मासु र प्रसह वर्गका चराको मासु खानु पर्दछ । मासु खाएपछि सीधु नामक मदिरा र मह पिउनु पर्दछ । दुधजन्य पदार्थ, बोसो, उखुको रस र यसले बनेका पदार्थ, तेल र नयाँ चामल खानु पर्दछ । हेमन्त ऋतुमा स्नान आदिका लागि तातोपानी प्रयोग गर्नेको आयु घट्दैन । तेल मालिस, बुकुवा घसाइ, टाउका र गोडामा तेल लगाउने कार्य, पसिना निकाल्ने कार्य, घाम तपाइ, जमिन भित्र बनेका भित्री कोठाको बसाइ, न्यानो घरको बसाइ, यताउता घुमफिर गर्दा वस्त्र आदिले राम्ररी आफूलाई घेरेर वा खुम्चिएर गर्ने काम, बस्ने आदि स्थानमा समेटिएर न्यानो पार्दै बस्ने कार्य आदि गरी आफूलाई चिसोबाट जोगाउनू ।



**प्रावाराजिनकौषेयप्रवेणीकुथकास्तृतम् ॥**
**गुरूष्णवासा दिग्धाङ्गो गुरुणाऽगुरुणा सदा । शयने प्रमदां पीनां विशालोपचितस्तनीम् ॥**
**आलिङ्ग्याऽगुरुदिग्धाङ्गीं सुप्यात् समदमन्मथः । प्रकामं च निषेवेत मैथुनं शिशिरागमे ॥**
**वर्जयेदन्नपानानि वातलानि लघूनि च । प्रवातं प्रमिताहारमुदमन्थं हिमागमे ॥**

बाक्लो कम्बल, मृगको छाला, रेशमी वस्त्र, कम्बल, गद्दा वा कार्पेट जस्ता कुरा फिँजाएर तथा बाक्ला र न्याना कपडा लगाएर एवं शरीरमा बाक्लो लेप दलेर बस्ने गर्नू । पातलो तर पुष्ट शरीर भएकी, कामवती, कुचोन्नत भएकी तथा शरीरका अङ्गमा अगरको लेप दलेकी स्त्रीलाई अङ्कमाल गर्नू र यथेच्छ काम-भाव सहित सुती ग्राम्यधर्ममा संलग्न हुनू । हेमन्त ऋतुमा पचाउन हलुका हुने खानपिन र वायुविकार बढाउने आहारविहार परित्याग गर्नुपर्दछ । यो ऋतुमा सामुन्नेको हावा, थोरै खानपिन र सातु घोलेर खाने काम छाड्नु पर्दछ ।

**हेमन्तशिशिरौ तुल्यौ शिशिरेऽल्पं विशेषणम् । रौक्ष्यमादानजं शीतं मेघमारुतवर्षजम् ॥**
**तस्माद्धैमन्तिकः सर्वः शिशिरे विधिरिष्यते । निवातमुष्णमधिकं शिशिरे गृहमाश्रयेत् ॥**

**कटुतिक्तकषायाणि वातलानि लघूनि च । वर्जयेदन्नपानानि शिशिरे शीतलानि च॥**

चिसोका दृष्टिले हेमन्त र शिशिर ऋतु समान हुन्छन् । तर शिशिर ऋतुमा आदानकाल हुनाले हावा रुखो हुन्छ तथा बादल, वायु र वर्षा बढी हुन्छ । यसैले यो ऋतुमा चिसो बढी हुन्छ । अतः शिशिर ऋतुमा हेमन्त ऋतुका सबै नियम पालना गर्नुपर्दछ । शिशिर ऋतुमा हेमन्त ऋतुको भन्दापनि न्यानो र हावा नआउने घरमा बस्ने गर्नु पर्दछ । यो ऋतुमा पिरो, तीतो, टर्रो, वायु बढाउने, पचाउन सहज र चिसा कुरा खान पिउन छाड्नू ।

**वसन्ते निचितः श्लेष्मा दिनकृद्भाभिरीरितः । कायाग्निं बाधते रोगांस्ततः प्रकुरुते बहून्॥**
**तस्माद्वसन्ते कर्माणि वमनादीनि कारयेत् । गुर्वम्लस्निग्धमधुरं दिवास्वप्नं च वर्जयेत्॥**
**व्यायामोद्वर्तनं धूमं कवलग्रहमञ्जनम् । सुखाम्बुना शौचविधिं शीलयेत् कुसुमागमे॥**
**चन्दनागुरुदिग्धाङ्गो यवगोधूमभोजनः । शारभं शाशमैणेयं मांसं लावकपिञ्जलम्॥**
**भक्षयेन्निगदं सीधुं पिबेन्माध्वीकमेव वा । वसन्तेऽनुभवेत् स्त्रीणां काननानां च यौवनम्॥**

हेमन्त ऋतुमा शरीर भित्र थुप्रिएको कफ वसन्त ऋतु लागेपछि सूर्यको किरणले गर्दा (आगोमा घिउ पग्लिए जसरी) पग्लिएर तरल बनी शरीरको अग्निलाई कम बनाउँदै कफजन्य अनेक प्रकारका रोग उब्जाउने गर्दछ । यसैले कफलाई बाहिर निकाल्नका लागि वसन्त ऋतुमा वमन, शिरोविरेचन जस्ता उपचार गर्नुपर्दछ । व्यायाम, बुकुवा घस्ने कार्य, धूमपान, कुल्ला गर्ने कार्य र गाजल लगाउने कार्य गर्नुपर्दछ । नुहाउन तथा शौचक्रियाका लागि तातोपानीको प्रयोग गर्नुपर्दछ । शरीरमा चन्दन, अगर आदिको लेप दल्नु पर्दछ । जौ, गहुँ, शरभ मृग, जरायो, खरायो, हरिण, लाभे चरा, सेतो तित्रा जस्ता पशुपंक्षीको मासु खानु पर्दछ । कफदोष नाशगर्ने खालको सीधु वा माध्वीक नामक मदिरा पिउनु पर्दछ । वसन्त ऋतुमा युवती स्त्री र जङ्गलको आनन्द लिनू ।



**मयूखैर्जगतः स्नेहं ग्रीष्मे पेपीयते रविः । स्वादु शीतं द्रवं स्निग्धमन्नपानं तदा हितम्॥**
**शीतं सशर्करं मन्थं जाङ्गलान्मृगपक्षिणः । घृतं पयः सशाल्यन्नं भजन् ग्रीष्मे न सीदति॥**
**मद्यमल्पं न वा पेयमथवा सुबहूदकम् । लवणाम्लकटूष्णानि व्यायामं च विवर्जयेत्॥**
**दिवा शीतगृहे निद्रां निशि चन्द्रांशुशीतले । भजेच्चन्दनदिग्धाङ्गः प्रवाते हर्म्यमस्तके॥**
**व्यजनैः पाणिसंस्पर्शैश्चन्दनोदकशीतलैः । सेव्यमानो भजेदास्यां मुक्तामणिविभूषितः॥**
**काननानि च शीतानि जलानि कुसुमानि च । ग्रीष्मकाले निषेवेत मैथुनाद्विरतो नरः॥**

ग्रीष्म ऋतुमा सूर्य आफ्ना किरण मार्फत संसारको सार तानिरहने गर्दछन् । यसकारण यो ऋतुमा गुलियो, चिसो र तरल पदार्थ पिउनु तथा चिल्ला खानपिन गर्नु हितकर हुन्छ । चिसो र मिस्री मिसाइएको सातु खानाले, जाङ्गल जीवको मासु खानाले तथा घिउ र दूधसँग भात खानाले ग्रीष्म ऋतुमा कष्ट हुँदैन । यो ऋतुमा मदिरा पिउन हुँदैन पिउनै परे धेरै पानी मिसाएर मात्र पिउनु पर्दछ । नुनिलो, अमिलो, पिरो, तातो वा गर्मीगर्ने रस तथा व्यायाम गर्ने कार्य यो ऋतुमा छाड्नु पर्दछ । दिनका समयमा चिसो घरमा र रातमा चन्द्रमाको किरणले गर्दा चिसो हुने घरको छतमा खुल्ला हावा शरीरमा पर्ने गरी चन्दन दलेर सुत्नु पर्दछ । चन्दन र पानीले चिसो बनाइएको पङ्खाले वा हातको स्पर्शले शीतल शरीर बनाई तथा मोती वा मणिले सुशोभित भई पलङमा सुत्नु पर्दछ , ग्रीष्म ऋतुमा जङ्गल, झरना आदिको चिसो पानी तथा फूलको सेवन गर्नू । यो ऋतुमा ग्राम्यधर्मबाट परै रहनू ।

**आदानदुर्बले देहे पक्ता भवति दुर्बलः । स वर्षास्वनिलादीनां दूषणैर्बाध्यते पुनः ॥**
**भूबाष्पान्मेघनिस्यन्दात् पाकादम्लाज्जलस्य च । वर्षास्वग्निबले क्षीणे कुप्यन्ति पवनादयः ॥**
**तस्मात् साधारणः सर्वो विधिर्वर्षासु शस्यते । उदमन्थं दिवास्वप्नमवश्यायं नदीजलम् ॥**
**व्यायाममातपं चैव व्यवायं चात्र वर्जयेत् । पानभोजनसंस्कारान् प्रायः क्षौद्रान्वितान् भजेत् ॥**
**व्यक्ताम्ललवणस्नेहं वातवर्षाकुलेऽहनि । विशेषशीते भोक्तव्यं वर्षास्वनिलशान्तये ॥**
**अग्निं संरक्षणवता यवगोधूमशालयः । पुराणा जाङ्गलैर्मांसैर्भोज्या यूषैश्च संस्कृतैः ॥**
**पिबेत् क्षौद्रान्वितं चाल्पं माध्वीकारिष्टमम्बु वा । माहेन्द्रं तप्तशीतं वा कौपं सारसमेव वा ॥**
**प्रघर्षोद्वर्तनस्नानगन्धमाल्यपरो भवेत् । लघुशुद्धाम्बरः स्थानं भजेदक्लेदि वार्षिकम् ॥**

आदानकाल वा वर्षा ऋतुमा शरीर कमजोर हुनाले शरीरको अग्नि पनि कमजोर हुने गर्दछ । यो अग्नि वर्षा ऋतुमा वायु, पित्त र कफ तिनै कुरालाई दूषित बनाउने गुणको हुन्छ । ग्रीष्म ऋतुको प्रचण्ड गर्मीले, जमिन तात्नाले, पानी पर्नाले, पानीको स्पर्श भइरहनाले तथा जमिनबाट तातो बाफ निस्कनाले यी तीन दोष उत्तेजित हुन्छन् । यसरी वर्षाका कारण वात र कफ उत्तेजित हुन्छ, जल अमिलो हुनेगरी पाकेपछि त्यसबाट पित्त पनि उत्तेजित हुने गर्दछ । यसकारण वर्षा ऋतुमा सामान्य खालको विधि पालना गर्नुपर्दछ । पानीमा घोलिएको सातू, दिउसको सुताई, शीत एवं ओसको पानी, ग्राम्यधर्म, घाम ताप्ने कार्य र व्यायाम यो ऋतुमा गर्न हुँदैन । वर्षा ऋतुमा खानपिनका बीचमा प्रायः महको उपयोग गर्नु पर्दछ । जुन दिन हावा पानीको वेग ठूलो हुन्छ र बढी चिसो हुन्छ त्यो दिनको शरीरका वायुलाई शान्त पार्नका लागि अमिलो, नुनिलो,चिल्लो अत्यधिक हुने कुरा खानु पर्दछ । शरीरको अग्निको रक्षाका लागि जौ, गहुँ, पुरानो चामल, जाङ्गल जीवको मासु र घिउ आदि हालेर बनाइने दाल वा सूप खानु पर्दछ । पित्तविकार शान्त पार्नका लागि अलिकति मह मिसाएर द्राक्षासव वा पानीमा थोरै मह मिसाएर पिउनु पर्दछ । वर्षा ऋतुमा कि आकाशबाट परेको स्वच्छ पानी नभए कुवा वा तलाउको पानीलाई तताएर सेलाएपछि पिउनु पर्दछ । तेल घसेर मालिस गर्ने कार्य, बुकुवा घस्ने कार्य, स्नान, सुगन्ध लगाउने कार्य, माला लगाउने कार्य, हलुका र सफा कपडा लगाउने कार्य तथा ओभानो स्थानमा बस्ने वा हिँडडुल गर्ने जस्ता कार्य वर्षा ऋतुमा गर्नुपर्दछ ।



**वर्षाशीतोचिताङ्गानां सहसैवार्करश्मिभिः । तप्तानामाचितं पित्तं प्रायः शरदि कुप्यति ॥**
**तत्रान्नपानं मधुरं लघु शीतं सतिक्तकम् । पित्तप्रशमनं सेव्यं मात्रया सुप्रकाङ्क्षितैः ॥**
**लावान् कपिञ्जलान् हरिणानुरभ्राञ्छभाञ्शशान् । शालीन् सयवगोधूमान् सेव्यानाहुर्घनात्यये ॥**
**तिक्तस्य सर्पिषः पानं विरेको रक्तमोक्षणम् । धाराधरात्यये कार्यमातपस्य च वर्जनम् ॥**
**वसां तैलमवश्यायमौदकानूपमामिषम् । क्षारं दधि दिवास्वप्नं प्राग्वातं चात्र वर्जयेत् ॥**

वर्षा ऋतुमा समयका कारण स्वाभाविक रूपमा शरीरमा जम्मा हुन पुगेको पित्त शरद् ऋतु लागी बादल हटेपछि तथा सूर्यका किरणले तात्न थालेपछि अनायास उत्तेजित हुने गर्दछ । यसैले यस ऋतुमा गुलियो, पचाउन सहज, शीतल गर्ने तथा तीता र पित्तलाई शान्त पार्ने खालका खानपिन उचित परिमाणमा खानु पर्दछ । शरद् ऋतुमा तीता औषधी हालेर लाभे चरा, सेतो तित्रो, हरिण, भेडो, जरायो, र खरायो मासु तथा मार्सी चामल, जौ र गहुँ खानु पर्दछ । विधिपूर्वक पकाइएको घिउ, विरेचन, रगत बहाउने कार्य, शिरावेध, जूका आदिले टोकाएर रगत निकाल्ने काम तथा घाम ताप्ने काम बादल हटेपछिको शरद् ऋतुमा गर्नु पर्दछ । यो ऋतुमा, बोसो, तेल, ओस वा शीत, जलचर जीवको मासु, क्षार वा नुन, दही, दिउसको सुताइ र पूर्वतिरबाट आउने सामुन्नेको हावा त्याग गर्नुपर्दछ ।

**शारदानि च माल्यानि वासांसि विमलानि च । शरत्काले प्रशस्यन्ते प्रदोषे चेन्दुरश्मयः ॥**

शरद् ऋतुका रातको पहिलो प्रहरमा चन्द्रमाको किरण सेवन गर्नु, शरद्कालीन फूलका माला लगाउनु र निर्मल कपडा लगाउनु हितकर हुन्छ ।

(च) द्रव्यगुणसङ्ग्रह :

**हेमन्तः शीतलः स्निग्धः स्वादुरग्नेश्च वृद्धिकृत् ॥**
**शिशिरः शीतलः किञ्चिद्रूक्षस्तीक्ष्णोऽनिलाग्निकृत् ।**
**वसन्तस्तुवरः सोष्णः कफव्याधि समीरणः ॥**
**ग्रीष्म उष्णोऽतिरूक्षश्च कटुको बलहानिकृत् ।**
**वर्षाः शीता विदाहिन्यो वह्निमान्द्यानिलार्तिदाः ॥**
**शरत्पित्तकफप्राया स्निग्धोष्णा शस्यवृद्धिकृत् ।**

हेमन्त ऋतु शीतवीर्यको, चिल्लो, स्वादिलो र पाचनशक्ति बढाउने गुणको हुन्छ । शिशिर ऋतु शीतवीर्यको, केही रुखो, तिक्खर तथा वातविकार र पाचनशक्ति बढाउने गुणको हुन्छ । वसन्त ऋतु टर्रो, उष्णवीर्यको तथा कफविकार र वातविकार गर्ने गुणको हुन्छ । ग्रीष्म ऋतु उष्णवीर्यको, अति रुखो, पिरो र बल नाशगर्ने गुणको हुन्छ । वर्षा ऋतु शीतवीर्यको डाहकारी, पाचनशक्ति कमजोर पार्ने र वातविकार बढाउने गुणको हुन्छ । शरद् ऋतु प्रायः कफविकार पित्तविकार बढाउने, चिल्लो, उष्णवीर्यको र अनाज बढाउने गुणको हुन्छ ।



(च) पर्यायरत्नमाला :

**हिमागमस्तु हेमन्तो । वसन्तः कुसुमागमः । ग्रीष्मो निदाघो घर्मश्च ।**
**प्रावृट् घर्मात्ययस्तथा । वर्षा मेघागमश्चैव । शरत्कालो घनात्ययः ।**

हिमागम तथा हेमन्त : यी हेमन्त ऋतुका नाम हुन् । वसन्त र कुसुमागम : यी वसन्त ऋतुका नाम हुन् । ग्रीष्म, निदाघ र घर्म : यी ग्रीष्म ऋतुका तथा प्रावृट् र घर्मात्यय : यी प्रावृट् ऋतुका नाम हुन् । वर्षा र मेघागम : यी वर्षा ऋतुका तथा शरद् र घनात्यय : यी शरद् ऋतुका नाम हुन् ।

(छ) भावप्रकाश संहिता :

**चयकोपशमा यस्मिन्दोषाणां सम्भवन्ति हि । ऋतुषट्कं तदाख्यातं रवेः राशिषु सङ्क्रमात् ॥**
**ग्रीष्मो मेषबृषौ प्रोक्तः प्रावृण्मिथुनकर्कटौ । सिंहकन्ये स्मृता वर्षा तुलावृश्चिकयोः शरत् ॥**
**धनुर्ग्राहौ च हेमन्तो वसन्तः कुम्भमीनयोः ॥**
**शिशिरः पुष्पसमयो ग्रीष्मो वर्षाशरद्धिमाः । माघादिमासयुग्मं स्युर्ऋतवः षट् क्रमादमी ॥**
**गङ्गाया दक्षिणे देशे वृष्टेर्बहुलभावतः । उभौ मुनिभिराख्यातौ प्रावृड्वर्षाऽभिधावृतू ॥**
**तिस्याएवोत्तरेदेशे हिमप्रचुरभावतः । एतावुभौ समाख्यातौ हेमन्तशिशिरावृतू ॥**
**उत्तरायणमाद्यैस्तैः परैः स्याद्दक्षिणायनम् । आद्यमुष्णं बलहरं ततोऽन्यद्बलदं हिमम् ॥**

मेष आदि राशिहरूमा सूर्यले भ्रमण गर्नाले छ ऋतुहरू हुन्छन् जसमा वात, पित्त र कफ बढ्ने, उत्तेजित हुने र शान्त हुने गर्दछ । मेष र वृष सङ्क्रान्तिलाई ग्रीष्म, मिथुन र कर्कट सङ्क्रान्तिलाई प्रावृट्, सिंह र कन्या सङ्क्रान्तिलाई वर्षा, तुला र वृश्चिक सङ्क्रान्तिलाई शरद्, धनु र मकर सङ्क्रान्तिलाई हेमन्त र कुम्भ र मीनको सङ्क्रान्तिलाई वसन्त ऋतु भनिन्छ । अन्य विद्वानको मतमा शिशिर, वसन्त, ग्रीष्म, वर्षा, शरद र हेमन्त : यी छ ऋतुहरू माघ आदि दुई-दुई महिनामा क्रमैले हुन्छन् । गङ्गानदी दक्षिणतिर रहेका देशमा अत्यधिक वर्षा हुन्छ यसैले मुनिजनले प्रावृट् र वर्षा भनी अलग अलग ऋतुको वर्गीकरण गरेका हुन् । यसैगरी गङ्गा नदीको उत्तरतिर रहेका देशमा जाडो वा चिसो अत्यधिक हुने हुनाले त्यहाँ हेमन्त र शिशिर गरी दुईवटा बेग्लाबेग्लै ऋतुहरू गणना गरिएका हुन् । शुरुका तीन ऋतुहरू उत्तरायण र पछिल्ला तीन ऋतुहरू दक्षिणायन हुन् । उत्तरायण ऋतुहरू गर्मीगर्ने र बललाई सोस्ने गुणका हुन्छन् । दक्षिणायनका ऋतुहरू शीतलता प्रदायक र बल बढाउने गुणका हुन्छन् ।

**हेमन्तः शीतलः स्निग्धः स्वादुर्जठरवह्निकृत् । शिशिरः शीतलोऽतीव रूक्षो वाताग्निवर्धनः ॥**
**वसन्तो मधुरः स्निग्धः श्लेष्मवृद्धिकरश्च सः । ग्रीष्मो रूक्षोऽतिकटुकः पित्तकृत्कफनाशनः ॥**
**वर्षाः शीता विदाहिन्यो वह्निमान्द्यानिलप्रदाः । शरदुष्णा पित्तकर्त्री नृणां मध्यबलावहा ॥**
**चयप्रकोपोपशमा वायोर्ग्रीष्मादिषु त्रिषु । वर्षादिषु च पित्तस्य श्लेष्मणः शिशिरादिषु ॥**
**चीयते लघुरूक्षाभिरोषधीभिः समीरणः । तद्विधस्तद्विधे देहे कालस्यौष्ण्यान्न कुप्यति ॥**
**अद्भिरम्लविपाकाभिरोषधीभिश्च तादृशम् । पित्तं याति चयं कोपं न तु कालस्य शैत्यतः ॥**
**चीयते स्निग्धशीताभिरुदकौषधिभिः कफः । तुल्ये च काले देहे च स्कन्नत्वान्न प्रकुप्यति ॥**
**हिमे याति शमं पित्तं वायुः श्लेष्मा च चीयते । स वायुः शिशिरे कोपं यात्येवोपचितः कफः ॥**
**हेमन्ते सञ्चितः श्लेष्मा शिशिरे त्वतिचीयते । शीतस्निग्धगुरुद्रव्यैः शैत्यस्कन्नो न कुप्यति ॥**

हेमन्त ऋतु शीतलता र चिल्लोपन बढाई हरेक पदार्थमा स्वादिलोपन निकाल्ने र जठराग्निलाई बाल्ने गुणको हुन्छ । शिशिर ऋतु शीतलता, अति रुखो, वायु र अग्निलाई बढाउने गुणको हुन्छ । वसन्त ऋतु पदार्थमा गुलियोपन घुसाउने र चिल्लो स्वभावको हुनुका साथै कफलाई बढाउने गुणको हुन्छ । ग्रीष्म ऋतु रुखो, पदार्थमा तिक्खरता घुसाउने, पित्तकारी र कफनाशक गुणको हुन्छ । वर्षा ऋतु शीतल, डाहकारी, पाचनशक्तिलाई कमजोर पार्ने, र वातविकारलाई बढाउने गुणको हुन्छ । शरद ऋतु गर्मी गर्ने, पित्तविकार बढाउने र मानिसमा मध्यम खालको बल सञ्चार गर्ने गुणको हुन्छ । ग्रीष्म ऋतुमा मानिसको शरीरमा वायु जम्मा हुन्छ, वर्षा ऋतुमा त्यो वायु उत्तेजित हुन्छ र शरद ऋतुमा गएर शान्त हुन्छ । वर्षा ऋतुमा मानिसको शरीरमा पित्त जम्मा हुन्छ, शरद ऋतुमा उत्तेजित हुन्छ र हेमन्त ऋतुमा शान्त हुन्छ । शिशिर ऋतुमा मानिसको शरीरमा कफ जम्मा हुन्छ, वसन्त ऋतुमा कफ उत्तेजित हुन्छ र ग्रीष्म ऋतुमा यो शान्त हुन्छ । ग्रीष्म ऋतुमा हल्को रुखा औषधीहरूले पनि शरीरमा वायु जम्मा हुन्छ तर यसरी जम्मा भएको हलुका र रुखो वायु हलुका र रुखो भएको शरीरमा त्यसबेलाको गर्मीले गर्दा उत्तेजित हुन सक्दैन । वर्षाऋतुमा अमिलोपनले युक्त पानीमा मिसाएर त्यस्तै खालको औषधीहरू खानाले मानिसको शरीरमा पित्त जम्मा हुन्छ, तर यसरी जम्मा भएको पित्त त्यस बेलाको चिसोपनले गर्दा उत्तेजित हुन सक्दैन । शिशिर ऋतुमा चिल्लो र शीतल औषधीहरू र त्यस्तै गुणको पानीले गर्दा मानिसको शरीरमा कफ जम्मा हुने गर्दछ, तर त्यसरी जम्मा भएको कफ रुखो र शीतलताले गर्दा उत्तेजित हुन सक्दैन । हेमन्त ऋतुमा पित्त शान्त हुन्छ तर वायु र कफ जम्मा हुन्छ । हेमन्त ऋतुमा जम्मा भएको वायु शिशिर ऋतुमा उत्तेजित हुन्छ तर कफ भने जमेर बस्दछ । हेमन्त ऋतुमा शीतल, चिल्लो र पचाउन कठिन पदार्थका कारण मानिसको शरीरमा जम्मा भएको कफ शिशिर ऋतुको चिसोले गर्दा अति नै बढ्दछ तर धेरै चिसोले गर्दा उत्तेजित हुन पाउँदैन । यो

कालको स्वभाव हो । यस बाहेक खानापिन आदिका योगले पनि वात आदि दोष तुरुन्त जम्मा हुने, उत्तेजित हुने र शान्त हुने गर्दछ । यी दोषहरू आआफ्नो अनुकूल समयमा बढ्ने, उत्तेजित हुने र शान्त हुने गर्दछन् ।

**वर्षासु प्रबलो वायुस्तस्मान्मिष्टादयस्त्रयः । रसाः सेव्या विशेषेण पवनस्योपशान्तये ॥**
**भवेद्वर्षासु वपुषः क्लिन्नत्वं यद्विशेषतः । तत्क्लेदशान्तये सेव्या अपि कट्वादयस्त्रयः ॥**
**स्वेदनं मर्दनं सेव्यं दध्युष्णं जाङ्गलामिषम् । गोधूमाः शालयो माषा जलं कौपं जलं च्युतम् ॥**
**न भजेत्पूर्वपवनं वृष्टिं घर्मं हिमं श्रमम् । नदीतीरं दिवास्वप्नं रूक्षं नित्यं च मैथुनम् ॥**

वर्षा ऋतुमा बायु बलियो हुन्छ । यसैले त्यसलाई शान्त पार्न विशेष गरी गुलिया, पिरा र नुनिला कुरा (रस) खानु पर्दछ । प्रायः वर्षा ऋतुमा शरीर भिज्ने (आर्द्र) गर्दछ यसैले त्यसबाट हुने पीडा शान्त पार्न तिक्खर, तीता र टर्रा रस पनि खानु पर्दछ । यो ऋतुमा पसिना निकाल्नु, शरीर मालिश गराउनु; दही खानु, गर्मी गर्ने कुरा खानु, जाङ्गल जीवको मासु खानु; गहुँ, मार्सीधानको चामल र मास खानु तथा कुवा वा झर्नाको पानी पिउनु पर्दछ । यो ऋतुमा पूर्वतिरबाट आइरहेको हावा खान, पानीमा भिज्न, घाममा बस्न, ओस आदि चिसो शरीरमा पार्न, परिश्रम गर्न, नदीका किनारमा गएर बस्न, दिउस सुत्न, रुखा कुरा खान र दिनहुँ ग्राम्यधर्ममा संलग्न हुन हुँदैन ।

**सर्पिः स्वादुकषायतिक्तकरसा यच्छीतलं यल्लघु**
**क्षीरं स्वच्छसितैक्षवः पटुरसः स्वल्पं पलं जाङ्गलम् ।**
**गोधूमा यवमुद्गशालिसहिता नादेयमंशूदकं**
**चन्द्रश्चन्दनमिन्दुरादिरजनी माल्यं पटो निर्मलः ॥**
**विश्रामः सुहृदां गणेषु मधुरा वाचः सरः क्रीडनं**
**पित्तानां च विरेचनं बलवतो युक्तं शिरामोक्षणम् ।**
**एतान्यत्र घनावसानसमयेऽपथ्यानि भुञ्जेदधि**
**व्यायामाम्लकटूष्णतीक्ष्णदिवसस्वप्नं हिमञ्चातपम् ॥**
**इक्षवः शालयो मुद्गाः सरोऽम्भ क्वथितं पयः । शरद्येतानि पथ्यानि प्रदोषे चेन्दुरश्मयः ॥**



घिउ खानु, टर्रो गुलियो तीतो रस खानु, शीतल र पचाउन हलुका हुने पदार्थ खानु, दूध पिउनु, स्वच्छ मिश्री उखु र नुनिला पदार्थ खानु, जाङ्गल जीवको मासु थोरै खानु; गहुँ, जौ, मुगी र मार्सी चामल खानु; नदीको अथवा अंशूदक जल पिउनु; कपूर, चन्दन, चाँदनी रात, फूल र निर्मल वस्त्रको सेवन गर्नु, मित्रहरूको समूहमा गएर बस्नु, मिठो बोल्नु, तलाउमा गएर जलक्रिडा गर्नु, पित्त प्रकृतिको मानिस भए विरेचन गराउनु, बलियो मानिस भए रगत बहाउनु आदि जस्ता कार्य गर्नु शरद् ऋतुमा हितकर हुन्छ । दही खानु, व्यायाम गर्नु; अमिलो, पिरो, गर्मी गर्ने र तिक्खर कुरा खानु, दिउस सुत्नु बरफ खानु र घाम ताप्नु जस्ता कार्य शरद् ऋतुमा अहितकर हुन्छ । शरद् ऋतुमा उखु, मार्सीचामल, मुगी, तलाउको पानी, तातो दूध र साँझमा चन्द्रमाको किरण सेवन गर्नु पथ्य हुन्छ ।

**प्रातर्भोजनमम्लमिष्टलवणानभ्यङ्गघर्मश्रमान् गोधूमैक्षवशालिमाषपिशितं पिष्टं नवान्नं तिलान् ।**
**कस्तूरीं वरकुङ्कुमागुरुयुतामुष्णाम्बुशौचं तथौ स्निग्धं स्त्रीषु सुखं गुरूष्णवसनं सेवेत हेमन्तके ॥**

हेमन्त ऋतुमा बिहानै खाना खानु; आमला, गुलियो र नुनिलो पदार्थ खानु; शरीरमा तेल दलेर मालिस गर्नु, पसिना निकाल्नु, परिश्रम गर्नु; गहुँ, उखु, मार्सीचामल, मास वा मासु, मिठाई, नयाँ अन्न र तिल खानु; कस्तूरी, अगर आदि प्रयोग गर्नु; शरीरलाई तातो पानीले सफा गर्नु, स्त्रीहरूमा मायायुक्त सुखभोग गर्नु तथा बाक्ला र न्याना लुगा लगाउनु : यी हेमन्त ऋतुमा सेवनीय हुन्छन् ।

**शिशिरे शीतमधिकं रौक्ष्यं चादानकालजम् । विशेषतस्ततस्तत्र हेमन्तस्य मतो विधिः ॥**

शिशिर ऋतुमा शीत वा चिसोपन बढी हुन्छ । वायुले रसलाई सोस्दछ । यसले गर्दा रुखोपन बढी हुन्छ । यसकारण यो ऋतुमा पनि हेमन्त ऋतु अनुसारकै दिनचर्या अपनाउनु पर्दछ ।

**वान्तिं नस्यमथाभयां च मधुना व्यायाममुद्वर्तनं**
**संसेवेत मधौ कफघ्नकवलं शूल्यं पलं जाङ्गलम् ।**
**गोधूमान्बहुशालिभेदसहितान्मुद्गान्यवान्षष्टिकाँ-**
**ल्लेपं चन्दनकुङ्कुमागुरुकृतं रूक्षं कटूष्णं लघु ॥**
**मिष्टमम्लं दधि स्निग्धं दिवास्वप्नं च दुर्जरम् । अवश्यायमपि प्राज्ञो वसन्ते परिवर्जयेत् ॥३४८॥**

वसन्तऋतुमा वान्ता गराउने खालका औषधी खानु, नाकमा औषधी हाल्नु, महसँग हर्रो खानु, व्यायाम गर्नु, औषधीको धूलो शरीरमा माडेर दल्नु, कफ नाशगर्ने खालका औषधी मिसाएको मनतातो पानीले मुख कुल्ला गर्नु, फलामले सेकाइएका जङ्गली जीवको मासु खानु, गहुँ-अनेक थरी चामल-मुगी तथा जौ र सठिया चामलको भात खानु, चन्दन-धूपी-केसरको लेप बनाएर शरीरमा दल्नु तथा रुखा-तिक्खर-ताता र हलुका पदार्थ खानु अति नै लाभदायक हुन्छ । गुलिया, अमिला, दही, चिल्ला, दिउसको सुताइ, पच्न कठिन हुने कुरा शीत : यी कुरालाई वसन्त ऋतुमा अवश्य नै त्यागिदिनु पर्दछ ।

**स्वादुस्निग्धहिमं लघु द्रवमयं द्रव्यं रसालां सितां**
**सक्तुक्षीरमजाङ्गलानि सितया शालि रसं मांसजम् ।**
**शीतांशुं शयनं दिवा मलयजं शीतं पयः पानकं**
**सेवेतोष्णदिने त्यजेत्तु कटुकक्षाराम्लघर्मश्रमान् ॥**

ग्रीष्म ऋतुमा जुन पदार्थ गुलिया, चिल्ला, शीतल गर्ने, पचाउन सहज र पातला (रसिला) हुन्छन् ती पदार्थ खानू । सिखर्नी, मिस्री, सातू, दूध, आनूपजीवको मासु, मिस्रीसँग मार्सीचामलको भात र मासुको रस खानु तथा चन्द्रमाको किरण सेवन गर्नु, दिउस सुत्नु, चन्दन लगाउनु, चिसो पानीको जुस पिउन जस्ता कुरा ग्रीष्म ऋतुमा हितकर हुन्छन् । यो ऋतुमा पिरो, नुनिलो र अमिलो कुरा खान तथा घाममा बस्न र परिश्रम गर्न छाड्नू ।

**ऋतुष्वेषु य एतैस्तु विधिभिर्वर्तते नरः । दोषानृतुकृतान्नैव लभते स कदाचन ॥**

जुन मानिसले यो ऋतुसम्बन्धी विधिको पालना गर्दछ उसलाई ऋतुजन्य रोग कहिल्यै लाग्दैन ।

(ज) **मदनपाल निघण्टु :**
**संहर्षात्कुपिता भवन्ति हि मला वर्षासु वातादयः**

क्लिन्नत्वाद्वपुषोऽनले कृशतरे वैद्येन देयं ततः ।
अन्नं दीपनपाचनं च मलहृत् क्लेदापहोष्णद्रवं
रूक्षं नातिकषायतिक्तकटुकं स्निग्धं च किञ्चिद्रसैः ॥

वर्षा ऋतुमा शरीरका वायु आदि दोष तिव्र तरिकाले दूषित हुन्छन् । पृथ्वी जतिखेर पनि गिलो हुने हुँदा मानिसको भित्र पनि आमजन्य विकार बढ्ने गर्दछ । यसले गर्दा जठराग्निको शक्ति घट्दछ । यसैले वैद्यले वर्षा ऋतुमा दीपन, पाचन दोषनाशक, दिसा आदि मल खुलाउने, मानसिक थकाई नाश गर्ने, तातो र पातलो, रुखो र धेरै पिरो नहुने, धेरै टर्रो र तीतो नहुने, केही रस भएको चिल्लो कुरा खान दिनुपर्दछ ।

दिव्यं चौङ्चमथाम्बु तप्तशिशिरं सक्षौद्रमल्पं पिबेद्
गच्छन्त्योषधयो विदाहमधिकं तारुण्ययोगात्तदा ।
व्यायामार्कमरीचिमैथुनसुखावश्यायवर्जे ततो
भूबाष्पाम्बुभुजङ्गदंशमशकैर्वर्जे शयीतालये ॥

यसबेला आकाशबाट परेको पानी र चौङ्च जल पिउनू । यो जल पनि उमालेर सेलाएपछि मह मिसाएर पिउनू किन कि त्यो जल वर्षात्को ताजा जल हुनाले बढी डाहकारी हुन्छ । वर्षा ऋतुमा व्यायाम, घाम ताप्ने काम, स्त्री-सहवास, दिउस सुत्ने कार्य र ओस वा शीत नखानू । पृथ्वीको बाफ, पानी, सर्प, डाँस, लामखुट्टे आदि नहुने स्थानमा सुत्ने गर्नू ।



शीते यत्र न वातवृष्टिरधिका साङ्गारयाने गृहे
निर्वाते क्षितिपः शयीत मधुरं किञ्चिच्च पीत्वाऽऽसवम् ।
काश्मीरागुरुलेपभूषिततनुर्नागाङ्गनाभिर्व्रजे-
द्यत्नाच्च व्यजनावगाहनरतिं स्वापं दिवा च त्यजेत् ॥

शीतकालमा जहाँ हावा र पानी धेरै आउँदैन, जहाँ आगो ताप्ने अगेनू बनाइएको हुन्छ, जहाँ हावाले हान्दैन, त्यस्तो स्थानमा केही गुलियो आसव पिई राजाले सुत्नू । अनि केसर, अगर आदिको लेप शरीरमा दली सुन्दर स्त्रीहरू सँग रम्नू । यसपछि व्यजन पङ्खाको हावा खाने कार्य र जलक्रीडा गर्नू । दिनमा सुत्ने र सहवास गर्ने कार्य नगर्नू ।

सेव्याः स्वादुकषायतिक्तविशदाऽवर्षे त्यजेज्जाङ्गलं
द्राक्षाक्षीरसितेक्षुशालिमधुरा गोधूममुद्गाः पयः ।
नैर्मल्यादखिलं जलं लघुतरं वासः स्रजश्चन्दनं
सेवेतेन्दुकरान् प्रदोषसमये गाहेत साब्जं सरः ॥

शरद ऋतुमा गुलिया, टर्रा, तीता र सुन्दर खालका रस सेवन गर्नू । जाङ्गल मासु त्याग गर्नू । दाख, दूध, मिस्री, उखु, मार्सीचामल, गुलिया कुरा, गहुँ, मुगी आदि खानू । आश्विन र कार्तिकमा निर्मलताले गर्दा सबै खालका पानी पचाउन हलुका हुन्छन् । यस्तो पानी पिउनू अनि वस्त्र, माला, चन्दन र साँझमा चन्द्रमाको किरण सेवन गर्नू । अनि कमल भएका तलाउमा डुबुल्की लगाएर नुहाउनू ।

वर्षासुपचितं विरेचविधिना पित्तं हरेद्बुद्धिमान्

**युक्तं रक्तविमोक्षणेन हविषस्तिक्तस्य पानं तथा ।**
**रात्रौ जागरणं व्यवायमधिकं घर्मं तुषारं दधि**
**क्षाराम्लोष्णविदाहितीक्ष्णकटुकं निद्रां दिवा च त्यजेत् ॥**

बुद्धिमान् व्यक्तिले वर्षा ऋतुमा शरीर भित्र जम्मा हुन पुगेको पित्तविकारलाई शरद् ऋतुमा विरेचन विधिले बाहिर निकाल्नू, रगत निकाल्नू र तीता कुराले सिद्ध गरिएको घिउ पिउनू । रातको जागराम, अत्यधिक सहवास, घाम तपाई, तुसारो, दही, नुनिलो, अमिलो, गर्मी गर्ने वा तातो, धेरै डाह गर्ने, तिक्खर, पिरो र दिनको सुताई त्याग गर्नू ।

**हेमन्ते लवणाम्लतिक्तकटुकक्षारोत्कटं बृंहणं**
**सर्पिस्तैलसमेतमुष्णमशनं तीक्ष्णानि पानानि च ।**
**सेवेतागुरुरूषिताऽम्ब्वशिशिरं गाहेत तैलप्लुतः**
**कौशेयास्तरणे शयीत शयने साङ्गारयाने गृहे ॥**

हेमन्त ऋतुमा नुनिलो, अमिलो, तीतो, पिरो, क्षारयुक्त, उत्कट(मददायक), पौष्टिक, घिउ र तेल सहितको, ताततातो, तिक्खर खानेकुरा र पेय पिउनू । शरीरमा तेल मालिश गरी तातोपानीमा नुहाउनू र रेशमी वस्त्रयुक्त अँगेना सहितको कोठामा तातो बनाएर राखिएको पलङ्मा सुत्नू ।

**श्यामां पीनपयोधरोरुजघनामाश्लिष्य धन्योऽङ्गनां**
**बाह्लीकागुरुलेपभूषिततनुं धूपैर्वरैर्धूपितम् ।**
**कामं मैथुनमप्यतर्पितवपुः सेवेत बल्यै रसैः**
**कर्तव्यः शिशिरेऽयमेव नितरां शीताधिकत्वाद्विधिः ॥**



पुष्ट स्तन र जाँघ भएकी तरुनी स्त्रीसँग मिलेर सुत्नू । केसर र अगर लेपन गर्नू, सुगन्धमय धूपले धूपित हुनू र स्त्री-सहवासमा संलग्न हुनू । बलदायक रसहरू खानेपिउने गर्नू । माघ र फागुनमा धेरै जाडो भए यही विधि अपनाउनु उपयुक्त हुन्छ ।

**तीक्ष्णक्षारकषायरूक्षकटुकं कोष्णं वसन्तेऽशनं**
**सन्मन्थं मधुमुद्गजाङ्गलयवप्रायं हितं वाऽऽसवम् ।**
**व्यायामं विपिनं च कोकिलकलालापाकुलं कामिनी-**
**स्नानोद्वर्तनचन्दनानि नृपतिः सेवेत रम्याः स्रजः ॥**

वसन्त ऋतुमा तिक्खर, नुनिला, टर्रा, रुखा, पिरा र ताततातो खानपिन गर्नू । मह, मुगी र जाङ्गल क्षेत्रका जीवको मासु खानू । पिउने बानी हुनेले नियमानुसार मदिरा पिउनू । कसरत गर्नू । कोइली आदि चराको आवाज गुञ्जिने खालका बगैँचा, उपवन आदिमा घुम्नू । सुन्दर एवं अनुकूल व्यवहार गर्ने पति वा पत्नीको साथ लिनू । दिनहुँ नुहाउनू । बुकुवा, चन्दन आदि दल्नू । फूल, रत्न आदिको आफूलाई अनुकूल हुने खालको माला लगाउनू ।

**हेमन्ते निचितः प्रकुप्यति कफे भानोः करैरावृत-**
**स्तस्मात्तीक्ष्णशिरोविरेकवमनैर्गण्डूषधूपादिभिः ।**

**तं प्रज्ञो विजयेत् विश्वजलदक्वाथैरथोष्णाम्बुभिः**
**शीतस्निग्धगुरुद्रवाम्लमधुरं निद्रां दिवा च त्यजेत्॥**

हेमन्त ऋतुमा शरीरभित्र जम्मा भएको कफ सूर्यका किरणले ढाकिएपछि विकृत हुन्छ यसैले कडा शिरोविरेचन अर्थात नस, बान्ताकारी ओखती, कुल्ला गर्ने ओखती, धूप सेवन आदिले तथा सुठो, नागरमोथे जस्ता ओखतीको काँढापानीले एवं तातोपानीले त्यो विकृत कफलाई जित्नू । शीतल, चिल्ला, पचाउन कठिन, पातला, अमिला, गुलिया खानपिन र दिउसको सुताई परित्याग गर्नू ।

**ग्रीष्मे शीतगृहान्सरांसि सरितो वापीर्वनानि स्रजो**
**हाराञ्छीतलतालवृन्तपवनान्सेवेत निद्रां दिवा ।**
**वासांस्यच्छलघूयनुष्णमधुरं चान्नं ससर्पिर्द्रवं**
**मन्थक्षीरसुपानकानि च सितादिग्धानि शीतान्यपि॥**

ग्रीष्म ऋतुमा शीतल गृह; ताल, नदी र वापी, वन, माला, हार, शीतल ताडका पङ्खाको हावा र दिनमा शयन जस्ता कुराको सेवन गर्नू । सुन्दर र हलुका लुगा लगाउनू । शीतल, गुलिया, मीठा र घिउसहितका पातला अनाज, मन्थ, मिस्री आदि हालिएको दूध र अन्य उपयुक्त पेयपदार्थ पिउनू ।

**शुभ्रे हर्म्यतले शयीत शयने प्रत्यग्रपुष्पाञ्चिते**
**वातैश्चन्दनचन्द्रचर्चिततनुः संस्पृश्यमानः सुखैः ।**
**व्यायामं परिशोषि मैथुनरतिं घर्मं तथोष्णं रसा-**
**नाग्नेयान्परितस्त्यजेन्मतिमतो वैद्यस्य वाक्ये रतः॥**



सुन्दर र स्वच्छ घरका छत आदिमा फूल फुल्नका लागि मुख खुला हुने गरी तयार पारिएको पलङमा मन्द पवनबाट छुँदै, चन्दन शरीरमा दलेर चन्द्रकिरण शरीरमा पर्नेगरी सुत्नू । कसरत, सुकाउने खालका पदार्थको सेवन, स्त्रीसहवास, घाम, तातो कुरा, पाचनशक्ति बढाउने खालका रस : यी सबै कुरा त्याग गर्नू र बुद्धिमान् वैद्यको परामर्श अनुसार चल्नू ।

(झ) **राज निघण्टु :**

**द्विशश्चैत्रादिभिर्मासैर्विज्ञेया ऋतवश्च षट्॥**

चैत्र महिनादेखि शुरु भई दुई दुई महिनाका छ वटा ऋतुहरू हुन्छन् ।

**चैत्रादिमासौ द्वौ द्वौ स्युर्नाम्ना षड्तवः क्रमात्॥**

चैत आदि दुई-दुई महिनाका छ वटा ऋतुहरू हुन्छन् ।

**भवेद्वसन्तो मधुमाधवाभ्यां स्यातां तथा शुक्रशुची निदाघः ।**
**नभोनभस्यौ जलदागमः स्यादिषोर्जवाभ्यां शरदं वदन्ति॥**

चैत र वैशाखलाइ वसन्त, जेठ र असारलाइ निदाघ वा ग्रीष्म, साउन र भदौलाइ वर्षा तथा असोज र कात्तिकलाई शरद् ऋतु भनिन्छ ।

**हेमन्तकालस्तु सहःसहस्यौ तपस्तपस्यौ शिशिरः क्रमेण ।**
**मासद्विकेनेति वसन्तकाद्या धीमद्भिरुक्ता ऋतवः षडेते ॥**

यसैगरी मंसिर र पुसलाई हेमन्त तथा माघ र फागुनलाई शिशिर ऋतु हुन्छन् । दुई दुई महिनाका क्रमैले वसन्त आदि गरिएका छ वटा ऋतु हुन्छन् भनी विद्वानहरूले बताएका छन् ।

**ऋतुराजो वसन्तः स्यात् सुरभिर्माधवो मधुः ।**
**पुष्पमासः पिकानन्दः कान्तः कामरसश्च सः ॥**

ऋतुराज, वसन्त, सुरभि, माधव, मधु, पुष्पमास, पिकानन्द, कान्त र कामरस : यी वसन्त ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**निदाघस्तूष्मको घर्मो ग्रीष्म ऊष्मागमस्तपः ।**
**तापनश्चोष्णकालः स्यादुष्णश्चोष्णागमश्च सः ॥**

निदाघ, ऊष्मक, घर्म, ग्रीष्म, ऊष्मागम, तप, तापन, उष्णकाल, उष्ण र उष्णागम : यी ग्रीष्म ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**वर्षाः प्रावृड्वर्षकालो घर्मान्तो जलदागमः । मयूरोल्लासकः कान्तश्चातकाह्लादनोऽपि सः ॥**

वर्षा, प्रावृट्, वर्षकाल, घर्मान्त, जलदागम, मयूरोल्लासक, कान्त र चातकाह्लादन : यी वर्षा ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शरद्वर्षावसायः स्यान्मेघान्तः प्रावृडत्ययः ॥**

शरद्, वर्षावसाय, मेघान्त र प्रावृडत्यय : यी शरद ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**ऊष्मापहस्तु हेमन्तः शरदन्तो हिमागमः ॥**

ऊष्मापह, हेमन्त, शरदन्त र हिमागम : यी हेमन्त ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शिशिरः कम्पनः शीतो हिमकूटश्च कोटनः । इत्येतन्नामतः प्रोक्तमृतुषट्कं यथाक्रमम् ॥**

शिशिर, कम्पन, शीत, हिमकूट र कोटन : यी शिशिर ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसरी छ वटा ऋतुका पर्यायवाची नामका बारेमा क्रमैले बताइयो ।

**इह सुरभिनिदाघमेघकालाः शरद्धिमशिशिरहायनाः क्रमेण ।**
**प्रतिदिनमृतवः स्युरूर्ध्वमर्कोदयसमयाद्दशकेन नाडिकानाम् ॥**

यी छ वटै ऋतुका लक्षण हरेक दिनमा पनि हुन्छ । सूर्य उदयपछिका प्रत्येक दश दश घडीले वसन्त, ग्रीष्म आदि बेग्लाबेग्लै छ वटा ऋतुको प्रतिनिधित्व गर्दछन् ।

(ञ) **राजवल्लभ निघण्टु :**

**शीते शीतानिलस्पर्शसंरुद्धो बलिनां बली । पक्ता भवति हेमन्ते मात्राद्रव्यगुरूक्षमः ॥**
**स यदा नेन्धनं युक्तं लभते देहजं तथा । रसं निहन्त्यतो वायुः शीतः शीते प्रकुप्यति ॥**
**तस्मात्तुषारसमये स्निग्धाम्ललवणान् रसान् । औदकानूपमांसानां मेध्यानामुपयोजयेत् ॥**
**बिलेशयानां मांसानि प्रसहानां भृतानि च । भक्षयेन्मदिरां सीधुं मधु चापि पिबेन्नरः ॥**
**गोरसानिक्षुविकृतीर्वसां तैलं नवौदनम् । हेमन्तेऽभ्यस्यतस्तोयमुष्णञ्चायुर्न हीयते ॥**
**अभ्यङ्गोत्सादनं मूर्ध्नि तैलं जेन्ताकमोतपम् । भजेद्भूमिगृहं चोष्णमुष्णं गर्भगृहं तथा ॥**
**शीते सुसंवृतं सेव्यं यानं शयनमासनम् । प्रावाराजिनकौषेयप्रवेणीकुथकास्तृतम् ॥**
**गुरूष्णवासा दिग्धाङ्गो गुरुणाऽगुरुणा सदा । शयने प्रमदां पीनां विशालोत्थितसुस्तनीम् ॥**
**आलिङ्ग्यागुरुदिग्धाङ्गीं सुप्यात् समदमन्मथः । प्रकामं च निषेवेत मैथुनं शिशिरागमे ॥**
**वर्जयेदन्नपानानि लघूनि शीतलानि च । प्रवातं प्रमिताहारमुदमन्थं हिमागमे ॥**
**हेमन्ते शिशिरे तुल्ये शिशिरेऽल्पं विशेषणम् । रौक्ष्यमादानजं गीतं मेघमारुतवर्षजम् ॥**
**तस्माद्धैमन्तिकः सर्वः शिशिरे विधिरिष्यते । निवातमुष्णन्त्वधिकं शिशिरे गृहमाश्रयेत् ॥**
**कटुतिक्तकषायाणि वातलानि लघूनि च । वर्जयेदन्नपानानि शिशिरे शीतलानि च ॥**



हेमन्त ऋतुमा चिसो हावा चल्ने हुनाले मानिसको शरीर भित्रको गर्मी (वा पसिना) बाहिर निस्कँदैन, यसैले हेमन्त ऋतुमाबलिया पुरुषको पाचनशक्ति (अग्नि) बलियो भई अरु ऋतुमाभन्दा धेरै र पचाउन कठिन कुरापनि पचाउन समर्थ हुने गर्दछ । यस अवस्थामा यदि बलियो भएको पाचक अग्निले चाहिँदो मात्रामा पचाउने कुरा पाएन भने यसले शरीरका रस धातुलाई नै पचाएर नाश गर्न थाल्दछ । रस क्षय हुन थालेमा तथा चिसो वायुका कारण शरीरको उत्तेजित थालेमा यो ऋतुमा चिल्ला खानपिन, अमिला र नुन हालिएका कुरा,सफा पानीमा हुने वा आनूप क्षेत्रमा हुने वा बलिदिन योग्य पशुपंक्षी वा दुलामा बस्ने जीव वा प्रसह वर्गका चराको मासु खानू । सिधु नामक मदिरा पिउनू र मह खानू ।
यो ऋतुमा दूध, उखुका रसले बन्ने पदार्थ, बोसो, तेल र नयाँ चामलको भात खानू । हेमन्त ऋतुमा उमालेको तातोपानी पिउने मानिसको आयु नाश हुँदैन । यो ऋतुमा तेल आदि शरीरमा दल्ने, बुकुवा घस्ने, शरीरबाट विशेषतः टाउकाबाट पसिना निकाल्ने (जेन्ताक) जस्ता कार्य गर्नू । ईँट र माटोले बनेको तातो घरमा अथवा त्यस्तो बनोटको भित्री मुख्य कोठामा बस्ने गर्नू । आवतजावत गर्ने सवारी साधन, ओछ्यान र बस्ने स्थानलाई बहुमूल्य वस्त्र वा ओढ्ने वस्त्र (प्रावार), मृगको छाला, रेशमी वस्त्र, रङ्गीन ऊनी वस्त्र वा कम्बल (प्रवेणी) तथा गद्दा,जिनपोश वा कार्पेट (कुथका) ले सज्जित बनाउनू । हरदम मोटा र न्याना लुगा लगाउनू । अगर, चन्दन आदि घोटेर बाक्लो लेप लगाउनू । सुत्ने समयमा मनमा कामवासना जगाई वारुणी नामक मदिरा पिएर पातलो शरीर र उच्च स्तन भएकी तथा अगर आदि दलेर सुगन्धित भएकी नवयुवतीलाई अँगालो हालेर सुत्ने गर्नू । इच्छा अनुसार ग्राम्यधर्ममा संलग्न भई त्यसपछि निदाउनू । यो ऋतुमा वातविकार बढाउने खालका खानपिन नगर्नू, हावा नखानू, थोरै खानपिन गर्नू र पानीमा घोलेको सातू नखानू ।
हेमन्त र शिशिर ऋतु लगभग उस्तै हुन्छन्, थोरै मात्र फरक हुन्छ । शिशिर ऋतुमा सूर्यले शरीरको चिल्लोपन सोस्ने हुनाले शरीर रुखो हुन्छ । बादल, हावा र पानीले गर्दा जाडो बढी हुन्छ । यसैले

हेमन्त ऋतुमा गरिएका खानपिन र व्यवहार शिशिर कालमा पनि गर्नू । यो ऋतुमा पनि हावा नआउने तातो घरमा बस्नु पर्दछ । पिरा, तीता, टर्रा, वातविकार बढाउने, पचाउन हलुका हुने र शीतल गर्ने खालका खानपिन गर्न हुँदैन ।

**हेमन्ते निचितः श्लेष्मा दिनकृद्भाभिरीरितः । कयाग्निं बाधते रोगांस्ततः प्रकुरुते बहून्॥**
**तस्माद्वसन्ते कर्माणि वमनादीनि कारयेत् । गुर्वम्लस्निग्धमधुरं दिवा स्वप्नं च वर्जयेत्॥**
**व्यायामोद्वर्तनं धूमं कबरग्रहमञ्जनम् । सुखाम्बुना शौचविधिं शीलयेत्कुसुमागमे ॥**
**चन्दनागुरुदिग्धाङ्गो यवगोधूमभोजनम् । शारभं शाशमैणेयं मांसं लावकपिञ्जलम्॥**
**भक्षयेन्निगदं सीधुं पिबन्माध्वीकमेव वा । वसन्तेऽनुभवेत्स्त्रीणां काननानां च यौवनम्॥**

हेमन्त ऋतुमा शरीर भित्र जम्मा भएको कफ वसन्त ऋतुमा तिक्खर सूर्यका किरण शरीरमा पर्न थालेपछि चञ्चल हुन थाल्दछ र पाचनशक्तिलाई कमजोर बनाउन थाल्दछ । यसैले वसन्त ऋतुमा अनेक थरी रोग लाग्ने गर्दछ । यसको रोगथामका लागि यो ऋतुमा वान्ता आदि जस्ता कार्य गरी कफलाई दमन गर्नु आवश्यक हुन्छ । वसन्त ऋतुमा पचाउन कठिन हुने खालका, अमिला, चिल्ला र गुलिया खानपिन गर्न हुँदैन । दिउस सुत्न पनि हुँदैन । यो ऋतुमा दिउसको व्यायाम, बुकुवा घस्नु, धूमपान, अदुवा आदि हालेर तताइएको पानीले मुख कुल्ला गर्नु, आँखामा गाजल लगाउनु, मनतातो पानीले शौचक्रिया गर्नु, चन्दर र अगरको लेप शरीरमा दल्नु; जौ, गहुँ, शरभ मृगको मासु, खरायोको मासु, हरिणको मासु, लाभे चराको मासु, चातक वा सेतो तित्रोको मासु खानु तथा सीधु वा माध्वीक नामका मदिरा पिउनु धेरै लाभदायक हुन्छ । यो ऋतुमा जवान स्त्री र वनको आनन्द लिनू ।

**मयूखैर्जगतः सारं ग्रीष्मे पेपीयते रविः । स्वादु शीतं द्रवं स्निग्धमन्नपानं तदा हितम्॥**
**शीतं सशर्करं मन्थं जाङ्गला मृगपक्षिणः । घृतं पयः सशाल्यन्नं भजन् ग्रीष्मे न सीदति ॥**
**मद्यमाज्यं न वा पेयमथवा सुबहूदकम् । लवाणाम्लकटूष्णानि व्यायामं चात्र वर्जयेत्॥**
**दिवा शीतगृहे निद्रा निशि चन्द्रांशुशीतले । भजेच्चन्दनदिग्धाङ्गः प्रवाते हर्म्यमस्तके ॥**
**व्यजनैः पाणिसंस्पर्शैश्चन्दनोदकशीतलैः । सेव्यमानो भजेतास्तां मुक्तामणिविभूषितः ॥**
**काननानि च शीतानि जलानि कुसुमानि च । ग्रीष्मकाले निषेवेत मैथुनाद्विरतो नरः ॥**

ग्रीष्म ऋतुमा सूर्यका किरणँले गर्दा पृथ्वीको चिल्लोपन सुक्दछ यसैले यो ऋतुमा चिल्ला, शीतल गर्ने र स्वादिला खानपिन गर्दै मिस्री मिसाइएका मट्ठा तथा जांगल पशु र बनैया चराका मासु; सठिया चामलको भात खाई दूध पिउने गर्नू । मदिरा पिउने आदत भए थोरै मदिरा अथवा धेरै पानी हालेको मदिरा पिउनू । आदत नभए यो ऋतुमा मदिरा नपिउनू । ग्रीष्म ऋतुमा नुन, अमिलो, पिरो, तातो वा उष्णवीर्यका पदार्थ र व्यायामलाई छाड्नू । शरीरमा चन्दन दलेर दिउस स्वच्छ र शीतल हावा चल्ने मन्दिर परिसर आदि खुल्ला स्थानमा तथा रातमा चिसो र सुगन्धित हावा चल्ने चन्द्रमाको किरणमा सुत्नू । दिउस घामले पोलेमा चन्दन घोटेर मिसाइएको जल हाते पङ्खामा छर्केर जथाभावी अरुले छुन नमिल्ने गरी त्यो पङ्खाले शरीर हम्कने गर्नू । शरीरमा मणि वा मोति लगाएर सेवित हुँदै आनन्द मनाउनू । ग्रिष्मकालमा ग्राम्यधर्मबाट निवृत्त भएपछि शीतल र सुगन्धित बगैंचा, शीतल जल एवं शीतल एवं सुगन्धित फूलको प्रयोग गर्नू ।

**आदानदुर्बले देहे पक्ता भवति दुर्बलः । स वर्षास्वनिलादीनां दूषणैर्बाध्यते पुनः ॥**
**भूबाष्पान्मेघनिष्यन्दात्पाकादम्लाज्जलस्य च । वर्षास्वग्निबले क्षीणे कुप्यन्ति पवनादयः ॥**

**तस्मात्साधारणः सर्वो विधिर्वर्षासु चेष्यते । उदमन्थं दिवा स्वप्नमवश्यायं नदीजलम् ॥**
**व्यायाममातपं चैव व्यवायं चात्र वर्धयेत् । पानभोजनसंस्कारात् प्रायः क्षौद्रान्वितान् हितान् ॥**
**व्यक्ताम्ललवणस्नेहं वातवर्षाकुलेऽर्हति । विशेषशीते भोक्तव्यं वर्षास्वनिलशान्तये ॥**
**अग्निं संरक्षणवता यवगोधूमशालयः । पुराणजाङ्गलैर्मांसैर्भोज्या यूषैश्च सांस्कृतैः ॥**
**पिबेत् क्षौद्रान्वितं चाल्पं माध्वीकारिष्टमम्बु वा । माहेन्द्रतप्तशीतं वा कौर्मं सारसमेव वा ॥**
**प्रघर्षोद्वर्तनस्नानगन्धमाल्यपरो भवेत् । लघुशुद्धाम्बरं स्थानं भजेदक्लेदि वार्षिकम् ॥**

वर्षा ऋतुमा शरीर दुर्बल हुँदा कमजोर हुन पुगेको पाचनशक्ति वर्षा ऋतुमा वात आदि विकारले गर्दा अझ बढी कमजोर हुने गर्दछ । यसबेलामा पृथ्वीमा बाफ निस्किरहेको हुन्छ भने आकाशमा बादल गर्जिरहेको हुन्छ । यस बेलामा जलको अम्लत्व पाक्दछ । शरीर भित्र पाचनशक्ति कमजोर हुनाले वायु, पित्त र कफ समेत उत्तेजित हुन थाल्दछन् । यसैले यो ऋतुमा साधारण किसिमको आचरण गर्नु पर्दछ । पानी मिसाएर मठ्ठा पिउने, दिउस सुत्ने, चिसो र नदीको पानी पिउने, व्यायाम गर्ने, घाम ताप्ने र ग्राम्य धर्ममा संलग्न हुने जस्ता कार्य यो ऋतुमा छाड्नु पर्दछ । वर्षा ऋतुमा पानीमा मह मिसाउने पिउने र अति हलुका खानपिन गर्ने गर्नुपर्दछ । दिउस पानी परेर चिसो हावा बहेका दिनमा वायुको दोष हटाउन अमिलो,नुनिलो र चिल्लो भएका पदार्थ खानु पर्दछ । भित्रको पाचन शक्तिलाई रक्षा गर्नका लागि पुरानो जौ, गहुँ, सठिया धानको चामल, जाङ्गल क्षेत्रका पशुको मासु, राम्ररी विधिपूर्वक पकाइएको मुगी आदिको दाल र महयुक्त थोरै माध्वी मदिरा वा अरिष्ट पिउनु पर्दछ । अथवा कुवा वा सरोवरको पानी पिउनु पर्दछ । शरीरको घर्षण, शरीमा बुकुवा आदि दल्ने काम, स्नान, सुगन्धित माला लगाउने काम, हुलका र शुद्ध कपडा लगाउने काम र पसिना नआउने स्थानमा बस्ने जस्ता कार्य गर्नू ।



**वर्षाशीतोचिताङ्गानां सहसैवार्करश्मिभिः । तप्तानामाचितं पित्तं प्रायः शरदि कुप्यति ॥**
**तत्रान्नपानं मधुरं लघु शीतं सतिक्तकम् । पित्तप्रशमनं सेव्यं मात्रया सुप्रकाङ्क्षितैः ॥**
**लावान् कपिञ्जिलानेणानुरभ्रान् शरभान् शशान् । शालीन् सयवगोधूमान् सेव्यानाहुर्घनात्यये ॥**
**तिक्तस्य सर्पिषः पानं विरेको रक्तमोक्षणम् । धाराधरात्यये कार्यमातपस्य च वर्जनम् ॥**
**वसां तैलमवश्यायमौदकानूपमामिषम् । क्षारं दधि दिवा स्वप्नं प्राग्वातं चात्र वर्जयेत् ॥**
**दिवा सूर्यांशुसन्तप्तं निशि चन्द्रांशुशीतलम् । कालेन पक्वं निर्दोषमगस्त्येन(ना)विषीकृतम् ॥**
**हंसोदकमिति ख्यातं शारदं विमलं जलम् । स्नानपानावगाहेषु शस्यते तद्यथामृतम् ॥**
**शारदानि च माल्यानि वासांसि विमलानि च । शरत्काले प्रशस्यन्ते प्रदोषे चेन्दुरश्मयः ॥**

वर्षकालको चिसोले गर्दा शरीरमा जम्मा हुन पुगेको पित्त शरद् ऋतुका सूर्यको किरणले गर्दा ताती पूर्णरूपमा विचलि हुन पुग्दछ । यसैले पित्तलाई शान्त पार्नका कफलाई पहिले शान्तपार्नुपर्ने हुनाले यस अवधिमा भोक लाग्दा मानिसले गुलिया, शीतल गर्ने, पचाउन सहज हुने र केही तीता खानपिन ठिक्क मिलाएर गर्नुपर्दछ । लाभे चरा, चातक वा सेतो तित्रो, कृष्णसार मृग, भेडो, खरायो आदिको मासु; सठिया चामलको भात तथा जौ, गहुँ खाने गर्नू । पित्तलाई शान्त पार्न तीतो रस भएका कुरा (घृत पञ्चतिक्त नामक ओखती) पिउनू उपयुक्त हुन्छ । यो पिउँदा पनि पित्तविकार शान्त नभए विरेचन मार्फत पित्तलाई शान्त पार्नू । यसबाट पनि शान्त नभए शरीरबाट रगत बगाउनु पर्दछ । शरद् ऋतुमा सम्भव भएसम्म आफ्ना शरीरमा घाम पर्न नदिनू । यो ऋतुमा दिउस घुमफिर गर्न; बोसो, तेल, बरफ हादी चिसा कुरा, पानी, आनूपमांस, जवाखार आदि क्षार, दही, दिउसको सुताई र तिब्र हावा खाने कार्य परित्याग गर्नुपर्दछ । वर्ष ऋतुमा परेपछि पानी नयाँ हुने गर्दछ र यसमा विषालु पदार्थ मिसिने

गर्दछ । यसकारण जल आमिलो बनेर पाक्दछ । जब शरद् ऋतुमा स्वाभाविक किसिमले यस्तो जल पाक्दछ तब अगस्ति नामक तारा उदाएपछि त्यो विषरहित हुन पुग्दछ । त्यसपछि यस्तो पानी पिउन हुन्छ । यस्तो पानीलाई दिनभर घाममा राख्नू र रातमा चन्द्रमाको किरण पर्ने गरी रातभर राखी शीतल बनाउनू । शरद् ऋतुमा स्नान, पान र कुल्ला गर्नेका यही जल अति उत्तम एवं अमृत समान हुन्छ । यो अवधिमा सुगन्धित फूलका माला र निर्मल वस्त्र लगाउनु पर्दछ । साँझमा चन्द्रमाको किरण सेवन गर्नु उचित हुन्छ ।

**(ट) शार्ङ्गधरसंहिता :**

**चयकोपशमा यस्मिन् दोषाणां सम्भवन्ति हि॥ ऋतुषट्कं तदाख्यातं रवे राशिषु सङ्क्रमात् ।**

जुन छ वटा ऋतुमा रोग बढ्ने, फैलने र कम हुने सम्भावना हुन्छ त्यो सबै सूर्य बाह्र राशिमा घुम्ने कारणले गर्दा हुने गर्दछ । (अर्थात् सूर्यका किरणका कारणले नै पृथ्वीमा रोग जन्मने, बढ्ने, फैलने र नासिने गर्दछ) ।

**ग्रीष्मो मेषवृषौ प्रोक्तौ प्रावृण्मिथुनकर्कयोः॥**
**सिंहकन्ये स्मृता वर्षास्तुलावृश्चिकयोः शरत् । धनुर्ग्राहौ च हेमन्तो वसन्तः कुम्भमीनयोः॥**

मेष सङ्क्रान्तिदेखि वृष सङ्क्रान्तिसम्म ग्रीष्म ऋतु हुन्छ । मिथुन सङ्क्रान्तिदेखि कर्कट सङ्क्रान्तिसम्म प्रावृट् ऋतु हुन्छ । सिंह सङ्क्रान्तिदेखि कन्या सङ्क्रान्तिसम्म वर्षा ऋतु हुन्छ । तुला सङ्क्रान्तिदेखि वृश्चिक सङ्क्रान्तिसम्म शरद् ऋतु हुन्छ । धनु सङ्क्रान्तिदेखि मकर सङ्क्रान्तिसम्म हेमन्त ऋतु हुन्छ । कुम्भ सङ्क्रान्तिदेखि मीन सङ्क्रान्तिसम्म वसन्त ऋतु हुन्छ ।



**ग्रीष्मे सञ्चीयते वायुः प्रावृट्काले प्रकुप्यति । वर्षासु चीयते पित्तं शरत् काले प्रकुप्यति॥**
**हेमन्ते चीयते श्लेष्मा वसन्ते च प्रकुप्यति । प्रायेण प्रशमं याति स्वयमेव समीरणः॥**
**शरत् काले वसन्ते च पित्तं प्रावृडृतौ कफः ।**

शरीरमा ग्रीष्म ऋतु (वैशाख-जेठ) मा वायु सञ्चय हुन्छ र प्रावृट् ऋतु (असार-साउन) मा यसमा दोष पैदा हुन्छ । वर्ष ऋतु (भदौ-असौज) मा पित्त सञ्चय हुन्छ र शरद् ऋतु (कार्तिक-मंसिर) मा दोष पैदा गर्दछ । हेमन्त ऋतु (पुष-माघ) मा कफ सञ्चय हुन्छ र वसन्त ऋतुमा (फागुन-चैत) दोष पैदा गर्दछ । स्वभावतः वायुको दोष शरद् ऋतुमा, पित्तको दोष वसन्त ऋतुमा र कफको दोष प्रावृट् ऋतुमा आफैँ शान्त हुन्छ (हुनु पर्दछ) ।

**कार्त्तिकस्य दिनान्यष्टावाष्टावाग्रयणस्य च॥ यमदंष्ट्रा समाख्याता स्वल्पभुक्तो हि जीवति ।**

कार्तिकको अन्तिम आठ दिन र मंसिरको शुरुका आठ दिनलाई "यमदंष्ट्रा" भनिन्छ । यी सोह्र दिन कम खाने मानिस जीवित हुन्छ (रोग लाग्दैन) ।
व्याख्या : पुरानो अन्न खान बन्द गर्ने र नयाँ अन्न खान शुरु गर्ने समयकारूपमा यसलाई व्याख्या गरिएको पाइन्छ । एक्कासी पुरानो अन्न खान छोडेर नयाँ अन्न पुरानो सरह खाँदा शरीरलाई हानी गर्दछ, त्यसैले विस्तारै पुरानो अन्न कम कम गर्दै खान छाड्नू र नयाँ अन्न विस्तारै अलिअलि गरेर बढाउँदै खानु पर्दछ ।

(ठ) सुश्रुत सांहेता :

**कालो हि नाम भगवान् स्वयम्भुरनादिमध्यनिधनोऽत्र रस व्यापत्संपत्ती जीवितमरणे च मनुष्याणामायत्ते । स सूक्ष्मामपि कलां न लीयत इति कालः, संकलयति कालयति वा भूतानीति कालः ॥**

काल जसलाई भनिन्छ उ सम्पूर्ण ऐश्वर्यले युक्त छ । उ कसैबाट उत्पन्न भएको पनि होइन । उसको आदि, मध्य र अन्त पनि छैन । रसको व्यापत्ति (नाश) र संपत्ति (उत्पत्ति) तथा जीवको जीवन र मरण त्यही कालको अधिनमा हुन्छ । त्यो काल सूक्ष्म कलासम्म पनि (गतिशील हुनाले गर्दा) रोकिँदैन । उ (संहार गरी) सबै प्राणीलाई सङ्कलन वा ग्रहण गर्दछ त्यसैले त उसलाई काल भनिन्छ । (कलनात् सर्वभूतानां स कालः परिकीर्तितः) ।

**तस्य संवत्सरात्मनो भगवानादित्यो गतिविशेषेण निमेषकाष्ठाकला-मुहूर्ताहोरात्रपक्षमासर्त्वयनसंवत्सरयुगप्रविभागं करोति ॥**

भगवान् सूर्य आफ्नो गति विशेषले त्यो संवत्सरात्मक काललाई निमेष, काष्ठा, कला, मुहूर्त, अहोरात्र, पक्ष, मास, ऋतु, अयन, वर्ष र युग-यसरी विभाजन गरि दिन्छन् ।

**...द्विमासिकमृतुं कृत्वा षड्तवो भवन्ति, ते शिशिरवसन्तग्रीष्मवर्षाशरद्धेमन्ताः, तेषां तपस्तपस्यौ शिशिरः, मधुमाधवौ वसन्तः, शुचिशुक्रौ ग्रीष्मः, नभोनभस्यौ वर्षाः, इषोर्जौ शरत्, सहःसहस्यौ हेमन्त इति ॥**



दुई दुई महिनाका एक एक ऋतु गरी छ वटा ऋतु हुन्छन् । ती शिशिर, वसन्त, ग्रीष्म, वर्षा, शरद र हेमन्त हुन् । तिनमा माघ र फागुनलाई शिशिर, चैत्र र वैशाखलाई वसन्त, जेठ र असारलाई ग्रीष्म, साउन र भदौलाई वर्षा, असोज र कार्तिकलाई शरद तथा मंसिर र पुषलाई हेमन्त ऋतु भनिन्छ ।

**त एते शीतोष्णवर्षलक्षणाश्चन्द्रादित्ययोः कालविभागकरत्वादयने द्वे भवतो दक्षिणमुत्तरं च । तयोर्दक्षिणं वर्षाशरद्धेमन्ताः, तेषु भगवानाप्यायते सोमः, अम्ललवणमधुराश्च रसा बलवन्तो भवन्ति, उत्तरोत्तरं च सर्वप्राणिनां बलमभिवर्धते । उत्तरं च शिशिर वसन्तग्रीष्माः, तेषु भगवानाप्यायतेऽर्क, तिक्तकषायकटुकाश्च रसा बलवन्तो भवन्ति, उत्तरोत्तरं च सर्वप्राणिनां बलमपहीयते ॥**

जाडो, गर्मी र वर्षातिर लक्षित हुने यी ऋतुहरु चन्द्रमा एवं सूर्यका काल विभाजनका कारण दुई अयनमा विभक्त हुन्छन्-दक्षिणायन र उत्तरायण । वर्षा, शरद र हेमन्त यी तिन ऋतुको दक्षिणायन हुन्छ । यी ऋतुमा चन्द्रमा बलिया हुन्छन् । अमिलो, नुनिलो र गुलियो रस क्रमशः बलियो हुन्छ । सबै प्राणीको बल उत्तरोत्तर बढ्दै जान्छ । शिशिर, वसन्त र ग्रीष्म ऋतुलाई उत्तरायण भनिन्छ । यी ऋतुमा सूर्य बलिया हुन्छन् । तितो, टर्रो र पिरो रस क्रमशः बलिया हुन्छन् । यी ऋतुमा सबै प्राणीको बल क्रमशः घट्दै जान्छ ।

**भवति चात्र- शीतांशुः क्लेदयत्युर्वीं विवस्वान् शोषयत्यपि ।**
**तावुभावपि संश्रित्य वायुः पालयति प्रजाः ॥**

चन्द्रमाले पृथ्वीलाइ रसिलो बनाउँदछ भने सूर्यले सुक्खा बनाउँदछ । यी दुवैको सहायता लिइ वायुले संसारका प्राणीको पालन गर्दछ ।

**इह तु वर्षाशरद्धेमन्तवसन्तग्रीष्मप्रावृषः षडृतवो भवन्ति, दोषोपचयप्रकोपोपशमनिमित्तं, ते तु भाद्र पदाद्येन द्विमासिकेन व्याख्याताः, तद्यथा भाद्रपदाश्वयुजौ वर्षाः कार्तिकमार्गशीर्षौ शरत् पौषमाघौ हेमन्तः, फाल्गुनचैत्रौ वसन्तः, वैशाखज्येष्ठौ ग्रीष्मः आषाढश्रावणौ प्रावृडिति॥**

वर्षलाई विभाजन गर्दा वात, कफ र पित्त : यी तीन थरी दोष जम्मा हुने, असर गर्ने र निको हुने हिसाबका लागि वर्षा, शरद, हेमन्त, वसन्त, ग्रीष्म र शिशिर यसरी छ ऋतु हुन्छन् । ती भदौ र असोज वर्षा, कार्तिक र मंसिर शरद, पुष र माघ हेमन्त, फाल्गुन र चैत वसन्त, वैशाख र जेठ ग्रीष्म र असार साउन शिशिर यसरी बन्न जान्छन् ।

**तत्र, वर्षास्वोषधयस्तरुण्योऽल्पवीर्या आपश्चाप्रसन्नाः क्षितिमल प्रायाः, ता उपयुज्यमाना नभसि मेघावतते जलप्रक्लिन्नायां भूमौ क्लिन्नदेहानां प्राणिनां शीतवातविष्टम्भिताग्नीनां विदह्यन्ते विदाहात्पित्तसंचयमापादयन्ति, स संचयः शरदि प्रविरलमेघे वियत्युपशुष्यति पङ्केऽर्ककिरणप्रविलायितः पैत्तिकान् व्याधीन् जनयति॥**

ती ऋतुहरुमध्ये वर्षा ऋतुमा औषधी (जडीबूटीहरू) ताजा (नयाँ) र कम शक्तिका हुन्छन् । पानी दूषित हुन्छ र यसमा जमिनका सडेगलेका पदार्थ मिसिएको हुन्छ । यी औषधी बादलले आकाश ढाकेको र पृथ्वी गिलो भएको बेलामा उपयोगमा ल्याउनाले भिजेका शरीर भएका तथा वातप्रकोपका कारण पाचनशक्ति कम भएका मानिसलाई विदाह (पित्त बढेर हुने पीडा) उत्पन्न गराउँदछ, विदाहले गर्दा पित्त जम्मा हुने क्रम पनि बढ्दछ । अनि यही सञ्चित पित्त जब शरद् ऋतुमा आकाश बादलहीन हुन्छ, हिलो सुक्छ, तब सूर्यका किरणले पग्लन्छ र पित्तसम्बन्धी अनेक रोगहरु उत्पन्न गर्दछ ।



**तत्र वर्षाहेमन्तग्रीष्मेषु संचितानां दोषाणां शरद्वसन्तप्रावृट्सु च प्रकुपितानां निर्हरणं कर्तव्यम्॥**

वर्षा, हेमन्त र ग्रीष्म ऋतुमा शरीरमा दोष जम्मा भई शरद्, वसन्त र शिशिर ऋतुमा रोग उत्पन्न गराउँदछन् यस्ता त्रिदोषलाई समयमै शरीरबाट बाहिर निकाल्नु पर्दछ (संशोधन) ।

**तत्र पैत्तिकानां व्याधीनामुपशमो हेमन्ते, श्लैष्मिकाणां निदाघे, वातिकानां शरदि, स्वभावत एव, त एते संचयप्रकोपोपशमा व्याख्याताः॥**

पित्तसम्बन्धी रोगको उपचार हेमन्त ऋतृमा, कफसम्बन्धी रोगको उपचार ग्रीष्म ऋतुमा र वातसम्बन्धी रोगको उपचार शरद ऋतुमा कालको स्वाभाविक प्रक्रिया अनुसार आफैं हुने गर्दछ ।

**तत्र, पूर्वाह्णे वसन्तस्य लिङ्गं, मध्याह्ने ग्रीष्मस्य, अपराह्णे प्रावृषः, प्रदोषे वार्षिकं, शारदमर्धरात्रे, प्रत्युषसि हैमन्तमुपलक्षयेत्; एवमहोरात्रमपि वर्षमिव शीतोष्णवर्षलक्षणं दोषोपचयप्रकोपोपशमैर्जानीयात्॥**

हरेक दिन, दिनको पहिलो भागमा वसन्त ऋतुको, मध्याह्नमा ग्रीष्म ऋतुको, तेश्रो प्रहरमा शिशिर ऋतुको, साँझमा वर्षा ऋतुको, आधारातमा शरद ऋतुको र रातको पछिल्लो प्रहरमा हेमन्त ऋतुको

लक्षण हुने गर्दछ । यसरी हरेक दिनरातमा पनि चिसो, तातो र वर्षाका लक्षण अनुसार त्रिदोष जम्मा हुने, विकृत हुने र त्यसको निराकरण हुने गर्दछ भनेर जान्नु पर्दछ ।

**तत्र अव्यापन्नेष्वृतुष्वव्यापन्ना ओषधयो भवन्त्यापश्च; ता उपयुज्यमानाः प्राणायुर्बलवीर्यौजस्कर्यो भवन्ति॥**

समय अनुसार शीत, उष्ण र वर्षा ऋतुमा, औषधी र पानी पनि ठीक हुन्छन् र त्यसको उपभोगले प्राण, आयु, बल, वीर्य र तेज बढाउँदछन् ।

**तेषां पुनर्व्यापदोऽदृष्टकारिताः, शीतोष्णवातवर्षाणि खलु विपरीतान्योषधीर्व्यापादयन्त्यपश्च॥**

यी ऋतुहरुमा हुने वा गरिने अतियोग, विपरित योग र विषम योग ऋतुजन्य अधर्मस्वरुप उत्पन्न हुने गर्दछ । जस्तैः-ग्रीष्म ऋतुमा कहिले प्रचण्ड घाम लाग्दछ, कहिले पानी पर्दछ त कहिले घामपानी दुवै देखिन्छ । यसरी चिसो, तातो, हावा र वर्षाले गर्दा रोग निको पार्ने औषधी तथा पानीलाई विकृत बनाइरहेको हुन्छ ।

**तासामुपयोगाद्विविधरोगप्रादुर्भावो मरको वा भवेदिति॥**

यसरी विकृत भएका औषधी तथा पानीको उपयोग गर्नाले अनेक थरी रोग तथा महामारी हुने गर्दछन् ।

**तत्र अव्यापन्नानामोषधीनामपां चोपयोगः॥** 

यस्तो अवस्थामा शुद्ध र सफा पानी एवं औषधीको उपयोग गर्नु लाभदायक हुन्छ ।

**कदाचिदव्यापन्नेष्वपि ऋतुषु कृत्याभिशापरक्षः क्रोधाधर्मैरुपध्वस्यन्ते जनपदाः; विषौषधिपुष्पगन्धेन वा वायुनोपनीतेनाक्रम्यते यो देशस्तत्र दोषप्रकृत्यविशेषेण कासश्वश्वासवमथुप्रतिश्यायशिरोरुग्ज्वरैरुपतप्यन्ते, ग्रहनक्षत्रचरितैर्वा, गृहदारशयनासनयानवाहनमणिरत्नोपकरणगर्हितलक्षणनिमित्तप्रादुर्भावैर्वा॥**

कहिलेकाहीँ ऋतुमा स्वाभाविक गुण हुँदा पनि पनि कृत्या (एक दुष्ट राक्षसी), अभिशाप, पिशाच, राक्षस आदिका क्रोध तथा अधर्मका कारण देशका देश नष्ट हुने गर्दछन् । अथवा विषले वा औषधीले वा पुष्पगन्ध आदिले दूषित वायुको आक्रमण जुन देश माथि हुन्छ त्यहाँका सबैका सबै वासिन्दा रुघाखोकी, वमन, शर्दीको जरो, शिरशूल जरो आदि रोगले पीडित हुन्छन् । अथवा शनैश्चर, सूर्य आदि ग्रह तथा अश्विनी आदि नक्षत्रको अनिष्ट प्रभावले पनि अनेक थरी रोग उत्पन्न हुन्छन् । अथवा गृह (को अवस्था), स्त्री, शयन, आसन, यान, वाहन, मणि, रत्न आदि र अन्य (घरेलू) उपकरणको खराबी (दोष हुनाले वा अनिष्टसूचक चिह्नले (अपसगुन) पनि रोग उत्पन्न हुन्छन् ।

**तत्र स्थानपरित्याग-शान्तिकर्मप्रायश्चित्तमङ्गलजपहोमोपहारेज्याञ्जलिनमस्कारतपोनियमदयादानदीक्षाभ्युपगम देवताब्राह्मणगुरु परैर्भवितव्यम् एवं साधु भवति॥**

यस्तो अवस्थामा त्यो ठाउँ छोड्ने, शान्तिस्वस्ति गर्ने, प्रायश्चितका विधानहरू गर्ने, मङ्गल कार्यहरू गर्ने, जप-होम आदि गर्ने, बलि चढाउने, पूजाहरू गर्ने , अञ्जुली जोडेर नमस्कार गर्ने, तप गर्ने, नियममा बस्ने, दया गर्ने, दान दिने, कुनै मन्त्रको दीक्षा लिने, देवता र ब्राह्मणको सेवा गर्ने आदि जस्ता कार्यमा संलग्न हुनु पर्दछ । यी कार्यले नै आरोग्यता प्राप्त गर्न सकिन्छ ।

**वायुर्वात्युत्तरः शीतो रजोधूमाकुला दिशः । छन्नस्तुषारैः सविता हिमानद्धा जलाशयाः ॥**
**दर्पिता ध्वाङ्क्षखड्गाह्वमहिषोरभ्रकुञ्जराः । रोध्रप्रियङ्गुपुन्नागाः पुष्पिता हिमसाह्वये ॥**

हेमन्त ऋतु-यो ऋतुमा उत्तरतिरको शीतल हावा बहन्छ । सबै दिशाहरू धुलो र धुवाँले (तुवाँलो) छोपिन्छन् । भगवान् सूर्य पनि ओस (कुहिरो वा हुस्सू) ले ढाकिने गर्दछन् । जलाशयहरु जम्दछन् । काग, गैंडा, भैंसी, भेडा र हात्ती खुशी (मदयुक्त) हुने गर्दछन् । लोथ (रोध्र), दहीगुँयेलो ( प्रियङ्गु), चिलाउने (पुन्नाग) जस्ता वृक्षहरूमा प्रशस्त फूल फुल्दछन् ।

**शिशिरे शीतमधिकं वातवृष्ट्याकुला दिशः । शेषं हेमन्तवत् सर्वं विज्ञेयं लक्षणं बुधैः ॥**

शिशिर ऋतु- यो ऋतुमा धेरै चिसो हुन्छ । सबै दिशामा हावा मिसिएको वर्षा हुन्छ । बाँकी लक्षण हेमन्त ऋतुका जस्तै हुन्छन् । यस्तो बुद्धिमान मानिसले जान्नु ।

**सिद्धविद्याधरवधूचरणालक्तकाङ्किते । मलये चन्दनलतापरिष्वङ्गाधिवासिते ॥**
**वाति कामिजनानन्दजननोऽनङ्गदीपनः । दम्पत्योर्मानभिदुरो वसन्ते दक्षिणोऽनिलः ॥**

वसन्त ऋतु-यो ऋतुमा सिद्ध तथा विद्याधर (देवयोनि विशेष) का पत्नीहरूका गोडामा लगाइएको लाहाको रङ्गले रङ्गिएको, चन्दन आदि लहराको अँगालोले गर्दा सुगन्धित भएको, कामप्रिय मानिसलाई आनन्द दिने, कामवासना बढाउने तथा दम्पत्तिहरुका बीचको मान भङ्ग गर्ने मलयाचलतिरबाट आउने दक्षिणी हावा चल्दछ ।



**दिशो वसन्ते विमलाः काननैरुपशोभिताः । किंशुकाम्भोजबकुलचूताशोकादिपुष्पितैः ॥**
**कोकिलाषट्पदगणैरुपगीता मनोहराः । दक्षिणानिलसंवीताः सुमुखाः पल्लवोज्वलाः ॥**

वसन्त ऋतुमा सबै दिशाहरू निर्मल हुन्छन् । यो ऋतु पलाँश-कमल-मौलसरी(बकुल) आदिका फूलले मुलायम, अशोक आदि वृक्षका फूलले शोभायमान, कोइली एवं भमराका झुण्डको कर्णप्रिय आवाजले गुञ्जायमान, दक्षिणी दिशाको हावाले व्याप्त एवं कमला नयाँ पालुवाले सबैतिर सुशोभित हुन्छ ।

**ग्रीष्मे तीक्ष्णांशुरादित्यो मारुतो नैर्ऋतोऽसुखः । भूस्तप्ता सरितस्तन्व्यो दिशः प्रज्वलिता इव ॥**
**भ्रान्तचक्राह्वयुगलाः पयःपानाकुला मृगाः । ध्वस्तवीरुत्तृणलता विपर्णाङ्कितपादपाः ॥**

ग्रीष्म ऋतु- यो ऋतुमा सूर्यको किरण तेजिलो हुन्छ । नैर्ऋत्य (पश्चिम-दक्षिण) दिशाबाट कष्टकर हावा चल्ने गर्दछ । पृथ्वी नै तात्दछ । पानी कम हुनाले गर्दा नदीहरूको वेग कम हुन्छ । दिशाहरू बल्न लागेको जस्तो भान हुन्छ । काकाकुलका जोडीहरू पानीको खोजीमा भौंतारिने गर्दछन् । हरिण तिर्खाले व्याकुल हुन्छ । सानातिना विरुवा, घाँसपात र लहरा सुक्दछन् । रुखका पातहरु झर्दछन् ।

**प्रावृष्यम्बरमानद्धं पश्चिमानिलकर्षितैः । अम्बुदैर्विद्युदुद्द्योतप्रस्रुतैस्तुमुलस्वनैः ॥**

(दक्षिण भारततिर अधिक वर्षा हुन्थ्यो । त्यसैले त्यतिखेर वर्षा ऋतुलाई दुई भाग गरिएको थियो । पहिलो भाग (असार-साउन) लाई प्रावृट् ऋतु र दोश्रो भाग (भदौ, असौज) लाई वर्षा ऋतु भनिन्थ्यो । अन्यत्र यस्तो प्रावधान थिएन) । प्रावृट् ऋतु-यस ऋतुमा पश्चिम दिशाको हावाबाट शोषिएको बादलले आकाश ढाकिइ रहन्छ । मेघगर्जन र बिजुली चम्काई सँगसँगै कहिले काहीँ अलिअलि पानी पर्दछ ।

**कोमलश्यामशष्पाढ्या शक्रगोपोज्वला मही । कदम्बनीपकुटजसर्जकेतकिभूषिता ॥**

(यो ऋतुमा) पृथ्वी हल्का कालो रङ्गको कोमल हरियालीले भरिएको हुन्छ । इन्द्रगोप नाम गरिएको कीराले (चित्रविचित्र हुनाले गर्दा) उज्वल हुन्छ । कदम, कदमको एक जात (नीप), ठूलो कुरो, साल, क्याक्तुके (आदि) रुखले शोभायमान देखिन्छ ।

**तत्र वर्षासु नद्योऽम्भश्छन्नोखातततट्द्रुमाः । वाप्यः प्रोत्फुल्लकुमुदनीलोत्पलविराजिताः ॥**
**भूरव्यक्तस्थलश्वभ्रा बहुशस्योपशोभिता । नातिगर्जत्स्रवन्मेघनिरुद्धार्कग्रहं नभः ॥**

वर्षा ऋतु- यस ऋतुमा नदीहरू पानीले भरिएर बेगले कुद्दै किनारका र त्यस नजिकका रुखहरूलाई नष्ट गर्दछन् । पोखरी फुलेको सेता तथा नीला कमलले सुशोभित देखिन्छन् । जमिनको (हरियालीले छोपिएका कारण) अग्लोहोचो भाग (सतह) देखिन्न । विभिन्न प्रकारका फसलले जमिन शोभित हुन्छ । धेरै नगर्जने र वर्सने बादलले आकाश, सूर्य र अन्य ग्रहहरु ढाकिई रहन्छ । (पानी झिक्न खुट्किला बनाइएको पँधेरोलाई वापी भनिन्छ ।) ।



**बभ्रुरुष्णः शरद्यर्कः श्वेताभ्रविमलं नभः । तथा सरांस्यम्बुरुहैर्भान्ति हंसांसघट्टितैः ॥**
**पङ्कशुष्कद्रुमाकीर्णा निम्नोन्नतसमेषु भूः । बाणसप्ताह्वबन्धूककाशासनविराजिता ॥**

शरद् ऋतु-यस ऋतुमा सूर्य कैले वर्णको र तातो हुन्छ । आकाश स्वच्छ हुन्छ र कतैकतै सेतो बादल देखिन्छ । तलाउहरू हाँस सहित कमलले शोभायमान हुन्छन् । अग्ला, होचा र समथर जमिन हिलोले भरिएका, सुकेका अनि कमिलाले भरिएका हुन्छन् । नीलो कपुरनली, छतिवन, दोपहरीया, काँस र विजयसालले पृथ्वी सुशोभित हुन्छ ।

**स्वगुणैरतियुक्तेषु विपरीतेषु वा पुनः । विषमेष्वपि वा दोषाः कुप्यन्त्यृतुषु देहिनाम् ॥**

ऋतुहरूका स्वाभाविक गुणमा अति योग, विपरित योग र विषम योग हुन जाँदा मानिसका शरीरमा वात आदि दोष गढ्न जान्छ । (क) अति योग-ऋतुका चिसो, वर्षा र गर्मी स्वाभाविक गुण हुन् । तर जब यसमा अत्यधिकता हुन्छ तब यसलाई अतियोग भनिन्छ । जस्तै :- ग्रीष्म ऋतुमा अत्यधिक गर्मी हुनु, वर्षा ऋतुमा अत्यधिक पानी पर्नु, र हेमन्त ऋतुमा अत्यधिक जाडो हुनु । (ख) विपरीत योग-जब ऋतुहरूको स्वाभाविक गुण नभएर उल्टो हुन थाल्दछ तब त्यसलाई विपरीत योग भनिन्छ । जस्तैः- हेमन्तमा गर्मी हुनु, वर्षामा जाडो हुनु र ग्रीष्ममा पानी पर्नु । यसलाई मिथ्यायोग पनि भनिन्छ । (ग) विषमयोग-कुनै एक ऋतुमा सबै ऋतुका गुण देखिए भने वा ऋतुको गुण नै देखिएन भने त्यसलाई विषमयोग भनिन्छ । यसलाई हीनयोग पनि भनिन्छ । जस्तै :- वर्षा ऋतुमा पानी कम पर्नु वा नपर्नु आदि ।

**हरेद्वसन्ते श्लेष्माणं पित्तं शरदि निर्हरेत् । वर्षासु शमयेद्वायुं प्राग्विकारसमुच्छयात् ॥**

शरीरमा गढेका दोषले असर गर्न शुरु गर्नु अगावै ति दोषलाई शरीरबाट बाहिर निकाल्नु पर्दछ । वसन्त ऋतुमा (दोश्रो महिनामा) कफलाई, शरद् ऋतुमा पित्तलाई र प्रावृट् (वर्षा) ऋतुमा वातलाई साम्य बनाउनु पर्दछ ।

(ङ) **हारीत संहिता :**

**वर्षा शरच्च हेमन्तः शिशिरश्च वसन्तकः । ग्रीष्मोऽतिक्रमो ज्ञेय एवं षड् ऋतवः स्मृताः ॥**
**पृथक्पृथक् प्रवक्ष्यामि रवेर्गतिविशेषणैः । प्रकोपं शमनं ज्ञात्वा अयने द्वे स्मृते बुधैः ॥**
**दक्षिणायनमेकं स्यात् द्वितीयं चोत्तरायणम् ।**

वर्षा, शरद्, हेमन्त, शिशिर, वसन्त र ग्रीष्म एकपछि अर्को गरेर आउने क्रमैले छ ऋतुहरू हुन् भनिएको छ । यी ऋतुका बारेमा बेग्लाबेग्लै बताउनेछु । सूर्यको गतिका कारण प्रकोप हुने र त्यसलाई शान्त पार्ने कुरा जानी पण्डितहरुले दुई अयन बताएका छन् । एउटा दक्षिणायन र अर्को उत्तरायण हुन्छ ।

**वर्षा शरच्च हेमन्तो दक्षिणायनमध्यगाः ॥ शिशिरश्च वसन्तश्च ग्रीष्मः स्यादुत्तरायणे ।**

वर्षा, शरद् र हेमन्त : यी तीन ऋतु दक्षिणायनमा हुन्छन् । शिशिर, वसन्त र ग्रीष्म : यी तीन ऋतु उत्तरायणमा हुन्छन् ।

**याम्ये गतिर्यदा भानोस्तदा चान्द्रगुणा मही ॥**
**वारि शीतलसम्भूतं शीतं तत्र प्रजायते । बलिनो मधुरास्तिक्ताः कषायास्तु विशेषतः ॥**
**जीवानां सात्म्यमतुलमोषधीनां च वीर्यता । आर्द्रत्वं भूधराणाञ्च दिशश्चाप्यतिशीतलाः ॥**
**सक्लेदा पृथिवी सर्वा तस्मादार्द्रा सफेनिला । कथं चिकित्सयेत् पित्तं कोपं याति विलीयते ॥**
**तस्मादनुविपर्यासादुपचारेण शाम्यति ।**



जबको सूर्यको गति दक्षिणतिर हुन्छ, तब पृथ्वी चन्द्रगुणी हुन्छे । यसबेला पानी चिसो हुन्छ, शीत पर्दछ र तितो र टर्रो रस विशेषतः बलियो हुन जान्छ । यस्तै, अनाज र जीवको अवस्था अति राम्रो हुन्छ, पाखापर्वत पनी ओसिला हुन्छन् र दिशाहरू पनि शीतल हुने गर्दछन् । पृथ्वीभर दुःखी भाव हुँदैन, ओसिलो र फिँजले युक्त पृथ्वी हुन जान्छ । यस अवस्थामा कहिले पित्त बढ्दछ त फेरी आफैं उल्टो चिकित्सा (रोग विपरित व्यवहार) ले गर्दा यो शान्त हुने गर्दछ ।

**यदोदीच्यां गतिर्भानोस्तदा सूर्य्यो जलाधिपः ॥**
**तस्मादुष्णगुणास्तीव्राः सम्भवन्ति विदाहिनः । खरसूर्यांशुजालैस्तु शुष्यते वनकानन् ॥**
**संशुष्का मेदिनी सर्वादिशः पानादिनोरसाः । बलिनोऽम्लकटुक्षाराः सम्भवन्ति विदाहिनः ॥**
**तस्मात्संकुप्यते पित्तं रक्तेन सह मूर्च्छितम् । संशुष्क ओषधिरसो गोजातीनां पयांसि च ॥**
**अल्पं बलं च जन्तूनां कथञ्चित्कफसम्भवः । दृश्यते च वसन्ते च स्वयमेव शमं व्रजेत् ॥**
**एवं ज्ञात्वा सुधीः सम्यक्कुर्य्यात्सर्वप्रतिक्रियाम् ॥**

जब सूर्यको गति उत्तरतिर हुन्छ तब जलका स्वामी सूर्य हुन्छन् । यसले गर्दा गर्मी गर्ने, तिब्र र पोल्ने गुणका पदार्थहरु यसबेला उत्पन्न हुन्छन् । यसबेला सारा पृथ्वी सुक्दछ, सबै दिशा जलहीन हुन पुग्दछन् । पिरो, अमिलो, नुनिलो जस्ता पोल्ने खालका रस बलिया हुन्छन् । यी रसले गर्दा रगतसँग

मासिएर बसेको पित्त बिग्रन थाल्दछ अनि औषधी आदिका रस र गाइ आदि जनावरको दूध पनि सुक्दछ । यसबेला जीव कम बलियो हुन्छ, यदाकदा कफ पनि उब्जन्छ (खोकी समेत लाग्दछ) र यो वसन्त ऋतुमा देखिन्छ र आफै निको हुन्छ । यी कुरा राम्ररी जानी वैद्यले सबै रोगको उपचार गर्नु पर्दछ ।

**सघनवारिदवारिसमाकुला अखिलवत्प्रवरोदकपूरिताः ।**
**समदवातकरा विदिशो दिशः प्रमुदितक्रिमिकीटभृता मही ॥**

वर्षा ऋतुमा घना पानी बोकेका व्याकुल बादल, सबैतिर पानी पार्दै, पानी भर्दै र मादक वायु बहाउँदै गरेको हरेक दिशातिर देखिन्छ । आनन्दित हुँदै अनेक थरिका कीरा बोक्ने खालकी पृथ्वी हुन्छे ।

**नीलसस्यहरितोज्वला मही कुल्यका सलिलसंप्लुता नता ।**
**इन्द्रगोपकविराजिता वरा पङ्कभूषणविभूषिता धरा ॥**

नीरको खेती, दूबो र घाँसले भरिभराउ पृथ्वी हुन्छे । पानीले भरिभराउ भएर नुहाएका नदीका किनारा हुन्छन् । इन्द्रगोप (वीरबहूटी) कीराले सुशोभित र हिलोरूपी गहनाले विभूषित भएकी पृथ्वी हुन्छे ।

**उद्भिन्नचूताङ्कुरभूधरः स्याद्रेजे वनं वा मधुरं व्यकूजन् ।**
**भृङ्गा मयूरा जलदस्य घोषं सर्वेऽपि जीवा बलमाप्नुवन्ति ॥**

मास्तिर निस्केका आँपका अङ्कुर जस्ता पर्वत हुन्छन् । वन हरियालीले भरिन्छन् । भमरा र मयुर मिठा शब्द निकाल्न थाल्दछन् । बादल गर्जन्छ । सबै जीवलाई बल प्राप्त हुन्छ ।



**केकी कूजति कानने च सरसी म्लानाम्बुपूर्णा तथा**
**हंसा मानसमाव्रजन्ति कमलान्युन्म्लानतां यान्ति च ।**
**गर्जन्मेघमहेन्द्रकन्दरदरी सस्यावृता श्यामला**
**भात्येवं पवनस्य कोपनकरी वर्षाऋतुः श्रेयसी ॥**

वनमा मयुर कराउँदछ । तलाउहरू धमिलो पानीले भरिन्छन् । हाँसहरु मानसरोवरमा आउँदछन् । कमलहरू मलिन हुन्छन् । बादलको गजर्नले महेन्द्रगुफा थर्काउँदछ । अनाजले सुशोभित काली पृथ्वी हुन्छे । वातदोष बढाउने खालको वातावरण हुन्छ । यस्तो वर्षा ऋतु श्रेष्ठ हुन्छ ।

**किञ्चिद्गर्भोद्भवानि स्युः सस्यानां दृढतागमः । बहुसस्या भवेद्धात्री वारिपूर्णा शरन्मुहुः ॥**

अनाजमा केही टुसाइरहेका र केही बलिया भइरहेका हुन्छन् । यसबेला प्रशस्त अनाज र जलले भरिपूर्ण पृथ्वी हुन्छे र केही कुरा शरद् ऋतुसँग मेल खान्छन् ।

**नद्यः पूर्णाम्भसोत्खातशीर्णपातास्तटद्रुमाः । कुल्याप्रस्रवणानां तु स्रवत्यम्भो दिशो दिशः ॥**

नदी र पोखरीहरु जलले भरिभराउ हुन्छन् । नदीका किनार र रुखका पात पानीले क्षतविक्षत बनाइएका हुन्छन् । सबैतिर झरनाबाट पानी झरिरहेका र कुलोमा पानी बगिरहेको हुन्छ ।

**बहूकधारा मेघा बहुवृक्षा घनस्वनाः । एवं गुण समायुक्ता वर्षा स्यादृतुकोविदैः ॥**

पानीका धारा धेरै झर्ने खालको बादल र अनेक वृक्ष उम्रने खालको जङ्गल हुन्छ । ऋतुका जानिफकारहरूले वर्षा ऋतु यस्तै गुणले युक्त हुन्छ भनेका छन् ।

**तस्माद्वातकफः कोऽपि जायते च नृणां भृशम् ।**
**इति ज्ञात्वा भिषक्छ्रेष्ठः कुर्य्यात्तस्यां प्रतिक्रियाम् ॥**

यसैले, यो ऋतुमा मानिसलाई वातजन्य र कफजन्य रोग बढी हुन्छ भनी जानी उत्तम वैद्यले त्यसको उपचार गर्नू ।

**स्वेदनं मर्दनं पथ्यं निर्वातसेवनं तथा । गौरारामारतं शस्तं व्यायामक्रमविक्रमः ॥**

पसिना निकाल्नु, शरीर मालिस गर्नु, घर भित्र वा बाहिर सोझै हावाले हान्ने गरी शरीरलाई नराख्नु (ग्रिष्म ऋतुमा जसरी पङ्खा आदिको कृत्रिम हावा वा वाहिरी प्राकृतिक हावा वर्षा ऋतुमा सोझै शरीरमा पार्नु हुन्न), गोरी स्त्रीसँग सहवास गर्नु र कसरत गर्नु जस्ता कार्यले शरीरमा कफजन्य रोग हुन दिँदैन ।

**कट्वम्लक्षारसुरसाः सेव्या वातकफापहाः । निरूहबस्तिकर्मात्र कफवातरुजापहम् ॥**

यो ऋतुमा वातजन्य र कफजन्य रोग बढ्न नदिन पिरो, अमिलो र नुनिलो रस खानु पर्दछ । यसका साथै निरुहवस्ति (दोष र लक्षण अनुसार विभिन्न औषधी, द्रव्य आदिको रस, काँढा, औषधी सहितको चिल्लो, खीर, मासुको रस, गहुँत, पातलो हलुवा, नुनपानी, मह आदि कुरा पाइप (वस्तियन्त्र) ले मलद्वार मार्फत पक्वाशयमा पुऱ्याउने र त्यहाँ भित्र अड्किएका दूषित पदार्थ पुनः मल मार्फत बाहिर निस्कने वा निकाल्ने क्रियालाई निरुहवस्ति, गुदवस्ति वा अंग्रेजीमा Enema भनिन्छ) कर्मले पनि शरीरमा वातजन्य र कफजन्य रोग वा दुःख नाश गर्दछ ।

**मेघाः सूर्य्यशिलासमानरुचयो ह्यल्पस्रवाल्पस्वना**
**हंसालीजलजालिमण्डितजलं पद्माकरं शोभनम् ।**
**तीव्रस्निग्धमयूखचन्द्रविमला सानन्दिनी कौमुदी**
**चित्रा घर्मविपक्वतोयसुरसा स्यान्निर्मलं पुष्करम् ॥**
**तत्र शीतलगतं वयोगतं जातपित्तरुधिरस्य योग्यताम् ।**
**पथ्यमत्र च नरस्य शीतलं दृश्यते कथमपि त्रयोद्भवम् ॥**

बादल सूर्य र पत्थर समानका रुची भएका थोरै वर्सने र थोरै गर्जने (र थोरै तताउने) हुन्छन् । हाँसका ताँती र कमलका लहर सहितको जलमय रमणीय तलाउ हुन्छ । तीव्र र स्निग्धरूपी किरणका चन्द्रमाबाट स्वच्छ र आनन्ददायक र विचित्र छटाको घामबाट परिपक्व पानीले रसिलो चन्द्रकिरण (पृथ्वीमा) आउनेछ । पानी निर्मल हुन्छ । शरद् ऋतुमा आकाशको पानी, पित्त तथा रगतका लागि योग्य पदार्थ र शीतल पदार्थ सहजै पच्दछ । तर यो ऋतुमा सन्निपात (चित्तभ्रान्ति) ले कहिलेकाहीँ दुःख दिन सक्दछ ।

**श्रृतं क्षीरं सितापथ्यं चन्द्रिकासेवनं निशि । श्यामारामारतं शस्तं प्रभाते निर्मलं दधि ॥**

घिउ, दूध, मिश्री, रातमा जूनको किरण सेवन, काली केटीसँगको समागम, बिहानको स्वच्छ दही सेवन-यी सबै शरद ऋतुमा पथ्य हुन्छन् ।

**कामिन्यालिङ्गनानन्दश्रान्तः शीतसरोरुहैः ।**
**चन्दनादीनि सेवेत दृष्टं शरदि कोपनम् ॥ एवं प्रशमनं दृष्टं शरत्पित्तप्रकोपने ॥**

(यो शरद् ऋतुमा) स्त्रीका आलिङ्गनका कारण थकित पुरुषले चिसो कमल धारण गरी थकाई मेट्नू । शरद ऋतुमा पित्तजन्य रोगले दुःख दिए चन्दन आदिको लेप लगाउनू । यी दुई उपाय चिसो कमल धारण र चन्दनादिको लेपले शरद् ऋतुमा हुने पित्तदोष नाश गर्दछ : यस्तो देखिएको छ ।

**बहुशीतः समीरोऽल्पश्चाल्पवासरता ऋतौ । अल्पतेजा दिवानाथो धूमाक्रान्ता च दिग्भवेत् ॥**
**विस्तीर्णशालिकेदारा नीलधान्योज्वला मही । एवं गुणसमायुक्ता हैमन्ती स्म भवेदृतुः ॥**

धेरै चिसो हुने, हावा कम चल्ने, दिन छोटा हुने, सूर्यको तेज कम हुने र चारै दिशा धुवाँ (कुहिरो आदि)ले भरिएको हुने तथा शालिधानका विस्तृत खेत देखिने एवं नीर र अनाजले भरिभराउ पृथ्वी देखिने -यस्ता लक्षण (गुण) को हेमन्त ऋतु हुन्छ ।

**तत्र वातकफा दोषा दृश्यन्ते कुपिता भृशम् । अग्नि संसेवनं पथ्यं कटुक्षाराम्लसेवनम् ॥**

यो ऋतुमा वात र कफजन्य रोगले अति दुःख दिएको देखिन्छ । यसबेलामा आगो ताप्नु, पिरो-नुनिलो र अमिलो खानु पथ्य हुन्छ ।

**गौरारामारतं शस्तं व्यायामश्च प्रशस्यते । एवं संशाम्यन्ति दोषाः कफवातसमुद्भवाः ॥**

यसका साथै यो ऋतुमा गोरी स्त्रीसँग सहवास गर्नु र व्यायाम गर्नु उत्तम हुन्छ । यसो गर्नाले कफ र वातजन्य रोग निको हुन्छ ।

**बलिनः शीतसंरोधा हेमन्ते प्रबलोऽनिलः । भवत्यल्पेन्धनो धातून्स पचेद्वायुनेरितः ॥**

बलिया मानिसले चिसो पचाउन खोज्दा यो बेलामा वायु बलियो हुन पुग्दछ, पछि भित्री वायुसँग मिली यही वायुले मानिसलाई अल्पाहारी बनाउँदै धातुलाई समेत पकाउन थाल्दछ ।

**अतो हिमेऽस्मिन्सेवेत स्वाद्वम्ललवणान्रसान् । दीर्घा निशा भवेत्तर्हि प्रातरेव बुभुक्षितः ॥**

त्यसैले यो ऋतुमा गुलियो, अमिलो र नुनिलो रस खानू । यो ऋतुमा रात लामा हुने हुनाले बिहान सबेरै मानिसमा केही खान पाए हुन्थ्यो भन्ने चाहना हुन्छ ।

**भवत्यकार्य्यं संभाव्य यथोक्तं शीलयेदनु ॥**

यसैले केही नराम्रो हुनुपूर्व (भोकले असर गर्नुपूर्व) नै तोकिएका द्रव्य खानूपिउनू ।

**अर्कन्यग्रोधखदिरकरञ्जककुभादिकम् । प्रातर्भुक्त्वा च मधुरकषायकटुतिक्तकम् ॥**

बिहान आँक, बयर, खयर, कुबेराक्ष, खरी आदि (को काँढा बनाएर) खानू । यसपछि गुलियो, टर्रो, पिरो र तितो रस खानू ।

**बहुलशिरिवातः किञ्चिदुद्भुतसस्या भवति वसुमतीयं पक्वसस्यैस्तु पीता ।**
**कथमपि तु हिमं स्याल्लिङ्गवैशेषिकं वा पवनकफविकारो जायते शैशिरे च ॥**

अति चिसो हावा चल्दछ, पृथ्वीमा केही मात्रामा अनाज उत्पन्न हुन्छ, पाकेका अनाजले पृथ्वी पहेंलै देखिन्छ, कहिलेकाहीँ हिउँ समेत परी जाडो बढ्दछ, कहिले अरु थप लक्षण पनि देखिन्छन्-यस्तो ऋतुलाई शिशिर ऋतु भनिन्छ । यो ऋतुमा वात र कफजन्य रोग बढी हुन्छ ।

**गौराराचमारतमतिशयेनारुणान्यम्बराणि सेव्यं तिक्तं कटुकलवणं प्रायशो ह्यम्लमेव ।**
**स्वेदोन्मर्दं प्रतिदिनमिदंकारयेद्यत्र सम्यग् नाशं यातोऽनिलकफगदौ क्वास्ति तेषां प्रकोपः ॥**

यो ऋतुमा गोरी स्त्रीसँग सहवास गर्नू, प्रायः रातो कपडा लगाउनू, प्रायः तितो-पिरो र नुनिलो खानू अभ्र यसमा पनि अमिलो बढी खानू । यसऋतुमा दिनहुँ राम्ररी पसिना निकाल्ने र माडेर शरीर नुहाउने गर्नू । यसो गर्नाले वात र कफजन्य रोग नै हुँदैन शरीरमा गढ्ने कुरा के गर्नु ?

**मुदितकोकिलकूजितकाननं मदनसूचितकिंशुकशोभितम् ।**
**कुसुमसौरभरञ्जितभूधरं क्वणितमत्तमधुव्रतलालसम् ॥**
**मकरकेतनबाणसमाकुलं मुदितमेव समस्तमिदं जगत् ।**
**मलयमारुत उष्णगुणान्वितः कफकरो हि वसन्तऋतुर्भवेत् ॥**

जब बनमा रमाएर कोइली कराउँदछ, जब कामदेवलाई सूचना दिंदै पलाँश सुशोभित भएर फुल्दछ, जब फूलका बास्नाले ओतप्रोत भएको पर्वत हुन्छ, जब मदोन्मत्त भमरा यताउता खेलेको शोभा देखिन्छ, जब कामदेवको बाणले आकुल र अनन्दित संसार हुन्छ, तब यसलाई वसन्त ऋतु भनिन्छ । वसन्त ऋतुमा आनन्दित पार्ने तर तातो गुण भएको हावा बहन्छ र कफ बढाउँदछ ।



**कफजकोपविनाशनलालनं वमननावनरूक्षनिषेवणम् ॥**

यो ऋतुमा विधिपूर्वक बमन गर्नाले, नाकमा नस हाल्नाले र रुखोसुखो खानेकुरा खानाले कफ विकृत हुन पाउँदैन । (यो बेलामा बरफ आदि चिसो खान हुन्न) ।

**विविधः सुरतानन्दः सम्भ्रमः कफवारणः । व्यायामश्रमसंरोधखिन्नविश्रान्तमानसः ॥**

विविध किसिमले कामदेवको आनन्द लिनाले, राम्ररी हिँडडुल गर्नाले, पसिना निकाल्नाले र मन थकित पार्ने कार्य गर्नाले यो ऋतुमा मानिस सुखी रहन्छ ।

**कटुक्षाराम्लाः सेव्याश्च शोषणं कफसम्भवम् । एवं क्रियासमापन्नो नरः शीघ्रं सुखी भवेत् ॥**

यो ऋतुमा कफलाई सोस्ने वा सुकाउने हुनाले पिरो, नुनिलो र अमिलो रस खानु पर्दछ । यसो गर्नाले मानिसलाई चाँडै आराम हुन्छ ।

**दीर्घवास रसंतीक्ष्णं ज्वालामालाकुलं जगत् । दिशि दिशि मृगतृष्णाचोष्णं भृशं भवेद्रजः ॥**

जब-लामा दिन हुन्छन्, रस तिक्खर हुन्छ, गर्मीले संसार आकुलब्याकुल हुन्छ, जुन दिशामा हेर्‍यो मृगतृष्णा देखिन्छ, अति गर्मी हुन्छ र जताततै धुलो उड्दछ तब यो ग्रीष्म ऋतु हो भनी जान्नू ।

**नैर्ऋतोमारूतोरूक्षः शीर्णपर्णामहीरुहः । दग्धतृणाकुलारण्यं दावाग्निसङ्कुला दिशः ॥**

(यस ऋतुमा) नैऋत्य (दक्षिण पश्चिम) दिशाबाट रुखो हावा चल्दछ । रुखका पात झर्दछन् । डढेका (वा सुकेका) घाँसपातले युक्त भएको वन हुन्छ । दिशादिशामा दावाग्नि (रुख आपसमा रगडिएर जङ्गलमा लाग्ने डँढेलो) व्यापक हुन्छ ।

**एवं तु लक्ष्म ग्रीष्मस्य पित्तरक्तमुदीर्य्यते । तस्मात् क्रियाप्रतीकारं कुर्य्यात् संशमनं भिषक्॥**

यस्तो लक्षण देखिए पछि त्यसलाई ग्रीष्म ऋतु भनिन्छ । यसबेलामा पित्त र रगत (जन्य विकार) बढ्दछ, अतः असल वैद्यले रक्तपित्त ठिक गर्ने खालका उपचार गर्नु पर्दछ ।

**जलक्रीडा दिवा निद्रासेवनं सुखसाधनम् । श्यामारामारतं शस्तं किञ्जल्कं कुञ्जशीतलम्॥**

यो ऋतुमा जलक्रीडा (पौडी आदि), दिउसको सुताई, काली स्त्रीसँग सहवास र कमलकेसर (वा नागकेसर) आदि जस्ता केही चिसो कुरा खानु र बगैंचामा घुम्नु पथ्य हुन्छ ।

**नीलनालदलोपेतः श्रमघ्नोव्यजनानिलः । केतक्यामोदकुसुमं चन्दनोशीरशीतलैः॥**
**लेपनं शीतलं सम्यग्धारागाराशयः पुनः । एवं क्रियासमापन्नो ग्रीष्मे च सुखसङ्गमः॥**

ग्रीष्म ऋतुको परिश्रम वा थकाईलाई नीलकमलका पातले बनाएको हातेपङ्खाको हावाले हरण गर्दछ । क्यात्तुके (केतकी) को फूल, सेतो चन्दन र खस (उशीर) जस्ता शीतल गर्ने कुराको शीतलता दिने मलम (लेप) बनाई शरीरमा दल्नाले तथा कृत्रिम वा प्राकृतिक झर्नाको नजिक बस्नाले ग्रीष्म ऋतुमा मानिस सुखी हुन्छ ।



**अपराह्णे वर्षा वदन्ति निपुणास्तस्मिन्निशीथे शरत् ।**
**प्रोक्तः शैशिरिकस्ततो हिमऋतुः सूर्योदयादग्रतः॥**
**मध्याह्ने च तथा वदन्ति निपुणा ग्रीष्मो ऋतुः स्यात्ततो ।**
**वासन्तः कथितो ऋतुस्तु मुनिभिः पूर्वापराह्णे सदा॥**

(हरेक दिन छ ऋतुका गुण हुन्छन्) । विद्वानहरू दिनको तेश्रो प्रहर (तीन तीन घण्टाको एक प्रहर हुन्छ) लाई वर्षा ऋतु, आधारातलाई शरद् ऋतु, सूर्योदय हुनुभन्दा केही अघिको समयलाई हेमन्त ऋतु, दिउस मध्याह्नलाई ग्रीष्म ऋतु भनिन्छ भन्दछन् । मुनिजन दिनको पूर्वाह्ण र अपराह्णलाई सधैं वसन्त ऋतु भन्ने गर्दछन् ।

**ऋतौ विपर्य्यासगते यदा च प्रकोपनं यस्य यथा प्रदिष्टम् ।**
**तत्सेवमानस्य नरस्य रोगः स्याद्द्वन्द्वजो नाम विकारकारी॥**

जब कुनै ऋतुमा अरु ऋतुका गुण देखिन्छ तब त्यो चलिरहेको ऋतुमा हुने विकारमा लक्षण देखिएका ऋतुका विकार पनि मानिसका शरीरमा थपिन्छन् । यसरी यस्ता ऋतुमा जुम्ल्याहा दोषको जन्म हुन्छ ।

**यस्मिन्नृतौ वातविकोप उक्तस्तस्मिन्यदि श्लेष्मविकोनानि ।**
**संसेवते वा मनुजस्तदास्य भवेत्प्रकोपः कफवातयोश्च॥**

जुन् ऋतुमा वायुजन्य विकार हुन्छ भनिएको छ, त्यो ऋतुमा मानिस यदि कफलाई दूषित पार्ने कुरा खान्छ वा पिउँदछ भने उसलाई कफ र पित्तसम्बन्धी रोग पनि हुन जान्छ ।

**यस्मिन्मरुत्कुप्यति सेवते यः पित्तस्य कोपप्रकराणि यानि ।**
**विपर्ययो वा ऋतुधान्ययोश्च स पित्तवातप्रभवस्तदा स्यात् ॥**

जुन ऋतुमा वायु विकृत हुन्छ त्यो ऋतुमा पित्तलाई विकृत पार्ने खालका पदार्थ खाँदापिउँदा वा ऋतुजन्य अनाजभन्दा बेग्लै खालका अन्न खानाले वात-पित्तको रोग हुन जान्छ ।

**विपर्यासगते काले रसे विपरिसेविते । तदा स्यात्सन्निपातो हि रोगोपद्रवकारकः ॥**

जब समय परिस्थिति उल्टो देखिन्छ, रस पनि उल्टो खाइन्छ तब सन्निपात हुन्छ र यसले जे रोग शुरु भएको छ त्यसलाई बढाउँदछ ।

उपसंहार : सपनामा सुपारी चपाएर आनन्द लिन पल्केका भौतिकवादी बाहेक पृथ्वीका हरेक मानिसलाई पृथ्वीको बिग्रँदो वातावरणप्रति चिन्ता बढिरहेछ । पूर्वीय दर्शनले पृथ्वीको केन्द्र मानेको क्षेत्र यही हो । शास्त्र अनुसार यहाँको वातावरण बिग्रेपछि पृथ्वी पूरै उथलपुथल हुने गर्दछ । एउटा स्याउको उदाहरण दिन चाहैँ । किनेर लेराएको अलि दिनपछि छेउछाउमा दाग देखिए त्यसलाई खुर्केर फाली बाँकी भाग खाइन्छ । तर बीच भागसम्म खराब भए स्याउ पूरै फालिन्छ । पृथ्वीमा हुने उथलपुथल भनेको यस्तै हुन्छ । पृथ्वीको वातावरणका सम्बन्धमा अनुसन्धान गर्न चाहने सबैलाई प्राचीन विवरणका हरेक पक्षलाई केलाउन सहज होस् भनेर यससम्बन्धी विस्तृत सङ्कलन यहाँ राखेको हुँ ।

## ऋतु-अकाल
## (Ritu-Akaala)

(क) **काश्यप संहिता :**

**अत ऊर्ध्वमकालजमाहुः ।**

यसभन्दा पछि (ऋतुकालका बाह्र दिनभन्दा पछि) को समयलाई ऋतुको अकाल भनिन्छ । (यसपछि ग्राम्यधर्ममा संलग्न नहुनु भन्ने महर्षिको अभिप्राय हो) ।

## ऋतुकाल
## (Ritukaala)

(क) अष्टाङ्ग हृदय :

**ऋतुस्तु द्वादश निशाः पूर्वास्तिस्रोऽत्र निन्दिताः ॥**
**एकादशी च युग्मासु स्यात्पुत्रोऽन्यासु कन्यका ।**

ऋतुकाल बाह्र रातका हुन्छन् । यी बाह्र रातमध्ये पनि शुरुका तीन रात निन्दनीय रात हुन् । एकादशी पनि निन्दनीय रात हो । बाँकी रहेका जोर रातमा गरिने सहवासले पुत्र र बिजोर रातमा गरिने सहवासले पुत्रीको जन्म हुन्छ ।

(ख) काश्यप संहिता :

**अत ऊर्ध्वमृतुर्द्वादशाहं ब्राह्मणीनामेकादशाहं क्षत्रियाणां दशाहं वैश्यानां नवरात्रमितरासाम् ।**

यी (रजस्वला भएको) तीन दिनपछि ब्राह्मणीका लागि बाह्र दिन, क्षत्रियाका लागि एघार दिन, वैश्याका लागि दश दिन र अन्य शूद्रा आदिका लागि नौ दिनको ऋतुकाल हुने गर्दछ ।



(ग) भावप्रकाश संहिता :

**द्वादशाद्वत्सरादूर्ध्वमापञ्चाशत्समा स्त्रियः । मासि मासि भगद्वारा प्रकृत्यैवार्तवं स्रवेत् ॥**
**आर्तवस्रावदिवसादृतुः षोडश रात्रयः । गर्भग्रहणयोग्यस्तु स एव समयः स्मृतः ॥**

बाह्रवर्षदेखि लिएर पचास वर्षसम्म उमेरका स्त्रीको जननेन्द्रियबाट स्वाभाविकरूपमा हरेक महिना रगत आउँदछ । यसरी हरेक महिना रजस्वला भएको दिनदेखि सोह्र रातसम्म (शुरुका तीन रातलाई छाडेर) रजस्वला हुने स्त्री ऋतुमती हुन्छे वा भनिन्छे । यही समयलाई गर्भाधानका लागि योग्य समय हो भनी (हरेक शास्त्रमा) बताइएको छ ।

(घ) मनुस्मृति :

**ऋतुः स्वावाभिकः स्त्रीणां रात्रयः षोडश स्मृताः । चतुर्भिरितरैः सार्धमहोभिः सद्विगर्हितैः ॥**

स्वाभाविक ऋतुकाल सोह्र रातको हुन्छ जसमा असल मनुष्यले निन्दनीय मानेका शुरुका चार रात पनि समावेश भएका हुन्छन् ।

(ङ) **याज्ञबल्क्यस्मृति :**

**षोडशर्तुनिशाः स्त्रीणां तस्मिन्युग्मासु सम्विशेत्। ब्रह्मचर्येव पर्वाण्याद्याश्चतस्रस्तु वर्जयेत्॥**

ऋतुकालका सोह्र मध्ये जोर रातमा स्त्री-समागम गर्नू। समागममा रजस्वला हुँदाका शुरुका चार रात र पर्व त्याग्ने पुरुषलाई ब्रह्मचारी नै मानिन्छ।

(च) **व्याससमृति :**

**रजोदर्शनतो याः स्यू रात्रयः षोडशर्त्तवः। ततः पुंबीजमक्लिष्टं शुद्धे क्षेत्रे प्ररोहति॥**

रजोदर्शन देखिका सोह्र रात ऋतुका रात (ऋतुकाल) हुन्छन् जसमा पुरुषको बीज बिना कठिनाई शुद्ध क्षेत्रमा उम्रन पुग्दछ (गर्भाधान हुने गर्दछ)।

(छ) **Ritukaala :** The time of menstruation, time favourable for conception, *i.e.* 16 nights from menstrual discharge.

# ऋद्धि र वृद्धि
# (Riddhi & vriddhi)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : ऋद्धि र वृद्धि दुवै भनेको पातेझुला हो ।
(ख) नेपाली बृहत् शब्दकोश (पातेझुलो) : ऋद्धिलता ।
(च) के.यन.स्वामी (वृद्धि) : बुटीविशेष । यसलाई नेपालीमा सतुवा भनिन्छ ।
(घ) डा.साङ्ग्रधर : अष्टवर्गमा गणना गरिएका दुई ओखती ऋद्धि र वृद्धि हालसम्म ठोकुवा गरेर यिनै वनस्पति हुन् भन्न सकिएको छैन । विकल्पका कुरा भने यत्रतत्र लेखिएका छन् ।
(ङ) Astavarga plants- threatened medicinal herbs of the North-West Himalaya, Acharya Balkrishna, Anupam Srivastava, Rajesh K. Mishra, Shambhu P. Patel, Rajiv K. Vashistha, Ajay Singh, Vikas Jadon, Parul Saxena : Patanjali Ayurveda Research and Development Department, Patanjali Yogpeeth, Maharishi Dayanand Gram, Near Bahadrabad, Haridwar- 249405, Uttarakhand, India, January 2012 : ऋद्धिको वानस्पतिक नाम *Habenaria intermedia* D. Don वा Syn- *Ochyrorchis intermedia* (D. Don) Szlach. हो । यो Orchidaceae परिवारमा पर्दछ । यसलाई अंग्रेजीमा Intermediate Habenaria, White wild orchid, The in-between Habenaria, Rein deer orchid भनिन्छ । वृद्धिको वानस्पतिक नाम *Habenaria edgeworthii* Hook.f. ex Collett वा Syn- *Platanthera edgeworthii* (Hook.f. ex Collet) R. K. Gupta हो । यो पनि Orchidaceae परिवारमा नै पर्दछ । यसलाई अंग्रेजीमा Edgeworth's Habenaria, Edgeworth's platanthera भनिन्छ । यी एकजातका ऋद्धि र वृद्धि हुन् ।

**प्राचीन ग्रन्थका वचन :**

(क) **अमरकोश :**

**योग्यमृद्धिः सिद्धिलक्ष्म्यौ वृद्धेरप्याह्वया इमे ॥**

योग्य, लक्ष्मी र सिद्धि : यी ऋद्धि र वृद्धिका नाम हुन् ।

(ख) **अभिधान मञ्जरी :**

**वृद्धिर्महाश्रावणी प्राणदा स्यादाश्वासना बोधनी जीवनीति ।**
**बुद्धा तथा श्वेतना वृद्धपुष्पी वृद्धाभिधाना च शब्दैः समानैः ॥**

वृद्धि, महाश्रावणी, प्राणदा, आश्वासना, बोधनी, जीवनी, बुद्धा, श्वेतना, वृद्धपुष्पी, र वृद्धाका पर्याय : यी वृद्धिका नाम हुन् ।

**ऋद्धिर्व्याघ्री प्रोक्ता लोकप्रिया गुहाचेति ...। श्रवणी श्रावण्याशी ऋध्याः पर्यायनामभिश्चापि ॥**

ऋद्धि, व्याघ्री, लोकप्रिया, गुहा, (...?), श्रवणी, श्रावण्याशी र ऋद्धिका पर्याय : यी ऋद्धिका नाम हुन् ।

**(ग) अर्कप्रकाश :**

**ऋद्ध्या बलस्त्रिदोषघ्नो रक्तपित्तविनाशनः ॥ वृद्ध्या गर्भप्रदः शीतः क्षतकासक्षयापहः ।**

ऋद्धिको अर्क बलवर्धक, त्रिदोष नाशक र रक्तपित्त नाशक हुन्छ । वृद्धिको अर्कमा गर्भधारण गराउने, शीतल, घाउभर्ने र क्षयरोग नाश गर्ने गुण हुन्छ ।

**(घ) धन्वन्तरि निघण्टु :**

**ऋद्धिर्वृद्धिः सुखं सिद्धी रथाङ्गं मङ्गलं वसु ॥ ऋषिसृष्टा युगं योग्यं लक्ष्मीः सर्वजनप्रिया ।**
**ऋद्धिर्मधुरशीता स्यात् क्षयपित्तानिलाञ्जयेत् ॥ रक्तदोषं ज्वरं हन्ति वर्धनी कफशुक्रयोः ।**

ऋद्धि, वृद्धिः सुख, सिद्धी, रथाङ्ग, मङ्गल, वसु, ऋषिसृष्टा, युग, योग्य, लक्ष्मी र सर्वजनप्रिया : यी ऋद्धिका नाम हुन् । ऋद्धि गुलियो, शीतवीर्यको तथा क्षयरोग, पित्तविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले रक्तविकार र जरो नाश गर्दछ तथा कफविकार र शुक्र बढाउँदछ ।

**(ङ) निघण्टु रत्नाकर (शा.नि.) :**

**ऋद्धिस्तु मधुरा स्निग्धा मेधाकृच्छीतला स्मृता । कफं शुक्रं वर्धयन्ती प्राणैश्वर्यबलप्रदा ॥**
**रक्तशुद्धिकरी रुच्या गुर्वी कुष्ठापहा मता । क्रिमित्रिदोषमूर्च्छास्रपित्ततृट्क्षयपित्तहा ॥**
**वातं रक्तरुजं जूर्तिं नाशयेदितिकीर्तिता ।**



ऋद्धि गुलियो, चिल्लो, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, शीतवीर्यको, कफ बढाउने, शुक्र बढाउने, जीवनी, ऐश्वर्यजनक, बलकारी, रगत प्रशोधक, रुचिप्रद, पचाउन कठिन, तथा कुष्ठ, कीराका विकार, बेहोसी, रक्तपित्त, तिर्खा, क्षयरोग, पित्तविकार, वातविकार, रक्तविकार जरो नाशगर्ने गुणको हुन्छ भनिएको छ ।

**(च) भावप्रकाश निघण्टु :**

**ऋद्धिर्वृद्धिश्च कन्दौ द्वौ भवतः कोशयामले ॥ श्वेतलोमान्वितौ कन्दौ लताजातौ सरन्ध्रकौ ।**
**स एव ऋद्धिर्वृद्धिश्च भेदमप्येतयोर्ब्रुवे ॥ तूलग्रन्थिसमा ऋद्धिर्वामावर्त्तफला च सा ।**
**वृद्धिस्तु दक्षिणावर्त्तफला प्रोक्ता महर्षिभिः ॥ ऋद्धियुग्मं सिद्धिलक्ष्म्यौ वृद्धेरप्याह्वया इमे ।**
**ऋद्धिर्बल्या त्रिदोषघ्नी शुक्रला मधुरा गुरुः ॥ प्राणैश्वर्यकरी मूर्च्छारक्तपित्तविनाशिनी ।**
**वृद्धिर्गर्भप्रदा शीता बृंहणी मधुरा स्मृता ॥ वृष्या पित्तास्रशमनी क्षतकासक्षयापहा ।**

ऋद्धि र वृद्धि दुवै कोशयामल प्रदेश (?) मा पाइन्छन् । यी दुवै कन्दमूल सेता भुस र ससाना प्वालले युक्त हुन्छन् । यिनको भिन्नता बताइन्छ । ऋद्धि देब्रेतिर बटारिएको हुन्छ र कपासको गाँठाजत्रो फल लाग्दछ । वृद्धिको कन्द दाहिनेतिर बटारिएको हुन्छ । यस्तो महर्षिहरूले बताएका छन् । दुवैको पर्यायवाची शब्द सिद्धि र लक्ष्मी हुन् । ऋद्धि बलकारी, त्रिदोष हर्ने, वीर्यवर्धक, स्वादिष्ट, पचाउन कठिन, आयु र ऐश्वर्य बढाउने तथा बेहोसी र रक्तपित्त नाशक हुन्छ । वृद्धिले गर्भधारण गराउन मद्दत

गर्दछ । शरीरलाई ठण्डा गराउँदछ । यो गुलियो, पौष्टिक र वीर्यवर्धक हुन्छ । यसले रक्तपित्त, घाउ, खोकी र क्षयरोग निको पार्दछ ।

**(छ) मदनपाल निघण्टु :**

**ऋद्धिः सुखंयुगं लक्ष्मीः सिद्धिः सर्वजनप्रिया । ऋषिसृष्टा रथाङ्गं स्यान्माङ्गल्यं श्रावणी वसुः ॥**
**योग्यं युग्या तुष्टिराशिर्वृद्धिरप्येतदाह्वया । ऋद्धिर्बल्या त्रिदोषघ्नी शुक्रला मधुरो गुरुः ॥**
**वृद्धिर्गर्भप्रदा शीता वृष्या कासक्षयास्रनुत् ॥**

ऋद्धि, सुखंयुग, लक्ष्मी, सिद्धि, सर्वजनप्रिया, ऋषिसृष्टा, रथाङ्ग, माङ्गल्य, श्रावणी, वसु, योग्य, युग्या र तुष्टिराशि-यी ऋद्धिवृद्धिका नाम हुन् । ऋद्धिले बल दिन्छ, त्रिदोष नाश गर्दछ, वीर्य बढाउँदछ, मिठो हुन्छ र पचाउन कठिन हुन्छ । वृद्धिमा गर्भ रहन मद्दत गर्ने, ठण्डी गर्ने, आयु बढाउने, खोकी र क्षय रोग नाश गर्ने तथा रगतका विकार नाश गर्ने गुण हुन्छ ।

**(ज) राज निघण्टु :**

**ऋद्धिः सिद्धिः प्राणदा जीवदात्री सिद्धा योग्या चेतनीया रथाङ्गी ।**
**मङ्गल्या स्याल्लोककान्ता यशस्या जीवश्रेष्ठा द्वादशाह्वा क्रमेण ॥**

(१) ऋद्धि, (२) सिद्धि, (३) प्राणदा, (४) जीवदात्री, (५) सिद्धा, (६) योग्या, (७) चेतनीया, (८) रथाङ्गी, (९) मङ्गल्या, (१०) लोककान्ता, (११) यशस्या र (१२) जीवश्रेष्ठा : यी बाह्र नाम ऋद्धिका नाम हुन् ।



**वृद्धिस्तुष्टिः पुष्टिदा वृद्धिदात्री मङ्गल्या श्रीः सम्पदाशीर्जनेष्टा ।**
**लक्ष्मीर्भूतिर्मुत् सुखं जीवभद्रा स्यादित्येषा लोकसंज्ञा क्रमेण ॥**
**ऋद्धिर्वृद्धिश्च कन्दौ द्वौ भवतः कोशयामले । श्वेतरोमान्वितः कन्दो लताजातः सरन्ध्रकः ॥**
**तूलग्रन्थिसमा ऋद्धिर्वामावर्तफला च सा । वृद्धिस्तु दक्षिणावर्तफला प्रोक्ता महर्षिभिः ॥**

वृद्धि, तुष्टि, पुष्टिदा, वृद्धिदात्री, मङ्गल्या, श्री, सम्पदाशी, जनेष्टा, लक्ष्मी, भूतिर्मुत्, सुखं र जीवभद्रा : यी वृद्धिका नाम हुन् । ऋद्धि र वृद्धि दुवैका कन्द (लसुनजस्तै) खोलले ढाकिएका हुन्छन् । यी कन्द सेता र भुसयुक्त हुन्छन् । मूल बोट लहरेदार र खोक्रा हुन्छन् । ऋद्धि नामक लहरा कपासको गाँठो जस्तै हुन्छ र बायाँतिरबाट बेरिएर उक्लिने गर्दछ तथा वृद्धि नामक लहरा दाहिनेतिरबाट बेरिँदै उक्लने गर्दछ भनी महर्षिहरूले बताएका छन् ।

**ऋद्धिर्वृद्धिश्च मधुरा सुस्निग्धा तिक्तशीतला । रुचिमेधाकरी श्लेष्मकुष्ठकृमिहरा परा ॥**
**प्रयोगेष्वनयोरेकं यथालाभं प्रयोजयेत् । यत्र द्वयानुसृष्टिः स्याद्द्वयमप्यत्र योजयेत् ॥**

ऋद्धि र वृद्धि दुवै गुलिया, चिल्ला, तीता र शीतवीर्यका हुन्छन् । यिनले रुची जगाउँदछन् र दिमागको ग्रहण गर्ने क्षमतालाई बढाउँदछन् । यी दुवैले कफविकार, कुष्ठ र कीरालाई प्रभावकारी ढङ्गले नाश गर्दछन् । ओखती बनाउँदा यी दुईमध्ये एकले नै आवश्यकता अनुसारको उद्देश्य पूरा गर्न सक्दछ । पाउँदा दुवैको प्रयोग गर्नू ।

**(झ) शालिग्राम निघण्टु :**

**ऋद्धिः प्राणप्रिया वृष्या प्राणदा सम्पदाह्वया ।**

ऋद्धि, प्राणप्रिया, वृष्या, प्राणदा र सम्पदाका पर्याय : यी ऋद्धिका नाम हुन् ।

**वृद्धिर्बोधनिका चैव प्रियासिद्धिः सुरोत्तमा ।**

वृद्धि, बोधनिका, प्रिया, सिद्धि र सुरोत्तमा : यी वृद्धिका नाम हुन् ।

## एककुष्ठ रोग
## (A kind of Leprosy)

**(क) सुश्रुत संहिता :**

**कृष्णारुणं येन भवेच्छरीरं तदेककुष्ठं प्रवदन्ति कुष्ठम् ।**

शरीर कालो एवं रातो हुने खालको कुष्ठरोगलाई एककुष्ठ भनिन्छ ।

## एकवीर (एकले बिर)
## (Ekle bira)

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) एकवीर, सकृद्वीर : एक्ले वीर नामको झार । (२) सुवीरक : बयर वा बदरी । (३) वीर : एक्लेवीर ।
(ख) डा.साङ्ग्वधर : एकवीरको पहिचानमा समान मत छैन ।
(ग) नेपाली बृहत् शब्दकोश (एकले बिर) : दुईदेखि पाँच मिटर अग्लो, लाम्चो, दाँती परेका हरिया पात हुने गुलाफी वा कलेजी रङका फूल फुल्ने, पात र फूल विषालु मानिने एक जातको बोट ।
(घ) राजनिघण्टु, सन् १८८३ मार्चमा प्रकाशित : यसलाई कन्नाडभाषामा गंडुबिक्के भनिन्छ ।
(ङ) नेपाल राजपत्र, खण्ड ६५, संख्या २६, भाग ३, मिति २०७२।७।१७ : एक्लेवीरको वानस्पतिक नाम *Lobelia pyramidalis* (लोबिलिया पिरामिलालिस) हो ।
(च) एकले बिर Campanulaceae (क्याम्पनुलेसिइ) परिवारमा पर्दछ ।
(च) एक्लेबिरलाई कतै कतै एकफले विष पनि भनिएको पाइन्छ ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) राज निघण्टु :**

**एकवीरो महावीरः सकृद्वीरः सुवीरकः ।**
**एकादिवीरपर्यायैर्वीरश्चेति(त्) षडा(षड्विधा)ह्वयः॥**
**एकवीरो भवेच्चोष्णः (महत्पष्ठः) कटुकस्तोदवातनुत् ।**
**गृध्रसीकटिपृष्ठादि(चल्लुकीकदिपुष्टादि) शूलपक्षाभिघातनुत्॥**



(१) एकवीर, (२) महावीर, (३) सकृद्वीर, (४) सुवीरक, (५) एकादिवीर र (६) वीर : यी छ नाम एकवीरका नाम हुन् । एकवीर उष्णवीर्यको, पिरो, दुःखनाशक र वातविकार नाशक हुन्छ । यसले गृध्रसी रोग, कम्मर र ढाडका शूल, तथा पक्षाघात समेत ठिक गर्दछ ।


nepalayurveds.com. Lobelia Pyramidalis : एक्लेबिर


थाङ्ग्रो हालेर बाँधी अडयाइएको एक्लेबिरको बोट, : *Lobelia pyramidalis* wall : gardeninthehimalayas.org

# एकवृन्द रोग
# (A particular disease of the throat)

(क) **सुश्रुत संहिता :**

**वृत्तोन्नतो यः श्वयथुः सदाहः कण्ड्वन्वितोऽपाक्यमृदुर्गुरुश्च ।**
**नाम्नैकवृन्दः परिकीर्तितोऽसौ व्याधिर्बलासक्षतजप्रसूतः ॥**

कफविकार रक्तविकारका कारण गोलाकार, उठेको, डाह गराउने, चिलाउने, नपाक्ने, कोमल र भारी हुने गलाको सुजनलाई एकवृन्द भनिन्छ ।

# एण मृग (कालो कृष्णसार)
# (Blackbuck, Indian antelope)

**परिभाषा :**

(क) के.यन.स्वामी (एण) : कालो रङ्को कृष्णसारमृग (अभिनव निघण्टु) ।
(ख) हिन्दी विश्वकोश (एण) : कालो रङको, सुन्दर आँखा र छोटा खुट्टा हुने मृगविशेष ।
(ग) अमरकोशः एण भनेको एक जातको मृग हो ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) हारीत संहिता :**

**क्षते क्षयार्शसोः पाण्ड्वावरोचकनिपीडिते । कासश्वासातुराणां च एणमांसं सुखावहम्॥**

छाती आदिमा घाउ हुँदा, क्षयरोगमा, अल्काईमा, पाण्डुरोगमा, खान अरुचि हुँदा, खोकी लाग्दा, दमको रोगमा एण मृगको मासु हितकर हुन्छ ।

**(ख) काश्यप संहिता :**



**एणो मृगेषु प्रवरः ...॥**

मृगजातमा एणमृगको मासु श्रेष्ठ हुन्छ ।

**(ग) भावप्रकाश संहिता :**

**एणः ... जाङ्गलेषु प्रशस्यते ।**

जाङ्गल जीवको मासुमा कालो कृष्णसार आदिको मासु उत्तम हुन्छ ।

**...एणः कृष्णतया मतः ।**

एण कालो वर्णको हुन्छ भनिन्छ ।

**(घ) राज निघण्टु :**

**एणस्य मांसं लघुशीतवृष्यं त्रिदोषहृत् षड्रसजञ्च रुच्यम्॥**

कालो कृष्णसार मृगको मासु पचाउन सहज, शीतवीर्यको, वीर्यवर्धक, त्रिदोषनाशक, छ रसले युक्त र रुचिप्रद् हुन्छ ।

(ङ) **मदनपाल निघण्टु :**

**एणः कृष्णोऽपरः...।**

अर्को कालो मृगलाई एण भनिन्छ ।

**एणमांसं हिमं रुच्यं ग्राहि दोषत्रयापहम्॥ षड्रसं बलदं पथ्यं लघु हृद्यं ज्वरास्रजित्॥**

एण मृगको मासु शीतल गर्ने, रुचिप्रद, दिसा गोटा पार्ने र त्रिदोष नाश गर्ने गुणको हुन्छ । यो मासु छ रस भएको, बलदायक, पथ्य, पचाउन सहज, मुटुका लागि हितकर तथा जरो र रक्तविकारलाई जित्ने गुणको हुन्छ ।

(च) **कैयदेव निघण्टु :**

**एणमांसं लघु ग्राहि हिमं रुच्यं त्रिदोषनुत्। षड्रसं कटुकं पाके हृद्यं बल्यं ज्वरास्रनुत्॥**

एण मृगको मासु पचाउन सहज, ग्राहि, शीतवीर्यको, रुचिप्रद, त्रिदोष नाशक, छ रसले युक्त, पचेपछि पिरो, मुटुका लागि हितकर, बलदायक तथा जरो र रक्तविकार नाशगर्ने गुणको हुन्छ ।



(छ) **द्रव्यगुणसङ्ग्रह :**

**कषायो मधुरो हृद्यः पित्तासृक्कफवातहा । सङ्ग्राही रोचनो बल्यस्तेषामेणो ज्वरापहः॥**

एण मृगको मासु टर्रो। गुलियो, मुटुका लागि हितकर तथा पित्तविकार, रक्तविकार, कफविकार र वातविकार नाशगर्ने गुणको हुन्छ । यो ग्राहि, रुचिप्रद, बलदायक र जरो नाशगर्ने गुणको समेत हुन्छ ।

(ज) **धन्वन्तरि निघण्टु :**

**एणः श्यामलपृष्ठश्च ...॥**
**एणमांसं हिमं रुच्यं ग्राहि दोषत्रयापहम्। षड्रसं बलदं पथ्यं लघु हृद्यं कफास्रजित्॥**

एण मृगको ढाड कालो हुन्छ । कुरङ्गमृगका आँखा सुन्दर हुन्छन् । एण मृगको मासु शीतवीर्यको, रुचिप्रद, ग्राहि, त्रिदोष नाशक, छ रसले युक्त, बलदायक, पथ्य, पचाउन सहज, मुटुका लागि हितकर तथा कफविकार र रक्तविकारलाई जित्ने गुणको हुन्छ ।

**(झ) राजवल्लभ निघण्टु :**

**एणः कषायो मधुरः पित्तासृक्कफनाशनः । सङ्ग्राही रोचनो हृद्यो बलकृत् ज्वरनाशनः ॥**

एण मृगको मासु टर्रो, गुलियो तथा पित्तविकार, रक्तविकार र कफविकार नाशगर्ने गुणको हुन्छ । यो ग्राहि, रुचिप्रद, मुटुका लागि हितकर, बलदायक र जरो नाशक पनि हुन्छ ।

## ऐन्द्रसत्व
## (Aindrasattwa)

**(क) काश्यप संहिता :**

**त्रिवर्गनित्यं विद्वांसं शूरमक्लिष्टकारिणम् । प्राहुरैन्द्रं महाभागमधिष्ठातारमीश्वरम् ॥**

धर्म-अर्थ र कर्ममा संलग्न हुने, विद्वान्, शूरवीर, निन्दनीय काम नगर्ने, महात्मा, स्वामी र ऐश्वर्यशाली व्यक्तिलाई ऐन्द्रसत्वले युक्त भएको व्यक्ति भनिन्छ ।

# एरका (गुँद विशेष)
# (Elephant grass)

**परिभाषा :**

(क) **के.यन.स्वामी :** (१) एरका : ठूलो गुँद । (२) गुन्द्रमूला, गुन्द्रा : ठूलो जातको गुंद । मोथे । (३) शरी : मोथे ।

(ख) **नेपाली बृहत् शब्दकोश (गुँद) :** सिम परेको ठाउँमा पलाउने, बोजोका जस्तै च्याप्टा तर लामा पात हुने, पातका टुप्पामा कोदाका जस्तै झुप्पादार फल फल्ने तथा गुन्द्री, सुकुल आदि बुन्न उपयोग हुने एक जातको झार वा त्यसैको जरो; ठूलो जातको मोथे ।

(ग) **डा. चुनेकर :** गुन्द्र र गुन्द्रा एकै जातका वनस्पति हुन् । यसको ल्याटिन नाम *Typha elephantina* Roxb. हो । यसको *T. angustata* नामको अर्को एक जात पनि हुन्छ ।

(घ) **आचार्य बालकृष्ण :** यसलाई अंग्रेजीमा Indian reed mace वा Cat's tail वा Elephant grass पनि भनिन्छ । यो सिमसार क्षेत्रमा वा तलाउ आदिका किनारमा हुन्छ । महाभारतको कथामा यदुवंशको संहार गर्ने भनिएको झार यही हो । गुन्द्र र गुन्द्रा गरी यसका दुई जात हुन्छन् । कसैले यसलाई मोथे मान्दछन्, जुन सही होइन । यसको मूल जरा केराको जस्तो हुन्छ । एरका १.८-३.६ मिटर अग्लो हुने घाँसजातको विरुवा हो । यसका पात घाँस जस्तै देखिन्छ । यी पात १.२-१.८ मीटर लामा र २.५-३.८ से.मी. फराकिला हुन्छन् । पात गाढा हरियो रङको हुन्छ । यसको वानस्पतिक नाम *Typha elephantina* Roxb. *Syn-Typha maresii* Batt. हो । यो Typhaceae परिवारमा पर्दछ । संस्कृतमा यसलाई एरका, शीरी, गुच्छमूला, गन्धमूलिका, शिवि भनिन्छ । यसलाई हिन्दीमा पटेर भनिन्छ ।



(ङ) **फर्माकोपिया :** यो Typhaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Typha elephantina* Roxb. हो । यसलाई संस्कृतमा एरका भनिन्छ । यसको जराको काँढाको मात्रा १०-२० ग्राम हो ।

(च) **Journal of Plant Resources, Vol. 17, No. 1, Government of Nepal, 2019 :** पटेर Typhaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Typha angustifolia* L. हो ।

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **कैयदेव निघण्टु :**

**गुन्द्रा गृञ्जा शीरी मूलावानीरः पृथुलः खरः । एरकी च शिविः प्रोक्ताऽपार्गला गुच्छमूलिका ॥**
**एरका शिशिरा वृष्या चक्षुष्या वातकोपनी । मूत्रकृच्छ्राश्मरीदाहपित्तशोणितनाशिनी ॥**

गुन्द्रा, गृञ्जा, शीरी, मूलावानीर, पृथुल, खर, एरकी, शिवि, अपार्गला र गुच्छमूलिका : यी गुँदविशेषका पर्यायवाची नाम हुन् । यो शीतवीर्यको, वीर्यवर्धक, आँखाका लागि हितकर, वातविकारलाई उत्तेजित पार्ने तथा मूत्रकृच्छ्र, पत्थरी, डाह, पित्तविकार र रक्तविकार नाश गर्ने गुणको हुन्छ ।

**(ख) भावप्रकाश निघण्टु :**

**एरका गुन्द्रमूला च शिविर्गुन्द्रा शरीति च॥**
**एरका शिशिरा वृष्या चक्षुष्या वातकोपिनी । मूत्रकृच्छ्राश्मरीदाहपित्तशोणितनाशिनी॥**

एरका, गुन्द्रमूला, शिवि, गुन्द्रा र शरी : यी मोथे विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ, वीर्य बढाउँदछ, आँखाका लागि फाइदा गर्दछ र वातविकार बढाउँदछ । यसले मूत्रकृच्छ्र, पत्थरी, डाह, पित्तविकार र रक्तविकार नाश गर्दछ ।

**(ग) राजवल्लभ निघण्टु :**

**गुन्द्रा पित्तास्रदाहघ्नी चक्षुष्या मूत्रकृच्छ्रजित्॥२१॥**

गुन्द्रा पित्तविकार, रक्तविकार र डाह नाशगर्ने; आँखाका लागि हितकर तथा मूत्रकृच्छ्र रोगलाई जित्ने गुणको हुन्छ ।

**(घ) शालिग्राम निघण्टु :**

**एरका गुन्द्रमूला च शिम्बि गुन्द्रा शरीति च।**



एरका, गुन्द्रमूला, शिम्बि, गुन्द्रा र शरी : यी गुँदविशेषका पर्यायवाची नाम हुन् ।



गुन्द्रमूला (तस्बिर श्रोत : इफ्लोराअफइण्डिया डटकम)

# एरण्ड (अँडेर)
# (Castor-Oil plant)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा गौतम : एरण्ड, रुचक, चित्रक आदि शब्दले अरिडलाई बुझाउँदछ ।

(ख) नेपाली बृहत् शब्दकोश (अँडिर) : सातकुने पात भएको, झुप्पामा फल लाग्ने, रातो वा सेतो डाँठ भएको, फूलबाट तेल निकालिने र पातचाहिँ रेसमका कीरालाई खुवाइने एक जातको बोट । त्यसै वनस्पतिको फल । (यसको तेल जुलाफका निम्ति प्रयोग गरिन्छ) ।

(ग) डा. चुनेकर : अँडिरलाई अंग्रेजीमा Castor-Oil plant तथा ल्याटिन भाषामा *Ricinus communis* Linn. भनिन्छ ।

(घ) स्वामी सदाशिव तिर्थ : यसलाई अंग्रेजीमा Castor Oil Plant तथा ल्याटिन भाषामा *Ricinus communis* Linn. *(R.dicoccus)* भनिन्छ ।

(ङ) डा. साङ्ग्वधर : स्थूलैरण्डको ल्याटिन नाम *Jatropha curcas* Linn. हो । अर्को जङ्गली जात हुन्छ जसलाई *Jatropha gossipifolia* Linn. भनिन्छ ।

(च) आचार्य बालकृष्ण : अँडिर Euphorbiaceae (युफोर्बिएसी) परिवारमा पर्दछ । यसको अंग्रेजी नाम Castor-oil plant, Castor bean, Wonder tree  हो । अँडिरको वानस्पतिक नाम *Ricinus communis* L. हो । यसलाई हिन्दीमा अरंड, एरंड, एरंडी, रेंडी भनिन्छ ।

(छ) द आयुर्वेदिक फर्माकोपिया अफ इण्डिया : अँडिर Euphorbiaceae (युफोर्बिएसी) परिवारमा पर्दछ । यसको अंग्रेजी नाम Castor-oil plant र वानस्पतिक नाम *Ricinus communis* Linn हो । यो वनस्पति २-४ मिटर अग्लो हुन्छ । यसको जराको काँढा २०-३० ग्रामसम्म, ताजा पातको स्वरस १०-२० मि.लि.सम्म र बीजको  धूलो २-५ ग्रामसम्मको एक मात्रा हुन्छ ।

(ज) Catalogue of Plants of National Botanical Garden, Nepal : अँडिर Angiosperm समूह अन्तर्गत Euphorbiaceae (युफोर्बिएसी) परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Ricinus communis* Linn हो ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी, अष्टम वर्गः, विदार्यादिवर्ग :**

**पञ्चाङ्गुलः स्यादेरण्डः शुक्लश्च तिलकूपकः । आमुण्डको वर्धमानश्चित्रो गन्धर्वहस्तकः ॥**
**दीर्घदण्डो ग्रामजश्च मुनिश्च त्रिपुटीफलः ॥**

पञ्चाङ्गुल, एरण्ड, शुक्लएरण्ड, तिलकूपक, आमुण्डक, वर्धमान, चित्र, गन्धर्वहस्तक, दीर्घदण्ड, ग्रामज, मुनि र त्रिपुटीफल : यी अँडिरका नाम हुन् ।

**रक्तैरण्डो महामुण्डो महापञ्चाङ्गुलः पृथुः । हस्तिकर्णी चोरुवूक उरुपुर्गजकर्णकः ॥**
**शिखापत्रः सिरापत्रो महापत्रश्च कथ्यते । व्याघ्रो व्याघ्रदलश्चेति शब्दैः पर्यायवाचकैः ॥**

रक्तैरण्ड, महामुण्ड, महापञ्चाङ्गुल, पृथु, हस्तिकर्णी, चोरुवूक (उरुवूक), उरुपु, गजकर्णक, शिखापत्र, सिरापत्र, महापत्र, व्याघ्र र व्याघ्रदल : यी रातो अँडिरका नाम हुन् ।

**(ख) अभिधान मञ्जरी, सङ्कीर्णवर्गः, तृतीय एकार्थवर्ग :**

**प्रोक्तो वासन्त एरण्डः ....॥**

अँडिरलाई वासन्त पनि भनिन्छ ।

**(ग) अभिधान रत्नमाला, चतुर्थस्तिक्तस्कन्ध :**

**आमैण्डरण्डकैरण्डश्चित्रा गन्धर्वहस्तकः । पञ्चाङ्गुलो वर्धमानो वातघ्नोत्तानपत्रकः ॥**
**रक्तस्तु गजकर्णाख्यो व्याघ्रो व्याघ्रतलोपमः॥**

आमैण्ड, रण्डक, एरण्ड, चित्रा, गन्धर्वहस्तक, पञ्चाङ्गुल, वर्धमान, वातघ्न र उत्तानपत्रक : यी अँडिरका नाम हुन् । गजकर्णाख्य, व्याघ्र र व्याघ्रतलोपम : यी रातो अँडिरका नाम हुन् ।

**(घ) अमरकोशः, द्वितीय काण्डम्, वनौषधिवर्ग :**

**एरण्ड उरुबूकश्च रुचकश्चित्रकश्च सः । चञ्चुः पञ्चाङ्गुलौ मण्डवर्धमाव्यडम्बकाः॥**

उरुबूक, एरण्ड, गन्धर्वहस्तक, चञ्चु, चित्रक, पञ्चाङ्गुल, व्यडम्बक, मण्ड, रुचक, वर्धमान र व्याघ्रपुच्छ यी अँडिरका नाम हुन् ।

**(ङ) अर्कप्रकाशः, प्रथमः शतक :**

**पञ्चाङ्गुलादेर्मूलानि ह्यनुक्तेपरिकल्पयेत् ।**



जहाँ कुन भाग प्रयोग गर्ने भनी उल्लेख भएको छैन त्यहाँ ओखतीका लागि अँडिरको जरा लिनू ।

**(च) अष्टाङ्ग निघण्टु, विदार्यादिगण :**

**पञ्चाङ्गुलो वर्धमानश्चित्रो गन्धर्वहस्तकः । उरुवूकस्तथैरण्ड आमण्डो वातनाशनः॥**
**रक्तैरण्डो द्वितीयस्तु व्याघ्रो व्याघ्रतलोपमः ।**

पञ्चाङ्गुल, वर्धमान, चित्र, गन्धर्वहस्तक, उरुवूक, एरण्ड, आमण्ड र वातनाशन : यी अँडिरका संस्कृत पर्यायवाची नामहरू हुन् । रक्तैरण्ड, व्याघ्र र व्याघ्रतलोपम : यी रातो अँडिरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**(छ) अष्टाङ्ग सङ्ग्रहः, नवमोऽध्यायः, विरुद्धान्नविज्ञानीयमध्याय :**

**गोधालावंतित्तिरिमयूरकपिञ्जलाश्चैरण्डदार्वग्निसिद्धा एरण्डतैलसम्मूर्छिताः ।**

यस्तै गोहोरो, लाभे चरा, तित्रो, मयुर र काकाकुलको मासु अँडिरको दाउरामा वा अँडिरको तेलमा पकाएर नखानू, बेहोस गराउने एवं मृत्युदायक हुन सक्दछ ।

**(ज) अष्टाङ्ग सङ्ग्रहः, त्रयोदशोऽध्यायः, अग्र्यसङ्ग्रहमध्याय :**

**एरण्डतैलाभ्यासो वर्ध्मगुल्मानिलशूलहराणाम् ।**

वर्ध्म, गुल्म र वातशूल नाश गर्न अँडिरको तेल निरन्तर प्रयोग गर्नुपर्दछ ।

**एरण्डमूलं वृष्यवातहराणाम् ।**

वृष्यवात नाश गर्न अँडिरको जरा प्रयोग गर्नू ।

(झ) **अष्टाङ्ग हृदयः, पञ्चमोऽध्यायः, द्रव-द्रव्य विज्ञानीयमध्याय :**

**सतिक्तोषणमैरण्डं तैलं स्वादु सरं गुरु । वर्ध्मगुल्मानिलकफानुदरं विषमज्वरम् ॥**
**रुक्शोफौ च कटीगुह्यकोष्ठपृष्ठाश्रयौ जयेत् ।**

अँडिरको तेल अलिअलि तितो र अलिअलि पिरो हुन्छ तर मिठो हुन्छ । यसले पेट सफा हुने गरी दिसा लगाउँदछ (विरेचक) । पचाउन कठिन हुन्छ । हर्निया (वर्ध्म), गानुगोला (गुल्म), वात, कफ, पेटमा पर्ने कीरा मार्न र विषमज्वरमा औषधी हुन्छ । यो तेल दलेर मालिश गर्नाले कम्मर दुखेको, गोप्य अङ्ग दुखेको, पेटको बीच भाग वा भित्री पेट (कोष्ठ) र ढाड दुखेको निको हुन्छ । सुन्निएको भागमा यो तेल दले बस्दछ ।

**तीष्णोष्णं पिच्छिलं विस्रं, रक्तैरण्डोद्भवं त्वति ॥**

रातो अँडिरको तेल अती तिक्खर, अति गर्मीदायक, अती च्याटच्याट लाग्ने र अती गनाउने हुन्छ । यसपूर्व बताइएको अँडिर सेतो अँडिर हो ।



(ञ) **अष्टाङ्ग हृदयः, सप्तमोऽध्यायः, अन्नरक्षाध्याय :**

**तद्वत्तित्तिरिपत्राढ्यगोधालावकपिञ्जलाः । ऐरण्डेनाग्निना सिद्धास्तत्तैलेन विमूर्च्छिताः ॥**

यस्तै तित्रो, मयुर, गोहोरो, लाभे चरा र काकाकुलको मासु अँडिरको दाउरामा वा अँडिरको तेलमा पकाएर नखानू, बेहोस गराउने एवं मृत्युदायक हुन सक्दछ ।

(ट) **आयुर्वेद महोदधिः, तैलवर्ग :**

**एरण्डतैलं कृमिनाशनं च समग्रशूलघ्नमरुत्प्रणाशि ।**
**कुष्ठापहं चापि रसायनं च सरं च मेधास्मृतिकान्तिवर्धनम् ॥**

अँडिरको तेलले पेटका किरा मार्दछ; सबै खालका शूल, वायुविकार र कुष्ठरोग ठिक गर्दछ; बुढ्यौली लाग्न दिँदैन, मलमूत्र खुलाउँदछ तथा बुझ्ने शक्ति, सम्झना शक्ति र कान्ति बढाउँदछ ।

**सतिक्तोष्णमैरण्डं तैलं स्वादु सरं गुरु । वर्ध्मगुल्मानिलकफानुदरं विषमज्वरम् ॥**

अँडिरको तेल तितो, गर्मी गर्ने, स्वादिलो, मलमूत्र खुलाउने र पचाउन कठिन हुन्छ । यसले हर्निया, गुल्म, वातविकार, कफविकार, पेटका रोग र विषमज्वर निको पार्दछ ।

**रुक्शोफौ च कटीगुह्यकोष्ठपृष्ठाश्रयाञ्जयेत् । तीक्ष्णोष्णं पिच्छिलं विस्रं रक्तैरण्डोद्भवं त्वति ॥**

रातो अँडिरको तेलले दुखाइ कम गर्दछ, सुन्निएको बसाउँदछ तथा कमर र गुप्ताङ्गका विकार नाश गर्दछ । यो तिक्खर स्वादको, गर्मी गर्ने, चिप्लो र काँचो मासुभैं गनाउने हुन्छ ।

**आमवातगजेन्द्राणां शरीरवनचारिणाम् । एक एवाग्रहणीर्हन्ता एरण्डस्नेहकेसरी ॥**

शरीररूपी वनमा घुम्ने आउँ(आम)जन्य वातरोगरूपी हात्तीलाई अँडिरको तेलरूपी सिँह एक्लैले मार्दछ ।

**अधोभागिकमैरण्डम्....।**

अँडिरको तेलले दिसा लगाउँदछ । अथवा यो तेल शरीरको तल्लो भागका लागि हितकर हुन्छ ।

**(ठ) चरक संहिता :**

**ऐरण्डतैलं मधुरं गुरु श्लेष्माभिवर्धनम् । वातासृग्गुल्महृद्रोगजीर्णज्वरहरं परम्॥**

अँडिरको तेल गुलियो, पचाउन कठिन, कफविकार बढाउने, तथा वातविकार, रक्तविकार, गुल्म, मुटुका रोग, अजीर्ण र अति नै जरो नाशगर्ने गुणको हुन्छ ।

**(ठ) कैयदेव निघण्टु :**

**एरण्डको यक्षहस्ता रुबुरुत्तानपत्रकः॥**

**पञ्चाङ्गुलो व्याघ्रपुच्छो वर्धमानस्तु चित्रकः । गन्धर्वस्तरुणः शुक्लोरुबुको दीर्घदण्डकः॥**

एरण्डका, यक्षहस्ता, रुबु, उत्तानपत्रक, पञ्चाङ्गुल, व्याघ्रपुच्छ, वर्धमान, चित्रक, गन्धर्व, तरुण, शुक्ल, उरुबुक र दीर्घदण्डक : यी अँडिरका नाम हुन् ।

**एरण्डो मधुरो वृष्यो गुरूष्णो मार्गशोधनः । कफपित्तानिलश्वासकासवर्धमाश्मनाशनः॥**
**गुल्मप्लीहोदरानाहकटीवस्तिशिरोरुजि । मेहज्वरामवातास्रशूलशोफेषु शस्यते॥**

अँडिर गुलियो, वीर्यवर्धक, पचाउन कठिन, उष्णवीर्यको, रसको बाटो प्रशोधक तथा कफविकार, पित्तविकार, वातविकार, दम, खोकी र बढ्दो पत्थरी नाशक हुन्छ । यो गुल्म, फियोका रोग, पेटका रोग, आनाह; कम्मर, मूत्राशय र टाउकाका रोग; प्रमेह, जरो, आमवात, रक्तविकार, शूल र सुजनमा हितकर हुन्छ ।

**एरण्डपत्रं वातघ्नं कफक्रिमिविनाशनम् । रक्तपित्तप्रकोपि स्यात् मूत्रदोषं जयेदपि॥**
**गुल्मं च वस्तिशूलं च वृद्धिं सप्तविधां तथा । कफवातकृमींश्चापि हन्यादेरण्डपल्लवम्॥**

अँडिरको पात वातविकार, कफविकार र कीरा नाशक; रक्तपित्तलाई उत्तेजित पार्ने र मूत्रविकारलाई जित्ने गुणको हुन्छ । अँडिरका पालुवाले कफविकार, वातविकार र कीरा नाश गर्दछ ।

**एरण्डपुष्पं वातघ्नं कफपित्तविनाशनम् । मूत्रदोषहरं ज्ञेयं रक्तपित्तप्रकोपणम्॥**

अँडिरको फूल वातविकार, कफविकार, पित्तविकार र मूत्रविकार नाशक तथा रक्तपित्तलाई उत्तेजित पार्ने गुणको हुन्छ ।

**एरण्डफलमत्युष्णं गुल्मशूलानिलापहम् । यकृत्प्लीहोदरार्शोघ्नं कटुकं दीपनं परम्॥**
**तद्वन्मज्जा च विड्भेदी वातश्लेष्मोदरापहः ।**

अँडिरको फल अति उष्णवीर्यको तथा गुल्म, शूल, वातविकार; कलेजो, फियो र पेटका रोग तथा अल्काई नाशक हुन्छ । यो पिरो र अत्यन्त दीपनी हुन्छ । काठको चुरो वा बीज भित्रको गुदीमा पनि यिनै गुण हुन्छन् । यसले दिसा खुकुलो पार्दछ तथा वातविकार, कफविकार र पेटका रोग समेत नाश गर्दछ ।

**अन्यो रक्तो हस्तिकर्णो व्याघ्रो व्याघ्रतरू रुबुः॥**
**उरुबूको हस्तिपर्ण चलूशीहितशीर्षकः । शाल्यम्बो डिण्डको बूकोऽमण्डो बूको रिपुस्तथा॥**
**रक्तपञ्चाङ्गुलस्तिक्तः कषायः कटुको रसे । वातश्लेष्मश्वासकासकम्पार्शोवर्ध्मनाशनः॥**

हस्तिकर्ण, व्याघ्र, व्याघ्रतरू, रुबु, उरुबूक, हस्तिपर्ण, चलूशीहीतशीर्षक, शाल्यम्ब, डिण्डक, बूक, अमण्ड र रिपु : यी रातो अँडिरका नाम हुन् । यो तीतो, टर्रो र पिरो हुन्छ । यसले वातविकार, कफविकार, दम, खोकी, काम्ने रोग, अल्काई र हर्निया नाश गर्दछ ।

**एरण्डफलसम्भूतमेरण्डकमितिस्मृतम् ।**

अँडिरको फलबाट निकालिने तेललाई एरण्डक भनिन्छ ।



**तैलमैरण्डजं तीक्ष्णं दीपनं पिच्छिलं गुरु । कषायानुरसं सूक्ष्ममुष्णं स्रोतोविशोधनम्॥**
**विस्रं स्वादु रसे पाके सतिक्तं कटुकं सरम् । वयसः स्थापनं त्वच्यं योनिशुक्रविशोधनम्॥**
**मेधाकान्तिबलारोग्यस्मृतिशुक्रविवर्धनम् । वातं वातकफं हन्ति कुरुते केवलं कफम्॥**
**गुल्मप्लीहोदरानाहविबन्धान् वातशोणितम् । अष्ठीलावर्ध्महृद्रोगविषमज्वरविद्रधीः॥**
**शूलशोफौ कटीगुह्यकोष्ठपृष्ठोद्भवौ जयेत् । रक्तैरण्डोद्भवं तैलं तीक्ष्णोष्णं पिच्छिलं भृशम्॥**

अँडिरको तेल तिक्खर, दीपनी, लेस्याइलो, पचाउन कठिन, पछिल्लो रस टर्रो हुने, सूक्ष्म, उष्णवीर्यको, स्रोतलाई प्रशोधन गर्ने, काँचो मासु जस्तो गनाउने, पचेपछि गुलियो, खाँदा तीतो र पिरो, मलमूत्रलाई तलतिर सार्ने, उमेरलाई स्थिर राख्ने, छालाका लागि हितकर, स्त्री जननेन्द्रिय र शुक्र प्रशोधक, दिमागको ग्रहण गर्ने क्षमता र शरीरको कान्ति बढाउने, बल र आरोग्यदायक, सम्झना शक्ति र शुक्र बढाउने गुणको हुन्छ । यो वातविकार, वात-कफविकार कफविकार मात्र पनि नाशक हुन्छ । यसले गुल्म, फियो र पेटका रोग, आनाह, कब्जियत, वातरक्त, अष्ठीला, वर्ध्म, मुटुका रोग, विषमज्वर, विद्रधी, शूल, सुजन तथा कम्मर, गुप्ताङ्ग, पेट र ढाडको पीडालाई जित्दछ । रातो अँडिरको तेल बढी तिक्खर, उष्णवीर्यको र लेस्याइलो हुन्छ ।

**पित्तलं वातकफदेरण्डदलभोजनम् ।**

अँडिरको पातमा खाना खानाले पित्तविकार, वातविकार र कफविकार बढ्दछ ।

(ड) **द्रव्यगुणसङ्ग्रहः, तेलवर्ग :**

**तैलमेरण्डजं तिक्तं कटु स्वादुरसं गुरु॥ ब्रध्नगुल्मानिलकफानुदरान् विषमज्वरम्। रुक्शोफौ च कटीगुह्यकोष्ठपृष्ठाश्रयौ जयेत्॥ तीक्ष्णोष्णं पिच्छिलं विस्रं रक्तैरण्डोद्भवं त्वति।**

अँडिरको तेल तीतो, पिरो, गुलियो र पचाउन कठिन हुन्छ। यसले हर्निया, गुल्म, वातविकार, कफविकार, पेटका रोग, विषमज्वर, रक्तविकार, सुजन तथा कम्मर, गुप्ताङ्ग र पेटको पीडामाथि जित हासिल गर्दछ। रातो अँडिरको तेल तिक्खर, उष्णवीर्यको, लेस्याइलो र काँचो मासु जस्तो गनाउने गुणको हुन्छ।

(ढ) **धन्वन्तरि निघण्टु, प्रथमः गुडुच्यादि वर्ग :**

**एरण्डः तरुणः शुक्लश्चित्रो गन्धर्वहस्तकः। पञ्चाङ्गुलो वर्धमान आमण्डो दीर्घदण्डकः॥ रक्तोऽपरो हस्तपर्णो व्याघ्रो व्याघ्रदलो रुबुः। रुबुको हस्तिकर्णी च चञ्चुकोत्तानपत्रकः॥ एरण्डस्तु रसे तिक्तः स्वादूष्णोऽनिलनाशनः। उदावर्तप्लीहगुल्मबस्तिशूलान्त्रवृद्धिनुत्॥ गुरुर्वातप्रशमनो विकाराञ्शोणिताञ्जयेत्। फलं स्वादु च सक्षारं लघूष्णं भेदि वातजित्॥ एरण्डयुगलं वृष्यं स्वादु पित्तसमीरजित्॥**

एरण्ड, तरुण, शुक्ल, चित्र, गन्धर्वहस्तक, पञ्चाङ्गुल, वर्धमान, आमण्ड र दीर्घदण्डक : यी अँडिरका नाम हुन्। हस्तपर्ण, व्याघ्र, व्याघ्रदल, रुबु, रुबुक, हस्तिकर्णी, चञ्चुक र उत्तानपत्रक : यी अर्को थरी अर्थात् रातो अँडिरका नामहरू हुन्। अँडिर तीतो, गुलियो, उष्णवीर्यको तथा वातविकार, उदावर्त, फियोका रोग, गुल्म, मूत्राशय वा तल्लोपेटको शूल र आन्द्राको सुजन नाशक; पचाउन कठिन, वातविकार शान्त पार्ने र रक्तविकारलाई जित्ने गुणको हुन्छ। यसको फल गुलियो वा स्वादिलो, केही नुनिलो वा क्षारयुक्त, पचाउन सहज, उष्णवीर्यको, भेदनी र वातविकारलाई जित्ने गुणको हुन्छ। दुवै थरी अँडिर वीर्यवर्धक, स्वादिला वा गुलिया तथा पित्तविकार र वातविकारलाई जित्ने गुणका हुन्छन्।

(ण) **धन्वन्तरि निघण्टु, षष्ठः, सुवर्णादि वर्ग :**

**तैलमैरण्डजं बल्यं गुरूष्णं मधुरं सरम्। कफमेदोनिलहरं लेखनं कटु दीपनम्॥ हृद्बस्तिपार्श्वजानूरुत्रिकपृष्ठास्थिशूलिनाम्। आमदोषेषु वातासृक्प्लीहोदावर्तशोफिनाम्॥ हितं वातामयस्याग्र्यं ग्रन्थिबन्धविकारिणाम्। तिक्तोष्णं पित्तलं विस्रं रक्तैरण्डोद्भवं भृशम्॥**

अँडिरको तेल बलदायक, पचाउन कठिन, उष्णवीर्यको, मलमूत्रलाई तलतिर सार्ने; कफविकार, भित्री बोसोविकार र वातविकार नाशक; लेखनी, पिरो र दीपनी हुन्छ। मुटु, तल्लोपेट वा मूत्राशय, कोखो, घुँडा, तिघ्रा, खँगाल्नु, ढाड र हाड दुख्नेका लागि; आमविकार, रक्तवात, फियोका रोग, उदावर्त, सुजन, वातजन्य रोग र गाँठाका विकार हुनेलाई यो हितकर हुन्छ। अँडिरको तेल तीतो, उष्णवीर्यको, पित्तविकार बढाउने, काँचो मासु गनाएजसरी गनाउने हुन्छ। रातो अँडिरको तेलमा यी गुण बढी हुन्छन्।

(त) **पर्यायरत्नमाला :**

**आमण्डो वर्धमानः स्यादेरण्डो रुबुको बुकः॥ गन्धर्वहस्तकश्चित्रो वातारिस्तरुणो रुबुः॥**

आमण्ड, वर्धमान, एरण्ड, रुबुक, बुक, गन्धर्वहस्तक, चित्र, वातारि, तरुण र रुबु : यी अँडिरका नाम हुन् ।

(थ) भावप्रकाश निघण्टु, गुडूच्यादि वर्ग :

**शुक्ल एरण्ड आमण्डश्चित्रो गन्धर्वहस्तकः । पञ्चाङ्गुलो वर्द्धमानो दीर्घदण्डो व्यडम्बकः॥**
**वातारिस्तरुणश्चापि रुबूकश्च निगद्यते । रक्तोऽपरो रुबूकः स्यादुरुबूको रुबुस्तथा॥**
**व्याघ्रपुच्छश्च वातारिश्चञ्चुरुत्तानपत्रकः । एरण्डयुग्मं मधुरमुष्णं गुरु विनाशयेत्॥**
**शूलशोथकटीबस्तिशिरःपीडोदरज्वरान् । व्रध्नश्वासकफानाहकासकुष्ठाम्मारुतान्॥**

शुक्लैरण्ड, आमण्ड, चित्र, गन्धर्वहस्तक, पञ्चाङ्गुल, वर्द्धमान, दीर्घदण्ड, व्यडम्बक, वातारि, तरुण र रुबूक : यी सेतो अँडिरका नाम हुन् । रक्तैरण्ड, रुबूक, उरुबूक, रुबु, व्याघ्रपुच्छ, वातारि, चञ्चु र उत्तानपत्रक : यी रातो अँडिरका नाम हुन् । दुवै अँडिर गुलिया, गर्मी गर्ने र पचाउन कठिन हुने गुणका हुन्छन् । अँडिरले शूल, सुजन, कम्मर र तल्लोपेटको पीडा, टाउको दुख्ने र पेटका रोग, जरो, व्रध्नरोग, दम, कफविकार, आनाह, खोकी, कुष्ठ र आमजन्य वातविकार नाश गर्दछ ।

**एरण्डपत्रं वातघ्नं कफक्रिमिविनाशनम् । मूत्रकृच्छ्रहरं चापि पित्तरक्तप्रकोपणम्॥**
**वातार्यग्रदलं गुल्मबस्तिशूलहरं परम् । कफवातकृमीन्हन्ति वृद्धिं सप्तविधामपि॥६५॥**
**एरण्डफलमत्युष्णं गुल्मशूलानिलापहम् । यकृत्प्लीहोदरार्शोघ्नं कटुकं दीपनं परम्॥**
**तद्वन्मज्जा च विडभेदी वातश्लेष्मोदरापहः ।**



अँडिरको पात वातविकार, कफविकार, कीरा र मूत्रकृच्छ्र रोग नाशक हुन्छ । यसले पित्त र रगतलाई दूषित बनाउँदछ । यसका कमला पातले गुल्म र तल्लोपेटको शूल विशेषतः ठिक गर्दछ तथा कफविकार, वातविकार, कीरा र सात किसिमका अण्डकोष वृद्धिका रोग समेत ठिक गर्दछ । अँडिरको फलले अति नै गर्मी गर्दछ । यसले गुल्म, शूल, वातविकार, फियो र पेटका रोग र अल्काई ठिक गर्दछ । यो पिरो हुन्छ । यसले जठराग्निलाई तिव्ररूपले बाल्दछ । फलको गुदीमा पनि फलकै गुण हुन्छन् । यसले दिसा खुकुलो पार्दछ तथा वातजान्य, कफजन्य र पेटसम्बन्धी रोगलाई नाश गर्दछ । (मात्रा : तेल १-२ तोला र जराको धुलो एक चौथाईदेखि आधा तोलासम्म) ।

(द) भावप्रकाश निघण्टु, तैलवर्ग :

**एरण्डतैलं तीक्ष्णोष्णं दीपनं पिच्छिलं गुरु । वृष्यं त्वच्यं वयःस्थापि मेधाकान्तिबलप्रदम्॥**
**कषायानुरसं सूक्ष्मं योनिशुक्रविशोधनम् । विस्रं स्वादु रसे पाके सतिक्तं कटुकं रसम्॥**
**विषमज्वरहृद्रोगपृष्ठगुह्यादिशूलनुत् । हन्ति वातोदरानाहगुल्माष्ठीलाकटिग्रहान्॥**
**वातशोणितविड्बन्धव्रध्नशोथामविद्रधीन् । आमवातगजेन्द्रस्य शरीरवनचारिणः॥**
**एक एव निहन्ताऽयमैरण्डस्नेहकेसरी ।**

अँडिरको तेल तिक्खर, गर्मी गर्ने, दीपन, लेस्याइलो, पचाउन कठिन, वीर्यवर्धक, छालाका लागि हितकर, उमेरलाई स्थिर राख्ने, दिमागको ग्रहण गर्ने क्षमता र कान्ति बढाउने, बलदायक, टर्रो, सूक्ष्म, स्त्री-जननेन्द्रिय र शुक्र शुद्ध पार्ने, गनाउने, तीतो, पिरो, पचेपछि गुलियो तथा विषमज्वर,

मुटुका रोग; ढाड, गुदद्वार आदिको शूल; वातविकार, पेटका रोग, आनाह, गुल्म, अष्ठीला, कमर नचल्ने रोग, वातरक्त, कब्जियत, व्रध्न, सुजन, आमविकार र विद्रधि नाशक हुन्छ । अँडिरको तेलरूपी सिँहले शरीररूपी जङ्गलमा घुम्ने आमवातरूपी हात्तीलाई एक्लै नाश गर्दछ ।

**(ध) मदनादि निघण्टुः, अष्टमगण :**

**एरण्ड उरुबूकश्च चित्रो गन्धर्वहस्तकः । आमण्डको वर्धमानः शुक्लः पञ्चाङ्गुलः स्मृतः ॥**

एरण्ड, उरुबूक, चित्र, गन्धर्वहस्तक, आमण्डक, वर्धमान, शुक्ल र पञ्चाङ्गुल : यी अँडिरका नाम हुन् ।

**अन्योरक्तो हस्तिपर्णी व्याघ्री व्याघ्रतरोबुरुः । ऊरुबूको हस्तिपर्णी चञ्चुरक्तानुपत्रकः ॥**
**परंवातहरोवृष्याशूलोदावर्तनाशनः । वातरक्तहरः सर्वः एरण्डो मार्गशोधनौ ॥**
**सतिक्तोषणमेरण्डो तैलं स्वादु सरं गुरु । वर्ध्मगुल्मानिलकफानुदरं विषमज्वरम् ॥**
**रुक्शोफौ च कटीगुह्यकोष्ठ पृष्ठाश्रयौ जयेत् ॥**

हस्तिपर्णी, व्याघ्री, व्याघ्रतर, बुरु, ऊरुबूक, हस्तिपर्णी, चञ्चु र रक्तानुपत्रक : यी अर्कोथरी वा रातो अँडिरका नाम हुन् । अँडिरले सबै खालका वातविकार नाश गर्दछ । यो वीर्यवर्धक तथा शूल र उदावर्त नाशक हुन्छ । यसले धातु र मलको बाटो प्रशोधन गर्दछ । अँडिरको तेल तीतो, उष्णवीर्यको, गुलियो, मलमूत्रलाई तलतिर सार्ने, पचाउन कठिन तथा हर्निया, गुल्म, वातविकार, कफविकार, पेटका विकार, विषमज्वर र सुजनलाई जित्ने गुणको हुन्छ । यसले कम्मर, गुप्ताङ्ग, पेट र ढाडका रोगलाई पनि जित्दछ ।



**(न) मदनपाल निघण्टु, अभयादि वर्ग :**

**एरण्डो दीर्घदण्डः स्यात्तरुणो वर्धमानकः । चित्र पञ्चाङ्गुलो व्याघ्रपुच्छो गन्धर्वहस्तकः ॥**

एरण्ड, दीर्घदण्ड, तरुण, वर्धमानक, चित्र, पञ्चाङ्गुल, व्याघ्रपुच्छ र गन्धर्वहस्तक-यी अँडिरका नाम हुन् ।

**रक्तैरण्डो हस्तिकर्णो व्याघ्रो व्याघ्रतरो लघुः । उत्तानपत्र उरुबुर्वातवैरी च चञ्चुला ॥**

रक्तैरण्ड, हस्तिकर्ण, व्याघ्र, व्याघ्रतर, लघु, उत्तानपत्र, उरुबु, वातवैरी रचञ्चुला-यी रातो अँडिरका नाम हुन् ।

**एरण्डयुग्मं मधुरमुष्णं गुरु विनाशयेत् । शूलशोफकटीबस्तिशिरः पीडोदरज्वरान् ॥**
**व्रध्नश्वासकफानाहकासकुष्ठाममारुतान् । तत्फलं भेदनं स्वादु क्षारमुष्णं समीरजित् ॥**

सामान्य र रातो दुवै खालका अँडिर मिठा, गर्मी गर्ने र पचाउन कठिन हुने गुणका हुन्छन् । शूल, सुन्निने रोग, कम्मर-तल्लो पेट-टाउकोमा हुने पीडा, पेटको दुखाइ, जरो, व्रध्न (वायुविकार विशेष जसमा वायु शरीरलाई फुलाउँदै दुखाउँदै तिघ्रा र अण्डकोशको जोर्नीहुँदै अण्डकोशतिर सर्ने गर्दछ, हर्निया), दम, कफविकार, पेट फुल्ने रोग, खोकी, कुष्ठरोग र आमवातलाई अँडिरले निको पार्दछ । अँडिरको फलमा दिसा आदि खुकुल्याउने गुण हुनुका साथै यो स्वादिलो, नुनिलो र गर्मी गर्ने गुणको हुन्छ । यसले वायुविकार नाश गर्दछ । (पेट सफा गर्नुपर्दा यसको तेलको प्रयोग गरिन्छ) ।

**(प) मदनपाल निघण्टु, पानीयादि वर्ग :**

**एरण्डतैलं मधुरमुष्णं दीपनशोधनम् । वृष्यं त्वच्यं वयः स्थापि मेधाकान्तिबलप्रदम्॥**
**कषायानुरसं सूक्ष्मं योनिशुक्रविशोधनम्॥**
**हन्ति वातोदरानाहगुल्माष्ठीलाकटिग्रहान् । वातशोणितशूलादिव्रणशोथामविद्रधीन्॥**

अँडिरको तेल गुलियो र उष्णवीर्यको हुन्छ । यो दीपनी र प्रशोधक हुन्छ । यो तेल वीर्यवर्धक, छालाका लागि हितकर, उमेरमा स्थिरता लेराउने तथा दिमागको ग्रहण गर्ने क्षमता, शरीरको चमक र बल बढाउने गुणको हुन्छ । यसको उपरस वा पछिल्लो स्वाद टर्रो हुन्छ । यो सूक्ष्म हुन्छ । यसले स्त्री जननेन्द्रिय र वीर्यलाई प्रशोधन गर्दछ । यो तेलले वातविकार, पेटका रोग, आनाह, गुल्म, अष्ठीला र कम्मरका रोग नाश गर्दछ । यसले वातरक्त, शूल, घाउखटिरा, सुजन, आमविकार र विद्रधिलाई पनि नाश गर्दछ ।

**(फ) राज निघण्टु, मूलवर्ग :**

**श्वेतैरण्डः सितैरण्डश्चित्रो गन्धर्वहस्तकः । आमण्डस्तरुणः शुक्लो वातारिर्दीर्घदण्डकः॥**
**पञ्चाङ्गुलो वर्धमानो रुबुको द्वादशाह्वयः॥**

(१) श्वेतैरण्ड, (२) सितैरण्ड, (३) चित्र, (४) गन्धर्वहस्तक, (५) आमण्ड, (६) तरुण, (७) शुक्ल, (८) वातारि, (९) दीर्घदण्डक, (१०) पञ्चाङ्गुल, (११) वर्धमान र (१२) रुबुक : यी बाह्र नाम सेतो अँडिरका नाम हुन् ।



**रक्तैरण्डोऽपरो व्याघ्रो हस्तिकर्णो रुबुस्तथा । उरुबुको नागकर्णश्चञ्चुरुत्तानपत्रकः॥**
**करपर्णो याचनकः स्निग्धो व्याघ्रदलस्तथा । तत्करश्चित्रबीजश्च ह्रस्वैरण्डस्त्रिपञ्चधा॥**

(१) रक्तैरण्ड, (२) व्याघ्र, (३) हस्तिकर्ण, (४) रुबु, (५) उरुबुक, (६) नागकर्ण, (७) चञ्चु, (८) उत्तानपत्रक, (९) करपर्ण, (१०) याचनक, (११) स्निग्ध, (१२) व्याघ्रदल, (१३) तत्कर, (१४) चित्रबीज र (१५) ह्रस्वैरण्ड : यी पन्ध्र नाम रातो अँडिरका नाम हुन् ।

**श्वेतैरण्डः स कटुकरसस्तिक्त उष्णः कफार्तिध्वंसं**
**धत्ते ज्वरहरमरुत्कासहारी रसार्हः ।**
**रक्तैरण्डः श्वयथुपचनः वान्तिरक्तार्तिपाण्डु-**
**भ्रान्तिश्वासज्वरकफहरोऽरोचकघ्नो लघुश्च॥**

सेतो अँडिर पिरो, तीतो, उष्णवीर्यको र कफविकार नाशक हुन्छ । यसले ज्वर, वातविकार र खोकी नाश गर्दछ । यो पारो प्रशोधनमा समेत उपयोगी हुन्छ । रातो अँडिरले श्वयथु ठिक गर्दछ । यसले वाकवाकी, रक्तविकार, पाण्डु, भ्रम, दम, ज्वर र कफविकार तथा अरुची पनि नाश गर्दछ ।

**स्थूलैरण्डो महैरण्डो महापञ्चाङ्गुलादिकः । स्थूलैरण्डो गुणाढ्यः स्याद्रसवीर्यविपक्तिषु॥**

स्थूलैरण्ड, महैरण्ड र महापञ्चाङ्गुल : यी मोटो खालको अँडिरविशेषका नाम हुन् । यो रस, वीर्य र विपाकमा अन्य अँडिरभन्दा उत्तम हुन्छ ।

**एरण्डतैलं कृमिदोषनाशनं वातामयघ्नं सकलाङ्गशूलहृत् ।**
**कुष्ठापहं स्वादु रसायनोत्तमं पित्तप्रकोपं कुरुतेऽतिदीपनम् ॥**

अँडिरको तेल कीराजन्य विकार, वातविकार, सबै अङ्गका शूल र कुष्ठरोग नाशक हुन्छ । यो स्वादिलो र उत्तम रसायनी हुन्छ । यसले पित्तविकार गर्दछ । यो अति नै दीपनी हुन्छ ।

(ब) **राजबल्लभ निघण्टु :**

**एरण्डतैलं मधुरं शुक्रश्लेष्माभिवर्धनम् । वातासृग्गुल्महृद्रोगजीर्णज्वरहरं परम् ॥**
**हृद्बस्तिपार्श्वजानूरुत्रिकपृष्ठास्थिशूलिनाम् । आनाहाष्ठीलवातासृक्प्लीहोदावर्तशूलिनाम् ॥**
**हितं वातामयश्वासग्रन्थिब्रध्नविकारिणाम् ॥**

अँडिरको तेल गुलियो, शुक्र र कफवर्धक तथा वातविकार, रक्तविकार, गुल्म, मुटुका रोग र थाङ्ने जरो प्रभावकारी तरिकाले निको पार्ने गुणको हुन्छ । मुटु, मूत्राशय वा तल्लोपेट, कोख, घुँडा, खँगाल्नु र ढाडको हाड दुख्नेहरूका लागि तथा आनाह, अष्ठील, वातविकार, रक्तविकार, फियोका रोग र उदावर्त रोग हुनेहरूका लागि यो तेल हितकर हुन्छ । यो तेल वातविकार, दम र नसा आदि गाँठा पर्ने रोगीका लागि पनि हितकर हुन्छ ।

**एरण्डमूलं शूलघ्नं वृष्यं वातकफापहम् ॥**

अँडिरको जरा शूलनाशक, वीर्यवर्धक तथा वातविकार र कफविकार नाशक हुन्छ ।



(भ) **सरस्वती निघण्टुः, क्षुपवर्ग :**

**एरण्ड उरुबूकश्च रुबूकश्चित्रकश्च सः । चञ्चुः पञ्चाङ्गुलो मण्ड वर्धमानव्यडम्बकाः ॥**
**निस्सारोत्तानपत्रौ च शुक्लो गन्धर्वहस्तकः ॥**

एरण्ड, उरुबूक, रुबूक, चित्रक, चञ्चु, पञ्चाङ्गुल, मण्ड, वर्धमान, व्यडम्बक, निस्सार, उत्तानपत्र, शुक्ल र गन्धर्वहस्तक : यी अँडिरका नाम हुन् ।

(म) **सुश्रुत संहिता, सूत्रस्थानम्, तैलवर्ग :**

**एरण्डतैलं मधुरमुष्णं तीक्ष्णं दीपनं कटु कषायानुरसं सूक्ष्मं स्रोतोविशोधनं त्वच्यं वृष्यं मधुर-विपाकं वयःस्थापनं योनिशुक्रविशोधनमारोग्यमेधाकान्तिस्मृतिबलकरं वातकफहरमधोभागदोषहरं च ॥**

अँडिरको तेल गुलियो, उष्णवीर्यको, तिक्खर, दीपनी, पिरो, पछिल्लो रस टर्रो, सूक्ष्म, स्रोतग्रन्थी वा मार्ग प्रशोधक, छालाका लागि हितकर, वीर्यवर्धक, पचेपछि गुलियो, उमेरलाई स्थिर राख्ने वा स्थापना गर्ने, स्त्री जननेन्द्रिय तथा शुक्र प्रशोधक, आरोग्यदायक; दिमागको ग्रहणगर्ने क्षमता, शरीरको चमक र सम्झना शक्ति बढाउने; बलदायक तथा वातविकार, कफविकार र शरीरको तल्लो भागका रोगलाई नाशगर्ने गुणको हुन्छ ।

(य) **सोढल निघण्टुः, गुडूच्यादिवर्ग :**

**एरण्डे तरुणः शुक्लश्चित्रो गन्धर्वहस्तकः । पञ्चाङ्गुलो वर्धमान आभण्डो दीर्घदण्डकः ॥
वातारिश्चित्रबीजश्च रुबुः स्नेहप्रदस्तथा ।**

एरण्ड, तरुण, शुक्लश्चित्र, गन्धर्वहस्तक, पञ्चाङ्गुल, वर्धमान, आभण्ड, दीर्घदण्डक, वातारि, चित्रबीज, रुबु र स्नेहप्रद : यी सेतो अँडिरका नाम हुन् ।

**रक्तैरण्डे हस्तिकर्णी व्याघ्रो व्याघ्रकरो रुबुः ॥ त्रिपुत्री चोरुवूकश्च चञ्चुरुत्तानपत्रकः ।**

रक्तैरण्ड, हस्तिकर्णी, व्याघ्र, व्याघ्रकर, रुबु, त्रिपुत्री, उरुवूक, चञ्चु र उत्तानपत्रक : यी रातो अँडिरका नाम हुन् ।

(र) **सौश्रुत निघण्टु, विदारिगन्धादि वर्ग :**

**एरण्डश्चोरुबूकश्च चित्रो गन्धर्वहस्तकः । अमण्डको वर्धमानः स च पञ्चाङ्गुलो मतः ॥**

एरण्ड, उरुबूक, चित्र, गन्धर्वहस्तक, अमण्डक, वर्धमान र पञ्चाङ्गुल : यी अँडिरका नाम हुन् ।

(ल) **हारीत संहिताः, चतुर्दशोऽध्यायः, तैलवसावर्ग :**

**एरण्डजं घनं चापि शीतमेव मृदु स्मृतम् । हृद्वस्तिजङ्घाकटयूरुशूलानाहविबन्धनुत् ॥**

अँडिरको तेल गाढा वा बाक्लो हुन्छ र शरीरलाई ठण्डी गर्दछ । यो नरम हुन्छ । यसले हृदय, तल्लो पेट, तिघ्रा, कम्मर र छातीमा हुने वातरोग ठिक गर्दछ । दिसापिसाब बन्द हुने रोगमा तथा कब्जियतमा यो लाभदायक हुन्छ ।

**तैलमेरण्डजं बल्यं गुरूष्णं मधुरं तथा । तीक्ष्णोष्णं पिच्छलं विस्रं रक्तमेरण्डसम्भवम् ॥**

रातो अँडिरको तेलले बल दिन्छ । यो पचाउन कठिन, गर्मी गर्ने वा उष्णवीर्यको, मिठो वा गुलियो, तिक्खर, चिप्लो र काँचोमा गनाउने गुणको हुन्छ ।

(व) **हृदयदीपक निघण्टुः, चतुष्पादवर्ग :**

**गन्धर्वहस्तो गन्धर्वैरण्डः पञ्चाङ्गुलोरुबुः । आमण्डोरुबुकश्चन्यो रक्तो वै हस्तपर्णकः ॥**

गन्धर्वहस्त गन्धर्व, एरण्ड, पञ्चाङ्गुल, रुबु, आमण्ड र उरुबुक अँडिरका तथा हस्तपर्णक रातो अँडिरका नाम हुन् ।



वर्धमानः अँडिरको हाँगो। Ricinus communis L., payer.de/amarakosa



अँडिरको हाँगो, चञ्चु । Ricinus communis L., payer.de/amarakosa, Dinesh Walke



अँडिरको बीज र तेल, आचार्य बालकृष्णको लेख, वनएमजीडटकम





अँडिरको बीज र तेल, आचार्य बालकृष्णको लेख, वनएमजीडटकम

# एर्वारु (लामो काँक्रो)
# (Serpent cucumber)

**परिभाषा :**

(क) **कुलचन्द्र शर्मा :** ईर्वारु (उर्वारु, इर्वारु, इर्वालु, एर्वारु) र कर्कटी (कर्कटी) भनेको काँक्रो हो ।

(ख) **के.यन.स्वामी :** (१) व्यालपत्रा : तीते लौका । (२) लोमशा : तीते काँक्री । (३) स्थूला : ककरी । (४) तोयफला : तरबुजो वा काँक्रो । (५) हस्तिदन्तफला : तीते काँक्रो ।

(ग) **विश्वनाथ द्विवेदी शास्त्री :** एर्वारुलाई अंग्रेजीमा Cucumber तथा ल्याटिन भाषामा *Cucumis Sativus* भनिन्छ ।

(घ) **डा. चुनेकर :** एर्वारुलाई अंग्रेजीमा Snake Cucumber तथा ल्याटिन भाषामा *Cucumis utilissimus* Roxb. भनिन्छ ।

(ङ) **आचार्य बालकृष्ण :** यसको वानस्पतिक नाम *Cucumis melo* var. utilissimus Duthie & Fuller पनि हो । यसलाई अंग्रेजीमा Serpent cucumber पनि भनिन्छ ।

(च) **पेयर डी अमरकोश :** एर्वारुको वानस्पतिक नाम *Cucumis melo* L. हो ।

(छ) **कामतद्वय :** यो Cucurbitaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Cucumis melo* var.momordica Duthie and Fuller, Syn. *Cucumis momordica* Roxb. हो । अहिले यसको वानस्पतिक नाम *Cucumis melo* Linn. var. culta राखिएको पाइन्छ ।



(ज) **धन्वन्तरि वनौषधि विशेषाङ्क :** उर्वारुलाई हिन्दीमा डगरी वा डागरी भनिन्छ । यसको आकार खरबूजाको जस्तो भएकोले कसैले यसलाई cucumis melo पनि भन्दछन् । तर खबबुजा बेग्लै हो । उर्वारु काँचोमा मिठो हुने र काँचोमा तितो तर पाकृपछि मिठो गरी दुई किसिमको हुन्छ । पाकेपछि नफुट्ने खालको एर्वारुलाई हिन्दीमा गुमुक भनिन्छ । यसलाई ल्याटिन भाषामा *Cucumis utilissimus* Roxb. भनिन्छ ।

(झ) **शालिग्राम वैद्य :** यसको वानस्पतिक नाम *Cucumis sativus* हो ।

(ञ) **फर्माकोपिया :** यो Cucurbitaceae परिवारमा पर्दछ । यसको वानस्पतिक *Cucumis melo* var. utilissimus Duthie & Fuller *Syn. C .utilissimus* Roxb. नाम हो । संस्कृतमा यसलाई बहुकन्द, बृहत्फल, हस्तिपर्णी, कर्कटी भनिन्छ । यसको बीज एक मात्रामा ३-६ ग्राम ओखतीमा प्रयोग हुन्छ । यसलाई अंग्रेजीमा Snake cucumber भनिन्छ ।

यसरी एर्वारुको अर्थ कसैले लिखुरे लामो काँक्रो, कसैले चिचिण्डो , कसैले अर्कै फल विशेष र कसैले घिरौंलो अर्थ लगाएको पाइन्छ । चिचिण्डोका विषयमा बेग्लै वर्णन गरिएको छ । तरकारी खाइने "फल शाक वर्ग" मा यसको गणना भएकोले यसको अर्थ घिरौंलो लगाइएको पनि पाइन्छ । हिन्दीमा भने यसलाई ककडी नाम दिइएको छ । तर पनि "हस्तिदन्तफल" पर्यायवाची शब्दको आधारमा यो लामो काँक्रो हो भन्न सकिन्छ ।

**प्राचीन ग्रन्थका वचनहरू :**

**(क) अभिधान मञ्जरी :**

**उर्वारुर्व्यालदला गजदन्तफला च कर्कटी चिबिडा ।**
**उत्कटिका रोमशिका जलोपला मूत्रदा प्रोक्ता ॥**

उर्वारु, व्यालदला, गजदन्तफला, कर्कटी, चिबिडा, उत्कटिका, रोमशिका, जलोपला र मूत्रदा : यी उर्वारुका पर्यायवाची नाम हुन् ।

**(ख) अमरकोश :**

**...ईर्वारुः कर्कटी स्त्रियौ ।**

ईर्वारु (उर्वारु, इर्वारु, इर्वालु, एर्वारु) र कर्कटी (कर्कटी) : यी एर्वारू (काँक्रो) का नाम हुन् ।

**(ग) अष्टाङ्ग निघण्टु :**

**उर्वारुः कर्कटी प्रोक्ता लोमशा च प्रकीर्तिता ।**



उर्वारु, कर्कटी र लोमशा : यी उर्वारुका पर्यायवाची नाम हुन् ।

**(घ) कैयदेव निघण्टु :**

**कर्कटी लोमशी स्वाद्वी व्यालपत्रा बृहत्फला । गजदन्तफलैर्वारुरुर्वारुर्मूत्रला तथा ॥**
**एर्वारुकफलं बालं रूक्षं स्वादु हिमं गुरु । रुच्यं सङ्ग्राहि कृच्छ्रघ्नं ज्वरवातकफप्रदम् ॥**
**पक्वं पिताग्निकार्युष्णं दोषतृट्क्लमदाहजित् । एर्वारुकस्य पत्रं तु प्रसेकक्लेदनुत् परम् ॥**

कर्कटी, लोमशी, स्वाद्वी, व्यालपत्रा, बृहत्फला, गजदन्तफला, एर्वारु, एर्वारु र मूत्रला : यी एर्वारुका पर्यायवाची नाम हुन् । यसको चिचिलो फल रुखो, गुलियो, शीतवीर्यको, पचाउन कठिन, रुचिप्रद, ग्राहि, कृच्छ्र नाश गर्ने तथा जरो, वातविकार र कफविकार गर्ने गुणको हुन्छ । यसको पाकेको फल पित्तविकार र पाचनशक्चि बढाउने, उष्णवीर्यको तथा त्रिदोष, तिर्खा, बिना परिश्रमको थकाई र डाहलाई जित्ने गुणको हुन्छ । यसको पातले सेक्दा राम्रोसँग पसिना वा चिसोपन नाश गर्दछ ।

**(ङ) द्रव्यगुण सङ्ग्रह :**

**एर्वारुकं सकर्कारु सुपक्वं कफवातकृत् । सक्षारं मधुरं रुच्यं दीपनं नातिपित्तलम् ॥**

पाकेका एर्वारु र कर्कारुले कफविकार र वातविकार गर्दछन् । यी केही क्षारयुक्त, गुलिया, रुचिप्रद, दीपनी र धेरै पित्तविकार नगर्ने गुणका हुन्छन् । (कफवातकृत्का स्थानमा कफवातहृत् हुनुपर्ने हो कि) ।

**(च) धन्वन्तरि निघण्टु :**

**उर्वारुः कर्कटी प्रोक्ता व्यालपत्रा च लोमशा ॥ स्थूला तोयफला चैव हस्तिदन्तफला मुनिः ।**
**उर्वारुकं पित्तहरं सुशीतलं मूत्रामयघ्नं मधुरं रुचिप्रदम्॥**
**सन्तापमूर्च्छापहरं सुतृप्तिदं वातप्रकोपाय घनं तु सेवितम्॥**

उर्वारु, कर्कटी, व्यालपत्रा, लोमशा, स्थूला, तोयफला र हस्तिदन्तफला : यी सात नामश काँक्राविशेषका पर्यायवाची नाम हुन् । उर्वारु पित्तविकार नाशक, अति शीतवीर्यको, पिसाबसम्बन्धी रोग नाशगर्ने, गुलियो, रुचिप्रद, डाह र बेहोसीपन नाशक, तृप्तिदायक तथा धेरै खाए वातविकार गर्ने गुणको हुन्छ ।

**(छ) भावप्रकाश निघण्टु :**

**एर्वारुः कर्कटी प्रोक्ता कथ्यन्ते तद्गुणा अथ॥**
**कर्कटी शीतला रूक्षा ग्राहिणी मधुरा गुरुः । रुच्या पित्तहरा सामा पक्वा तृष्णाऽग्निपित्तकृत्॥**



एर्वारु र कर्कटी : यी एर्वारुका संस्कृत पर्यायवाची नामहरू हुन् । अब त्यसका गुण बताइन्छन् । (काँचो) एर्वारु शीतल गर्ने, रुखो, कब्जियत गर्ने, गुलियो र पचाउन कठिन हुन्छ । यसले रुचि जगाउँदछ र पित्तविकार नाश गर्दछ । पाकेको एर्वारुले तिर्खा लगाउँदछ, पाचकाग्निलाई जगाउँदछ र पित्तविकार बढाउँदछ ।

**(ज) मदनपाल निघण्टु :**

**कर्कटी लोमशी व्यालपत्रैर्वारुर्बृहत्फला । कर्कटी शीतला रूक्षा ग्राहिणी मधुरा गुरुः ॥**

कर्कटी, लोमशी, व्यालपत्रा, एर्वारु र बृहत्फला : यी एर्वारुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, रुखो, ग्राहि, गुलियो र पचाउन कठिन हुन्छ ।

**(झ) माधव द्रव्यगुण :**

**एर्वारुकं तु सम्पक्वं दाहतृष्णाक्लमार्तिनुत् ।**

पाकेको एर्वारुकले डाह, तिर्खा र परिश्रम बिनाको थकाई नाश गर्दछ ।

(ञ) **राज निघण्टु :**

**एर्वारुः कर्कटी प्रोक्ता व्यालपत्रा च लोमशा । स्थूला तोयफला चैव हस्तिदन्तफला मुनिः ॥**
**एर्वारुकं पित्तहरं सुशीतलं मूत्रामयघ्नं मधुरं रुचिप्रदम् ।**
**सन्तापमूर्छाऽपहरं सुतृप्तिदं वातप्रकोपाय घनं तु सेवितम् ॥**

(१) एर्वारु, (२) कर्कटी, (३) व्यालपत्रा, (४) लोमशा, (५) स्थूला, (६) तोयफला र (७) हस्तिदन्तफला : यी सात नाम तीते काँक्रोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पित्तविकार नाशक, शीतवीर्यको, पिसाबसम्बन्धी रोग नाशक, गुलियो र रुचिप्रद हुन्छ । यसले पीडा (वा जरो) र बेहोसीपन नाश गर्दछ । तृप्ति दिन्छ तर धेरै खाए वातविकार गर्दछ ।

(ट) **शालिग्राम निघण्टु :**

**एर्वारुः कर्कटी प्रोक्ता ... । कर्कटयास्तु फलं पक्वं छर्दितृष्णाक्समार्त्तिनुत् ।**

एर्वारुलाई कर्कटी भनिन्छ । एर्वारुको पाकेको फलले वाकवाकी, तिर्खा र परिश्रम बिनाको थकाई नाश गर्दछ ।

**एर्वारुकं तु मधुरं रुच्यं रूक्षं च शीतलम् । तृप्तिकृद्ग्राहकप्रोक्तमत्यन्तवातकारकम् ॥**
**गुरु वातज्वरकफकारकं तापहारकम् । पित्तं मूर्च्छामूत्रकृच्छ्रं नाशयेदितिकीर्त्तितम् ॥**
**कोमलैर्वारुकं तिक्तं लघुस्वाद्वतिमूत्रलम् । शीतं रूक्षं रक्तपित्तमूत्रकृच्छ्रास्रदोषजित् ॥**
**तत्पक्वं पित्तलं चाग्निदीपनं च तृषापहम् । उष्णं त्रिदोषशमनं क्लमदाहहरं मतम् ॥**
**गृहेजीर्णं तु तज्ज्ञेयममुष्णं पित्तकरं मतम् । कफवायोर्नाशकरं प्रोक्तमायुर्विदैर्जनैः ॥**

एर्वारु गुलियो, रुचिप्रद, रुखो, शीतवीर्यको, तृप्तिदायक, ग्राहि र अत्यन्त वातविकार गर्ने गुणको हुन्छ । यो वातजरो निकाल्ने, कफविकार गर्ने र डाह नाश गर्ने खालको हुन्छ । यसले पित्तविकार, बेहोसी र मूत्रकृच्छ्र नाश गर्दछ । कलिलो एर्वारु तितो, पचाउन सहज, गुलियो, अति पिसाब बढाउने, शीतवीर्यको, रुखो तथा रक्तपित्त, मूत्रकृच्छ्र र रक्तविकारलाई जित्ने गुणको हुन्छ । यसको पाकेको फल पित्तविकार गर्ने, पाचनशक्ति बढाउने, तिर्खा नाश गर्ने, उष्णवीर्यको, त्रिदोषलाई शान्त पार्ने तथा परिश्रम बिनाको थकाई र डाह नाश गर्ने गुणको हुन्छ । घरमा राख्दाराख्दै पाकेको उर्वारुले उष्णवीर्यको, पित्तविकार गर्ने तथा कफविकार र वातविकार नाशगर्ने गुणको हुन्छ ।

# सिलटिमुर
# (A kind of Cherry)

**परिभाषा :**

(क) **कुलचन्द्र शर्मा :** एलाबालुक,ऐलेय आदि भनेको सिलटिमुर हो ।
(ख) **के.यन.स्वामी :** (१) एलवालुकम् : सिलटिमुर । (२) एलालु, ऐलेय, हरिवालुक, सुगन्धी : देवीसरो ।
(ग) **नेपाली बृहत् शब्दकोशः** (१) सिलटिमुर : एकजातको टिमुर । (२) देवीसरो : साउने सग्राँतीमा लुतो फ्याँक्ता प्रयोग गरिने एक प्रकारको वनस्पति ।
(घ) **डा. चुनेकर :** यसलाई अंग्रेजीमा Dwarf cherry तथा ल्याटिन भाषामा *Prunus cerasus Linn.* भनिन्छ । यसको रुख हिमाली भागतिर लगाएको पाइन्छ ।
(ङ) **Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 :** सिलटिमुर Angiosperm समूह अन्तर्गतको Lauraceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Lindera neesiana* (Wall. ex Nees) Kurz हो ।
(च) **फर्माकोपिया :** यो Rosaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Prunus avium* Linn.f. हो । यसलाई संस्कृतमा एलबालुक, ऐलेय, एलवालु, एलुकाख्य भनिन्छ । यसका बीजको धुलोको मात्रा ३-६ ग्राम हो । अंग्रेजीमा यसलाई Sweet Cherry भनिन्छ ।

**प्राचीन ग्रन्थका वचनहरू :** 

(क) **अभिधान मञ्जरी :**

**विद्वद्भिरेलवालु प्रोक्तं हरिवालुकं च वालूकम् ।**
**एलावालुकमैलेयं वालुकमित्येव खालुकं सुरभि ॥**
**तदेव स्यात् पूतफलं कुष्ठगन्धि सुगन्धि च । स्कन्धभूषणसञ्ज्ञं च सुवर्णप्रसरं दृढम् ॥**

ऐलवालु, हरिवालुक, वालूक, एलावालुक, ऐलेय, वालुक, खालुक, पूतफल, कुष्ठगन्धि, सुगन्धी, स्कन्धभूषण, सुवर्णप्रसर र दृढ : यी सिलटिमुरका पर्यायवाची नाम हुन् ।

(ख) **अभिधान रत्नमाला :**

**एलवालुकमैलेयं शैलेयं गिरिवालुकम् । उर्वारुकं वालुकञ्च तिक्तमुर्वारुकञ्च तत् ॥**

एलवालुक, ऐलेय, शैलेय र गिरिवालुक, उर्वारुक, वालुक, तिक्तउर्वारुक : यी सिलटिमुरका पर्यायवाची नाम हुन् ।

(ग) **अमरकोश :**

**एलबालुकमैलेयं सुगन्धि हरिबालुकम् । वालुकं चाथ...।**

एलाबालुक, ऐलेय, सुगन्धि, हरिवालुक र वालुक : यी सुगन्धि एला वा सिलटिमुरका पर्यायवाची नाम हुन् ।

(घ) **अष्टाङ्ग निघण्टु :**

**एलवालुकमैलेयं वालेयं हरिवालुकम् ।**

एलवालुक, ऐलेय, वालेय र हरिवालुक : यी सिलटिमुरका पर्यायवाची नाम हुन् ।

(ङ) **कैयदेव निघण्टु :**

**एलावालुकमालूकमैलेयं हरिवालुकम् । एल्वालुकं कपित्थऽश्वगन्धात्वकञ्चवालुकम्॥**
**कुष्ठगन्धिः सुगन्धिः स्यात् सुवर्णप्रसरं दृढम् । एल्वालु कटुकं पाके कषायं शीतलं लघु॥**
**हन्ति कण्डूव्रणच्छर्दितृट्कासारुचिहृद्रुजः । बलासविषपित्तास्रकुष्ठमूत्रविषकृमीन्॥**

एलवालुक, आलूक, ऐलेय, हरिवालुक, एल्वालुक, कपित्थ, अश्वगन्धात्वक, वालुक, कुष्ठगन्धि, सुगन्धि, सुवर्णप्रसर र दृढ : यी सिलटिमुरका पर्यायवाची नाम हुन् । यो पचेपछि पिरो, टर्रो, शीतवीर्यको, पचाउन सहज तथा लुतो, खटिरा, वाकवाकी, तिर्खा, खोकी, अरुची, मुटुका रोग, कफविकार जन्य विषविकार, पित्तविकार, रक्तविकार, कुष्ठ, मूत्रविकार र विषविकार नाश गर्ने गुणको हुन्छ ।

(च) **धन्वन्तरि निघण्टु :**

**एल्वालुकमालूकं वालुकं हरिवालुकम् । एल्वालुकं कपित्थं स्याद्दुर्वर्णं प्रसरं दृढम्॥**
**एलावालुः सुगन्धिः स्याच्छीतोऽत्यन्तं प्रकीर्तितः ।**
**विषविध्वंसनोऽत्युग्रः कण्डूकुष्ठव्रणान्तकृत्॥**

एलवालुक, आलूक, वालुक, हरिवालुक, एल्वालुक, कपित्थ, दुर्वर्ण, प्रसर र दृढ : यी सिलटिमुरका पर्यायवाची नाम हुन् । यो बास्नादार, अत्यन्त शीतवीर्यको, प्रधावकारी ढङ्गले कडा विषविकार नाश गर्ने, तथा लुतो, कुष्ठ र खटिरा नाश गर्ने गुणको हुन्छ ।

(छ) **निघण्टुशेष :**

**एलावालुके त्वैलेयं वालुकं हरिवालुकम् । सुगन्ध्यालुकमेल्वालं दुर्वर्णं प्रसरं दृढम् ॥**

**(एलावद् वलते एलावालुकम् । एलाया इदम् ऐलेयम् । वलते वालुकम् । हरि-पिङ्गं वालुकं हरिवालुकम् । शोभनो गन्धोऽस्येति सुगन्धि । इत्यर्ति आलु, रकारस्य लत्वं च, स्वार्थिके के आलुकम्, पृषोदरादित्वाद् दीर्घे आलूकमपि । एलावद् वलते एल्वालम् । पृषोदरादित्वात् दुष्टो वर्णोऽस्य दुर्वर्णम् । प्रसरति-वर्धते प्रसरम् । दृढं स्थिरम् ।एतस्य लोके "एलीय" इति प्रसिद्धि ।) ।**

एलावालुक, ऐलेय, वालुक, हरिवालुक, सुगन्धि, आलुक, एल्वाल, दुर्वर्ण, प्रसर र दृढ : यी सिलटिमुरका पयर्नयवाची नाम हुन् ।

**(ज) पर्याय रत्नमाला :**

**हरिवालुकमैलेयमेलवाल्वेलवालुकम् ।**

हरिवालुक, ऐलेय, ऐलवालु र एलवालुक : यी सिलटिमुरका पर्यायवाची नाम हुन् ।

**(झ) भावप्रकाश निघण्टु :**



**एलवालुकमैलेयं सुगन्धि हरिवालुकम्॥**
**ऐलवालुकमेलालु कपित्थत्वचमीरितम् । एलालु कटुकं पाके कषायं शीतलं लघु॥**
**हन्तिकण्डूव्रणच्छर्दितृट्कासारुचिहृद्रुजः । बलासविषपित्तास्रकुष्ठमूत्रगदकृमीन्॥**

एलवालुक, ऐलेय, सुगन्धि, हरिवालुक, ऐलवालुक, एलालु र कपित्थत्वग् : यी सिलटिमुरका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यो पिरो स्वादको हुन्छ र पचेपछि टर्रो हुन्छ । यसले शीतल गर्दछ र पचाउन हलुका हुन्छ । साथै लुतो, घाउखटिरा, वाकवाकी, तिर्खा, खोकी, अरुची, मुटुका रोग, कफविकार, विषविकार, रक्तपित्त, कुष्ठ, मूत्ररोग र कीरा समेत नाश गर्दछ ।

**(ञ) मदनपाल निघण्टु :**

**एलावालुकमेल्वालु वालुकं हरिवालुकम् । एल्वालु शीतलं हन्ति कण्डूकुष्ठकफक्रिमीन्॥**
**तृट्छर्दिकफपित्तास्रहन्मूत्रगदजिल्लघु॥**

एलावालुक, एल्वालु, वालुक र हरिवालुक : यी सिलटिमुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ तथा लुतो, कुष्ठ, कफविकार र कीरा नाश गर्दछ । यसले तिर्खारोग, वाकवाकी, कफविकार, पित्तविकार, रक्तविकार, मुटुका रोग र पिसाबका रोगमाथि विजय प्राप्त गर्दछ । यो पचाउन हलुका हुन्छ ।

(ट) मदनादि निघण्टु :

एलवालुकमैलेयं सुगन्धि हरिवालुकम् । कुष्ठगन्धी सुगन्धी च गन्धत्वक्चवालुकम्॥
वर्धमारोचकहृद्रोगकृमिकासस्तृषापहः । पित्तघ्नं शोधनं मूत्रदोषघ्नं चैलवालुकम्॥

एलवालुक, ऐलेय, सुगन्धि, हरिवालुक, कुष्ठगन्धी, सुगन्धी, गन्धत्वक् र वालुक : यी सिलटिमुरका पर्यायवाची नाम हुन् । यसले बढ्दो अरुची, मुटुका रोग, कीरा, खोकी, तिर्खा, पित्तविकार र प्रशोधन गर्ने वा पिसाबका विकार नाश गर्ने तथा त्रिदोष नाश गर्न गुण बोकेको हुन्छ ।

(ठ) राज निघण्टु :

एलवालुकमालूकं वालुकं हरिवालुकम् । एल्वालुकं कपित्थञ्च दुर्वर्णं प्रसरं दृढम्॥
एलागन्धिकमेलाह्वं गुप्तगन्धि सुगन्धिकम् । एलाफलञ्च विज्ञेयं द्विःसप्ताह्वयमुच्यते॥
एलवालुकमत्युग्रं कषायं कफवातनुत् । मूर्छार्त्तिज्वरदाहाँश्च नाशयेद्रोचनं परम्॥

(१) एलवालुक, (२) आलूक, (३) वालुक, (४) हरिवालुक, (५) एल्वालुक, (६) कपित्थ, (७) दुर्वण, (८) प्रसर, (९) दृढम्, (१०) एलागन्धिक, (११) ऐलाह्व, (१२) गुप्तगन्धि, (१३) सुगन्धिक र (१४) एलाफल : यी चौध वटा नाम सिलटिमुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति नै कडा खालको (तिक्खर) र टर्रो हुन्छ । यसले कफविकार, वातविकार, बेहोस हुने रोग, पीडा र डाहा नाश गर्दछ । यो अति नै रोचनी हुन्छ ।



(ड) शालिग्राम निघण्टु :

एलावालुकमैलेयं सुगन्धि हरिवालुकम् ।

एलावालुक, ऐलेय, सुगन्धि र हरिवालुक : यी सिलटिमुरका पर्यायवाची नाम हुन् ।

एलेयं तुवरं रुच्यमत्युग्रं शीतलं लघु । पाके कटु सुगन्धिस्यात्तिक्तं शुद्धिकरं मतम्॥
कफमूर्च्छावातदाहज्वरकण्डूविषव्रणान् । छर्दितृट्कासहृद्रोगपित्तरक्तरुजस्तथा॥
वर्ध्मरुक्कृमिकुष्ठानिह्यरुचिं च विनाशयेत् । (निघण्टु रत्नाकर)

सिलटिमुर टर्रो, रुचिप्रद, अति तिक्खर, शीतवीर्यको, पचाउन सहज, पचेपछि पिरो, सुगन्धि, तितो, प्रशोधक तथा कफविकार, बेहोसी, वातविकार, डाह, जरो, लुतो, विषविकार , घाउखटिरा, वाकवाकी, तिर्खा, खोकी, मुटुका रोग, पित्तविकार, रक्तविकार, वर्ध्मरोग, कीरा, कुष्ठ र अरुचीलाई नाश गर्ने गुणको हुन्छ ।

(ढ) सोढल निघण्टु :

एलावालुक आलूकं वालुकं हरिवालुकम् । एल्वालुकं कपित्थत्वक् दुर्वर्णं प्रसरं दृढम्॥

एलवालुक, आलूक, वालुक, हरिवालुक, एल्वालुक, कपित्थत्वक्, दुर्वर्ण, प्रसर र दृढ : यी सिलटिमुरका पर्यायवाची नाम हुन् ।

(ण) **हृदयदीपक निघण्टु :**

**एलवालुकमैलेय... ।**

एलवालुकलाई ऐलेय पनि भनिन्छ ।




सिलटिमुर (तस्बिर श्रोत : प्रेअर डी अमरकोश)



सिलटिमुर (तस्बिर श्रोत : कारोबारडेलीडटकम)



सिलटिमुर (तस्बिर श्रोत : कृषिगुरुको फेसबुक पेज)

# एलादि गण
# (Yelaadi-Gana)

## (क) सुश्रुत संहिता :

**एलातगरकुष्ठमांसीध्यामकत्वक्पत्रनागपुष्पप्रियङ्गुहरेणुकाव्याघ्रनखशुक्तिचण्डास्थौणेयकश्रीवेष्ट-कचोचचोरकवालुकगुग्गुलुसर्जरसतुरुष्ककुन्दुरुकागुरुस्पृक्कोशीरभद्रदारुकुङ्कुमानि पुन्नागकेशरं चेति॥**
**एलादिको वातकफौ विहन्याद्विषमेव च । वर्णप्रसादनः कण्डूपिडकाकोष्ठनाशनः॥**

सुकुमेल, तगर, कुट, जटामसी, ध्यामक (नेपाले उशीर), दालचिनी, तेजपात, नागकेसर, प्रियङ्गु (दहीयुयैँलो), हरेणुका (रेणुका नामक गन्धद्रव्यविशेष), व्याघ्रनख (ठूलो नखी), शुक्ति (सिपी, सानो नखी), चण्डा (शिवलिङ्गी), स्थौणेयक (भेडेकुरो), श्रीवेष्टक (सल्लाको खोटो, तारपिन), चोच (दालचिनीविशेष), चारक (चिरौँजी), वालुक (खस), गुग्गुलु (गोकुलधूप), सर्जरस (सालधूप), तुरुष्क (शिलारस), कुन्दुरक (काँढेसल्लाको खोटो), अगर, स्पृक्का (कपुरपाती), उशीर, देवदार, केशर र पुन्नागको केशर : यी एलादि गणका ओखती हुन् । यो गणको ओखतीले वातविकार, कफविकार र विषविकार नाश गर्दछ । वर्णलाई निखार्दछ । लुतो, खटिरा र कोष्ठ नाश गर्दछ ।

# एला (अलैंचा)
# (Black cardamom)

**परिभाषा :**

(क) कुलचन्द्र शर्मा : पृथ्वीका, एला आदि भनेको अलैंची हो ।

(ख) नेपाली बृहत् शब्दकोश (अलैंची) : बेसार, पानीसरो आदिका झैं लामालामा ठूला पात हुने, फेदमा पहेँला फूल फुली सुकेमेलको जस्तो , तर भटमासे रङ्को केही ठूलो कोसोभित्र मसिना गेडा लाग्ने, पानी भएको वा रसिलो ठाउँमा हुने एक खालको बोट । त्यसैको फल; एला ।

(ग) डा.चुनेकर : यसलाई अंग्रेजीमा Nepal or Greater Cardamom वा Amomum तथा ल्याटिन भाषामा *Amomum subulatum* Roxb. भनिन्छ ।

(घ) विश्वनाथ द्विवेदी शास्त्री : यसलाई अंग्रेजीमा Large cardamom भनिन्छ ।

(ङ) आचार्य बालकृष्ण : यसलाई अंग्रेजीमा Indian cardamom, Black cardamom वा Bengal cardamom पनि भनिन्छ । यसको वानस्पतिक नाम *Cardamomum subulatum* (Roxb.) पनि हो ।

(च) स्वामी सदाशिव तिर्थ : यसलाई अंग्रेजीमा Cardamom तथा ल्याटिन भाषामा *Elatarria cardamomum Maton* (E.repens) भनिन्छ ।

(छ) डा.साङ्ग्वधर : अलैंचीलाई ल्याटिन भाषामा *Amomum subulatum* Roxb. वा *Amomum aromaticum* Roxb. भनिन्छ ।

(ज) फर्माकोपिया : यो Zingiberaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Amomum subulatum* Roxb. हो । यसको धुलो ०.५-१ ग्रामसम्म ओखतीमा प्रयोग हुन्छ ।



(झ) Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 : यो Angiosperm समूह अन्तर्गतको Zingiberaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Amomum subulatum* Roxb. हो ।

**प्राचीन ग्रन्थका वचनहरू :**

**(क) अभिधान मञ्जरी :**

**बृहदेलाऽन्या त्रुटिका पत्रैला कन्यका पुटा त्रिपुटा ।**
**पृथ्वीका त्रिदिवोत्था स्थूलैला ध्वाङ्क्षगन्धा स्यात्॥**

बृहदेला, त्रुटिका, पत्रैला, कन्यका, पुटा, त्रिपुटा, पृथ्वीका, त्रिदिवोत्था, स्थूलैला र ध्वाङ्क्षगन्धा : यी अलैंचीका नाम हुन् ।

**(ख) अभिधान रत्नमाला :**

**... भद्रेला तु महातुका॥**

ठूलो एला वा अलैंचीलाई भद्रेला वा महातुका भनिन्छ ।

(ग) **अमरकोश :**

**पृथ्वीका चन्द्रवालैला निष्कुटिर्बहुलाऽथ सा ।**

पृथ्वीका, चन्द्रबाला, एला, निष्कुटि र बहुला : यी अलैंचीका नाम हुन् ।

(घ) **अर्कप्रकाश :**

**एलार्कः कटुकः पाके रसे तिक्तोऽग्निकृल्लघुः ।**

अलैंचीको अर्क पचेपछि पिरो हुन्छ, रसमा तितो हुन्छ, पाचक-अग्नि बढाउँदछ र पचाउन हलुका हुन्छ ।

(ङ) **अष्टाङ्ग निघण्टु :**

**भद्रेला बृहदेला तु स्थूलैला त्रिपुटोद्भवा॥**



भद्रेला, बृहदेला, स्थूलैला र त्रिपुटोद्भवा : यी अलैंचीका नाम हुन् ।

(च) **आयुर्वेद महोदधि :**

**एलाद्वयं छर्दिषु मूत्रकृच्छ्रे मन्देऽनले पथ्यमरोचके च ।**

अलैंची र सुकुमेल वाकवाकी, मूत्रकृच्छ्र, कमजोर पाचन शक्ति र खान मन नलाग्दा पथ्य हुन्छ ।

(छ) **कैयदेव निघण्टु :**

**भद्रैला बृहदेला स्यात् पत्रैला त्वक्सुगन्धिका॥**
**त्रिपुटा त्रिदिवोद्भूता स्थूलैला कन्यका पुटा । भद्रैला कटुका पाके रसे पित्ताग्निकृल्लघुः॥**
**रूक्षोष्णा रोचनी कासकफवातास्रश्वासहा । हन्ति हृल्लासतृट्कण्डूशिरोवस्त्यास्यरुग्वमीः॥**

भद्रैला, बृहदेला, पत्रैला, त्वक्सुगन्धिका, त्रिपुटा, त्रिदिवोद्भूता, स्थूलैला, कन्यका र पुटा : यी अलैंचीका नाम हुन् । अलैंची पचेपछि पिरो हुन्छ । यसले पित्तविकार र पाचनशक्ति बढाउँदछ । यो पचाउन सहज हुन्छ । यो रुखो र उष्णवीर्यको हुन्छ । अलैंची रोचनी हुन्छ । यसले खोकी, कफविकार, वातविकार, रक्तविकार, दम, बाडुली वा छातीको पिडा, तिर्खा, लुतो, टाउकाका रोग, तल्लोपेटका रोग र मुखका रोग नाश गर्दछ ।

(ज) **गरुड पुराण :**

**एला च बहुला प्रोक्ता ...॥**

एला र बहुला : यी अलैंचीका नाम हुन् ।

(झ) **धन्वन्तरि निघण्टु :**

**भद्रैला बृहदेला तु त्रिपुटा त्रिपुटोद्भवा । स्थूलैला त्वक्सुगन्धा च पृथ्वीका कन्यका पुटा ॥**
**एला तिक्ता च लघ्वी स्यात्कफवातविषव्रणान् । बस्तिकण्ठरुजो हन्ति मुखमस्तकशोधिनी ॥**

भद्रैला, बृहदेला, त्रिपुटा, त्रिपुटोद्भवा, स्थूलैला, त्वक्सुगन्धा, पृथ्वीका, कन्यका र पुटा : यी अलैंचीका नाम हुन् । अलैंची तीतो, पचाउन सहज, तल्लोपेट र घाँटीका रोग नाशगर्ने, कफविकार, वातविकार, विषविकार र घाउखटिरा नाशगर्ने तथा मुख र टाउको प्रशोधन गर्ने गुणको हुन्छ ।

(ञ) **निघण्टुशेष :**

**स्थूलैलायां बृहदेला पत्रैला त्वक्सुगन्धिका ॥ त्रिदिवोद्भवा पृथ्वीका कर्णिका त्रिपुटा पुटा ।**



स्थूलैला, बृहदेला, पत्रैला, त्वक्सुगन्धिका, त्रिदिवोद्भवा, पृथ्वीका, कर्णिका, त्रिपुटा र पुटा : यी अलैंचीका संस्कृत पर्यायवाची नामहरू हुन् । स्थूला चासौ एला च स्थूलैला तस्याम् । (सानो एलाको तुलनामा) मोटो हुने हुनाले यसलाई स्थूलैला भनिएको हो । बृहती चासौ एला च बृहदेला । (सानो एलाको तुलनामा) ठूलो हुने हुनाले यसलाई बृहदेला भनिएको हो । पत्रोपलक्षिता एला पत्रैला । पातबाट चिनिने हुनाले पत्रैला भनिन्छ । त्वचा सुगन्धिका त्वक्सुगन्धिका । बाहिरी बोक्रो सुगन्धी हुने हुनाले सुगन्धिका भनिन्छ । त्रिदिवे-स्वर्गे उद्भवः-उत्पत्तिर्यस्या सा त्रिदिवोद्भवा । त्रिदिव अर्थात् स्वर्गमा उद्भव अर्थात् उत्पत्ति भएको हुनाले यसलाई त्रिदिवोद्भव भनिन्छ । पृथ्वी प्रतिकृति पृथ्वीका । पृथ्वीको प्रतिरूप हुनाले यसलाई पृथ्वीका भनिन्छ । बहुपर्णत्वात् इति कर्णिका । कर्णयति कर्णिका, णके आप् । धेरै पात हुने हुनाले यसलाई कर्णिका भनिन्छ । त्रीणि पुटान्यस्या त्रिपुटा त्र्यसि । फलको भित्र तीनवटा खण्ड हुने हुनाले यसलाई त्रिपुटा भनिन्छ । पुटानि सन्ति अस्याः पुटा, अभ्रादित्वादः । फलको भित्र खण्डहरू हुने हुनाले यसलाई पुटा भनिन्छ । (पहिले पहिले) लोकमा यसलाई कङ्कोली एला (शीतलचिनी जस्तो एला) भनिन्थ्यो ।

(ट) **पर्यायरत्नमाला :**

**एला च बहुला स्थूला मालेया ताडकाफलम् ॥**

एला, बहुला, स्थूला, मालेया र ताडकाफल : यी अलैंचीका नाम हुन् ।

(ठ) **भावप्रकाश निघण्टु :**

**एला स्थूला च बहुला पृथ्वीका त्रिपुटाऽपि च । भद्रैला बृहदेला च चन्द्रबाला च निष्कुटिः ॥**
**स्थूलैला कटुका पाके रसे चानलकृल्लघुः । रूक्षोष्णा श्लेष्मपित्तास्रकण्डूश्वासतृषाऽपहा ॥**
**हृल्लासविषबस्त्यास्यशिरोरुग्वमिकासनुत् ।**

एला, स्थूला, बहुला, पृथ्वीका, त्रिपुटा, भद्रैला, बृहदेला, चन्द्रबाला, निष्कुटि र स्थूलैला : यी अलैंचीका नाम हुन् । अलैंची खाँदा र पचेपछिको रस पनि पिरो हुन्छ । यसले पाचकाग्नि बाल्दछ र पचाउन हलुका हुन्छ । रुखो हुन्छ र गर्मी गर्दछ । यसले कफविकार, पित्तविकार, रक्तविकार, लुतो, दम र तिर्खा नाश गर्दछ । साथै, यसले बेचैनी, विषविकार, तल्लोपेटका रोग, मुखका रोग, टाउकाका रोग, वाकवाकी र खोकी पनि ठिक गर्दछ ।

(ड) **मदनपाल निघण्टु :**

**स्थूलैला त्रिपुटा कन्या भद्रैला त्रिदिवोद्भवा । स्थूलैला रोचनी तीक्ष्णा लघूष्णा कफपित्तजित् ॥**
**हृल्लासविषबस्त्यास्यशिरोरुग्वमिकासनुत् ॥**

स्थूलैला, त्रिपुटा, कन्या, भद्रा, एला, र त्रिदिवोद्भवा : यी अलैंचीका नाम हुन् । अलैंची रोचनी, तिक्खर, पचाउन सहज, गर्मी गर्ने तथा कफविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले हृल्लास, विषविकार, तल्लो पेटका रोग, मुखका रोग, टाउकाका रोग, वाकवाकी र खोकीलाई ठिक गर्दछ ।

(ढ) **मदनादि निघण्टु :**

**पत्रैला बृहदेला च स्थूलैला तु सुगन्धिका । त्रिदिवा त्रिदिवोद्भूता पृथ्वीका कन्यका पुटा ॥**
**दीपनी पाचनी रूक्षा कफघ्नी पित्तकोपिनी । आस्यवैरस्यशमनी एला गर्भविनाशिनी ॥**

पत्रैला, बृहदेला, स्थूलैला, सुगन्धिका, त्रिदिवा, त्रिदिवोद्भूता, पृथ्वीका, कन्यका र पुटा : यी अलैंचीका नाम हुन् । यो दीपनी, पाचनी, रुखो, कफविकार नाशक, पित्तविकार गर्ने, मुखको दुर्गन्ध वा स्वादहीनता शान्त पार्ने र गर्भ नाशगर्ने गुणको हुन्छ ।

(ण) **माधव द्रव्यगुण :**

**एला तृट्छर्दिहृल्लासकण्डूपित्तकफापहा ।**

अलैंचीले तिर्खा, वाकवाकी, छातीको पीडा वा बाडुली, लुतो, पित्तविकार र कफविकार नाश गर्दछ ।

**(त) राज निघण्टु :**

**स्थूलैला बृहदेला त्रिपुटा त्रिदिवोद्भवा च भद्रैला ।**
**सुरभित्वक् महैला पृथ्वी कन्या कुमारिका चैन्द्री ॥**
**कायस्था गोपुटा कान्ता घृताची गर्भसम्भवा । इन्द्राणी दिव्यगन्धा च विज्ञेयाऽष्टादशाह्वया ॥**

(१) स्थूलैला, (२) बृहदेला, (३) त्रिपुटा, (४) त्रिदिवोद्भवा, (५) भद्रैला, (६) सुरभित्वक्, (७) महैला, (८) पृथ्वी, (९) कन्या, (१०) कुमारिका, (११) ऐन्द्री, (१२) कायस्था, (१३) गोपुटा, (१४) कान्ता, (१५) घृताची, (१६) गर्भसम्भवा, (१७) इन्द्राणी र (१८) दिव्यगन्धा : यी अठार नाम अलैंचीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**एलाद्वयं शीतलतिक्तमुक्तं सुगन्धि पित्तार्तिकफापहारि ।**
**करोति हृद्रोगमलार्तिबस्तिशूलघ्नमत्र स्थविरा गुणाढ्या ॥**

दुवै थरी एला (अलैंची र सुकुमेल) शीतवीर्यका, तीता, सुगन्धी तथा पित्तविकार र कफविकार नाशक हुन्छन् भनिएको छ । यसले मुटुका रोग, दिसासम्बन्धी रोग, पेटका रोग र शूलरोगलाई नाश गर्दछ । यी दुईमा सुकुमेलभन्दा अलैंची बढी गुनिलो हुन्छ ।

**(थ) राजवल्लभ निघण्टु :**



**एला मूत्रविबन्धघ्नी तृट्छर्दिकफवातजित् ॥**

अलैंचीले बन्द भएको पिसाब खुलाउँदछ तथा तिर्खा, वाकवाकी, कफविकार र वातविकारलाई जित्दछ ।

**(द) शालिग्राम निघण्टु :**

**एलास्थूलैलाबहुलामालेयाताडकीफलम् ।**

एला, स्थूलैला, बहुला, मालेया र ताडकीफल : यी अलैंचीका नाम हुन् ।

**स्थूलैला रक्तपित्तघ्नी वमिशुक्राश्मजिद्धिमा ।**
**तृष्णाहृल्लासकण्डूघ्नी पित्तश्लेष्मामयापहा ॥ (गणनिघण्टु)**

ठूलो अलैंची रक्तपित्त नाशक तथा वाकवाकी, शुक्र र पत्थरीलाई जित्ने गुणको हुन्छ । यो शीतवीर्यको हुन्छ । यसले तीर्खा, बाडुली वा छातीको थकावट, लुतो, पित्तविकार र कफविकार नाश गर्दछ ।

**स्थूलैला रोचनी तीक्ष्णा लघूष्णा कफवातजित् ।**
**सुगन्धिः पाचिका शीता चाग्निदीप्तिकरी मता ॥**

अलैंची रुचिप्रद, तिक्खर, पचाउन सहज, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यो सुगन्धी, पाचक, शीतल गर्ने (?) र पाचनशक्ति बढाउने गुणको हुन्छ ।

**स्थूलैला कटुका रूक्षा कोष्ठबन्धतृट्शूलनूत् । (क्वचित्)**

अलैंची पिरो, रुखो तथा कब्जियत, तिर्खा र शूल नाशक हुन्छ ।

**(ध) सरस्वती निघण्टु :**

**पृथ्वीका चन्द्रबालैला निष्कुटिर्बहुलाऽर्जनी । जयार्जनी अयाख्या च सुगन्धी वृषभी तथा ॥**

पृथ्वीका, चन्द्रबाला, ऐला, निष्कुटी, बहुला, अर्जनी, जयार्जनी, अयाख्या, सुगन्धी र वृषभी : यी अलैंचीका संस्कृत पर्यावाची नामहरू हुन् ।

**(न) सोढल निघण्टु :**

**बृहदेलायां भद्रैला त्रिदिवा त्रिदिवोद्भवा ॥**
**स्थूलैला त्वक्सुगन्धा च पृथ्वीका धान्यका पुटा । कुमारी स्वर्गसम्भूता महैला तालकाफला ॥**



बृहदेला, भद्रैला, त्रिदिवा, त्रिदिवोद्भवा, स्थूलैला, त्वक्सुगन्धा, पृथ्वीका, धान्यका, पुटा, कुमारी, स्वर्गसम्भूता, महैला र तालकाफला : यी अलैंचीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**(प) सौश्रुत निघण्टु :**

**हरेणुका हिमाह्वा च महैला शिशिरात्मजा । वृत्तैला कपिलैला च कुड्मली कौन्तिरेव च ॥**

हरेणुका, हिमाह्वा, महैला शिशिरात्मजा, वृत्तैला, कपिलैला, कुड्मली र कौन्ति : यी अलैंचीका नाम हुन् ।

**(फ) हृदयदीपक निघण्टु :**

**...अन्या तु बृहदेला ॥**

अर्को थरी एला (अलैंची) लाई बृहदेला भनिन्छ ।



अलैंचीको बोट (तस्बिर श्रोत : प्रेअर डी अमरकोश)



अलैंचीको बोट (तस्बिर श्रोत : प्रेअर डी अमरकोश)





Nepali Cardamom, Amomum subulatum Roxb., rajdhanidaily.com

# एलानाम (लीचो)
# (Litchi)

**परिभाषा :**

(क) **मदनपाल निघण्टु** : एलानाम भनेको लिची हो । (एलाको अर्थ अलैंची वा सुकुमेल हुन्छ तर यहाँ एलानामको लीची भनी अर्थ लगाएको पाइन्छ । यो निघण्टुमा अलैंचीका बारेमा पहिले नै बताइ सकिएको छ) ।

(ख) **नेपाली बृहत् शब्दकोश** : लिची : लाम्चा पात र खस्रो बोक्रो हुने, मसिनामसिना फूल फुल्ने र रसदार गुलियो काँडादार फल हुने एक जातको रूख वा त्यसैको फल; लिच्ची ।

(ग) **आचार्य बालकृष्ण** : लिचीलाई संस्कृतमा लीची, अंग्रेजीमा Litchee वा Litchi तथा ल्याटिन भाषामा *Litchi chinensis* (Gaertn.) Sonner. वा *Nephelium litchi* Cambess भनिन्छ ।

(घ) **Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022 :** लिची Angiosperm समूह अन्तर्गत Sapindaceae परिवारमा पर्दछ । यसको वानस्पतिक नाम *Litchi chinensis* Sonn. हो ।

**प्राचीन ग्रन्थका वचनहरू :**

(क) **कैयदेव निघण्टु :** 

**एलानमम्लं वातघ्नमुष्णवीर्यं सरं गुरु । कफपित्तास्रकृत् पक्वं मधुरं नास्रपित्तलम् ॥**

एलान (लिची ?) अमिलो, वातविकार नाशगर्ने, उष्णवीर्यको, मलमूत्रलाई तलतिर सार्ने, पचाउन कठिन तथा कफविकार र रक्तपित्त गराउने गुणको हुन्छ । पाकेको एलान गुलियो हुन्छ र यसले रक्तपित्त पनि गर्दैन ।

(ख) **मदनपाल निघण्टु :**

**एलानामामवातघ्नमलोष्णं गुरु रेचनम् । पक्वं स्वादु हिमं बल्यं वातपित्तविनाशनम् ॥**

लिचीले आमविकार र वातविकारलाई वा आमवातलाई नाश गर्दछ । यो उष्णवीर्यको, पचाउन कठिन र रेचनी हुन्छ । पाकेको लिची स्वादिलो र शीतवीर्यको हुन्छ । यसले बल दिन्छ तथा वातविकार र पित्तविकार नाश गर्दछ । (एलाको अर्थ अलैंची वा सुकुमेल हुन्छ तर यहाँ एलानाम को लीची भनी अर्थ लगाएको पाइन्छ । यो निघण्टुमा अलैंचीका बारेमा पहिले नै बताइ सकिएको छ) ।

# ओज
# (Vigour)

**परिभाषा :**

**(क) नेपाली बृहत् शब्दकोश (ओज) :**

व्यक्तिको व्यक्तित्व बढाउने शक्ति; बल; प्रताप; तेज; स्फूर्ति । प्रकाश । प्राणीलाई स्वस्थ राख्ने शारीकि गुण । काव्यको एक गुण ।

**प्राचीन ग्रन्थका वचनहरू :**

**(क) अष्टाङ्ग निघण्टु :**

**ओजस्तु धातुसारः स्यात् सौम्यो हृदयदीपनः॥**

ओज, धातुसार, सौम्य र हृदयदीपन : यी ओजका नाम हुन् । (अथवा ओज धातुको सार हो । यो कोमल र मुटुलाई चलाउने गुणको हुन्छ ।) ।

**(ख) अष्टाङ्ग हृदय :**



**ओजस्तु तेजो धातूनां शुक्रान्तानां परं स्मृतम् । हृदयस्थमपि व्यापि देहस्थितिनिबन्धनम्॥**

रसदेखि शुक्रसम्मका सबै धातुको तेजलाई "ओज" भनिन्छ । यो मुटुमा रहेर पनि सारा शरीरमा फिँजिएको हुन्छ । यो नै शरीरको आधार हो ।

**स्निग्धं सोमात्मकं शुद्धमीषल्लोहितपीतकम् । यन्नाशे नियतं नाशो यस्मिंस्तिष्ठति तिष्ठति॥**
**निष्पद्यन्ते यतो भावा विविधा देहसंश्रयाः ।**

ओज चिल्लो, चिसो वा अमृतमय, शुद्ध र रातो-पहेंलो वर्णको हुन्छ । यो नष्ट हुँदा मानिस नष्ट हुन्छ र यो रहेसम्म मानिस बाँच्दछ । यही ओजले गर्दा नै मानिसमा चमक, पराक्रम आदि जस्ता भाव देखिने गर्दछ ।

**ओजः क्षीयेत कोपक्षुद्ध्यानशोकश्रमादिभिः॥**

धेरै रिसाउने गरे, भोकले, चिन्ताले, शोकले र परिश्रम आदि कष्टले शरीरको ओज घट्ने गर्दछ ।

**बिभेति दुर्बलोऽभीक्ष्णं ध्यायति व्यथितेन्द्रियः । दुःच्छायो दुर्मना रूक्षो भवेत्क्षामश्च तत्क्षये॥**

ओज घटेपछि मानिस अरुसँग डराउने गर्दछ, दुर्बल हुन्छ, पटकपटक नचाहिँदो चिन्ता गर्न थाल्दछ, इन्द्रिय दुखित हुन्छन्, शरीरको चमक हराउँदछ, मन दुःखी हुन्छ तथा शरीर रुखो र दुब्लो हुन्छ ।

**जीवनीयौषधक्षीररसाद्यास्तत्र भेषजम् ।**

ओज घटेका बेलामा बलवर्धक ओखती, दूध, मासु आदिको रस आदि जस्ता पौष्टिक कुरा निरन्तर खानेपिउने गर्नुपर्दछ । यही नै यसको उत्तम उपचार विधि हो ।

**ओजोवृद्धौ हि देहस्य तुष्टिपुष्टिबलोदयः॥**

ओजमा वृद्धि हुनाले गर्दा नै शरीरमा सन्तुष्टि, पुष्टि र बलको उदय हुन्छ ।

**(ग) काश्यप संहिता :**

**हृदि श्लेष्मानुपश्लिष्टमाश्यावं रक्तपीतकम् । तदोजो, वर्धते जन्तुस्तद्वृद्धौ, क्षीयते क्षये॥**

हृदयमा रहेको कफ नभएको केही रातोपन र केही पहेँलोपन भएको सेतो पदार्थलाई "ओज" भनिन्छ । यो बढ्दा प्राणी बढ्दछ (वा मोटाउँदछ) र यो घट्दा प्राणी घट्दछ (वा दुब्लाउँदछ) ।

**मधुरस्निग्धशीतानि लघूनि च हितानि च । ओजसो वर्धनान्याहुस्तस्माद्बालांस्तथाऽऽशयेत्॥**

मिठा, चिल्ला, ठण्डी गर्ने, पचाउन सहज र शरीरलाई फाइदा गर्ने पदार्थले ओज बढ्दछ । त्यसैले बालकलाई यी कुरा खुवाउनु पर्दछ ।

**श्लेष्मणस्तु प्रमाणेन प्रमाणं तुल्यमोजसः ।**

कफ जति नै अर्थात् छ अँजुली ओज हुन्छ ।



**(घ) चरक संहिता :**

**बिभेति दुर्बलोऽभीक्ष्णं ध्यायति व्यथितेन्द्रियः । दुश्छायो दुर्मना रूक्षः क्षामश्चैवौजसः क्षये॥**

ओज क्षीण भएपछि मानिस डराउन थाल्दछ, निर्बल हुन्छ, पटकपटक सोच्न थाल्दछ, चिन्ता गर्न थाल्दछ, इन्द्रियलाई ठिक ठिक ज्ञान हुँदैन, पीडित हुन्छ, शरीरको तेज बिग्रन्छ, मन अस्थिर हुन्छ, शरीर रुखो र कमजोर हुन्छ ।

**हृदि तिष्ठति यच्छुद्धं रक्तमीषत्सपीतकम् । ओजः शरीरे सङ्ख्यातं तन्नाशान्ना विनश्यति॥**
**(प्रथमं जायते ह्योजः शरीरेऽस्मिञ्छरीरिणाम् । सर्पिर्वर्णं मधुरसं लाजगन्धि प्रजायते॥**
**भ्रमरैः फलपुष्पेभ्यो यथा संह्रियते मधु । तद्वदोजः स्वकर्मभ्यो गुणैः संह्रियते नृणाम्॥)**

मुटुभित्र जुन निर्मल, केही रातो र अलिअलि पहेँलो धातुको साररूपी रस रहने गर्दछ त्यसलाई ओज भनिन्छ । यो नष्ट हुँदा मानिस पनि नष्ट हुन्छ । जसरी भमराले फल र फूलबाट मह जम्मा गर्दछ त्यसैगरी मानिसका शारीरिक गुणबाट ओज सङ्कलित हुने गर्दछ । यो ओज घिउजस्तो रङ्को, गुलियो र धानको लाजा जस्तै गन्ध आउने हुन्छ ।

**व्यायामोऽनशनं चिन्ता रूक्षाल्पप्रमिताशनम् । वातातपौ भयं शोको रूक्षपानं प्रजागरः॥**
**कफशोणितशुक्राणां मलानां चातिवर्तनम् । कालो भूतोपघातश्च ज्ञातव्याः क्षयहेतवः॥**

अत्यधिक व्यायाम, उपवास, चिन्ता, रुखो खाना, थोरै र एउटै रसको खानपिन, हावा खाने काम, घाम ताप्ने काम, डर, शोक, रुखो पेय, रातको जागराम; कफ, रगत, वीर्य र मलको अधिक त्याग, बुढ्यौली तथा भूतबाधा वा कीरा आदिको आक्रमणले गर्दा ओज क्षय हुन्छ ।

(ङ) **भावप्रकाश संहिता :**

**ततः सारभूतस्य रसस्य द्वौ भागौ भवतः । स्थूलः सूक्ष्मश्च । तत्र सूक्ष्मः स्नेहभाग ओजः । ओजः सर्वशरीरस्थं स्निग्धं शीतं स्थिरं सितम् । सोमात्मकं शरीरस्य बलपुष्टिकरं मतम्॥ बलम् चेष्टापाटवम् ।**

शरीरमा खाएपिएको कुराबाट बन्ने सारभूत रसका दुई भाग हुन्छन् । एउटा भाग स्थूल र अर्को भाग सूक्ष्म हुन्छ । यीमध्ये सूक्ष्म एवं चिल्लो भागलाई ओज भनिन्छ । ओज शरीरका सम्पूर्ण भागमा रहन्छ । यो चिल्लो, चिसो, स्थिर, सेतो र सोमात्मक हुन्छ । यसले शरीरलाई बल र पुष्टि दिन्छ । शरीरका इन्द्रियमा केही गर्ने जुन् बल हुन्छ त्यसैलाई चेष्टा पनि भनिन्छ ।

**तथा च-**
**चेष्टासु पाटवं यत्तु बलं तदभिधीयते॥**

पुनः भनिएको छ कि चेष्टामा हुने फुर्ति वा सामर्थता वा चतुरता भनेको नै बल हो ।

**यत्तु सुश्रुते-**
**रसादीनां शुक्रान्तानां धातूनां यत्परं तेजस्तत् खलु ओीतदेव बलमिति । तेजस्तेजोद्भवः (?) ।**
**अत्रायअभिप्रायः-**
**यस्मात् रसादोजो भवति स रसः सर्वधातुस्थानगतत्वात् तत्तद्धातुवत् मन्यत इति सर्वधातूनां स्नेहमोजः क्षीरे घृतमिव तदेव बलमिति तत्कार्यकारणयोरभेदोपचारात् । अभेदकश्च चिकित्सैक्यार्थम् ।**

सुश्रुत संहितामा मा भनिएको छ-रसका प्रारम्भिक चरणदेखि वर्स्य नबन्दासम्म धातुहरूमा जुन परम तेज हुन्छ त्यही धातुहरूबाट उत्पन्न भएको ओज हो र यसैलाई बल पनि भनिन्छ । यसको अभिप्राय यो हो -रसहरूमा जुन ओज हुने गर्दछ त्यो रुस सबै धातुका स्थानमा जान्छ । त्यसैले यसलाई धातुसमान मानिने गरिन्छ । यसरी सबै धातुमो चिल्लनेपन नै ओज हो । जसरी दूधमा घिउ रहेको हुन्छ त्यसरी नै ओजमा बल रहेको हुन्छ । यसको कार्य र कारण अभेदरूपमा (सँगै मिसिएको) हुने हुनाले यसलाई अभेरूप भनिएको हो । यहाँ तेज र बलको ऐक्यता चिकित्साको एकताका लागि हो भनी थाहा पाउनू ।

**अन्यच्च-**
**गुरु शीतं मृदु स्निग्धं सान्द्रं स्वादु स्थिरं तथा । प्रसन्नं पिच्छिलं सूक्ष्ममोजो दशगुणं स्मृतम्॥**

भारी, शीतल, कोमल, चिल्लो, गिलो, गुलियो, स्थिर, निर्मल, लेस्याइलो र सूक्ष्म : यी ओजका दश वटा गुण हुन् ।

**चरके तु-**

**अष्टांवन्दुप्रमाणं तदांषद्रक्तं सपांतकम् । अग्नांसोमात्मकत्वेन द्विरूपं वांणतन्तु तत्॥**

चरक संहितामा भनिएको छ- ओज आठ थोपा जति, केही राता र केही पहेँलो तथा अग्नि र चन्द्रमाका गुण बोकेको हुन्छ ।

**वाग्भटश्च-**
**ओजश्च तेजो धातूनां शक्रान्तानां परं स्मृतम् । हृदयस्थमपि व्यापि देहस्थितिनिबन्धनम्॥**
**यस्य प्रवृद्धो देहस्य तुष्टिपुष्टिबलोदयाः । यन्नाशे नियतो नाशो यस्मिंस्तिष्ठति जीवनम्॥**
**निष्पद्यन्ते यतो भावा विविधा देहसंश्रयाः । उत्साहप्रतिभाधैर्य्यलावण्यसुकुमारताः॥**

रसदेखि शुक्रसम्मका सबै धातुको तेजलाई "ओज" भनिन्छ । यो मुटुमा रहेर पनि सारा शरीरमा फिँजिएको हुन्छ । यो नै शरीरको आधार हो । ओज बढेपछि तुष्टि, पुष्टि र बलको उदय हुन्छ । यो नष्ट हुँदा मानिस नष्ट हुन्छ र यो रहेसम्म मानिस बाँच्दछ । यही ओजले गर्दा नै मानिसमा चमक, पराक्रम आदि जस्ता भाव देखिने गर्दछ । यही ओजले शरीरमा आश्रित हुने उत्साह, प्रतिभा, धैर्य, लावण्य तथा कोमलता आदि अनेक भाव प्रकट हुने गर्दछन् ।

**ततः स्थूलो भागो रसो मासेन पुंसां शुक्रं स्त्रीणां त्वार्तवं शुक्रञ्च भवति ।**

पछि त्यही रसको स्थूलभाग एक महिनामा पुरुषको वीर्य र स्त्रीको रज (वीर्य) हुने गर्दछ ।

**उक्तञ्च सुश्रुते-**
**एवं मासेन रसः शुक्रो भवति। स्त्रीणाञ्चेति । चकारात् स्त्रीणामपि शुक्रं भवति ।**

**अत एवोक्तं सुश्रुते योषितोऽपि स्रवत्येव ...।**

सुश्रुत संहितामा भनिएको छ-यसरी एक महिनामा पुरुषको वीर्य हुन्छ र स्त्रीको पनि । यहाँ पनि भन्नाले स्त्रीको पनि वीर्य बन्दछ भनी थाहा पाउनु पर्दछ ।

(च) **शार्ङ्गधर संहिता :**

**ओजः शर्वशरीरस्थं शीतं स्निग्धं स्थितं मतम् । सोमात्मकं शरीरस्य बलपुष्टिकरं मतम्॥**

चिसो, चिल्लो र अमृतमय ओज शरीरको सबै भागमा रहेको हुन्छ । यसैले शरीरलाई बल र पुष्टि दिन्छ ।

(छ) **सुश्रुत संहिता :**

**ओजः सोमात्मकं स्निग्धं शुक्लं शीतं स्थिरं सरम् । विविक्तं मृदु मृत्स्नं च प्राणायतनमुत्तमम्॥**
**देहः सावयवस्तेन व्याप्तो भवति देहिनः । तदभावाच्च शीर्यन्ते शरीराणि शरीरिणाम्॥**

ओज चम्किलो, चिल्लो, सेतो, शीतवीर्यको, शरीरलाई स्थिरता दिने, गतिशील, निर्मल, कोमल र लेस्याइलो हुन्छ । यो प्राणको आधारस्थल हो । शरीरका हरेक अङ्ग त्यो ओजले व्याप्त हुन्छन् । यो नभए शरीरधारी जीवको शरीर नाश हुन्छ ।

**अभिघातात्क्षयात्कोपाच्छोकाद्ध्यानाच्छ्रमात्क्षुधः ।**

**ओजः संक्षीयते ह्येभ्यो धातुग्रहणानिःसृतम्॥ तेजः समीरितं तस्माद्विस्रंसयति देहिनः॥**

चोटपटक वा आघात, धातुक्षय, रिस, शोक, चिन्ता, परिश्रम र उपवास वा भोक : यी कुराले ओज क्षय हुन्छ । मुटुबाट अभिप्रेरित ओज जब धातबहने स्रोतबाट बग्न थाल्दछ तब यसले मानिसलाई आफ्ना स्वाभाविक कर्मबाट वञ्चित गर्दछ ।

**तस्य विस्रंसो व्यापत् क्षय इति लिङ्गानि व्यापन्नस्य भवन्ति;**
**सन्धिविश्लेषो गात्राणां सदनं दोषच्यवनं क्रियाऽसन्निरोधश्च विस्रंसे,**
**स्तब्धगुरुगात्रता वातशोफो वर्णभेदो ग्लानिस्तन्द्रा निद्रा च व्यापन्ने,**
**मूर्च्छा मांसक्षयो मोहः प्रलापो मरणमिति च क्षये॥**

दूषित ओजका विस्रंस, व्यापत् र क्षय गरी तीन अवस्था हुन्छन् । विस्रंसमा जोर्नी खुकुलो हुने, अङ्गहरू गल्ने, वात आदि दोष स्थानभ्रष्ट हुने तथा शारीरिक, मानसिक र वाचिक क्रिया ठिक तरिकाले नहुने जस्ता लक्षण देखिन्छन् । व्यापत्मा शरीर लाटो हुने, भारी हुने, वातविकारजन्य सुजन हुने, शरीरको वर्ण बदलिने, परिश्रम नगरी थकाई लाग्ने, तन्द्रा आउने र निन्द्रा लाग्ने जस्ता लक्षण देखिन्छन् । क्षयमा बेहोस हुने, रस आदि धातु क्षय हुने, भ्रम हुने, बरबराउने र मृत्यु हुने जस्ता लक्षण देखिन्छन् ।

**भवन्ति चात्र-**
**त्रयो दोषा बलस्योक्ता व्यापद्विस्रंसनक्षयाः । विश्लेषसादौ गात्राणां दोषविस्रंसनं श्रमः॥**
**अप्राचुर्यं क्रियाणां च बलविस्रंसलक्षणम्॥ गुरुत्वं स्तब्धताऽङ्गेषु ग्लानिर्वर्णस्य भेदनम् ।**

**तन्द्रा निद्रा वातशोफो बलव्यापदि लक्षणम्॥**
**मूर्च्छा मांसक्षयो मोहः प्रलापोऽज्ञानमेव च । पूर्वोक्तानि च लिङ्गानि मरणं च बलक्षये॥**

ओजका व्यापद्, विस्रंस र क्षय गरी तीन दोष हुन्छन् । विस्रंसमा शरीर लोसो हुने, अङ्ग थकित हुने, दोषहरू स्थानभ्रष्ट हुने, थकित हुने र कार्यमा प्रचूरता नहुने जस्ता लक्षण हुन्छन् । व्यापद्मा शरीरका अङ्ग लाटो हुने, भारी हुने, विना परिश्रम थकित हुने, शरीरको वर्णमा परिवर्तन हुने, तन्द्रा आउने, निन्द्रा लाग्ने, वातजन्य सुजन हुने जस्ता लक्षण देखिन्छन् । ओज क्षय हुँदा बेहोस हुने, धातुहरू नाश हुने, वेचैनी, बराबराउने, अज्ञानता तथा माथिका दुई अवस्थाका लक्षण सहित मृत्यु हुने लक्षण देखिन्छन् ।

**तत्र विस्रंसेव्यापन्ने च क्रियाविशेषैरविरुद्धैर्बलमाप्याययेत्; इतरं तु मूढसंज्ञं वर्जयेत्॥**

यी तीन अवस्थामध्ये विस्रंस र व्यापद् अवस्थामा ओजका अनकूल कर्म गरी बल बढाउनु उचित हुन्छ । क्षयको अवस्थामा भने नष्टप्रायः ठानी मानिसलाई (उपचार नगरी) छाडिदिनु पर्दछ ।

# ओठ
# (Lip)

## (क) नेपाली बृहत् शब्दकोश :

अधर : तल्लो ओठ; ओठ । अधरपान : ओठको चुम्बन; ओठमा म्वाइँ खाने काम । अधरामृत : प्रेमी वा प्रेमिकाको ओठको चुम्बनबाट पैदा हुने मधुर स्वाद । अधरासव : प्रेमी वा प्रेमिकाका परस्परको चुम्बनबाट प्राप्त हुने ओठको रसरूपी मदिरा; अधरामृत । अधरोष्ठ : तल्लो ओठ; अधर । ओठ : मुख ढाक्ने अवयव । ओठे : नसुहाँउदो किसिमले मोटो वा भद्दा ओठ भएको वा हुने । धेरै ओठ चलाउने; धेरै मुख चलाउने; मुखाले, बभ्कुवा; भगडालु । ओठे जबाफ : सोचविचार नगरीकन तत्काल दिइने जवाफ, ठाडाठाडै दिइने जवाफ । अशिष्ट किसिमको रूखो वा ठाडो जवाफ । ओष्ठ, थोल, थोलो, दन्तच्छद, रदच्छद रदपट : ओठ । ओष्ठ्य : ओष्ठस्थानबाट उच्चारणा हुने (वर्ण) । ओष्ठस्थानीय वर्ण (ढ प,फ,ब,भ,म इ०); ओष्ठस्थानी । कलेटी : भोक, रोग वा कुपोषणले मुख सुकी नीरस ओठमा देखिने पाप्रा । भोक वा तिर्खाले ओठ सुकेको स्थिति । खुँडे : ओठको बीच भाग काटिएको वा चिरिएको । चेप्प्राउनु : ओठ लेब्य्राउनु । चोसो : दुई ओठ जोडेर अगाडि तन्काइएको मुख; चुस्स परेको थुतुनु । तुँडो : मुखबाट सप्रयास हावा निकाल्नु पर्दा दुवैतिरका ओठ डोलिएर टुटीजस्तो भएको ठाउँ; आगो फुक्दा मुखबाट हावा निस्कने प्वाल वा टुटी । दूधेओठ : कलिलो, नरम ओठ । द्व्योष्ठ्य : दुई ओठका सहायताले उच्चरित हुने (ध्वनि) । पिपलपाते : पातला ओठ भएको । पुच्च : मुख खोकल्दा ओठले पानी फालेर; कुलकुल गरी थुकेर । प्रेम जनाउँदा दुवै ओठ चोसे पारेर; म्वाइँ खाएको जस्तो आवाज निकालेर । फिसिक्क : मन नलागी नलागी र दाँत नदेखाइकनै ओठले मात्र हाँस्ने गरी । भिउँटे : आकार नमिलेको र नसुहाउँदो ओठ । मुसुक्क : आवाज ननिकाली ओठ मात्र चलाएर हाँस्ने किसिमले; मीठो गरी मुस्कुराएर । लेप्प्राउनु : कुनै कामकुरो मन नपर्दा वा उपेक्षा, निन्दा आदिको भाव प्रकट गर्दा तल्लो ओठ बाहिर फर्काउनु; लेब्य्राउनु । सिटी : ओठ खुम्च्याएर जोरसित मुखबाट हावा निकाल्दा वा भित्र तान्दा निस्कने तीखो आवाज । सुसेली : ओठ खुम्च्याएर सास भित्रबाहिर फुक्तै निकालिने एक किसिमको आवाज । सुसेलो : ओठ गोलो बनाएर पौन खिँच्दै वा सास फेर्दै निकालिने भन्डै बाँसुरी आदिको जस्तो मधुर ध्वनि ।



## (ख) अमरकोश :

**ओष्ठाधरौ तु रदनच्छदौदशनवाससी ।**

ओष्ठ, अधर, रदनच्छद र दशनवासस् : यी ओठका नाम हुन् ।

**...प्रान्तावोष्ठस्य सृक्किणी ।**

सृक्किन (सृक्किणी, सृक्कि) : यी ओठका दुई छेउका नाम हुन् ।

## (ग) राज निघण्टु :

**ओष्ठोऽधरो दन्तवासो दन्तवस्रं रदच्छदः । तयोरुभयतो देशौ यौ प्रान्तौ सृक्कणी च तौ ॥**

ओष्ठ, अधर, दन्तवास, दन्तवस्र र रदच्छद : यी ओठका नाम हुन् । ओठको दुवै तिरको कुनुलाई सृक्कणी भनिन्छ ।

अंग्रजीमा ओठलाई Lip र ओठको कुनुलाई Oral commissures भनिन्छ ।



# औद्भिद जल (मूलको पानी)
# (Audbhidajala)

**परिभाषा :**

**(क) नेपाली बृहत् शब्दकोश :**

(१) उष्णोत्स : धरातलका छिद्रबाट जोडसँग निस्कने तातो पानीको फोहोरा । (२) जरुवा पानी : मूल फुटेर निस्केको पानी; चिसो राम्रो पानी । (३) प्रभव : पानी निस्कने वा उम्रने ठाउँ; मूल; स्रोत; उद्गमस्थल । (४) मुहान : नदीनाला, खोलो, धारो आदिको पानी उम्रने वा निस्कने ठाउँ; मूल । (५) मूलपानी : मूलबाट निस्केको पानी । (६) औद्भिद : भुइँ फोरेर निस्कने ।

**प्राचीन ग्रन्थका वचन :**

**(क) अभिधान मञ्जरी :**

**उद्भिद्य भूमिं यत्तोयमुत्पतत् स्यात्तदौद्भिदम् ।**

जमिनलाई छेडेर निस्की बहने जललाई औद्भिद जल भनिन्छ ।

**(ख) आयुर्वेद महोदधि :**

**प्रशस्तभूमिभागस्थं नैकसंवत्सरोषितम् । कषायमधुरं स्वादु औद्भिदं सलिलं स्मृतम्॥**



प्रशस्त (ठूलो) जमिनमा रहेको र धेरै वर्षदेखि उक्त जमिन र त्यस वरपरको जमिन सिञ्चित गरिरहेको टर्रो र मिठो स्वाद भएको पानीलाई "औद्भिद" भनिन्छ ।

**मधुरं पित्तशमनविदाह्यौद्भिदं स्मृतम् ।**

औद्भिद जल मिठो, पित्तनाशक र डाह नगर्ने गुणको हुन्छ ।

**(ग) कैयदेव निघण्टु :**

**यद्वालुकास्वम्बु करोधृतासु तदौद्भिदं .... ।**

जुन जल हातमा लिँदा बालुवा देखिन्छ त्यो औद्भिद जल हो ।

**औद्भिदं स्वादु पित्तघ्नविदाह्यग्निकृल्लघु॥**

औद्भिद जल स्वादिलो, पित्तविकार नाशगर्ने, डाह गर्ने, पाचनशक्ति बढाउने र पचाउन हलुका हुने गुणको हुन्छ ।

**(घ) द्रव्यगुण सङ्ग्रह :**

**औद्भिदं पित्तशमनं मधुरं न विदाहि च॥**

औद्भिद जल पित्तविकार शान्त पार्ने, गुलियो र डाह नगर्ने गुणको हुन्छ ।

(ङ) **धन्वन्तरि निघण्टु, सुश्रुत संहिता, माधव द्रव्यगुण :**

**मधुरं पित्तशमनमविदाह्यौद्भिदं स्मृतम् ।**

औद्भिद जल गुलियो, पित्तविकार शान्त पार्ने र डाह नगराउने गुणको हुन्छ ।

(च) **भावप्रकाश निघण्टु :**

**विदार्य भूमिं निम्नां यन्महत्या धारया स्रवेत्॥ तत्तोयमौद्भिदं नाम वदन्तीति महर्षयः ।**
**औद्भिदं वारि पित्तघ्नमविदाह्यतिशीतलम्॥ प्रीणनं मधुरं बल्यमीषद्वातकरं लघु ।**

होचो जमिनलाई छेडेर (निस्की) जुन पानी ठूलो धारा भएर बहन्छ त्यसलाई महर्षिहरूले औद्भिद जल भनेका छन् । यो पानी पित्तविकार नाशक, डाह नगर्ने र अति शीतल गर्ने गुणको हुन्छ । यो तृप्तिदायक, मिठो, बलदायक, थोरै वातविकार गर्ने र पचाउन हलुका हुन्छ ।

(छ) **राज निघण्टु :**

**औद्भिदं पित्तशमनं सलिलं लघु च स्मृतम्॥**

औद्भिद पानीले पित्तविकार शान्त पार्दछ र यो पचाउन सहज हुन्छ भनिएको छ ।



(ज) **राजवल्लभ निघण्टु :**

**औद्भिदं मधुरं पित्तशमनं न विदाहि च॥**

औद्भिद जल गुलियो, पित्तविकार शान्त पार्ने र डाह नगर्ने गुणको हुन्छ ।

(झ) **हारीत संहिता :**

**औद्भिद्यमुष्णं लघु वातहारि सपैत्तिकं तृड्ज्वरनाशनञ्च ।**
**कुष्ठव्रणानां श्रमशोषिणाञ्च शस्तं न च क्षारगुणोपपन्नम्॥**

पृथ्वीलाई छेडेर ठूलो धारा बनाई निस्कने पानीलाई औद्भिद भनिन्छ । यो गर्मी गर्ने, हलुका र वात नाशक हुन्छ । यसले पित्त विकार गर्दछ । तिर्खा र जरो नाश गर्दछ । कुष्ठ र घाउखटिरा हुने तथा परिश्रमी र शरीर सुन्निनेहरूका लागि यो जल उत्तम हुँदैन किन कि यसमा नुन मिसिएको हुन्छ ।

## औषधी खाने समय
## (Time to take medicine)

(क) **शार्ङ्गधर संहिता :**

**भैषज्यमभ्यवहरेत् प्रभाते प्रायशो बुधः । कषायाँश्च विशेषेण तत्र भेदस्तु दर्शितः ॥**

वैद्यले सामान्यतः रोगीलाई बिहान औषधी खुवाउनु पर्दछ । कषाय (ताजा रस, बोक्राको औषधी, काँढापानी, फाँडो र रातभरी पानीमा राखिएका औषधी) सामान्यतः बिहानै खान दिनु पर्दछ । तर वैद्यले आफ्नो बुद्धि प्रयोग गरी औषधी खुवाउने समयमा हेरफेर गर्न भने सक्नेछ ।

**ज्ञेयः पञ्चविधः कालो भैषज्यग्रहणे नृणाम् । किञ्चित् सूर्योदये जाते तथा दिवसभोजने ॥**
**सायन्तने भोजने च मुहुश्चापि तथा निशि ।**

औषधी खाने पाँच समय हुन्छन् । केही औषधी सूर्योदय भएपछि, केही दिउस खाना खाने बेलामा, केही साँझ खाना खाने बेलामा, केही जतिखेर पनि र केही राती खानु पर्ने हुन्छ ।

**प्रायः पित्तकफोद्रेके विरेकवमनार्थयोः ॥**

**लेखनार्थञ्च भैषज्यं प्रभाते तत् समाहरेत् । एवं स्यात् प्रथमः कालो भैषज्यग्रहणे नृणाम् ॥**

प्रायः पित्त र कफले उपद्रो मच्चाएका रोगीलाई बान्ता गराउन वा दिसा लगाउन तथा दोषलाई कम गराउन दिइने औषधी बिहान खाली पेटमा दिनु पर्दछ । यो औषधी खाने पहिलो समय हो । (तर बान्ता गराउने औषधी खाली पेटमा खुवाउन भने हुन्न) ।

**भैषज्यं विगुणेऽपाने भोजनाग्रे प्रशस्यते । अरुचौ चित्रभोज्यैश्च मिश्रं रुचिरमाहरेत् ॥**
**समानवाते विगुणे मन्देऽग्नावग्निदीपनम् । दद्याद्भोजनमध्ये च भैषज्यं कुशलो भिषक् ॥**
**व्यानकोपे च भैषज्यं भोजनान्ते समाहरेत् । हिक्काक्षेपककम्पेषु पूर्वमन्ते च भोजनात् ॥**
**एवं द्वितीयकालश्च प्रोक्तो भैषज्यकर्मणि ।**

अपानवायू सम्बन्धी समस्यामा खाना खानुभन्दा केही अघि औषधी खानू । खाना खान मन नलाग्दा विभिन्न प्रकारका स्वादिला र रुचिला खानेकुरामा मिसाएर औषधी खानू । नाइटो वा त्यस वरिपरि हुने समान नामको वायुजन्य रोगमा र पाचन शक्ति कमजोर हुँदा त्यसलाई बढाउन खाइने औषधी खाना खाँदा बीचमा खानू । सबै शरीरमा व्याप्त “व्यान” नामक वायुको प्रकोप शान्त पार्न खाइने औषधी खाना खाएपछि अन्तमा खानू । यसैगरी बाडुली, आक्षेपक वायु (विभिन्न प्रकारका चोटपटक आदिका कारण वायुको मार्ग अवरुद्ध भई शरीर पछिल्तिर ढल्कने, कुनै भाग नचल्ने, मूर्च्छा हुने आदि)

र कम्पवायु (काँप्ने समस्या जो वायु प्रदूषित हुनाले हुन्छ) मा खाना खानुअघि र खाना खाएपछि औषधी खानू । यसलाई औषधी खाने दोश्रो समय भनिएको छ ।

**उदाने कुपिते वाते स्वरभङ्गादिकारिणि ॥ ग्रासे ग्रासान्तरे देयं भैषज्यं सान्ध्यभोजने ।**
**प्राणे प्रदुष्टे सान्ध्यस्य भुक्तस्यान्ते च दीयते ॥ औषधं प्रायशो धीरैः कालोऽयं स्यात्तृतीयकः ।**

घाँटी बस्नु, लाटो हुनु आदि जस्ता उदान वायुजन्य घाँटी सम्बन्धी रोगमा साँझ खाना खाँदा गाँस सँगसँगै वा दुई गाँसका बीचमा औषधी खुवाउनू । हृदयमा रहेको प्राणवायु बिग्रेर हुने रोगमा खुवाइने औषधी साँझको खानापछि खुवाउनू । यसैलाई औषधी खाने वा खुवाउने तेश्रो समय भनी धैर्यशाली व्यक्तिले जान्नू ।

**मुहुर्मुहुश्च तृट्छर्दिहिक्काश्वासगरेषु च ॥ सान्नञ्च भेषजं दद्यादितिकालश्चतुर्थकः ।**

तिर्खा रोग, वाकवाकी, बाडुली रोग, श्वासप्रश्वास र विषजन्य रोगमा पटकपटक खानासँग वा खाली पेटमा औषधी खुवाइनु पर्दछ । यो औषधी खाने वा खुवाउने चौथो समय हो ।

**ऊर्ध्वजत्रुविकारेषु लेखने बृंहणे तथा ॥**
**पाचनं शमनं देयमनन्नं भेषजं निशि । इति पञ्चमकालः स्यात् प्रोक्तो भैषज्यकर्मणि ॥**



काँधको जोर्नीभन्दा माथिका रोगमा, वात आदि दोष घटाउनु पर्दा तथा अलिअलि देखिएका दोष बढाएर उपचार गर्नुपर्दा रातको पहिलो प्रहरमा पाचक र रोक निको पार्ने औषधी बिना अन्न खुवाउनू । यसरी औषधी खाने र खुवाउने पाँच समयका बारेमा पनि बताएर सकियो ।

## औषधी छान्ने विधि
## (Hurb sellection)

(क) **भावप्रकाश संहिता, शार्ङ्गधर संहिता :**

**वल्मीककुत्सितानूपश्मशानोषरमार्गजाः । जन्तुवह्निहिमव्याप्ता नौषध्यः कार्यसिद्धिदाः ॥**

धमिरा आदिको गोलाको, प्रदूषित जमिनको, सिमसार जमिनको, मसानको, बाँझो जमिनको, बाटोमा उम्रने, कीराले खाएको, आगोले डढेको र तुषारोले खाएको औषधीले काम गर्दैन । त्यसैले यस्ता स्थानको र बिग्रेको औषधी नलेराउनू ।

व्याख्या : औषधी टिप्न वा बटुल्न वैद्य नै जानू । उ गयो भने सबै कुरा जाँचपडताल गर्दछ । अरुले यी कुरा हेर्दैनन् । त्यसैले पनि आजकल औषधीले काम गर्दैन । नाम मात्रका वैद्यले पनि आयुर्वेदको बदनाम गरिरहेका हुन्छन् ।

(ख) **सुश्रुत संहिता :**

**तस्यां जातमपि कृमिविषशस्त्रातपपवनदहनतोयसंबाधमार्गैरनुपहतमेकरसं पुष्टं पृथ्ववगाढमूल-मुदीच्यां चौषधमाददीतेत्येष भूमिपरीक्षाविशेषः सामान्यः ॥**



उल्लेखित भूमिमा उम्रिएका ओखती पनि कीराले नखाएका, विष नपरेका, हतियारले नकाटिएका, घामले नओइलाएका, हावाले नसुकेका, आगोले नडढेका, पानीले नगलेका, अरु कुनै किसिमले खराब नभएका, बाटोमा भएका कारण कसैको दुष्टदृष्टि आदिले बिटुलो नभएका, उत्तम रसले युक्त, पुष्ट तथा जरा जमिनभित्र तलसम्म गएका औषधी उत्तरतिर फर्केर लिनू । यो औषधी र भूमि परीक्षाका सामान्य भेद वर्णन गरियो ।

## औषधी मिश्रणको मात्रा
## (Amount of medicinal mixture)

**(क) शार्ङ्गधर संहिता :**

**गुञ्जादिमानमारभ्य यावत् स्यात् कुडवस्थितिः॥ द्रवार्द्रशुष्कद्रव्याणां तावन्मानं समं मतम्।**

जल आदि तरल पदार्थ तथा गिला र सुक्खा औषधी रत्तीदेखि कुडवसम्म बराबर नापेर लिनू।

**प्रस्थादिमानमारभ्य द्विगुणन्तद् द्रवार्द्रयोः॥ मानन्तथा तुलायाश्च द्विगुणन्न क्वचित् स्मृतम्।**

जल आदि पातला पदार्थ र गिला औषधी लिनुपर्दा भने प्रस्थदेखि लिएर तुलासम्म सुक्खाभन्दा दोब्बर लिनू। तर तुलाभन्दा माथि लिनु पर्दा दोब्बर नभई बराबर लिनू।

व्याख्याः- यो नापो प्रायः स्नेहपाक विधिमा लागु हुन्छ। भर्खर लेराइएको औषधीलाई गिलो (वा आर्द्र) र घाममा सुकाइएको वा लेराएको धेरै दिन भएको औषधीलाई सुकेको (वा शुष्क) भनिन्छ।

**यदौषधन्तु प्रथमं यस्य योगस्य कथ्यते॥ तन्नाम्नैव स योगो हि कथ्यतेऽसौ(त्र) विनिश्चयः।**



औषधीको मिश्रण गर्दा मूलरूपमा जुन औषधी प्रयोग हुन्छ त्यसैको नाममा त्यो मिश्रित औषधीको नाम रहन्छ। जस्तैः- गुडूच्यादि क्वाथ, चन्दनादि तैल आदि।

**भागेऽनुक्ते तु साम्यं स्यात्...।**

जुन ओखतीको सम्मिश्रणमा कुन ओखती कति हाल्ने भनेर तोकिएको हुन्न त्यहाँ सबै ओखती बराबर मात्रामा लिनू।

**एकमप्यौषधं योगे यस्मिन्यत् पुनरुच्यते। मानतो द्विगुणं प्रोक्तं (कार्यं) तद्द्रव्यं तत्त्वदर्शिभिः॥**

जुन सम्मिश्रणमा एउटै औषधीको नाम पर्यायवाची शब्द राखेर दुई पटक बताइएको हुन्छ, त्यस्तोमा आयुर्वेदको रहस्य जान्ने वैद्यले त्यो औषधी दोब्बर लिनू।

**व्याधेरयुक्तं यद्द्रव्यं गणोक्तमपि तत्त्यजेत्। अनुक्तमपि यद्युक्तं योजयेत्तत्र तद् बुधः॥**

वैद्यले कुनै औषधीको सम्मिश्रण तयार गर्दा त्यसमा मिसाउनू भनिएको कुनै औषधी मिसाउँदा रोगको प्रतिकूल हुन जान्छ भने त्यस्तो औषधी मिश्रण नगर्नू। त्यस्तै मिश्रणमा नबताइए पनि कुनै औषधीले रोगीको रोगलाई फाइदा गर्नेछ भन्ने लागे त्यो औषधी मिसाउनू।

## औषधि सङ्कलन गर्ने ऋतु
## (Seson for hurb collection)

**(क) अग्निपुराण :**

**वर्षादयो विसर्गास्तु हेमन्ताद्यास्तथा त्रयः । शिशिराद्यास्तथादानं ग्रीष्मान्ता ऋतवस्त्रयः ॥**

वर्षा, शरद् र हेमन्त तीन ऋतुहरू औषधीका लागि विसर्गकाल (छाड्ने समय) हुन् । यसैगरी शिशिर, वसन्त र ग्रीष्म यी तीन ऋतुहरू औषधीका लागि आदानकाल (बटुल्ने समय) हुन् ।

**सौम्यो विसर्गस्त्वादानमाग्नेयं परिकीर्त्तितम् । वर्षादस्त्रीनृतून् सोमश्चरन् पर्य्यायशो रसान्॥**
**जनयत्यम्ललवणमधुरांस्त्रीन् यथाक्रमम् । शिशिरादीनृतूनर्कश्चरन् पर्य्यायशो रसान्॥**
**विवर्द्धयेत्तथा तिक्तकषायकटुकान् क्रमात् । यथा रजन्यो वर्द्धन्ते बलमेकं हि वर्द्धते॥**

विसर्गकाललाई सौम्य र आदानकाललाई आग्नेय भनी बताइएको छ । वर्षा आदि तीन ऋतु (वर्षा, शरद् र हेमन्त) मा चन्द्रमाले घुम्दै औषधीहरूमा क्रमशः अमिलो र गुलियो रस उत्पन्न गराउँदछ । शिशिर, वसन्त र ग्रीष्म यी तीन ऋतुमा सूर्यले घुम्दै औषधीहरूमा तितो, टर्रो र पिरो रस बढाउने गर्दछ । जतिजति रात बढ्दै जान्छ उतीउती औषधीको बल पनि बढ्दै जान्छ ।

हरेक जडीबुटीको सङ्कलनको लागि ऋतु, दिन, समय र विधि तोकिएका हुन्छन् । त्यो ओखतीमा हुने गुण तोकिएको समयमा सङ्कलन गर्नाले मात्र पाइन्छ नत्र पाइन्न । चन्द्रमाको किरणका कारण ओखतीमा विकसित हुने गुण सूर्यको राप परेपछि नाश हुन सक्दछ, यसैगरी अन्य नियमले काम गरिरहेका हुन्छन् । अन्य श्लोकको समग्र प्रसङ्ग र भावार्थ यस्तो छ : ब्रह्मा भन्नु हुन्छ "हे सुप्रभा देवी ! विधिविधान पालना नगरी जुन मानिसले ओखती बटुल्दछ, त्यस्ता व्यक्तिले बटुलेको त्यो औषधीमा रहेको गुण तिमीले हरण गर्नू वा सोस्नू" । (सुप्रभाको अर्थ अग्निको एक रूप, कार्तिकेयकी एक माता, प्रकाश आदि हुन्छ) ।

**(ख) भावप्रकाश संहिता :**

**शरद्यखिलकार्य्यार्थं ग्राह्यं सरसमौषधम् । विरेकवमनार्थं तु वसन्तान्ते समाहरेत्॥**
**वसन्तान्ते वसन्तमध्ये । समाहरेत् संगृह्णीयात्॥**

शरद् ऋतुमा औषधी रसले युक्त हुन्छन् यसकारण सबै कामका लागि यही ऋतुमा औषधी सङ्कलन गर्नुपर्दछ । तर विरेचन र वमन गराउनका लागि चाहिने औषधी भने वसन्त ऋतुको मध्यतिर सङ्कलन गर्नुपर्दछ ।

**(ग) शार्ङ्गधर संहिता :**

**शरद्यखिलकार्यार्थं ग्राह्यं सरसमौषधम् । विरेकवमनार्थञ्च वसन्तान्ते समाहरेत्॥**

शरद् ऋतुमा सबै औषधीमा रस भरिएको हुन्छ, त्यसैले सबै कामका लागि यसबेला औषधी बटुलेर घरमा लेराई राख्ने गर्नू । बान्ता वा दिसा गराउने खालका औषधी भने वसन्त ऋतुको मध्यमा जोरजाम गर्नू ।

**अतस्तदौषधानि स्युरनुरूपाणि हेतुभिः ॥ अन्येष्वपि प्ररोहन्ति वनेषूपवनेषु च ।**

पर्वत, वन, उपवनका हकमा पनि ती उपलब्ध हुँदा जेजस्तो पृथ्वीको ऋतु हुन्छ सोही अनुसार औषधीका गुण हुन्छन् ।

**(घ) सुश्रुत संहिता :**

**अत्र केचिदाहुराचार्याः-प्रावृड्वर्षाशरद्धेमन्तवसन्तग्रीष्मेषु यथासंख्यं मूलपत्रत्वक्क्षीरसारफलान्याददीतेति; तत्तु न सम्यक्, सौम्याग्नेयत्वाज्जगतः । सौम्यान्यौषधानि सौम्येष्वृतुष्वाददीताग्नेयान्याग्नेयेषु; एवमव्यापन्नगुणानि भवन्ति । सौम्यान्यौषधानि सौम्येष्वृतुषुगृहीतानि सोमगुणभूयिष्ठायां भूमौ जातान्यतिमधुरस्निग्धशीतानि जायन्ते । एतेन शेषं व्याख्यातम् ॥**

केही आचार्यको मत छ कि-
ओखतीका जरा लिनु छ भने प्रावृड् ऋतुमा, पात लिनु छ भने वर्षा ऋतुमा, बोक्रा लिनु छ भने शरद् ऋतुमा, दूध लिनु छ भने हेमन्त ऋतुमा, सार (चुरो) लिनु छ भने वसन्त ऋतुमा र फल लिनु छ भने ग्रीष्म ऋतुमा लिनु पर्दछ । तर यो मत ठिक छैन किन कि संसार सौम्य (चन्द्रप्रधान) तथा आग्नेय (सूर्यप्रधान) गरी दुई किसिमको नै हुने गर्दछ । यसैले शीतवीर्यका औषधी सौम्य ऋतुमा वा चन्द्रमा बलियो भएका वर्ष, शरद् र हेमन्त ऋतुमा तथा उष्णवीर्यका औषधी आग्नेय ऋतु अर्थात् शिशिर, वसन्त र ग्रीष्म ऋतुमा लिनु पर्दछ । यसरी लिइएका औषधीमा कुनै वैगुन हुँदैन अर्थात् निर्दोष गुणका हुन्छन् । चान्द्रगुणयुक्त जमिनमा उम्रेका सौम्य ऋतुमा लिइएका शीतवीर्यका औषधी अत्यन्त मधुर, चिल्ला र शीतल हुन्छन् । यसरी नै उष्णवीर्यका औषधीका बारेमा पनि थाहा पाउनू ।

## औषधी सङ्कलन गर्ने विधि
## (Method of hurb collection)

(क) **शार्ङ्गधर संहिता :**

**आदित्यसम्मुखो मौनी नमस्कृत्य शिवं हृदि । साधारणधराद्रव्यं गृह्णीयादुत्तराश्रितम्॥**

औषधी लेराउनका लागि सूर्यतिर फर्की नमस्कार गरेर मनले भगवान् शिवलाई ध्यान गर्दै चूपचाप उत्तरतिरका पृथ्वीका जङ्गल आदिमा हुने सामान्य औषधी ग्रहण गर्नू । कसैले यसलाई "औषधी लिँदा उत्तरतिर फर्केर लिनू भनिएको हो" पनि भनेका छन् ।

(ख) **भावप्रकाश संहिता :**

**आदित्यसम्मुखो मौनी नमस्कृत्य शिवं हृदि । साधारणधराद्रव्यं गृह्णीयादुत्तराश्रितम्॥**
**साधारणधराद्रव्यं, सर्वभूमिभवं द्रव्यम् । उत्तराश्रितं स्वस्मात् उत्तरादिग्भवम्॥**

सूर्यतिर फर्की मनले भगवान् शिवलाई नमस्कार गर्दै चूपचाप भएर आफू बसेको स्थानभन्दा उत्तरतिरका पृथ्वीका जङ्गल आदिमा हुने सामान्य (सबैतिर पाइने खालका) औषधी सङ्कलन गर्नू ।



(क) **राज निघण्टु :**

**यथावदुत्खाय शुचिप्रदेशजा द्विजेन कालादिकतत्त्ववेदिना ।**
**यथायथं चौषधयो गुणोत्तराः प्रत्याहरन्ते यमगोचरानपि॥**

काल, परिस्थिति, ओखतीको गुण आदि जान्ने द्विजले शुद्ध स्थानको ओखती विधिपूर्वक खनी (बटुली) मर्न लागेका रोगीलाई पनि जीवन दान दिने गर्दछन् ।

**"येन त्वां खनते ब्रह्मा येन त्वां खनते भृगुः । येनेन्द्रो येन वरुणः खनते येन केशवः॥**
**तेनाहं त्वां खनिष्यामि सिद्धिं कुरु महौषध॥**
**विप्रः पठन्निमं मन्त्रं प्रयतात्मा महौषधीम् । खात्वा खादिरकीलेन यथावत्तां प्रयोजयेत्॥**

"हे महाऔषधी ! तिमीलाई (जसरी) ब्रह्माले खने, शुक्राचार्यले खने, इन्द्रले खने, वरुण अनि नारायणले खने, म तिमीलाई त्यसैगरी खन्दैछु । मलाई सफलता देऊ ।" यो मन्त्र बढ्दै शुद्ध आत्मा लिएर द्विजले खयर आदिको किलाको सहायताले ओखती खन्नू र विधिपूर्वक त्यसको प्रयोग गर्नू ।

**वीर्यं प्रकाश्य निजमोषधयः किलोचुरन्योन्यमुर्व्यपि दिवो भुवमाव्रजन्त्यः ।**
**जीवं मुमूर्षमपि यं हि वयं महिम्ना स्वेन स्तुवीमहि स जात्वपि नैव नश्येत्॥**

स्वर्गबाट पृथ्वीमा आउँदा ओखतीहरूले एकआपसमा आफ्नो क्षमता र सफलताका बारेमा छलफल गर्दै "हामी हरेक मरणासन्न रोगी व्यक्तिलाई बचाउन सक्षम हुनेछौं" भनेका थिए ।

**प्रत्यायिताः प्रमुदिता मुदितेनराज्ञा सोमेन साकमिदमोषधयः समूचुः ।**
**यस्मै द्विजो दिशति भेषजमाशु राजन्! तं पालयाम इति च श्रुतिराह साक्षात्॥**

औषधीहरु पृथ्वीमा आउँदा आफ्ना प्रसन्न भएका राजा सोम (चन्द्रमा) सँग "हे राजा ! जसका लागि भनेर द्विजले हामीलाई खनी जे निर्देशन दिन्छ, त्यो निर्देशनलाई हामी सधैं पालना गर्नेछौं । अर्थात् रोगीलाई बचाउनेछौं । यसरी (वा यसो गर्न) हामी साक्षात् वेदबाट नै निर्देशित भएका छौं ।"

**आसामीशो लिखितपठितः स द्विजानां हि राजा**
**सिद्ध्यै याश्च द्विजमवृजिनं स्वाश्रयं कामयन्ते ।**
**तास्वेवान्यः प्रसरति मदाद्यस्तु जात्या च गत्या**
**हीनः शून्यो जगति कुपिताः पातयन्त्येनमेताः ॥**

द्विजका राजा (चन्द्रमा वा इन्द्र ?) ले आदेश दिएका औषधीहरू द्विज (ब्राह्मण वा असल वैद्य) कै आश्रयमा रही अन्य धेरै प्रकारका औषधीहरुलाई जन्माउँदछन् । अहङ्कारी तथा कुलिनता वा पहिचानको स्पष्ट ज्ञान एवं परिष्कृत साधन नहुने व्यक्तिले यी औषधीको प्रयोग गर्ने प्रयाश गर्दछ भने उ यी औषधीहरूको क्रोध (असर) बाट नष्ट हुन्छ ।

## औषांध सङ्कलन गर्ने समय
## (Time for hurb collection)

(क) **हारीत संहिता :**

**रात्रौ यः प्रथमो यामो भूतवेला प्रकीर्त्तिता । द्वितीयं निशि इत्याहुर्निशीथश्च ततः परम्॥**
**गणरात्रं ततो ज्ञेयं कालमप्राप्तराशिनम् । पूर्वापराह्णमध्याह्नाः परार्द्धदिनशेषकाः॥**
**पूर्वे दिनावसाने च भेषजानामुपक्रमः॥**

रातको पहिलो प्रहरलाई भूतबेला, दोश्रो प्रहरलाई निशि र त्यसपछिको समयलाई निशीथ भनिन्छ । यसपछिको रातलाई गणरात्र भनिन्छ । दिनका पूर्वाह्ण, मध्याह्ण, अपराह्ण, परार्द्ध र दिनशेष नाम हुन्छन् । बिहान र साँझमा ओखतीको उपचार (सङ्ग्रह ?) हुन्छ ।

(ख) **शार्ङ्गधर संहिता, भावप्रकाश संहिता :**

**गृह्णीयात्तानि सुमनाः शुचिः प्रातः सुवासरे॥**

ती औषधीहरू प्रसन्न चित्तले शुद्ध भई शुभबारका दिन बिहान सङ्कलन गर्नुपर्दछ ।

(ग) **शार्ङ्गधर संहिता :**



**कालेऽनुक्ते प्रभातं स्याद्...।**

जहाँ कतिखेर औषधी बटुल्ने भनिएको हुन्न त्यहाँ बिहान लिने भनी जान्नू ।

## औषधीका लागि स्थान चयन
## (Selection of location for drug collection)

(क) **अर्कप्रकाश :**

**सर्वजाङ्गलसम्भूतं प्रायोभवतिपित्तहृत् । आनूपसम्भवं सर्वं प्रायः कफकरं स्मृतम् ॥**
**तत्कालोष्णं दक्षिणजं परिणामे तु शीतलम् । धनदाशा समुद्भूतं विपरीत तयास्मृतम् ॥**
**अन्तर्बेदि भवं सर्व यथोक्त गुणमादिशेत् । विपाकस्तु त्रिधा प्रोक्तः स्वाद्वम्लकटुकात्मकः ॥**

जङ्गलमा हुने प्रायः सबै औषधीले पित्तदोष नाश गर्दछन् भने सिमसार क्षेत्रमा हुने प्रायः सबै औषधीले कफ बढाउने गर्दछन् । दक्षिण देशमा उत्पन्न हुने औषधी आलो छँदा गर्मी गर्ने र पछि ठण्डी गर्ने गुणका हुन्छन् भने उत्तर देशका औषधीमा यसको ठीक उल्टो गुण हुन्छ । मध्य देशमा उब्जने औषधीमा जे बताइएको छ त्यही गुण हुन्छ । यसको पचेपछिको रसको स्वाद गुलियो, अमिलो र पिरो गरी तीन किसिमको हुन्छ ।

(ख) **शार्ङ्गधर संहिता :**
**आग्नेया विन्ध्यशैलाद्याः सौम्यो हिमगिरिर्मतः ।**

विन्ध्याचल आदि स्थानमा हुने औषधी गर्मीगर्ने खालका र हिमालयतिर हुने औषधी ठण्डी गर्ने खालका हुन्छन् ।



(ग) **सुश्रुत संहिता :**

**गन्धवर्णरसोपेता षड्विधा भूमिरिष्यते । तस्माद्भूमिस्वभावेन बीजिनः षड्रसायुताः ॥**
**अव्यक्तः किल तोयस्य रसो निश्चयनिश्चितः । रसः स एव चाव्यक्तो व्यक्तो भूमिरसाद्भवेत् ॥**

भूमिको गुण अनुसार नै त्यहाँ उत्पन्न हुने ओखती छ रसयुक्त हुने गर्दछन् । यसैले भूमि पनि छ किसिमको हुने गर्दछ । सिद्धान्ततः यो निर्णय भएको छ कि पानीको रस अव्यक्त हुने गर्दछ । त्यो लुकेको रस पृथ्वीको रसका कारण स्पष्ट हुने गर्दछ ।

**तत्र पृथिव्यम्बुगुणभूयिष्ठायां भूमौ जातानि विरेचनद्रव्याण्याददीत, अग्न्याकाशमारुतगुणभूयिष्ठायां वमनद्रव्याणि, उभयगुणभूयिष्ठायामुभयतोभागानि, आकाशगुणभूयिष्ठायां संशमनानि, एवं बलवत्तराणि भवन्ति ॥६॥**

विरेचनका लागि औषधी सङ्कलन गर्दा जलगुण भएको भूमिबाट सङ्कलन गर्नुपर्दछ । बान्ता गराउने खालका ओखती आग्नेय, आकाश र वात गुण भएका जमिनबाट लिनु पर्दछ । वमन र विरेचन दुवै गराउने ओखती दुवै गुण भएको अर्थात् मिश्र गुण भएको जमिनबाट लिनु पर्दछ । संशमन गर्ने खालका ओखती आकाशगुणप्रधान भूमिमा उत्पन्न भएका लिनु पर्दछ । यसरी लिइएका ओखती अधिक बलशाली हुने गर्दछन् ।

## औषधीका पाँच अवस्था
## (Five states of medicine)

(क) **शार्ङ्गधर संहिता :**

**द्रव्ये रसो गुणो वीर्यं विपाकः शक्तिरेव च ।**

औषधीका रस, गुण, वीर्य, विपाक र शक्ति गरी पाँच अवस्था हुन्छन् ।

## औषधीका लागि चन्दन प्रयोग गर्ने नियम
## (Rules for using sandalwood for medicine)

**(क) शार्ङ्गधर संहिता :**

**चूर्णस्नेहासवा लेहाः प्रायशश्चन्दनान्विताः । कषायलेपयोः प्रायो युज्यते रक्तचन्दनम् ॥**

धुलो, स्नेह, आसव (मदिरा) र लेह (चटनी) मा सेतो चन्दन प्रयोग गर्नू । काँढापानी र मलम आदिमा प्रायः रातोचन्दन लिनू ।

## औषधीका लागि प्रयोग गरिने तरल पदार्थ
## (A liquid used for medicine)

(क) **शार्ङ्गधर संहिता :**

**द्रवेऽनुक्ते जलं ग्राह्यं ...।**

जहाँ तरल पदार्थ के मिसाउने भनेर तोकिएको हुन्न त्यहाँ पानी मिसाउनू ।

## औषधीका लागि प्रयोग गरिने तेल
## (Oil used for medicine)

(क) **शार्ङ्गधर संहिता :**

**...तैलेऽनुक्ते तिलोद्भवम्॥**

जहाँ कुन तेल हाल्ने भनेर तोकिएको हुन्न त्यहाँ तिलको तेल लिनू ।

## औषधीका लागि प्रयोग गरिने भाँडा
## (A vessel used for medicine)

(क) **शार्ङ्गधर संहिता :**

**...पात्रेऽनुक्ते च मृण्मयम् ।**

जहाँ ओखतीका लागि भाँडो तोकिएको हुन्न त्यहाँ माटाको भाँडो लिनू ।

## औषधीको खाने मात्रा
## (Dosage of medicine)

### (क) शार्ङ्गधर संहिता :

**बालस्य प्रथमे मासि देया भेषजरक्तिका ॥**
**अवलेही कृतैकैव क्षीरक्षौद्र सिताघृतैः । वर्धयेत्तावदेकैकां यावद्भवति वत्सरः ॥**
**माषैर्वृद्धिस्तदूर्ध्वं स्याद्यावत्षोडशवत्सरः । ततः स्थिरा भवेत्तावद्यावद्वर्षाणि सप्ततिः ॥**
**ततो बालकवन्मात्रा ह्रासनीया शनैः शनैः । मात्रेयं कल्कचूर्णानां कषायाणाञ्चतुर्गुणा ॥**

नवजात बालकलाई जन्मेको दिनदेखि पहिलो महिना (आमाको) दूध, साना मौरी (घर मौरी) को मह, चिनी र गाईको घिउमध्ये जे उपयुक्त हुन्छ त्यसमा एक रत्ती सुवर्णादिक औषधी हाली चटनी बनाएर खुवाउनू । दोश्रो महिनामा दुई रत्ति, तेश्रो महिनामा तीन रत्ति गर्दै बढाउँदै एक वर्षसम्म खुवाउनु पर्दछ । यसै गरी दोश्रो वर्षमा दुई मासा, तेश्रो वर्षमा तीन मासा गर्दै सोह्र वर्षसम्म खुवाउनु पर्दछ । सत्तरी वर्षपछि जसरी बालकलाई बढाउँदै खुवाइएको हुन्छ त्यसरी नै घटाउँदै खुवाउनु पर्दछ । बालक र वृद्धको उपचार विधि समान हुने हुनाले यसो गरिएको हो । वृद्धावस्थामा औषधीजन्य जडीबुटीका बोक्राको काँडापानी, औषधीको धुलो वा अन्य काँडापानी बालकलाई भन्दा चार गुना बढी दिनु पर्दछ ।

व्याख्याः- बालक दूध मात्र पिउने भए दूधसँग, दूध र अन्न पनि खाने भए महसँग र अन्न मात्र खाने भए चिनीसँग खुवाउने भनी बुझ्नू । यसरी खुवाउने उपरोक्त औषधी विभिन्न द्रव्यको संयोजन गरी बनाइएको हुन्छ । त्यस्तो औषधी उपलब्ध नहुँदा स्वर्ण आदि भष्मको प्रयोग गर्ने र त्यो पनि नहुँदा सुन, चाँदी आदि धातु घोटेर खुवाउन सकिने विधान अन्यत्र ग्रन्थमा उल्लेख गरिएका छन् ।



**स्थितिर्नास्त्येव मात्रायाः कालमग्निं वयो बलम् ॥ प्रकृतिं दोषदेशौ च दृष्ट्वा मात्रां प्रकल्पयेत् ।**

औषधीको मात्रा यति नै हो भन्न सकिन्न किन कि समय (काल), रोगीको पाचनशक्ति, उमेर वा अवस्था, शारीरिक बल, प्राकृतिक अवस्था, रोगको अवस्था (दोष) र देश हेरेर वैद्यले मात्राका बारेमा निर्णय गर्नुपर्ने हुन्छ ।

**यतो मन्दाग्नयो ह्रस्वा हीनसत्त्वा नराः कलौ ॥**
**अतस्तु मात्रा तद्योगा(ग्या) प्रोच्यते सुज्ञसम्मता ।**

कलियुगमा मानिसको पाचनशक्ति कमजोर हुन्छ, शरीर पनि सानो हुन्छ, बल पनि सामान्य हुन्छ त्यसैले तिनलाई उपयोगी र वैद्यलाई मान्य हुने गरी औषधीको मात्रा बताइन्छ ।

## औषधीको प्रयोग मिति
## (Date of use of medicine)

(क) **शार्ङ्गधर संहिता :**

**गुणहीनं भवेद्वर्षादूर्ध्वं तद्रूपमौषधम् । मासद्वयात्तथा चूर्णं हीनवीर्यत्वमाप्नुयात् ॥**
**हीनत्वं गुटिकालेहौ लभेते वत्सरात् परम् । हीनाः स्युर्घृततैलाद्याश्चतुर्मासाधिकात्तथा ॥**
**ओषध्यो लघुपाकाः स्युर्निर्वीर्या वत्सरात् परम् । पुराणाः स्युर्गुणैर्युक्ता आसवा धातवो रसाः ॥**

वनबाट लेराइएका औषधी एक वर्षपछि गुणहीन हुन्छन् । धुलो औषधी दुई महिना पछि केही गुणहीन (हीनवीर्य) हुन्छ । गोली र चाट्ने खालका औषधी (लेह) प्रायः वर्ष दिन पछिपनि जस्ताका तस्तै हुन्छन् तर केही भने गुणहीन हुन्छन् । घिउ, तेल आदि सोह्र महिना पछि गुणहीन हुन्छ । कसै कसैले वर्षा ऋतुका चार महिना बितेपछि यी कुरा हीनवीर्य हुन्छन् पनि भनेका छन् । घिउ, तेल आदिमा पकाइएका गहुँ, चना आदिका औषधी एक वर्षपछि निर्वीर्य हुन्छन् । सक्खर भने जति पुरानो भो त्यति गुनिलो हुन्छ । आसव, विभिन्न धातुका भष्म तथा रसायनहरु पनि जति पुरानो भयो त्यति बढी गुणकारी हुन्छन् ।

## औषधीको भण्डारण
## (Storage of medicines)

**(क) सुश्रुत संहिता :**

**धूमवर्षानिलक्लेदैः सर्वर्तुष्वनभिद्रुते । ग्राहयित्वा गृहे न्यस्येद्विधिनौषधसंग्रहम् ॥**

वैद्यले विधिपूर्वक ओखती बटुली तिनलाई धुवाँ, पानी, हावा र ओसबाट सबै ऋतुमा सुरक्षित हुने स्थानमा राख्नुपर्दछ ।

**प्लोतमृद्भाण्डफलकशङ्कुविन्यस्तभेषजम् । प्रशस्तायां दिशि शुचौ भेषजागारमिष्यते ॥**

जहाँ सबै ओखती कपडामा पोको पारेर, माटाका भाँडामा, काठको तख्तामा वा किलामा झुण्ड्याएर सुरक्षितसँग राखिएको हुन्छ, यस्तो औषधालय उपयुक्त र पवित्र स्थानमा हुनु पर्दछ ।

## औषधीको भाग चयन
## (Part sellection of a herb- etc.)

(घ) **अर्कप्रकाश :**

**तालीसादेस्तु पत्राणि सुमनोधातकी मुखात् ।**
**न्यग्रोधादेस्त्वचो ग्राह्याः फलस्यात्त्रिफलादितः॥**
**पञ्चाङ्गुलादेर्मूलानि ह्यनुक्तेपरिकल्पयेत् । खदिरासनकादीनां सारोपि परिगृह्यते॥**

औषधीका लागि सुनपाती (तालीसपत्र) आदिको पात ग्रहण गर्नू । धयैँरो आदिको फूल ग्रहण गर्नू । बर आदिको बोक्रा ग्रहण गर्नू । त्रिफला आदिको फल ग्रहण गर्नू र अँडिर आदिको जरा ग्रहण गर्नू । खयर, विजयसाल आदिको सार (रस वा खोटो वा चुरो) ग्रहण गर्नू । कसरी के प्रयोग गर्ने भनी विधि नलेखिएको अवस्थामा यी सबै औषधीको यसरी नै प्रयोग गर्नु पर्दछ ।

(ख) **भावप्रकाश संहिता :**

**अन्यच्च-**
**महान्ति येषां मूलानि काष्ठगर्भाणि सर्वतः । तेषां तु वल्कलं ग्राह्यं ह्रस्वमूलानि सर्वशः॥**

अन्य ग्रन्थमा पनि जुन वृक्षको जरा धेरै मोटो हुन्छ तथा भित्र काठ वा चुरो पसेको हुन्छ त्यस्ता वृक्षको बोक्रा नै ओखतीका लागि लिनुपर्दछ अनि जुन वृक्षको जरा मसिना हुन्छन् त्यो वृक्षको सबै भाग लिनुपर्दछ भनी लेखिएको छ ।

**न्यग्रोधादेस्त्वचो ग्राह्या सारःस्याद्बीजकादितः ।**
**तालीसादेश्च पत्राणि फलं स्यात् त्रिफलादितः॥**
**क्वचिन्मूलं क्वचित्कन्दः क्वचित्पत्रं क्वचित्फलम् ।**
**क्वचित्पुष्पं क्वचित्सर्वं क्वचित्सारः क्वचित्त्वचः॥**
**चित्रकं सूरणं निम्बो वासा च त्रिफला क्रमात् । धातकी कण्टकारी च खदिरः क्षीरपादपः॥**
**क्वचिन्निम्बस्य गृह्णीयात्पत्राभावे त्वचामपि । बालं फलं तु बिल्वस्य पक्वमारग्वधस्य च॥**

औषधी बटुल्दा बर्रो आदि रूखको बोक्रा लिनू । विजयसाल आदि वृक्षको चोप लिनू । तालीसपत्र, घिउकुमारी आदिको पात लिनू । त्रिफला आदिको फल लिनू । कुनै विरुवाको जरा, कुनैको कन्दमूल, कुनैको पात, कुनैको फूल, कुनै विरुवाको सम्पूर्ण भाग, कुनैको चोप र कुनै विरुवाको बोक्रा लिनु पर्दछ । जस्तो कि चितूको जरा, ओलको कन्दमूल, नीम र असुरोको पात, त्रिफलाको फल, कण्टकारीको सबै भाग, खयरको चोप वा सार, दूधिला वृक्षको बोक्रा नै लिनु पर्दछ । बेलको काँचो फल र राजवृक्षको पाकेको फल लिनु पर्दछ ।

(ग) **शार्ङ्गधर संहिता, भावप्रकाश संहिता :**

**अतिस्थूलजटा याः स्युस्तासां ग्राह्यास्त्वचो बुधैः ।**
**गृह्णीयात् सूक्ष्ममूलानि सकलान्यपि बुद्धिमान्॥**

जुन वृक्षका ठूला वा मोटा जरा हुन्छन् तिनको बोक्रा झिक्नु पर्दछ अनि जुन वनस्पतिको साना जरा हुन्छन् तिनको सबै भाग (जरा, पात, फूल, हाँगा) लिनु पर्दछ । कसैले ठूलो रुखको जराको बोक्रा र सानोको जरामात्र लिनू पनि भनेका छन् ।

(घ) **शार्ङ्गधर संहिता :**

**न्यग्रोधादेस्त्वचो ग्राह्याः सारः स्याद्बीजकादितः ।**
**तालीसादेश्च पत्राणि फलं स्यात् त्रिफलादितः॥**
**धातक्यादेश्च पुष्पाणि स्नुह्यादेः क्षीरमाहरेत् ।**

औषधीका लागि लिँदा बर्रो आदि वृक्षको बोक्रा; विजयसाल आदिको चोप (सार); तालीस, घिउकुमारी आदिको पात; त्रिफला आदिको फल, धँयेरो आदिको फूल र सिँउडी आदिको दूध लिनू ।



**..अङ्गेऽनुक्ते जटा भवेत्॥**

जहाँ औषधीको कुन भाग लिने भनिएको हुन्न त्यहाँ त्यसको जरा लिनू ।

## औषधी : नयाँ, पुरानो आदि
## (Medicines new, old etc)

(क) **शार्ङ्गधर संहिता :**

**नवान्येव हि योज्यानि द्रव्याण्यखिलकर्मसु ।**
**विना विड(ढ)ङ्गकृष्णाभ्यां गुडधान्याज्यमाक्षिकैः ॥**

कुनै पनि औषधी (द्रव्य) का लागि नयाँ औषधीको प्रयोग गर्ने योजना बनाउनू । तर, वायुविडङ्ग, पिप्ला, शखर, अनाज, घिउ र मह गरी छ प्रकारका पदार्थ भने पुराना गुणकारी हुन्छन् ।

**गुडूची कुटजो वासा कूष्माण्डश्च शतावरी ।**
**अश्वगन्धा सहचरी शतपुष्पा प्रसारिणी ॥**
**प्रयोक्तव्याः सदैवार्द्रा द्विगुणा नैव योजयेत् ।**

गुर्जो, ठूलो कुरो, असुरो, कुभिण्डो, कुरिलो, अश्वगन्धा, पहेँलो कपुरनली, सुप र बिरी : यी नौ थरी औषधी सधैँ आलो (ताजा) लिनू तर आलो छ भनेर दोब्बर नलिनू ।



**शुष्कं नवीनं यद् द्रव्यं योज्यं सकलकर्मसु ॥**
**आर्द्रञ्च द्विगुणं युञ्ज्यादेष सर्वत्र निश्चयः ।**

माथि बताइएका नौ थरी औषधी बाहेकका अरु औषधी सबै कार्यमा सुकेको तर ताजा लिनुपर्दछ र आलो भए दोब्बर लिनुपर्दछ, यही निर्णय सबैतिर जान्नू ।

**यसका साथै मोहन निघण्टु सङ्ग्रहको पहिलो भाग समाप्त भएको छ ।**
**सबैको कल्याण होस !**

## केही शब्द र अर्थ

### अ

अतिसार :- खाएका कुरा नपची पातलो दुर्गन्धी दिसा भइरहने रोग; आउँको रोग । यसका कफजन्य, वातजन्य, पित्तजन्य, आमजन्य, सन्निपातजन्य र शोकजन्य गरी छ किसिम हुन्छ । यो रोगमा सामान्यतः आमाशय सुन्निएर खाएको कुरा नपची पातलो दिसा र डकार आइरहन्छ, अमन हुन्छ र शरीर लखतरान भएर गल्दछ ।

अधा :- आधा टाउको दुख्ने रोग, अर्धभेदक, अर्धावभेदक ।

अनुपान :- खाना वा ओखती खाएपछि त्यसलाई पचाउन लगत्तै पिइने पेय पदार्थ ।

अनुलोमन :- कब्जियत भएर पेटभित्र रहेको मल वा रोकिएको मूत्रलाई खुकुलो बनाई आन्द्राभुँडी सफा गर्दै तलतिर धकेलेर दिसापिसाब मार्फत बाहिर निकाल्ने औषधी । जस्तै : हर्रो ।

अनूप :- सिमसार क्षेत्र, पानी धेरै हुने स्थान वा देश ।

अन्धो :- परेलाका डिलमा आउने एक किसिमको खटिरो; अन्नो, अञ्जननामिका, अर्जुन ।

अपची :- घाँटीमा माला लगाए जसरी खटिरा आई फोका उठेर पीप बन्ने रोग, गण्डमाला रोगको एक प्रकार ।

अपतन्त्र :- वायुविकारबाट हुने रोग । यो रोग हुँदा शरीर टेढो हुने, टाउको र कञ्चट दुख्ने, गला बज्ने, आँखा तन्कने र सास फेर्न कठिनाई हुने गर्दछ ।

अपतानक :- आइमाईमा गर्भपात हुँदा र पुरुषमा ठूलो चोटपटक लाग्दा वा धेरै रगत जाँदा हुने रोग । यसमा पटकपटक बेहोस हुने, कफले गर्दा घाँटीबाट घ्यारघ्यार आवाज आउने गर्दछ ।



अपबाहुक :- पाखुरामा हुने वायुले नसा सुकाएर पाखुरा सुकाउने एक रोग ।

अभिष्यन्द :- पोल्ने, रातो हुने तथा आँशु झरिरहने र चिप्रा लागिरहने आँखाको रोग, अधिमन्थ ।

अभिष्यन्दी :- थलथले गुणले गरुङ्गोपनबाट रस निकाल्ने चौबीस थरी शिरा नामका नसाहरू थुनेर शरीरलाई भारी (गरुङ्गो) बनाउने द्रव्यलाई अभिष्यन्दी द्रव्य भनिन्छ । जस्तैः रातको दही ।

अरुषिका :- कफ, रगत बिग्रेर वा कीराका कारणले आउने धेरै मुख हुने र अति दुख्ने खटिरो ।

अर्दित :- मुखको कुनै भाग वातदोषले गर्दा नचल्ने हुने एक रोग विशेष (फेसियल प्यारालाइसिस) ।

अर्म :- आँखाको पुतलीमाथि सेतो दाग वा छिटा जस्तो हुने आँखाको रोग ।

अलजी :- दुख्ने राता वा पहेँलो खटिरो विशेष ।

अलसक :- एक प्रकारको अजीर्ण रोग ।

अल्काई (रोग) :- गुदद्वारको भित्रपट्टि खटिरो आई रगत बग्ने रोग । अर्श, अलकाई, गदगुदज, गुदाङ्कुर, दुर्नामक, दुर्नाम, हर्सा ।

अवदंशक्षमं :- अचार बनाउन योग्य ।

अष्टसिद्धि :- ऐश्वर्य, भूति, विभूति । (अणिमा, ईशित्व, गरिमा, प्राकाम्य, प्राप्ति, महिमा, लघिमा र वशित्व) ।

अष्ठीला :- मूत्राशयमा गाँठा पलाएर मूत्रत्यागमा अवरोध हुने एक रोग (प्रोस्टेट ग्ल्याण्ड) ।

### आ

आक्षेप :- शरीर काम्ने वा नसाभित्र हावा छिरी कुनै अङ्ग झट्कार्ने रोग, आक्षेपक ।

आध्मान :- पेट फुल्ने एक रोग, अपानवायु रोकिनाले छालाको थैलो फुले जसरी पेट फुल्ने रोग ।

आनाह :- पचेर अथवा नपची दूषित भएको मलमूत्र पेटमा रोकिएर हुने रोग ।

आम :- खाएपिएका कुरा पचेपछि बन्ने रस । सामान्यतः "आम" पनि रसै हो तर आहार राम्ररी नपाकी वा नपची बनेको रस हो (शार्ङ्गधर) ।

आमदोष :- कमजोर पाचनशक्तिका कारण शरीरमा नपचेका खानेकुरा सडेर बन्ने विषालु तत्व ।

आमवात :- आमरस वा आउँका कारण हुने जोर्नी दुख्ने वातरोग ।

आस्थापन वस्ति :- विभिन्न औषधीको काँढापानी बनाई त्यो काँढापानीलाई छदाउन वा दिसा पिसाब गराउन प्रयोग गर्ने विधि ।

इ

इन्द्रलुप्त :- रौंको जरामा रहने रगत खराब भएर रौं झारिदिने र फेरी रौं पलाउन नदिने रोग (के.यन.स्वामि), कपाल झर्ने रोग विशेष (च.सं.) । तालुखुइलने रोग ।

उ

उदर्द : शिशिर ऋतुमा आउने एक किसिमको दादुरा जसको बीच भाग गहिरो र छेउतिर अग्लो हुन्छ । यी राता हुन्छन् र चिलाउने गर्दछ । यो कफ बढी भएका कारण हुन्छ ।

उदावर्त :- अपानवायु माथितिर सरी मलमूत्रलाई पनि माथिमाथि तान्ने पेटको रोग । अपानवायु, दिसा, पिसाब, हाई आँसु, हाच्छिउँ, डकार, बान्ता, शुक्र, भोक, तिर्खा, निःश्वास र निद्रा आउन लाग्दा जबरजस्ती रोक्ने गरे यो रोग लाग्दछ । रोग लागिसकेपछि दिसा, पिसा र अपानवायु बन्द हुन्छ । पेट कराउने गर्दछ । शरीर कमजोर भई दुख्न थाल्दछ ।



उन्माद :- पागलपन, कडा रिस, मानसिक रोग ।

उपशोष :- शरीर सुक्नु वा चाउरिनु ।

उरुस्तम्भ :- कम्मरदेखि तलका अङ्ग कक्रक्क पार्ने, दुखाउने र हिँड्न गाह्रो हुने रोग ।

उष्णवीर्य :- (अष्टाङ्ग हृदय) द्रव्यमा हुने गुण विशेष । उष्ण वीर्यले भ्रम पैदा गर्ने, तिर्खा लगाउने, हर्ष नाश गर्ने, पसिना निकाल्ने, डाह गर्ने तथा खाएको कुरा वा घाउआदि चाँडै पकाउने काम गर्दछ । यसले वात र कफ दोषलाई शान्त पार्दछ ।

ऊ

ऊरुस्तम्भ :- तिघ्रा शिथिल हुने रोग, आढ्यवात ।

ऊर्ध्ववात :- धेरै डकार आउने रोग ।

क

कण्डू :- शरीर चिलाउने रोग ।

कण्डेउलो :- कमरमुनिको फिलाको हाड जुन् तीन भागको हुन्छ । त्रिक, त्रिकस्थि । टाउको र पाखुराको जोर्नीलाई समेत त्रिक भनिन्छ ।

कम्मर :- अवलग्न, मध्य, मध्यम, वलग्न ।

कर्ष :- करिब बाह्र मिलिग्राम ।

कलेजोका मांसखण्ड :- कालखण्ड, यकृत् ।

कल्क :- कुनै नरम वा सुकेको ओखतीलाई पानी मिसाई पिसेपछि बन्ने धुलो वा लेदो ।क्रक ।

कषाय :- काँढापानी ।

कला :- धातु भित्र रहने हँडिदो (हल्का हरियो रङ तथा अमिलो र उग्लिएको स्वादको पदार्थ) जो शरीरको तातोले पच्ने गर्दछ, त्यसलाई कला भनिन्छ ।

काँध :- अंस, भुजशिरस, स्कन्ध ।

काँध (जोर्नी) :- खगाले हाड, जत्रु ।

काखी :- कक्ष, बाहुमूल ।

काच : आँखाको रोग विशेष ।

कान्तिसारलौह :- जुन फलामे भाँडोमा राखेको पानीमा तेल पर्दा फैलिँदैन, तातेको भाँडामा फुराएको हिङमा गन्ध आउँदैन, नीमको रस पर्दा गुलियो बन्दछ, दूध तताउँदा उम्लेर जाँदैन, पानी राखेर चना भिजाउँदा कालो हुन जान्छ, यस्तो गुण भएको फलामलाई कान्तिसारलौह भनिन्छ । कान्तम् ।

काम्बलिक :- फलको रसलाई अमिला फल वा कन्दमूल हाली (प्रायः तिलको छोप र अनारदाना) तयार पारिने अमिलो पेय पदार्थ । अमिलो दही, नुन, चिल्लो, तिल र मास हालेर पकाइने यूषलाई काम्बलिकयूष भनिन्छ (रा.व.नि.) ।

कालकूट :- भारतको श्रृङ्गवेर, कोंकण, काकोदाचल पहाडतिर हुने पीपलको रुखको जस्तो चोप आउने नौथरी कन्दविषमध्येको एक विष ।



कुम :- कक्ष, बाहुमूल ।

कुष्ठरोग (विशेष) :- किटिभ ।

कुष्ठरोग (टाटे) :- कोठ, मण्डलक ।

कुष्ठरोग (सेतो) :- कुष्ठ, श्वित्र ।

कृच्छ्र :- मूत्रकृच्छ्र आदि पिसाबसम्बन्धी रोगहरू ।

कोखो :- पार्श्व ।

कोठी :- छालामा आउने कोठी, तिलकालक ।

कोपन :- उत्तेजित पार्ने गुण ।

क्लम :- कुनै परिश्रम नगर्दा पनि शरीर थाकेर मन खिन्न हुनु ।

क्रव्याद :- काँचो मासु खाने प्राणी ।

क्रोष्टशीर्ष :- क्रोष्टशीर्षक, क्रोष्टुशीर्षक, वायु र रगत बिग्रेर घुँडाको बीचमा स्यालको टाउको जस्तो खुब ठूलो र मोटो अत्यन्त दुख्ने गरी सुन्निने रोग वा रोगी ।

क्षतक्षीण :- धेरै परिश्रम वा मैथुनका कारण छाती भित्रको रस वा मासु सुक्ने रोग ।

क्षवथु :- हाच्छिउँ आइरहने एकप्रकारको नाकको रोग ।

## ख

खटिरो :- पिटक, पिटिक, पिटिका, पिड्का, पिड्को, विस्फोट, विस्फोटा ।

खिल :- चर्मकील ।

## ग

गण्ड :- फोका, गलगाँड ।

गन्धक :- गन्धपाषाण ।

गलग्रह :- कफ बढेर सास फेर्न असजिलो पार्ने घाँटीको एक रोग ।

ग्रहणी- जठराग्निको आधार भएकी नाइटोभन्दा केही माथि ग्रहणी (खानपिन ग्रहण गर्ने) एउटा नाडी हुन्छे । यिनको काम नपचेको कुरा पचाई मलमूत्र मनाएर शरीर बाहिर निकाल्नु हो । यो नाडीमा कुनै विकार भई खाएपिएको नपची बाहिर निस्कने वा पचेपनि पटकपटक गरेर बाहिर निस्कने रोगलाई ग्रहणी भनिन्छ । अन्य अर्थ : खाएको चिजमा बोसे आन्द्रोले गर्नुपर्ने काम गर्न नसक्दा हुन जाने पेटको रोग । यसले पेट फुल्ने, दुख्ने, दिसा लागिरहने र भोक नलाग्ने समस्या हुन्छ ।

गानुगोला (रोग) :- गुल्म । (क) नसा सुन्निएर गाँठो पर्नु । (ख) वात आदि दोषले छाती वा पेटमा हुने हावाको गोला पर्ने रोग ।

गुदकील :- अल्काई रोग हुँदा मलद्धारमा पलाउने मासुका डल्ला ।

गुदभ्रंश :- गुदद्धारको भित्री भाग बाहिर आउने वा गुदद्धारमा मुजा पर्ने एक रोग ।

गुल्म :- वात, कफ, पित्त आदिका विकारबाट पेटभित्र वायुको गोला जम्ने रोग; वायुरोग; गानुगोला ।

गृध्रसी :- कम्मरको जोर्नी, कम्मर, ढाड र गोडा निदाई सियाले घोचेझैं दुख्ने र काम्ने, वात वा पित्त विकारले हुने एक रोग ।

ग्रहणी :- सानो आन्द्राको शुरुको १२ अमल भाग ।

ग्रहणी (रोग एवं अङ्ग) :-पाचक (खाएको अन्न जल पचाइदिने) अग्नि (जठराग्नि) को आधार भएकी नाभिस्थानभन्दा केही माथि ग्रहणी नाम भएकी (अन्न-जल ग्रहण गर्ने) नाडी रहन्छे । त्यो नाडीले अपक्व अन्न-जल लिएर पक्व गराई मल-मूत्ररूपमा परिणत पारेर अधोमार्गद्धारा निकालिदिन्छे । त्यस नाडीमा दोष सञ्चय हुन जाँदा खाएको अन्न-जल अपक्व नै निस्कन लाग्दछ अथवा पक्क्व भइगयो भने पनि धेरै पटक गरी निस्कन लाग्दछ । यस्तो रोगलाई ग्रहणीरोग भनिन्छ । ग्रहणीरूज्, प्रवाहिका ।



ग्राही :- जुन औषधीले पेटभित्रको अग्निलाई बाल्दछ, “आम” आदिलाई पचाउँदछ, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्दछ त्यसलाई वा त्यस्तो गुणलाई “ग्राही” भनिन्छ । जस्तै : सुठो, जीरा, चाभा आदि ।

ग्लानि :- थकाइ, सुस्तता, अरुचि, घिन, पछुतो, मानसिक कष्टबाट हुने लाचारीको दुःख ।

## घ

घाउ :- अरुस्, ईर्म, व्रण ।

घाउ (विशेष) :- नसासम्म गढेको नथाक्ने घाउ, नाडीव्रण ।

## च

चाल्ने खटिरो :- विस्फोट ।

चित्रकुष्ठ :- सेता दाग हुने कुष्ठरोग ।

चिप्रा :- दूषिका ।

| | |
|---|---|
| चिलाइ :- | (लुतो जस्तै रोग)-कण्डु, कण्डू, कण्डूया, खजू । |

छ

| | |
|---|---|
| छारेरोग :- | अपस्मार, अपस्मृति, मृगी । |
| छिदन :- | जुन औषधीले एक आपसमा मिली जमेर बसेको कफ आदि दोषलाई आफ्नो तागतले अलग गरी फोर्दछ (तर बाहिर निकाल्न सक्ने क्षमता हुन्न) त्यसलाई "छेदन" भनिन्छ । जस्तै : यवक्षार, मरिच, शिलाजित आदि । |

ज

| | |
|---|---|
| जठराग्नि :- | आयुर्वेद अनुसार तीन थरी अग्निमध्ये नाइटो र मुटुको बीचमा रही पित्तरूपले खाएको कुरा पचाउने अग्नि । |
| जतुमणि :- | शरीरको छालामा टाटा हुने एक रोग । |
| जरा :- | जटा, शिफा । |
| जाड्य :- | (क) लोसेपन, सुस्ती । (ख) मूर्खपन । (ग) जडपन, चेतना नहुने अवस्था । |
| जालगर्दभ :- | जरोसहित शरीर सुन्निने रोगविशेष । |
| जीर्णज्वर :- | आएको १२ वा २१ दिन भइसकेको जरो । |



त

| | |
|---|---|
| तमकश्वास :- | दमको रोग विशेष । |
| तिर्खा (प्यास) :- | उदन्या, तर्ष, तृष्, पिपासा । |
| तूनी(णी) :- | मूत्राशयबाट दुख्दै गुदद्वार वा तल्लो पेटसम्म दुख्ने एक वातरोग । वायु (अपानवायु) मलाशयबाट उठी धेरै दुखाउँदै मलद्वार वा जननेन्द्रियतिर जाने रोगलाई तूनी भनिन्छ । |
| त्रिकटु :- | सुठो, मरिच र पिप्पला बराबर मिसाई तयार पारिएको धुलो । फलत्रिकम्, व्योष । |
| त्रिदोष :- | वात, पित्त र कफ यी तीन दोष वा यी तीन दोषबाट हुने रोग । |

द

| | |
|---|---|
| दम :- | तमक (सामान्य), महाश्वास (गढेको) । |
| दाद :- | दद्रु । |
| दादुरा :- | मसूरिका, मसूरी । |
| दारुणक :- | टाउको रुखो भई भुसजस्तो धुलो झर्ने रोग विशेष । चाया । |
| दीपन :- | जुन औषधीले आम (खाएको कुरा पचेर बनेको रस) लाई पचाउँदैन तर पाचकाग्निलाई बाल्दछ त्यस्ता औषधीलाई "दीपन" भनिन्छ । जस्तैः सुप । |
| दीपनपाचन :- | जुन औषधीले पाचकाग्निलाई पनि बाल्दछ र आमलाई पनि पचाउँदछ त्यस्ता औषधीलाई "दीपनपाचन" भनिन्छ । जस्तै : चितु, अरिड । |

दुबो :- किलास, सिध्म ।
दूषीविष :- शरीरका धातुलाई बिगार्ने खालका विष ।
दोलायन्त्र :- काँढापानी आदि पातला पदार्थ हालिएका कुनै गाग्रा आदिमा भरी शुद्ध हुने ओखतीलाई (त्यसपछि) पोको पारी झुण्ड्याएर पसिना निकाल्ने विधिलाई दोलायन्त्र भनिन्छ ।

## ध

धातुको व्यथा :- प्रमेह, मेह ।
धान्याभ्रक :- धानका सहायताले अभ्रख शुद्ध पार्ने तरिका वा त्यसरी शुद्ध पारिएको अभ्रख ।

## न

नकुलान्ध :- न्याउरीमुसाको जस्ता आँखा हुने र रङ्गीबिरङ्गी देखिने आँखाको एक रोग ।
नाडीव्रण :- नलीको प्वाल जस्तो प्वाल भई भित्रसम्म गाडिएर पीपरगत बगिरहने घाउ ।

## प

पक्वातिसार :- गाढा पहेंलो र पातलो दिसा हुने रोग (ब्लोस डाएरिया) ।
पक्वाशय :- आन्द्रासँग जोडिएको भुँडिको तल्लो भाग, पाकाशय ।

पक्षाघात :- वायुविकारले गर्दा शरीरको एक हर वा कुनै अङ्ग अथवा पूरै शरीर निधाएझैं हुन गई चल्न चरपटाउन नसकिने रोग ।
पचाउन कठिन :- गुरु, सर ।
पञ्चकोल :- पिप्ला, पिप्लाको जरा, चाँभो, चितू र सुठो ।
पञ्चवल्कल :- बरो, पिपल, पाखरी, डुम्री, बेत वा शिरीषको बोक्रा ।
पथ्य :- रोग नभड्काउने, रोगीलाई हित गर्ने, फाइदा गर्ने, योग्य, उचित ।
परिणामशूल :- खाना पच्ने बेलामा पेटमा हुने शूल वा दुखाइ, पक्तिशूल ।
पाक्य :- पाक्न लायक वा पकाउन योग्य ।
पाखुरा :- प्रगण्ड ।
पाखुरा :- (कुहिनादेखि तल नाडीसम्मको भाग, तल्लो पाखुरा)-प्रकोष्ठ ।
पाचन :- जुन औषधीले आमलाई पचाउँदछ तर पाचकाग्निलाई बाल्दैन त्यस्ता औषधीलाई “पाचन” भनिन्छ । जस्तै : नागकेसर ।
पाण्डु :- सम्पूर्ण शरीर र रौं सेतो हुने एक रोग; श्वेतकुष्ठ; सेतो कोढ ।
पातालयन्त्र :- घोप्टो र उत्तानो पारी मुखमुख जोडेर बनाइने रसादि ओखती पकाइने माटोको यन्त्र ( भाँडो) विशेष ।
पामा :- धेरै पीप बगिरहने, धेरै पोल्ने र चिलाउने, ससाना बिमिरा आउने लुतो विशेष, भैंसे लुतो विशेष, यसलाई अठार थरीका कुष्ठरोगमध्येको एक मानिन्छ ।
पारिगर्भिक : गर्भिणी आमाको दूध खानाले खोकी लाग्ने, बान्ता गर्ने, पाचनशक्ति कमजोर हुने, खान मन नगर्ने, स्वाँस्वाँ गर्ने, डाह हुने, भ्रम हुने, उँगिरहने, कमजोर हुने, पेट ठूलो हुने जस्ता लक्षण देखिने एक बालरोग ।

पार्श्वशूल :- उरोग्रह । छातीका करङ दुख्ने रोग ।

पिल्लम् :- अलिअलि चिप्रा वा पानी निस्कने आँखाको एक रोग ।

पुटपाक :- गिलो वा ताजा वनस्पतिलाई लेराई कुटेर ससाना गोली बनाउनू । त्यो गोलीलाई खमारी, बर्रो, जामुनु वा आँपको पातले बेर्नू । अनि दुई अमल वा बूढी औँलो जति बाक्लो हुने गरी माटोले वरिपरि लिप्नू । त्यसपछि यसलाई आगाको भुङ्ग्रोमा माटो रातो नहुँदासम्म पोल्नू । त्यसपछि बाहिर निकाली माटो र छोपिएको पात हटाई वनस्पतिलाई निचोर्नू । वनस्पति सुकेर रस निचोर्न नसकिने भए पानी अथवा तोकिएको द्रव्यमा मिसाएर पिँध्नू । यस्तो रस एक पल (करिब तीन तोला, ३६ मि.लि.) पिउने गर्नू । यो रसमा मह मिसाउने हो भने एक कर्ष (१२ ग्राम) मात्र मिसाउनू । कल्क, चूर्ण वा द्रव जस्ता कुरा स्वरसमा जति हाल्नू भनिएको छ यसमा पनि त्यति नै हाल्नु पर्दछ भनी विद्वानहरू भन्दछन् ।

पूतिनासा :- नाक गनाउने रोग विशेष ।

पेट :- उदर, कुक्षि, जठर, तुन्द, पिचण्ड, पिचिण्ड ।

पोथकी :- बालकका आँखामा आउने आनो ।

प्रतूनी(णी) : तूनीको उल्टो अर्थात् वायु (अपानवायु) जननेन्द्रियबाट उठी दुखाउँदै मलाशयतिर जाने रोगलाई प्रतूनी भनिन्छ ।

प्रत्यष्ठीला :- वातरोग विशेष ।

प्रदर :- स्त्री-जननेन्द्रियबाट सेतो पानी बग्ने रोग ।

प्रदेह :- फोका वा खटिरामा लगाइने लेप

प्रमाथि :- जुन द्रव्य आफ्नो शक्तिले कान, मुख, नाक आदि प्वालबाट वा अरु प्वालबाट शरीरभित्र सञ्चित कफ आदि दोष र गढेका रोगलाई बाहिर निकाल्दछ त्यसलाई वा त्यस्तो गुणलाई “प्रमाथि” भनिन्छ । जस्तै : मरिच, बोझो आदि ।



प्रमेह :- पिसाबसँग मिसिई वीर्य अथवा शरीरका अरू धातु पातलिएर जाने विभिन्न रोगहरू ।

प्रवाहिका (रोग) :- कुपित भएको वायुले गर्दा सञ्चित भएको कफ मलसहित भई गुदद्वारबाट धेरै पटकपटक गरी निस्कने रोग ।

प्रसह :- लुछेर वा चिथोरेर मासु खाने पशुपंक्षीको वर्ग ।

प्रसेक :- मुखबाट र्‍याल वा योनिबाट पानी बहने रोग । बमन, मुखबाट पानी र नाकबाट सिङगन झरिरहने रोग, एक निको पार्न कठिन हुने रोग ।

प्लीह :- कलेजो वा यसमा हुने रोग ।

## फ

फियो :- गुल्म, प्लीह ।

फियो (सुन्निने रोग) :- प्लीहा ।

फुलेका वृक्ष- प्रफुल्ल, फुल्ल, विकच, विकसित, व्याकोश, व्याकोष, सम्फुल्ल, स्फुट ।

## ब

बलास :- कफ र वायुका प्रकोपले गला र फोक्सो सुन्निई जरो समेत आउने एक रोग ।

बस्तिकुण्डल :- मूत्राशयमा गाँठो पर्ने एक रोग, कुण्डल ।

बान्ता :- वाकवाकी, छांदं,
बिफर :- विस्फोट ।
बृंहण :- शरीर वर्धक, पौष्टिक ।

## भ

भगन्दर :- गुदद्वार र अण्डकोशको मध्यमा आउने खटिरा विशेष ।
भस्मक :- जति खाएपिए पनि पच्ने र खाएपिएको कुरा पचाउन नपाउँदा शरीरका धातुलाई तानेर पचाउने रोग ।
भिरिङ्गी रोग :- रक्तविकारले जननेन्द्रियमा खटिरा आउने एक सङ्क्रामक रोग, उपदंश, फिरङ्ग ।
भेदन :- वात आदि दोषले पेटभित्र अड्किएका वा गोटा परेर बसेका मलमूत्रलाई टुक्राटुक्रा पारी मलद्वार वा मूत्रनली मार्फत बाहिर निकाल्ने औषधी वा गुण । जस्तै : कटुकी ।
भोक :- अशनाया, क्षुध्, बुभुक्षा ।

## म

मण्डरा :- ढोडनसो, ठुलो नसो ।
मण्डल :- यो शब्दको अर्थ आयुर्वेदका पुस्तकमा आठ दिनदेखि अठचालीस दिनसम्म लगाएको पाइन्छ ।
मण्डलकुष्ठ :- सेतो, रातो, सारो, नरम र चिल्लो छाँटको कोढ रोग, जसको आकार एक अर्कोसँग मिल्दोजुल्दो हुन्छ ।

मत्स्यघण्ट :- मत्स्यघण्ट : मत्स्यानां घण्टः विमिश्रणं यत्र, स्वनामख्यात मत्स्यव्यञ्जन विशेष, माछाको घंट-हिन्दी विश्वकोश । घण्टः - चटनीविशेष-के.यन.स्वामी ।
मदकारी :- जे कुरा (खानपिन गर्ना) ले बुद्धिलाई लोप गराउँदछ त्यसलाई "मदकारी" भनिन्छ । यस्ता कुरामा तमोगुण बढी हुन्छ । जस्तै : सुरा, मद्य आदि ।
मदात्ययः- मात लाग्ने खालका खानपिन वा व्यवहार बढी गरेका कारण हुने रोग ।
मन्यास्तम्भ :- गर्दनको नसो साह्रो हुने एक रोग ।
मलद्वार :- पायु ।
मलमूत्र बन्द हुने रोग :- आनाह, विबन्ध ।
मशक :- छालामा आउने कालो वा रातो ससाना मासुका दाना (मुसा) ।
मूढगर्भ : कुपित वायुले गर्भ टेढो पार्ने, स्त्रीको जननेन्द्रिय र पेटमा शूल निकाल्ने साथै थोरै थोरै पिसाब गराउने रोगलाई मूढगर्भ भनिन्छ । यो आठ प्रकारको हुन्छ ।
मूढवात :- कुनै एक ठाउँमा गुटमुटिएको वायु ।
मूत्रकृच्छ्र :- पिसाबले च्याप्ने तर गर्न खोज्दा थोपा थोपा मात्र हुने रोग ।
मूत्राघात :- पिसाब बन्द हुने बाह्र थरीको रोग ।
मृगाङ्क :- क्षयरोगको विशेष औषधी (शब्दकल्पद्रुमः) ।
मोतिबिन्दु :- पटल ।
मोह :- अज्ञान, भ्रम, बेहोसी, चित्तको अशान्ति ।

## य

यवागू :- चामल आदि भन्दा छ गुना बढी पानीमा पकाइने खाद्य वस्तु ।

यूष :- दलहन आदिलाई रुमालमा पोको पारी अठार गुना बढी पानीमा उमालेर पकाउने, आधा पानी बाँकी भएपछि पोको निकाल्ने । यस्तो रसलाई यूष भनिन्छ ।

योगवाही :- शरीर भित्र गर्मी गर्ने पदार्थसँग मिलेर अति गर्मी गर्ने र ठण्डी गर्ने पदार्थसँग मिली अति ठण्डी गर्ने औषधी वा त्यस्तो गुण ।

## र

रक्तपित्त :- मुख, कान, आँखा, नाक, गुदद्वार तथा मूत्रद्वारबाट रगत बहने रोग ।

रक्तप्रमेह :- पुरुषका पिसाबबाट गनाउने खालको रगत बहने एक रोग ।

रसाञ्जन :- चुत्राको काँडा, बोक्रा वा जराको काँढापानीमा त्यति नै दूध मिसाएर खुवा जस्तो हुने गरी पकाइएको ओखती सुकाएर पारिएको धुलो । तार्क्षज ।

रसायनी :- बुढ्यौली आउन नदिने वा बूढालाई तन्नेरी गराउने ओखती वा गुण । जुन औषधीले शरीरको बुढ्यौली (सत्तरी वर्ष पछि) मा हुने रोग र (सबै उमेरका) जरो आदि रोगलाई निको पार्दछ त्यसलाई वा त्यस्तो गुणलाई "रसायन" भनिन्छ । जस्तै : गुर्जो, रुदन्ती (हिमाली सागजातको बूटी विशेष), गोकुलधूप, हर्रो आदि ।

रेचन :- पेटमा रहेका राम्ररी पचेका वा केही नपचेका खाएका कुरालाई पातलो बनाई मलद्वारतिर धकेल्ने औषधी वा गुण । जस्तै : सेतो निशोध ।

रेतस :- पुरुषको शरीरमा रहेको शुक्र धातुलाई सक्रिय (चैतन्य) बनाउने वा उत्पन्न गर्ने खालका औषधीलाई वा गुणलाई "रेतस" भनिन्छ । जस्तै : दूध, माष, भलायोको फलको गुदी, अमला आदि ।



## ल

लङ्घन :- नखाएर, बान्ता गरेर, दिसा गरेर, रगत निकालेर, तातो पानी पिएर, पसिना निकालेर, बान्ता र दिसा दुबै उपायले, पानी नपिएर, हावामा बसेर, घाममा बसेर, खाएको पचाएर, खाना नखाएर, परिश्रम गरेर र शिरो विरेचन गरेर शरीरलाई हलुका बनाउने आयुर्वेदीक तरिका ।

लुतो :- कण्डू, कच्छू, खर्जू, पामन्, पामा, विचर्चिका ।

लेखन :- जुन औषधीले रस आदि धातु वा वात आदि दोषलाई (भित्रभित्रै) सुकाएर (वा घटाएर) शरीरबाट बाहिर निकाली दिन्छ त्यसलाई वा त्यस्तो गुणलाई "लेखन" भनिन्छ । जस्तै : ठूलो बिही, तातो पानी, बोझो, जौ आदि ।

## व

वमन :- जुन औषधीले नपचेका तर पित्त र कफ बनेर पेटभित्र अड्किएका कुरालाई बलपूर्वक मुख मार्फत (बान्ता गराई) निकाल्दछ त्यसलाई वा औषधीमा हुने त्यस्तो गुणलाई "वमन" भनिन्छ । जस्तै : मैनफल ।

वान्ता (रोग) :- छर्दन, छर्दी, प्रच्छर्दिका, वम, वमथु, वमन, वमि, वमी ।

| | |
|---|---|
| वर :- | न्यग्रोध, बहुपाद्, वट । |
| वर्वर : | मूर्ख, पतित । |
| वाजीकर :- | जुन औषधीले पुरुषको धातु बढाई त्यस मार्फत स्त्रीमा रोमाञ्च सहितको शक्ति सञ्चार (मैथुन सुख) पैदा गर्दछ त्यसलाई "वाजीकरम्" भनिन्छ । जस्तैः गुनालु (एकजातको बलु झार), जाइफल, कुरिलो, दूध, सखर, काउसोका गेडा आदि । |
| वातकुण्डलिका : | वायु बिग्रेर हुने एक प्रकारको पिसाबसम्बन्धी रोग, जसमा पिसाब गर्दा पोल्ने र थोपा थोपा पिसाब निस्कने गर्दछ । |
| वातरक्त :- | हातगोडाका औंला वा अरु भागका जोर्नी सुनिई दुख्ने रोग । |
| वाताष्ठीला :- | नाइटो मुनि पेटमा सारो डल्लो निस्केर मलमूत्र, वायु रोकिने एक वातरोग । |
| वातोदर :- | वायुविकारबाट उत्पन्न हुने पेटको रोग विशेष । |
| विकाशि :- | जुन औषधीले (नपच्दै) शरीरका सबै बन्धनलाई खुकुलो पार्दछ र रसादि धातुका तेजलाई त्यो धातुबाट सोस्दछ त्यसलाई वा त्यस्तो गुणलाई "विकाशि" भनिन्छ । जस्तै : सुपारी, कोदो । |
| विचर्चिका :- | खोप लगाउँदा देखिने जसरी छालामा केही सुन्निएर रातो टाटा देखिने र पछि त्यसमाथि सेतो र चम्किलो पाप्रा देखिने र त्यो उप्किएपछि रगत आउने दादजस्तै एक प्रकारको छालाको रोग । |
| विदारीका :- | घाँटीको रोग विशेष । कानको रोग विशेष । काखीका फोका आउने रोग विशेष । |
| विद्रधि (रोग) :- | गुदद्वार, वस्ति, नाभि, कोखा, तिघ्राका जोर्नी, मिर्गौला, मुटु, कलेजो, फियोमा पैदा भएर कालान्तरमा फुट्ने खटिरा विशेष । |
| विदाह :- | पित्तप्रकोपले हात, गोडा, छाती आदि पोल्नु । |
| विपादिका :- | हत्केला र गोडाको पैताला फाट्ने (अठारथरी कुष्ठरोग मध्येको) एक रोग । गोडाको औंला वा कुर्कुचा चिरिने एक रोग, गलिनी वा गलैनु फाट्नु । |
| विलेपी :- | चामलभन्दा चार गुना बढी पानी हालेर पकाइने खाद्य वस्तु । |
| विबन्ध : | कब्जियत । |
| विश्वाची :- | पाखुराको पछाडिदेखि औंलासम्म हुने कण्डरा नामक नसा सुकेर हात खुम्च्याउन फैलाउन नसकिने रोग । |
| विष्टम्भ :- | दिसा रोकिएर पेट फुल्ने रोग विशेष । |
| विष्टम्भी :- | मलमूत्र अवरोध गर्ने, विष्टम्भि । |
| विष (गरविष) :- | दुई वा दुईभन्दा बढी द्रव्यको संयोगले पैदा हुने विष । |
| विषमज्वर :- | कहिले चिसो कहिले तातो, कहिले मन्द र कहिले तीव्र भएर अनियमित रूपले आउने जरो; कामजरो । |
| विषाद :- | चाहना पूरा नहुँदा मनमा हुने दुःख, शारीरिक शिथिलतावा निश्चेष्टता, डिप्रेशन । |
| विष्किर :- | खुट्टाले खोस्रेर अनि फेरी चुच्चाले एकएक गरी टिपेर आहारा खाने खालका चराको वर्ग । |
| विसर्प :- | शरीरमाससाना फोका उठी जरो आउने छालाको एक रोग । सुके लुतो । |
| विस्फोट :- | छाला काला, रातो र पातलो हुने एक प्रकारको कुष्ठरोग, विष्फोटक । बिफर रोग । चाल्ने खटिरो । |
| विस्रम् :- | काँचो मासुको गन्ध आउने । |
| वेपथु : | शरीर वा शरीरको कुनै अङ्ग काम्ने रोग । |
| व्यङ्ग :- | मुखभरि ससाना खटिरा वा काला दाना दाना आउने रोग । |

व्यवायि :- नपाकेको तर खाएपछि शरीर भरी फैलिने र मदिरा वा विष जसरी पच्ने (र असर गर्ने) औषधीलाई वा गुणलाई "व्यवायि" भनिन्छ । जस्तै : भाँग, अफिम आदि ।

व्रध्न :- कोप भएको वायु, जसले सुजन र शूल गराएर तिघ्रा र अण्डकोशको जोर्नीबाट अण्डकोशमा जाने काम गर्दछ ।

## श

शमन :- मानिसले खाएपिएको कुरासँग विद्वेष नगरी ती शरीरभित्र जहाँ छन् त्यहीँ गई ती कुरासँग मिसिएर तिनको दोष नष्ट गर्ने (वान्ता वा दिसा नलगाई रोग ठिक गर्ने) औषधी वा गुण । जस्तैः अमला ।

शालाक्यतन्त्र :- नाक, कान, मुख, आँखा आदिको चिकित्सा गर्ने शास्त्र ।

शिरा :- शरीरका जोर्नी बाँध्ने र वात, पित्त आदि दोष एवं रस, रगत आदि धातु बगाएर लैजाने नीला रङ्का साना ठूला नसाहरू । यो मोटो र मसिनु गरी दुई किसिमको हुन्छ । यसको मूलस्थान नाइटो हो र यी यसैका तलमाथि र दायाँबायाँ फैलिएका हुन्छन् ।

शीतकाँडा (शार्ङ्गधर संहिता) : चालीस ग्राम ओखतीलाई कुटी दुई सय चालीस ग्राम पानीमा हाली घोलेर कुनै माटाका भाँडामा बेलुकी भिजाउनू । बिहान उठी त्यो पानी छानेर अस्सी ग्राम पिउनू । यस्तो पानीलाई हिम वा शीत-काँढा भनिन्छ ।

शीतपित्त :- चिसो र पित्तविकारले शरीरमा डाबर आए जसरी आउने एक किसिमको दाद ।

शीत वीर्य :- (अष्टाङ्ग हृदय) द्रव्यमा हुने गुण विशेष । शीत वीर्यले मनलाई प्रसन्न पार्ने, जीवन दिने, जडवत् बनाउने तथा रगत र पित्तलाई प्रशोधन गर्ने काम गर्दछ । कुनै द्रव्यमा उष्ण वा शीत वीर्य गुण हुन्छ भनियो भने यही अनुसार मनन गर्नुपर्ने हुन्छ ।

शुक्रल :- जुन औषधीले शुक्र वृद्धि गर्दछ त्यसलाई वा त्यस्तो गुणलाई "शुक्रल" भनिन्छ । जस्तै : अश्वगन्धा, मुसलीकन्द, सखर, कुरिलो आदि ।

शूकदोष :- जननेन्द्रिय बढाउन प्रयोग गरिएका ओखती दल्नाले पुरुषलाई हुने रोग ।

शूल : - (क) टाउको, हात, गोडा आदि कुनै पनि अङ्गमा हुने ज्यादा दुखाइ । (ख) वायुप्रकोपले हुने पेटको ज्यादा दुखाइ । (ग) वातरोग । गानु, गानो, गानुगोला, गोला ।

शोधन :- जुन औषधीले वात दोषका कारण शरीरभित्र कतै जमेर बसेका मललाई फोरफार गरी माथि नाकमुखबाट वा तल मलमूत्रद्वारबाट बाहिर निकाल्दछ, त्यसलाई वा त्यस्तो गुणलाई "संशोधन" भनिन्छ । जस्तैः देवदार ।

शोफ :- शरीरको कुनै अङ्ग सुन्निनु, शोथ, श्वयथु ।

शोष :- शरीर सुक्नु, छ किसिमका क्षयरोग ।

श्वास :- दम; कमजोरी, रोग, परिश्रम आदिले छिटोछिटो चल्ने सास; धक्ने रोग; धम्कीको रोग ।

## स

सङ्ग्रहणी :- ग्रहणीरोगले खाएको चिज पच्न नदिँदा हुन जाने ग्रहणीरोगकै लक्षण भएको पेटको रोग । जसका वातसङ्ग्रहणी, पित्तसङ्ग्रहणी, कफसङ्ग्रहणी, त्रिदोषज सङ्ग्रहणी र आमजन्य सङ्ग्रहणी गरी पाँच भेद छन् ।

सन्तर्पणी :- तृप्तिदायक ।

सूर्यावर्त :- जांदै जांदै घाम माथि आयो उतिउति टाउको दुख्दै जाने र घाम अस्ताउँदै गएपछि कम हुँदै जाने रोग ।

संस्र :- शरीरको कुनै अङ्ग आफ्नो ठाउँबाट सर्नु ।

संस्रन :- पछी पच्ने सम्भावना रहेका तर वात आदि दोषले गर्दा कतै पेटभित्र अड्किएका खाएको कुरालाई नपच्दै तल्लो भागमा लेराई मलद्वार मार्फत निकाल्ने खालका औषधी वा गुण । जस्तै : राजवृक्ष फलको गुदी ।

स्तम्भन :- (क) रुखो, शीतल टर्रो र चँडै पच्ने अवस्थाकम र वायुलाई उल्टो गतिमा हिँडाउने ओखती वा गुण । (ख) वीर्य आदि धातु वा दिसा रोक्ने ओखती वा गुण । (ग) शरीरको कुनै अङ्ग वा पूरै शरीर चल्न चरपटाउन नसक्ने स्थिति वा अवस्था । जुन औषधी रुखो, ठण्डीग र्ने र टर्रो स्वादका हुनाका कारण पाकेपछि हलुका हुन्छन् र वातदोष जन्माउँदछन् तिनलाई वा त्यस्तो गुणलाई "स्तम्भन" भनिन्छ । जस्तै : ठूलो कुरो, टटेलो आदि ।

स्तैमित्य :- इन्द्रियले काम नगर्ने वा जड हुने अवस्था ।

स्नायु :- शरीरमा फैलिएका मसिना नसा (को जाल वा समूह) जसले शरीरको हाड, मासु र बोसोलाई छरिन नदिएर बाँधेका हुन्छन् ।

स्फिच् :- कमरमा लागेको मासु ।

स्वर बस्नु :- स्वरभेद ।

स्वरभ्रंश : स्वर बसेको अवस्था ।

स्वरस (शार्ङ्गधर संहिता) : (क) (किरा, आगो, हावा, पानी आदिले) नबिग्रिएको आलो वनस्पति लेराई तुरुन्त कुटेर सफा कपडामा हाली निचोर्नू । यसरी निचोरिएको रसलाई "स्वरस" वा "अङ्गरस" भनिन्छ । (ख) सुकेको औषधीको सोह्र तोला धुलो बनाउनू । फेरी त्यसको दोबर पानी हालेर त्यो धुलोलाई कुनै भाँडामा भिजाउनू । एक रात र एक दिन बितेपछि मिचेर त्यो पानीलाई सफा कपडाले छान्नु, यसलाई पनि "स्वरस" भनिन्छ । (ग) आलो औषधी नपाउँदा सुकेको औषधी लेराई त्यसलाई त्यसको आठ गुना पानीमा हालेर उमाल्नू । एक चौथाई पानी बाँकी भएपछि भिकेर छान्नू । यो तेश्रो प्रकारको "स्वरस" हो । स्वरस पचाउन कठिन हुने हुनाले बढीमा दुई तोला (२२.१४ ग्राम वा २४ मि.लि.) पिउने गर्नू । राती भिजाएर बिहान खाने स्वरस भए चार तोलासम्म ( ४४.२८ ग्राम वा ४८ मि.लि.) पिउने गर्नू ।



## ह

हनुस्तम्भ :- चिउँडो र कञ्चटको बीचको हाड नचल्ने रोग ।

हलीमक :- पाण्डुरोग विशेष ।

हैजा :- विशूचिका ।

हृल्लास :- शोक, दुःख, बाडुली, छातीको थकाई ।

सन्दर्भ ग्रन्थहरू :


१. अभिधान मञ्जरी, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
२. अभिधान रत्नमाला, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
३. अमरकोश, नेपाली टीकाकार कुलचन्द्र शर्मा गौतम, रत्न पुस्तक भण्डार, २०६५ ।
४. अर्कप्रकाश, आफैंले नेपालीमा भावानुवाद गरेको पुस्तक ।
५. अष्टाङ्ग निघण्टु, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
६. अष्टाङ्ग सङ्ग्रह, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
७. अष्टाङ्ग हृदय, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
८. आफैंले अनुवाद गरिसकेका विभिन्न स्मृतिहरू ।
९. आफैंले सङ्कलन गरेका विभिन्न पुराण, संहिता आदि ।
१०. आयुर्वेद कोश ।
११. आयुर्वेद महाकोश ।
१२. आयुर्वेद महोदधि, आफैंले नेपालीमा भावानुवाद गरेको पुस्तक ।
१३. आयुर्वेदीक शब्दकोश ।
१४. काश्यप संहिता, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
१५. के.यन.शर्माको अनलाइन संस्कृत-नेपाली-हिन्दी-अंग्रेजी शब्दकोश ।
१६. कैयदेव निघण्टु, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
१७. कोशकल्पतरु ।
१८. चरक संहिता, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
१९. धन्वन्तरि निघण्टु, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
२०. द्रव्यगुण सङ्ग्रह, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
२१. निघण्टुशेष, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
२२. नेपाली बृहत् शब्दकोश, नेपाल प्रज्ञा प्रतिष्ठान, २०६७ ।
२३. पर्यायरत्नमाला, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
२४. पेयर डी अमरकोशको वेबसाइड ।
२५. पेयरी डी आयुर्वेदको वेबसाइड ।
२६. भावप्रकाश निघण्टु, आफैंले नेपालीमा भावानुवाद गरेको पुस्तक ।
२७. भावप्रकाश संहिता, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
२८. मदनपाल निघण्टु, आफैंले नेपालीमा भावानुवाद गरेको पुस्तक ।
२९. मदनादि निघण्टु, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
३०. माधव द्रव्यगुण, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
३१. माधव निदान, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।
३२. मेदिनी कोश ।
३३. मोनियर विलियम्सको संस्कृत-अंग्रेजी शब्दकोश ।
३४. राजनिघण्टु, आफैंले नेपालीमा भावानुवाद गरेको पुस्तक ।
३५. राजवल्लभ निघण्टु, आफैंले नेपालीमा भावानुवाद गरेको पुस्तक ।
३६. वनएमजी डटकममा रहेको आचार्य बालकृष्णका लेखहरू ।
३७. वनस्पति कोश ।
३८. वाचस्वत्यम् ।

३९. ांवांभन्न अन्य पत्रपांत्रकाको पांडायफ प्रांत तथा वेबसाइडका तांस्बरहरू ।

४०. वैद्यक कोश ।

४१. वैद्यक शब्दकोश ।

४२. शब्दकल्पद्रुम ।

४३. शार्ङ्गधर संहिता, आफैंले नेपालीमा भावानुवाद गरेको पुस्तक ।

४४. शालिग्राम निघण्टु, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।

४५. सरस्वती निघण्टु, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।

४६. सुश्रुत संहिता, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।

४७. सोढल निघण्टु, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।

४८. सौश्रुत निघण्टु, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।

४९. हलायुध कोश ।

५०. हारीत संहिता, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।

५१. हिन्दी विश्वकोष, नगेन्द्रनाथ वसु, भाग १-२५ ।

५२. हृदयदीपक निघण्टु, आफैंले सङ्कलन एवं नेपालीमा भावानुवाद गरिरहेको पुस्तक ।

५३. THE AYURVEDIC PHARMACOPOEIA OF INDIA, GOVERNMENT OF INDIA, MINISTRY OF HEALTH AND FAMILY WELFARE, DEPARTMENT OF AYUSH, PART 1-5.

५४. Catalogue of Plants of National Botanical Garden, Nepal, Government of Nepal, 2022.

५५. TERAI FORESTS OF NEPAL, GOVERNMENT OF NEPAL, April 2014.





५६. Journal of Plant Resources, Vol. 17, No. 1, Government of Nepal, 2019.

५७. Indian Medicinal Plants: A Compendium of 500 Species, 4 volums. etc.

सङ्कलकको छोटो परिचय

प्रपितामह : केदारनाथ ।
प्रपितामही : तारणकुमारी ।
पिता : माधव प्रसाद उपाध्याय ।
माता : उमादेवी ।
जन्मस्थल : तत्कालीन अनैकोट गा.वि.स.वडा नं.३, चारघर टोल, काभ्रपलाञ्चोक जिल्ला, बाग्मती अञ्चल, नेपाल ।
हाल बसोबास : वाग्मती अञ्चल । काठमाडौं जिल्ला । गोकर्णेश्वर न.पा. । वडा नं.७, दक्षिणढोका ।
शिक्षा : स्नातक ।
पेसा : नेपालको केन्द्रीय बैंकको सेवाबाट उप निर्देशक पदमा अवकाश प्राप्त ।
दैनिकी : पूर्वीय दर्शनका विधि ग्रन्थ सङ्कलन, अध्यन एवं भावानुवाद ।
जन्म मिति : वि.सं.२०२०
नाम : मोहन प्रसाद सापकोटा ।
पत्नीको नाम : अम्बिका पौडेल सापकोटा ।
सन्तान : एक छोरी र दुई छोरा ।
तस्बिर : कभर पेजमा राखिएको ।
इमेल : sapkotamps731@gmail.com
मोबाइल नं. : ९८४१३७०७८४ ।



अनुवाद गरी पीडीयफ बनाएर https://archive.org/details/@mohan_sapkota858 मा सर्वसुलभ बनाएर राखिएका कृतिहरू :

(क) विभिन्न स्मृतिहरु २४ वटा ।
(ख) आयुर्वेदका विभिन्न ग्रन्थ ८ वटा ।
(ग) ज्यौतिषका ग्रन्थ २ वटा ।
(घ) नीतिशास्त्र २ वटा ।
(ङ) सूत्रग्रन्थ २ वटा ।
(च) काठमाडौं उपत्यकाको वंशावली १ ।
(छ) गृह्यसूत्र १ ।
(ज) तन्त्रशास्त्र १ ।

अन्य अपलोड गरिएका कुरा :

(क) नेपालका प्राचीन तस्बिरहरूको सङ्ग्रह ६५ एल्बम ।
(ख) संस्कृत भाषामा पुराण ९ वटा ।
(ग) पूर्वीय दर्शन अनुसारको कालगणना नामक लेख १ ।